# जयतु संस्कृतम्का प्रकाशनहरू

| प्रकाशनको नाम | ग्रन्थकार |
|---|---|
| १. मङ्गलग्रहः (काव्यम्) | – डा. टीकाराम पन्थी |
| २. कृष्णाभिसर्पणम् (काव्यम्) | – महाकवि भरतराज मन्थलीय |
| ३. मीमांसातर्क भाषा | – डा. काशीनाथ न्यौपाने |
| ४. चन्द्रप्रभा (काव्यम् ) | – प्रा.डा. टीकाराम अधिकारी |
| ५. संस्कृत कविता सङ्ग्रह (प्रथम पुष्पम्) | – संयुक्तसम्पादनम् |
| ६. कलमाक्षरचरितकाव्यम् | – प्रा. तेजःकेशरी शर्मा |
| ७. संस्कृतमा के छ ? | – अनुसन्धानात्मकलेखसङ्ग्रहः |
| ८. जयतु संस्कृतम् (मुखपत्रम्) | संयुक्तसम्पादनम् |
| ९. प्राकृत पोखरा संस्कृते | – अनुवादक डा. लक्ष्मीकान्त पन्थी |
| १०. लङ्कावतारसूत्रम् | – अनु. डा. काशीनाथ न्यौपाने |
| ११. चार्वाकदर्शनम् | – प्रा. रेवतीरमण खनाल |
| १२. गौतमन्यायसूत्रम् | – अनु. प्रा. पद्मप्रसाद भट्टराई |
| १३. बह्मसूत्रम् | – अनु. प्रा. दीर्घराज घिमिरे |
| १४. जयतु संस्कृतम् (द्वितीय मुखपत्रम्) | – संयुक्तसम्पादनम् |
| १५. संस्कृतकवितासङ्ग्रहः (द्वितीयपुष्पम्) | – संयुक्तसम्पादनम् |
| १६. कामकलाविलास | – प्रा. विद्यानाथ उपाध्याय |
| १७. जैनदर्शन तत्त्वार्थसूत्रम् | – चन्द्रमणि नेपाल |
| १८. दर्शनसारामृतम् | – लोकनाथ लुइँटेल |

# साहित्य, भक्ति र वेदान्तको त्रिवेणीस्वरूप -
# समीक्षात्मक ग्रन्थ

लेखक -
ध्रुवप्रसाद भट्टराई

प्रकाशक
जयतु संस्कृतम्
काठमाडौं, नेपाल

| | | |
|---|---|---|
| ग्रन्थको नाम | : | साहित्य, भक्ति र वेदान्तको त्रिवेणीस्वरूप – समीक्षात्मक ग्रन्थ |
| *Book Name* | : | *SAMEEKSHATMAK GRANTHA* |
| प्रकाशक | : | जयतु संस्कृतम् (दूरभाषः ४२३०३७१) |
| *Publisher* | : | *Jayatu Sanskritam*<br>*Anamnagar, Kathmandu* |
| संस्करण | : | प्रथम |
| *Edition* | : | *First, 2074 (A.D. 2017)* |
| पुस्तक संख्या | : | ३५० प्रति |
| *Printed Books* | : | *350 copies* |
| प्रकाशन वर्ष | : | २०७४ पुत्रदा एकादशी |
| *Publication Year* | : | *2017* |
| पुनः प्रकाशनाधिकार | : | लेखक |
| © | : | *Author* |
| लेखक | : | ध्रुवप्रसाद भट्टराई |
| *Writer* | : | *A. Prof. Dhruva Prasad Bhattarai* |
| टङ्कण | : | खड्गप्रसाद खनाल |
| *Type Setting* | : | *Khadga Prasad Khanal* |
| मद्रक | : | एलायन्स प्रिन्टर्स एण्ड मिडिया हाउस प्रा.लि. |
| *Printer* | : | *Alliance Printers & Media House Pvt. Ltd.* |
| मूल्य | : | रु. ५००।- |
| *Price* | : | *Rs. 500/-* |
| *ISBN* | : | *978-9937-8588-8-5* |

# प्रकाशकीय

जयतु संस्कृतम् नेपालको पहिलो सफल शैक्षिक आन्दोलनको नाम हो । जयतु संस्कृतम् आन्दोलन २००४ ले राजनीतिक, सामाजिक, शैक्षिक आदि विभिन्न क्षेत्रमा ठूलो हलचल ल्यायो । यस आन्दोलनको पचास वर्ष पुगेको स्मृतिमा वि.सं. २०५४ सालमा स्वर्णमहोत्सव मनाई यस आन्दोलनको गरिमा र स्वर्ण महोत्सवको स्मृतिलाई जीवन्त राख्ने ध्येयले जयतु संस्कृतम् संस्था स्थापना भएको हो । संस्था स्थापना भएपछि विशुद्ध सामाजिक सेवामूलक गैर-सरकारी संस्थाको रूपमा सामाजिक र प्राज्ञिक क्रियाकलापका साथ संस्था अगाडि बढिरहेको छ ।जयतु संस्कृतम् आन्दोलन २००४ सालदेखि हालसम्म पनि कुनै न कुनै रूपमा जीवन्त रहँदै आएको छ ।

जयतु संस्कृतम् आन्दोलनको उत्तराधिकारी यो संस्था आज संस्कृत भाषाको लोकप्रियता बढाउने, संस्कृत पठनपाठन प्रक्रियालाई अरू व्यापक बनाउने, संस्कृत वाङ्मयका महत्त्वपूर्ण ग्रन्थहरूलाई नेपालीसहित विभिन्न लोकभाषाहरुमा अनुवाद गर्दै र प्रकाशित गर्दैजाने, संस्कृत भाषाको प्रचारप्रसार गर्दै नेपाली संस्कृति तथा संस्कारको संरक्षण र संवर्द्धन गर्ने, गोष्ठी, प्रशिक्षण, कार्यशाला आदि सञ्चालन गर्ने, उत्तरमहाभारतजस्ता महत्त्वाकाङ्क्षी गुरुयोजना सञ्चालन गर्ने लगायतका विविध उद्देश्य एवं लक्ष्यका साथ यो ऐतिहासिक संस्था केही वर्षदेखि कार्य गर्दै आइरहेको छ । संस्कृतमा महत्त्वपूर्ण ग्रन्थहरू लेखी प्रकाशित गर्ने विद्वान्हरूलाई जयतु संस्कृतम् पुरस्कारद्वारा सम्मान गर्नु पनि यसको उद्देश्य र कार्यक्रम रहेको छ। हालसम्म यस संस्थाले संस्कृतमा ग्रन्थ लेख्ने र प्रकाशित गर्ने ११ जना संस्कृतका विद्वान्हरूलाई जयतु संस्कृतम् पुरस्कार प्रदान गरिसकेको छ भने संस्कृत वाङ्मयको सेवा गर्ने डा. स्वामी प्रपन्नाचार्य, प्रा. खेमराज केशवशरण, प्रा.डा. वेणीमाधव ढकाल समेत जयतु संस्कृतम् सम्मानबाट सम्मानित भैसक्नुभएको

छ। त्यस्तै  संस्थाबाट प्रकाशनमाला अन्तर्गत २० वटा ग्रन्थ प्रकाशित भैसकेका छन्। संस्थाकै अविरल प्रयत्नमा नेपाल सरकारको स्वामित्वमा रहेको राष्ट्रिय दैनिक गोरखापत्रमा प्रत्येक महिना २ पटक १।१ पृष्ठ संस्कृतका विविध सामग्रीहरू २०७२।३।१ बाट प्रकाशित हुँदै आएका छन् । संस्थाकै प्रयत्नमा २०७२ मा थाइल्यान्डमा भएको विश्वसंस्कृत सम्मेलनमा नेपालमा विश्व संस्कृत सम्मेलन गर्न प्रस्ताव पठाएको थियो र सम्मेलनले स्वीकार गर्दै औपचारिक प्रस्ताव ल्याउन निर्देश गरेको थियो । औपचारिक प्रस्ताव विश्वविद्यालयले मात्रै लान सक्ने भएकाले संस्थाले ०७४।३।७ मा नेपाल संस्कृत विश्वविद्यालय समक्ष आयोजक बन्न प्रस्ताव प्रस्तुत गऱ्यो भने विश्वविद्यालयले पनि त्यसलाई स्वीकार गरेर आवश्यक कदम अगाडि बढाएको छ। त्यस्तै लोक सेवा आयोगको परीक्षामा ऐच्छिक एक पत्र संस्कृत राख्न र नेपाल सरकार समक्ष नेपाल एकेडेमीमा संस्कृत विभाग राख्न पनि अनुरोध गर्दै आएको छ। यसै वर्ष खुलेको खुला विश्वविद्यालयमा संस्कृत पत्र राख्न पनि संस्थाले अनुरोध गरिसकेको छ।

ग्रन्थप्रकाशन योजना अन्तर्गत हालसम्म बीसवटा ग्रन्थ प्रकाशित भइसकेका छन्। प्रकाशित ग्रन्थहरू निकै महत्त्वपूर्ण छन्। जयतु संस्कृतम् संस्थाले ग्रन्थानुवाद र ग्रन्थप्रकाशन परियोजनाको अनुसार वर्तमान कार्यसमितिका अध्यक्ष प्रा. विद्यानाथ उपाध्यायज्यूको विशेष सक्रियता र निर्देशनमा संस्कृतमा रहेका मुख्य मुख्य दश दर्शनका मुख्य-मुख्य सूत्रग्रन्थहरूलाई नेपालीमा अनुवाद गरी नेपाली भाषाभाषीका माझमा पुऱ्याउने अठोट गऱ्यो। जस अनुसार आस्तिक दर्शन (वेदप्रामाण्य मान्ने) वेदान्त, मीमांसा, न्याय, वैशेषिक, योग, साङ्ख्य ६ दर्शन रहेका छन् भने नास्तिक दर्शनमा बौद्ध (योगाचार, सौत्रान्तिक, माध्यमिक, वैभाषिक) ४, जैन र चार्वाक गरी ६ दर्शन रहेका छन् । यी दर्शनबाहेक शैव दर्शन र यसका ४ (नकुलीशपाशुपत दर्शन, वीरशैवदर्शन, शैवसिद्धान्त दर्शन, प्रत्यभिज्ञा दर्शन) भेद समेत गरी सर्वदर्शनसङ्ग्रहमा १६ दर्शनको

व्याख्या गरिएको पाइन्छ। यी सबै दर्शनलाई नेपाली पाठक समक्ष प्रस्तुत गर्ने संस्थाले इच्छा राखेको छ। साधन-स्रोतले भ्याएसम्म संस्था अगाडि बढ्दै जाने नै छ । संस्कृत भाषामा लेखिएका र सम्पादन गरिएका महत्त्वपूर्ण कृतिहरूलाई पनि प्रकाशनको आलोकमा लैजाने संस्थाको पूर्वप्रतिबद्धता पनि यथावत् नै कायम छ।

तदनुसार यस संस्थाको प्रकाशनमाला अन्तर्गत विद्वान् मित्र ध्रुवप्रसाद भट्टराईले तयार पार्नुभएको साहित्य, भक्ति र वेदान्तका त्रिवेणी स्वरूप समीक्षात्मक ग्रन्थ  नामक पुस्तक प्रकाशित गरेर पाठक समक्षा राख्न पाउँदा हामीलाई ज्यादै खुसी लागेको छ। यो पुस्तक १० खण्डमा विभक्त र ६२६ पृष्ठमा विस्तारित छ। संस्कृत भाषाका प्रेमी एवं सेवक, जयतु संस्कृतम्का आजीवन सदस्य, वर्तमान उपाध्यक्ष नेपाली साहित्य र वेदान्त दर्शनका अनन्य साधक शरदकुमार भट्टराईको जीवनी र कृतिका वैशिष्ट्यलाई प्रकाशित गर्न यो ग्रन्थ सक्षम रहेको देखिन्छ। यस कृतिका लेखक ध्रुवप्रसाद भट्टराई ज्यादै धन्यवादका पात्र हुनुहुन्छ। केही वर्षदेखि आर्थिक सहयोग जुटाउन नसकेर संस्थाका प्रकाशनले गति लिन सकेको थिएन । यस्तो विषम परिस्थितिमा यस पुस्तकको प्रकाशनमा सम्पूर्णरूपमा आर्थिक सहयोग गरेर जयतु संस्कृतम् संस्थालाई ठूलो गुन लगाउनु भएकोमा महामना तथा दानवीर श्रीरामकृष्ण पन्तज्यूलाई यो जयतु संस्कृतम् संस्था हार्दिक धन्यवाद एवं आभार प्रकट गर्दछ।

संस्थाका अध्यक्ष तथा यस ग्रन्थका विद्वत्तापूर्ण मन्तव्यका लेखक प्रा. विद्यानाथ उपाध्याय,  कोषाध्यक्ष डा. बद्रीप्रसाद पोखेल, अन्य सदस्यहरू र यस ग्रन्थलाई प्रकाशनका साथै अन्य कार्यमा सहयोग पुऱ्याउनुहुने रामरञ्जन पौडेल, श्रीराजर्षिजनकस्मृतिकोष, यस ग्रन्थका टङ्कणकर्ता खड्गप्रसाद खनाल र अरू सम्पूर्ण सहयोगी महानुभावहरूलाई समेत यो संस्था हार्दिक धन्यवाद ज्ञापन गर्दछ।

- जयतु संस्कृतम्

# साहित्य, भक्ति र वेदान्तको त्रिवेणीस्वरूप समीक्षात्मक ग्रन्थमाथि एक दृष्टि

'साहित्य, भक्ति र वेदान्तका त्रिवेणीस्वरूप समीक्षात्मक ग्रन्थ' शीर्षकमा नेपाल संस्कृत विश्वविद्यालयका सहप्राध्यापक ध्रुवप्रसाद भट्टराईले शरदकुमार भट्टराईका कृतिहरूको समीक्षा गरेका छन् । समीक्षा भएका कृतिहरूका मूल विषय त समीक्षाग्रन्थका शीर्षकमै स्पष्ट भैसकेको छ । समीक्षकले समीक्षाग्रन्थको विषयपरक शीर्षक अत्यन्त उपयुक्त राखेका छन् । शरदकुमार भट्टराई वस्तुतः साहित्य, भक्ति र वेदान्तका त्रिवेणी नै हुन्, यो कुरा जुनसुकै समीक्षकले पनि जसको प्रज्ञा इमान्दार छ, मान्दछ र मान्नुपर्ने नै हुन्छ । त्यसैले मेरा दृष्टिमा पनि समीक्षकले शरदकुमार भट्टराईका रचनाहरूमा प्रत्यक्ष वा अप्रत्यक्षरूपमा निहित भावनाहरू, उनका विषयगत व्यापक चिन्तन, उनका दृढ मान्यता र उनका अभिव्यक्तिहरूप्रति न्याय गरेका छन् ।

ध्रुवप्रसाद भट्टराईले आफ्ना समीक्षाग्रन्थमा आफ्ना भावनात्मक अभिव्यक्तिहरूका निमित्त दश खण्ड (दश वर्णक) अन्तर्गत शरदकुमार भट्टराईका जीवन, साहित्य, काव्य, यात्रा, गीत तथा भजन, समालोचना, भक्ति, गद्यपद्य भक्ति, अद्वैत, वेदान्त अनुवाद र अद्वैत वेदान्त मौलिक नामक विषयक्षेत्रका रचनाहरूमा कहीँ विवरण, कहीँ समीक्षा र कहीँ भने विवेचना पनि गरेका छन् । यी कुराहरूलाई विहङ्गमदृष्टिले नियाल्दा समीक्षक ध्रुवप्रसाद भट्टराई मूललेखकका विषयगत प्रज्ञाबाट र उनका अभिव्यक्ति एवं रचनाशैलीबाट निकै प्रभावित छन् भन्ने देखिन्छ । शरदकुमार भट्टराईका आफ्नै नजिकको यौटै घर, यौटै थलो भएका परिवारको सदस्य हुनुका साथै उनको प्रज्ञा, उनका

चिन्तन र अभिव्यक्तिबाट प्रभावित यो रचना देखिन्छ। शरदकुमार भट्टराईसँग संगत गर्ने उनका कृतिहरू स्वयं पढ्ने, त्यसमा छलफल गर्ने र आफ्नै पनि साहित्यशास्त्रका उच्चतम व्युत्पत्ति एवं प्रतिभाले यथाशक्ति आलोडन गर्ने ध्रुवप्रसाद भट्टराईको प्रवृत्तिले यसमा राम्रो कार्य गरेको छ। विषयगत समीक्षाका साथसाथै समीक्षकले आफ्नू विशुद्ध साहित्यशास्त्रका अध्येता र प्राध्यापक भए तापनि शरदकुमार भट्टराईकै कृतिहरूको मनन र चिन्तनबाट वेदान्तशास्त्रजस्तो भक्ति दर्शनको उत्कृष्ट उपाय बताउने मोक्षशास्त्रसँग परिचय मात्र नभएर त्यसमा अवगाहन गर्न पाएकोमा एक प्रकारले कृतज्ञताको भाव नै यहाँ व्यक्त भएको छ। यसैले यसमा गुणदोषको निरपेक्ष विवेचना या समीक्षा भएका रचनाहरूप्रति रहेका श्रद्धाजलबाट आप्लावित गुण-गण-वर्णित आशंसा प्रशंसनीय छ।

शरदकुमार भट्टराई र उनका कृतिहरूको अध्ययन एवं मननसँग म स्वयं पनि किन र कुन अदृष्टले जोडिएको छु, त्यसतर्फ दृष्टि दिँदा मलाई पनि यो पक्ष ज्यादै मधुर लाग्दछ। मैले आफ्ना कुरा गर्दा म स्वयं अद्वैत वेदान्तशास्त्रको परम्परागतरूपमा गुरुमुखबाट साङ्गोपाङ्ग अध्ययन गर्न पाएको व्यक्ति होइन। शास्त्री परीक्षाका उपविषयका रूपमा वेदान्त विषय लिएको हुँदा एक दुईवटा ग्रन्थ अवश्य गुरुमुखबाट पढेको छु, आधारभूत विषयको वासना त त्यही नै हो, तर म परम्परागतरूपमा तन्त्रशास्त्रको अध्येता, चिन्तक, यत्किञ्चित् साधनाको अवसर पाएको व्यक्ति हूँ। तन्त्रशास्त्र आपाततः हरेक सामान्यजनका दृष्टिमा यौटा मन्त्र, तन्त्र र यन्त्रको विधाका रूपमा प्रसिद्ध भए तापनि जहाँसम्म मलाई लाग्छ यो अद्वैत ब्रह्मतत्त्वकै प्रतिपादक र ब्रह्मसाधनको क्रियात्मक साधन शास्त्र हो। त्यसैले तन्त्रको अध्ययन, चिन्तन र साधनाका प्रसङ्गमा देवता जो आफ्नो अराध्य हो, साध्य हो, उपास्य हो, त्यो

ब्रह्मरूप नै भएको, तन्त्रसाधनाको मुख्य रहस्य नै क्रियात्मकताद्वारा उपास्यले उपासकसँग तादात्म्य स्वरूपता स्थापित गरेर ब्रह्ममा स्थित भैरहनु नै हो भन्ने मैले पाएँ । उपासना गर्दा उपासक भन्छ–

अहं देवी न चान्योऽस्मि ब्रह्मैवाहं न शोकभाक् ।
सच्चिदानन्द रूपोऽहमात्माहमिति चिन्तये ॥

यस्तै प्रकारका अनुभवात्मक महावाक्यहरू तन्त्रसाधना शास्त्रमा अनेकौँ पाइन्छन् । देवतालाई पनि–

अचिन्त्यामिवाकारशक्तिस्वरूपा
प्रतिव्यक्त्यधिष्ठानसत्त्वैकमूर्त्तिः ।
निराकारनिर्द्वन्द्वबोधैकगम्या
त्वमेव परब्रह्मरूपेण सिद्धा ॥

शक्तिस्वरूपा पराम्बालाई अद्वैत ब्रह्मस्वरूप नै बताइएको छ। अनेकौँ तन्त्रग्रन्थहरूमा देवताको स्वरूप तात्त्विकरूपमा ब्रह्मतत्त्व नै बताइएको मैले पाएको छु। मेरा आफ्नै परम्परागत तन्त्रदीक्षाका सद्गुरुबाट पनि दीक्षाकालदेखि नै यसै दिशातर्फ मेरो ध्यान आकर्षित गर्दै उपदेश हुँदै आएको हो, त्यही तथ्य पछि आफ्ना अध्ययन र मननबाट पनि स्पष्ट हुँदै आएको छ ।

यही मूल जरो र दृढ सूत्र हो । जसले म स्वयंलाई अद्वैत वेदान्तशास्त्र, त्यसमा प्रतिपादित ज्ञानराशिसँग स्वभावतः जोड्न ल्यायो। यसरी बलियोसँग जोड्यो कि म यसबाट अब जीवनमा पृथक् हुन पनि सक्तिनँ । अद्वैत वेदान्तप्रतिको यसै आस्थाले वेदान्तशास्त्रका विशिष्ट चिन्तक, बह्माभ्यासी, अनेकानेक वेदान्त ग्रन्थका रचयिता शरदकुमार भट्टराईसँग भएको मेरो अध्ययनकालिक मैत्रीसम्बन्धलाई दृढ बनाउँदै लग्यो र अझै पनि नित्यनिरन्तर यसलाई दृढता बनाउँदै लग्दैछ। उनीसँग मेरो समयसमयमा भेट हुन्छ, टेलिफोनमा लामो कुराकानी

हुन्छ, छलफल हुन्छ, विचारको आदानप्रदान हुन्छ, सबै प्रकारको सत्सङ्ग हुने गर्छ, तर सर्वत्र विषय चाहिँ प्रायः अद्वैत वेदान्त ज्ञान नै हुने गर्छ। भट्टराईले मलाई आफ्ना धेरै कृतिहरू उपहार पनि दिएका छन्, मैले पढेर धेरै लाभ पनि उठाएको छु। हाम्रा विचार मिल्छन्। अद्वैत वेदान्त विषयलाई लिँदा हामीहरूमा प्रायः विवाद छैनन्।

प्रकृतमा शरदकुमार भट्टराईका कृतिहरूमाथि ध्रुवप्रसाद भट्टराईले समीक्षाग्रन्थ नै लेखेछन् र यसमा आफ्नो दृष्टि मैले प्रस्तुत गर्ने अवसर आयो। यो साँच्चिकै नै मेरानिमित्त यौटा अनुकूल र मधुर अवसर हो। आफ्ना प्रिय मित्रका कृतिहरूको गुणवत्ता आफैँले प्रकाशित गर्नुपर्नेमा अरूले गरेकोमा आफ्नो खुसी व्यक्त गर्न पाउनु पनि त्यत्तिकै मधुरै हुन्छ। त्यही मलाई अनुभव भएको छ।

समीक्षकले समीक्षाग्रन्थका जीवनीखण्डमा शरदकुमार भट्टराईको जीवनवृक्षको विवरण छ। यौटा रणनीतिक प्रशासक वेदान्त चिन्तनमा कसरी परिवर्तित भयो। पढ्दा विवरण चाखिलो लाग्यो। यसले धेरैलाई केही प्रेरणा दिन्छ कि भन्ने लाग्छ।

साहित्यखण्डका कृतिहरूका समीक्षाखण्डको पनि समीक्षा गर्ने अथवा त्यसबारे केही आफ्नो विचार व्यक्त गर्नु म आफू साहित्यको विशेषज्ञ नभएकाले समुचित मान्दिन। तर यौटा कुरा अवश्य हो– शरदकुमार भट्टराईका साहित्यिक कृतिहरूले पनि अहिले आएर परिवर्तन वा परिष्कार पाएको छ। सिर्जनाका फूलहरू, आजका नेता (२०५३), पत्रैपत्र (२०५९), कविशतक (२०६८) जस्ता लौकिक सिर्जनाहरू परिष्कृत हुँदै भक्तिभावमा आरूढ भएको देखिन्छ। आभास (२०७१) यसकै उत्कृष्ट नमुना हो। आभासमा भएका विचार, भक्ति र ज्ञानको समन्वित प्रस्तुति हो भन्ने मलाई लाग्छ। केही केही लौकिकताहरू मैले यहाँ पनि मिसिएका देखेँ तैपनि आभासले शरदकुमार भट्टराईलाई

भक्तिका सोपानहरू चढ्दै ज्ञानका उचाइतर्फ आरूढ हुँदै गएको झल्को देखाउँछ। यो कुरा समीक्षकले इङ्गित गरेका छन्। उनको काव्यखण्ड पनि साहित्यखण्ड नै हो। साहित्यभित्र नै काव्य पनि परिहाल्छ। तर त्यो काव्यखण्ड हेर्दा शरदकुमार भट्टराईका अद्वैत वेदान्तपरक भावमय वर्तमान व्यक्तित्वको यसले परिचय दिन त सक्तैन तर आफ्नै विषयक्षेत्रमा यसभित्रका कृतिहरूको पनि आफ्नै विशिष्ट स्थान छ। यो कुरा शरदकुमार भट्टराईका साहित्यखण्ड, काव्यखण्ड, यात्राखण्ड, समालोचनाखण्डमा समीक्षाग्रन्थमा चर्चित कृतिहरूका साहित्यिक विशेषताहरू आ-आफ्नै ढङ्गका छन्। समीक्षकले मनोयोगपूर्वक इमान्दार भएर तिनको प्रशंसात्मक समीक्षा गरेका छन्। राम्रा छन्। मलाई मेरो आफ्ना दृष्टिले मेरो रुचि शरदकुमार भट्टराईका भक्तिखण्ड र अद्वैत वेदान्ततर्फका अनुवाद र मौलिक कृतितर्फ छ। उनका अरू कृतिका विषयमा र तिनका समीक्षाक्षेत्रमा भन्दा भक्ति एवं अद्वैत वेदान्त तर्फका कृतितर्फ केही बोल्नु प्रिय र श्रेयस्कर लाग्छ। यिनै क्षेत्रका कृतिहरू स्वयं लेखकलाई पनि अहिले राम्रा लाग्छन् र तिनैलाई विशिष्टता दिन्छन् जस्तो लाग्छ। उनको भावगत वैराग्यले यो स्थिति ल्याएको हुन सक्छ र यो सत्य हो जस्तो लाग्छ।

शरदकुमार भट्टराईको भजन लेख्ने प्रवृत्ति भएको २०५८ देखि नै हो भन्ने कुरा समीक्षाग्रन्थबाट नै स्पष्ट हुन्छ। उनी आफैँ लेख्छन्– 'यी गीत र भजनहरू मेरा चेतन, अवचेतन र अर्धचेतन मनमस्तिष्कका संस्कारका रूपमा जन्मजन्मान्तरदेखि वासनाका रूपमा रहेका भावनाहरूको प्रतिध्वनि वा प्रतिगुञ्जन हुन् मैले ठानेको छु।' व्यवसायले मान्छे जता लागे पनि यौवन बितेपछि संस्कारले डोऱ्याएको मार्गमा जान्छ, संस्कार नै शिरमा बस्ने गर्छ। भट्टराई पनि त्यतै लागे, सगुण देवताको भावभक्ति गर्न थाले, त्यसैको पुण्यप्रताप

होला भगवान्कै प्रसाद होला उनी अन्ततः अद्वैत ज्ञानमार्गमा अरूढ भए । भगवान्को दर्शन स्पर्शनका निमित्त अत्यन्त व्यग्र भट्टराई प्रभुका भजनकीर्तनका तहबाट माथि उक्लेर भगवान्को ज्ञानरूप स्वरूपता प्राप्त गर्ने प्रयासमा लागे, यो कुरा समीक्षाग्रन्थमा स्पष्ट भएको छ ।

समीक्षक ध्रुवप्रसाद भट्टराईले मूल लेखक शरदकुमार भट्टराईका भक्तिपरक अनुवाद विधाका रचनाहरूको सटीक र विस्तृत समीक्षा गर्न सकेको देखिन्छ। भनिन्छ – कुनै पनि मूल रचनाको अनुवाद गर्दा रचनाकारका भाव, चिन्तनहरू जो प्रायशः समग्ररूपमा अभिव्यक्त भएका हुँदैनन् कुनै त रचनाकारले भित्रभित्रै दबाएर प्रच्छन्नै राखेका पनि हुन्छन् । भक्तिरचनाहरूमा त अझ भक्तले आफ्ना भित्री भावहरू मानसरूपमा आफ्ना आराध्यका चरणमा मात्र अनन्यरूपले समर्पित गरेका हुन्छन्। जो सर्वसाधारणका निमित्त अभिव्यक्त हुँदैनन् । जस्ताको तस्तै अनुवादमा उतार्न सकिँदैन । तैपनि शरदकुमार भट्टराईका अनुवादहरूमा मूल प्राकृत ग्रन्थका भाव यथावत् प्रकाशित हुने गरेको कुरा समीक्षकले पनि स्वीकारेका छन् । समीक्षाग्रन्थ हेर्दा अनुवादकर्ताका अनुवाद कलाबाट समीक्षक स्वयं प्रभावित भएका पनि प्रतीत हुन्छन् । ज्ञान र भक्ति, श्रीकृष्णाय वयन्नुमः, मणिरत्नमाला, अजातवाद, ब्रह्माऽनुभूति, द्रष्टा र दृश्यका साथै रासपञ्चाध्यायी र अन्तिम उपदेश यी शीर्षकका शरदकुमार भट्टराईका अनुवाद विधाका रचनाहरू आफ्ना समीक्षाग्रन्थमा ध्रुवप्रसाद भट्टराईले लिएका छन् । यी अनुवादका मूल त धेरैजसो ऋषि प्रणीत र आर्ष रचना हुन्, ठूलो तपस्या, भक्तिले योगनिष्ठ भएर रचिएका हुन् । तिनको हुबहु नै । त्यो पनि स्वच्छन्द, समभाव, समअर्थमा अनुवाद गर्नु सबैलाई सम्भव हुन्न । जति शरदकुमार भट्टराईले गर्न सके, प्रकाशित भयो, यसलाई धन्य नै मान्नुपर्ने हुन्छ। त्यसको पनि समीक्षा गर्नुपर्दा त समीक्षकले अझ

एक उचाइसम्म उक्लेर नियाल्न सक्नुपर्छ । त्यसमा जति भक्ति, भाव, प्रज्ञा, व्युत्पत्ति, एक प्रकारको तपस्या नै भनौँ चाहिन्छ । त्यसलाई हेर्दा समीक्षाग्रन्थमा समीक्षकले शरदकुमार भट्टराईका भक्तिपरक रचनाको समीक्षा गर्दा निकै प्रयास गरेजस्तो लाग्दछ ।

शरदकुमार भट्टराईका अनुवादविधाका रचना अद्वैत वेदान्तका पनि छन् । जसको समीक्षा गर्ने भरसक प्रयत्न ध्रुवप्रसाद भट्टराईले गरेका छन् । ती रचना हुन् ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री, वेदान्तपरिभाषासार, अध्यास र अद्वैतसिद्धि । यी यस्ता ग्रन्थरत्न हुन् वेदान्तदर्शनका जसको रचना गर्न मूलग्रन्थकारले पनि ज्यादै ठूलो अध्यवसायात्मक तपस्या नै गरेका थिए । त्यस्ताका लेखनीप्रसूत ती रचना मूल त के, जुनसुकै भाषामा पनि जति बोधगम्य र सजिलो गरी अनुवाद गरे तापनि पाठकलाई सरलतासँग बुझ्न हम्मेहम्मे नै पर्ने गर्दछ । अद्वैतसिद्धिजस्ता ग्रन्थ जो नव्यन्यायका भाषामा लेखिएका छन् जो पढाउने शिक्षक पनि बत्ती बाली खोज्नुपर्ने हुन्छ । अनुवाद हुनै सक्तैन भन्ने मानिएको छ । शरदकुमार भट्टराईले मूलरूपमा अनूदित गरे, गर्न सके भनौँ विमोचित हुँदा मैले नै त्यसको यात्किञ्चितरूपमा मौखिक समीक्षा गरेँ । समीक्षा के परिचय दिएँ भनौँ । त्यसको पनि समीक्षा आज समीक्षाग्रन्थमा देखियो । यो त विस्मयकारक नै हो जस्तो लाग्छ । समीक्षकको यसको समीक्षा गर्ने प्रयास निकै नै बौद्धिक परिश्रमसाध्य थियो होला भन्ने अनुमान गर्न गाह्रो पर्दैन ।

अब समीक्षाग्रन्थमा समीक्षार्थ समीक्षकले लिएका शरदकुमार भट्टराईका नेपाली भाषामा नै निबद्ध आठवटा मौलिक ग्रन्थहरू– जो अद्वैवेदान्तपरक ब्रह्मसाक्षात्कार, उपनिषत्सार, ब्रह्मसूत्रसार, परमसत्य, ब्रह्मविद्या, पराविद्या र औपनिषद पुरुषसमेत छन् । ती त उनका लामो समयसम्मको अध्ययन, गुरुको प्रसाद, परमेश्वरको असीम अनुकम्पा

र ब्रह्माभ्यासका फल हुन् । फल पनि कस्ता भन्ने स्वयं श्रीव्यासदेवका शब्दमा 'निगमकल्पतरोर्गलितं फलम्' नै हुन् जस्तो म मान्दछु । उदाहरण दिँदा अतिशय भएको भए क्षमा माग्दछु । तर मलाई त्यस्तै नै लाग्छ । यी कृतिहरूमध्ये धेरैजसो उनीबाट मैले पनि सप्रेम उपहार पाएको छु, पढेको छु, लाभ पनि उठाएको छु । ती ज्यादै उत्कृष्ट किसिमका कृति हुन्, जसले वेदान्तविधा लौकिक भाषामा जान्न चाहने मुमुक्षुका निम्ति प्रेरणास्पद नै हुने छन् मात्र हैन रहिरहने छन् । यिनले त शरदकुमारलाई मृत्युबाट अमृततिरै लगेका छन् भन्न सक्तछु ।

यस्ता प्रखर ग्रन्थहरूमाथिको ध्रुवप्रसाद भट्टराईको समीक्षाको प्रयास अथवा यसरी भनौँ क्यारे– शरदकुमार भट्टराईका अद्वैतवेदान्त विषयक उपर्युक्त मौलिक रचना, जो ब्रह्माभ्यासकै विभिन्न सोपान भन्दा अतिरिक्त होइनन् तिनमा मूल रचनाकारले के कुरा, कहाँ कसरी, कुन प्रयोजनका लागि समाविष्ट गरेका छन्, यसको राम्रो खुलासा ध्रुवप्रसाद भट्टराईले गरेका छन् । ध्रुवप्रसाद भट्टराईका समीक्षाग्रन्थबाट शरदकुमार भट्टराईका ग्रन्थहरू पढ्दा कहाँ कुन कुरा जान्न बुझ्न पाइन्छ भन्ने जान्न अत्यन्त सरल हुन्छ । यो ज्यादै आवश्यक कुरा हो जसका आवश्यकताको पूर्ति ध्रुवप्रसाद भट्टराईले गरिदिएका छन् ।

अन्ततः शरदकुमार भट्टराईका विविध विधाका विशिष्ट रचनाहरू, जसलाई पढ्दा र बुझ्दा पाठकले शरद ऋतुहरूका फूलहरूको सुगन्ध र समस्त फलहरूको स्वाद लिन पाउँछ । उनका भक्तिका रचनाहरू जसले परमेश्वरका अखण्ड आनन्द अनुभव गराउँछ, उनका अद्वैत वेदान्त विषयक अनुवाद वा मौलिक रचनाहरू जसले मोक्षशास्त्रको मार्गदर्शन गराएर त्यसमा हिँड्न प्रवृत्त गराउँछ, ती सबैको कहीँ परिचय दिने, कहीँ व्याख्या प्रस्तुत गर्ने, कहीँ समीक्षा गर्ने प्रयास ध्रुवप्रसाद भट्टराईले गरेका छन् । हुन त म आफैँ पनि ती सबै विधाहरू जसमा शरदकुमार

भट्टराईले कलम चलाएका छन्, चलाएका मात्र होइन दगुराएका छन्, सबैको मर्म जान्ने दाबी गर्दिनँ, गर्न पनि सक्तिनँ, परमेश्वरका कृपाले जति जान्न सकेँ तिनैको अभ्यास गर्दछु। त्यसमा पनि एक प्रकारको समीक्षा प्रस्तुत गर्ने ध्रुवप्रसाद भट्टराईको प्रयास ज्यादै स्तुत्य छ। यो उनको शरदकुमार भट्टराईप्रतिको कृतकृत्यता हो, यो त मैले आरम्भमै निवेदन गरिसकेँ। एकजना युवा शिक्षकले नयाँनयाँ कुरा सिक्दै जाने, सिकेका कुरा मनन गर्ने र मनमा भएका कुराको निदिध्यासन गर्ने क्रम एवं साहसिलो प्रयास अत्यन्त सराहनीय छ। शरदकुमार भट्टराई त मेरा परममित्र, बालसखा, सहज्ञानाभ्यासी पनि हुन् उनका अप्रतीम रचना त्यसको पारमा पुग्नु मेरानिम्ति पनि सम्भव हुन्छ कि हुन्न भन्न सक्तिनँ। मलाई जे जस्तो जिम्मेवारी सुम्पिइयो, त्यसको निर्वाह यथामति गरेको छु। हरि ॐ तत्सत्।

विनीत :-

विद्यानाथ उपाध्याय भट्ट



# जे सुनेँ, पढेँ र देखेँ, त्यही लेखेँ

सामाजिक सदस्यका रूपमा मानिसको अन्य मानिससँग सम्पर्क स्थापित हुनु र सम्बन्ध कायम रहनु स्वाभाविक प्रक्रिया हो । यसरी नै मानिसको परिचय विकसित हुँदै जान्छ । तर सम्पर्क भएका र सम्बन्ध गाँसिएका सबै मानिससँग भित्री र बाहिरीरूपमा राम्ररी परिचित नै हुन सकिन्छ भन्नु ठीक होइन । हामीलाई धोका दिने र शत्रुता राख्ने अधिकांश मानिस हाम्रै परिचयको सीमाभित्रका हुन्छन् । त्यसैले मानिसलाई बाहिर चिन्नु चिन्नु होइन, भित्री रूपपमा चिन्नु चाहिँ चिन्नु हो भनिन्छ । आशुविश्वासी भएर वा परनिर्भर भएर कहिलेकाहीँ हामी नचिन्नुपर्ने मानिस चिन्न खोज्दा रहेछौं र चिन्नै पर्ने मानिस चाहिँ बिर्सिंदा रहेछौं । यस्तै चिन्नुपर्ने र चिनाउनुपर्ने मानिस लागेर मैले श्रीशरदकुमार भट्टराईको बहुमुखी व्यक्तित्वलाई अलिअलि कोट्याएर यहाँ चिनाउने प्रयास गरेको हुँ ।

श्रीशरदकुमार भट्टराई र मेरो जन्म खोटाङ जिल्लाको रावा लामिडाँडा गा.वि.स. वडा नं. ८ मा भएको हो । तर उहाँ र मेरा बीचमा गाउँमा सामान्य चिनजान भएकोसम्म पनि मलाई सम्झना छैन । म जन्मने बेलामा उहाँ पढ्न काठमाडौं गइसक्नु भएको थियो । पछि मैले जान्दा पढाइ लगभग पूरा गरेर लोकसेवाबाट शाखा अधिकृतको परीक्षा उत्तीर्ण गरी जागिरमा प्रवेश गर्ने क्रममा रहनुभएका उहाँसँग मेरो चिनजान नहुनु स्वाभाविकै थियो । समय बित्तै गयो । म मेरो नियतिको कित्तामा हिँडेँछु, उहाँ सरकारी सेवामा अगाडि बढ्दै जानुभएछ । विभिन्न जिल्लाका प्रमुख जिल्ला अधिकारी हुनुहुँदा म उहाँको नाम सुनिरहन्थैँ । कसैले 'उहाँ त तेरै गाउँको दाजु हो नि' भनेर सुनाइदिएपछि मात्र मैले उहाँप्रति विशेष ध्यान दिएँ । कर्णलाई 'राधेय'बाट 'कौन्तेय'को बोध भएझैं मलाई पनि उहाँको 'भाइ' भएको ज्ञान भएछ ।

मानिस जतिसुकै भौतिकवादी र प्रत्यक्ष प्रमाणवादी हुन खोजे पनि उसको व्यक्तित्व निर्माणमा नियतिले पनि भूमिका खेल्छ । आफ्नो रहरभन्दा पनि साथीभाइको कर, पितामाताको अभिलाषा र २०१७ सालको राजनीतिक घटनाबाट उत्पन्न परिस्थितिको परिणामस्वरूप २०२२ सालमा शाखा अधिकृतको पदबाट सरकारी सेवामा प्रवेश गर्नुभयो । २०२२ साल माघ २१ गतेदेखि २०५५ साल चैत्र २५ गतेसम्मको गणना गर्दा उहाँले ३२ वर्ष दुई महिना आठ दिन सरकारी सेवा गर्नुभएछ । प्रारम्भमा रक्षा मन्त्रालयको शाखा अधिकृत हुनुभएका उहाँले सञ्चार, गृह, भूमिसुधार तथा व्यवस्था, युवा तथा खेलकुद, शिक्षालगायतका मन्त्रालयमा लामो समय सेवा गरी २०५५ साल चैत्र २५ मा सचिव पदबाट अवकाश लिनुभयो । सरकारी सेवाकालमा उहाँको अनेकौं प्रवृत्ति र चरित्रका मानिसहरूसँग भेट, सम्पर्क, सहकार्य, मित्रता, द्वन्द्व सबैथोक भयो । यस क्रममा उहाँले कतिपय मानिसलाई डन्डा बर्साउने काम गर्नुभयो भने कसैकसैले उहाँलाई नै गोली बर्साएर ज्यान लिने हर्कत समेत गरे । उहाँको तीन दशकभन्दा लामो प्रशासनिक व्यक्तित्व केलाउँदा एउटा आकर्षक चलचित्रको कथा पढेजस्तो अनुभव हुन्छ । उहाँका साहित्य, भक्ति र वेदान्तका ग्रन्थहरू मात्र पढ्ने र उहाँलाई प्रशासनिक व्यक्तित्वका रूपमा नचिन्ने पाठकले उहाँ प्रशासक पनि हुनुहुन्थ्यो भन्ने छेकछन्द नै पाउँदैन । शरदकुमार दाइको समग्र जीवनी र व्यक्तित्व केलाउँदा प्रशासनिक व्यक्तित्व नै बढी तौलको प्रमाणित हुन्छ । यसलाई केन्द्रित गरेर उहाँले लेख्नुभएको “अनुस्मृति” (जीवनयात्रा) मा यस बारे विस्तृत, प्रामाणिक र वस्तुगत जानकारी पाउन सकिन्छ । जिज्ञासु पाठकले त्यहीँबाट सम्बद्ध विषयको आधिकारिक जानकारी प्राप्त गर्न सक्ने भएकाले मैले यस पुस्तकमा साहित्यिक, भक्तिप्रधान र वेदान्ती व्यक्तित्वका सम्बन्धमा मात्र चर्चा गर्ने प्रयास गरेको छु । विषयवस्तुको पुनरावृत्ति र कृतिको आयाम ठुलो हुने भएकाले यसो गरेको हुँ । उहाँले लेख्नुभएको “अनुस्मृति”

(जीवनयात्रा) र प्रस्तुत कृति दुवै पढेर मात्र पूर्ण शरदकुमार भट्टराई चिनिनुहुन्छ भन्ने मेरो ठम्याइ छ।

श्रीशरदकुमार भट्टराई सरकारका विभिन्न मन्त्रालयमा सचिव हुनुभयो । अरू मानिस कृत्रिम नाता जोडेर ठूला मानिसबाट काम लिन्छन् म चाहिँ एउटै गाउँठाउँको र वंशावलीका हिसाबले एक पुस्ता माथिको भए तापनि भाइ भनेर स्नेह राख्न र उहाँबाट काम लिन त परै जाओस्, सामान्य भेटघाट र चिनजान गर्न पनि गइनँ। उहाँले सेवाबाट अवकाश लिएको १७ वर्षभन्दा बढी समय बितेपछि आज फर्केर हेर्दा मेरा लागि उहाँ सचिवका रूपमा मात्र नभई दूरदर्शी हितैषी अग्रजका रूपमा अत्यावश्यक हुनुहुन्थ्यो भन्ने लाग्छ। तर उहाँसँग सामान्य नाम सुन्नुबाहेक प्रगाढ परिचय नभएकाले बीचको समय त्यत्तिकै बित्यो।

यसै क्रममा उहाँका विभिन्न साहित्यिक रचना पुस्तक एवं फुटकर रूपमा प्रकाशित भइसकेको र भइरहेको सूचना मैले राखिरहेको थिएँ। सोही सिलसिलामा उहाँले माओवादी आन्दोलनको परिवेशलाई चित्रित गरी 'के लेखौं कविता भन ?' भन्ने शीर्षकको फुटकर कविता प्रकाशित गर्नुभयो। नेपालीहरूको मन र मुटुलाई स्पर्श गरेर लेखिएको त्यस कविताको एउटा अंश नेपाल संस्कृत विश्वविद्यालयबाट प्रकाशित भइरहेको त्रैमासिक अनुसन्धानमूलक पत्रिका 'ऋतम्भरा'को सम्पादकीयमा समेत समावेश गरियो। मेरा लागि उहाँको साहित्यिक व्यक्तित्व केलाउन प्रेरित गर्ने उद्दीपन त्यही थियो।

यसै मेसोमा श्रीशरदकुमार भट्टराई 'जयतु संस्कृतम्' का कार्यक्रमहरूको नेतृत्व गर्दै विभिन्न ठाउँमा सक्रिय हुनुभएको पनि मैले देखेँ। तिनमा पनि सामान्य बोलीचाली मात्र हुन्थ्यो। माथि उल्लेख भएभैंंत्यो बोलाइ र चिनाइ बाहिरी मात्र थियो। उहाँले वेदान्तका ग्रन्थहरू लेख्नुभएको प्रारम्भिक जानकारी पनि मलाई हुँदै गयो।

शनिवार एक दिनको कुरा हो, ममा के ल्याकत देख्नुभयो कुन्नि ! श्रीशरदकुमार दाइले फोन गर्नुभयो र 'मेरो घरमा ब्रह्माभ्यास

हुन्छ, ब्रह्मचिन्तनसम्बन्धी शास्त्रार्थ हुन्छ, तिमी पनि आऊ' भन्नुभयो। म दोधारमा परेँ – जाऊँ वेदान्तको चर्चा र शास्त्रार्थमा गति छैन, नजाऊँ स्नेहपूर्वक आफैँ फोन गरेर बोलाउनुभएको छ। वेदान्तको अज्ञानभन्दा पनि दाइको स्नेहले मलाई जित्यो र म गएँ। यसरी निकै महिनासम्म यो क्रम चलिरह्यो। म वेदान्तको बाह्रखरी सिक्दै गएँ र दाइले पढ्न दिनुभएका पुस्तक पनि पढ्न थाले। तीमध्ये उहाँको 'अनुस्मृति (जीवनयात्रा)' पढेपछि म उहाँलाई भित्री रूपमा चिन्न थालेँ। साहित्यिक पुस्तकबाट साहित्यकार र वेदान्तका पुस्तकबाट गहिरो वेदान्तीका रूपमा पनि मैले उहाँलाई चिनेँ। आउजाउ हुने क्रममा उहाँका अनुभव, दृष्टिकोण र व्यवहारसँग पनि म परिचित हुन थालेँ। मेरा मनमा विकसित यिनै अमूर्त कच्चा सामग्रीले उहाँको व्यक्तित्वका सबै पाटा र पक्षलाई एकत्रित गर्न सके समाजले भित्री रूपमा चिन्नुपर्ने मानिसलाई चिनेर लाभ, प्रेरणा र मार्गदर्शन प्राप्त गर्न सक्ला भन्ने ठानेर यो पुस्तक तयार भएको हो। यसमा दाजु र भाइको सांसारिक माया र प्रपञ्चको प्रभाव छैन, सार्वजनिक भइसकेका उहाँका दर्जनौं कृति र वृत्तिको अध्ययनको निष्कर्ष मात्र छ।

अन्त्यमा, आफ्नो बहुमुखी व्यक्तित्व प्रकाशन गर्नका लागि अनुमति दिने र आवश्यक सामग्री जुटाइदिने दाजु श्रीशरदकुमार भट्टराईप्रति सादर आभार व्यक्त गर्दछु।

– लेखक



# विषयसूची


| क्र.सं. | शीर्षक | पृष्ठ |
|---|---|---|

प्रथम वर्णक

## जीवनी खण्ड

| | | |
|---|---|---|
| १. | बाल्यकालदेखि वार्धक्यसम्म | ३–२१ |

द्वितीय वर्णक

## साहित्य खण्ड

| | | |
|---|---|---|
| १. | साहित्यिक व्यक्तित्व | २३–२५ |
| २. | सिर्जनाका फूलहरू | २६–६१ |
| ३. | आजका नेता | ६२–६६ |
| ४. | पत्रैपत्र | ६७–१०५ |
| ५. | कविशतक | १०६–११५ |
| ६. | आभास | ११६–१७३ |

तृतीय वर्णक

## काव्यखण्ड

| | | |
|---|---|---|
| १. | बहादुर शाह | १७७–१८७ |
| २. | श्रद्धाञ्जलि | १८८–१९८ |
| ३. | अमरसिंहको चिट्ठी | १९९–२१० |

| | | |
|---|---|---|
| ४. | क्रान्तिदूत | २११–२२३ |
| ५. | पृथ्वीविजय | २२४–२३८ |
| ६. | वन्दना | २३९–२५३ |


चतुर्थ वर्णक

## यात्राखण्ड


| | | |
|---|---|---|
| १. | विविध यात्रा | २५५– ३०८ |
| २. | यात्रैयात्रा | ३०९–३७१ |
| ३. | अनुस्मृति (जीवनयात्रा) | ३७२–३८३ |
| ४. | तेस्रो अष्ट्रेलियायायात्राको दैनिकी | ३८४–३९० |


पञ्चम वर्णक

## गीत तथा भजनखण्ड


| | | |
|---|---|---|
| १ | गीत तथा भजनहरू | ३९२–३०८ |


षष्ठ वर्णक

## समालोचना खण्ड


| | | |
|---|---|---|
| १. | समीक्षक व्यक्तित्व | ४१० |
| २. | उसैको लागि फेरि उसैका लागि एक अध्ययन | ४१०–४२४ |
| ३. | ऋतुमन्थन | ४२५–४३५ |

सप्तम वर्णक

## भक्तिखण्ड


| | | |
|---|---|---|
| २. | ज्ञान र भक्ति (अनुवाद) | ४३७–४४९ |
| ३. | श्रीकृष्णाय वयन्नुमः (अनुवाद) | ४५०–४५६ |
| ४. | मणिरत्नमाला प्रश्नोत्तरी (अनुवाद) | ४५७–४६१ |
| ५. | अजातवाद (अनुवाद) | ४६२–४७६ |
| ६. | ब्रह्मानुभूति (अपरोक्षानुभूति) (अनुवाद) | ४७७–४८१ |
| ७. | द्रष्टा र दृश्य (मौलिक) | ४८२–४९३ |


अष्टम वर्णक

## गद्यपद्य भक्तिखण्ड


| | | |
|---|---|---|
| १. | रासपञ्चाध्यायी (अनुवाद) | ४९५–५०४ |
| २. | अन्तिम उपदेश (अनुवाद) | ५०५–५०९ |


नवम वर्णक

## अद्वैतवेदान्त अनुवाद खण्ड


| | | |
|---|---|---|
| १. | ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री | ५११–५१७ |
| २. | वेदान्तपरिभाषासार | ५१८–५२१ |
| ३. | अध्यास | ५२२–५२७ |
| ४. | अद्वैतसिद्धिः | ५२८–५४३ |

दशम वर्णक

# अद्वैतवेदान्त मौलिक खण्ड


| | | |
|---|---|---|
| १. | अद्वैत वेदान्त | ५४५–५४७ |
| २. | ब्रह्मसाक्षात्कार | ५४८–५५८ |
| ३. | उपनिषत्सार | ५५९–५६१ |
| ४. | ब्रह्मसूत्रसार | ५६२–५६६ |
| ५. | परमसत्य | ५६७–५७२ |
| ६. | ब्रह्मविद्या | ५७३–५८० |
| ७. | पराविद्या | ५८१–५९० |
| ८. | औपनिषद पुरुष | ५९१–६२४ |
| सन्दर्भग्रन्थ सूची | | ६२५–६२६ |




# जीवनी

**जन्मस्थल र भौगोलिक अवस्थिति**

अनादिकालदेखि नेपाल देवभूमि, ज्ञानभूमि र वीरभूमिका रूपमा प्रसिद्ध रहिआएको छ। सभ्यता, संस्कृति र प्रकृतिले समृद्ध राष्ट्र नेपाल आफ्नो मौलिक परिचय र विशेषताले संसारकै लागि आकर्षण र अवलोकनको केन्द्र बनेको छ। नेपालको यही राष्ट्रिय मौलिकताको परिचय दिने विश्वको सर्वोच्च शिखर सगरमाथाको दक्षिणी भूभागमा अवस्थित पहाडी जिल्लाहरूमध्ये खोटाङ पनि एक हो। विभिन्न नदी, खोला र कुण्डहरूले यस जिल्लालाई शीतल, उर्वर र सुन्दर बनाएका छन्। यसै जिल्लामा प्रवाहित हुने दूधकोसी र रावाखोलाको दक्षिणी भूभागमा अवस्थित लामिडाँडा गाउँ छ। रावाखोलाको पार्श्ववर्ती गाउँ भएकाले यसलाई रावा लामिडाँडा भनिन्छ। पूर्वमा नुनथलाको लेक र जुकेखोला, पश्चिममा दूधकोसी, उत्तरमा दूधकोसी र रावाखोला तथा दक्षिणमा लङ्गुरखोलाको बीचमा पर्ने रावा लामिडाँडा नाम अनुसार नै लामो डाँडाका रूपमा सुन्दर गाउँ हो। यहाँ भन्ज्याङ, चौर र टारहरू पनि छन् तापनि विहङ्गावलोकन गर्दा यो स्थान लामो डाँडाकै रूपमा देखिन्छ। पूर्वको नुनथलाको लेक, दक्षिणको बिजुले डाँडा र उत्तरको उच्च वस्ती ऐसेलुखर्कको बजारबाट शरद र हेमन्त ऋतुमा हेर्दा रावा लामिडाँडा रङ्गीबिरङ्गी गलैंचाजस्तो सुन्दर र हृदयानन्दी देखिन्छ। यही भएर साहित्यकारहरूले यसलाई गोलकाँक्रीको सुन्दराकृतिसँग पनि तुलना गरेका छन्।

गर्मीमा चीसो हावा चल्ने र जाडोमा न्यानो घाम लाग्ने रावा लामिडाँडा स्वास्थ्यका दृष्टिले अति अनुकूल छ भने जलस्रोत, वनसम्पदा र कृषिउत्पादनका क्षेत्रमा पनि समृद्ध छ। पहाडी गाउँ भएर पनि बाढी, पहिरो जस्ता प्राकृतिक विपत्तिबाट तुलनात्मक रूपमा सुरक्षित हुनु रावा लामिडाँडाको भौगोलिक विशेषता हो।

## सामाजिक स्थिति

रावा लामिडाँडा बहुजातीय समाज भएको सद्भावयुक्त गाउँ थियो। प्राचीन अभिलेख र लेखोटहरूका आधारमा हेर्दा रावा लामिडाँडामा सयौँ वर्षअघिदेखि ब्रह्मनिष्ठ वसिष्ठ गोत्रमा उत्पन्न भट्टराईहरूको बाहुल्य रहिआएको पाइन्थ्यो । लोककथनमा प्रचलित 'लामिडाँडे भट्टराई' पदावलीले लामिडाँडा र भट्टराईलाई पर्यायजस्तो बनाउनुबाट पनि लामिडाँडामा लामो समयदेखि भट्टराईहरूको बाहुल्य र वर्चस्व सिद्ध हुन्छ। भट्टराईबाहेक सुवेदी, तिमल्सिना र ढुङ्गेल ब्राह्मणहरू पनि यहाँ बसोबास गर्दथे । ब्राह्मणहरूका अतिरिक्त यहाँ क्षत्री, नेवार, मगर, घर्ती, माझी, राई, कामी, दमाई, सार्की आदि सवर्ण जातजातिको पनि यस गाउँमा बसोबास रहेको थियो। सबै जाति र वर्गको साझा बस्तीका रूपमा रहेको रावा लामिडाँडा परस्परिक सद्भाव, सहयोग र समन्वय भएको नमुना गाउँ थियो। यहाँ समाजका सबै जाति, वर्ग र समुदायका मानिसहरू आआफ्नो परम्परागत पेसा र व्यवसायका साथै जागिरबाट पनि जीवन निर्वाह गर्ने गर्दथे । जुनसुकै काममा पनि परस्पर सहयोग जुटाउनु र सहभागी हुनु रावा लामिडाँडाको उदाहरणीय विशेषता थियो। सबैले सबैलाई आत्मीय र आदरसूचक सम्बोधन गरेर यहाँ एकै परिवारको सदस्यलाई जस्तै व्यवहार गर्ने प्रचलन रहिआएको छ।

## आर्थिक अवस्था

रावा लामिडाँडाका वासिन्दाको मुख्य पेसा कृषि हो । लेक, पहाड र बेसी गरी तीनथरी भूबनोट भएको यो गाउँ खाद्यान्न, तरकारी र फलफूलका दृष्टिबाट आत्मनिर्भर छ। ठूलाठूला उद्योग, कलकारखाना र परियोजनाहरू नभए पनि पहिले नेवार, मगर, राई, माझी आदि जातिका मानिसहरूले कपास खेती गरी त्यसैबाट सुत काटी, तान हाली घरघरमै सेतो खाँडी, कोगटी आदि कपडा बुन्ने घरेलु उद्योगहरू प्रशस्त थिए। कसैले सेतो खाँडीमा कालो छिट छाप्तथे। महिलाहरूले त्यस्को गुन्यु

लगाउने चलन थियो । उनीहरू बर्को ओड्ने र पटुका बाँध्ने गर्दथे । पुरुषहरूले भोटो, दौरासुरुवाल, पटुका, टोपी आदि खाँडीकै लगाउँथे । यस दृष्टिकोणले लुगा कपडामा गाउँ प्रायः आत्मनिर्भर थियो । हाल त्यो समाप्त भई साना घरेलु उद्योगबाट आय आर्जन गर्ने चलन रहेको छ। हाल फलफूलको व्यावसायिक उत्पादन र विक्रीवितरणबाट यहाँका बासिन्दाको आर्थिक अवस्थामा सुधार आएको छ । पहिले रावा लामिडाँडाका प्रत्येक बस्तीका बीचमा पनि बाक्लो वन थियो । त्यहाँ जङ्गली जनावर पनि बस्तथे । हाल मानवबस्ती बढेर टोलटोलका बीचमा ठूला जङ्गल नभए पनि गाउँको वरिपरि सामुदायिक पातलो जङ्गल छ। जङ्गल र जलस्रोतको सुरक्षा र सदुपयोग तथा जडीबुटीको अनुसन्धान एवम् उत्पादन गर्ने हो भने रावा लामिडाँडाको आर्थिक समृद्धिको प्रशस्त सम्भावना छ। लामो समयदेखि सञ्चालित विमानसेवा र केही वर्षदेखि सुचारु भएको स्थलयातायातको सुविधाले यस गाउँको आर्थिक चहलपहल बढेर गएको छ । वैदेशिक रोजगारीबाट प्राप्त आयस्रोतले यस गाउँका बासिन्दाको जीवनस्तर माथि उठ्दै गएको छ। व्यापार, होटल व्यवसाय र पथप्रदर्शनले पनि आर्थिक समृद्धिको द्वार खुल्दै गएको छ । भौगोलिक रूपमा सुन्दर, सामाजिक दृष्टिले सभ्य, सहिष्णु र सुसंस्कृत तथा आर्थिक पक्षबाट आत्मनिर्भर रावा लामिडाँडा खोटाङ जिल्लामा मात्र नभई नजिकका जिल्लाहरूका साथै देश भरमै पनि परिचित र प्रतिष्ठित गाउँ हो ।

## धार्मिक तथा सांस्कृतिक अवस्था

रावा लामिडाँडा हिमालयबाट प्रवाहित पुराणप्रसिद्ध पवित्र दूधकोसी र रावानदीको दक्षिण पश्चिम भूभागमा अवस्थित धार्मिक र सांस्कृतिक गाउँ हो । यो गाउँ शताब्दीयौंदेखि विद्वान्, पण्डित, पौराणिक, ज्योतिर्विद्, कर्मकाण्डी, ब्रह्मज्ञानी, आचारवान् र कर्तव्यनिष्ठ ब्राह्मणहरूको वासस्थल थियो। प्रत्येक शिलामा देवीदेवताको रूप र वास

देख्ने आस्थावान् नेपालीहरूको प्रतिबिम्ब यहाँका बासिन्दामा पाइन्थ्यो । आ-आफ्ना इष्टदेवता र कुलदेवतामा असीम श्रद्धा र भक्तिभावले समर्पित यहाँका बासिन्दाहरू देवीस्थान, संसारीमाई आदि शक्तिपीठहरूले आफुहरूलाई शक्तिसञ्चार गरिरहेको विश्वास गर्दथे । दसैँको नवरात्रिपूजा, तिहारको देउसी भैलो, तीजको सँगिनी, मकरसङ्क्रान्तिको दिन पतितपावनी दूधकोसीको तटमा अवस्थित रभुवा समेतका घाटमा मकरस्नान, ऋषितर्पणीको यज्ञोपवीत धारण र रक्षाबन्धनजस्ता सामूहिक धार्मिक-सांस्कृतिक क्रियाकलापले यहाँको वातावरण नै अध्यात्ममय बन्दै आएको देखिन्छ । घरघरमा प्रतिदिन गरिने वेदपाठ, श्रीमद्भागवत महापुराण, रामायण आदि ग्रन्थको कथावाचन र श्रवण, भगवान्को नामसङ्कीर्तनका साथै कृष्णचरित्र, भानुभक्तीय रामायण, देवीभागवतजस्ता धार्मिक तथा भक्तिप्रधान ग्रन्थका श्लोकवाचनले पनि रावा लामिडाँडाको धार्मिक तथा सांस्कृतिक समृद्धि बढेर गएको थियो । प्रतिदिन ब्राह्मणहरूले जप, पाठ र पाञ्चायन पूजा गरेर मात्र आहार ग्रहण गर्ने प्रचलन रहेको रावा लामिडाँडा शिक्षित, सनातनी र सम्पन्न गाउँका रूपमा चिनिन्थ्यो । समयसमयमा लगाइने सत्यनारायणको पूजा, प्रतिवर्ष लिइने स्वस्थानीव्रत, ठूली एकादशीमा सुन्ने र सुनाइने एकादशी माहात्म्य आदि धार्मिक कृत्यहरूले समेत यहाँको धार्मिक तथा सांस्कृतिक गौरव बढाएका थिए । रावा लामिडाँडाको प्राकृतिक र सांस्कृतिक स्वरूपलाई कवितामा आलङ्कारिक शैलीबाट यसरी उतारिएको छ :

सेता अग्ला हिमशिखरका काखमा सानु गाउँ ।
सुन्दामा नै मन खुस हुने लामिडाँडा छ नाउँ ।।
रातो लामो मधुरस भरी गोलकाँक्री समान ।
आमाको त्यो मधुर अति नै काखभैँ हुन्छ भान ।।

– फर्केर हेर्दा (सिर्जनाका फूलहरू : शरदकुमार भट्टराई)

यही रावा लामिडाँडामा लामो समयदेखि बसोबास गर्दैआएका वेदपाठी, सनातनी, वसिष्ठगोत्री, आचारवान्, ब्रह्मज्ञानी र कर्तव्यनिष्ठ

उपाध्याय भट्टराई कुलका पिता धर्मदत्त भट्टराई र माता श्रीमती रन्धतादेवी भट्टराईका सातौँ सन्तान र चारौं पुत्रका रूपमा विक्रम संवत् १९९५ साल वैशाख १३ गते कृष्णपक्ष, दशमी तिथि सोमवार राति शरदकुमार भट्टराईको जन्म भएको थियो। जन्मकालका आधारमा उहाँको न्वारनको नाम सूर्यप्रसाद भट्टराई हो।

**वंशपरम्परा र बाल्यकाल**

पौराणिक आख्यान र अनुसन्धानबाट सनातन वैदिक परम्पराका अनुयायीहरूका मूल पुरुष शेषशायी भगवान् नारायण नै हुनुभएको देखिन्छ। पौराणिक आख्यान अनुसार शेषशायी भगवान् नारायणका नाभिकमलबाट ब्रह्माजीको उत्पत्ति भयो र ब्रह्माजीका विभिन्न मानसपुत्रहरूमध्ये ब्रह्मर्षि वसिष्ठ पनि एक हुनुभयो। वसिष्ठ र उहाँकी पत्नी अरून्धतीबाट शक्तिको जन्म भयो। शक्ति र उहाँकी पत्नी सोपाबाट पराशरको जन्म भयो भने ऋषि पराशर र सत्यवतीबाट कृष्ण द्वैपायन व्यासको उत्पत्ति भयो। व्यास र उहाँकी पत्नी ऋत्तिकाबाट शुकदेव स्वामीको जन्म भयो। शुकदेव स्वामी र उहाँकी पत्नी पीवरीबाट चार पुत्रको जन्म भयो। तीमध्ये कृष्ण नाम गरेका व्यक्ति भट्टराईहरूका पूर्वज भएको उल्लेख पुराणहरूमा पाइन्छ। त्यसपछि लामो समयसम्म भट्टराईहरूका पुर्खाहरूको वंशक्रम अज्ञात नै रहेको पाइन्छ।

दसौँ शताब्दीमा आइपुगेपछि आधुनिक कालका प्रथम पुर्खा मानिने ऋषि भट्टको उल्लेख पाइन्छ। त्यस बेला ऋषि भट्ट हालको बागलुङ जिल्लाको गल्कोटमा बसोबास गर्दथे। ऋषि भट्टका छैटौँ पुस्ता गर्भु भट्ट निकै विद्वान् थिए। वंशावलीमा उल्लेख भएअनुसार सिञ्जाका तत्कालीन राजा अभय मल्लले गर्भुलाई राजपुरोहित र जिम्मावाल बनाएर राखेका थिए। त्यस क्रममा राजाले खुसी भएर गर्भु भट्टलाई 'राई' को उपाधि दिएका थिए। त्यस बेलादेखि 'भट्ट' मा 'राई' अर्थात् राजा वा श्रेष्ठ भन्ने उपाधि जोडिएर 'भट्टराई' थर प्रसिद्ध भएको ऐतिहासिक विवरण पाइन्छ।

कालक्रममा भट्टराई वंशका १३ औँ पुस्ताका ऋषीश्वर भट्टराई गोरखाबाट नुवाकोट हुँदै सिन्धुपाल्चोकमा बिर्ता पाएर पूर्वतर्फ लागे । ऋषीश्वरका कान्छा छोरा लक्ष्मीदास भट्टराई भए भने लक्ष्मीदासका जेठा छोरा गङ्गादास भट्टराई भए । गङ्गादास सालु बिर्ता प्राप्त गरेर बसाइँ सरे । गङ्गादासका चार भाइ छोरामध्ये कान्छा कृष्णानन्द भट्टराई थिए। कृष्णानन्द सालु बिर्तामा पर्ने सुनारपानीमा बस्दथे । उनी त्यस क्षेत्रमा प्रतिष्ठित, सम्पन्न र सम्मानित व्यक्ति थिए। त्यस कारण तत्कालीन राजाले उनलाई गादो लगाएर हिँड्ने अधिकार दिएका थिए । यही अधिकार पाएर गादो लगाई हिँड्ने भएकाले उनी 'गादेकिसन' को नामबाट प्रतिष्ठित थिए । कृष्णानन्द भट्टराईका ६ भाइ छोराहरूमध्ये काहिँला अग्निधर भट्टराई भए भने अग्निधरका छोरा गङ्गाधर भट्टराई भए । गङ्गाधरका ३ भाइ छोराहरूमध्ये जेठा रामचन्द्र भट्टराई श्रीशरदकुमार भट्टराईका १९ औँ पुस्तामाथिका पुर्खा थिए ।

कालान्तरमा रामचन्द्र भट्टराई रावाखोलाको छेउमा रहेको उर्वरा भूमि रावा दुभेमा रेग्मीको बिर्ता किनेर बसोबास गर्न थाले । त्यहाँ रामचन्द्रका १० भाइ छोराहरू जन्मिए। जेठा छोरा उदयनारायण भट्टराई समेतसँग रावा दुभेमा रेग्मीहरूको बिर्ता मुद्दा चल्यो जसमा रेग्मीहरूको विजय र भट्टराईहरूको पराजय भयो। त्यसपछि ती ७ भाइहरूमध्ये कोही रावाखोलाको शिरमा पर्ने दिप्सुङ किनुवा बिर्तातिर, कोही रावाखार्पाको कल्लेरीतिर र कोही रावा लामिडाँडातिर गएर बसे। तिनीहरूमा बृहस्पति भट्टराई कान्छा थिए । उनी रावा लामिडाँडा बिर्तामा दाजु डम्बनाथ भट्टराईसँग बस्न गए । उनका मातापिताको निधन भइसकेको हुँदा अभिभावक भएर दाजुले नै उनको लालनपालन र विवाह समेत गरिदिए। बृहस्पतिका ३ भाइ छोराहरू जन्मिए। तीमध्ये जेठा छोरा भवानीशङ्कर भट्टराई भए। भवानीशङ्करका ४ भाइ छोरा जन्मे। तिनमा जेठा बलभद्र भट्टराई थिए । बलभद्रको चाँडै मृत्यु भयो । भवानीशङ्करका माहिला छोरा धर्मदत्त (भोजराज) भट्टराई भए । यिनै धर्मदत्त भट्टराईका ६ भाइ

छोरामध्ये काहिँला छोराका रूपमा शरदकुमार भट्टराईको जन्म भएको हो। शरदकुमार भट्टराईका जेठा सञ्जीवकुमार भट्टराई, माहिला सतीशकुमार भट्टराई र कान्छा सगुनकुमार भट्टराई ३ छोरा छन्। शरदकुमार भट्टराईका १९ औँ पुस्ताका पुर्खा रामचन्द्र भट्टराईदेखि २५ औँ पुस्ताका कान्छा सन्तति सगुनकुमार भट्टराईसम्मको वंशपरम्परालाई सङ्क्षिप्त रूपमा वंशवृक्षमा यसरी देखाउन सकिन्छ –



**पूर्वजको गौरव**

भट्टराईहरूको वंशको मूल खोज्नका लागि शेषशायी भगवान् नारायण, चतुर्मुख ब्रह्मा र सप्तर्षिमा परिगणित रघुवंशका कुलगुरु अयोनिज वसिष्ठसम्म पुग्नुपर्ने पौराणितक तथ्य माथि उल्लेख भइसकेको छ। यही प्राचीन र गौरवपूर्ण वंशवृक्षबाट पुष्पित र पल्लवित भट्टराईहरू इतिहासमा पनि सम्मानित र प्रतिष्ठित भएका पाइन्छन् । यो क्रम शरदकुमार भट्टराईका पूर्वज, समकालीन र उदीयमान पुस्तासम्म पनि अनवरत रूपमा अघि बढिरहेको छ।

प्रायः भट्टराईहरूमा पाइने विद्वत्ता, दृढता, धीरता, ऋजुता र आत्मानुशासन जस्ता सद्गुणहरू शरदकुमार भट्टराईका पिता धर्मदत्तमा पनि थिए। धर्मदत्तले खोटाङ जिल्ला अर्खौले घर भएका विद्वान् पण्डित चिसापानेका घरमा नै बसेर व्याकरण, धर्मशास्त्र, कर्मकाण्ड, ज्योतिष र पुराण आदिको पनि गहिरो अध्ययन गर्नु भएको थियो । औपचारिक शिक्षा प्राप्त नगरे पनि तात्कालिक पण्डित समाजमा उहाँ प्रतिष्ठित हुनुहुन्थ्यो। उहाँमा प्रत्युत्पन्न मति, वाक्चातुर्य, व्यवहारका कुशल, निर्भय आदि सद्गुणहरू विद्यमान् थिए। नैष्ठिक पिताको मुखबाट नै शरदकुमार भट्टराईले आफ्नो शाखाको शुक्लयजुर्वेद माध्यन्दिनीय वाजसनेयी शाखाको संहितामन्त्र भागको प्रथमोऽध्यायको प्रथम मन्त्र हरि ॐ इषे त्वोर्ज्जे त्वा देखि सुरु गरेर अन्तिम चालीसौं अध्यायको अन्तिम मन्त्र ' हिरण्मयेन पात्रेण' सम्म श्रवण गर्नुभएको थियो । पिताको योग्य शिक्षा, प्रशिक्षण, व्यावहारिक ज्ञानका साथै कर्मण्यताको पाठ र माता रन्धताको अविचलित भगवद्भक्तिले पनि उहाँको बालमस्तिष्कमा अनुकूल प्रभाव पाऱ्यो । सात वर्षकी अबोध बालिका हुँदै विधवा हुनुभएकी उहाँकी बुढी आमै (पिताकी पनि फुपू) आबाल ब्रह्मचारिणी गुरुमाता बालकुमारीले घरमा सबै बालबालिकालाई अक्षरारम्भ गराउनुभएको थियो। उहाँले परिवारका सबै सदस्यहरूलाई प्राथमिक शिक्षा दिनुभएको थियो। एक प्रकारले सिङ्गो गुरुकुल नै उहाँ हुनुहुन्थ्यो। उहाँलाई सबैले

आमै अथवा गुरुमाता भनेर सम्बोधन र सम्मान गर्दथे । शरदकुमारले दाजु पशुपतिप्रसाद (पार्वतीप्रसाद) भट्टराईबाट पनि घरमै संस्कृत शिक्षा पढ्न प्रारम्भ गर्नुभएको थियो । यसरी वंशपरम्पराका साथै पितामाता, गुरुमाता र दाजुबाट समेत उहाँको अनौपचारिक शिक्षा प्रारम्भ भएको देखिन्छ । यसबाहेक गाउँका शिक्षक, दाजुभाइ र मावलीबाट पनि उहाँमा शिक्षाप्रति रुचि जाग्दै जान्छ । घरमा एउटा विद्वान् कर्मकाण्डी पण्डितका छोराले गर्नुपर्ने खेतीपाती गर्ने र गाई बाख्रा हेर्ने समेत सबै काम गरेका किशोर शरदकुमार कर्मकाण्ड एवं धार्मिक अनुष्ठानहरूमा पनि सम्मिलित हुनुहुन्थ्यो । यिनै पात्र, घटना र परिस्थितिले उहाँको अनौपचारिक शिक्षाको पृष्ठभूमि निर्माण गरेको देखिन्छ ।

## शिक्षा

### शिक्षा र विद्याप्रति आकर्षण तथा अभिरुचि

किशोर अवस्थादेखि नै श्रीशरदकुमार भट्टराईमा विद्याध्ययन गर्ने तीव्र लालसा र उत्कण्ठा रहेको उहाँको जीवन वृत्तान्तबाट देखिन्छ । मातापिता र गुरुमाताको प्रेरणा तथा आफ्नै उत्साहले पनि उहाँलाई यसतर्फ अभिप्रेरित गऱ्यो । उहाँलाई यस दिशामा अभिमुख गराउने घटनामध्ये एउटा प्रसङ्ग उल्लेखनीय छ । उहाँ एक दिन बिहानको भात खाएर घरमा बसिरहनुभएको थियो । त्यसै बेला उहाँको घरमाथिको बाटोबाट नजिकैको नयाँ आहालमा पानी खुवाउन गाईवस्तु लिएर जाँदै गरेका स्थानीय पं. लक्ष्मीप्रसाद सुवेदीका छोरा वैजहरि सुवेदी 'नत्वा सरस्वतीं देवीं शुद्धां गुण्यां करोम्यहम् । पाणिनीयप्रवेशाय लघुसिद्धान्तकौमुदीम्' भन्ने लघुकौमुदीको मङ्गलाचरणश्लोक ठुलो स्वरले उच्चारण गर्दै हिँडेको उहाँले सुन्नुभयो । त्यसपछि आफु पछि परेको अनुभव गरी उहाँले लघुसिद्धान्तकौमुदीका साथै अमरकोश र रघुवंश पनि पढ्न थाल्नुभयो । उहाँमा पाइने विशेषताहरूमध्ये एउटा भिन्न विशेषता छ– कसैको प्रतिकूल बोली र व्यवहारबाट पनि अनुकूल शिक्षा, सन्देश

र प्रेरणा लिने । यसै विशेषताका कारण गाउँले अग्रज बन्धुबान्धवले उपेक्षापूर्वक हतोत्साही हुने नकारात्मक कटु वाक्य बोले त्यसलाई सकारात्मक रूपमा उहाँ लिनुहुन्थ्यो । त्यसरी भनेका कुरा र देखाएका व्यवहारले उहाँलाई अघि बढ्न उत्प्रेरित गर्दथे, जसको परिणामस्वरूप आज उहाँको बहुमुखी व्यक्तित्व सुपरिचित बनेको छ । दाजु पशुपति अध्ययनका लागि काठमाडौं हिँडेपछि उहाँ गाउँकै विद्वान् पण्डित गुरु महाप्रसाद तिमल्सिनाकै घरमा गएर संस्कृत पढ्न थाल्नुभयो ।

श्रीशरदकुमार भट्टराईले अनौपचारिक रूपमा संस्कृत पढिरहेकै समयमा गाउँमा विद्यालय स्थापना गर्ने अभियान चल्यो । त्यसका लागि गाउँमा चन्दा उठाउने र तिहारमा द्यौसी भैलो खेलेर रकम सङ्कलन गर्ने काम पनि भएका थिए । यसका लागि नेपाली सेनाका पूर्वमेजर र हाल वरिष्ठ कलाकार भीमबहादुर थापाको ठुलो सहयोग थियो । थापा दसैं तिहारका बिदामा घर जान्थे । उनी नाच्न निपुण र हँसाउन सिपालु थिए । उनैलाई नचाएर र गाउँलेलाई मनोरञ्जन गराएर पनि विद्यालयका लागि आर्थिक स्रोतको सङ्कलन गरिएको थियो । त्यसरी गाउँलेकै सहयोग र सक्रियतामा स्थापित सो विद्यालयमा मुख्य रूपमा संस्कृत नै पढ्ने र पढाउने गरिन्थ्यो । उहाँ पनि त्यसै विद्यालयमा पढ्न थाल्नुभयो । त्यसपछि उहाँ छिमेकी गाउँ खार्पाको भाषापाठशालामा गएर गुरु ढुण्डिराज पोखरेलसँग संस्कृत र ज्वालाप्रसाद पोखरेलसँग अङ्ग्रेजी पढ्न थाल्नुभयो । त्यस बेला अङ्ग्रेजी पढ्नु अनौठो विषय थियो तापनि उहाँले दुवैथरी शिक्षालाई सँगसँगै अघि बढाउनुभयो । उहाँलाई अझ ठुलो पाठशालामा गएर अझै बढी पढ्ने रहर थियो । दुइ भाइ छोराहरूलाई एकै चोटि घरबाहिर पठाएर पढाउन सक्ने सामर्थ्य र घरायसी परिस्थिति नभएकाले उहाँले पिताजीलाई यो कुरा भन्न सक्नुभएको थिएन । त्यस बेला भोजपुरको दिङ्लामा आबालब्रह्मचारी षडानन्दबाट स्थापित संस्कृत विद्यालयमा गएर पढ्ने चलन थियो । यो विद्यालय त्यस बेला शिक्षाको केन्द्र नै थियो । उहाँलाई पनि त्यहाँ गएर पढ्ने उत्कट अभिलाषा थियो तर पिताजीलाई भन्न सक्ने आँट थिएन ।

घरमा कसैलाई पनि थाहा नदिई भागेर रातारात साथीभाइहरूसँग २०११ साल फागुनमा उहाँ सो विद्यालयमा पुगेर पढ्न थाल्नुभयो ।

दिङ्लाको विद्यालय जङ्गलको बीच खोँचमा भएकाले उहाँलाई ज्वरो आयो र लुतोले पनि निकै सतायो । वर्षाको समयमा त्यहाँ बस्नै नसक्ने अवस्था भएकाले केही महिना बसेपछि २०१२ साल जेठमा साथीभाइहरूसहित उहाँ घर फर्किनुभयो । छोटै समयको अध्ययन भए पनि त्यस विद्यालयको सिद्धिले उहाँको शैक्षिक पूर्वाधार निर्माण गर्ने भूमिका खेलेको पाइन्छ ।

**काठमाडौं प्रवेश**

युवा विद्यार्थी शरदकुमारका दाजु पशुपतिप्रसादले आफ्नो पढाइ पूरा गरेर शिक्षकको तालिम नर्मल स्कूलबाट लिएर घर फर्किएपछि गाउँमै विद्यालय खोलेर पढाउन सुरु गर्नुभएको थियो । त्यसबाट उहाँलाई काठमाडौं गएर पढ्न पाउने वातावरण बन्दै गएको थियो । त्यसै बेला वीरेन्द्रकेशरी पोखरेल आफ्नो इन्जिनियरिङ विषयको पढाइ पूरा गरेर कलकत्ताबाट घर फर्किएका थिए । उहाँको मूर्ति निर्माण गर्ने र चित्र लेख्ने कला (कलाकार व्यक्तित्वको चर्चापछि गरिनेछ) बाट प्रभावित भई उनले उहाँलाई काठमाडौँ गई पढ्न प्रेरित गरेछन् । यसका लागि पिताजी र दाजुबाट पनि अनुमति मिलेछ । यसरी पहिलो पटक १०१२ साल फागुनमा उहाँ पढ्नका लागि काठमाडौं जानुभयो । रानैपोखरी संस्कृत प्रधान पाठशालामा प्रथमाको कक्षामा प्रविष्ट भएर उहाँले पढ्न सुरु गर्नुभएको जीवनीबाट ज्ञात हुन्छ । तर दुर्भाग्यवश केही महिनापछि नर्कटको ज्वरोले भेटेछ र उहाँ निकै बिरामी हुनुभएछ । त्यसै बेला दाजु पशुपतिप्रसाद शिक्षकको तलब लिन काठमाडौं आउनुभएछ । बिरामी भएको देखेर दाजुले उहाँलाई घर लिएर जानुभएछ । घर पुगेपछि उहाँ पूर्ण स्वस्थ हुनुभएछ र घरको नियमित काममा सक्रिय हुनुभएछ । यसरी दिङ्ला र काठमाडौं दुवै ठाउँ उहाँको स्वास्थ्यका लागि अनुकूल भएनछन् । यसै क्रममा २०१३ साल माघमा गोरखापरिषद्को पूर्वाञ्चल

सम्मेलन भोजपुरमा आयोजना गरिएको रहेछ । त्यसमा भाग लिन पिताजी धर्मदत्त पनि त्यहाँ जानुभएछ । पिताजीका साथ लागेर उहाँ पनि त्यहाँ जानुभएछ । त्यहाँ गोरखापरिषद्का नेता मृगेन्द्रशमशेर राणा पनि गएका रहेछन् । उनले पढ्नका लागि काठमाडौं आएमा शरदकुमार भट्टराईलाई आर्थिक सहयोग गर्ने आश्वासन दिएछन् । तर भरोसा थिएन । पिताजीबाट नै काठमाडौं आएर पढ्ने अनुमति र खर्च समेत पाएर २०१३ साल चैत्रमा चक्रप्रसाद पोखरेलका साथ दोस्रो पटक उहाँ फेरि काठमाडौं आउनुभएछ । काठमाडौं आएपछि मृगेन्द्रशमशेरले आर्थिक सहयोग त परै जाओस्, सामान्य भेट पनि दिएनछन् ।

विद्यार्थी शरदकुमार भट्टराईको सानै उमेरदेखि मूर्तिकला र चित्रकलामा रुचि र दक्षता थियो । उहाँले भगवान् श्रीकृष्णको अति सुन्दर शिलामूर्ति र धर्मस्तम्भ बनाउनुभएको थियो । उहाँले घरमै बस्दा राम्राराम्रा चित्र पनि बनाउनुभयो । सोही अनुरूप कलाको अध्ययन गर्न उहाँ काठमाडौँ आउनुभएको रहेछ । तर काठमाडौँ आएपछि उहाँ कलातर्फ नलागी अङ्ग्रेजी र संस्कृतको अध्ययनमा लाग्नुभएछ । उहाँ रातमा नक्सालस्थित रात्रि पाठशालामा अङ्ग्रेजी र दिनमा रानीपोखरीस्थित संस्कृत प्रधान पाठशालामा संस्कृत पढ्न थाल्नुभएछ । २०१४ सालमा साहित्य विषयमा सम्पूर्णमध्यमा परीक्षा द्वितीय श्रेणीमा उत्तीर्ण गरेपछि उहाँ २०१५ सालमा तीनधारा संस्कृतछात्रावासमा भर्ना हुनुभएछ । तत्कालीन राजकीय संस्कृत महाविद्यालयका प्राचार्य पद्मप्रसाद भट्टराईको उहाँलाई ठुलो सहयोग र आशीर्वाद प्राप्त भएछ । साहित्य विषय लिएर वाराणसेय संस्कृत विश्व विद्यालयको काठमाडौंकै परीक्षा केन्द्रबाट उत्तरमध्यमामा उत्तीर्ण भएपछि उहाँकै निर्देशन र आज्ञा अनुसार गोपालनिधि तिवारीको शालीन र गम्भीर अध्यापनबाट उहाँले अद्वैत वेदान्त विषयमा आचार्य तहसम्मको अध्ययन पूरा गर्नुभएछ । अर्कोतिर तत्कालीन नेसनल कलेज (हाल शङ्करदेव क्याम्पस) का कर्मठ र विशिष्ट विद्वान् शङ्करदेव पन्तको प्राध्यापनमा रहेर अङ्ग्रेजीतर्फ

बी.ए. उत्तीर्ण गर्नुभएछ। अध्ययनशील उहाँले पछि बी.एल्. र नेपाली साहित्यमा एम्.ए. पनि उत्तीर्ण गर्नुभएछ। सरकारी सेवामा प्रवेश गरेपछि पनि उहाँको अध्ययनको क्रम अनवरत रूपमा चलिरहेको देखिन्छ। यसै क्रममा उहाँले संयुक्त अधिराज्य बेलायतको भिक्टोरिया म्यानचेष्टर युनिभर्सिटीबाट सार्वजनिक प्रशासनमा स्नातकोत्तर र जापानबाट अपराध नियन्त्रण विषयमा डिप्लोमा तहको उपाधि प्राप्त गर्नुभएछ। यसरी उहाँ पूर्वीय र पाश्चात्य एवं दार्शनिक र आधुनिक विषयको उच्च शैक्षिक ज्ञान र उपाधि प्राप्त गर्ने बौद्धिक प्रशासनिक व्यक्तित्व बन्नुभएको तथ्य उहाँबाटै लिखित जीवनीबाट ज्ञात हुन्छ।

अध्ययनप्रेमी शरदकुमार भट्टराईको शैक्षिक योग्यता र उपलब्धिले नै उहाँको भावी जीवनको सङ्केत गरेको पाइन्छ। कतिपय मानिस एक पटकमा एउटा मात्र विषय पढेर पनि त्यसलाई पार लाउन सकिरहेका हुँदैनन्। यस यथार्थका विपरीत उहाँले एकै पटक एकातिर संस्कृतका दुरूह शास्त्रीय विषयहरूको अध्ययन गरेर आध्यात्मिक र दार्शनिक ज्ञानसहित उपाधि प्राप्त गर्नुभएछ भने अर्कातिर अङ्ग्रेजी धारको आधुनिक ज्ञानसहित उच्च तहको उपाधि पनि हासिल गर्नुभएछ। यसबाट उहाँमा पौरस्त्य दर्शनशास्त्रीय आध्यात्मिक चिन्तन र पाश्चात्य आधुनिक दृष्टिको एकै पटक सहविकास भएछ, जसबाट उहाँलाई जीवनका सबै प्रकारका कार्यक्षेत्रमा खरो उत्रिन सहायता प्राप्त भएको स्पष्टै देखिन्छ। साढे सात दशक भन्दा लामो उमेर व्यतीत भइसक्ता पनि जीवन एषणारहित र अध्यात्ममय एवं कार्यशैली व्यावहारिक र सामयिक हुनुको पछाडि उहाँको स्वच्छ आचारविचार, आहार, विहार, सात्विक चिन्तन र वेदान्तको अध्ययनले नै भूमिका खेलेको पाइन्छ। जीवनमा सिद्धि र सफलता प्राप्त गर्न उहाँको दृढ निश्चय, धीर स्वभाव र आत्मचिन्तनपरक व्यवसायात्मिका बुद्धि वा प्रज्ञा नै मुख्य तत्त्व बन्न पुगेका भन्ने लाग्दछ।

श्रीशरदकुमार भट्टराईको विद्यार्थी जीवनमा घटित विभिन्न घटनाहरूमध्ये नामसँग गाँसिएको एउटा रोचक प्रसङ्ग छ। पिताजी र

दाजुको अनुमति तथा अग्रज शुभेच्छुकहरूको प्रेरणा र प्रोत्साहनबाट उहाँ पढ्ने उद्देश्यले पहिलो पटक २०१२ साल फागुनमा काठमाडौँ आउनुभयो । संस्कृत शिक्षाको अध्ययन गर्न रानीपोखरीस्थित संस्कृत विद्यालयमा चिनाको सूर्यप्रसाद भट्टराई नामबाट भर्ना भई उहाँ प्रथमा तहमा पढ्न थाल्नुभएछ। विद्वान् गुरुहरूको सान्निध्यमा रहेर पढ्दा पढ्दै नर्कटको औलो लागेर उहाँलाई ज्वरो आएछ। परिणामस्वरूप प्रथमाको पढाइ अघि बढ्न सकेनछ। रात्रिपाठशालामा गएर अङ्ग्रेजी पढी दोहोरो शिक्षा प्राप्त गर्ने इच्छा पनि पूरा नहुने अवस्था आएछ । २०१३ साल असारमा दाजु श्रीपशुपतिप्रसाद भट्टराई साथीहरूसहित शिक्षकको तलब निकासा गराउन घरबाट काठमाडौँ आउनुभएछ। लामो समयसम्म बिरामी भएकाले पढ्ने इच्छा दबाएर उहाँ दाजुसँगै घर फर्किनुभएछ र केही समयपछि स्वस्थ पनि हुनुभएछ। उहाँले पिताजीलाई सकेको सहयोग गर्ने, मूर्तिकला र चित्रकलाको सिर्जना गर्ने, धार्मिक क्रियाकलापमा सहभागी हुने र अध्ययन पनि जारी राख्ने काम गरिरहनुभएछ । उहाँ त्यस बेला पनि हिम्मत नहार्ने, राम्रो काम बीचमा नछोड्ने र अध्ययन गरिछाड्ने स्वभावको हुनुहुँदोरहेछ । सोही अनुरूप अध्ययनका लागि २०१३ साल चैत्रमा उहाँ फेरि काठमाडौँ आउनुभएछ । विभिन्न समस्यासँग सङ्घर्ष गर्दै उहाँले पुनः रानीपोखरी संस्कृत प्रधान पाठशालामा सम्पर्क राख्नुभएछ। त्यहाँ आफुसँगै प्रथमामा पढेका साथीहरू सो परीक्षा उत्तीर्ण गरी पूर्वमध्यमाको प्रथम वर्षमा पढिरहेका रहेछन् । सँगै पढेका साथीहरू माथिल्लो कक्षामा पुगेका तर आफुले बिरामी भएर प्रथमाको परीक्षासमेत दिन नसकेकाले श्रीशरदकुमार भट्टराईले कुन तहमा पढ्ने भनेर केही निर्णय गर्न सक्नुभएनछ । उमेर बढ्दै थियो भने क्षमता पनि माथिल्लो तहमा पढ्न सक्ने थियो । प्रतिष्ठाका दृष्टिबाट पनि साथीहरूभन्दा तल्लो तहमा भर्ना भएर उहाँलाई पढ्न मन लागेनछ। प्रथमामा नै नाम लेखाउने, सम्पूर्ण पूर्वमध्यमामा साथीहरूभन्दा एक कक्षा माथि नाम लेखाउने वा संस्कृत छोडेर अङ्ग्रेजी मात्र पढ्ने विचार गर्दा अन्त्यमा

संस्कृततर्फ साहित्य विषय लिएर सम्पूर्ण पूर्वमध्यमामा नाम लेखाएर पढ्न थाल्ने र अङ्ग्रेजीतर्फ पनि नक्सालको रात्रिपाठशालामा भर्ना हुने निर्णय गर्नुभएछ । साहित्य विषय लिएर सम्पूर्ण पूर्वमध्यमाको कक्षामा 'शरदकुमार भट्टराई' नाम लेखाएर उहाँ पढ्न थाल्नुभएछ । प्रथमाको परीक्षा नै नदिई आफुहरूभन्दा माथिल्लो कक्षामा भर्ना हुनुभएका उहाँका विषयमा साथीहरूले चियोचर्चो गरेछन् र बिरामी भएर घर गएको 'सूर्यप्रसाद' प्रथमाको परीक्षासमेत नदिई हामीभन्दा माथिल्लो कक्षामा भर्ना भएकाले उसले त्यस कक्षामा पढ्न पाउनु हुँदैन र यसबारे छानबिन पनि हुनुपर्दछ भनेर तत्कालीन प्रधानाध्यापक श्रीपूर्णभद्र सुवेदीसमक्ष उजुरी गरेछन् । प्रधानाध्यापक सुवेदीले छानबिन गर्दा प्रथमामा 'सूर्यप्रसाद' भएको तर सम्पूर्ण पूर्वमध्यमामा 'शरदकुमार' भएकाले उजुरी निराधार ठहरिएको भन्ने प्रमाणित भएछ । त्यसपछि उहाँले प्रथमामा झर्नु परेनछ । तिनै साथीले पछि योग्यता नपुगेको हुँदा परीक्षा गरिपाऔँ भनेर उहाँका विरुद्धमा फेरि उजुरी गरेछन् । सो अनुसार उहँको परीक्षा लिन गुरुहरूको टोली नै गठन भएछ । व्याकरण विषयका गुरु श्रीहेमनाथ घिमिरेको संयोजकत्वमा गठित टोलीले परीक्षा लिएछ र त्यसमा उत्तीर्ण भएपछि मात्र उहाँले सम्पूर्ण पूर्वमध्यमामा पढ्न पाउने भन्ने निर्णय प्रधानाध्यापकले गरेछन् ।

उपर्युक्त अनुसार न्वारानमा जुरेको नाम सूर्यप्रसादको परिस्थितिले शरदकुमार हुन गएछ । हाल अद्वैत वेदान्त विषयका दर्जनौं दार्शनिक कृतिहरूमा चाहिँ उहाँले 'शरत्कुमार भट्टराई' लेख्ने गर्नुभएको छ । यसबाहेक साहित्यिक कृति र लेखहरू भने शरदकुमार भट्टराई, शकु भट्टराई, सुयोग वासिष्ठ, त्यागी बाबा, अविज्ञात सखा, अनाम यात्री, विरक्त सन्मार्गी आदि नामहरूबाट पनि प्रकाशित भएका देखिन्छन् ।

श्रीशरदकुमार भट्टराईका पिता धर्मदत्त भट्टराई कर्मयोगी, आचारनिष्ठ, ब्रह्मज्ञानी साधु पुरुष हुनुहुन्थ्यो । उहाँ खेतीपाती, कर्मकाण्ड, ज्योतिष, पुराणवाचन, वैदाङ्गी आदि धेरै थरी विषयमा प्रवीण बहु आयामिक

व्यक्तित्व  सम्पन्न कर्मठ व्यक्ति भएको ज्ञात हुन्छ। उहाँ सनातन वैदिक धर्मावलम्बी, हिन्दु संस्कार र संस्कृतिका श्रद्धावान् साधक, पालक र अनुयायी हुनुहुँन्थ्यो। भगवद्‌भक्तिमा तल्लीन माता रन्धता घरव्यवहारमा निपुण आदर्श साध्वी गृहिणी हुनुहुन्थ्यो। यस्ता आदर्श दम्पतीका सुपुत्र उहाँको दश वर्षको उमेर भएपछि विवाहको प्रसङ्ग उठ्न थालेछ। त्यस बेला गाउँघरको चलनअनुसार छोराको दश वर्षभित्र र छोरीको आठ वर्षभित्र विवाह नगरिदिए हुनेखाने परिवारको इज्जत गएको मानिने रहेछ। सोही अनुसार उहाँका पिताजीले छोराको विवाहका लागि जिल्लाकै तिर्पा, खार्पा, कुभिन्डे र आफ्नै गाउँ रावा लामिडाँडामा समेत केटीको कुरा चलाउनुभएछ। २००६ साल फागुनमा उहाँको विवाह रावा कुभिन्डेका हरिकृष्ण पोखरेल र श्रीमती जानुकादेवी पोखरेलकी साहिँली छोरी सुश्री लालकुमारी पोखरेलसँग सम्पन्न भएछ। वि.सं. १९९६ साल पुस ३० गते जन्मनुभएकी लालकुमारी विवाहको समयमा १० वर्षकी हुनुहुँदोरहेछ। सरकारी सेवाको सन्दर्भमा श्रीमान्‌सँग काठमाडौँ आएपछि न्वारानको नाम लालकुमारी भए पनि पतिद्वारा इन्दिरा भनेर नामकरण भएछ। हाल उहाँ इन्दिरा भट्टराईकै नामबाट परिचित र प्रतिष्ठित हुनुहुन्छ र आदर्श गृहिणीको कर्तव्य पूरा गरिरहनुभएको छ।

श्रीशरदकुमार भट्टराईको छात्रजीवन र गृहस्थ जीवनमा व्यतिक्रम आएको देखिन्छ। अधिकांश मानिस बाल्यकाल र छात्रजीवन पार गरेर गृहस्थ जीवनमा प्रवेश गर्दछन् भने त्यसको विपरीत उहाँ विवाह गरेर अबोध रूपमै भए पनि गृहस्थ जीवनमा प्रवेश गर्नुभएको र त्यसपछि मात्र औपचारिक शिक्षा प्राप्त गर्ने गरी छात्रजीवनमा प्रविष्ट हुनुभएको देखिन्छ। विवाह गर्नु, पढ्न हिँड्नु, पढ्दापढ्दै जागिर खानु, जागिरे जीवनमा पनि पढिरहनुका साथसाथै घरगृहस्थीमा पनि ध्यान दिनु आदि उहाँको जीवनचक्रका क्रममा आएका परिदृश्यहरू हुन्। यस सन्दर्भमा अनुस्मृति अर्थात् जीवनयात्रामा उहाँबाट गरिएको टिप्पणी निकै मार्मिक र स्वाभाविक देखिन्छ। जस्तै –

अरू विवाह गरेर बाँधिन्छन् तर म विवाह गरेर फुक्का भएको थिएँ। अरू बाहिर गई अध्ययन समाप्त गरेर घर फर्किएपछि विवाह गर्दछन् भने म चाहिँ विवाह गरेपछि अध्ययन गर्न हिँडेको थिएँ। अरू विवाह गरेपछि अध्ययनमा बाधा पर्छ भन्छन् तर म भने नवविवाहिता श्रीमतीलाई मैले गर्नुपर्ने घरको दायित्व सुम्पिएर बन्धनरहित भएर अध्ययन गर्न काठमाडौं आएको थिएँ।

हाल उहाँ र इन्दिरा (शरदिन्दु) का पाँच सन्तान छन्। यिनीहरूमध्ये जेठी छोरी सरिता दाहाल (२०१६ मङ्सिर) डीभी परी आफ्ना श्रीमान् र परिवारसहित अमेरिकामा बस्ने गरेकी छिन्। कान्छी छोरी सविता अर्याल (२०२५ पुस) काठमाडौँकै घरमा आफ्ना श्रीमान् र परिवारसहित बस्तछिन्। ठुला छोरा श्रीसञ्जीवकुमार भट्टराई (२०२७ वैशाख २८) एरोनोटिकल इन्जिनियर भएर हाल श्रीमतीसहित क्यानडामा बस्तछन् भने बीचको छोरो श्रीसतीशकुमार भट्टराई (२०२७ वैशाख २८) श्रीमती र छोरीसहित काठमाडौँको आफ्नै घरमा पितामाताका साथ बसिरहेका छन्। कान्छा छोरा श्रीसगुनकुमार भट्टराई (२०३१ श्रावण १३) श्रीमती र छोराहरूसहित हाल अष्ट्रेलियामा बसोबास गर्दछन्। उहाँका दाजु श्रीपशुपतिप्रसाद भट्टराई हाल काठमाडौँको गुह्येश्वरीस्थित गौरीनगरमा कान्छी श्रीमतीका सन्तानसहित आफ्नै घरमा बस्नुभएको देखिन्छ।

२०१३ साल चैत्रमा दोस्रो पटक विद्यार्थीका रूपमा काठमाडौँ आएपछि युवा श्रीशरदकुमार भट्टराईको वास्तविक औपचारिक शैक्षिक जीवन सुरु भएको देखिन्छ। २०१३ साल चैत्रदेखि २०२१ साल माघसम्मको करिब आठ वर्षको अवधिभित्र उहाँको मूल लक्ष्य पढाइमा केन्द्रित भएको पाइन्छ भने विद्यार्थी राजनीतिको नेतृत्वका साथै तीनधारा संस्कृत छात्रावासबाट प्रकाशित 'अरुणोदय' साहित्यिक त्रैमासिक पत्रिकाको संस्थापन, सञ्चालन, सम्पादन र प्रकाशनमा पनि उहाँ संलग्न हुनुभएको पाइन्छ। त्यस बेला भारत सरकारले नेपाली विद्यार्थीहरूलाई आफ्नो देशको शैक्षिक भ्रमणका लागि निमन्त्रणा गर्दोरहेछ। त्यहाँ

जानका लागि विद्यार्थीहरूबीच तीव्र प्रतिस्पर्धा हुनेरहेछ । २०१६ सालमा सम्पन्न सो भ्रमणका लागि उहाँ सौभाग्यवश सर्वसम्मतरूपमा छानिनुभएछ र मङ्सिर १४ गते नेपालका अन्य कलेजका प्रतिनिधि विद्यार्थी साथीहरूसहित एक महिने भारतभ्रमणमा प्रस्थान गर्नुभएछ । २०१६ साल मङ्सिरमै उहाँकी जेठी छोरी सरिताको जन्म भयो । एकातिर राजनीतिको रन्को र अर्कातिर पढाइको चापलाई समन्वय गर्दै उहाँ अगाडि बढिरहनुभएछ । उहाँ तीनधारा संस्कृत छात्रावासमै बसेको बेला पोखरा बाटुले चौरका एक जना ज्योतिषी आएर उहाँको चिना हेरेछन् । ग्रहहरू उच्च स्थानमा रहेकाले उहाँ भविष्यमा प्रधानमन्त्री हुने सम्भावना छ भनेर उनले भविष्यवाणी गरिदिएछन् । ज्योतिषीको कुरामा उहाँ कम विश्वस्त भए पनि अत्यधिक खुसी हुनुभएछ । त्यसबाट पनि उहाँलाई राजनीतिमा लाग्न प्रेरणा प्राप्त भएछ । पहिलेदेखि नै नेपाली काङ्ग्रेसका नेता विश्वेश्वरप्रसाद कोइरालासँग राजनीतिक शिक्षा पाएका उहाँलाई अर्का नेता सूर्यप्रसाद उपाध्यायले पुत्रवत् स्नेह गर्दा रहेछन् । यसप्रकार श्रीशरदकुमार भट्टराईलाई ज्योतिषीको कुराले पनि केही अंशमा राजनीतिमा सक्रिय हुन प्रेरणा र प्रोत्साहन दिएछ ।

यसै क्रममा २०१७ साल पुस १ गते राजनीतिक घटना घट्यो । प्रधानमन्त्री विश्वेश्वरप्रसाद कोइराला जेल परे भने दलहरू पनि प्रतिबन्धित भए । राजाको अप्रजातान्त्रिक उक्त कदमको विरोधमा विद्यार्थीको नेतृत्व गर्दै राजा महेन्द्रलाई २०१७ साल फागुन ७ गते प्रजातन्त्र दिवसका दिन टुँडिखेलमा कालो झन्डा देखाएको र बेलायती रानी इलिजावेथलाई आसन्न काठमाडौं आउनबाट रोक्न गरिएको पर्चावाजी, नारा, जुलुसबाट सन्त्रस्त भएर तत्कालीन सरकारले उहाँलाई अरू विद्यार्थी नेताहरूसँगै सुरक्षाकानुन अन्तर्गत काठमाडौंस्थित केन्द्रीय कारागारमा राजनीतिक बन्दी बनाएछ । कारागारबाट छुटेपछि दायाँबायाँ नलागी एक चित्त भएर उहाँ आफ्नो दोहोरो अध्ययनमा तल्लीन हुनुभएछ । २०१७ सालको घटनापछि आफुमा परेको प्रभाव र आएको अवरोधलाई उहाँले कवितात्मक शैलीमा यसरी प्रस्तुत गर्नुभएको छ :

नेताछात्र भएर छात्रहितमा सङ्घर्ष गर्दै गएँ,
भोगी जेल र नेलका दुःखहरू केही म बुझ्ने भएँ ।
बीपीका पदचिह्नका पछि पछि क्यै दूर हिँड्दै गएँ
आयो हुण्डुर सत्र साल पुसको त्यै हुण्डरीले गएँ ।

– अन्तिमयात्रा वृद्धावस्था (विविध यात्रा)

नेपालको राजनीतिमा प्रतिबन्ध लागिसकेपछि विद्यार्थी शरदकुमार भट्टराईको राजनीति गर्ने उत्साह घटेर गएछ । युवाकालीन महत्त्वाकाङ्क्षा पनि क्रमशः शिथिल हुन थालेछ। भारत भ्रमणबाट विकसित चिन्तनको स्तर, छोरीको जन्म भएपछि बढ्दै गएको दायित्वबोधको भावना, राजनीतिक गतिविधिमाथिको प्रतिबन्ध र उमेर बढ्दै गएपछि विकसित हुने परिपक्व दृष्टिकोणले उहाँलाई पढाइमा केन्द्रित गराएछ ।

छात्र श्रीशरदकुमार भट्टराई २०२१ सालमा एकातर्फ त्रिभुवन विश्वविद्यालयमा संस्कृत विषयमा एम्.ए.को कक्षामा पढ्दै हुनुहुन्थ्यो भने अर्कोतर्फ तत्कालीन नेपाल नेसनल कलेजमा बी.ए. अन्तिम वर्षको तयारी पनि गर्दै हुनुहुन्थ्यो । तत्कालीन प्राचार्य विद्वद्वर श्रीपद्मप्रसाद भट्टराईको उहाँलाई आशीर्वाद र मार्गनिर्देशन प्राप्त भएछ । त्यसपछि प्राचार्यज्यूको निर्देशन पाएर गुरुवर प्रा. श्रीगोपालनिधि तिवारीले उहाँलाई अद्वैत वेदान्त विषय आचार्यसम्म पढाएछन् । अर्कातर्फ त्रिभुवन विश्वविद्यालयका प्राध्यापक गुरु श्रीगोकुलचन्द्र शास्त्री संस्कृत साहित्यको इतिहास पढाउथे । तत्कालीन नेसनल कलेजका प्रिन्सिपल श्रीशङ्करदेव पन्तले अङ्ग्रेजी विषयमा दक्ष बनाई आफ्नो उत्तराधिकारी बनाउन चाहेका थिए । यी ऋषिकल्प गुरुहरूले उहाँको विद्या, प्रतिभा र क्षमताको आकलन गरेर नै आ-आफ्नो योजना बनाएको बुझिन्छ । तर उहाँको इच्छा चाहिँ शिक्षक वा गुरु हुने नभई राजनीतितर्फ नै ढल्किएको भए तापनि राजनीतिका लागि वातावरण अत्यन्त प्रतिकूल भएको देखेर उहाँ आफ्नै अध्ययनमा तल्लीन हुनुभयो ।



# साहित्यिक व्यक्तित्व

**पृष्ठभूमि**

जीवन र जगत्प्रतिको दृष्टिकोणलाई हार्दिक भाव र ललित शैलीमा प्रस्तुत गर्नु साहित्य हो । साहित्यकार त्रिकालदर्शी हुन्छ र कल्पनाको जलप लगाए पनि शाश्वत सत्य प्रकाशन गर्न समर्थ हुन्छ । भाषाको सर्वोच्च शक्ति साहित्यका माध्यमबाट व्यक्त हुन्छ । यही कारणले साहित्य संसारमा प्रिय विधाका रूपमा स्थापित रहिआएको छ ।

श्रीशरदकुमार भट्टराईको घरपरिवार आस्तिक र धार्मिक थियो । रावा लामिडाँडामा बारम्बार भइरहने भजन, कीर्तन र देवीदेवताको स्तोत्र पाठबाट उहाँको बाल्यकालीन हृदयमा गहिरो छाप पर्दै गयो । आस्था र अनुष्ठानप्रधान परिवेशमा हुर्कंदै गर्दा उहाँलाई ग्रामीण लोक भाकाहरूले पनि प्रभावित पारे । गाउँको सुन्दर र शान्त परिवेश तथा उत्तरतिरका सगरमाथासहितका उन्नत शुभ्र हिमशृङ्खला एवं दूधकोसी र रावाखोलाको गतिशील प्रवाह पनि उहाँको साहित्यिक व्यक्तित्व निर्माणका लागि आधारशिला बनेको पाइन्छ । घरमा पितामाता र गुरुमाताले गर्ने गरेको धार्मिक एवम् आध्यात्मिक विषयप्रधान श्लोकहरूको वाचनले उहाँलाई साहित्यतर्फ अभिमुख गराउन भूमिका खेलेको पाइन्छ भने नवप्रतिभालाई उद्दीप्त गराउन पनि सहयोग गरेको देखिन्छ ।

उच्च शिक्षाको अध्ययनका लागि काठमाडौँ आएपछि उहाँको शिक्षा संस्कृत र अङ्ग्रेजी गरी दुई धारबाट अगाडि बढ्छ । यस क्रममा उहाँको प्राज्ञिक र राजनीतिक व्यक्तिहरूसँग मात्र नभई साहित्यिक प्रतिभाहरूसँग पनि सङ्गत र सम्पर्क बढ्न थाल्छ । औपचारिक अध्ययनका क्रममा नेपाली, संस्कृत र अङ्ग्रेजी भाषाका साहित्यिक कृतिहरूको गहन अध्ययन र अनुशीलनको क्रम पनि उहाँमा बढ्दै जान्छ । तीनधारा छात्रावासका उदीयमान साहित्यिक प्रतिभा तथा अन्य स्थापित

साहित्यकारहरूसँगको शिक्षा एवं सान्निध्यले पनि उहाँको साहित्यिक व्यक्तित्व निर्माणमा योगदान गरेको पाइन्छ । गाउँमै छँदा बाल्यकालमै प्रस्तरमा श्रीकृष्णको कलात्मक मूर्ति बनाउन दक्ष भइसक्नु भएका उहाँलाई काव्यकलातर्फ अघि बढ्न कुनै कठिनाइ हुँदैन । यस बाहेक उहाँको आफ्नै मौलिक सोचाइ, दृष्टिकोण र विश्लेषण गर्ने प्रवृत्तिले पनि साहित्यिक व्यक्तित्वको निर्माणमा पूर्वाधारको काम गरेका छन् । यसरी घरपरिवारको परम्परा, गाउँको परिवेश, विविध भाषाका साहित्यहरूको अध्ययन, साहित्यकारहरूसँगको शिक्षा र सम्पर्क एवं आफ्नो मौलिक सिर्जनात्मक क्षमताका कारणबाट उहाँ आधुनिक नेपाली साहित्यका क्षेत्रमा उदीयमान र चर्चित व्यक्तित्वका रूपमा स्थापित हुनुभएको छ ।

**कविता तथा काव्य**

मानव प्रतिभाको सीमाङ्कन गर्नु अत्यन्त जटिल कार्य हो । साहित्यकारका लागि प्रतिभा अपरिहार्य तत्त्व मानिन्छ । काव्यहेतुको चर्चाका क्रममा प्रतिभालाई सर्वोपरि हेतु मान्नुको कारण यही हो । प्रतिभाको शक्ति र सीमा परिमेय छैन तापनि काव्यमीमांसाकार राजशेखरले प्रतिभाका मूलतः दुई भेद गरेका छन् – भावयित्री प्रतिभा र कारयित्री प्रतिभा । काव्य साहित्यको भावक वा समालोचकमा हुने प्रतिभा भावयित्री प्रतिभा हो । प्रतिभा नभएको व्यक्तिले काव्यको विभावन गर्दा वा समीक्षा गर्दा कर्ता र कृतिको मूल्य समाप्त हुन्छ र साहित्यकारप्रति घोर अन्याय हुन्छ । त्यसैले भावक वा समीक्षकमा पनि प्रतिभा आवश्यक मानिएको हो । साहित्यकार वा लेखकमा हुने प्रतिभा कारयित्री प्रतिभा हो । कारयित्री प्रतिभा नभई काव्यको सिर्जना सम्भव छैन । प्रतिभा नभई काव्य लेखियो भने त्यो उपहासपूर्ण हुन्छ भन्ने वामनको विचार छ ।

श्रीशरदकुमार भट्टराई भावयित्री र कारयित्री दुवैथरी प्रतिभा भएका साहित्यकार हुनुहुन्छ । उहाँका कृतिहरूले नै यसको प्रमाण दिएका छन् । साहित्यिक व्यक्तित्वको उत्थानकालमा सिर्जनात्मक (कारयित्री) प्रतिभा

प्रखर भए पनि उहाँमा क्रमशः समीक्षापरक (भावयित्री) प्रतिभाको समेत उद्दीपन भएको पाइन्छ।

कुनै पनि व्यक्तिको उच्च, प्रतिष्ठित र सम्मानित साहित्यिक व्यक्तित्वको निर्माणका पछाडि विभिन्न कारण हुन्छन् । घरायसी वातावरण, भौगोलिक अवस्थिति, औपचारिक एवम् अनौपचारिक रूपमा विविध विधाको अध्ययन र अनुशीलन, प्रतिभाप्रस्फुटनको सबैभन्दा उर्वर कालमा जुट्ने साहचर्य, देशाटन, सहज प्रतिभा एवम् सतत अभ्यास जस्ता कारणहरूले व्यक्ति साहित्यकारका रूपमा परिचित, स्थापित र लोकप्रिय बन्दछ । शरदकुमार भट्टराईको साहित्यसर्जक व्यक्तित्वको उदय, उन्नयन र उत्कर्षमा पनि मूलतः यिनै कारणहरूले भूमिका खेलेका छन् । परिणमस्वरूप २०१५ सालमा त्रिचन्द्र कलेजको सरस्वती सदनमा संस्कृतछात्र सङ्घ नेपालले आयोजना गरेको बृहत् साहित्य सम्मेलनमा उहाँ 'तोड पर्खालका पर्दा' शीर्षकको छन्दोबद्ध कविता लिएर पहिलो पटक मञ्चमा सार्वजनिक रूपमा देखिनुहुन्छ । त्यसपछि त्यो क्रम निरन्तर चलिरहन्छ र अनेकौँ कृतिहरू प्रकाशित हुँदै जान्छन् । उहाँको साहित्यसर्जक व्यक्तित्वलाई साहित्यका विधा, विषयवस्तु, प्रस्तुतीकरण आदि आधारमा वर्गीकरण गरेर अध्ययन गर्न सकिन्छ।



# सिर्जनाका फूलहरू २०५१ को भूमिकाबाट

[आदिकवि भानुभक्तको रामायणको ‘तर्छु क्षार समुद्र आज सहजै’बाट अक्षरारम्भ गरेर कविशिरोमणि लेखनाथ पौड्यालको ‘तँलाई मालुम् छ कि यो कुरा मन’ भगवतीस्तोत्रको ‘गुप्ती नाम धरी सकी’ र कविवर माधव घिमिरेको गौरीको ‘आमा बालककी नमार भगवान् संसार भर्ने भए’ समेतबाट उद्वेलित भई कविताको क्षेत्रमा आफ्ना भावनाहरूलाई टुटेफुटेका शब्दहरूद्वारा मूर्तरूप दिने प्रयास मैले छात्र अवस्थाको तीन दशक भन्दा पनि पहिलेदेखि नै गर्दै आएको हुँ। मलाई त्यस वखतको एउटा अविस्मरणीय घटनाको संझना आउँछ जुन कुरा कविशिरोमणि लेखनाथ पौड्यालसँग सम्बन्धित छ। २०२० सालको कुरा हो जुन बखतमा म अरुणोदय साहित्यिक द्वैमासिक पत्रिकाको संस्थापक सम्पादक थिएँ र त्यही सम्पादकको नाताले कविशिरोमणि लेखनाथ पौड्यालको निवासस्थान लैनचौरमा उहाँको क्षेमकुशल बुझ्न र केही नयाँ रचना भए पत्रिकामा प्रकाशन गर्ने मनसायले म त्यहाँ जाने गर्थें। उहाँ वृद्धावस्थाको कारणले असक्त हुनुहुँदो रहेछ। त्यसै कारणले आफ्नै सुत्ने कोठाको पलङमा आराम गरिरहनुहुदोरहेछ। अभिवादन र क्षेमकुशल पछि मैले उहाँको गौँथलीको चिरिबिरीमा व्यक्त ‘म बस्ने कोठाको दलिनबिचमा गौँथली बस्यो’ भनेजस्तै अवस्थामा साँच्चै नै उहाँको कोठाकै उहाँ सुत्ने पलङमाथिकै दलिनमा गौंथलीले गुँड बनाएर बसेको देखेपछि उहाँसँग मैले त्यही दलिनमा गुँड बनाएर बसेको गौंथलीको बारेमा आफ्नो जिज्ञासा व्यक्त गरेँ, कतै गौंथलीको चिरिबिरीको पात्र यही गौंथली नै त होइन ? भनेर। तर उहाँले गौंथली काल्पनिक थियो तर अहिले साँच्चै मूर्तरूपमा आएर बसेको छ तर यो अर्कै हो भन्नु भएको थियो। त्यसपछि म कविशिरोमणिज्यूलाई भेट्न बारम्बार जाने गर्थें र बातचितकै क्रममा

उहाँका प्रायः सबै कृति र रचनाका बारेमा चर्चापरिचर्चा र समीक्षा पनि हुने गर्थ्यो । उहाँका रचनामा उहाँलाई सबैभन्दा बढी मनपर्ने 'बुद्धिविनोद' नै हो भनेर भन्नु भएको थियो । यसै क्रममा उहाँले बुद्धिविनोदको रचना के कारणबाट हुन गयो भन्ने सम्बन्धमा पुरानो संस्मरण सुनाउनु भएको थियो । बुद्धिविनोदका रचनाकालको समयमा कविशिरोमणिज्यूको निवासस्थान नजिकै पहाडतिरबाट मानिसहरू काठमाडौं आउँदा बस्ने सार्वजनिक पाटी रहेछ र त्यसमा बस्ने सर्वसाधारण ढाक्रे समेतले भानुभक्तको रामायण कण्ठ पारेर भन्ने गर्दारहेछन् । यसबाट कविशिरोमणिज्यूले भानुभक्तीय रामायण जनसाधारणमा अत्यन्त लोकप्रिय भएको थाहा पाउनु भएको रहेछ । यसबाट उहाँ अत्यन्त उत्प्रेरित भएर कविता गायनका साथसाथै केही सोच्ने र बुझ्नेतर्फ पनि उनीहरूलाई प्रवृत्त गराउने उद्देश्यले प्रत्येक श्लोकमा गहन दार्शनिक कुराहरूसमेत समावेश गरी प्रत्येक श्लोकका अन्त्यमा 'तँलाई मालुम् छ कि यो कुरा मन' भनेर प्रश्न समेत राख्नुभएको रहेछ । भानुभक्तको रामायण जस्तै जनजिब्रोमा पुऱ्याउने र केही सोच्नेतर्फ पनि जनसाधारणलाई उन्मुख गराउने उद्देश्यले बुद्धिविनोदको रचना भएको कुरा उहाँले बताउनु भएको थियो । उद्देश्यअनुरूप भानुभक्तीय रामायणपछि आफ्नो 'बुद्धिविनोद' लोकप्रिय भएकोमा कविशिरोमणिज्यू सन्तुष्ट देखिनु हुन्थ्यो । उहाँले अरुणोदयका केही अङ्कहरूमा आफ्ना अप्रकाशित कविता 'सत्य सन्देशहरू' प्रकाशनार्थ दिनु भई अरुणोदयलाई आफ्नो शुभाशीर्वादसमेत दिनुभएको थियो ।

मेरो कवितायात्राको क्रममा नाटककार बालकृष्ण समज्यू र कवि भूपि शेरचनज्यू समेतसँग व्यक्तिगत आत्मीयता रहेको थियो र उहाँहरूबाट मैले प्रेरणा र उत्साह पाएको थिएँ । कविवर माधव घिमिरेज्यूबाट हालसम्म पनि मलाई निरन्तर अदम्य प्रेरणा र उत्साह दिने काम भइरहेको छ । यसको लागि म अत्यन्त ऋणी छु । यसका अतिरिक्त मेरो गाउँको उत्तरपट्टि सधैँ सेता दाँतहरू खोलेर हाँसिरहने सेतो उत्तुङ्ग हिमशिखर पनि मेरो काव्य र कविता लेख्ने प्रेरणाको अक्षय स्रोत बनेको छ ।

संस्कृत साहित्यका कविकुलगुरु कालिदासले पनि आफ्नो महाकाव्य कुमारसम्भवमा हिमालयको महत्तालाई –

अस्त्युत्तरस्यां दिशि देवतात्मा हिमालयो नाम नगाधिराजः ।
पूर्वापरौ तोयनिधी वगाह्य स्थितः पृथिव्या इव मानदण्डः ।।

भनेर व्यक्त गर्नुभएको छ । कवि कालिदासलाई मात्र होइन अपितु अनादिकालदेखि असङ्ख्य मनीषि, दार्शनिक, चिन्तक र कविहरूलाई सतत प्रेरणा प्रदान गर्दै आफ्नो कर्तव्यपथमा अग्रसर हुन घच्घच्याउने नगाधिराज हिमालयको फेदीको सानु गाउँमा मैले आँखा खोलेँ । आँखा खोलेकै दिनदेखि नै मेरो घरको उत्तरपट्टि अनवरत प्रेरणाको स्रोत बनेर सेता दन्त पङ्क्तिहरू खोलेर हाँसिरहेको उत्तुङ्ग हिमशिखरले मलाई आफ्नो कर्तव्यपथमा अग्रसर हुन प्रेरणा दिएको थियो । कविवर कालिदासले यस हिमालयलाई देवताको आत्मा र पृथिवीको मानदण्ड भनेर महिमा मण्डित गर्नुभएको छ । मेरा लागि भने यो हिमालय आफ्नै आत्मा र मलाई आफ्नो कर्तव्यपथमा सधैँ अघि बढ्न प्रेरणा दिने अजस्र स्रोत बन्न गएको छ । मैले यसै कुरालाई आत्मसात् गर्दै फर्केर हेर्दा कवितामा –

सेता अग्ला शिरभरि नै लाल सिन्दूर पोती ।
वर्षा गर्छन् रवि पनि जहाँ सिर्जनामूल ज्योति ।।
हाँसे जस्तो मुसुमुसु सधैँ खोलि नौलो बिहानी ।
मेरो प्यारो हिमशिखर त्यो प्रेरणाको निशानी ।।

भनेर हिमालय प्रतिको आस्था, आत्मीयता र अनन्य भक्ति व्यक्त गर्ने प्रयास गरेको छु । यसै गरी मैले प्रबोधन कवितामा हिमालय प्रतिको आफ्नो भावनालाई यसरी व्यक्त गर्ने जमर्को गरेको छु –

हिमालको मुन्तिर खोँचबाट
नियाली हेरी पर रम्य फाँट ।
लिई उठेको मनमा सदिच्छा
आकाश भेट्ने अति तीव्र इच्छा ।।

सेता अग्ला हिमशृङ्खला प्रतिको मेरो भावुकता बालखकालदेखि

नै अति तीव्र रूपमा अन्तर हृदयमा थियो तर त्यसले अभिव्यक्ति पाउने अवसर र मुखर हुने मौका पाएको थिएन । यताउताका विषयहरूमा मेरा भावनाहरू पोखिन खोज्थे । यसै बीच यसतर्फ अभिमुख हुने प्रेरणा कविवर माधव घिमिरेका कविताहरूबाट पनि पाएँ । प्रेरक कविताहरू मध्येका केही पङ्क्तिहरू यहाँ उद्धृत गर्ने धृष्टता गरेको छु –

अग्लो उत्तरमा खुली हिमचुली बग्छिन् नदी दक्षिण ।
बोल्छन् घाम सिंयाल नित्य हरिया छन् खेतपाखा वन ॥

मेरै धौलागिरि शिखरमा छैन मैले पुगेको ।
नेपालीको दिल छुन अझै छैन मैले सकेको ॥

यस्तै कविताहरू समेतबाट मैले प्रेरणा लिएको हुँ । कविता त अन्तरहृदयको कोमल अभिव्यक्ति हो । चिल्याएर, नापेर, जोखेर व्यक्त गरिएका अभिव्यक्तिहरू सायद कविता नभएर पद्यात्मक निबन्ध हुन सक्तछन् वा कलाका कोटिमा पर्न सक्तछन् तर भावनाको स्वस्फूर्त अभिव्यक्ति भने बन्न सक्तैनन् । यस्तै कविताको नाममा स्वच्छन्दतावादी बनी अभिव्यक्त गरिएका आदि र अन्त्यको कुनै शृङ्खला नभएका केवल आत्मसन्तुष्टि यद्वा अहंतुष्टिका लागि लेखिएका कविताहरू पनि कविताको श्रेणीमा नपरी प्रलाप मात्र ठहर्छन् कि जस्तो मलाई लाग्छ । यी दुवैथरी कविताका श्रेणीभित्र वा बाहिर कुन श्रेणीमा पर्दछन्, यी मैले कोरेका कविता कुनै श्रेणी वा स्तरमा नै पर्दैनन् यो छुट्याउने अभिारा म काव्यपारखी रसिकहरूका हातमा सुम्पनु उपयुक्त ठान्दछु । मैले मेरो फुर्सदका बखतमा बसिबियाँलाका रूपमा लेखिएका यी कविताहरू कुनै श्रेणी र परिभाषाभित्र पर्न नसकी श्रेणीविहीन र अपरिभाषित नै रहेमा पनि मलाई सन्तुष्टि नै हुनेछ । बुझ्नु र नबुझ्नुको दोसाँधमा यी कविता रहे भने म आफुलाई सफल ठान्ने छु, किनभने –

नबुझ्नुमा नै सब अर्थ हुन्छ,
बुझ्यो भने वा सब व्यर्थ हुन्छ ।]

# सिर्जनाका फूलहरू २०५१

यो पद्य र गद्य शैलीका एकाउन्न ओटा फुटकर कविताको सङ्ग्रह हो । सरकारी सेवाका क्रममा देशका विभिन्न भागका साथै विदेशमा समेत बसेको समयमा लेखिएका यी कविताहरूले राष्ट्रियता, देशप्रेम, जागरण, प्रकृतिप्रेम, जागिरे जीवनको यथार्थ एवं पूर्वज साहित्यकारहरूप्रति श्रद्धाभावलाई व्यक्त गरेका छन् । भावको तीव्रतालाई छन्दसिद्धि र गतिमय गद्यका माध्यमबाट प्रकाशन गर्न सक्नु यस सङ्ग्रहको विशेषता हो । कल्पना र यथार्थको अपूर्व संयोजन गराएर भावपूर्ण तर परिष्कृत अभिव्यक्ति दिनु यसको मूल उपलब्धि हो । यस सङ्ग्रहमा सङ्कलित कविताहरू यसप्रकार छन् ।

**१. उद्बोधन**

यो २०२६ सालमा तत्कालीन नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानले आयोजना गरेको प्रतियोगितात्मक राष्ट्रव्यापी कवि सम्मेलनमा प्रथम भएको र राजा महेन्द्रबाट स्वर्णपदकद्वारा पुरस्कृत भएको कविता हो । अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा सबै नेपालीलाई कर्तव्यमा तल्लीन र अधिकारमा सचेत रहन सशक्त सन्देश दिइएको छ । राष्ट्रनिर्माणका लागि प्रेरित गर्ने यस कविताले अधिकार कसैले दिएर पाइने नभई कर्ममा तल्लीन हुने व्यक्ति र वर्गले लिने तत्त्व हो भन्ने सचेत भावको अभिव्यक्ति दिएको छ । जस्तै –

अधिकार त हो प्राप्ति न दिइन्छ, लिइन्छ यो ।
जस्ले गर्दछ कर्तव्य त्यस्ले नै प्राप्त गर्छ यो ॥

आफैँले आफैँलाई हिम्मतका साथ कृष्ण बनेर कर्मयोग पढाउनुपर्ने र आफैँले पार्थ (अर्जुन) बनेर नेपालको निर्माण गर्नुपर्ने वी रसमय आह्वान यसमा भएको छ –

तिम्रो हिम्मत हो कृष्ण कर्मयोग पढाउन ।
उठ हे देशका पार्थ यो नेपाल बनाउन ॥

## २. श्रद्धाञ्जलि

२०२७ सालको त्रिभुवन जयन्तीका समयमा लेखिएको 'श्रद्धाञ्जलि' राजा त्रिभुवनप्रति श्रद्धा र सम्मान व्यक्त गर्ने कविता हो । मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा त्रिभुवनकै कार्य र योगदानले देशमा प्रजातन्त्र आएको यथार्थ देखाइएको छ । त्रिभुवन राजा भएर पनि क्रान्तिकारी भएको भाव प्रकाशन गर्दै कवि भट्टराईले भावी पुस्ताले पनि त्यस्ता राजाको योगदानको संस्मरण गर्ने विश्वास व्यक्त गर्नुभएको छ । राजा त्रिभुवनको समग्र व्यक्तित्वको सारांश खिच्न निम्नलिखित पद्य निकै सफल देखिन्छ –

आयौ, चम्क्यौ, हिलमिल गर्‍यौ, अल्पियौ क्यै सिकाई ।
देखायौ लौ नवपथ यहाँ आफुलाई मिटाई ॥
आफैँ राजा तर पनि भयौ अग्रणी क्रान्तिकारी ।
बाल्यौ यौटा झलमल हुने दीप स्वातन्त्र्यकारी ॥

## ३. कविशिरोमणि (१)

२०२७ सालको लेखनाथ जयन्तीका दिन पोखराको पार्दीमा लेखिएको मन्दाक्रान्ता छन्दमा आबद्ध यो कविता शीर्षकमै सङ्केत गरेझैँ कविशिरोमणि लेखनाथ पौड्यालको निधन भइसकेपछि उनको जन्मस्थल एवं पार्श्ववर्ती भूभागमा व्याप्त शून्यता एवं कवि भट्टराईमा उत्पन्न शोकको अभिव्यक्ति हो । स्थानीय प्राकृतिक परिवेशलाई कतै आलम्बन र कतै उद्दीपन बनाएर कविशिरोमणिप्रति आफुभित्र रहेको श्रद्धा र स्मृतिलाई उद्घाटित गर्दै करुण रसको अभिव्यञ्जना प्रस्तुत गर्नु यस कविताको विशेषता हो । यहाँ पनि कल्पना र यथार्थको सन्तुलित प्रकाशन गर्ने कवि भट्टराईको प्रतिभा प्रतिबिम्बित भएको छ । भावभित्र

विचार, विचारभित्र दर्शन र त्यसमा पनि जीव र ब्रह्मको ऐक्यलाई सयुक्ति सिद्ध गर्ने अद्वैत वेदान्तका दार्शनिक मान्यतालाई कोमल र कलात्मक रूपमा भावमय बनाई प्रस्तुत गर्ने कवि भट्टराईको मौलिकतालाई यस पद्यले प्रमाणित गरेको देखिन्छ :

खोजौँ यहाँ तर पनि तिमी भेटिदैनौ कहाँ छौ ।
जाऊँ टाढा तर पनि तिमी स्वान्तका बीचमा छौ ॥
कस्तो यस्तो नजिक परको भेद नै भूल जस्तो ।
यद्वा हो यो सकल दुनियाँ कल्पना मात्र जस्तो ॥

यसमा दुनियाँलाई कल्पना जस्तो मानेर उपमा अलङ्कारको सौन्दर्य समेत उद्भासित गर्दै दुनियाँ अर्थात् जगत्को असत्यता देखाई व्यङ्ग्यार्थका रूपमा ब्रह्मको व्यापकता बुझाउन खोजिएको छ ।

## ४. कविशिरोमणि (२)

पाल्पाको तानसेन दरबारमा २०४१ सालमा लेखिएको यो कविता पनि कविशिरोमणि लेखनाथको साहित्यिक योगदानको प्रकाशनमा केन्द्रित छ । अनुष्टुप् छन्दमा प्रणीत यस कवितामा दिवङ्गत भए पनि लेखनाथ आफुजस्तै कविहरूसँग महाशून्यमा पनि कविगोष्ठी गर्दा हुन् भन्ने मीठो कल्पना गरिएको छ । कविशिरोमणिबाट प्रेरित भएर साहित्य सिर्जनामा लागिरहनुपर्ने र उनको 'तरुणतपसी' जस्ता कैयौँ काव्यहरू लेखिरहनुपर्ने आग्रह गर्दै कवि भट्टाईले उनको प्रभाव, प्रेरणा र लोकप्रियताको सटीक रूपमा कवितात्मक मूल्याङ्कन यसरी गर्नु भएको छ –

नेपाली भावभूमिका अजस्र प्रेरणा तिमी ।
कैल्यै नरित्तिने हाम्रा मुटुका ढुकढुकी तिमी ॥

## ५. पसिना माग्छ देश यो

२०३७ सालमा दाङको तुलसीपुरमा लेखिएको यस कवितामा देशनिर्माणका लागि पसिना बगाउन आह्वान गरिएको छ। अनुष्टुप् छन्दमा

रचना गरिएको यो कविता देशका लागि श्रम गर्न र माया गर्न उत्प्रेरित गर्ने वीररसप्रधान रचना हो। देशका हरेक क्षेत्रमा पौरख र पसिनाको आवश्यकता देखाउँदै कविले देशका लागि आत्मोत्सर्ग गर्न प्रेरित गर्नुभएको छ –

बगाऊँ मुटुको तातो माटो यो सुन बन्दछ।
आत्मोत्सर्ग गरौँ हामी अनि यो देश बन्दछ॥

## ६. फर्केर हेर्दा

२०३७ सालमा दाङको तुलसीपुरमा मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा कवि भट्टराईले आफ्नो जन्मस्थल खोटाङको रावा लामिडाँडालाई सम्झनुभएको छ र त्यसबाट काव्यरचनामा प्रेरित भएको आत्मप्रकाशन गर्नुभएको छ। अग्लो हिमशिखरका काखमा रहेको शान्त सुन्दर प्राकृतिक ग्रामीण परिवेशबाट अनेकौँ आकाङ्क्षा र उद्देश्य लिएर कवि विभिन्न ठाउँमा पुगे पनि आफ्नो जन्मस्थललाई बिर्सिनु हुन्न र त्यसै गाउँठाउँको सुमधुर स्मृति साँचेर बस्नुहुन्छ। कार्यवश अहिले कवि जन्मस्थलभन्दा धेरै टाढा पुगे पनि त्यसलाई फर्केर हेर्नुहुन्छ र त्यहीँको कल्पनामा मग्न बन्नुहुन्छ। स्थानीय परिवेशको पर्यङ्कन गर्दै कवि अहिले पनि त्यसैमा रमाइरहेको काल्पनिक भाव निकै मर्मस्पर्शी छ –

गाई हेर्ने वन चउरका लेक बेसी भरी म।
खोलानाला नकटि वनका खोँच पाखाभरी म॥
खेली हिँड्ने कति किसिमका खेलका चौरमा म।
रावाखोलाभरि अझ म छू दूधकोसी भरी म॥

अनुप्रास, उपमा, उत्प्रेक्षा, अनुमान आदि अलङ्कारहरूका साथै विभिन्न बिम्ब र प्रतीकहरूको सुन्दर प्रयोग भएर पनि भावलाई जीवन्त बनाउन सक्नु यस कविताको विशेषता देखिन्छ। जसरी जति पर उडे पनि चङ्गालाई धागाले बाँधेर लटाइले ल्याउँछ त्यसै गरी कवि जहाँ पुगे पनि जन्मस्थलको संझनाले कविको मनलाई त्यसै स्थलमा पुऱ्याएको छ भन्ने सुन्दर उदाहरण यस कवितामा प्रस्तुत गरिएको छ। जन्मस्थलको अतिशय ममता बाँकी छ भने छातीमा पनि जन्मस्थलकै चित्र व्याप्त

छ भन्दै कविले अब आफुसँग भन्ने कुरा केही नभएको र सम्झना पनि सम्झनाका रूपमा मात्र बाँकी भएको तर केही गर्न नसकेको वेदना यहाँ प्रकट गर्नुभएको छ । यहाँनेर कवि आध्यात्मिक बन्नुहुन्छ र आफुसँग केही नभएको सबै परमात्माकै लीला भएको सत्यलाई बौद्धिक व्यङ्ग्यका रूपमा व्यक्त गर्नुहुन्छ –

त्यै माटोको अति छ ममता तिर्सना भित्र बाँकी ।
देख्ने कल्ले तर हरदमै स्वान्तमा चित्र बाँकी ॥
मैले आफ्नू सब भनुँ भने भन्न नै के छ बाँकी ।
जे जे सम्झेँ अब त सब ती सम्झना मात्र बाँकी ॥

## ७. **प्रबोधन**

२०३७ सालमा तुलसीपुर, दाङमा लेखिएको उपजातिछन्दको यस कवितामा जीवनलाई गहिरिएर बुझ्न उत्प्रेरित गरिएको छ । 'प्रबोधन' शीर्षकबाट नै जीवनलाई अन्तर्दृष्टिबाट बोध गर्नुपर्ने भाव यहाँ व्यक्त भएको छ । मानिस ब्रह्माण्डका अगाडि केही होइन केवल बालुवाको कणजस्तै सानो हो तापनि उसको आन्तरिक शक्तिपुञ्जमा रहेको ज्ञान एवं चेतनाले समग्र विश्वलाई छुने भएकाले त्यसको बोध गरी जीवनलाई सक्रिय, सार्थक र सफल पार्नुपर्ने जागरणको सन्देश प्रस्तुत कवितामा पाउन सकिन्छ । भाव र विचार, भाषा र शिल्प तथा लय र साङ्गीतिक श्रुतिमाधुर्यले युक्त यस कवितामा पनि कविले अद्वैत वेदान्त दर्शनको ब्रह्म र जीवको ऐक्य सिद्ध गर्ने सिद्धान्तलाई अनुसरण गर्दै आफ्नो जीवनदर्शन यसरी प्रस्तुत गर्नुभएको छ –

देख्छौ तिमी जो म न देख्न सक्छु
बुझ्छौ तिमी जो न म बुझ्न सक्छु ।
तिम्रो र मेरो सब दृष्टि भिन्न
र अन्त्यमा त्यो छ सबै अभिन्न ॥

बौद्धिक विचार र भावको सुमधुर सामञ्जस्य भएको प्रस्तुत कविता जीवनजगत्लाई हेर्ने लेखकको अन्तर्दृष्टिको सुन्दर नमुना बन्न पुगेको छ ।

## ८. उनको सम्झनामा

२०३७ सालमा दाङको तुलसीपुरमै लेखिएको उपजाति छन्दको यस कवितामा कविले बाल्यकालमा आफुलाई शिक्षा र सदाचारमा लाग्न प्रेरित गर्ने गुरुमाताको सम्झना गर्नुभएको छ । विकट पहाडी गाउँमा जन्मेर पनि र आफुले औपचारिक शिक्षा नपाएकै भए पनि उदीयमान सन्ततिलाई शिक्षादीक्षा दिएर सदाचारी एवं स्वावलम्बी नागरिक बनाउने गुरुमाताको आदर्शलाई यहाँ कविले सश्रद्ध देखाउनु भएको छ । कविले जीवनमा जे जति प्राप्ति र प्रतिष्ठा आर्जन गर्नुभएको छ त्यो सबै गुरुमाताको कृपा र प्रसाद हो भन्ने भक्तिभाव कवितामा व्यक्त भएको पाइन्छ । भीष्म, रणभूमिका भीम, गिरिराज, हिमालचुली, सागर, प्रभात, पृथ्वी, व्योम, ब्रह्म, शशि, सूर्य, नवपालुवा आदि व्यक्ति र वस्तुसँग तुलनीय बनाउँदै उपमा अलङ्कारको सौन्दर्य छटाद्वारा उनको समग्र व्यक्तित्वको शब्दचित्र यहाँ उतारिएको छ । गुरुमाताका कर्म र योजनालाई कविले यसरी सङ्केत गर्नुभएको छ –

थिएन क्यै स्वार्थ, परार्थ खाली,
लिएर हिँड्थिन् शिरमा उचाली ।
शिक्षा कसोरी म दिऊँ भनेर,
हिँड्थिन् उनी दीपशिखा बनेर ॥

आफ्नो विद्या र व्यक्तित्वको विकासमा योगदान दिने गुरुजनप्रति कृतज्ञता व्यक्त गर्ने संस्कृतका काव्यकारहरूको परम्पराबाट समेत उत्प्रेरित कवि भट्टराईले यस कवितामा पनि त्यस्तै परम्पराको सहज निर्वाह गर्नुभएको छ । यसबाट जीवनलाई फर्केर हेर्ने, मूल्याङ्कन गर्ने र आफ्नो व्यक्तित्वको निर्माणमा योगदान दिने व्यक्तिप्रति कृतज्ञता व्यक्त गर्ने लेखकको प्रवृत्ति प्रकाशित भएको पाइन्छ ।

## ९. जिन्दगी

२०४० सालमा पाल्पमा लेखिएको अनुष्टुप् छन्दको यस मुक्तकमा जिन्दगीप्रति लेखकको चिन्तन प्रकाशित भएको छ । उपमाको आलङ्कारिक प्रयोगबाट कविले जीवनलाई यसरी बुझेको पाइन्छ –

जति हे-यो उति राम्रो कस्तो कस्तो छ जिन्दगी ।
मसृण मधुधाराको सार जस्तो छ जिन्दगी ॥

## १०. समष्टि एक राष्ट्र हो

'समष्टि एक राष्ट्र हो' नेपालको चौतर्फी उन्नतिका लागि सबै नेपालीलाई एकताबद्ध भएर अघि बढ्न गरिएको कवितात्मक आह्वान हो । अनुष्टुप् छन्दमा लेखिएको यस कविताले हामी सबै नेपालीलाई कर्मयोगी बन्न प्रेरित गरेको छ र हाम्रै पौरखले मात्र नेपाल बाँच्न सक्छ भन्ने कविको राष्ट्रागको अभिव्यक्ति दिएको छ । यसमा कविले नेपाली मन र आत्मालाई छुने र स्वावलम्बी बनाउने शिक्षाको आवश्यकता देखाउनुभएको छ र देशकै श्रम, सीप र साधनले उद्योगी बन्नुपर्ने राष्ट्रवादी चेतनाको सञ्चार यसरी गराउनु भएको छ –

आफ्नै साधनले चल्ने हामी उद्योग लौ गरौँ ।
आफ्नै पौरखमा बाँचौँ आफ्नै पौरखमा मरौँ ॥

## ११. देशको सान राखौं

मन्दाक्रान्त छन्दका तीन श्लोकमा लेखिएको मुक्तक शैलीको यस कवितामा पनि राष्ट्रप्रेमकै भावना प्रखर बनेर व्यक्त भएको छ । मानिसले अनेकौँ राम्रा काम गर्न खोजे पनि त्यसमा लाखौँ आपत्ति आइपर्ने र उद्देश्य पूरा नहुँदै जीवन समाप्त हुने गर्छ तर हामीले सधैँ देशको सान राख्न तत्पर रहनुपर्छ भन्ने भाव यहाँ पाइन्छ । मानव जीवनलाई हिमशिखरमा लर्केर झर्ने छाया जस्तै क्षणिक देखाउँदै शक्ति र समय छँदै देशको सान बढाउनका लागि जुट्नुपर्ने आह्वान कविले गर्नुभएको छ । राष्ट्रको सान बढाउन आग्रह गर्ने यस कविताले पनि सांसारिक प्रपञ्चलाई

बुझेर आत्मज्ञानको माध्यमबाट जीवनलाई शान्त, सुन्दर र प्रतिष्ठित तुल्याउनुपर्ने अद्वैत वेदान्तको दार्शनिक मान्यताको छनक समेत यसरी दिएको पाइन्छ –

हेर्दा हेर्दै हिमशिखरको झर्छ लर्केर छाया
साँच्ता साँच्तै हृदय तलमै झर्छ फक्रेर माया।
गर्छौं केही समय रहँदै स्वान्तमा भाव राखौँ
मर्छौं आफु तर पनि यहाँ देशको सान राखौँ॥

### १२. जागरण

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा अज्ञान र आलस्यलाई हटाएर देशका लागि जुट्न र खट्न आह्वान गरिएको छ। देशका लागि चिन्तन गरेर र स्वावलम्बी बनेर परिश्रम गर्दा देश बन्न सक्छ भन्ने कविको विश्वासपूर्ण अनुभूतिको प्रकाशन यस कवितामा भएको छ। आत्मविश्वासका साथ पसिनाको गङ्गा बगाएर सिर्जनापथको निर्माण गर्दै देशका कर्मीहरू भगीरथजस्तै कर्मयोगी बन्नुपर्ने उत्प्रेरणा यसरी दिइएको देखिन्छ –

आफुमा गर विश्वास देशको गर चिन्तन।
उठ हे ! देशका कर्मी कर्मयोगी सधैँ बन॥

### १३. माया

'माया' अनुष्टुप् छन्दका दुई श्लोकमा लेखिएको मायाको आदर्श प्रस्तुत गर्ने मुक्तक रचना हो। यस रचनामा कविले माया परस्पर प्रगाढ हुनका लागि त्याग गर्नु पर्ने गहिरो भाव पोख्नुभएको छ। जस्तै –

माया मारे पनि माया मायाले दिनुपर्दछ।
आफैँ भेटिन्छ त्यो माया जो माया गर्नुपर्दछ॥

### १४. उन्मेष

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा नेपालीहरूलाई संसारसामु स्वाभिमानी बनेर बाँच्न प्रेरित गरिएको छ। कविले

हामीलाई स्वाभिमानी बनेर बाँच्ने र आफैँमा निर्भर भएर हाँस्ने शिक्षा र सन्देश यहाँ दिनुभएको छ –

हामी बाँच्नु परेको छ स्वाभिमानी बनीकन।
हामी हाँस्नु परेको छ हामी आफैँ बनीकन॥

२०५१ सालमा लेखिएको यस कविताले वर्तमान नेपालको पूर्वसङ्केत दिएकाले कविको क्रान्तदर्शी व्यक्तित्वको झलक पनि अनुभव गर्न सकिन्छ–

आफ्नै अस्तित्वका लागि नेपाली आज उठ्नु छ।
आज संसारको सामु नेपाली बनी जुट्नु छ॥

**१५. श्रीनगर (१,२०४०), श्रीनगर (२,२०४१), श्रीनगर (३, २०४१)**

कवि भट्टराईद्वारा सरकारी सेवाका क्रममा केही समय पाल्पाको तानसेनमा बस्दा त्यहींको श्रीनगर डाँडोलाई देखेर श्रीनगर (१) अनुष्टुप् छन्दका तीन श्लोक र अन्य दुई गद्य शैलीमा लेखिएका एउटै शीर्षकका यी तीनओटा कविताले कविको काल्पनिक तरङ्ग र यथार्थको आकर्षक प्रस्तुतीकरण गरेका छन्। श्रीनगर (१) मा उपमा र उत्प्रेक्षा अलङ्कारको प्रयोगद्वारा कविले पहिले सक्रिय तानसेन अहिले शिथिल हुन लागेको आशङ्का अत्यन्त सुन्दर शैलीमा यसरी प्रकाशन गर्नुभएको छ –

इतिहासहरू बोकी कोल्टो फेरी सुसाउन।
पोल्टामा बोकी तान्सेन यद्वा लाग्यो निदाउन॥

यसमा एकातिर प्रकृतिको मानवीकरण गरेर स्वच्छन्दतावादी भावप्रवाह प्रवाहित गरिएको देखिन्छ भने अर्कातिर तानसेनवासीलाई सक्रिय रहिरहन जागरुक बनाइएको पाइन्छ।

श्रीनगर (२) मा अविरलको झमझम वर्षाले कविको हृदयको शून्य कुनामा कसैको सम्झना आएको र त्यही सम्झना कल्पनाको तरङ्गमा पौडी खेलिरहेको रुमानी भाव उद्घाटित भएको छ। यस

कवितामा कवि प्रकृतिसँग सातिशय निकट हुन पुग्नुभएको र त्यसले पनि कविलाई कहिले हेरिरहेको र कहिले जिस्क्याइरहेको काल्पनिक उडान वर्णित छ। यस डाँडोलाई कविले आफ्नै जन्मस्थलको नुनथला डाँडो, तानसेनलाई लामिडाँडा गाउँ र माडीको फाँटलाई रावाको उर्वरा फाँटका रूपमा परिकल्पित गर्दै आफ्नो पुरानो संसारको सम्झना गरेको भाव यहाँ अभिव्यक्त भएको छ। यस कवितामा कवि प्रकृतितर्फ फर्क भन्ने रुसोको मान्यता अनुसार त्यतै लहसिन पुग्नुभएको छ भने जन्मस्थलतर्फ पनि फर्किएर अतीतको अनुस्मरण पनि गरिरहनु भएको पाइन्छ।

श्रीनगर (३) मा श्रीनगरको डाँडोलाई तानसेन र यसको मुटु तानसेन दरबारलाई लामो समयदेखि हेरिहने तटस्थ द्रष्टाका रूपमा वर्णन गरिएको छ। कविको विचारमा श्रीनगर डाँडोले तानसेन दरबारलाई यसको प्रारम्भदेखि जवानी हुँदै वृद्ध अवस्था पनि साक्षी भावले हेरिरहेको छ। प्रस्तुत कवितामा कविले तानसेनको द्रष्टा श्रीनगर डाँडोलाई श्रीपेच भएकाले उन्नति, सुरक्षा र विकास गर्न तानसेन निवासीहरूलाई आह्वान गरेर राष्ट्रप्रेमको उद्‌गार प्रकट गर्नुभएको छ भने दार्शनिक रूपमा श्रीनगर डाँडोलाई आत्माका रूपमा वरण गर्दै आत्मिक उन्नयन र परिष्कारद्वारा जीवन्मुक्तिका लागि ब्रह्मचिन्तन गर्नुपर्ने वेदान्त दर्शनको घुमाउरो र बौद्धिक वैचारिक मान्यता पनि प्रस्तुत गर्नुभएको छ।

## १६. कति असजिलो छ

२०२२ सालमा काठमाडौँमा लेखिएको गद्य शैलीको यस सङ्क्षिप्त कवितामा विछोडको वेदनाको अभिव्यक्ति भएको छ। छोडेर जाने र प्रतीक्षा गरेर बस्ने दुवैलाई अत्यन्त असजिलो हुने मार्मिक अनुभूति यहाँ अनुभव गर्न सकिन्छ। यसले अमर र आदर्श प्रेमका पुजारीहरूले छुट्टिएर बस्नुपर्दा भोग्नुपर्ने एकाकी जीवनको कोमल मधुर भावलाई सङ्क्षिप्त र सारगर्भित रूपमा व्यक्त गरेको पाइन्छ। कतै जान लागेका व्यक्तिलाई मुखले जानका लागि अनुमति दिए पनि जानेलाई भन्दा जान अनुमति

दिनेलाई उसको प्रतीक्षा गरेर बाँच्न अति असजिलो हुने मनोविज्ञान समेत उद्घाटन गरिएको यस कवितामा विछोडको पीडालाई कलात्मक रूपमा प्रस्तुत गरिएको छ ।

## १७. युग र चन्द्रमा

२०२३ सालमा काठमाडौँमा लेखिएको यस कवितामा विज्ञान र प्रविधिको अतिशय प्रयोग, विस्तार र उपलब्धिलाई सूक्ष्म रूपमा हेरिएको छ । आणविक हातहतियारहरूको असीमित निर्माण र ग्रहहरूमा मानवले गर्दै गएको अतिक्रमणलाई आधार बनाई कविले यसै कारण वर्तमान युग एउटा माग्ने जस्तो बनेर दयाको याचना गर्दै हिँडेको छ तर भिक्षापात्रमा हाइड्रोजन र एटम बमका बल्दा ज्वालाहरू मात्र पाइरहेको यथार्थलाई व्यङ्ग्यात्मक रूपमा प्रकाशित गर्नुभएको छ। यसै गरी चन्द्रमाले संरक्षणका लागि याचना गरिरहे पनि रकेटका बज्रँदा कठोर ताडना र उत्खननका गहिरा छापहरू पाइरहेको छ भन्ने कविको युगानुकूल कथन छ। प्रयोगवादी कवि मोहन कोइरालाले 'घाइते युग' (२०१७) लेखेर विशेषतः नेपालको तत्कालीन युग नै घाइते भएको व्यङ्ग्य कसेका थिए भने कवि भट्टराईको यस कवितामा आणविक हातहतियारको तीव्र प्रतिस्पर्धाले समग्र वर्तमान युग नै दयाको याचना गर्दै घुमिरहेको छ भन्ने कटु सत्य प्रतिबिम्बित भएको छ । यसरी वर्तमान युग विज्ञानको उपलब्धिको कारणले अघि बढेजस्तो देखिए पनि यसले सिर्जना गरेको त्रासको वातावरण पनि व्याप्त भएको भावप्रकाशन यस कवितामा भएको छ।

## १८. पार्थक्यता व्युँझन्छ

२०२३ सालमा काठमाडौँमा लेखिएको यस कवितामा मानवले मानवीय गुण र गरिमा छोड्दै गएको विचार प्रस्तुत गरिएको छ । वादविवाद, आशङ्का र विवशताको सक्रियतासँगै मानवीय सद्गुण चाहिँ मानवबाट पृथक् वा भिन्न हुँदै गएको युगीन प्रवृत्तिको प्रकाशन

गरिएको यस कविताले मानवतावादको स्थापनामा जोड दिन खोजेको छ । दुर्गुणहरू बढ्दै गएको तर सद्गुणहरू छुट्दै र हराउँदै गएको विडम्बना यस कविताले देखाएको छ । वर्तमान मानवको स्वरूपलाई कविले शब्दचित्रमा यसरी उतार्नुभएको छ –

यसरी मानवसँग
आफ्नै मानवीयता टाढिँदै जान्छ
अनि आफैँसँग
आफैँभित्र एउटा
भयङ्कर पार्थक्य ब्युँझन्छ ।

**१९. सपनाको कुरो**

प्रस्तुत कवितामा 'तिमी' र 'म' को परस्पर भेट गर्ने चाहना भएको तर एकले अर्कालाई भेट्न जाँदा भेट्ने इच्छा नदेखाएको विरोधाभासपूर्ण उपक्रमबाट शृङ्गारिक चेत प्रकाशन गर्दै त्यस्तो भेट गर्ने चाहना निरर्थक भएको भावाभिव्यक्ति दिइएको छ । सपनामै भए पनि कविले 'तिमी' पात्रलाई आफ्ना सबै कथनहरू भनेर स्वप्न र दिवास्वप्नमा उनको शिशु भएर बाँच्न चाहेको रम्य कल्पना गर्नुभएको छ । 'तिमी' पात्रसँग भेट गर्ने सम्भावना नभए पनि चन्द्र र सूर्यको बत्ती बालेर प्रतीक्षारत कविलाई माथिबाट चियाइदिन आग्रह गरिएको यस कवितामा संसार नै सपनामय भएकाले यसमा आसक्त र अनुरक्त व्यक्ति वास्तविक ज्ञान प्राप्त गर्न नसकी मुक्त हुन नसक्ने वेदान्त दर्शनको सारांशलाई यसरी सङ्केत गरिएको छ –

आखिरी
त्यो सबै सपना नै त थियो,
सपनाको कुरो यस विषम संसारमा,
कसरी साकार हुन सक्थ्यो त !
त्यो त केवल मनको विडम्बना मात्र थियो ।

यसरी यस कविताले एकातिर 'म' र 'तिमी' पात्रको प्रसङ्ग निर्देशबाट प्रेम र वियोगको संवेदना प्रकाशन गर्दै शृङ्गारिक चेत प्रकाशित भएको छ भने अर्कातिर दृश्यमान् संसारलाई नै स्वप्नवत् मान्दै आत्मज्ञानबाट लभ्य ब्रह्म नै वास्तविक विपना भएको दार्शनिक विचार समेत दिन खोजेको छ ।

## २०. बाध्यतालाई स्वीकारेर

२०२३ सालमा काठमाडौँमा लेखिएको यस कवितामा अनेकौँ बाध्यताका बीच अकर्मण्य भएर बाँचिरहेको वर्तमान मानिसको चित्र उतारिएको छ । चारैतिर अनेकौँ प्रकारको जालोबाट जेलिएको आजको मानिसको जिन्दगीलाई माकुराको जालोसँग तुलना गर्दै कविले यस्तो मानिस ग्रिसेली पुराकथामा आएको सिसिफसको जस्तै विसङ्गति बोकेर बाँच्नका लागि मात्र बाँचेको वस्तुसत्यलाई यसरी छर्लङ्ग पारेको पाइन्छ –

यहाँ मान्छे बाँचेको छ,
केवल,
एउटा सिसिफसको जिन्दगी,
जहाँ,
आफ्नै गन्धे जीवनका,
आरोह र अवरोहलाई,
सधैँ सधैँ दोहोऱ्याएर,
केवल बाँच्नका लागि मात्र यहाँ मान्छे बाँचेको छ ।

## २१. यही नै हो त ?

२०२३ सालमा काठमाडौँमा लेखिएको यस छोटो कविताले परपीडन गरेर व्यग्रता र द्वेष पालेर बाँच्नु नै मान्छेको जीवन हो त ? भन्ने गहिरो प्रश्न उठाएको छ । मुटु र मस्तिष्कलाई आकुलव्याकुल र असन्तुलन बनाएर आफु बाँच्नका लागि मात्र अरूको हत्या गर्न समेत उद्यत रहने जीवन बारे

कविले उठाएको प्रश्न निकै तर्कपूर्ण र सामयिक छ। जस्तै –

अरूको खुट्टा तान्नु,
केवल आफु बाँच्नका लागि,
अरूको हत्या गर्नु,
के यही नै हो त,
मान्छेको जीवन।

**२२. मान्छे कहिलेकाहीँ**

२०२४ सालमा काठमाडौँमा लेखिएको यस कवितामा कविले 'म' का माध्यमबाट आजका मानिसको यान्त्रिक र अस्तित्वहीन अवस्थाको चित्रण गरिएको छ। आफु स्वतन्त्र वा परतन्त्र भएको समेत निर्णय गर्न नसक्ने शङ्कालु मानिस न भावुक बन्न सकेको छ न त आत्मप्रकाशन गर्न नै समर्थ छ भन्ने कविको दृष्टिकोण यहाँ पाइन्छ। यसो हुनुको मूल कारण आफुभित्रको आत्माको ज्ञान नहुनु हो भन्ने अभिप्रायलाई देखाउँदै 'अहं ब्रह्मास्मि' को बोध गर्नुपर्ने आवश्यकतालाई यसरी देखाइएको छ –

आफैँभरि म भएर पनि,
म को अर्थ,
अझै बुझ्न सकेकै छैन।

यस कथनबाट कविले आत्माको व्यापकतामा विवाद नभए पनि यसको बोध गर्न चाहिँ कठिन भएको तथ्यसमेत सङ्केत गर्न खोज्नुभएको देखिन्छ।

**२३. एउटा वृद्ध**

२०२४ सालमा काठमाडौँमा लेखिएको यस कवितामा पनि मानिसको एषणालाई एउटा वृद्ध पात्रका क्रियाकलापहरूबाट दर्साइएको छ। शरीर जीर्ण र अशक्त भए पनि इच्छाहरू सधैँ सक्रिय र सशक्त

भएको वृद्धले लालटिनको क्षीण प्रकाशमा पनि आफ्नो विगत जीवनको बहिखाता पल्टाएर झीना-मसिना हिसाब गरिरहेको प्रसङ्ग अघि सार्दै कविले शरीर जतिसुकै गलित भए पनि मानिस तृष्णाबाट मुक्त हुन नसकेको यथार्थ देखाउनु भएको छ । वृद्धावस्थामा मात्र नभएर अन्तिम अवस्थामा पनि मानिस निर्लोभ र निर्मोह हुन नसकेको देखेर कवि आश्चर्यचकित हुँदै यसो भन्नुहुन्छ –

अस्ताउन लागेको घामको,
मधुर तर विरक्त लाग्दो,
आभा जस्तो,
एकछिनछि फेरि ऊ पल्टाउन थाल्छ,
लालटिनको त्यही क्षीण प्रकाशमा,
गन्धे जीवनका कहिल्यै नसकिने,
पुराना बहिखाताका पाताहरू,
एकएक गरेर ।

**२४. अभ्यर्थना**

२०२४ सालमा काठमाडौँमा लेखिएको यस कवितामा 'म' र 'तिमी' पात्रको चयन गरेर प्रेमको शाश्वत स्वरूप सङ्केत गरिएको छ। 'तिमी' पात्रलाई दुश्शासन आदिका कारणले अप्ठ्यारो परेको वेलामा 'म' पात्रले द्रौपदीको कृष्ण बनेर जहाँबाट पनि आइपुग्ने प्रतिज्ञा गरेर आफ्नो समर्पण प्रस्तुत गरेको भाव यहाँ पाइन्छ । आफु मरेपछि पनि चिताको खरानीमाथि 'तिमी' पात्रले ढकमक्क फूल बनेर फुलिदिए भमरो बनेर आउने 'म' पात्रको कथनबाट आदर्श प्रेमको अमरतालाई सिद्ध गर्न खोजेको देखिन्छ। यसरी अमर र आदर्शवादी प्रेम यो जन्ममा मात्र नभई जन्मान्तरमा पनि जीवित भइरहने सन्देश यस कविताले दिएको छ ।

**२५. जस्तो लाग्छ**

२०२४ सालमा काठमाडौँमा लेखिएको यस कवितामा कविले देशका विभिन्न भूभाग र खोलानालामा आफ्ना शरीरका अवयव एवं मनोवृत्तिहरूलाई आरोपित गरी राष्ट्रियता र देशभक्तिको चेतना सञ्चार गर्नुभएको छ । देशलाई आफ्नै शरीरजस्तो देख्ने कविलाई सूर्यको प्रभातकालीन किरणसँगै यो देश कताकता उठ्न लागेको प्रतीति हुन्छ र त्यसले कविलाई आशावादी पनि बनाउँछ । नेपालीका गद्यकवि गोपालप्रसाद रिमालले 'आमाको सपना' कवितामा 'त्यो' अर्थात् क्रान्ति आउने विश्वास दिलाए झैँ कवि भट्टराईले पनि यस कवितामा देशबाटै एउटा भावी शिशुको आगमन हुने पूर्वानुमान गरेर नेपालमा सक्षम नेतृत्व वा प्रजातन्त्रको आगमनको सङ्केत गर्नुभएको बुझिन्छ । जस्तै –

यिनै डाँडा र पर्वतहरूमा,
यिनै खोला र खोँचहरूमा,
कताकता मेरो भावी शिशु,
एउटा नयाँ,
एउटा सुनौलो भविष्य बोकेर,
हाँस्तै हास्तै,
आउन थालेजस्तो लाग्छ ।

**२६. यसरी नै बाँचेको छु**

२०२५ सालमा काठमाडौँमा लेखिएको यस कवितामा कविले 'म' पात्रका माध्यमबाट शून्यताको बोध गरेर बाँचेको अभिव्यक्ति दिनुभएको छ । 'ऊ' पात्रसँग भेट्न, छुन र पाउनका लागि रातको समयमा पनि विश्वभरि छरिएर रहने कविले सच्चा प्रेम गरेको भाव पनि कवितामा पाइन्छ । शून्यताको बोध गर्ने कविले यस कवितामा पनि प्रकृतिका विविध रूप र घटनालाई आधार बनाएर जीवको पुनर्जन्म हुने दार्शनिक अवधारणा यसरी प्रस्तुत गर्नुभएको छ –

रातमा अन्धकारसँग,
एकाकार भएर हराएका,
यी सारा दृश्यहरू,
फेरि भोलिपल्ट,
घामको लप्का सँगसँगै,
सलबलाएर प्रकट हुन्छन्,
फेरि बढ्छन्, खिइन्छन् र हराउँछन् पनि,
यस्तै छ मेरो जीवको अशेष यात्रा पनि ।

यस कवितामा सामान्य पाठकका लागि प्रेमको सुन्दर स्वरूप प्रस्तुत गर्ने लौकिक अर्थ पाइन्छ भने प्रबुद्ध पाठकका लागि जन्म र पुनर्जन्मको क्रम गतिशील भइरहने पारलौकिक अर्थ पनि ज्ञातव्य छ ।

**२७. कस्तो सन्तुष्टि**

२०२५ सालमा काठमाडौँमा लेखिएको प्रस्तुत कवितामा कविले बालुवामा बसेर बालुवाकै ताजमहल बनाएको सुन्दर बिम्ब प्रस्तुत गर्दै क्षणभङ्गुर पदार्थप्रतिको अतिशय आसक्ति राख्ने प्रवृत्तिको प्रकाशन गर्नुभएको छ । बालुवाको महल निर्माण र विनाशलाई जीवन र मृत्युको प्रतीक बनाउँदै कविले निर्माण र विनाश दुवै अवस्थामा एकैनास रहनु मात्र अनौठो सन्तुष्टि भएको तर्क गर्दै आत्मज्ञानको प्राप्तिबाट मात्र यस्तो सन्तुष्टि अनुभव गर्न सकिने दार्शनिक दृष्टिकोण यसरी प्रकाशित पार्नुभएको छ –

बालखको खेलजस्तो,
आफ्नो निर्माण र विनाशमा समेत पनि,
सधैँ एकनास रहने,
एक प्रकारको,
अनौठो सन्तुष्टि ।

## २८. भए पुग्छ

२०२५ सालमा काठमाडौँमा रचित यस कवितामा कविले अत्यन्त सरल भाषामा आफुमा कुनै महत्त्वाकाङ्क्षा नभएको केवल सरल जीवन बिताउन चाहेको आदर्श स्थापित गर्नुभएको छ। यस कवितामा एकातिर अथाह धनसम्पत्तिको लालसा र मोटो शरीरको चाहना नभएको केवल जीवन धान्न पुग्ने सम्पत्ति र एक मुठी सास अडिने कृश शरीर भए पुग्छ भनेर शान्ति र सन्तोषको जीवन बाँच्न चाहेको आकाङ्क्षा प्रस्तुत गरिएको छ भने अर्कातिर तेत्तीस कोटि देवताको फौजभन्दा एउटै पशुपतिनाथ, अमृत भन्दा आफ्नै देशको एक घुट्को पानी र विशाल धरतीभन्दा भूस्वर्गको रूपमा रहेको आफ्नै सानो देश नेपाल भए पुग्छ भनेर अतिशय देशभक्तिको भाव पनि व्यक्त गरिएको छ। राम्रो काम गरेर एक क्षण मात्र भए पनि स्वर्गको सट्टा यसै धरतीमा बसेर शान्तिसँग हाँस्न पाए हुन्छ भनेर जीवनवादी दर्शन प्रस्तुत गर्नुभएका कविले सिङ्गो धरती नचाहेको तर सानो स्वदेश नेपाल नै भए पर्याप्त हुने सरल र सशक्त राष्ट्रवादी भावनाको प्रकाशन यसरी गर्नुभएको छ –

अझ यो विशाल धरती पनि,
चाहिँदैन मलाई,
यही मेरो स्यानु देश,
धरतकीको स्वर्ग,
मेरै नेपाल भए पुग्छ।

## २९. आफ्नै परिधिमा

२०२५ सालमा काठमाडौँमा रचित मुक्तक आयामको यस कवितामा धरतीले आकाशको प्रतीक्षा गरेको, भेट्न प्रयास गरेको, अँगालो हाल्न खोजेको तर आकाश माथिमाथि उठिदिएकाले धरतीका लागि त्यसलाई भेट्न असम्भव भएकाले खुम्चिनु परेको बाध्यता

देखाएर कविले मानिस अपूरणीय आकाङ्क्षाका उठानमा नलागेर यथार्थवादी बनेर बाँच्नुपर्छ भन्ने सन्देश दिनुभएको छ। यस कविताले आकाशको उच्चता र अनन्तता देखाएर ब्रह्मको व्यापकताको सङ्केत गरेको छ भने कसैको कसैसँग भेट हुन नसकेको कथन गरेर शृङ्गारिक भावानुभूति पनि गराउन खोजेको पाइन्छ।

## ३०. तिमी आइपुग्नुपर्छ

२०२५ सालमा काठमाडौँमा लिखित यस कवितामा हृदयमा अनेकौँ अवसाद बोकेर टाढा जाने मानिसहरूलाई सम्बोधन गरिएको छ र उनीहरूको यात्राको मङ्गलकामना पनि गरिएको छ। तर कविले टाढा जान लागेका मानिसहरूलाई यात्राका लागि शुभकामना मात्र दिनु भएको छैन चाँडै फर्केर आउन हार्दिक आह्वान पनि गर्नुभएको छ। टाढा जाने परदेशीहरूलाई कहिले वायुपुत्र बनेर र कहिले वर्षा बनेर फर्किन आह्वान गर्नुबाट कविले अनिष्टकारी र सन्तप्त परिवेशको झझल्को देखाउन खोज्नु भएको पाइन्छ। गहन दृष्टि र मिहिन भावबाट अनुशीलन गर्दा यस कवितामा राजनीतिक कारणबाट प्रवासमा जान लागेको देशको राजनीतिक नेतृत्वशक्तिलाई आवश्यकता परेमा स्वदेशमा फर्किनुपर्छ भन्ने कविको राजनीतिक चेतनाको सञ्चारसमेत भएको देखिन्छ। त्यसैले यो कविता सामान्य परदेशीलाई मात्र नभई राजनीतिक कारणबाट प्रवासमा पुग्न र बस्न लागेको वर्गलाई पनि स्वदेश प्रत्यावर्तनको घुमाउरो अपिल पनि हो भन्न सकिन्छ।

## ३१. रित्तै रित्तै पारेर

२०२५ सालमा काठमाडौँमा नै रचना गरिएको लघु आयामको यस कवितामा प्रकृतिका विभिन्न घटना र प्रतिक्रिया तथा प्राणीहरूलाई सूक्ष्म रूपबाट हेरेर अनेकौँ प्राप्ति र उपलब्धिहरूका बीचमा पनि कहिलेकाहीं कसैकसैले भने अभावमै बाँच्नुपर्ने बाध्यताको अभिव्यक्ति

दिइएको छ । समुद्रको छालले आउनेजाने गरे पनि किनाराले सधैँ उसको प्रतीक्षा गरिरहने, धरतीभरि वर्षाको रमझम भए पनि काकाकुल प्यास सँगालेर बसिरहने र वसन्तको उन्मादी याममा पनि कोइलीले कलकण्ठको उन्मुक्त राग अलाप्न नपाउने प्राकृत बिम्ब अघि सार्दै कविले बाहिरी प्राप्तिले मात्र सुख, सन्तोष र स्थायी सुखको अनुभूति हुन नसक्ने भाव प्रकाशन गरेको पाइन्छ। यस कविताले पनि जीवनलाई सुखदुःखको यात्राका रूपमा प्रस्तुत गरेर सन्तोष र धैर्य लिन सक्नुपर्ने बौद्धिक विचारको अभिव्यक्ति दिएको छ।

**३२. मेरो देश**

२०२५ सालमा काठमाडौँमा रचना गरिएको यस कवितामा स्वदेशको महिमा वर्णन गरिएको छ। यो देश सानो भएर पनि उच्च छ र छुट्टै इतिहास बोकेर विभेदरहित भएर बाँचिरहेको छ भन्ने भाव यहाँ पाइन्छ । युद्धका विभीषिकाहरू नदेखेको र कसैका अपवित्र पाइलाहरूले नटेकिएको यस देशको वातावरण सफा र शुद्ध छ भन्ने कविको गर्वोक्ति कवितामा आएको छ। देशको महिमा वर्णन गर्ने क्रममा कविले यहाँका प्रत्येक शिलामा देवत्व रहेको र प्रत्येक मानिसका छातीमा शिवत्व र बुद्धत्वले वास गरेको अभिव्यक्ति दिँदै धार्मिक सद्भाव र सहिष्णुताको अपूर्ण संयोजन रहेको यथार्थलाई यसरी देखाउनुभएको छ –

यस देशका प्रत्येक ढुङ्गाहरूमा,
अझै पवित्रता छ,
देवत्व छ र,
प्रत्येक मानिसका छातीमा,
अझै शिवत्व छ,
अझै बुद्धत्व छ।

## ३३. म दिन्छु

२०२५ सालमा काठमाडौँमै लेखिएको यस कविताले पौरख र परिश्रम गर्नुपर्ने विचार व्यक्त गर्दै सकारात्मक दृष्टिकोणको विकासमा बल दिएको पाइन्छ । कसैले ढुङ्गो दिए विश्वकर्मा बनेर मूर्ति बनाइदिने र आफ्नै धरतीको एक डल्लो माटो दिए विश्व बनाइदिने वैदिक कथन र सङ्कल्पबाट भावको उठान भएको यस कवितामा आफ्ना लागि मात्र नभएर अरूका लागि पनि बाँच्न र मर्न सिक्नुपर्ने मानवतावादी भावको प्रवाह भएको पाइन्छ। कविको विचारमा आज स्वर्गका द्यौताभन्दा मर्त्यको मुटु भएको एउटा साँच्चैको मान्छे बन्नुपर्ने आवश्यकता छ। जस्तै –

तिमी द्यौता होइन,
एउटा साँच्चैको मान्छे बन,
किनभने,
यहाँ मान्छेका लागि,
स्वर्गवासी द्यौताको होइन,
मर्त्यकै मुटु बोकेको,
मान्छेकै आवश्यकता छ।

सुख र दुःख मिसिएको धरतीको साधारण मान्छे बन्दा मात्र जीवनको वास्तविक अर्थ बोध हुने तर्क गर्दै कविले द्यौताको सट्टा धरतीको मान्छे र त्यसमा पनि संवेदना भएको असल मान्छे बन्नुपर्ने आवश्यकता देखाउँदै संसारमा मानवतावादको स्थापनामा जोड दिएको पाइन्छ । यस्तै मानवतावादी मानिसका लागि जीवन उत्सर्ग गर्न पनि तत्पर भएको अठोट व्यक्त गरेर कविले अरूका लागि बाँच्ने र मर्ने कामको उदाहरण आफैँबाट प्रारम्भ गर्न खोजेको जोसिलो भाव प्रकाशन गर्नुभएको छ।

**३४. एउटा वटवृक्ष, एउटा हिमाल**

आफ्ना लामा र गहिरा जरा पृथ्वीमा गाडेर विभिन्न समस्यासँग जुध्दै स्थायी रूपमा उभिन सक्ने वटवृक्ष जस्तै हिमाल पनि विभिन्न डाँडा र पहाडहरू फैलाएर रहनुपर्छ भन्ने भावबीजबाट अघि बढेको र कसैलाई वटवृक्षका मुनि आएर उभिन अनि समस्त राष्ट्रलाई थाम्न आग्रह गरिएको यो कविता पनि २०२५ सालमा काठमाडौँमा लेखिएको हो। वटवृक्षजस्तो सबल आधारशिला निर्माण गर्दै परोपकारी हिमाललाई उच्च पार्न एउटा सानो कण बनेर भए पनि आफ्नो देशलाई बचाउन तत्पर रहनुपर्ने जागरण गीत नै प्रस्तुत कविताका रूपमा गुञ्जित भएको पाइन्छ। स्थिर र धीर वटवृक्षका बिम्बका माध्यमबाट हिमालको रक्षा र राष्ट्रको स्थायित्वका लागि याचना गरिएको यस कवितामा पनि कविभित्रको असीम राष्ट्रप्रेमको छचल्को छचल्किएको देखिन्छ।

**३५. जब युद्ध चर्कन्छ**

२०२६ सालमा काठमाडौँमा लेखिएको यस कवितामा युद्ध चर्कँदै गएको र अहिंसामाथि हिंसाले आक्रमण गर्दै गएको यथार्थ परिवेश देखाउँदै त्यस्तो अवस्थामा बाँचिरहेका आफ्ना सन्तानहरूको भविष्यबारे चिन्ता प्रकट गरिएको छ। आकाशको टुक्राबाट पनि आशङ्का जन्मेको र बारीका कान्ला, खेतका आली तथा आफ्नै घरगोठका ढोका एवं झ्यालहरूबाट संसार भस्म गराउने भस्मासुर ब्युँझन लागेको भयानक परिवेश देखाउँदै कविले युद्धको उन्माद देखाउने शक्तिराष्ट्र तथा आणविक शस्त्रास्त्रहरूको निर्विवेक प्रयोगप्रति व्यङ्ग्य गरेको पाइन्छ। हावापानी विषाक्त भएको र अँध्यारोमा बाँच्न बाध्य हुनुपरेको परिवेशमा भर्खर भर्खर वामे सर्न लागेका सन्तानहरूको भावी जीवन अशान्त र युद्धमय हुन लागेकोमा कविको गम्भीर चिन्ता व्यक्त भएको छ। यस कवितामा राष्ट्रिय विषयवस्तुभन्दा पनि अन्तर्राष्ट्रिय विषयवस्तुको चयन गर्दै कवि विज्ञानको दुरूपयोगप्रति पनि आशङ्कित बन्न पुग्नुभएको देखिन्छ।

### ३६. विरोधाभास

२०२६ सालमा काठमाडौँमा लेखिएको मध्यम आयामका दुई ओटा अनुच्छेदगुच्छको यस कवितामा शीर्षकले नै सङ्केत गरेझैँ कविका दुई भिन्न एवं विरोधाभासपूर्ण अवस्थाको प्रस्तुतीकरण भएको छ । पहिलो अनुच्छेदको प्रारम्भमा कविलाई आफु जे गर्न पनि समर्थ भएको अहम् भाव जागृत भएको छ भने उत्तरार्धमा आफुलाई केही पनि प्राप्त नभएको र खोक्रो अहम् बाहेक केही बाँकी नभएको ज्ञान भएको छ । पहिलो अनुच्छेदले कवि यथार्थवादी बन्न पुगेको सत्य उद्घाटित गरेको छ । दोस्रो अनुच्छेदमा कविमा क्रमशः आत्मविश्वास जाग्दै गएको र अनन्त ब्रह्माण्डको यात्रा गर्ने साहस एवम् उत्साहको अभिवृद्धि भएको परिवर्तित मनोविज्ञानको प्रस्तुति भएको छ । यसरी आफुभित्रको अहङ्कारको त्याग गरेपछि सद्ज्ञानको उदय हुने र त्यसले जीवनबोध गर्न सजिलो हुने तथ्य अघि सारेर कविले जीवनमुक्तिको उपायसमेत निर्देशन गर्न खोज्नुभएको पाइन्छ । यस कविताले जीवनमा धेरै उपलब्धिहरू हासिल गरे पनि अनास्था र अज्ञानलाई नष्ट गरेपछि आस्था र ज्ञानको सरणिबाट मात्र शाश्वत सुखको प्राप्ति हुने वैचारिक गहिराइलाई पनि स्पर्श गरेको छ ।

### ३७. देखाउन मन लाग्छ

२०२६ सालमा काठमाडौँमा रचना गरिएको यस कविताले मानवीय आवेग, उन्माद र अशान्तिले निम्त्याएको युद्धको परिणामबाट कविमा उत्पन्न संवेदनाको उद्घाटन गरेको छ । मानवताको उपहास गर्दै प्रियजनलाई विभक्त गरिदिएर आँसुका सागरभित्र बाँच्न बाध्य पारिदिने अन्तर्राष्ट्रिय शक्ति र प्रवृत्तिप्रति कविको व्यङ्ग्य मात्र होइन, आक्रोशको ज्वाला पनि यस कवितामा प्रज्वलित भएको पाइन्छ । बर्लिन (जर्मनी), भियतनाम, कोरिया, हङ्गेरी, चेकोस्लोभाकिया (हाल चेक गणतन्त्र) का सन्दर्भहरू उल्लेख गर्दै कविले त्यहाँका असङ्ख्य दुर्गन्धित लासहरू

देख्दा आफ्नै मुटुका विद्रोही धड्कनहरू देखाइदिन मन लागेको अभिव्यक्ति दिएर युद्ध र तज्जन्य विभाजनको पीडाप्रति सहानुभूतिसमेत देखाउनुभएको छ । सीमित व्यक्तिहरूको एकान्त मन्त्रणाले संसारमा फैल्याइने युद्धको अभिशापका विरोधमा मुखरित कविको स्वर वर्तमान समयमा पनि उत्तिकै सामयिक छ ।

**३८. बुद्ध**

२०२६ सालमा काठमाडौँमा लेखिएको यस कवितामा बुद्धलाई हेर्ने कविको भिन्न दृष्टिकोणको अभिव्यञ्जना भएको छ । जैविक प्रक्रियाबाट बुद्ध एक पटक जन्मेका थिए तर दानवीय शक्तिको पराजयका लागि जब दैवी शक्तिको आवश्यकता पर्दछ तब शतशः बुद्धहरू जन्मन्छन् र जन्मनु पनि पर्छ भन्ने कविको तार्किक विचार यस कवितामा पाइन्छ । युद्ध, अन्याय, अत्याचार, लोभ, स्वार्थ, जन्म र मृत्युको तीव्रतासँगै बुद्धको जन्म हुने भएकाले रोगी, वृद्ध र मुर्दा मात्र बुद्धका सर्जक होइनन् भन्ने कविको विचार निकै चिन्तनीय र मननीय छ । बाहिरी बुद्धभन्दा हृदयमा उत्पन्न बुद्ध नै शक्तिशाली र प्रभावकारी हुने तर हृदय शान्तितर्फ लागेको चाहिँ हुनुपर्ने विचारलाई यसरी प्रस्तुत गरिएको छ –

बुद्ध सधैँ,
मूर्त रूपमा पाइँदैन,
हृदयमा नै,
बुद्धत्व जागेको हुनपर्छ,
शान्त वातावरणमा नै,
बुद्ध पाइन्छ,
यसका लागि हृदय नै,
शान्तितर्फ लागेको हुनुपर्छ ।

यसरी बाहिरी बुद्धभन्दा प्रत्येक व्यक्तिको शान्त हृदयमा उत्पन्न हुने बुद्धको मूल्य, महत्त्व र आवश्यकता छ भन्ने निष्कर्ष यस कवितामा पाइन्छ ।

### ३९. पोखरा यस्तै लाग्छ

२०२७ सालमा पोखरामा रचित यस कविताले शीर्षकमा सङ्केत गरिएझैँ भौतिक स्वरूप पोखरालाई काल्पनिक संसारमा पुगेर अनुभव गरेको सुन्दर कथन पाइन्छ । आफुले कल्पना गरेको र तिर्सना राखेको भन्दा भिन्न स्वरूपको पोखरालाई प्राकृतिक रूपबाट सुन्दर तर मानवीय विधिव्यवहारका रूपबाट विकृत लागेको अनुभूति यहाँ व्यक्त भएको छ । उपमा र उत्प्रेक्षाको अनुपम प्रयोगबाट पोखराको बाह्य सौन्दर्य र आन्तरिक कुरूपताको विपरीतधर्मी प्रस्तुतीकरण कवितामा भएको छ । यी दुई ओटा अनुच्छेदले पोखराको सौन्दर्य र विकृतिलाई क्रमशः सङ्केत गरेका छन् –

पोखरा, फेवामा खुट्टा चोपलेर,
माछापुच्छ्रेको सिरानी लगाएर,
निदाइरहेजस्तो लाग्छ,
पोखरा, पोडेले बेच्न ल्याएको,
फेवाको माछा जस्तो,
कहिलेकाहीं,
भित्रभित्रै गन्हाए जस्तो लाग्छ ।

पोखरा, फेवाताल र माछापुच्छ्रेलाई मानवीय स्वरूप प्रदान गरेर पोखराप्रति आफुमा पैदा भएका काल्पनिक तरङ्गहरूलाई विविध बिम्ब र प्रतीकहरूको आयोजना गरी सुललित शैलीमा प्रकाशन गर्नुबाट कविको काव्यशक्तिको प्रमाण समेत सिद्ध भइरहेको पाइन्छ ।

**४०. म टिप्पणी र आदेश**

२०२८ सालमा पोखरामा लेखिएको यस कवितामा कविले आफ्नो जागिरे दिनचर्याको चित्र उतार्दै त्यसबाट सबै जागिरेहरूको यथार्थता देखाउनुभएको छ । यस कवितामा कवि 'म' को विशेष अवस्थाबाट आफुजस्ता सबैको चित्र र चरित्र उतारी भावको साधारणीकरण गर्न सफल हुनुभएको छ । 'टिप्पणी र आदेश' निर्णयका लागि तयार पारिने अभिलेख सामग्री हुन् । कुनै पनि कार्यालयमा यी दुवै आधारभूत सामग्री हुन्छन् । कविले पनि कार्यालयमा प्रतिदिन काम गर्दा यी कागजातसँग गहिरो सम्बन्ध राख्नु परेको यथार्थका पृष्ठभूमिमा रचित यस कविताले आफैँलाई टिप्पणी र आदेशमा रूपान्तरित गरेको मार्मिक भाव व्यक्त गर्नुभएको छ । अरू सामान्य मानिसका जस्तै कविका पनि घरमा केही टिप्पणी र आदेश हुन्छन् र कार्यालयमा पनि तिनैसँग खेल्नु र बाँच्नु परेको छ । घर र कार्यालय दुवैतिरको अतिशय सम्पर्कले कवि आफैले आफुलाई टिप्पणी र आदेश भएको निरीह अवस्था देखाउँदै यसरी मीठो व्यङ्ग्य गर्नुभएको छ –

कार्यालय जान्छु टिप्पणी भएजस्तो लाग्छ,
घर आउँछु आदेश भएजस्तो लाग्छ,
यसरी बिस्तारै अचेल म आफैँ,
टिप्पणी अनि आदेश हुँदैहुँदै गएजस्तो लाग्छ ।

**४१. वसन्त बेलायतमा**

सन् १९७७ मा संयुक्त अधिराज्य बेलायतको भिक्टोरिया म्यानचेस्टर युनिभर्सिटीमा पढ्न बसेको समयमा लेखिएको यस कवितामा त्यहाँको वसन्तऋतुको सौन्दर्य देखेर आफ्नो देशमा पनि वनपाखा र बोटबिरुवामा त्यस्तै उन्मादी र मनोहारी वसन्त आएको होला भन्ने मधुर सम्झनाको अभिव्यक्ति प्रस्तुत गरिएको छ । कविले बेलायती वसन्तको वर्णन गर्ने क्रममा त्यहाँका ख्यातनामा साहित्यकारहरू

सेक्सपियर र वर्डस्वर्थ तथा उनीहरूका प्रतिनिधि कृतिहरूको समेत उल्लेख गर्दै वसन्तले तिनलाई पनि प्रभावित पारेको रुमानी भाव यहाँ पोख्नुभएको छ । बेलायत र नेपालका मौलिक प्राकृतिक सम्पदाको परिचय दिने क्रममा क्रमशः ड्याफोडिल र चेरी तथा धुर्सुल र गुराँसको उल्लेख गरेर कविले सहज रूपमा स्मरण अलङ्कारको विन्याससमेत गरेको पाइन्छ ।

फुलिरहेका फूलहरूलाई घुम्टोको पातलो पर्दालाई बिस्तारै पन्साएर आफ्नो प्रियतमको दर्शन गर्न अभिमुख भएकी नववधूजस्तै वर्णन गरेर कविले उपमाको सुन्दर विन्यासद्वारा प्रकृतिको मानवीकरण गर्ने पाश्चात्त्य स्वच्छन्दतावादी काव्यकलाको निदर्शन पनि यहाँ प्रस्तुत गर्नुभएको छ । कविले वासन्ती हावाले आफ्नो देशका मायालुका मनहरूमा सम्झनाको मीठो काउकुती लगाएको काल्पनिक तरङ्ग पनि यहाँ पोख्नुभएको छ । दूरदेशमा बसेर स्वदेशको माया र ममता गर्ने कविको कोमल हृदयको स्पन्दनलाई पनि यस कविताले प्रकाशित गरेको देखिन्छ ।

**४२. मेरो सगरमाथा बेलायतबाट हेर्दा**

सन् १९७८ मा संयुक्त अधिराज्यको भिकटोरिया म्यानचेस्टर युनिभर्सिटीमा पढ्न बसेको समयमा कविले त्यहींबाट सगरमाथाका विषयमा गरेको अनुभूतिको अभिव्यञ्जना यस कवितामा पाइन्छ । हजारौँ विदेशीहरूले सगरमाथाको आरोहण र अवरोहण गरे पनि यहाँका प्राकृतिक जीव, बोट र वनस्पति तथा मानवीय सांस्कृतिक वैभवहरूलाई दखल नपार्न र तिनको मौलिकता बचाइराख्न कविले अनुरोध गर्नुभएको छ । सगरमाथाको उच्चता र विशालता अपरिमेय भएकाले यो कहिल्यै नझुक्ने र क्यामेराका लेन्सभित्र नअटाउने कविको दृढ विचार यस कवितामा पोखिएको छ । प्रवासमा बसेको नेपाली पनि सगरमाथालाई सम्झन मात्र होइन, त्यसलाई हेर्न र भेट्न पनि आतुर छ भन्ने भाव व्यक्त

गर्दै कविले आफ्नै आत्मानुभूतिको प्रतिबिम्ब यस कवितामा उतार्नुभएको छ। सगरमाथाको महत्त्व गायन गर्दै कविले त्यसैको आसपासमा रहेको आफ्नै शान्त, सुन्दर, एकान्त र सुरम्य गाउँको संस्मरण पनि गर्नुभएको छ। यस कविताले पनि मातृभूमिलाई स्वर्गभन्दा गरीयसी मान्ने पौरस्त्य आदर्शलाई स्थापित गरेको छ र कविभित्र व्याप्त राष्ट्रप्रेमको भावना उजागर गरेको छ। यसबाट कवि आफैँ पनि यथासम्भव चाँडो स्वदेश फर्कन चाहेको व्यङ्ग्यार्थ पनि गुञ्जित भइरहेको पाइन्छ।

### ४३. म अचेल यस्तै भएको छु

२०४१ सालमा पाल्पामा लेखिएको यो कविता कवि स्वयंको नीरस जागिरे जीवनको यथार्थ प्रस्तुति हो। यो कविता जागिरेका हैसियतमा कविले अवचेतन अवस्थामा गरेको क्रियाकलापहरूको स्वाभाविक आत्मव्यङ्ग्य पनि हो। टिप्पणी र आदेशमा कविता लेख्नु र कविता लेख्दा टिप्पणी र आदेश लेख्न पुग्नुबाट कविको जागिरे जीवन र कविता लेख्ने नैसर्गिक प्रवृत्तिको मीठो संयोजन यस कवितामा भएको छ। कार्यालयमा दिनभरि काम गरेर शारीरिक रूपमा थकित र मानसिक रूपमा तनावग्रस्त बनेर घर पुगेपछि निर्दोष श्रीमतीलाई अभियुक्त ठानेर ठाडै गाली गर्ने मधुर हास्य र गूढ व्यङ्ग्यको आत्मकथन यस कवितामा पाइन्छ। यो कविको एक प्रकारको कवितात्मक आत्माख्यान हो। यान्त्रिक जागिरे जीवनले मानिसलाई कतिसम्म एकोहोरो बनाउँछ भन्ने यथार्थलाई कविले आफ्नै यथार्थबाट यसरी पुष्टि गर्नुभएको छ –

कहिलेकाहीं आफन्तहरूले,
पठाएका स्नेहयुक्त चिठ्ठीपत्रहरूलाई पनि,
ठाडो उजुरी सम्झेर,
तोक आदेश गर्ने भएको छु,
खै के भनौँ,
अचेल म यस्तै भएको छु।

सारांशमा हेर्दा यस कवितामा कविको जीवनवृत्ति र मनोवृत्तिबीचको द्वन्द्व निकै सशक्त रूपमा व्यक्त भएको पाइन्छ।

**४४. भानु**

२०४१ सालको भानुजयन्तीका दिन पाल्पामा लेखिएको यस कवितामा शीर्षकले निर्देश गरेझैँ आदिकवि भानुभक्त आचार्यको व्यक्तित्व र योगदानबारे प्रकाश पारिएको छ। यसमा भानुलाई नेपाली भाषासाहित्यका अजस्र प्रेरणाका स्रोतका रूपमा लिँदै उनलाई अनुकूल र प्रतिकूल दुवै अवस्थाबाट काव्यरचनाका लागि प्रेरित हुने प्रतिभाका रूपमा चित्रण गरिएको छ। भाट (गिरिधारी भाट) ले घचघच्याए पनि घाँसीले बाटो देखाए पनि र सोती (गजाधर सोती) की घरबूढीले तिरस्कार गरे पनि भानुले कविता नै लेखे भन्ने ऐतिहासिक सन्दर्भ उल्लेख गर्दै कविले उनको गुणग्राही व्यक्तित्वको प्रशंसा गर्नुभएको छ। कठघरामा थुनिदा पनि कोसी र गण्डकी भएर फुट्ने र बग्ने भानुलाई नेपाल र नेपालीलाई नयाँ रश्मि र प्रेरणा दिने महान् आत्मा एवं राष्ट्रिय विभूतिलाई कविले सतत वन्दना गर्नुभएको छ। यो कविता कविको भानुभक्तप्रतिको श्रद्धा, आस्था र सम्मानको भावत्रिवेणी बनेको छ।

**४५. अभिवादन**

२०५१ सालको भानुजयन्तीका दिन काठमाडौँमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा पनि पूर्वोल्लिखित 'भानु' कवितामा जस्तै भानुभक्त आचार्यप्रति अभिवादन अर्पण गरिएको छ। भानु नभएका भए राष्ट्रभाषा, साहित्य, संस्कार र संस्कृति मासिने मात्र नभई पृथ्वीनारायणको राष्ट्रनिर्माण पनि अपूर्ण नै हुने थियो भन्ने कविको पर्यवेक्षण यस कवितामा अभिव्यक्त भएको छ। भानुकै कारण आज भाषासाहित्य समृद्ध भएको छ भने विभिन्न भाषिक र साहित्यिक आन्दोलन पनि भएका छन् भन्ने कविको तर्क छ। गद्यपद्यका साहित्यकारको जन्म

र नानाथरी समीक्षकको उदय पनि भानुकै कारणबाट भएको हो भनेर कविले हामीले यस क्षेत्रमा जेजति गऱ्यौँ र गर्दैछौँ त्यो उनकै प्रेरणा प्रसाद भएको ठहर गर्नुभएको छ। निम्नलिखित पद्यमा यस कविताको सारांश खिचिएको पाइन्छ –

जो सबै भानुकै देन, भानुकै यो प्रकाश हो।
जे जे गर्छौं सबै हामी भानुको नै प्रसाद हो ॥

**४६. शान्ति**

लेखनकाल र स्थानको उल्लेख नभएको गीतिलयको यस कवितामा देशभर शान्तिको याचना र आवश्यकता भएको भाव प्रकाशन गरेको छ। वेददेखि बुद्धसम्म र हिमालदेखि पहाडसम्म सबैले शान्तिको याचना गरेको भावोद्‍गार व्यक्त गर्दै यस कवितामा शान्तिमै विकास र प्रकाश पाउन सकिने विश्वास पनि दर्साइएको छ। कोसी, गण्डकी र कर्णालीले शान्ति मागेका र हामी पनि शान्तिका पुजारी भएकाले यो देश शान्तिक्षेत्र भएको तर्कपूर्ण पुष्टि कविताले गरेको छ। प्रत्येक गीतिगुच्छको अन्त्यमा देशले नै शान्ति भनिरहेको छ भन्ने भावलाई यसरी प्रकाशित गरिएको छ –

हिमालले शान्ति भन्छ
पहाडले शान्ति भन्छ
सधैँ शान्ति भन्छ मेरो देशले।

यस कवितासङ्ग्रहको प्रारम्भमा राष्ट्रकवि माधव घिमिरेको 'आश्वस्ति' शीर्षकको मन्तव्यमा कवि शरदकुमार भट्टराईका कवितात्मक विशेषताको सङ्क्षिप्त प्रकाशन गरिएको छ। त्यसपछि लेखकले 'समर्पण' शीर्षकको पद्यात्मक र 'श्रद्धासुमन' शीर्षकको गद्यात्मक कविताबाट क्रमशः देवी, सरस्वतीमा समर्पण र गुरुमातालाई श्रद्धाञ्जलि प्रकट गर्नुभएको छ। त्यसपछि कवि स्वयंले 'आफ्नै बारेमा' शीर्षकमा कविता लेखनको पृष्ठभूमि केलाउँदै कविताको परिभाषा पनि गरेर समीक्षात्मक

व्यक्तित्व झल्काउनु भएको छ।

कविता सङ्ग्रहको अन्त्यतिर लेखिएको प्रकाशकीयमा कविको कृतित्व र व्यक्तित्वबारे सङ्क्षिप्त एवं वस्तुगत रूपमा प्रकाश पारिएको छ। कविको जन्मस्थल, रुचि, शिक्षा, बहुमुखी प्रतिभा, पुरस्कारप्राप्तिको विवरण आदि विषयको प्रकाशन यहाँ भएको छ। त्यसपछि राष्ट्रकवि माधव घिमिरेकै हस्ताक्षरको 'आश्वस्ति' समावेश गरिएको छ। कविले धन्यवाद ज्ञापन गरेको पत्र पनि यस खण्डमा राखिएको छ। अन्तिमको आवरण पृष्ठको भित्रपट्टि कविको वंशक्रम चित्रात्मक रूपमा प्रस्तुत गरिएको छ।

यस सङ्ग्रहको अन्तिमको आवरणपृष्ठको बाहिरपट्टि सुन्दर हस्ताक्षरमा लेखनकाल र स्थान निर्देश नभएको अनुष्टुप् छन्दमा लिखित 'मनको भावमा बग' भन्ने कविता छापिएको छ। त्यसलाई यहाँ समावेश गरिएको छ।

**४७. मनको भावमा बग**

अनुष्टुप् छन्दमा लेखिएको भावप्रधान एवं लालित्यपूर्ण यस कवितामा कविले आफ्नो जन्मस्थल रावा लामिडाँडाको पुछारमा बग्ने दुधकोसीप्रति अतिशय भावुक अनुभूति व्यक्त गर्नुभएको छ। अनुप्रासको चमत्कार र उपमाको सौन्दर्यको सन्तुलनबाट अघि बढेको यस कवितामा दूधकोसीलाई प्राकृतिक र पौराणिक सन्दर्भबाट हेरिएको छ र मानवीय दुर्भावना प्रक्षालन गर्न आह्वान पनि गरिएको छ। यसमा पाश्चात्त्य शैलीको सम्बोधन कविता (ओड) को पनि प्रशस्त प्रभाव परेको छ र दूधकोसीलाई आफ्नै धमनीमा बग्न अनुनय पनि गरिएको छ। धमनीमा दूधकोसी बगाउन आह्वान गर्ने कविले मानवीय मनोवृत्तिको स्वच्छ र सुसंस्कृत प्रवाहको अपेक्षा गरेको बुझिन्छ। दूधकोसीको निरन्तर प्रवाहमा जोड दिने कविले जीवनको गतिशील र कर्मयोगी अवस्थाको आवश्यकता देखाउन खोज्नु भएको छ। दूधकोसीको वस्तुवर्णन र

भावको उन्मुक्त प्रवाह एकै पटक अनुभव गर्न सकिने यस कविताको यस पद्यले कविको जन्मधर्तीको महिमा पनि प्रसारित गरिरहेको छ –

> बग हे ! हिमकी पुत्री तिमी सागरमा बग ।
> पखाली मनका मैला घृणा तृष्णा सबै लग ॥
> घरको छेउमा बग्थ्यौ मनका छेउमा बग ।
> तिमी टाढा कहाँ बग्छ्यौ मेरै धमनीमा बग ॥



# आजका नेता २०५३ का भूमिकाबाट

[वि.सं. २०४६/४७ को जनआन्दोलन पश्चात् पुनःस्थापित प्रजातन्त्रको सञ्चालनन र सुदृढीकरणका लागि संसदका लागि जनप्रतिनिधिहरूको अर्थात् सांसदहरूको निर्वाचन भएको थियो। निर्वाचित भएर संसदमा आएका जनताका प्रतिनिधि सांसदहरूबाट जनताले ठुलो अपेक्षा गरेका थिए । किन्तु त्यसको प्रतिकूल जनतालाई उनीहरूले धोका दिए । त्यसबेला सबै मन्त्रालयका सचिवहरूले संसद चलेको समयमा सिंहदरबारको परिसरभित्र रहेको संसदभवन, ग्यालरी बैठकमा गएर सांसदहरूले छलफलका क्रममा उठाएका सम्बन्धित मन्त्रालयका कुराहरू निर्धारित दीर्घिकामा बसेर सुनेर टिपोट गर्नुपर्दथ्यो ।

वस्तुतः त्यस बेलाको संसदभवन गाईजात्राको डबली जस्तो देखिन्थ्यो । किनबेचको मोलमोलाइमा परेका सांसदहरू संसदभित्र नै असंसदीय र मयादाहीन शब्दहरू बोलेर गाईजात्रा देखाउँथे । अमर्यादित शब्दहरूको प्रहार मात्रै होइन सांसदहरूले परस्परमा हात र लातको प्रहारका साथै आफैं बस्ने कुर्सी र बोल्ने माइक समेत भाँचेर एक अर्कामाथि मदमत्त भई मादक पदार्थद्वारा मत्त भएर मातेका यदुवंशीहरूले आपसमा प्रहार गरेझैं गरेका थिए। संसद्भवन युद्धमैदान जस्तो भएको थियो।

उपर्युक्त वीभत्स वातावरणमा सांसदहरूको भनाइ टिपोट गर्नुपर्ने ठाउँमा अनायास सांसदहरूको गराइ लेख्ने तर्फ लेखनी अग्रसर भयो । संसदभवनको दीर्घिकामा बसेरै मैले सांसदहरूको नग्न नृत्य हेर्दै कविता लेखेँ र घरमा आएर त्यसलाई पूर्णता दिएँ। सरकारको उत्तरदायित्वपूर्ण पदमा बसेको समयमा लेखिएको उक्त कविता भएकाले आफ्नो प्रचलित नाममा प्रकाशन नगरेर छद्मनाम सुयोग वासिष्ठका नामबाट पुस्तिका प्रकाशित गराएको हुँ। ]

# आजका नेता २०५३

२०५३ सालमा संसदभवनको परिसरमा लिखित एवम् सुयोग वासिष्ठका नामबाट प्रकाशित प्रस्तुत सङ्ग्रह कवि शरदकुमार भट्टराईका प्रकाशित कृतिहरूमध्ये लघुतम रचना हो। यसमा ‘आजका नेता’ र ‘छोडिद्यौ राजनीति’ शीर्षकका दुई ओटा कविता सङ्गृहीत छन् । यी दुवैमा देशको र त्यसमा पनि विशेषतः संसद्को फोहोरी खेल र अनेकौँ कुकृत्य गर्ने दुर्गन्धित नेताहरूको शब्दचित्र उतारिएको छ र त्यस्ता प्रवृत्ति र व्यक्तिप्रति व्यङ्ग्य, आक्रोश र असहमति प्रकट गरिएको छ । संस्कृतका शास्त्रीय छन्दमा लेखिएका यी कवितामा त्यस बेला मात्र नभई वर्तमान समयमा पनि नेपाली जनमनले अनुभव गरेको नमीठो सत्यलाई उजागर गरिएको पाइन्छ। अतः यी कवितामा व्यक्त भावना कवि भट्टराईका निजी भाव भए पनि सर्वसाधारण नेपाली जनताका साझा भाव बनेका देखिन्छन् ।

शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कवितामा कविले नेताहरूको सिद्धान्तहीनता, चरित्रहीनता, सत्तालोलुपता, विलासी र भोगी जीवन, अवसरवादिता, भ्रष्ट जीवनचर्या, अराजक र उच्छृङ्खल गतिविधिहरूको नाङ्गो तस्बिर उतारिएको छ । राजनीतिक दलहरू भीडतन्त्रमा परिणत हुँदै गएको यथार्थलाई देखाउँदै कविले राजनीतिलाई जनसेवामा भन्दा नाफामुखी व्यापारमा परिणत गरेको सत्य यहाँ देखाउनु भएको छ। विभिन्न समयमा भएका आन्दोलनका साथै २०४६ सालको जनआन्दोलनबाट प्राप्त प्रजातन्त्रको उपहास गर्न तल्लीन नेताहरूको गैरजिम्मेवार व्यवहारप्रति कविले कडा प्रहार गर्नुभएको छ।

यस कवितामा एउटा व्यक्ति र दललाई भन्दा पनि सम्पूर्ण भ्रष्ट नेतृत्व र राजनीतिक शक्तिको यथार्थ प्रकाशित गरिएको छ । देशका सबैभन्दा नालायक खलनायकहरू नै देश र जनताका विरुद्ध जघन्य घात एवम् अपराध गरेर नायकका स्थानमा पुगेको वीभत्स र विद्रूप यथार्थको अभिव्यक्ति यस कवितामा भएको छ। त्यस बेलाका काङ्ग्रेस, एमाले,

राप्रपा लगायत सत्ताको च्याँखे थाप्न पल्केका ब्वाँसा चरित्रका फुटपाथे पसल स्तरका मुठ्ठीभरका दलालहरूका दलको समेत कविले उछित्तो काढ्नुभएको छ। काङ्ग्रेसीहरूलाई यसरी चिनाइएको छ –

काङ्ग्रेसी सब छौ निरीह अति नै कामै नलाग्ने भयौ ।
आफ्नै कारणबाट दुर्बल बनी सर्कारबाटै गयौ ॥
सारै निष्क्रिय छौ र दुर्बल सधैँ केही नगर्ने भयौ ।
नेपाली जनका हितार्थ अब ता गर्नै नसक्ने भयौ ॥

एमालेको बयान यसरी गरिएको छ –

एमाले ! जति जे सुकै भन तिमी उल्टो छ तिम्रो कुरो ।
देख्ता बाहिर सौम्य छौ तर सधैँ साह्रो छ तिम्रो चुरो ॥
तिम्रो लक्ष्य छ दूरको जतिसुकै हाँसेर बोले पनि ।
तिम्रो नै व्यवहारबाट बुझियो कप्टी रहेछौ भनी ॥

राप्रपाको चित्र यस्तो छ –

नेता छौ जति राप्रपातिर सबै हौ स्वार्थगामी अति ।
खाल्डामा अब पर्दछौ बुझ तिमी बिग्रेछ सारै मति ॥
छोड्यौ नैतिकता समग्र किन हो ? लाजै नमान्ने भयौ ।
मन्त्री हौ कि प्रधान जे बन तिमी साँच्चै शिखण्डी भयौ ॥

च्याँखे दलहरूलाई कविले यसरी छाँस्नु भएको छ –

चाहे मज्दुर या किसान अथवा सद्भावना हौ तिमी ।
जे जे नाम र कामका दलहरू जस्तै बनाऊ तिमी ॥
तिम्रा भाषण घोषणा सकल हुन् सर्वांश धोका दिने ।
तिम्रो स्वार्थ रहेछ भित्र सबको बाँडेर सत्ता लिने ॥

राष्ट्रको हत्या गरेर लुछिचुँडी खाने गिद्धचरित्रका नेताहरूको एक झलक यस्तो छ –

के भन्ने अब भन्नु नै फजुल हो कोही नसुन्ने भयौ ।
सुन्दैनौ अथवा नपुंसक सरी कामै नलाग्ने भयौ ॥
नेता हो ! क्रमले रसातलतिरै यो देश लाने भयौ ।
जे भेट्छौ यस राष्ट्रमा लुछिचुँडी बाँडेर खाने भयौ ॥

कवि एक जना उच्चपदस्थ राष्ट्रसेवक पनि हुनुभएकाले अरू राष्ट्रसेवकहरूले आफ्नो कर्तव्य र जिम्मेवारीलाई छोडेर नेता र दलको चाप्लुसी गर्दै अवसरवादी बनेको तथा दलका झन्डा बोकेर हिँडेकोमा उहाँलाई सुपाच्य हुँदैन । त्यस्ता राष्ट्रसेवकको जामा पहिरेका नेतापूजक र दलसेवक अकर्मण्य भ्रष्टहरूको वर्णन यसरी गरिएको छ –

हाम्रा शासक राष्ट्रसेवकहरू छोडेर आफ्नो पन ।
पस्तैछन् दलभित्र चाप्लुस बनी झण्डा समातीकन ॥
जस्को जे सरकार बन्छ उसकै बन्छन् पुजारी सब ।
बस्छन् नित्य कुरेर द्वार दलको के काम गर्लान् अब ॥

यसरी प्रस्तुत कविताले राजनीति र प्रशासनको क्षेत्रमा बढ्दै गएको वीभत्स अवस्थाको सहज प्रस्तुतीकरण गरेको पाइन्छ ।

### छोडिद्यौ राजनीति

स्रग्धरा छन्दमा लेखिएका चार ओटा पद्यको यस कवितामा सबै प्रकारको मनपरीतन्त्रलाई राजनीति मान्ने हो भने त्यस्तो राजनीति छोड्न त्यसका मतियारहरूलाई शालीन शैलीमा सुझाव दिइएको छ । यस कवितामा राजनीतिको आदर्शरूप देखाउँदै त्यस्तो राजनीति गर्न नसके छोड्नु नै राम्रो हो भन्ने भाव पाइन्छ । कविले देख्न चाहेको राजनीतिको रूप यस्तो छ –

त्यागी सर्वस्व सारा तनमनधनले गर्नु पो राजनीति ।
दुःखीको आँसु पुछ्ने दृढतर सुरले हिँड्नु पो राजनीति ॥

तर विडम्बना के छ भने देशमा यसको ठीक विपरीत प्रकारको राजनीति हाबी भएको छ र जनता बेहाल हुन पुगेका छन् । सिद्धान्त छोड्नु, मान्छे मार्नु, धनसङ्ग्रह गर्नु, पार्टी फुटाउनु, गुन्डागर्दीलाई पेसा बनाउनु, अन्याय गर्नु र जस्तो सुकै अनैतिक कामहरू गर्न लाज नमान्ने अवसरवादी हुनु नै राजनीति हो भने त्यसले न त देशको विकास हुन्छ न त जनताको कल्याण सम्भव छ भन्ने कविको कवितात्मक विश्लेषण यस कवितामा पाइन्छ । यस्तो राजनीतिलाई छोडिदिए देशमा अनीति अरू बढ्न पाउने थिएन भन्ने कविको आदर्शवादी चिन्तन कवितामा छरिएको छ । जीवनका सम्पूर्ण बाटा र सम्भावना नभएपछि राजनीतिमा आउने व्यक्ति र शक्तिले नै सबै विकृति जन्माएकाले त्यसमा शुद्धता र संशोधनको आग्रह कविले राख्नुभएको छ । विद्यार्थी जीवनमा आफैँ नेता बन्नु भएका कविले आफुले सोचेजस्तो राजनीति नभएको देखेर छटपटी र उकुसमुकुसको अनुभव गर्दै यो कविता लेखेको देखिन्छ ।



# पत्रैपत्र २०५९ का भूमिकाबाट

[३२ वर्ष लामो श्री ५ को सरकारको अवच्छिन्न सेवाबाट अवकाश प्राप्त गरेपछि जीवनको सबभन्दा आनन्दको समय मैले बिताइरहेको छु। विद्यार्थी अवस्थादेखि लिएर लामो जागिरे जीवनसम्ममा पनि मैले कहिल्यै पनि आनन्द र फुर्सदको जीवन बिताउन पाएको थिइन। केही वयस्क भएपछि आफ्नै खुट्टामा उभिएर पढ्न थालेको मैले रातदिन दोहोरो पढाइ गर्दागर्दै अध्ययन पूरा नै नगरी सरकारी सेवामा प्रवेश गरेको थिएँ। सेवामा प्रवेश गरिसकेर पनि मैले आफ्नो बाँकी पढाइ स्वदेश र विदेशमा पढेर पूरा पनि गरेँ। आफुमा आश्रित परिवारको लालनपालन र संरक्षण गर्दै आफ्नो पदको मर्यादा र उत्तरदायित्वको निर्वहण समेत गर्दै कर्तव्यपथमा अनवरत अग्रसर रहनुपरेको हुँदा मैले समाज, अध्यात्मक, परोपकार र परत्रतर्फ सोच्नेसम्म पनि कहिल्यै अवकाश पाइन। टाँगामा जोतिएको र आँखामा पट्टी लगाइएको घोडा जस्तै स्वार्थको सीमित बाटोमा हिँड्दाहिँड्दै जीवनको महत्त्वपूर्ण अंश समाप्त भएको मैले थाहै पाउन सकिन। सेवाबाट अवकाश पाएको एक वर्षसम्म लामो जागिरको संस्कारले मलाई राम्रो, मर्यादित र सुविधायुक्त कुनै पद पाएमा फेरि पनि संलग्न हुने लालसाले अनवरत आकर्षित गरिरह्यो। त्यस समयमा मेरा भावी जीवनका तीन विकल्पहरू मैले सोचेको थिएँ। पहिलो विकल्प उपर्युक्त अनुसारको पदमा प्रवेश पाउन दौडधुप गर्ने। दोस्रो विकल्प जीवनभर विभिन्न महत्त्वपूर्ण र संवेदनशील पदहरूमा बसी अनुभव गरेका कुराहरूको पसल थापी स्वदेशी तथा विदेशी ग्राहकहरूलाई विक्री गर्न सुरु गर्ने। तेस्रो विकल्प यी माथि उल्लेख गरिएका दुवैथरी विकल्पहरूलाई छोडी समाजसेवा, दार्शनिक तथा आध्यात्मिक चिन्तन र तीर्थाटन गरी शेष जीवन व्यतीत गर्ने।

यसरी उपर्युक्त अनुसारका तीन थरी विकल्पहरूमध्ये पहिलो विकल्पका सम्बन्धमा मैले विचार गर्दागर्दै मेरा अनन्य सहयोगी तथा शुभेच्छुक मित्रहरूले विभिन्न शक्तिकेन्द्रहरूमा पुगी मेरो सिफारिस गर्न

लागेको थाहा पाएपछि मैले त्यसतर्फको सोचाइ चटक्कै छाडिदिएँ र दोस्रो विकल्पतर्फ सोच्न थालेँ। दोस्रो विकल्पमा पनि म जस्तो संस्कार, अस्मिता, नैतिकता र राष्ट्रिय सोच भएको सामान्य व्यक्तिले गर्न नसक्ने साहसिक काम भएको हुँदा सो विकल्प पनि मैले पर पन्छाएँ। हाल म तेस्रो विकल्पतर्फ अग्रसर भएको छु। अवकाश प्राप्त अमूल्य जीवनको पहिलो वर्ष विभिन्न विकल्पका खोजीमा खेर गएको भए तापनि दोस्रो वर्षदेखि मैले आफुलाई एक निश्चित मार्गमा अग्रसर गराएको छु। यसैको शृङ्खलाको रूपमा २०५७ सालदेखि विभिन्न देवीदेवताका पवित्र धाम र तीर्थस्थलहरूको भ्रमणमा मैले आफ्नो समय सदुपयोग गर्न लागेको छु। यो क्रम भविष्यमा पनि अक्षुण्ण राख्ने सोचाइमा छु। यसै अनुरूप विभिन्न सामाजिक तथा धार्मिक स्वयंसेवी संस्थाहरूमा संलग्न भई आफुले सकेको यथायोग्य सहयोग गरिरहेको पनि छु। मैले मेरो शेष जीवन यी कार्यका साथै दार्शनिक, आध्यात्मिक तथा साहित्यिक सेवामा पनि समर्पण गर्ने सोचाइ राखेको छु।]

# पत्रैपत्र २०५९

'पत्रैपत्र, २०५९' कवि शरदकुमार भट्टराईका १३ ओटा छन्दोबद्ध कविताहरूको सङ्ग्रह हो। यो परिपक्व र दूरदर्शी बाबुले परदेशमा बस्ने छोरालाई विभिन्न विषयमा सल्लाह दिँदै र सतर्क गराउँदै अन्तिममा स्वदेश फर्किन हार्दिक आह्वान गर्दै लेखिएका भावनात्मक र हार्दिक स्नेह आप्लावित कविता मञ्जरी हो। यस सङ्ग्रहका कविताले हितैषी बाबुले छोरालाई हरेक किसिमबाट हित चिताएको अभिप्राय प्रकट गरेकाले कविले सङ्ग्रहको शीर्षकसँगै 'छोरालाई पत्र कवितामा' भन्ने पदावली पनि समावेश गर्नुभएको छ। बाहिरबाट यसको शीर्षक हेर्दा सामान्य 'पत्रैपत्र' भए तापनि देशको राजनीतिक परिस्थिति, नेताहरूको प्रवृत्ति, मानवीय व्यवहार र आफ्नै निजी अवस्थाका विषयमा पनि

कविले मार्मिक भावना व्यक्त गर्नुभएको छ। कवि स्वयंले पत्रैपत्रको लामो भूमिकामा उल्लेख गरे अनुसार जीवन सबै स्थितिको समष्टि हो भन्ने सन्देश यस सङ्ग्रहबाट अवगत हुन्छ । कविले सङ्ग्रहको भूमिकामा आफ्ना जीवनका महत्त्वपूर्ण मोड, मार्ग र कार्यहरूको उल्लेख गर्नुबाट यो सङ्ग्रह कविको जीवनयात्राको पनि एउटा अंश हो भन्ने तथ्य बुझ्न सकिन्छ।

प्रस्तुत सङ्ग्रहको विशेषता के छ भने प्रत्येक कविताको भूमिकाका रूपमा प्रारम्भमै कविताबाटै सम्बद्ध कविताको विषयवस्तुको सङ्केत भएको छ। यो एक प्रकारले कविले आफ्नै कवितामा गरेको कवितात्मक समालोचना हो । कविताले राष्ट्रभक्तिको भाव जगाउन, युवाशक्तिको महत्त्व देखाउन, राजनीति क्षेत्रका विकृति र विसङ्गतिहरूको न्यूनीकरण गर्न र आफ्नो अतीतप्रति गौरवबोध गर्दै सबै नेपालीलाई जागरुक बनाउन सहयोग पुऱ्याएको देखिन्छ। यहाँ यस सङ्ग्रहका १३ ओटै कविताको मूल कथ्य तथा काव्यात्मक विशेषताहरूको निरूपण गरिएको छ।

## १. छोरालाई पत्र

शार्दूलविक्रीडित छन्दको यस कवितामा कविले पुत्रलाई पत्र लेख्नुको पृष्ठभूमि र आफ्नो जन्मभूमिको रूपरेखा प्रस्तुत गर्दै देशको आतङ्कपूर्ण स्थिति देखाई पुत्रलाई आफ्नो मान्यता र मौलिकता नछोड्न अनुरोध गरिएको छ। आफ्नो जन्मस्थलको सम्झना र ममताले आकुलव्याकुल कवि बुढेसकालमा बाध्यतावश राजधानीमा बस्न बाध्य भए पनि आफ्नै गाउँ गएर बस्न चाहनुहुन्छ र स्वच्छन्दतावादी प्रवृत्तिको प्रकाशन यसरी गर्नुहुन्छ –

माटामा अझ गन्ध बग्दछ उही वर्षाद पैलो हुँदा।
वर्षिन्छन् मृदु भावना झरझरी त्यै मृत्तिकामा छुँदा ॥
मेरो गाउँ समीप हाँस्तछ सधैँ सर्वोच्च शैलेश्वर।
जाऊँ लाग्छ सधैँ सधैँ किन उही पाखा पखेरातिर ॥

कवि अझ स्पष्ट हुँदै आफैँ काठमाडौँ बसेर यी सबै आनन्दका स्रोतहरू बिर्संदै गएको स्वीकार गर्दै यसो भन्नुहुन्छ –

मेरा पर्वत उच्च शैल वनमा उन्माद फैलाउँदै ।
खोज्छन् व्याकुल भै सधैँ वनचरी सङ्गीतमा गाउँदै ॥
खोज्छन् बालखकालका दिनहरू टाढा कुनामा बसी ।
मैले नै सब बिर्सिएँ पर भएँ यो काठमाडौँ पसी ॥

हाम्रो देश प्रकृति र संस्कृतिले सुन्दर र समृद्ध छ । यसको एउटा शब्दचित्र यसरी उतारिएको छ –

नाच्छन् मत्त मयूर फर्फर जहाँ ठाडो गरी पुच्छर ।
इन्द्रेणी रँग थप्छ नित्य जसमा पारी सबै सुन्दर ॥
फर्की हेर तिमी उतैतिर सधैँ बस्छन् जहाँ शङ्कर ।
पृथ्वीको शिर झैँ छ उन्नत सधैँ नेपाल हाम्रो घर ॥

यस्तो सुन्दर देशमा निर्दोष जनतालाई गोली हानेर मार्ने र गरिबका झुपडीमा आगो लगाउने कुकर्म पनि प्रशस्त भए । यस्तो उपद्रोबाट कतै पनि नपुगिने सल्लाह दिँदै कवि देशप्रति चिन्तातुर हुनुभएको छ । जस्तै –

दुःखी दीन गरीब बन्धु जनमा गोली चलाए भुटे ।
निर्दोषी घर गाउँ रामझुपडी आगो लगाए लुटे ॥
के लेखौँ अझ धेर ती कुजनले के के उपद्रो गरे ।
यस्तो चाल चलेर यो मुलुकमा पुग्ने कहाँ हो भरे ॥

यस्तो स्थिति सिर्जना हुनुको मूल कारण नेताहरूको स्वार्थ र नालायकी हो । नेताहरूको स्वार्थ र राजनीतिको असफलताका कारण देशमा उत्पन्न अव्यवस्थाबारे लेखेर नसकिने स्थिति आएको छ । कविको स्पष्ट अभिव्यक्ति यस्तो छ –

नेता छन् सब स्वार्थमा रत सधैँ आफैँ हराई सके ।
हिंसा लूट अशान्तिबाट जनता सारै डराई सके ॥

हाम्रो जीवन खस्कँदो छ अति नै गिर्दो छ अर्थस्थिति ।
हामी छौँ रनभुल्लमा सब जना धेरै म लेखौँ कति ॥

कार्यवश प्रवासमा बसे पनि आफ्ना धर्मसंस्कृति, कला र संस्कार नबिर्सन कवि पुत्रलाई हितकर सल्लाह दिनुहुन्छ । वृद्ध, बुद्धिमान् र वेदान्ती बुबाको सल्लाह नमाने परिणाममा पश्चात्ताप हुने पूर्वसावधानी पनि कवितामै सङ्केत गरिएको छ । तल दिइएका तीनओटा पद्य एउटा बाबुको एउटा छोरालाई मात्र नभई सबै बाबुका विश्वका जुनसुकै देशमा बस्ने सबै छोराहरूलाई अर्ती दिन समर्थ छन् –

जान्दैनौ यदि धर्मसंस्कृतिसँगै आफ्नै कुरा क्यै भने ।
के बोल्छौ भन तत्त्वका बहसमा खोक्रा तिमी छौ भने ॥
कैल्यै पुत्र ! नबिर्स संस्कृति कला हाम्रा पुराना कुरा ।
मान्छे बाँच्तछ सत्त्वसार सँग ली संस्कारका आँकुरा ॥

हाम्रा शास्त्र असङ्ख्य छन् जति पढौँ पुग्दैन हाम्रो गति ।
छानी यी सबबाट नै पढ तिमी सुध्रन्छ तिम्रो मति ॥
यो संसार अनित्य हो बुझ तिमी बूढो हुँदाको भय ।
गीताजी पढ नित्य बन्नुछ भने ज्ञानी गुणी निर्भय ॥

माथिका दुई ओटा पद्यमा दिइएको अर्ती उपदेश नमाने त्यसको परिणाम के हुन्छ त्यो पनि कवितामै दिइएको छ –

छन् चारैतिर सभ्य ती सहरमा नाच्ने र खाने घर ।
हाम्रो संस्कृति सभ्यतासँग कती मिल्ला विचार्ने गर ॥
आफ्नो संस्कृति सभ्यता सब भुली जस्तोसुकै जे गरे ।
पश्चात्ताप हुनेछ यो बुझ तिमी बेकार होला भरे ॥

यस कविताको सारांश प्रवासमा बसेका पुत्रलाई स्वदेश फर्काउने उद्देश्यमा केन्द्रित छ । कविताको अन्तिम पद्यमा यही सारांश खिचिएको छ र विदेशमा बस्ने सम्पूर्ण नेपालीलाई नेपाल फर्किन सामूहिक आह्वान गरिएको छ –

जाला यौवन बाहिरैतिर बसी के काम गर्छौ पछि।
हुन्छौ वृद्ध अशक्त जीर्ण बहुतै बेसार फर्केपछि ॥
सारा यी कटु सत्यबाट सजिलै शिक्षा लिई सत्वर ।
छोडी मोह विदेशको अब तिमी फर्केर आऊ घर ॥

## २. आजका नेता

शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कविताको भूमिका स्वरूप लेखिएका अनुष्टुप् र शार्दूलविक्रीडित छन्दका पद्यमा कविले देशको राजनीतिक अवस्थाबारे पुत्रलाई कवितात्मक पत्र लेख्न लागेको सूचना दिनुभएको छ। २०५३ सालमा संसद् भवनमा संसद्को बैठक चलिरहेको अवस्थामा प्रत्यक्षदर्शी कविले त्यसको यथार्थ यहाँ देखाउनु भएको छ र नेताहरूको चित्र र चरित्र पनि उदाङ्गो पार्नुभएको छ। मूल कविता सुरु गर्नुभन्दा अगाडि भूमिकाका रूपमा कवि प्रस्तुत कवितापत्रमा राजनीतिबारे लेख्न लागेको सूचना यसरी दिनुहुन्छ –

बुझेका छौ सबै हाल त्यहाँ बस्ता विदेशको ।
अब लेख्तै छु हे पुत्र ! राजनीति स्वदेशको ॥
प्रजातन्त्र नजानेरै खेलौना सरि भैसक्यो ।
नेताले घाइते पारे सारा अस्तित्व गै सक्यो ॥

नेताहरूको प्रारम्भिक तस्बिर पनि कविले उतार्नु भएको छ –

लुछाचुँड गरी सारा देश पारे अपाङ्ग यो ।
जता हेर्‍यो उतै आज भताभुङ्ग छ देश यो ॥
राष्ट्रघातक यी हुन् कि ? मृत्युवाहक हुन् सब ।
प्रयत्नरत छन् सारा राष्ट्रमा डाक्न विप्लव ॥

२०४६ ।०४७ सालको जनआन्दोलनपछि अरू दलहरू भन्दा नेपाली काङ्ग्रेस सत्तामा बढी बस्यो र बीपीको परिकल्पनालाई बिर्सेर र समाजवादलाई छाडेर सत्तालोलुप मात्र भयो भन्ने कविको गुनासो यस्तो छ –

बीपीको परिकल्पना पर भयो काङ्ग्रेस तिम्रो अब ।
लड्दै छौ पद निम्ति लोलुप बनी आदर्श छोड्यौ सब ॥
सत्ता खातिर जोसुकै सँग तिमी सम्बन्ध राख्ने भयौ ।
त्यागी सौम्य समाजवाद सहसा अत्यन्त टाढा गयौ ॥

काङ्ग्रेसपछि सत्ताको स्वाद र स्वार्थमा डुबेको एमालेको नीति र नैतिकताबारे पनि कविले चोटिलो प्रहार गर्नुभएको छ । निम्नलिखित तीन ओटा पद्यले एमालेको भित्री र बाहिरी रूप छर्लङ्ग पारेका छन् –

ऐले काँध चढी गरीब जनको आएर नेता भयौ ।
बाँड्छौ केवल झूटभूट सपना साँचो नबोल्ने भयौ ॥
बिस्तारै जनता भए परपरै व्यापार गर्ने भयौ ।
बिर्सेछौ दिन दुःखका कति छिटै कोही नचिन्ने भयौ ॥

तिम्रो भित्र छ कालकूट विषझैँ मीठो सधैँ बोल्दछौ ।
थोत्रा भाषण रट्तछौ अझ तिमी सोझा सुधा ठग्दछौ ॥
हे काम्रेड् ! कतिसम्म निर्दय बनी आत्मा तिमी मार्दछौ ।
मुर्दा भो जड साम्यवाद कसरी बोकी अझै हिँड्दछौ ॥

नेता हो ! कति बस्त छौ अझ तिमी बोकी विदेशीपन ।
छेपारो सरि फेर्दछौ रङ तिमी कप्टी छ तिम्रो मन ॥
आऊ स्पष्ट भएर बाहिर यहाँ छोडेर जालीपन ।
तिम्रो हो कुन राष्ट्रवाद अब ता खोलेर छाती भन ॥

जनवादी क्रान्तिका नाममा एकथरी कम्युनिस्टहरू मान्छे मार्दै हिँडेको यथार्थसँग कवि परिचित हुनुहुन्छ । देशमा यस्तो हिंसात्मक गतिविधि सञ्चालन गर्ने शक्ति एक दिन आफैँ भस्मासुर झैँ समाप्त हुने चेतावनीको स्वर यसरी मुखरित भएको छ –

तिम्रो हात छ रक्तरञ्जित सधैँ राताम्य चारैतिर ।
नाच्छौ नित्य रमाउँदै रगतले मातेर चारैतिर ॥
यस्तो चाल चलेर यो मुलुकमा कस्को भलो गर्दछौ ।
मार्छौ आखिर यी गरीब जनता आफैँ तिमी मर्दछौ ॥

नेताले गर्ने अत्याचार र जनताको सहनशीलताको पनि सीमा हुन्छ। तर नेता सीमाहीन अत्याचारी भए भने जनताको पनि सहनशीलता सीमाहीन बन्दछ। त्यस बेला नेताले केही पनि गर्न सक्ने स्थिति हुँदैन। राजनीतिको यो सामान्य ज्ञानसमेत नभएका नेताहरूलाई कवि प्रश्न मात्र होइन प्रश्नावली नै सोध्नुहुन्छ –

के गर्छौ ? पदमा बसेर मन यो सारै डरायो भने ।
के गर्छौ ? धन मात्रले हृदयको आस्था हरायो भने ॥
तिम्रो कर्तुतबाट सौम्य जनता सारै रिसायो भने ।
के गर्छौ ? जनता उठी सडकमा उर्लेर आयो भने ॥

जनताका काम हुनुपर्ने संसद्मा नेताहरू साँढे लडेभैँ लड्छन् । जनताका लागि कानुन बानउनेहरू नै कानुन हातमा लिएर विध्वंस मच्चाउँछन् । उनीहरूलाई लोकलाजको अलिकति पनि डर छैन । यस्तो दृश्य देख्नुपर्दा कविलाई असह्य वेदना हुन्छ र यस्तो कविता स्फुरण हुन्छ –

नेता हो ! किन लड्दछौ सदनमा ? साँढे लडेभैँ गरी ।
कुर्सी मेचहरू टिपी सदनमा बर्साउँछौ बर्बरी ॥
गर्छौ भाषण शिष्टता सब भुली नाघेर सीमाहरू ।
कस्ता सांसद हौ ? र संसद हरे ! निर्लज्ज नेताहरू ॥

सदनमा नेताहरू कहिले साँढे भैँ लड्ने गर्दछन् भने कहिले भेडा भैँ बिक्ने पनि गर्दछन् । कहिले उनीहरू भ्रुटा र जाली बनेर जनता ठग्ने गर्छन् । जनता कालीको रूप लिएर उठ्यो भने उनीहरू सजिलै मासिने छन् भन्ने कविको विश्वास यसरी व्यक्त भएको छ –

तिम्रा मूल्य र मान्यता सब गए बाँच्छौ कसोरी तिमी ।
भेडा झैँ जब बिक्तछौ सदनमा हाँस्छौ कसोरी तिमी ॥
ठग्छौ यी जनता अझै कति तिमी झूटो र जाली बनी ।
तिम्रो नाश अवश्य हुन्छ जनता उठ्ने छ काली बनी ॥

राज्य कानुनले नभई गुन्डाहरूको हुल र हुँडलोले चलिरहेको छ । नेताले मस्ती मार्ने र जनताले सास्ती बेहोर्नुपर्ने कारण यही हो । गुन्डा हुनेले यस मुलुकमा जे पनि गर्न सक्ने सत्यको प्रस्तुतीकरण यसरी गरिएको छ –

नेता देशविदेशमा घुमिफिरी मस्ती सधैँ गर्दछन् ।
गर्मी शीत सही गरीब जनता अन्यायमा मर्दछन् ॥
कस्तो यो छ विडम्बना अझ यहाँ यो न्याय कस्तो हरे ।
गुन्डा छन् जससाथ यो मुलुकमा उस्को सबै हुन्छ रे ॥

कवि नेताहरूका कटु आलोचक मात्र होइन रचनात्मक मार्गदर्शक पनि हुनुहुन्छ । सरकारी सेवाका उच्च पदमा लामो समयसम्म काम गर्दा भोगेका समस्या र निकालेका समाधानका उपायहरूले खारिएका कविले सांसद र नेताहरूलाई सुध्रिने उपाय पनि कवितामै बताइदिनु भएको छ ।

सहिदको सपना पूरा गर्छौं भनेर डङ्का पिट्तै महङ्गो गाडी चढेर दौडिने सांसदहरूलाई क्रान्तिवीरहरूका रगतका टाटा छोएर माफी माग्न कविले सुझाव दिनुभएको छ –

आऊ सांसद हेर यो सडकमा क्यै चिह्न झैँ देख्तछौ ।
योद्धा वीर सपूपका रगतका टाटा अझै देख्तछौ ॥
गाडीबाट झरेर ती रगतका टाटा समातीकन ।
माफी माग विनम्रतासँग तिमी बाटो बिराएँ भन ॥

देश र जनताको पक्षमा काम नगर्ने नेताहरूले राजनीति गर्नुको साटो खरानी घसेर हिँड्नु राम्रो हो भन्ने कविको तर्क छ । सत्तालाई मात्र लक्ष्य बनाएका नेताहरूलाई सत्कर्म गर्न, सीमाभित्र रहन र आत्माको पुकार सुनेर काम गर्न सुझाव दिँदै कवि यसो भन्नुहुन्छ –

नेता हो ! अब छोड शासन सबै बाहीर आइ बस ।
गर्छौ के अब राजनीति यसरी जाउ खरानी घस ॥
सत्ता मात्र चिताइ लक्ष्य अति नै छोटो लिई उठ्तछौ ।
जे गर्दा पुगिइन्छ माथि सजिलै त्यै काममा जुट्तछौ ॥

नेता ! निर्भ्रम निर्विकार मनले सत्कर्म गर्ने गर ।
होऊन् निर्भय यी गरीब जनता पाएर तिम्रो भर ॥
सत्ताको सुख मात्रमा मन दिई सीमा ननाघ्ने गर ।
आत्माको सुन सत्पुकार अब ता मानेर आफ्नै डर ॥

शठ र शस्त्रको परिचालन गरेर सत्ता हत्याउन बानी परेका नेताहरूलाई शास्त्रको ज्ञानले काम नगर्नु स्वाभाविकै हो । त्यसमा पनि परब्रह्मसँग साक्षात्कार गराइदिने वेदान्तको आध्यात्मिक आदेश र उपदेश उनीहरूका लागि सर्पलाई दुध खुवाउनु जस्तै प्रत्युत्पादक हुन्छ भन्ने ज्ञान कविलाई छ । यथार्थ यही हो तापनि कविले परब्रह्म, अध्यात्म, आत्मज्ञान आदि पारिभाषिक शब्दहरूको प्रयोग नगरी परोक्ष तर सरल भाषामा मतिभ्रष्ट नेताहरूलाई वेदान्तको ज्ञान दिने काव्यात्मक चतुऱ्याइँ यस कवितामा देखाउनु भएको छ । निम्नलिखित पद्यले यही तथ्यको पुष्टि गर्दछ –

नेता हो ! गर काम स्वच्छ मनले यस्मै महापुण्य छ ।
लान्छौ आखिर साथ के भन तिमी जान्छौ जहाँ शून्य छ ।
जस्को कीर्ति छ बाँच्छ त्यै नर भनी शास्त्रादिको हो मत ।
यै सोची अब काम क्यै गर तिमी होला यसैमा हित ॥

सारांशमा हेर्दा 'आजका नेता' कविताले एउटा अनुभवी, युगबोधी र दूरदर्शी बाबुले छोरालाई लेख्ने पत्रको प्रविधि अपनाएर नेपालको समकालीन राजनीतिक परिदृश्य देखाउँदै नेतृत्व वर्गको त्रुटि र कमजोरी हटाई आदर्श राजनीतिक संस्कारको अपेक्षा गरेको छ र त्यसबाट कविमा सन्निहित नेपाल र नेपालीको सर्वोत्तम हितको भावनालाई विशिष्ट रूपमा प्रतिबिम्बित गरेको पाइन्छ ।

## ३. आजको विडम्बना

चार-चार पङ्क्तिका अनुष्टुप् छन्दका तीनओटा पद्यमा भूमिका र शार्दूलविक्रीडित छन्दका चार ओटा पद्यमा मूल कविताको रूप तयार पारिएको यस रचनामा कविले कविता लेखनका मान्यता प्रस्तुत गर्नुका साथै देश खाने दुई प्रकारका वादको उल्लेख गर्नुभएको छ । भूमिकाका रूपमा आएको पहिलो पद्यमै लेखन आयाममा भन्दा पनि गुणात्मकतामा जीवित हुने मान्यता प्रस्तुत गर्नुभएको छ –

हे पुत्र ! पत्रका पाना जति धेरै भए पनि ।
गुदी छैन भने त्यस्को हुँदैन अर्थ तैपनि ॥

साहित्यकारले कस्तो अवस्थामा साहित्य लेख्तछन् भन्ने मान्यतालाई पनि कविले यसै भूमिकामा स्पष्ट पार्नुभएको छ । देशको अराजकता र मानवीय कुण्ठा एवं अभावको वृद्धिका साथै अनुशासन र सद्भावको पतन भएपछि काव्यमा लेखिने भाव पनि यस्तै हुने कविको विचार छ –

कुण्ठा अभाव दारिद्र्य चौतर्फी जब देख्तछन् ।
कविलेखकले ज्यादा यिनै नै भाव लेख्तछन् ॥
अथवा देशमा ज्यादा भाँडभैलो भयो भने ।
अनुशासन सद्भाव राष्ट्रबाट गयो भने ॥

मूल कवितामा चाहिँ सबैतिर भ्रष्ट र हिंस्रक शक्ति एवं समूहले राज गरेर देशलाई अस्तव्यस्त बनाएको भाव व्यक्त गरिएको छ । आज दुई ओटा वादले एकछत्र शासन गरेर देश र जनताको वर्तमान र भविष्य दुवै डुबाइदिएको दृष्टिकोण यस कवितामा पाइन्छ । यी वादहरूको प्रतिकार गर्न नसकी आज हामी अपाङ्ग झैँ भएका छौँ र निरीहता देखाइरहेका छौँ भन्ने कविलाई अनुभूति भएको छ । ती दुईओटा वादमध्ये एउटा माओवाद हो भने अर्को भ्रष्टवाद (भ्रष्टाचार) हो । यी दुई वादले नेपाललाई बिगारेको मात्र होइन खाई नै सके भन्ने कविको विचार छ । जस्तै –

माओवाद भनेर अग्रसर छन् कोही भँडाहा बनी ।
कोही देश लुटेर आज खुस छन् ठूला यिनै छन् धनी ॥
माओवाद र भ्रष्टवाद दुइले यो देश खाई सके ।
कस्तो भाग्य रहेछ यो मुलुकको सारा डराई सके ॥

यस्तो अवस्थामा आज नेपाल र नेपाली बाँचिरहेकाले सर्वत्र विडम्बना छ भन्ने सन्देश प्रवाह गर्ने यस कविताको भाव, विचार र शीर्षक बीच सामञ्जस्य देखिन्छ ।

## ४. कविजी उठ

कविले प्रस्तुत शीर्षकको कविताका सम्बन्धमा लेखेका पद्यमा अनुष्टुप् र मूल कवितामा लेखिएका पद्यमा शार्दूलविक्रीडित छन्दको प्रयोग भएको यस कवितामा कविको शक्ति, स्वरूप र कर्तव्यबारे प्रकाश पारिएको छ । कविले अन्याय, अत्याचार, अव्यवस्था र अस्तव्यस्तताका विरुद्ध आफ्ना कलमलाई राँको बनाएर उठ्नुपर्छ भन्दै सम्पूर्ण कविवृन्दलाई क्रान्तिकारी, सिर्जनशील र मार्गदर्शक भएर कविता लेख्न उत्प्रेरित गर्नुभएको छ । कविका दृष्टिमा कवि यी हुन् –

कवि हुन् राष्ट्रका स्तम्भ आँखा हुन् यस राष्ट्रका ।
कवि हुन् जीवनीशक्ति साहित्य र समाजका ॥

कविका दृष्टिमा कवि क्रान्तदर्शी र समाजका अग्रणी भएकाले उनीहरूको हुङ्कारमा राष्ट्र सारा डराउँछ र उनीहरूको वाणीबाट दुराचार पनि हराउँछ । राष्ट्रका मेरुदण्ड बनेका कवि भिन्न नभई समाज र राष्ट्रका लागि अभिन्न भएर उठ्नुपर्दछ । उनीहरू कसैको हतियार र मतियार बनेर हिँड्न नहुने सामयिक र सावधानीपूर्ण सन्देश यस कविताले दिएको छ । जस्तै –

विश्वसाहित्यका स्रष्टा द्रष्टा उन्नत राष्ट्रका ।
कविजी क्रान्तदर्शी हुन् अगुवा हुन् समाजका ॥
हुङ्कार कविले गर्दा राष्ट्र सारा डराउँछ ।
उगेल्दा अग्निको ज्वाला दुराचार हराउँछ ॥

त्यसैले कवि साँच्चै नै देशका मेरुदण्ड हुन् ।
नियन्ता नीतिनिर्माता दिव्य ज्ञान अखण्ड हुन् ।।
यो शक्ति भाँडिनै हुन्न बाँडिनै हुन्न भिन्न भै ।
समाज राष्ट्रका लागि उठ्नुपर्छ अभिन्न भै ।।

कसैका पछि लागेर कसैको हतियार भै ।
हुँदैन कविले हिँड्नु कसैको मतियार भै ।।
कविले उठ्नु पो पर्छ बटारेर दुवै कर ।
जस्का हुङ्कारले कामोस् स्वार्थी समाज थर्थर ।।

यस्तै भूमिका र प्रतिभाशक्ति भएका कविको कर्तव्य देखाउनु र उनीहरूलाई जागरुक बनाउनु नै यस कविताको मूल उद्देश्य देखिन्छ । राष्ट्रका मूल्यमान्यता समाप्त हुँदा र जोस र जाँगर शिथिल बन्दा कवि तातेर उठ्नुपर्‍यो भन्दै कवि कविताको प्रारम्भमै कविहरूलाई यसरी तताउनु हुन्छ –

के भो आज अनर्थ यो मुलुकमा आस्था हराई सक्यो ।
ज्यूँदो जाँगर देखिँदैन किन हो यद्वा डराई सक्यो ।।
कल्ले बोल्दछ आज निर्भय बनी खोजेर जुट्नु पर्‍यो ।
साँच्चै हे कवि ! हातमा कलम ली तातेर उठ्नु पर्‍यो ।।

भ्रष्टाचारीहरूलाई दुत्कार्न र विध्वंसकारीहरूलाई मुक्का बजार्न आह्वान गर्दै कविले कविहरूको सम्मान गर्न पनि कवितामै सल्लाह दिनुभएको छ –

भ्रष्टाचार छ व्याप्त यो मुलुकमा दुत्कार गर्ने गर ।
विध्वंसीसँग युद्ध छेड कविजी मुक्का बजार्ने गर ।।
नेपालीपन शुद्ध राख कविजी यै मृत्तिकामा मर ।
आफ्ना मूल्य र मान्यता सकलको सम्मान गर्ने गर ।।

कविले कविताको प्रारम्भमा कविको शक्ति र कर्तव्य देखाउनु भएको छ भने बीचमा कसैको पिछलग्गु नबन्न सल्लाह पनि दिनुभएको छ। यसै खण्डमा भ्रष्टाचारीहरू र विध्वंसीहरूलाई दुत्कार्न र मुक्का बजार्न आह्वान गर्नुभएको छ। तर कविताको अन्तिमतिर आइपुग्दा राँको बालेर उठ्न र अन्तिममै आइपुग्दा चाहिँ आफैँ आगो उगेलेर उठ्न अनुरोध गर्दै प्रत्येक कविलाई क्रान्तिदूत बनेर अघि बढ्न जोसिलो सन्देश दिनुभएको छ। कविहरूलाई राँको बोक्न र आगो उगेल्न हौस्याउने दुई पद्य यस प्रकार छन् –

नेपाली जनको हितार्थ कविजी खोलेर छाती भन।
देख्छौ जे सब लेख निर्भय बनी सन्मार्गगामी बन ॥
सारा विश्व उठ्यो उठे सब जना मुट्ठी बटारी उठ।
तोड्नै पर्दछ कालरात्रि युगको बालेर राँको उठ ॥

छोड्यौ गन्थन लेख्न आज कविजी आलस्य छोडी उठ।
सक्छौ लेख्न अदम्य साहस झिकी खाँडो जगाई उठ ॥
छोडी सम्भ्रम मोह काँतरपना हेरेर टाढा उठ।
तिम्रो नै युग हो समग्र कविजी आगो उगेली उठ ॥

यस कविताबाट कविले आफ्ना पुत्रलाई कविहरूको शक्ति र कर्तव्यबारे बोध गराउनु भएको छ भने कविहरूलाई पनि आफ्नो सिर्जनाशक्तिबाट कालरात्रिका विरुद्ध क्रान्ति गर्न उत्प्रेरित गर्नुभएको छ।

### ५. मधुमास

कविले आफ्ना पुत्रलाई कहिले देशको बेथितिका विषयमा र कहिले संस्कार, संस्कृति, परम्परा आदि सम्बन्धमा पत्रकविता लेख्नुभयो। यसै गरी कहिले प्रीतिका गीत भरिएका र कहिले नेताका कुनीति र विकृतिका विषयले अटेसमटेस भएका पत्रकविता पनि लेख्नुभयो। यस कवितामा आफ्ना पुत्रलाई सोही प्रसङ्गको स्मरण गराउँदै ती विषयभन्दा भिन्न

भावले भरिएको वसन्त ऋतुको वर्णन भएको मधुमासका बारेमा लेख्न लागेको सूचना पृष्ठभूमिमा दिइएको छ । भूमिकास्वरूप आएका पाँच पद्यमध्ये चार ओटा पद्य मन्दाक्रान्ता र एउटा पद्य अनुष्टुप् छन्दमा लेखिएका छन् । मूल कविताचाहिँ वसन्तको वर्णन अनुसार वसन्ततिलका छन्दमा लेखिएको छ । देशमा सबैतिर नराम्रो मात्र भएकाले र पत्रमा पनि नराम्रा सन्दर्भ मात्र उल्लेख भएकाले कविको मन उद्विग्न हुन्छ र वसन्तको वर्णन गरेर त्यस्तो मनलाई शान्त एवम् स्थिर बनाउने आकाङ्क्षा कविमा पैदा भएको छ । यसमा कविको आत्मस्वीकृति नै छ –

राजनीति र आतङ्क विकृति भ्रष्ट संस्कृति ।
देशको बिग्रँदो हाल नेताको नग्न दुष्कृति ॥
धेरै कुराहरू लेखेँ अति उद्विग्न भो मन ।
अब लेख्तै छु हे पुत्र ! वसन्त ऋतुवर्णन ॥

मधुमास प्रकृतिमा प्रतिवर्ष सहज रूपमा आएजस्तै कविको भाव पनि सहज बनेर यस कवितामा व्यक्त भएको छ । प्रकृतिको मधुमास जति सुन्दर छ कविताको भाव, भाषा र लय पनि त्यति नै सुन्दर र हृदयस्पर्शी बनेको पाइन्छ । वस्तुको रूपाङ्कन र भावको प्रस्फुटनमा सन्तुलन राख्न सक्ने कवित्वका धनी कविले स्वभावोक्ति अलङ्कारको सौन्दर्यको सम्मिश्रण गराएर वसन्तश्रीको शब्दचित्र यसरी उतार्नु भएको छ –

आयो छरेर मधुमास सुगन्ध भारी ।
उद्दीप्त छन् वनबुटेन र खेतबारी ॥
मानेर लाज अति नै भई भित्र बन्द ।
बोल्दै छ कोकिल कतैतिर मन्दमन्द ॥

वसन्तको चौतर्फी उन्मादी शोभा देखेर भावुक बन्नुभएका कवि उत्प्रेक्षा र उपमाको आलङ्कारिक चमत्कारको सम्पृक्त प्रयोग गर्दै त्यसको स्वरूप यसरी देखाउनु हुन्छ –

हेर्‍यो जतातिर उतै छ नयाँ सुनौलो ।
यद्वा वसन्त ऋतुको छ कि ! चाल नौलो ॥
ताक्दै छ वा मदन दूर लिई कमान ।
देखिन्छ यो प्रकृति नै दुलही समान ॥

कविजगत्मा शृङ्गार रसका लागि मधुमास सर्वाधिक उपयोगी उद्दीपन विभावका रूपमा प्रसिद्ध छ । यही मास र मौसमले जब स्पर्श गर्दछ तब ब्रह्मविद्याको साधनामा तल्लीन हुने चाहना हुँदाहुँदै पनि त्यसबाट अतिक्रमण गर्दै र सम्पूर्ण सुखदुःख पनि बिर्सँदै कवि पनि रतिरागले उद्दीपित बन्नुहुन्छ र नढाँटीकन काव्यभाषामा यसो भन्नुहुन्छ –

यो मासमा मलयले जब भित्र छुन्छ ।
आनन्दको गुदगुदी मनभित्र हुन्छ ॥
बिर्सी समस्त सुखदुःख र आधिव्याधि ।
यो मासमा म बसुँला कि ! लिई समाधि ॥

वसन्त ऋतु प्रकृतिको पाठशाला पनि हो जहाँ कीटपतङ्गदेखि ठुला जीवजन्तुहरू पनि पाठ पढ्ने गर्दछन् । पुष्पपल्लवहरू पनि आआफ्नो रूप लावण्य देखाउँदै पुष्पित र पल्लवित हुन्छन् । वसन्तको यस्तो मनोहारी चित्रलाई प्रकृतिको मानवीकरण गर्दै रूपकको रमणीय प्रयोगद्वारा यसरी प्रस्तुत गरिएको छ –

आयो वसन्त र खुले सब बन्द ताला ।
देखिन्छ यो प्रकृतिको शुभ पाठशाला ॥
मौरीहरू स्वर गरी श्रुति पाठ गर्छन् ।
हल्लाई पात रुखका स्वरसार भर्छन् ॥

घुम्टो झिकी अदबले अलि लाज मानी ।
देखाउँदै क्रमसँगै भरिलो जवानी ॥
पैह्री नवीन चुनरी अति रम्य चोली ।
चम्पा फुली जमिनको शतपत्र खोली ॥

कविको भाषामाथि पूर्ण अधिकार र शब्दमाथि लोभलाग्दो नियन्त्रण छ । आफुले भन्न चाहेको कथ्य र व्यक्त गर्न चाहेको भावलाई जसरी पनि प्रकाशन गर्ने सामर्थ्य संस्कृत साहित्यका कविहरूमा देखिन्छ । त्यस्तै साहित्यको अध्ययन, अनुकरण र प्रभावबाट दीक्षित कविले पनि वासन्ती यामबाट उद्दीप्त कीट र पक्षीहरूको आवाजलाई अनुकरणात्मक शब्दको प्रयोगबाट स्वाभाविक रूपमा उतार्नु भएको छ । जस्तै –

सुन्छौँ कतै चिरबिरी कुहु कुर्रकुर्र ।
भूँ भूँ कतै भ्रमरको अनि फुर्रफुर्र ॥
फुल्छन् जहाँ सुमन शाश्वत भावधारा ।
यो हो खुला प्रकृतिको नव काव्य सारा ॥

काठमाडौँ गोकर्णस्थित जगडोलमा वसन्तऋतुको मध्यकाल मानिने चैत्र महिनाको अन्तिमतिर लेखिएको यस कवितामा कवि वसन्तले आकुलव्याकुल भएर प्रणयरागतर्फ समेत आकृष्ट भए पनि संयम, बुद्धि र विवेकको मार्गमा प्रवृत्त गराउने आत्मज्ञानबाट विमुख हुन सक्नु हुन्न । मधुमास प्रकृतिको यौवनकाल हो भने ग्रीष्मऋतु वृद्धावस्था जस्तो शुष्क र सारहीन कालखण्ड हो । त्यस्तै मानवजीवन पनि बाल्यकाल र यौवनकाल हुँदै ग्रीष्मवद् वृद्धावस्थामा प्रवेश गर्छ भन्ने अकाट्य सत्यको संस्मरण गर्दै कविताको अन्तिम पद्यमा वैराग्य र वीतरागप्रधान विचार व्यक्त गर्नुहुन्छ र संसारको अनित्यता देखाई आफुभित्रको अद्वैत वेदान्त दर्शनबाट निःसृत चिन्तनको झलक दिनुहुन्छ –

ऐले वसन्त छ यहाँ तर सुस्त फेरि ।
बढ्नेछ ग्रीष्म ऋतु उग्र महा खडेरी ॥
यो चक्र हो समयको सब भोगिनेछौँ ।
छौँ आज साथ तर भोलि कहाँ हुनेछौँ ॥

**६. नबनौं प्रमत्त**

यस पत्रकवितामा देशका सबै क्षेत्र र वर्गमा बढ्दै गएका

दुष्प्रवृत्तिहरूको चित्रण गर्ने क्रममा बुद्धिजीवीहरू पनि पतनोन्मुख हुँदै गएको यथार्थ देखाइएको छ । यस कविताका सम्बन्धमा लेखिएका पद्यहरू अनुष्टुप् छन्दमा छन् भने मूल कविता वसन्ततिलका छन्दमा लेखिएको छ । बहुमुखी कवि स्वयं लामो समयसम्म कोठे कविगोष्ठी (कोक) का अभियन्ता, आयोजक र सहभागी हुनुभयो । त्यस क्रममा उहाँलाई विभिन्न प्रवृत्ति र चरित्रका मानिससँग सङ्गत र सम्पर्क गर्ने अवसर मिल्यो र त्यसबाट थप अनुभव पनि आर्जन भयो । त्यसमा कोही आफ्नो पद, पेसा र प्रतिष्ठाको गरिमा नै बिर्सेर अर्काको छिद्र खोज्ने उग्रवादी पनि देखिए । तिनैलाई शिष्ट भाषामा सल्लाह दिन पनि यो कविता रचिएको देखिन्छ । कविताका सम्बन्धमा लेखिएका पद्यमा यस्ता बौद्धिक क्षेत्रका उग्रवादीहरूको परिचय यसरी दिइएको छ –

अर्काको मान गर्दैनन् बन्दछन् उग्र निन्दक ।
सारा नै भाँडिएका छन् कवि लेखक शिक्षक ॥
साथीभाइ सबैलाई छेडेर बाण हान्दछन् ।
सारा समाजका सामु पारी निर्वस्त्र तान्दछन् ॥
घोचपेच सधैँ गर्छन् दुःखमा गई पर्दछन् ।
सारै क्षुब्ध भई फेरि सत्तोसराप गर्दछन् ॥

यिनै र यस्तै खाले प्रमादीहरूलाई शिष्टता र सभ्यताको बाटोमा ल्याउने उद्देश्यले कवि यसरी सल्लाह दिनुहुन्छ –

वाचाल छौ चतुर छौ गुरु हौ तथापि ।
त्याग्नै सक्यौन तर उग्रपना कदापि ॥
जो हुन्छ काम सम शान्ति र सामबाट ।
बन्दैन काम सजिलै बुझ भेदबाट ॥

अरूको कमी कमजोरीलाई पर्वत जस्तो बनाएर विस्तार गर्ने प्रमादी उग्रवादीहरूलाई आलोचनाको सट्टा उत्साह दिएर अघि बढ्न कवि विनयपूर्वक अनुरोध गर्नुहुन्छ –

छौँ एक ठाउँ अहिले क्षणमै छरिन्छौँ।
छौँ व्यस्त चारतिर स्वार्थसँगै भरिन्छौँ॥
होला कतैतिर कमी तर छिद्र छाडी।
उत्साह देउ सब साथ बढून् अगाडि॥

चिकित्साविज्ञानले उपचार गर्न नसकिने यी उग्रवादीहरूलाई आत्मज्ञानको घुमाउरो मन्त्रले उपचार गर्न सकिन्छ कि भन्ने कविको झिनो आशा छ। प्रतप्त सूर्य पनि अस्ताउने र अरूले दमन गर्न नसक्ने सिंह पनि कालक्रममा रोगग्रस्त बन्ने उदाहरण दिएर कवि प्रकृतिबाट दार्शनिक शिक्षा लिएर सुध्रिन ती प्रमत्त चरित्रहरूलाई सुझाव दिनुहुन्छ –

जाज्वल्य सौर्य रविको पनि हुन्छ अस्त।
दुर्दम्य सिंह पनि बन्दछ रोगग्रस्त॥
यो खेल हो नियतिको घुमि नै रहन्छ।
सम्झेर यो अघि बढौँ अनि ठीक हुन्छ॥

## ७. आफ्नै बारेमा

शीर्षकले नै सङ्केत गरेझैँ यस कवितामा कविले आफ्नो बाल्यकाल, भाग्य, कर्म र स्वाभिमानको वर्णन गर्दै मानिसको स्वार्थी चरित्र एवम् आफैँ दम्पतीको वर्तमान अवस्थाको चित्र उतार्नुभएको छ। त्यसैले यो कविता कवि स्वयंको आत्माख्यान बन्न पुगेको छ। यस कविताका सम्बन्धमा लेखिएका अनुष्टुप् छन्दका तीनओटा पद्यमध्ये तेस्रो पद्यमा कविले नै यो कविता आफ्नो हालको अवस्थाको सारांश हो भन्नु भएको छ –

कैल्यै नसम्झ यो पत्र अति उक्ति बिहालको।
यो हो सारांशमा हाम्रो अवस्था बुझ हालको॥

भूमिकाका रूपमा आएको यस पद्यमा कविले विशिष्टीकरणका तहमा आफ्नो अवस्था भने तापनि साधारणीकरणका तहमा पुग्दा यसले

वृद्धावस्थामा पुगेका सबै पति, पत्नी र बाबु आमाको अवस्थाको वर्तमान तस्बिर खिचेको छ । बाल्यकाल र यौवनकाल भिन्न भए तापनि धेरै मानिसको वृद्धावस्था सम्बन्धी जनको व्यवहारका कारणबाट लगभग उस्तै हुँदै गएको छ । वृद्धावस्थामा पुगेपछि परिवारमा बुढाबुढी दुई जना मात्र सदस्य भएको अनुभूति ज्येष्ठ नागरिकले गर्नुपर्ने कटु सत्य हाम्रा सामु विद्यमान छ । वर्तमान समयको यही सत्यको प्रकाशन गर्न कवि सफल हुनुभएको छ । मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा कवि स्वर्गीय राजा श्री ५ महेन्द्रले केही माग्न आग्रह गर्दा पनि केही नमागी आफ्नो कार्यमा लागिरहेको यथार्थ यसरी देखाउनु हुन्छ –

बिस्तारै नै जति अघि बढेँ बढ्नु नै के थियो र ।
बढ्ने सीमा परिमित थियो भाग्यले के दियो र ॥
श्रीले आफैँ खुस अति भई मागभन्दा न मागेँ ।
ठुलो इच्छा गरिनँ कहिल्यै कर्मका साथ लागेँ ॥

लामो समयसम्म सरकारी सेवामा रहँदा कविले कार्यालयको समयमा कहिले डन्डा चलाउनु भयो भने फुर्सदको समयमा कलम पनि चलाउनु भयो । सरकारी कामको सिलसिलामा आफुले जहिले पनि राष्ट्रको कल्याण गर्न खोजेको तर त्यसो गर्दा सुखभन्दा बढी दुःख खेप्नु परेको कटु अनुभव पनि उहाँसँग छ । आफ्ना लागि पहिले जो व्यक्ति र जुन वस्तु प्रिय थिए आज ती अप्रिय भएका छन् र तिनले वैराग्यतर्फ आफुलाई धकेल्दै लगेको आत्मकथालाई कवि यसरी प्रकाशन गर्नुहुन्छ –

लड्दै भिड्दै यस मुलुकको गर्न खोजेँ भलाइ ।
यस्तो गर्दा सुख कम मिल्यो दुःख धेरै मलाई ॥
मैले जे जे जति पनि गरेँ आत्मविश्वास साथ ।
आफैँ सम्झेँ सबल बहुतै स्वाभिमानी सनाथ ॥

सर्दी गर्मी सब ऋतु घुमी छाप छोडेर जान्छन् ।
मेरा आफ्नै विगत दिनले बेसरी लात हान्छन् ।।
जे जे पैह्ले प्रियतम थिए आज लाग्दैन राम्रो ।
आफैँ देखिन् विरत छु सधैँ लाग्छ सारा नराम्रो ।।

वर्तमान समयको मानिस मानवीय मूल्यमान्यता छोड्दै अवसरवादी र अपराधी बन्दै गरेको छ । परचक्री मात्र नभएर आफ्नै सन्तान र सम्बन्धीजनसमेत मौका पर्नासाथ लामो हात गर्ने, गाँस खोसेर खाने, गफ चुटेर समय बिताउने र अन्तिममा धोका दिएर ईर्ष्यावश अपमान गरेर हिँड्ने गर्दछन् भन्ने भुक्तभोगी कविको अभिव्यक्ति छ। जस्तै –

कोही आई जति पनि मिल्यो हात हालेर तान्छन् ।
कोही आई झटपट झिकी गाँस हालेर खान्छन् ।।
कोही आई गफसफ गरी बात मारेर जान्छन् ।
कोही आई अति रिस गरी लात मारेर जान्छन् ।।

वृद्धावस्थासँगै दम्पतीलाई नानाथरी रोगले आक्रमण गर्दछन् । यस अवस्थामा सबैको सेवा र सहयोग आवश्यक परे पनि ती सबै बिराना भएका छन् । आफुले आफ्ना भने पनि उनीहरू पराइ देख्न थाल्छन् । अनेकौँ कष्ट सहेर घरपरिवारको पूर्वाधार तयार पारिदिने बुढाबुढी दम्पतीले आफ्नै सन्ततिबाट पराजय खेप्दै जानुपरेको छ । चित्त नबुझ्ेको कुरा कहिलेकाहीं बोले पनि धेरैजसो नबोलेरै बस्नुपर्ने बाध्यता छ । आज कवि जस्तै अरू धेरै दम्पतीले भोग्नुपरेको यस्तो अवस्थालाई यसरी साधारणीकरण गरिएको छ –

बूढाबूढी दुइतिर बसी खोक्तछौँ श्वास जस्तै ।
हामी पाका अब भइसक्यौँ भोग भोग्यौँ प्रशस्तै ।।
हाम्रा थुप्रै स्वजन पनि छन् गर्दछन् काम नाना ।
आफ्ना भन्छौँ तर सकल ती भै सकेछन् बिराना ।।

अस्ताउन लागेका जूनघामको अवस्थामा पुगेका बुढाबुढीको जिन्दगी कसरी बित्छ त्यसको एक झलक यस्तो छ –

हामी जोडी दुइतिर बसी जिन्दगी नित्य हाछौं ।
कैले बोल्छौं बकबक गरी या नबोलेर टाछौं ।।
हाम्रा सारा कटुमधुहरू मौन भै नित्य साट्छौं ।
यस्तै चालासँग बुझ तिमी जिन्दगी नित्य काट्छौं ।।

**८. पतन**

यस कवितामा देशमा प्रजातन्त्र आएर पनि शिक्षा, सुरक्षा, धर्म र राजनीतिमा बढ्दै गएको अपकर्षलाई मूल विषयवस्तु बनाइएको छ । कविताका सम्बन्धमा लेखिएका पद्य अनुष्टुप् र मूल कविता मन्दाक्रान्ता छन्दमा लेखिएका यी पद्यमा कविले राष्ट्र पतनतिर जाँदै गरेको अनुभूति गर्नुभएको छ र त्यही चिन्ता व्यक्त गर्नुभएको छ। देशको शिक्षा, धर्म र संस्कारको पतनोन्मुख अवस्थाप्रति चिन्तित हुँदै कवि यसो भन्नुहुन्छ –

धर्मकर्म सबै बिग्र्यो शुद्ध संस्कार नासियो ।
अर्थलोलुप छन् प्राज्ञ प्रजा पाताल भासियो ।।
शिक्षाका क्षेत्रमा आज व्यापार छ जताततै ।
शुद्ध आचार संस्कार देखिइन्छ कतैकतै ।।
आफ्नो स्वधर्म त्यागेर लागेर परधर्ममा ।
नेपाली आज फस्तै छन् अति घोर अधर्ममा ।।

देशका कुनाकुनामा आतङ्कको साम्राज्य भए पनि कसैले सुरक्षा नगरेर नेपाली अलपत्र छन् भन्ने मार्मिक भाव यस्तो छ –

आतङ्कको छ साम्राज्य देशका पत्रपत्रमा ।
सुरक्षा कसले गर्ने हामी छौँ अलपत्रमा ।।

राष्ट्रमा सबैभन्दा घातक वर्ग नेताहरूकै छ। मुखले राष्ट्रसेवा भन्ने तर कोखामा दाँत गाड्न तत्पर गिद्धेदृष्टि भएका राष्ट्रिय लुटेराहरूको जमातले राष्ट्र नष्ट र भ्रष्ट हुन पुगेको छ भने प्रजातन्त्रको पनि उपहास

भएको र त्यसले अझ निराशा ल्याएको स्पष्ट कथन छ –

मुखमा राष्ट्रसेवा छ कोखामा दाँत छन् तर ।
गिद्धेदृष्टि लिई नेता छन् राष्ट्र लुट्न तत्पर ।।
जता हेऱ्यो उतै आज नष्ट भ्रष्ट छ देश यो ।
यो देशमा प्रजातन्त्र आएर पनि के भयो ।।

तीन ओटा पद्यमा लेखिएको यस सङ्क्षिप्त कवितामा हामी किन र कसरी पतनका मार्गातिर लागिरहेका छौँ त्यसको तार्किक र मार्मिक प्रस्तुतीकरण यसरी भएको छ –

सारै बिग्रऱ्यो सुझबुझ गयो भत्कियो शुद्ध भाव ।
हेर्दाहेर्दै अब हुन गयो भावनाको अभाव ।।
धेरै टाढा सब भइसक्यौँ आज आफैँ हराई ।
हामीले नै परपर गऱ्यौँ सभ्य संस्कारलाई ।।

सिक्छौँ हामी स्वहित नहुने काम देखासिकीमा ।
आफैँलाई क्रमसँग लगी राख्तछौँ बन्धकीमा ।।
गर्ने के हो सब भुलिसक्यौँ धर्म छोडेर भाग्यौँ ।
हामी साँच्चै पतनतिरका मार्गमा आज लाग्यौँ ।।

## ९. पाउमा फेरि आएँ

सरकारी सेवाबाट निवृत्त भएपछि तीर्थयात्रा गर्ने क्रममा वाराणसीमा गङ्गास्नान गरिसकेपछि कविमा उत्पन्न भावको अभिव्यक्तिका रूपमा आएको यस कवितामा जीवनको आध्यात्मिक ढङ्गबाट सिंहावलोकन गरिएको छ । परदेशमा अत्यन्त व्यस्त भएका पुत्रलाई गङ्गाको धार्मिक र सांस्कृतिक महत्त्वको बोध गराउने अभिलाषाबाट प्रेरित भई लेखिएको यस कवितामा कविले पहिले गङ्गाको स्नान नगरेको र सान्निध्य नपाएकोमा वेदना र विलौना पनि गरिएको छ । कविताका सम्बन्धमा

लेखिएका पद्यमा कविताको विषयवस्तुलाई अनुष्टुप् छन्दमा यसरी उपस्थापित गरिएको छ –

गङ्गासम्बन्धमा मैले लेखेँथेँ कविता जुन ।
सोही उल्लेख गर्दैछु भक्तिका साथमा सुन ॥

यसरी विषयवस्तुको उपस्थापन गरिसकेपछि मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा जीवनको पूर्वार्धमा मूर्ख, स्वार्थी र सीमित भएकामा पछुतो मान्दै कवि प्रौढावस्थामा गङ्गामा स्नान गरिसकेपछि किनारमा ऋषिमन बनाएर आफुलाई यसरी चिनाउनु हुन्छ –

लोभी सारै जडमति भई स्वार्थ केही जमाएँ ।
आफ्ना सारा परिजनहरू साथ बाँडेर खाएँ ॥
जल्ले खाए सब पर भए लाञ्छना खूब पाएँ ।
मेरो भन्ने सकल सकियो पाप मात्रै कमाएँ ॥

वृद्धावस्था अब हुन गयो शक्ति सामर्थ्य भाग्यो ।
बिस्तारै नै असक म भएँ जीउमा रोग लाग्यो ॥
आफ्ना सम्झी जति पनि गरेँ शत्रु भै आइलागे ।
ऐले मेरा स्वजन भनिने ती सबै दूर भागे ॥

स्वास्थ्य, शक्ति र समय हुँदै पहिले जे गर्नुपर्थ्यो त्यो जीवनको उत्तरार्धमा होस आएपछि कवि आफ्नो विगत सम्झनुहुन्छ र त्यसबाट यौवनकालमै रहेका अरू व्यक्तिलाई यथासमय गर्नुपर्ने कर्तव्य पूरा गर्न पनि प्रेरणा दिनुहुन्छ । निम्नलिखित दुई ओटा पद्य कविको समयमै सावधान गराउने सन्देश पनि बनेका छन् । जस्तै –

गङ्गे ! मैले गरिन जुन त्यो पर्दथ्यो गर्नु पैले ।
अज्ञानैमा तलतल अझै भासिँदै छु क्रमैले ॥
सम्झी सारा विगत अहिले खूब सन्ताप गर्छु ।
आफैँ देखिन् त्रसित छु सधैँ बाँच्न सक्छु न मर्छु ॥

गङ्गे ! पैल्हे अलिकति कहीं त्रास मान्दै नमानी ।
मैले फ्याँकेँ अनुपम सबै खास आफ्नो जवानी ॥
बूढो ऐले जब हुन गएँ सुस्तरी होस आयो ।
मैले गर्ने सकल सकियो बल्ल पो होस आयो ॥

द्विजकुलमा जन्मेर पनि संस्कारहीन भएको, दान धर्म नगरेको र पशुसरह भएर सारा जीवन बिताएकोमा पनि कविलाई पश्चात्ताप भएको छ। समय सकिएपछि ज्ञान भएर हुँदैन, समयमै ज्ञानी भएर सबै सत्कर्म गरी प्रौढावस्था सुख र शान्तिसँग निर्भय भई बिताउनुपर्छ भन्ने प्रेरणा दिने पद्य यस्तो छ –

जन्मेँ खालि द्विजतनय भै सोह्र संस्कार शून्य ।
मैले कैल्यै गरिन जननी दानधर्मादि पुण्य ॥
मान्छे नै हूँ पशुसरह भै जन्म सारा बिताएँ ।
गङ्गे ! मेरो समय सकियो बल्ल पो होस पाएँ ॥

कवि संसारी बनेर संसारमा भुल्दै र विचरण गर्दै प्रारब्धका कारणबाट गङ्गामा पुग्नुभएको छ। गङ्गालाई आमा भन्ने जानेर पनि परपर भाग्दै, रुँदै कराउँदै धेरै दुःख पाइसकेपछि कवि अन्तिममा उनकै पाउमा आइपुग्नुभएको छ र त्यहाँ पुगेपछि उहाँलाई शान्ति र सन्तोषको अनुभूति भएको छ अनि संसारको ताप पनि शमन भएको छ। गङ्गालाई मातृत्वको आरोप गरेर सन्ततिले जति उन्नति गरे पनि सबैभन्दा प्यारो र श्रद्धेय आमाकै काख भएजस्तै संसारीको सबैभन्दा ठुलो श्रद्धास्पद सुखधाम गङ्गा हुने दोहोरो भावसौन्दर्य यसरी प्रकाशित गरिएको छ –

गङ्गे ! तिम्रो बुझ्िन महिमा दूर पाखा हराएँ ।
आमा भन्दै परपर भएँ खूब रोएँ कराएँ ॥
तिम्रो बुझ्नै सकिन महिमा बेसरी दुःख पाएँ ।
आएँ गङ्गे ! सबतिर घुमी पाउमै फेरि आएँ ॥

## १०. मेरा विगतका दिन

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा परदेशी पुत्रले सरकारी प्रशासक बनेर सेवा निवृत्त भएका कविपितालाई सेवाबाट अवकाश के कसरी भयो र अवकाशपश्चात् के कस्तो जीवनचर्चा र कार्ययोजना छन् भनेर पत्रमा जिज्ञासा व्यक्त गरेपछि त्यसैको उत्तरलाई मूल विषयवस्तु बनाइएको छ । पुत्रको पत्रको प्रत्युत्तर दिने उद्देश्यले लेखिएको यस कविताका सम्बन्धमा उल्लिखित भूमिका पद्यमा कवि स्वयं कविताको विषयवस्तु यसरी निर्देश गर्नुहुन्छ –

जे भयो जे गरेँ जैले मैले पर्दछ बिर्सन ।
लेखेँ सारांशमा सारा मेरा विगतका दिन ।।

सबैको जागिरे जीवन स्वावलम्बी, स्वाभिमानी र प्रतिष्ठित नहुन पनि सक्छ । लोभ, मोह आदि कारणले जागिरेहरू कलङ्कित पनि हुन सक्छन् र भइरहेका पनि छन् । तर बत्तीस वर्षभन्दा बढी सरकारी सेवा गर्दा कुनै दाग र दोष लाग्ने काम नगरेकाले र चारित्रिक बल भएकाले कवि आत्मसम्मान र स्वाभिमानका साथ बाँच्न पाउनु भएको छ। जसको अभिव्यक्ति यसरी भएको छ –

आफैँ उठेँ सधैँ आफ्नै चरित्रबलले गरी ।
विनादाग विनादोष म गएँ सजिलै तरी ।।
फर्की अतीतमा हेर्दा दृश्य देख्छु थरी थरी ।
घुम्दछन् नेत्रमा सारा चलचित्र घुमे सरि ।।

जागिरेहरूका लागि जागिर एक प्रकारको मात लाग्ने नसा पनि हो । मातिने चीज नखाने भएकाले कविलाई भौतिक मात नलागे पनि निवृत्त भएपछि पनि जागिरको मात रहिरहेको अनुभव हुन्छ । कवि जब एकान्तमा बस्नुहुन्छ तब जागिरको मातले आफ्नो युवावस्था बितेको ठहर गर्नुहुन्छ । जस्तै –

कस्तो हो यो नसा जस्तो मात लागे सरी सदा ।
बिर्सेर पनि बिर्सिन्न दुःख दिन्छ यदाकदा ॥
युवावस्था गयो मेरो यसै जागीरमा पसी ।
गुमाएँ अनि के पाएँ सोच्छु एकान्तमा बसी ॥

मैले बिर्सनु नै पर्छ मेरा विगतका दिन ।
किन तैपनि सम्झन्छु के छ बाँकी अझै लिन ॥
लामो जागीरमा बस्ता भोगेँ जागीरको सुख ।
अझै संस्कार बाँकी छ त्यतैतर्फ छ उन्मुख ॥

लामो समयसम्मको जागिरले कविमा जागिरे संस्कार बस्यो र दिनचर्या पनि त्यस्तै बन्यो । तर अवकाश लिइसकेपछि स्वतन्त्रताको अनुभूति भएको छ र मग्नमस्तीमा दिनहरू बितिरहेका छन् । जस्तै –

लामो जागीर खाएर मेरो संस्कार झैँ बस्यो ।
दिनचर्या बन्यो मेरो दिमाग दिलमा पस्यो ॥
अवकाश लिई ऐले निवृत्ति साथ बस्तछु ।
म आफ्नै घरको राजा म आफैँसँग मस्त छु ॥
दशपाँच गयो ऐले गयो सर्कारको डर ।
जी हजूरी छुटे सारा भोगेथेँ जो निरन्तर ॥

कवि जागिरे जीवनलाई जीवनको एउटा पत्र र त्यसबाट निवृत्त भइसकेपछिको जीवनलाई अर्को पत्रका रूपमा देख्नुहुन्छ । गीतादर्शनलाई जीवनको अङ्ग बनाइसक्नु भएका कविले आत्माको अमरता र शरीरको नश्वरताको बोध गराउँदै जागिरे जीवन र जागिरपछिको निवृत्त जीवनलाई तुलनात्मक रूपमा प्रस्तुत गर्नुभएको छ र पछिल्लो जीवनलाई पुनर्जन्मको संस्करण मान्नुभएको छ –

पुराना पत्र फ्याँकेर मान्छे खोज्छ नयाँ नयाँ ।
यौटा जीवनको यात्रा सकियो सुरु भो नयाँ ॥

अद्वैत वेदान्तले सम्पूर्ण जडजङ्गम प्राणी कर्मका वश परेकाले प्रारब्ध कर्ममा जे छ त्यही भोग्छन् भन्ने निष्कर्ष दिएको छ। कवि पनि त्यही दर्शनका ज्ञाता, व्याख्याता र अनुयायी भएकाले आफु पनि त्यसकै वशमा परेर घुमिरहेको ठान्नुहुन्छ। तर भावी जीवन कर्ममा प्रवृत्त नगरी धर्ममा समर्पित गर्ने र आत्मज्ञानको सहायताबाट सुखानुभूति गर्ने योजना बनाउनु भएका कवि कविताको निष्कर्ष यसरी निकाल्नुहुन्छ –

कर्मका वश छन् सारा प्राणी स्थावर जङ्गम।
प्रारब्ध कर्ममा जे छ सोही भोगेर घुम्छु म ॥
कर्मबाट उठी माथि धर्मतर्फ दिई मन।
जति सक्तछु बाँच्नेछु बाँकी निवृत्त जीवन ॥

## ११. वधूशिक्षा

शीर्षक अनुसार यस कवितामा कुलवधूले गर्नुपर्ने कर्तव्यको मार्गनिर्देशन गरिएको छ। यस कविताका सम्बन्धमा भूमिकास्वरूप अनुष्टुप् छन्दमा लेखिएका पद्यमा कविले आफ्ना पुत्रलाई विभिन्न विषयमा पत्र लेखिसकेको स्मरण गराउँदै कुलवधूहरूले पतिगृहमा कुन काम गर्नुपर्ने हो र कुन काम गर्नु नहुने हो त्यसको सामयिक अभिव्यक्ति दिनुभएको छ। यो कविता लेख्नुभन्दाअघि भूमिकामा कवि यो लेख्नुको उद्देश्य यसरी स्पष्ट पार्नुहुन्छ –

मिलेर घरमा बस्ने आनीबानी यिनी सिकुन्।
सप्रियोस् मति बेलैमा बलबुद्धि सबै झिकुन् ॥

यसरी भूमिका बाँधेर शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कवितामा विवाह भएर आएको घर कसरी बन्यो त्यो सम्झनुपर्ने र प्रमत्त नबनी यसको संरक्षण गर्नुपर्ने अर्ती दिँदै कवि बारम्बार माइत जानुको सट्टा आफ्नो घरलाई आनन्दको मन्दिर बनाएर बस्नुपर्ने अभिव्यक्ति यसरी प्रकट गर्नुहुन्छ –

सारा शक्ति उमेर अर्पण गरी यो हो बनेको घर ।
साझा मन्दिर हो प्रमत्त नबनी यस्को जगेर्ना गर ॥
जाने गर्नु हुँदैन माइत सधैँ छोडेर आफ्नू घर ।
तिम्रा कारण बन्न सक्छ घर यो आनन्दको मन्दिर ॥

भानुभक्त आचार्यले आफ्नो समयका वधूहरूका लागि दिएको शिक्षा र सल्लाह आजका आधुनिक वधूहरूका लागि सबै पालनीय हुन नसके पनि यस कवितामा कविले गरेको मार्गदर्शन वर्तमानका मात्र नभई भावी वधूहरूका लागि पनि सामयिक, स्वीकार्य र अनुकरणीय छ। सासूससुरालाई आमाबाबु सरह माया गर्नुपर्ने, सेवाभावले काम गर्नुपर्ने, घरको काममा झर्को मान्नु नहुने र सच्चा बुहारीको उदाहरण देखाउनुपर्ने उपदेश सयौँ वर्षपछिका बुहारीहरूका लागि अमृतवाणी सरह छ। जस्तै –

आमाबाबु समान सासुससुरा जानेर माया गर ।
सेवाभाव र त्याग हो सुख भनी संस्कार राख्ने गर ॥
झर्को मान्नु हुँदैन काम घरको गर्दा कहिल्यै पनि ।
राखे नाम छिमेक टोलघरमा सच्चा बुहारी बनी ॥

हाम्रो परम्परामा नारी केवल नारी मात्र हुनु हुँदैन, आदर्श नारी हुनुपर्दछ। आदर्श नारी बन्न केही आदर्श काम पनि गर्नुपर्दछ। कविका विचारमा निम्नलिखित कामकर्तव्य गरे भने प्रत्येक नारी आदर्श नारीको स्थानमा पुगेर सम्मानित हुन सक्छन् –

राखी सात्त्विक भावना हिँड दुवै आदर्श नारी भनुन् ।
तिम्रा नाम र कामबाट पछिका सन्तान राम्रा बनुन् ॥
तिम्रा सद्व्यवहारबाट घर यो राम्रो बनोस् सुन्दर ।
धर्ती झैँ समभाव राख सबमा हाँसेर बोल्ने गर ॥

नारीशक्ति र साधनासँग रहू आदर्श राम्रो सिक ।
हाम्रो संस्कृति धर्ममा दृढ रही बाटो सुनौलो झिक ॥
साध्वी सत्पथगामिनी बन दुवै सम्भ्रान्त नारी बन ।
मर्यादा घरको ननाघ कहिल्यै आदर्श नै हो धन ॥

कवि प्रत्येक वस्तु, व्यक्ति र विषयलाई बहुआयामिक कोणबाट हेर्नुहुन्छ । यस कवितामा पनि वधूहरूलाई अनेक किसिमबाट शिक्षा र सन्देश दिइसकेपछि उनीहरूले के के गर्नुहुँदैन ती विषयमा पनि सावधानी गराउनुहुन्छ । जस्तै –

सानो चित्त गरेर स्वार्थ मनमा राख्तै नराख्ने गर ।
सेवा दान परोपकार सबमा होऊ सधैँ तत्पर ॥
कैल्ये दिक्क नमान काँतर बनी पारी अँध्यारो मुख ।
जस्तै दुःख परुन् स्वकर्मपथमा होऊ सधैँ उन्मुख ॥

## १२. छोरालाई अर्को पत्र

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा कविका पुत्रले आफ्नो देशको इतिहास, भूगोल र सामाजिक, सांस्कृतिक एवम् आर्थिक स्थिति जान्ने चाहना राखेर पत्र लेखेकामा प्रसन्न हुँदै कविले यथामति र यथाशक्ति उत्तर दिँदै ऐतिहासिक तथा भौगोलिक विवरण र अवस्थितिको वर्णन गर्नुभएको छ । यस राज्यमा शासन गर्ने विभिन्न वंशका शासकहरूको सङ्क्षिप्त इतिवृत्त उल्लेख गर्दै वर्तमानका विकृतिहरूको पनि वर्णन यस कवितामा भएको छ । इतिहास र भूगोल पढ्नुपर्छ भन्ने मान्यताका परिपालक कवि यस कवितामा तिनै विषयको वर्णन गरेर सिद्धान्त र व्यवहारका बीच तालमेल गर्न सक्ने स्रष्टा बन्नुभएको पाइन्छ । ब्रह्माण्डको उत्पत्तिका बारे डार्विनको होइन वेदको सिद्धान्त सत्य भएको प्रमाण प्रस्तुत गर्दै कवि पौरस्त्य सृष्टिविज्ञानको वकालत पनि गरिरहनु भएको छ । अरूले भनेको भरमा हिँड्दा आफ्नो अस्तित्व नै समाप्त हुने हुँदा कुनै पनि विषयमा खोजविन गरेर मात्र निर्णय गर्नुपर्ने विचार पनि यस कवितामा प्रकट भएको छ । जस्तै –

अरूले जे भने सोही माने सम्भ्रम छाउँछ।
हाम्रो अस्तित्व भासिन्छ बीचमा नै हराउँछ॥
खोजीनिती गरी राम्रो पाइला चाल्नुपर्दछ।
कुण्ठा नैराश्य आलस्य ती सबै फाल्नुपर्दछ॥

वंशावली, इतिहास र भूगोल जानेर आत्मसमीक्षा गर्दै अघि बढ्नुपर्ने र आत्मज्ञानतर्फ पनि दृष्टि दिनुपर्ने आवश्यकता देखाउँदै कवि वेदान्त दर्शनको आत्मचिन्तन सम्बन्धी मान्यतालाई सरल शैलीमा यसरी प्रस्तुत गर्नुहुन्छ –

म को हुँ कसरी आएँ को थिएँ बुझ्नुपर्दछ।
अगाडि बढ्नका लागि पछाडि हेर्नुपर्दछ॥
वंशावली इतिहास भूगोल जान्नुपर्दछ।
आफ्नू यथार्थ सम्पूर्ण खोजेर छान्नुपर्दछ॥

वेदको नासदीय सूक्तमा सृष्टिक्रमको अत्यन्त सुन्दर वर्णन पाइन्छ। परब्रह्म परमात्माले आफ्नै सङ्कल्प शक्तिद्वारा अव्यक्त स्वेच्छाले सृष्टिको क्रम प्रारम्भ गऱ्यो र ब्रह्माण्ड व्यक्त भयो भन्ने सो सूक्तको सार कवितामा यसरी उतारिएको छ –

थिएन सुरुमा केही सारा अव्यक्त नै थियो।
खाली खाली थियो सारा खालीमा तत्त्व जो थियो॥
त्यै तत्त्वले गऱ्यो इच्छा सिर्जना तत्त्वको भयो।
यसमै जन्मिए ब्रह्मा ब्रह्माण्ड सिर्जना भयो॥

यस्तै ब्रह्माण्डको एउटा सानो अंश काठमाडौँ उपत्यका पनि पहिले जङ्गल, जल र डाँडाकाँडाले ढाकिएको थियो। यहाँ मानव बस्ती पनि थिएन। विष्णुले चक्रद्वारा चट्टान काटेर पानी बाहिर निकास गरेपछि यहाँ देवताहरूसमेत आएर बसोबास गर्न थाले भन्ने पौराणिक कथन र जनश्रुतिलाई यसरी प्रकाशित गरिएको छ –

चक्र छोडेर विष्णुले काटे चट्टान जो थियो ।
समस्त तालको पानी बग्यो बाहिर निस्कियो ॥
विहार शिवले गर्थे यहीँ आई सधैँ भर ।
क्रीडास्थली बन्यो राम्रो भयो यो देवको घर ॥

त्यसपछि यही पुण्यभूमिमा पशुपतिको प्राकट्य भएको र क्रमशः गोपाल, आभिर, किराँत, लिच्छवि, मल्ल, शाहवंशका राजाहरूले शासन गरेको सांस्कृतिक एवम् ऐतिहासिक सर्वेक्षण यस कवितामा भएको छ । यस अन्तर्गत मल्लकाल स्वर्णकाल भए पनि विखण्डनका कारण राज्य नै समाप्त भएको ऐतिहासिक साक्ष्य प्रस्तुत गर्दै कवि जहाँ भागबन्डा गरिन्छ त्यहाँ राष्ट्र नै विघटन हुन पुग्छ भन्ने सतर्कताको सन्देश यसरी दिनुहुन्छ –

समाजमा गरे राम्रो व्यवस्था जातपातको ।
स्वर्णकाल भयो मल्ल नेपाली इतिहासको ॥
धेरै वर्ष चल्यो राज्य तर बण्डा जहाँ भयो ।
आफु आफु लडे मल्ल आखिरी राज्य नै गयो ॥

पृथ्वीनारायण शाह, बहादुर शाह आदि वीरहरूले आर्जेको यस मुलुकमा सतीको शाप परेकाले सुगौली सन्धि भएपछि देशभक्तहरूको अझ बढी अपमान हुँदै गएको र कुलाङ्गारहरूको दबदबा बढेर देश नै अभिशप्त बन्दै गएको अप्रिय यथार्थ हाम्रा सामु विद्यमान छ । यसै तथ्यलाई कवि यसरी प्रस्तुत गर्नुहुन्छ –

सतीको छ यहाँ शाप जति जो देशभक्त छन् ।
हुन्न उन्नति राम्राको सारा पतन बन्दछन् ॥
कुलाङ्गारहरूबाट समाज परितप्त छ ।
यसै कारणले हाम्रो यो देश अभिशप्त छ ॥

राणाशासन, विभिन्न हत्याकाण्ड र पर्वहरू, प्रजातन्त्रको स्थापना, नेपाली काङ्ग्रेसको सरकार गठन, राजा महेन्द्रको २०१७ सालको कदम

पञ्चायती शासन, प्रजातन्त्रको पुनर्बहाली र त्यसपछिका विकृतिहरूबारे पनि कविले प्रकाश पार्नुभएको छ।

२०४६ सालको जनआन्दोलनपछि काङ्ग्रेस र एमालेले सत्ता चलाए । उता माओवादीहरूले जनयुद्ध गरेर देशलाई तहसनहस र जनतालाई त्रस्त बनाए। यस्तो अवस्थाप्रति कवि अति चिन्तित हुनुहुन्छ र आफैँ कहाँ रहिरहेको छु भन्दै चिन्ता प्रकट गर्नुहुन्छ –

कुशासन छ छाएको अँध्यारो छ सबैतिर ।
राम्रो भविष्यको आशा देखिँदैन कतैतिर ॥
देखिँदैन कुनै मान्छे जल्ले पार लगाउला ।
त्राही त्राही छ सर्वत्र कल्ले राष्ट्र बचाउला ॥

आतङ्कबाट नेपाल जीर्णशीर्ण भई सक्यो ।
शान्ति नेपालको ऐले डाँडा काटी गई सक्यो ॥
आफ्नै देश बिरानो भो त्रस्त छन् जनता पनि ।
आफैँ म गर्दछु प्रश्न म छु आज कहाँ भनी ॥

नेपालको सांस्कृतिक, ऐतिहासिक र समसामयिक अवस्थाको झलक प्रस्तुत गरिसकेपछि कवि यहाँको भौगोलिक, सामाजिक, धार्मिक र आर्थिक स्थितिको चित्रण गर्नुहुन्छ । यो देश भौगोलिक विकरालता र प्राकृतिक विविधताले बनेको छ । यहाँ भाषा, धर्म र संस्कृति अनेक छन् तापनि राष्ट्रिय एकता र सहिष्णुता अनुपम छ । यस देशको धार्मिक सहिष्णुता र प्राकृतिक सौन्दर्य देखेर कवि यस्तो भाव व्यक्त गर्नुहुन्छ –

नेपाली राष्ट्रभाषा हो भाषा राष्ट्रिय धेर छन् ।
धर्मसंस्कृति साझा हो दृष्टिकोण अनेक छन् ॥
हिन्दूबौद्ध बसेका छन् मिली आपसमा सब ।
दसैंतिहार साझा छन् यात्रा पर्व र उत्सव ॥

उपत्यका र डाँडा छन् चारैतिर मनोहर ।
मठमन्दिर गुम्बा छन् चैत्य देवल सुन्दर ॥
यो हो प्रकृतिको राज्य यो हो प्रकृतिको घर ।
दिव्य सौन्दर्य छोडेर टाढा को बस्न सक्छ र ?

प्रकृति र संस्कृतिले सम्पन्न देश वनजङ्गलको विनाश, प्राकृतिक प्रकोप, जनसङ्ख्या वृद्धि, वेरोजगारी र व्यापार घाटा जस्ता समस्याले विपन्न बन्दै गएको छ । कवि नेपालको व्यापारघाटाको प्रसङ्ग अघि सार्दै समग्र अर्थतन्त्रको स्वरूप यसरी देखाउनुहुन्छ –

वाणिज्य अनि उद्योग अति सीमित मन्द छ ।
घाटामा चल्छ व्यापार समुद्री मार्ग बन्द छ ॥
प्रत्येक व्यक्तिको आय अल्प गिर्दो स्वभाव छ ।
ठूलो बेरोजगारी छ रोजगारी अभाव छ ॥

समुद्रपार व्यापार कम चल्छ यदाकदा ।
चीन भारतमा चल्छ हाम्रो व्यापार सर्वदा ॥
पैठारी बहुतै हुन्छ निकासी बहुतै कम ।
हुन्छ व्यापारमा घाटा गरौँ जति परिश्रम ॥

जनसङ्ख्या वृद्धि र वनजङ्गलको विनाश तथा त्यसबाट उत्पन्न प्राकृतिक प्रकोपको अन्तरसम्बन्धलाई यसरी स्पष्ट पारिएको छ –

जनसङ्ख्या बढेको छ दुई कोटि भई सक्यो ।
वनजङ्गल फाँडेर सारा नष्ट भई सक्यो ।
असन्तुलन देखिन्छ हाम्रो प्रकृतिमा अब ।
भेल पैह्रो चलेको छ क्षतविक्षत भो सब ॥

यसरी सङ्ग्रहको दोस्रो लामो कविताका रूपमा रहेको ‘छोरालाई अर्को पत्र’ ले नेपालको विगत र वर्तमानलाई केलाउँदै प्राकृतिक,

सांस्कृतिक, धार्मिक, सामाजिक र आर्थिक परिदृश्य समेत प्रस्तुत गरी कविको पुत्रलाई देशका बारे सुसूचित गर्ने आकाङ्क्षाको परिपूर्ति गर्ने सिलसिलामा पत्रकविताका साथै परिचय कविताको भूमिका पनि पूरा गरेको पाइन्छ ।

**१३. छोरालाई फेरि अर्को पत्र**

चार चार पङ्क्तिको अनुष्टुप् छन्दका ६१ पद्यमा लेखिएको यो कविता यस सङ्ग्रहको अन्तिम र सबैभन्दा लामो कविता हो । यसमा कविले पुत्र सगुनलाई सम्बोधन गर्दै लेखिएका पूर्व पत्रहरू उनले पढे होलान् भन्ने विश्वास गर्दै आफ्नो कुल, जन्मस्थान, विवाह, पत्नीको कर्तव्य, अनुपम निष्ठा, सन्तानप्राप्ति, कविको जीवनवृत्ति र त्यस क्रममा भोगेका तीतामीठा अनुभव तथा सेवाबाट निवृत्त भइसकेपछि उद्दीप्त पूर्वस्मृतिलाई सङ्क्षिप्त काव्यकालिगढीका साथ प्रस्तुत गरिएको छ । कविले २०६७ सालमा 'अनुस्मृति' (जीवनयात्रा) शीर्षकको बृहदाकार संस्मरण एवम् आत्मकथामा केन्द्रित पुस्तक प्रकाशन गर्नुभएको छ । यो कविता त्यही ग्रन्थको सङ्क्षिप्त भूमिका जस्तो बनेर आएको देखिन्छ जसमा कवि आफ्नो जीवनकथालाई कविताको ढाँचामा प्रस्तुत गरिरहनुभएको छ । कवि आफ्ना पुत्रलाई पहिलेका पत्र पढेनपढेको विषयमा जिज्ञासा राख्दै यस कविताको विषयवस्तुको सङ्केत यसरी गर्नुहुन्छ –

मेरा पत्र भए धेरै के पढ्यौ सम्भियौ कति ।
निःसङ्कोच म लेख्तै छु घरको हाल सम्प्रति ।।

कवि आफ्नो जन्मस्थल खोटाङको लामिडाँडाको स्वरूप र विशेषता यसरी प्रस्तुत गर्नुहुन्छ –

लामीडाँडा थियो गाउँ पवित्र अति निर्मल ।
ब्रह्मस्थल थियो राम्रो शुद्ध ब्राह्मणको स्थल ।।

भट्टराई थियौं ज्यादा अरू थर थिए कम ।
थिए पण्डित धेरै नै पढ्थे गरी परिश्रम ॥

कवि आफ्नो परिचय, कर्म र प्रवृत्ति पनि कवितामै उद्घाटन गर्नुहुन्छ –

म हुँ ब्राह्मणको पुत्र हिमाल काखमा घर ।
म उठेँ कर्मका साथ प्रारब्धको लिई भर ॥
जे गरेँ अति नै अल्प मेरो सामर्थ्य जो थियो ।
म छु सन्तुष्टिका साथ भाग्यले जति जे दियो ॥

तीन छोरा र दुई छोरीका पिता कविले आफ्ना सन्तानलाई अनेकौं दुःखकष्ट सहेर लालनपालन गर्नुभयो, शिक्षित तुल्याउनु भयो र स्वावलम्बी पनि बनाउनु भयो । कवि यसमा आफुभन्दा पत्नीको बढी दुःख, त्याग र योगदान रहेकोमा कृतज्ञ रहँदै वस्तुवादी बन्नुहुन्छ। तर ती सन्तानले अहिले आफुहरूलाई अलिकति पनि स्नेह, सद्भाव र सम्झना नगरेकोमा कविलाई दुःखको अनुभूति भएको छ र संस्कारै दिन नसकेर यो अवस्था आएको हो कि भन्ने लागेर आफैं दोषी भए जस्तो अनुभूति पनि भएको छ । यस्तो अवस्था आफुहरूमा मात्र होइन अरूमा पनि उत्पन्न भइरहेको यथार्थ निम्नलिखित दुईओटा पद्यले देखाएका छन् –

खालि कर्तव्य हाम्रो हो यद्वा सन्तानको पनि ।
केही ता सम्झिनु पर्थ्यो यी आमाबाबु हुन् भनी ॥
दिएनौं अघि संस्कार अहिले दिक्क मान्दछौं ।
कस्को दोष भनौं ऐले आफ्नो नै दोष ठान्दछौं ॥

हामी प्राकृत प्राणी हौं आकाङ्क्षा भिन्नभिन्न छन् ।
चाहना लालसा स्वार्थ हामी भित्र विभिन्न छन् ।
बसेका छौं यहाँ हामी दूरी राखी परस्पर ।
यही संस्कार सर्दो छ सबैतिर निरन्तर ॥

कवि सानै उमेरमा विवाह गरेर पढ्न परदेश लाग्नु भयो । उहाँकी पत्नीलाई आफ्नो पतिको दायित्व समेत पूरा गर्नुपर्ने बाध्यता आइलाग्यो । कविपत्नी पृथ्वीजस्तै सहनशील भएर घरका सम्पूर्ण काममा अहर्निश खटिनुभयो । कविले अपेक्षा गरेभन्दा पनि हजारौं गुणा आदर्श गुण भएकी पत्नीका कर्म, स्वभाव र पारिवारिक परिचयलाई कविले यसरी प्रस्तुत गर्नुभएको छ –

बिहा गरेर सानैमा म हिँडेँ पढ्न खातिर ।
घरको काममा लागिन् तिम्री आमा निरन्तर ।।
पर्दथे जति जे काम गर्दथिन् खुस भै सब ।
घाँसपात ढिकी जाँतो सम्झेर नित्य उत्सव ।।

ससुरासासुको सेवा गर्थिन् भएर तत्पर ।
लाजशर्म सधैं मान्थिन् ठूलाको मान्दथिन् डर ।।
व्रत उत्सवमा गर्थिन् पूजाआजा उपासना ।
सकेको दान ती गर्थिन् शुद्ध राखेर भावना ।।

यी हुन् पोखेलकी छोरी कुभिण्डे माइतीघर ।
मावली यिनको टाढा रामका पुरमा पर ।।
थिए ब्राह्मण दाहाल मेरो जस्तै उता पनि ।
स्नेहार्द्र बहुतै हुन्थिन् जाँदा मावलमा उनी ।।

सहरवासी आधुनिक बुहारीहरू धेरै सोखिन भइसके । आफ्ना मान्यजनको सेवा त टाढै जाओस् आफ्नै खानेकुरा अरूले पकाइदिनुपर्ने र लाउने लुगा अरूले धोइदिनुपर्ने बुहारीवर्गलाई देखे खेपेका कवि आफ्नी पत्नीले बुहारी हुँदा के के गर्नुपऱ्यो त्यसको सूचना पुत्रलाई सम्बोधन गर्दै यसरी दिनुहुन्छ –

तिम्री आमा त्यहाँ जान्थिन् खेती हेर्न सधैं भर ।
सर्दी गर्मी खपी सारा भेल बाढी भयङ्कर ।।
पराल धानको भारी बोकेर हिँड्नुपर्दथ्यो ।
स्वास्नीमानिसले काम अति नै गर्नुपर्दथ्यो ।।

सासुससुराको सेवा, सन्तानको स्याहारसुसार, घरधन्दा र गाउँबेसीका काम गर्दा एकछिन पनि फुर्सद नपाउने पत्नीप्रति सहानुभूति दर्साउँदै कवि यसो भन्नुहुन्छ –

यसरी दुःख गर्दैमा छोराछोरीहरू भए ।
कति जीवित छन् आज कति अल्पायुमै गए ॥
दुःखदर्द सही सारा प्रतीक्षा पतिको गरी ।
आफ्नू सास अड्याएर बाँचिन् ती बिचरी चरी ॥

सरकारी सेवामा रहँदा कविले विभिन्न पदमा रही देश र जनताको इमानदारीपूर्वक र विधिपूर्वक सेवा गर्नुभयो । प्रशासनयन्त्रका भ्रष्ट कर्मचारीहरू, महाभ्रष्ट मन्त्रीहरू र राष्ट्रभ्रष्ट नेताहरूले उहाँलाई कहिले अपायक स्थानमा सरुवा गरेर, कहिले जागिर खाइदिने धम्की दिएर, प्रपञ्च रचेर र कहिले भ्रष्ट अञ्चलाधीशले ज्यानै लिने षड्यन्त्र समेत गरेर अति दुःख दिए । गृहप्रशासनको लामो अनुभव भएका कविलाई कहिले भूमिसुधार, कहिले खेलकुद र कहिले शिक्षा मन्त्रालयमा पुऱ्याइयो तापनि उहाँको धेरै समय गृहमन्त्रालयमै व्यतीत भयो । त्यहाँबाट हटाउने अनेक उद्योग भए पनि निष्ठा र नैतिकताले त्यहाँ निकै समय टिक्न सकेको तथ्यलाई कवि यसरी उद्घाटित गर्नुहुन्छ –

म गएँ बढुवा साथ गृहमा हुन हाजिर ।
प्रशासन महाशाखा दिए आएर आखिर ॥
भित्र बाहिरको मैले देखेँ अनेक शासन ।
धेरै वर्ष बसेँ पुत्र ! त्यहीं कसेर आसन ॥

सरकारी सेवाबाट अवकाश लिइसकेपछि कवि पूर्वस्मृतिमा डुब्नुहुन्छ र वेदान्ती बनेर प्रारब्ध कर्म भोगेर बाँचिरहेको आत्मस्वीकृति प्रस्तुत गर्नुहुन्छ –

गरेँ संसारको यात्रा गरी अति परिश्रम ।
हेरेँ संसारको चाला नासियो मनको भ्रम ॥

अवकाश लिएँ मैले जोगाई अस्मिता सब ।
आफ्नू प्रारब्ध भोगेर बाँचेको छु यहाँ अब ॥

युगकवि सिद्धिचरण श्रेष्ठले काठमाडौं आएपछि आफ्नो जन्मस्थल ओखलढुङ्गाको प्राकृतिक परिवेश र सौन्दर्यको उन्मुक्त गायन गरेका थिए । कवि भट्टराई अहिले काठमाडौंमा बसिरहनुभएको छ तापनि आफ्नो जन्मस्थल र त्यहाँको बाल्यकाल सम्झेर भावविभोर हुनुभएको छ । जस्तै –

गाईबाख्रा चराएको वनको दृश्य देख्तछु ।
भीरपाखा चहारेको गाउँको दृश्य देख्तछु ॥
ढुङ्गा नै द्रव्य मानेर खेलेको दृश्य देख्तछु ।
समग्र शैशवी काल मनमोहक देख्तछु ॥

सिर्जनात्मक साहित्यका विधाहरूभन्दा अन्य उपविधामा पर्ने संस्मरण र आत्मकथामा प्रस्तुति बढी वस्तुगत हुन्छ । त्यहाँ स्रष्टाको आवेग, अनुभूति र अतिशयोक्ति बढी सशक्त भयो भने विश्वसनीयताको प्रश्न पनि उठ्न सक्छ । यो कविता कविको संस्मरण र आत्मकथाको संयुक्त प्रस्तुति भएकाले यसमा अनुभूति भन्दा यथार्थकै प्राबल्य छ । यति हुँदाहुँदै पनि आफ्नो जन्मस्थल लामिडाँडाको वर्णनमा वस्तुवादी भएर पनि कवि उपमा अलङ्कारको सौन्दर्य प्रतिबिम्बित गराउनुहुन्छ । जस्तै –

गाउँले घेरिएको छ सुरम्य केन्द्रबिन्दु झैं ।
लामीडाँडा छ ताराको बीचमा शुभ्र इन्दु झैं ॥

यहाँ लामिडाँडाको भौगोलिक अवस्थितिको यथार्थ सुरक्षित राख्दै लामिडाँडाकै प्राकृतिक सौन्दर्य उपमा अलङ्कारका रूपमा उद्भासित भएको पाइन्छ ।



# कविशतक २०६८ का भूमिकाबाट

[२०६० सालतिर नेपाली भाषामा आदिकवि भानुभक्तदेखि लिएर आधुनिक समयकी कवयित्री ओमी शर्मासम्मका केही प्रतिनिधि कविहरूलाई छानेर मैले प्रत्येक कविका बारेमा वसन्ततिलका छन्दका एक एक श्लोकद्वारा वर्णन गरेर उहाँहरूप्रति आफ्नो श्रद्धा व्यक्त गर्ने प्रयास गरेको थिएँ। यसका साथै त्यस समयका सन्दर्भमा मिल्ने गरी मैले लेखेका केही छन्दोबद्ध कविताहरूसमेत समावेश गरेर 'कवि र कविता' नाम राखेर कवितासङ्ग्रहको पाण्डुलिपि तयार गरेर मन्तव्यका लागि प्रा.डा. दुर्गाप्रसाद भण्डारीज्यू र श्रीरमेश खकुरेलज्यूसमक्ष पठाएको थिएँ । उहाँहरू दुवैजनाले अत्यन्त सदाशयताका साथ स्नेहाभिषिक्त मन्तव्य २०६१ सालमा नै दिनुभएको थियो ।

त्यसरी सबै कुरा पूर्ण भइसकेर पनि मैले लेखेका केही कविताहरू बिस्तारै असान्दर्भिक जस्ता भएका मैले महसुस गरेँ र यसको प्रकाशनमा शिथिलता आयो । शिथिलतामात्रै नआएर यो दराजका कुनामा लुकेर बस्यो । एक दिन दराज खोलेर पुराना थन्किएर बसेका लेखहरू खोज्ने सन्दर्भमा यस सङ्ग्रहलाई पनि मैले देखेँ। त्यो देखेर म आफैँ लज्जित भएँ। कविहरूका बारेमा लेखिएका कविताहरू र अरू सबै फुटकर कविताहरूको पर्यालोचन गरेपछि मात्रै प्रकाशन गर्नेतर्फ विचार गरेँ । यसपटक चाहिँ केवल कविहरूका बारेमा लेखिएका १०० कविताहरू 'कविशतक' नाम दिएर प्रकाशन गर्ने निर्णय गरेँ।

कविशतक नामकरण गरेपछि त्यसमा परेका कविहरूका बारेमा समयक्रम मिलाएर कविताहरू राख्नु राम्रो हुने ठानेँ । त्यसरी मिलाउन लाग्दा त्यस बेला कोठे कविगोष्ठी र बाहिरका कविसम्मेलनहरू समेतमा भाग लिँदा सँगै रहेका केही कविहरू अहिले यस संसारबाट विदा भइसकेको मैले पाएँ। मलाई साह्रै विरक्त लाग्यो। 'कालो हि दुरतिक्रमः' काललाई कसैले टार्न सक्तैन। संसार यस्तै हो। ब्रह्मलीन कविहरूलाई

म श्रद्धाञ्जलि अर्पण गर्दछु। किन्तु २०६० सालमा वर्तमान ठानेर बयान गरिएका कविहरूलाई अतीतका भनेर अहिले लेख्नुपर्दा मलाई अत्यन्त कष्ट भयो । अझ त्यसमा पनि कालक्रमले अर्थात् यसमा परेका जेष्ठ कवि सुरुमा आदिकवि भानुभक्त र कान्छी कवयित्री ओमी शर्मा हुन्, तर तिनै सबैभन्दा कान्छी युवा कवयित्री गत वर्ष हामीहरूबाट छुट्टिएर टाढा भइन् । यसबाट हामीहरू मर्माहत भएका छौँ।

दुर्गा प्रसन्न अति भै मृदुभाव राखी
मन्तव्य जो प्रकट भो कटुता नराखी ।
साह्रै अकिञ्चन थिएँ शुभदृष्टि पाएँ
सत्प्रेरणा प्रकट भो अति नै रमाएँ ॥

पढ्थ्यौँ सँगै अघि सुसंस्कृत निर्विशेष
जागीरमा पनि सँगै हुन गो प्रवेश ।
सम्झाउँदै विगत दृष्टि दियौ विशेष
साह्रै कृतार्थ म भएँ यसले रमेश ॥

प्रह्लादले शतकको मधुछन्दलाई
रोजेर नै सरस यो कविता बनाई ।
मन्तव्यमा जुन दिए शुभ यो बधाई
साह्रै प्रफुल्लित गरे उनले मलाई ॥

नाना विशेषण र सुन्दर भाव साथ
मन्तव्य जो प्रकट भो म भएँ कृतार्थ ।
सुन्दैछ यो अघि बसी कविको समाज
होला कहाँ वहन यो अति मान्छु लाज ॥]

# कविशतक २०६८

'कविशतक' कवि भट्टराईको नयाँ प्रयोग, प्रविधि र प्रवृत्ति प्रदर्शन गर्ने कृति हो। यसमा नेपाली साहित्यको प्राथमिक कालदेखि आधुनिक कालको

पछिल्लो चरणसम्मका विभिन्न धारा, वाद र वर्गका कविहरूको सङ्क्षिप्त परिचय, समालोचना र योगदान प्रस्तुत गरिएको छ। वसन्ततिलका छन्दका एक सय श्लोकमा नेपाली साहित्यका स्वदेश र विदेशका गद्य-पद्य शैलीमा काव्यरचना गर्ने तथा गीत समेतका स्रष्टाहरूको कृतित्व र व्यक्तित्वमाथि प्रकाश पार्ने प्रयास यहाँ भएको छ । यो कृति एकातिर सय जना कवि कवयित्रीहरूको कवितात्मक व्यक्तिगत विवरण हो भने अर्कातिर कवि भट्टराईको द्रष्टा र स्रष्टा व्यक्तित्वको समन्वय प्रमाणित गर्ने सामग्री पनि हो। यस पुस्तकमा उल्लिखित स्रष्टाहरू जे जस्ता शैली र स्वभावका भए पनि तिनको साहित्यिक मूल्य र योगदानलाई कविले निष्पक्ष र निराग्रही भएर प्रकाशित गर्नुभएको देखिन्छ। यसको पुष्टि कवि स्वयंले पुस्तकको अन्तिममा उल्लेख गरेको निम्नलिखित श्लोकबाट हुन्छ –

पूर्वाग्रहीपन दुराग्रह नै नराखी ।
लेखेँ समस्त कविमा समभाव राखी ।।
सम्पूर्ण लेख्नु अति दुष्कर काम हुन्छ।
सारांशमा सकल अन्तरभाव हुन्छ ।।

विभिन्न व्यक्ति र लेखकका भूमिका एवम् मन्तव्य तथा मूल विषयवस्तु समेत समावेश गर्दा जम्मा ४० पृष्ठमा तयार भएको लघुकाय यस कृतिमा केही नयाँ विशेषता देखा पर्दछन् । कविहरूलाई विषयवस्तु बनाएर लेखिएको यो नेपाली साहित्यकै पहिलो कवितासङ्ग्रह हो । कृतिको 'मन्तव्य' लेख्ने प्रा.डा. दुर्गाप्रसाद भण्डारीले यस्तो कृतिको रचना गर्ने कवि भट्टराई नै पहिलो स्रष्टा भएको टिप्पणी गरेर यसको नवीन विशेषता उद्घाटित गरेका छन् ।

आजभोलि नेपाली साहित्यका कुनै स्रष्टाका विषयमा संस्थागत रूपमा गरिएका अनुसन्धानमा समेत पूर्णता पाइँदैन भने विवादका स्वरहरू पनि सुनिने गर्दछन् । बृहद् आकारका कृतिबाट पनि कृतिकारको कृतित्व र व्यक्तित्व छर्लङ्ग हुन नसकेको वा अनुसन्धाता अलमलिइरहेको भान

हुन्छ । तर यस कृतिमा कविले एउटै श्लोकमा एक जना स्रष्टाको समग्र व्यक्तित्वको नवनीत निकाल्ने शैलीमा उद्घाटन गर्नुभएको छ । सङ्क्षिप्त तर आकर्षक शैलीमा अग्रज र समकालीन कविहरूप्रति श्रद्धा र कृतज्ञता व्यक्त गर्दै विना पूर्वाग्रह उनीहरूको सटीक र यथार्थ वर्णन गरेकाले यो एक प्रकारले कविहरूको कोष हो भन्ने रमेश खकुरेलेको भूमिकामा आएको टिप्पणी अत्यन्त उचित र सारगर्भित छ । सङ्ग्रहका प्रत्येक श्लोकले वर्ण्य स्रष्टाको चित्र उतार्न सफलता पाएका छन् । यसबाट कवि भट्टराईको कवित्वको प्रवाह, स्रष्टा व्यक्तित्व र सम्मानभावको मात्र नभई सङ्क्षेपीकरण गर्ने सीपको प्रमाण पनि पाउन सकिन्छ । सय जना स्रष्टाको कवितात्मक परिचय, काव्यात्मक टिप्पणी र कवि स्वयंको कवित्वप्रवाहका आधारमा के पनि भन्न सकिन्छ भने कवि भट्टराई यस्ता हजारौं स्रष्टाहरूको काव्यात्मक व्यक्तित्व कवितामा झल्काउन सक्नुहुन्छ । यसरी आफ्नो काव्यव्यक्तित्वलाई अर्को कविव्यक्तित्वले कवितामै प्रकाशित गरिदिएपछि सर्जकहरू अझ सक्रिय भएर साहित्यकारका नामबाट सुपरिचित होउन् भन्ने कवि प्रह्लाद पोखेलको 'बधाई' शीर्षकको कवितात्मक भूमिकाको यो पद्य यस कृतिको छोटो समीक्षा र सारांश बन्न पुगेको छ –

सङ्क्षिप्तमा पनि दिए हुलिया खुलाई ।
सानो र सुन्दर कलात्मक यो बनाई ॥
लेख्नेहरू अझ अरू पनि जम्जमाऊन् ।
साहित्यकार शुभनाम नयाँ कमाऊन् ॥

यस सङ्ग्रहको अर्को विशेषता के छ भने कविले नेपाली साहित्यका आदिकवि भानुभक्त आचार्य (१८७१–१९२५) देखि कनिष्ट कवयित्री ओमी शर्मा (२०२५–२०६७) सम्मका प्रतिनिधि कवि-कवयित्रीहरूलाई वर्ण्य विषय बनाएर समय, विचार र लैङ्गिक सन्तुलनका आधारमा कृतिलाई समावेशी बनाउनु भएको छ । कवि-कवयित्रीहरूको जन्मसमयको क्रमका आधारमा कवितात्मक टिप्पणी भएकाले यो कृति

एक प्रकारले प्रतिनिधि नेपाली साहित्यकारहरूको क्रमबद्ध इतिहास पनि बन्न पुगेको छ। आफुले चिनाउन खोजेका स्रष्टालाई नामसहित परिचित गराउने र उसको साहित्यक टिप्पणी गर्ने क्रममा कतै पनि भाषिक विचलन र छन्दमा अपचलन नहुनु यसको अर्को विशेषता हो । जसका बारेमा जे भन्नु परेको छ त्यसलाई सहज र सिद्ध बनाएर प्रस्तुत गर्न कविलाई सफलता मिलेको पाइन्छ । भाषिक अधिकार, छन्दको शुद्धि र सिद्धि एवम् प्रभावकारी कथनपद्धतिले 'कविशतक' कवि भट्टराईको कवित्व प्रमाणित गर्ने कृति बनेको देखिन्छ।

सय जना कवि-कवयित्रीहरूमध्ये पहिलोमा परेका आदिकवि भानुभक्त आचार्य कस्ता कवि थिए, उनले के लेखे र उनीबाट के योगदान भयो भन्ने जिज्ञासाको तृप्ति कविले एउटै श्लोकबाट गरिदिनु भएको छ –

श्री भानु आदिकवि हुन् अनि रामभक्त ।
श्रीरामकै विषयमा मन दी सशक्त ॥
लेखेर रामकविता रविझैं उदाए ।
भाषा समुन्नत भयो जनता रमाए ॥

लेखनाथ पौड्यालको उपाधि, कृति र माध्यमिक कालको अन्त्य एवम् आधुनिक कालको प्रारम्भका साथ स्थापित योगदानलाई यसरी सङ्क्षेपीकरण गरिएको छ –

ठूला थिए कविशिरोमणि लेखनाथ ।
लेखे नवीन तपसी नवदृष्टिसाथ ॥
लालित्य सत्यकालि बुद्धिविनोद लेखे ।
ती हुन् युगान्त कवि सौम्य भविष्य देखे ॥

नाट्यसम्राट्का रूपमा प्रसिद्ध बालकृष्ण सम आधुनिक नाटककार मात्र थिएनन्, कवि, नाट्यमञ्चनका ज्ञाता र अभिनेता पनि थिए। उनले सिर्जना गरेका कला पनि कलापारखीहरूका बीच प्रसिद्ध छन् । उनले

'चिसो चूह्लो' जस्तो पहिलो प्रयोगवादी आधुनिक महाकाव्य पनि लेखे। उनी अहिले पनि नेपाली साहित्यका आकाशमा रविजस्तै दीप्तिमान् छन् भन्ने कम्तीमा एक अनुच्छेदको विषयवस्तुलाई एउटै श्लोकमा मीठोसँग यसरी प्रकाशित गरिएको छ –

हुन् बालकृष्ण कवि नाटकतर्फ नेता।
हुन् दक्ष मञ्चनकला र कला प्रणेता॥
चूह्लो चिसोसँग दिए नव नाट्य धेर।
देदीप्यमान अझ छन् रविझैं बनेर॥

महाकवि लक्ष्मीप्रसाद देवकोटाका विषयमा गरिएको टिप्पणीले उनको समग्र काव्यव्यक्तित्वको चित्र अगाडि आएजस्तो लाग्छ। जस्तै –

लक्ष्मी महाकवि थिए अति शक्तिशाली।
ल्याए उँभो सकल काव्यविधा उचाली॥
सारै थिए कुशल जे पनि लेख्न सक्थे।
साहित्यसाधक महान् सब देख्न सक्थे॥

यो सङ्ग्रह कविहरूको परिचय दिने रचना मात्र होइन, कवि भट्टराईकै कवित्व प्रदर्शन गर्ने प्रमाण पनि हो भन्ने सन्दर्भ माथि नै उल्लेख भइसकेको छ। भवानी भिक्षुको नामलाई नै आधार मानेर आफु भिक्षु भए तापनि उनले नेपाली साहित्यका पाठक एवम् समर्थकहरूलाई प्रशस्त खुराक दिए भन्ने आलङ्कारिक अभिव्यक्ति दिँदै कवि आफ्नो कवित्वको परिचय यसरी दिनुहुन्छ –

अत्यन्त भावुक भई कविता कहानी।
लेख्ने सधैं गहन चिन्तक हुन् भवानी॥
ती प्राज्ञ हुन् रसिक हुन् कवि सिद्धहस्त।
ती भिक्षु हुन् तर दिए उनले प्रशस्त॥

गोपालप्रसाद रिमाल (१९७५–२०३०) र माधव घिमिरे (१९७६) जन्मले सँगसँगै र काव्यसाधनाका दृष्टिले समान भए पनि काव्यको कथ्य, शिल्पशैली र उद्देश्यका दृष्टिले भिन्न ध्रुवका दुई हस्ती हुन् । उनीहरूको तुलनात्मक व्यक्तित्वको परिचय यी दुईओटा शलोकबाट प्राप्त गर्न सकिन्छ –

गोपालप्रसाद रिमाल –

हुन् क्रान्तिवाहक उनी सहसा उदाए ।
झिल्का छरी चहक दी अति झिल्मिलाए ॥
बाँडेर सौम्य सपना जनता जगाए ।
गोपाल याम नहुँदै सहसा हराए ॥

माधव घिमिरे –

हुन् छन्दका कुशल नायक दिव्य एक ।
गौरी दिए सरस काव्य दिए अनेक ॥
राजेश्वरी पनि दिए अझ काव्य लेख्छन् ।
जीवन्त माधव उनी सब सौम्य देख्छन् ॥

यस सङ्ग्रहमा कविताकाव्यको साधना, लोकसंस्कृतिको अन्वेषण र लोकगीतगायनका क्षेत्रमा विशिष्टता कायम गरेका व्यक्तिहरूलाई पनि समावेश गरिएको छ । यस क्षेत्रका विख्यात प्रतिभा जनकविकेशरी धर्मराज थापाको विषयमा कविको दृष्टिकोण यसप्रकार आएको छ –

यी गाउँछन् सरस सुन्दर भावसाथ ।
यीबाट लोकलय बन्न गयो सनाथ ॥
यी हुन् समर्पित सधैं कवि धर्मराज ।
गर्ने भलो सकलको यिनको छ काज ॥

राष्ट्रवादी कवि प्रवासमा रहेर पनि नेपाली राष्ट्रवादको पक्षमा वकालत गर्ने र प्रवासी नेपालीहरूलाई जागरुक गराउने अगमसिंह गिरीको कविव्यक्तित्वको यसरी मूल्याङ्कन गर्नुहुन्छ –

सीमा तरी पर गए पनि राष्ट्रवाद ।
घन्काउँथे अगम दुर्जय शङ्खनाद ॥
बोल्थ्यो कवित्वसँग धड्कन बारबार ।
गर्थे प्रचण्ड जनजागृतिको प्रसार ॥

धार्मिक, आध्यात्मिक र दार्शनिक विषयमा प्रवचन गर्न सिपालु, देशविदेशमा आध्यात्मिक जागरण विस्तार गर्न सक्रिय, बहुभाषाविद्, गहन चिन्तक, काव्यका साधक र कृष्णका उपासक खेमराज केशवशरणलाई एउटै पद्यमा यसरी चिनाइएको छ –

यी बोल्नमा कुशल छन् मनभित्र छुन्छन् ।
भाषा बहुज्ञ कवि हुन् सब विश्व घुम्छन् ॥
हुन् सन्त चिन्तन विशाल छ काव्य लेख्छन् ।
यी खेमराज जगतै सब कृष्ण देख्छन् ॥

गीतकार कालीप्रसाद रिजाको गीतिकारिता र काव्यकारिताको विश्लेषण र मूल्याङ्कन यसरी गरिएको छ –

हुन् राष्ट्रसेवक प्रशंसित गीतकार ।
व्यङ्ग्योक्तिमिश्रित कला यिनमा अपार ॥
कालीप्रसाद कवि हुन् अति भाग्यशाली ।
लेख्छन् सुरम्य कविता नवभाव हाली ॥

सङ्ग्रहलाई समावेशी बनाउने क्रममा कविले यौनवादी स्रष्टालाई पनि स्थान दिनुभएको छ । गद्यकवि पुष्कर लोहनी के के देख्छन् र लेख्छन्, उनका उपमा दिने साधन कस्ता छन् र व्यक्तिगत रूपमा उनी के के गर्छन् भन्ने तथ्यको सुइँको बुद्धिजीवीहरूले यस श्लोकबाट पाउन सक्छन् –

बेछन्दकार कवि पुष्कर खूब लेख्छन् ।
अश्लील छैन सब सुन्दर सौम्य देख्छन् ॥
कौडा दिएर उपमा रतिधर्म छर्छन् ।
अत्यन्त तीक्ष्ण कवि हुन् सब कर्म गर्छन् ॥

विभिन्न प्रवृत्ति र चरित्रका साहित्यकारहरूसँग सम्पर्क र सम्बन्ध स्थापित हुने क्रममा कवि गजलकारहरूसँग पनि नजिक बन्नुहुन्छ । आफ्नै सक्रियतामा सञ्चालित कोठे कविगोष्ठी (कोक) मा बारम्बार भेट भइरहने व्यक्तिहरूमध्ये सनतकुमार वस्तीको गजल लेख्ने र सङ्गीतका साधनका साथ सुमधुर स्वर र लयमा गाउने प्रतिभालाई अनुप्रासमय शाब्दी सौन्दर्यसहित यसरी उद्घाटन गरिएको छ –

अत्यन्त झङ्कृत गला र कला समाई ।<br>
राम्रो विधा गजलको लय गुन्गुनाई ॥<br>
झुल्के यहाँ सनत सुन्दर काव्यकार ।<br>
यी हुन् कुमार कुसुमाकरका कुमार ॥

यस सङ्ग्रहको शीर्षक 'कविशतक' भए पनि यसभित्र कवयित्रीहरूको पनि परिचय, प्रशंसा, टिप्पणी र समीक्षा छ। त्यसैले 'कविशतक' शीर्षकले कवयित्रीहरू पनि समावेश भएको भन्ने अर्थ द्योतित हुन्छ। उदाहरणका लागि कविले दिवङ्गत प्रेमराजेश्वरी थापा, प्रौढ पुस्ताकी वानीरा गिरी, उदीयमान पुस्ताकी प्रभा भट्टराई र काव्यसाधना गर्दागर्दै दिवङ्गत युवा कवयित्री ओमी शर्मासम्मको टिप्पणी यहाँ गर्नुभएको छ । यी मध्ये वानीरा गिरीको काव्य व्यक्तित्वलाई यसरी चित्रण गरिएको छ –

उद्दाम छिन् सुमति छिन् अनि साहसी छिन् ।<br>
यी वानिरा मृदुमयी ममतामयी छिन् ॥<br>
लेख्छिन् नवीन कविता नवरङ्ग घोली ।<br>
खिच्छिन् सदैव मन हुङ्कृतिसाथ बोली ॥

यस सङ्ग्रहका कुनै कुनै श्लोकले कविको परिचय, टिप्पणी र प्रशंसा प्रस्तुत गर्नुका साथै पदलालित्य र सौन्दर्यको मिठास व्यक्त गरेको पाइन्छ । त्यस्ता श्लोकमा विषयवस्तुको ज्ञानभन्दा कवितात्मक आस्वादनको मात्रा बढी देखिन्छ। 'प्राकृत पोखरा' खण्डकाव्यका स्रष्टा

मुकुन्दशरण उपाध्यायका कविता जति मिठा र रसिला छन् त्योभन्दा बढी मिठास र रसिलोपन उनका विषयमा लेखिएको यस श्लोकबाट प्राप्त गर्न सकिन्छ –

लेख्छन् सुरम्य कविता कवि यो धरामा ।
राम्रो भए सफल प्राकृत पोखरामा ॥
गर्छन् प्रयोग बहुधा कवि सौम्य छन्द ।
सङ्क्षिप्त छन् मधुर छन् प्रिय छन् मुकुन्द ॥

माथि गरिएको चर्चा र उल्लिखित उद्धरणहरू सङ्ग्रहको विविधता र समावेशिताको झलक प्रस्तुत गर्ने उद्देश्यले आएका हुन् । एक सय जना कवि कवयित्रीहरूका विषयमा लेखिएका प्रत्येक श्लोक विभिन्न विशेषताले युक्त छन् । यहाँ उल्लेख गरिएका व्यक्ति र श्लोकहरू दिशानिर्देशका लागि मात्र आएका हुन् । राजनीति, कोशसम्पादन, भाषासेवा, प्राज्ञिक उन्नयन, शिक्षा, विकास र प्रशासन आदि क्षेत्रमा समर्पित भएर पनि साहित्यसाधनामा लागेका व्यक्तिहरूका विषयमा समेत यस सङ्ग्रहमा वस्तुवादी टिप्पणी, विश्लेषण र मूल्याङ्कन गरिएको छ । यो सङ्ग्रह कवि भट्टराईको स्रष्टा र द्रष्टा व्यक्तित्वको साक्ष्य बनेको पाइन्छ ।



# आभास २०७१ का भूमिकाबाट

[ सृजनाका फूलहरू (कवितासङ्ग्रह २०५१) बाट शैशवरूपमा सुरु भएको मेरो काव्ययात्राको चरम वार्द्धक्यरूप आभास (कवितासङ्ग्रह, २०७२) मा पुगेर प्रायः परिसमाप्त हुन्छ । यो आभास मेरो अन्तिम कवितासङ्ग्रह हो । अद्वैत वेदान्तले आभासलाई मिथ्या भनेको छ । किनभने परब्रह्मको बिम्बभूत ईश्वर वा साक्षी हुन् र त्यसको प्रतिभास अर्थात् प्रतिबिम्ब आभास हो । उपाधिपक्षपाती आभास उपाधिको अभावमा समाप्त भएर जान्छ । जसरी डोरीमा प्रतिभासित सर्प मिथ्या उपाधिरूपी डोरीको अज्ञान हटेपछि सर्पको अस्तित्व तत्कालै समाप्त भएर जान्छ र शुक्तिमा आभासित चाँदी मिथ्या शुक्तिरूप उपाधि नभएमा प्रतिभासित चाँदी स्वतः मिथ्या हुन्छ । त्यसै गरेर यो आभास पनि मिथ्या संसारका वस्तुहरूको उपाधिलाई प्रतीक वा बिम्ब बनाएर लेखिएका कविताहरूको मिथ्या वा काल्पनिक सङ्ग्रह भएकाले यसलाई मिथ्या भनिएको हो ।

यो छन्दोबद्ध कविताहरूको लघुसङ्ग्रह हो । यस सङ्ग्रहलाई विधा, विषय र भावनासमेतको काल्पनिक आधार बनाएर चार खण्डमा विभाजन गरिएको छ । पहिलो खण्डको नाम आराधना हो । यस खण्डमा भक्ति, वेदान्त र आध्यात्मिक समेत गरेर १५ ओटा कविताहरू समाविष्ट गरिएका छन् । दोस्रो खण्डको नाम भावना राखिएको छ । यस खण्डमा भावनाप्रधान तत्कालीन समयलाई प्रतिनिधित्व गर्ने २८ ओटा कविताहरू परेका छन् । जसमा मुख्य गरेर २०५२ सालदेखि २०६२ सालसम्म नेपालमा देखापरेको नृशंस हत्या, आतङ्क र नरसंहारको वीभत्स र हृदयविदारक दृश्यलाई शब्दावलीमा चित्रण गरेर लेखिएका संवेदनापूर्ण तथा कारुणिक कविताहरू परेका छन् । तेस्रो खण्डको नाम समभावना हो । जसमा विद्वान्, कवि र आफन्तहरूसमेतको सुस्वास्थ्य र शुभेच्छा प्रकट गरेर लेखिएका ६ ओटा कविताहरू परेका छन् । अन्तिम

खण्ड समवेदना हो । जुन खण्डमा ब्रह्मलीन भएका व्यक्तिहरूका नाममा समर्पित ७ ओटा कविताहरू समाविष्ट छन् । सबै खण्डमा सङ्कलित कविताहरूको सङ्ख्या ५७ छ ।

उपर्युक्त खण्डहरूको नामको पहिलो अक्षर अर्थात् आराधनाबाट 'आ', भावनाबाट 'भा' समभावना र समवेदनाबाट 'स' लिएर यस कवितासङ्ग्रहको नाम आभास राखिएको हो । ग्रन्थको नामकरण गर्ने यो शैली मेरो पहिलो र सायद अन्तिम पनि हो ।

यस सङ्ग्रहमा वार्णिक छन्दमा लेखिएका छन्दोबद्ध कविताहरू परेका छन् । जसमा मुख्यरूपमा अनुष्टुप्, द्रुतविलम्बित, मन्दाक्रान्ता, पञ्चचामर, प्रमाणिका, शार्दूलविक्रीडितसमेतका छन्दहरू छन् । दुई दशकभन्दा अघिदेखि नै समयसमयमा भक्तिभावना, अनुभूति, शुभकामना, श्रद्धा, समवेदना, राष्ट्रिय भावना र देशको तत्कालीन काहालीलाग्दो अवस्थाबाट स्वतः प्रस्फुटन भएर बाहिर छरिन पुगेका केही भावनाहरूलाई विना कौशल र सीप छन्दमा उनेर मैले थन्क्याएको थिएँ । अद्वैत वेदान्ततर्फको अध्ययन र ग्रन्थलेखनमा समर्पित भएर लागेपछि साहित्यतर्फ अझ खास गरेर लौकिक कविता लेख्नेतिर मेरो प्रवृत्ति स्वतः छुट्न गयो । यस सङ्ग्रहमा प्रकाशित यी कविताहरूलाई मैले मुठो पारेर दराजमा थन्क्याएको थिएँ । ती कविताहरू मध्ये केही त्यसै हराएछन्, केही थोत्रा कागज ठानेर 'खाली सिसी पुराना कागज' भन्दै हिँड्ने कबाडीका हातमा परेछन् । केही कविताहरू कविता लेखिएका पृष्ठमा पछाडिपट्टि खाली कागजमा अद्वैत वेदान्तका निबन्ध र ग्रन्थ लेखेर विसर्जित हुनेमा परेछन्, थाहै भएन । उदाहरणका लागि भावना खण्डको २५ औं सङ्ख्याको कविता 'वसन्तको अन्त' लाई लिन सकिन्छ । जसका पछाडि 'सर्वं खलु इदं ब्रह्म' भन्ने अद्वैत वेदान्तपरक निबन्ध मैले लेखेँछु । जुन निबन्ध ' औपनिषद पुरुष' नामक ग्रन्थमा प्रकाशित भएको छ ।

यसमा सङ्ग्रह गरिएका कविताहरूमध्ये अपरिपक्व अवस्थामा लेखिएका केही कविताहरू परिवर्तित, परिवर्धित, संशोधित, परिमार्जित र

सङ्क्षिप्तीकृत हुनुका साथै भिन्न नाम लिएर पनि आएका छन् । सरसरती पढ्दा केही पङ्क्ति वा कविताहरूको पुनरावृत्ति भएजस्तो लाग्न सक्तछ । यस्तो हुनु साहित्य सिद्धान्त अनुसार पुनरुक्ति वा दूषण जस्तो लागे पनि अद्वैत वेदान्तका दृष्टिले भूषण नै मानिन्छ । 'आवृत्तिरसकृदुपदेशात्' ४।१।१।१ भनेर ब्रह्मसूत्रले भनेको छ । वेद, उपनिषद्, महाभारत, गीता, पुराणहरूमा समेत प्रशस्त आवृत्ति भएको पाइन्छ । समीक्षा गर्ने काम सूक्ष्मदर्शी समीक्षकहरूको हो । ]

# आभास २०७१

'आभास' कवि शरदकुमार भट्टराईको पछिल्लो छन्दोबद्ध कविताहरूको सङ्कलन हो । यस सङ्कलनमा कविका विविध भावतरङ्गहरूको अभिव्यक्ति भएको छ तापनि मूलतः भगवद्भक्ति, व्यक्ति, समाज र राष्ट्रमा प्रतिबिम्बित समकालीन प्रवृत्ति, शुभकामना र समवेदनाको प्राबल्य रहेको छ । यसैका आधारमा सम्पूर्ण कवितालाई आराधना, भावना, समभावना र समवेदना खण्डमा बाँडेर प्रस्तुत गरिएको छ ।

कविले यस सङ्ग्रहको 'आभास' शीर्षक राख्न निकै बौद्धिक अभ्यास गरेको पाइन्छ। सङ्ग्रहका उपर्युक्त चार खण्डहरूमध्ये 'आराधना' बाट 'आ', 'भावना' बाट 'भा' र 'समभावना' तथा 'समवेदना' बाट 'स' वर्णको संयोजन गरी चारै खण्डको प्रतिनिधित्व हुने किसिमबाट यसको 'आभास' नामकरण गरिएको छ। अर्को पक्षबाट हेर्दा वेदान्त दर्शनमा 'आभास' भनेको मिथ्या हो । सजिलो उदाहरण दिएर भन्नुपर्दा झिसमिसे उज्यालोमा देखिएको डोरीमा सर्पको ज्ञान हुनु आभास वा मिथ्या हो । युवाकालमा वेदान्त दर्शनका शिष्य बनेर वृद्धावस्थामा गुरु बनिसक्नुभएका कविले आराधना बाहेक अन्य कवितामा वर्णित एवं उल्लिखित व्यक्ति र विषय सांसारिक चक्रका मिथ्या भएकाले तिनको सङ्केत गर्ने यस सङ्ग्रहलाई 'आभास' नामकरण गर्नुभएको छ । शीर्षक चयनमै सीप र सारांश देखाउन सफल कविले कथ्यका दृष्टिबाट पनि यस सङ्ग्रहलाई दार्शनिक बनाउनुभएको

छ । विभिन्न समयमा लिखित एवम् विभिन्न स्थान, प्रसङ्ग र अवसरमा श्रावित तथा कुनै कुनै प्रकाशित कविताहरूलाई पनि परिष्कार, परिमार्जन, परिवर्धन र संशोधन समेत गरेर यस रूपमा ल्याइएको देखिन्छ । पहिले भन्दा अहिले अझ बढी सामयिक, सान्दर्भिक र आवश्यक देखिएका कविताहरू यसै मान्यतामा आधारित भई प्रकाशित गरिएका छन् ।

यस सङ्ग्रहका सम्पूर्ण कविताहरूको पर्यवलोकन गर्दा कुनैले कविलाई भगवद्भक्तिका उपासक, कुनैले समकालीन व्यक्ति वर्गप्रति समालोचक, कुनैले शुभेच्छुक र कुनैले संवेदनशील बनाएको पाइन्छ । शास्त्रीयतावादको परिष्कारपूर्ण शिल्प र स्वच्छन्दतावादको भावप्रबलता यस सङ्ग्रहमा पाइन्छ । शास्त्रीय छन्दको उचित पालना र मानक भाषाको प्रयोगबाट सङ्ग्रहको काव्यस्तर निकै माथि उठेको छ भने सरल र सहज प्रस्तुतिले यो सबै वर्गका भावकका लागि सम्प्रेष्य पनि बनेको छ । चारओटै खण्डका प्रत्येक कविताको सारसङ्क्षेप यस प्रकार छ ।

**आराधना** –

**१. त्वदियं वस्तु गोविन्द**

“न यद्वचश्चित्रपदं हरेर्यशो...” (भागवत ५।५।१०) भन्ने श्लोक उद्धरण गरी त्यसको समछन्दमा अनुवाद समेत समावेश गरेर सुरु गरिएको मन्दाक्रान्ता छन्दको यस कवितामा आफुले पहिले लेखेका शृङ्गारिक र राजनीतिक व्यङ्ग्यविद्रोह एवम् भर्त्सनाले युक्त कविताहरूलाई व्यर्थ ठानी दार्शनिक तथा भक्तिपरक काव्यकविता लेख्नुपर्ने चेतना आएको स्वीकारोक्ति प्रकट गरिएको छ । यो कवि स्वयंले आफ्ना पूर्वलिखित कविताहरूको कवितामै गरेको एक प्रकारको समालोचना पनि हो । अरूले फुर्क्याएको भरमा भ्यागुतोझैँ फुलेर अलिअलि पद र वाक्य जोडेर व्यर्थका कविता लेखेकोमा कविलाई पश्चात्तापको अनुभूति भएको छ र त्यसैको प्रकाशन यस कवितामा भएको छ । कविले आफ्ना पूर्ववर्ती कवितालाई कठोर भर्त्सना गरे पनि ती कविता वस्तुतः न व्यर्थ छन् न त कविलाई पश्चात्तापी बनाउने खालकै छन् तापनि कवितायात्राको

प्रारम्भदेखि नै परमार्थ चिन्तनका रचना गर्न नसकेकोमा कविलाई हुटहुटी चलेको छ। आफुले जे जस्ता कविता लेखे पनि अरू कविहरूले क्षणिक प्रशंसा गरिदिँदा आफ्नो समय व्यर्थ भएको टिप्पणी यसरी गरिएको छ –

वाह् ! वाह् ! गर्थे जब कविहरू भ्यागुतो भैँ म फुल्थेँ।
हावामा नै फुरफुर भई मस्त भै खूब भुल्थेँ ॥
जे जे भेट्थेँ टपटप टिपी व्यर्थका काव्य लेखी।
फ्याकेँ आफ्नू समय सब नै काल देख्तै नदेखी ॥

## २. आराधना

चारचार पङ्क्तिका अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा देवी दुर्गालाई सम्बोधन गर्दै राष्ट्रमा सर्वत्र जडता, विनाश र विध्वंस मात्र देखिएकाले त्यसबाट रक्षा गर्न आह्वान गरिएको छ। राष्ट्रमा शान्ति, उत्साह, सिर्जना र चेतनाको सट्टा कोलाहल, खिन्नता, विनाश र जडताले राज गरेको वस्तुस्थिति देखाउँदै हामीलाई रक्षा र कल्याण गर्न कवि देवीलाई पुकारा गर्नुहुन्छ। उमङ्गको चाड दसैंको बेलामा पनि दुःखी र काँतर भएर बस्नुपरेको तथा हत्या र आतङ्कको मारमा पर्नुपरेको यथार्थ वस्तुस्थिति यहाँ चित्रित गरिएको छ। मानवीय र प्राकृतिक दुवै कारणबाट देशमा भीषण स्थिति आएकाले त्यसबाट मुक्त भएर एकताका साथ बस्ने सद्‌बुद्धि नेपालीहरूमा देऊ भनेर देवीलाई प्रार्थना गर्दै कवि देशको एक झलक यसरी प्रस्तुत गर्नुहुन्छ जसलाई सबै नेपालीले प्रत्येक दिन अनुभव गरिरहेका छन् –

कतै बाढी र पैह्रो छ कतै विध्वंस तर्जन।
ताडना वञ्चना हत्या आतङ्क र विखण्डन ॥
सधैँ छ मृत्युको त्रास कालको नित्य गर्जन।
के हेर्छ्यौ ? अझ हे देवि ! बचाऊ लौन तत्क्षण ॥

## ३. रसो वै सः

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा शीर्षक अनुसार नै वेदका उक्ति

र उद्धरणहरूका आधारमा ब्रह्मसत्ता, स्वरूप र व्यापकताको चर्चा हुँदै रसेश्वर र रासेश्वर भगवान् श्रीकृष्णलाई साक्षात् ब्रह्मका रूपमा सिद्ध गरिएको छ। भगवान् श्रीकृष्णले बाह्य रूपमा गोपीहरूसँग रासलीला गरे पनि त्यो वस्तुतः ब्रह्मको रसवर्षण हो भन्ने मान्यतालाई कविले श्रुतिप्रमाणका आधारमा पुष्ट पार्नुभएको छ। यसबाट कृष्णको बाहिरी लीलाको अतिशयोक्तिपूर्ण वर्णन गरेर भागवद्व्यापारमा लागेका अल्पज्ञहरूलाई समेत यथार्थ बुझ्न र बुझाउन मद्दत मिलेको देखिन्छ। ब्रह्मको शक्ति र व्याख्या गरेका ब्रह्म, कृष्ण, रासलीला जस्ता दार्शनिक पदहरूलाई कविले सरल, सङ्क्षिप्त र सारगर्भित रूपमा यसरी चिनाइदिनुभएको छ –

रस नै रासलीला हो ब्रह्म हुन् कृष्ण वास्तव।
सत् चित् आनन्द हो ब्रह्म क्रीडा हो उसकै सब॥
रासमा ब्रह्म नै गोपी ब्रह्म नै कृष्णरूप हो।
द्रष्टादृश्य सबै ब्रह्म किन्तु ब्रह्म निरूप हो॥
रासक्रीडा हुँदा ब्रह्म सबै नै वस्तु बन्दछ।
कृष्ण नै ब्रह्म हुन् साक्षात् यही नै श्रुति भन्दछ॥

## ४. प्रार्थना

चारचार पङ्क्तिका अनुष्टुप् छन्दका तीन ओटा र वसन्ततिलका छन्दको एउटा श्लोक भएको यस कवितामा भगवान् शिवको स्वरूप देखाउँदै हामी नेपालीहरू शिवभक्त भएकाले उनकै पूजा र आराधना गर्दछौं भन्ने भाव प्रकट गरिएको छ। कवि शिवसँग हाम्रा दुःखदर्द हटाइदिन सद्ज्ञान र शुभदृष्टि दिन प्रार्थना गर्नुहुन्छ। यस कवितामा क्षणिक भौतिक धनको सञ्चय गर्नुभन्दा अन्तिम अवस्थामा साथ लागेर जाने धर्मरूपी पारलौकिक धनको सञ्चय गर्नुपर्ने विचार व्यक्त गर्नुभएको छ। एउटै श्लोकमा शिवको स्वरूप, नेपालको विशेषता, नेपालीहरूको भक्ति र विश्वासलाई सरल सुन्दर शैलीमा यसरी उतारिएको छ –

शिवको क्षेत्र नेपाल उमाको माइती घर ।
हामी हौं शिवका भक्त हामी छौं शिवकै भर ।।
अनादि आदि हुन् शम्भु सृष्टिसंहारकारक ।
भक्तवत्सल हुन् भोला सम्पूर्ण विश्वधारक ।।

## ५. श्रीशङ्कराचार्य

चार-चार पङ्क्तिका अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा मूलतः दुई थरी विषयवस्तु प्रतिपादित छ – आद्य शङ्कराचार्यको जीवनी र कर्म तथा अद्वैत वेदान्त दर्शनको स्वरूप । कविताको पूर्वार्धमा आद्य जगद्गुरु शङ्कराचार्यको जन्मकालको पृष्ठभूमि उल्लेख गर्दै उनका पितामाता र जन्मस्थानको विवरण दिई कार्यहरूको दिग्दर्शन गराइएको छ भने उत्तरार्धमा उनीद्वारा व्याख्यायित, विस्तारित र स्थिरीकृत वेदान्तदर्शनको स्वरूप देखाइएको छ। शङ्कराचार्यको जीवनलाई सङ्क्षिप्त र कवितात्मक बनाएर प्रस्तुत गर्नुका साथै वेदान्त दर्शनको सार बुझाउन कविलाई सफलता प्राप्त भएको छ। शङ्कराचार्य कस्ता विद्वान् थिए र उनले के के गरे भन्ने प्रश्नको जिज्ञासा समाधान गर्ने क्रममा कवि भन्नुहुन्छ –

थिए उद्भट विद्वान् ती वेदान्तकेशरी थिए ।
शास्त्रार्थमा हराएर सारा वश गरी लिए ।।
बौद्ध जैन र चार्वाक साङ्ख्य न्याय अनेकन ।
सबै दर्शनको प्रायः गरे समग्र खण्डन ।।

सारा तह लगाएर चारै सुर कसीकन ।
चारैतर्फ कसे श्रीले साह्रै सुदृढ आसन ।।
चार पीठ बसाएर मुख्य शिष्यहरूकन ।
पीठाधीश बनाएर थाले अद्वैतशासन ।।

अद्वैत दर्शन सर्वसुबोध विषय होइन । ब्रह्म, जीव, सत्य, असत्य आदि चिन्तनीय विषयहरूलाई हाजिरीजबाफको शैलीमा सोधेर र

उत्तर दिएर सजिलै बुझ्न सकिँदैन । यी विषय बुझाउने र बुझ्ने पात्रका केही निश्चित मानकहरू शास्त्रमै वर्णित छन् । तर कविले एउटै श्लोकबाट यिनका विषयमा अत्यन्त सरल र सारगर्भित स्वरूप लक्षण निर्धारण गरिदिनु भएको छ । जसबाट सामान्य मानिस पनि यस्ता दुरूह विषय बुझ्न सफल हुन्छ । निम्न लिखित श्लोकले यही विशेषता आत्मसात् गरेको छ ।

विशुद्ध ब्रह्म हो सत्य सारा दृश्य असत्य हो ।
अन्त्यमा जीव हो ब्रह्म, ब्रह्म भिन्न असत्य हो ॥
भेदबुद्धि हटाएर गर्दा अभेद दर्शन ।
जीव नै ब्रह्म भैहाल्छ यै हो अद्वैत दर्शन ॥

### ६. ब्रह्मद्रव

पञ्चचामर छन्दमा लेखिएको यस कवितामा जीव र ब्रह्मको भिन्नता देखाउँदै संसारका सबै उपाधि असत्य र ब्रह्ममात्र परम सत्य भएको सारांश प्रस्तुत गरिएको छ । ब्रह्म सत्य, सनातन, पूर्ण, अनन्त र अनादि भएकाले सम्पूर्ण विश्व ब्रह्माण्ड उसैभित्र अन्तर्भाव भएको दार्शनिक मत यहाँ पाइन्छ । जीवले ब्रह्मको सान्निध्य नपाउँदा पतनको मार्गतिर उन्मुख हुनुपर्ने मान्यतालाई सरल शैलीमा यसरी सङ्केत गरिएको छ –

छु लर्कंदो तलैतलै उँभो हुने सबै भुलेँ ।
म मस्त भै युवा छँदा कता कता कता डुलेँ ॥

जीवमा परब्रह्मको अंश भए तापनि परब्रह्म अव्याख्येय छ र यो अनुभवबाट मात्र ज्ञातव्य छ । यही अनुभवसिद्ध ब्रह्मलाई कविले निम्न लिखित दुई श्लोकबाट यसरी बुझाउन खोज्नु भएको छ –

म पूर्ण हूँ अखण्ड म एक हूँ अनेक हुँ ।
म ढुक्ढुकी हुँ धड्कने प्रकाशको प्रकाश हुँ ॥

म आदि हूँ अनन्त हूँ अनादि हूँ सनातन ।
समष्टि विश्व बस्छ यो म भित्र नै टनाटन ।।

### ७. अर्को बाटो कुनै छैन

प्रारम्भमा भागवत (११ ।१८ ।२२) को उद्धरण र अन्तिममा श्रुतिको वचन समावेश गरी अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा बाल्यकाल र युवावस्थामा लौकिक एवं वासनावर्धक विषयको पठन र लेखनको अभ्यास भए पनि वृद्धावस्थामा मुक्तिदायी आत्मज्ञानतर्फ प्रवृत्त हुनुपर्ने सन्देश दिइएको छ। काम, क्रोध आदि षड् रिपुले अन्तर्जगत्लाई ग्रस्त पारुन्जेल मानिसमा आत्मज्ञानबाट आत्मोद्धार गर्ने बुद्धि नआउने भएकाले सत्पात्र बनेर 'अहं ब्रह्मास्मि' को भावोदय हुनुपर्ने विचार यस कवितामा आएको छ। यस बाहेक मुक्तिको अर्को बाटो कुनै छैन भन्ने कविको निष्कर्ष छ। जीव र ब्रह्मको ऐक्यको ज्ञान कोबाट कसरी लिने र त्यसका लागि आफैं कसरी सत्पात्र हुने भन्ने प्रश्न गर्दै कवि ब्रह्मज्ञानी बन्नका लागि पहिले पूर्वयोग्यताका रूपमा अधिकारी बन्नुपर्ने तथ्यको सङ्केत यसरी गर्नुहुन्छ –

जीव ब्रह्मैक्यको ज्ञान कोबाट कसरी लिने ?
त्यसका लागि सत्पात्र म आफैं कसरी हुने ?

काल सधैं क्रमले मात्र हिँड्दैन, व्यक्तिक्रमले पनि हिँड्छ, अतः आत्मोद्धारका लागि शीघ्रातिशीघ्र परिश्रम गर्नुपर्दछ भन्ने आध्यात्मिक सन्देश यसरी दिइएको छ –

कालले भोलि भन्दैन सम्झेर कालको क्रम ।
आत्मोद्धार हुनेतर्फ गरौं चाँडै परिश्रम ।।

### ८. आत्मा

कठोपनिषद् (१।२।५) को उद्धरण र त्यसको पद्यात्मक अनुवादसमेत

समावेश गरी प्रारम्भ गरिएको उपजाति छन्दको यस कवितामा वेदान्तको ज्ञानबाट आत्माको नित्यता र अमरताको बोध गर्नुपर्ने आवश्यकता देखाइएको छ। आत्मज्ञान धेरै शास्त्र पढेर र रटेर भन्दा आत्मचिन्तनबाटै बढ्दै जाने भएकाले दुर्दर्श भए पनि प्राज्ञले यसलाई देख्न सक्छ भन्ने कविद्वारा उद्धृत श्रुतिको भनाइ पाइन्छ। अनित्यबाट पनि नित्यताको प्राप्ति सम्भव भएकाले वेदान्तको ज्ञानबाट नित्यताको प्राप्तितर्फ लाग्नुपर्ने विचार कविले व्यक्त गर्नुभएको छ।

अनित्यले नित्य कदापि हात
लाग्दैन भन्छन् तर युक्ति साथ।
वेदान्तको ज्ञान गरे त नित्य
अनित्यबाटै पनि मिल्छ नित्य ॥

सानोमा अणुभन्दा पनि सूक्ष्म र ठुलोमा ब्रह्माण्ड भन्दा पनि व्यापक आत्माको स्वरूपलाई श्रुतिसार र शास्त्रसारका आधारमा एउटै श्लोकबाट यसरी स्पष्ट पारिएको छ –

सानो छ आत्मा अति सूक्ष्म सार
ब्रह्माण्डभन्दा छ ठुलो अपार।
यो बुद्धिको भित्र गएर बस्छ
दुर्दर्श हो प्राज्ञ अवश्य देख्छ ॥

सबैतिरका सबै वस्तु र व्यक्ति अनित्य छन् तर तिनीहरूका बीच एउटा नित्य तत्त्वका रूपमा आत्मा रहेको दार्शनिक भाव यस श्लोकमा व्यक्त भएको छ –

अनित्य संसार अनित्य देह
अनित्य दारा सुत वित्त गेह।
अनित्य चारैतिर छन् अनेक
अनित्यका भित्र छ नित्य एक ॥

### ९. मुक्ति

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा मुक्तिका विषयमा अनेक

वाद, पन्थ र सम्प्रदायले आ–आफ्ना ढङ्गले व्याख्या गरेका भए पनि ज्ञानको मार्गबाट मात्र वास्तविक मुक्ति हुन्छ भन्ने सार पाइन्छ । लघु आयामको भए पनि यस कविताले पूर्वपक्षको उल्लेख गरी खण्डन गर्ने र उत्तरपक्ष उल्लेख गरी मतको मण्डन वा स्थापना गर्ने शास्त्रार्थको शैली अपनाएको पाइन्छ ।

बौद्ध, जैन, मीमांसकहरू र भक्तिमार्गका अनुयायीहरू सबैले आ-आफ्नो दार्शनिक मान्यताका आधारमा मुक्तिको द्वार देखाएका छन् तर ती सफल र शाश्वत हुन सकेनन् भन्दै कवि ज्ञानमार्ग मात्र सर्वोत्तम मुक्तिद्वार हो भन्ने निर्णय यसरी दिनुहुन्छ –

जति छन् पन्थ या वाद हुन् कल्प्य र अशाश्वत ।
ज्ञानको मार्ग मात्रै हो सत्य ज्ञेय र शाश्वत ।।

यो कविको कपोलकल्पित मान्यता नभएर श्रुतिकै निष्कर्ष हो भन्ने प्रमाण समेत यसरी दिइएको छ –

मुक्ति हुन्न विना ज्ञान ज्ञानकारण बन्दछ ।
"ऋते ज्ञानान्न मुक्तिः" नै वेदले पनि भन्दछ ।।

## १०. सद्योमुक्ति

भागवतको श्लोक उद्धरण गरी त्यसको समछन्दमा अनुवाद समेत गरी प्रारम्भ गरिएको उपजाति छन्दको यस कवितामा मुक्त को हुन्छ र कसरी हुन्छ भन्ने जिज्ञासाको समाधान गरिएको छ । यसका साथै आत्माको स्वरूपनिर्देश पनि यस कवितामा भएको छ । जो मानिस आफैंलाई चिनेर अहं ब्रह्मास्मिको अनुभूति गर्दै देह छोड्छ ऊ ब्रह्म नै बन्दछ भन्ने भाव यसरी प्रस्तुत भएको छ –

फर्केर आफैंतिर चक्षु खोली
ब्रह्मास्मिको भाव लिई नबोली ।

जाला कुनै मानिस देह छोडी
ऊ ब्रह्म बन्ला उससाथ जोडी ॥

वेदले पनि यस्तै मानिसलाई मुक्त भनेको छ भन्ने प्रमाण यसरी दिइएको छ –

ब्रह्मास्मिको भाव लिएर गाढा
जो बस्छ मिथ्या भवबाट टाढा ।
त्यो मुक्त हो आखिर मुक्त बन्छ
यही कुरा शाश्वत वेद भन्छ ॥

श्रुतिले आत्मालाई जसरी चिनाएको छ त्यसको सारांशलाई एउटै श्लोकमा सरल रूपमा यसरी स्पष्ट पारिएको छ –

देखिन्न आत्मा छ अदृश्य खास
त्यो बुद्धिमा गर्दछ नित्य वास ।
त्यो हो सधैं इन्द्रियले अगम्य
र हुन्छ सम्यक् मनबाट गम्य ॥

यो जन्ममा ज्ञान भयो भने मात्र मानिस मुक्त हुन्छ अन्यथा भवसागरमा डुबेर ऊ आत्मघाती बन्दै घुमिरहने छ भन्ने भाव प्रस्तुतिबाट मानवजन्ममा आत्मज्ञानको अपरिहार्यता सिद्ध गर्न खोजिएको छ –

यै जन्ममा ज्ञान भयो भने नै
तर्नेछ मान्छे र हुनेछ जाति ।
तरेन ता त्यो भवसिन्धुभित्रै
घुम्नेछ बन्दै अति आत्मघाती ॥

## ११. श्रीकृष्ण

प्रतिश्लोक चार पङ्क्तिको अनुष्टुप् छन्दको यस कवितामा शीर्षक

अनुसार नै भगवान् श्रीकृष्णको स्वरूप वर्णन गरिएको छ र उनको अवतार कस्तो अवस्थामा हुन्छ भन्ने प्रश्नको उत्तर पनि दिइएको छ। महाभारत, पुराण, गीता आदि धार्मिक ग्रन्थमा वर्णित श्रीकृष्णका लीला र अवतारको सङ्क्षिप्त, सरलीकृत र मौलिक प्रस्तुतिका रूपमा यो कविता आएको छ। श्रीकृष्णका भक्तहरूमध्ये कतिपयलाई श्रीकृष्ण के हुन् र किन अवतार लिन्छन् भन्ने शास्त्रीय ज्ञान हुँदैन। त्यस्तो ज्ञान यस कविताबाट प्राप्त गर्न सकिन्छ।

श्रीकृष्ण के हुन् भन्ने प्रश्नको उत्तर कविले निम्न लिखित दुई ओटा श्लोकबाट सरल एवम् सारगर्भित रूपमा दिनुभएको छ –

कृष्ण हुन् विश्वका बीज कृष्ण हुन् जगदीश्वर।
पूर्णांश भगवान् कृष्ण साक्षात् हुन् परमेश्वर ॥
गोपीका कृष्ण हुन् आत्मा, राधाका हृदयेश्वर।
सर्वसाक्षी जगत्स्रष्टा नियन्ता हुन् परात्पर ॥

कृष्ण हुन् सबका साथी कृष्ण हुन् सबका मन।
मातापिता सबै कृष्ण कृष्ण हुन् सबका धन ॥
परब्रह्म निराकार साकार मूर्तिमान् अनि।
कर्ता कारण हुन् कृष्ण अकर्ता पनि हुन् उनी ॥

कृष्ण कस्तो अवस्थामा अवतार लिन्छन् त्यसको सरल तर शास्त्रीय उत्तर यसरी दिइएको छ –

विश्वमा जब फैलन्छ अत्याचार उपद्रव।
नासिन्छ धर्म संस्कार बाँच्न हुन्छ असम्भव ॥
निसासिन्छन् जहाँ साधु असाधु बढ्दछन् जब।
गर्न सद्धर्मको रक्षा आउँछन् कृष्णजी तब ॥

**१२. निर्मुक्तबन्धन**

अनुष्टुप् छन्दको यस कवितामा अद्वैत वेदान्त दर्शनका मान्यताको स्थापना गर्नुका साथै त्यहाँ प्रयोग हुने पारिभाषिक शब्दहरूको दार्शनिक

तहबाट अर्थ गरिएको छ। कविले 'म' अर्थात् आफुलाई भनेजस्तो गरेर जीवका रूपमा रहेका सबै मानिस आत्मज्ञान र ब्रह्माभ्यास नहोउन्जेल संसारी बनेर संसारमै घुम्ने तर अविद्यारूपी दाउरालाई ज्ञानरूपी अग्निले डढाइसकेपछि बन्धनबाट छुटकारा पाउने वा निर्मुक्तबन्धन बन्ने अद्वैत ज्ञानको अभिव्यक्ति यस कवितामा दिनुभएको छ । आत्मचिन्तन र ब्रह्मज्ञानको अभाव भएसम्म सबै वस्तुको चाहना हुने र वीतरागी भइसकेपछि ती सबै मिथ्याप्रपञ्च लाग्ने दार्शनिक सार यहाँ पाइन्छ । उपनिषद्हरूमा प्रतिपादित सद्ब्रह्मलाई एउटै श्लोकबाट चिनाउनका साथै त्यसको ज्ञानबाट मुक्ति मिले झैं मुक्तिको फल पनि मिल्दछ भन्ने सन्देश कविताले दिएको छ। जस्तै –

पारमार्थिक सद्ब्रह्म सधैं नै छ झलामल ।
त्यसको ज्ञानले मिल्छ मुक्ति झैं मुक्तिको फल ।।

ब्रह्मको प्रतिबिम्ब जीव पनि ब्रह्म नै बन्न सक्छ तापनि उसले केही सर्त पूरा गर्नुपर्छ भने केही श्रम पनि गर्नुपर्छ । यसलाई कविले दर्शनको शैलीमा यसरी निर्देशन गर्नुभएको छ –

आफ्ना नै कर्मले गर्दा जीव फन्फन घुम्दछ ।
अविद्या कर्म नासेमा ऊ साक्षात् ब्रह्म बन्दछ ।।
अविद्या कामकर्मादि यी हुन् संसृतिबन्धन ।
ज्ञानले दग्ध भै बन्छ जीव निर्मुक्तबन्धन ।।

**१३. चतुर्थ आश्रम**

चतुर्थ आश्रमको अर्थ सन्न्यासाश्रम हो । आद्य शङ्कराचार्यले आमासँग सन्न्यास ग्रहण गर्ने अनुमति माग्दा मातृवात्सल्यले अभिभूत भई आमाले त्यसो नगर्न सल्लाह दिएपछि संसारको क्षणिकतालाई देखाउँदै तर्कपूर्ण रूपमा दार्शनिक कोणबाट आमालाई चित्त बुझाउने उद्देश्यले संस्कृत भाषामा व्यक्त गरेको विचारको अनुवाद 'चतुर्थ आश्रम' कविता

हो । पतिहीना तर पुत्रवती माताको स्वाभाविक लौकिक एषणाबाट आफुलाई सन्न्यास लिन बाधा परेको अनुभव गरी शङ्कराचार्यले अनित्यलाई छाडेर नित्यतर्फ लाग्न आमालाई समेत उत्प्रेरित गरेका थिए। यस क्रममा शङ्कराचार्य आमालाई सोध्छन् – कति छोरा पाउनु भयो ? तिनलाई कति माया गर्नुभयो ? कति बुहारी (पुत्रवधू) घर भित्र्याउनु भयो ? तिनीहरू अहिले कता गए ? यति प्रश्न गरेपछि शङ्कराचार्य आफैं उत्तर दिन्छन् । ती सबै बटुवासरि अस्थिर भएकाले हाम्रा सामु छैनन् । यसलाई संस्कृतमा यसरी भनिएको छ –

कति नाम सुता न लालिताः कति वा नेह वधूरभुञ्जिहि ।
क्व नु ते क्व च ताः क्व वा वयं भवसङ्गः खलु पान्थसङ्गमः ॥

सिर्जना र समालोचनाका दर्जनौं कृतिहरूबाट आफ्नो योग्यता प्रमाणित गरिसक्नुभएका कविले अनुवादमा समेत निपुणता देखाउँदै उपर्युक्त श्लोकको सोही छन्दमा मिठो र मार्मिक अनुवाद यसरी गर्नुभएको छ –

कति पुत्र पियार गर्नु भो कति वा पुत्रवधू पसे घर ।
अब अम्ब ! कहाँ गए तिनी सब हुन् पान्थसमान अस्थिर ॥

प्रस्तुत कविता आद्य शङ्कराचार्य र उनकी आमासँग सम्बद्ध भए पनि यसबाट मुक्तिका लागि ब्रह्मज्ञान आवश्यक छ र ब्रह्मज्ञानका लागि चतुर्थ आश्रम अर्थात् सन्न्यासाश्रम ग्रहणीय छ भन्ने पौरस्त्य जीवनविज्ञानको सारांश यसले प्रकाशित गरेको छ । यस कविताबाट विधिवत् सन्न्यास नै नलिए पनि वीतरागी बनेर गृहस्थ सन्न्यासी पनि हुन सकिन्छ भन्ने सरल उपाय समेत सङ्केत गरेको पाइन्छ ।

### १४. भागीरथी

गङ्गोत्तरीमा पुगेपछि त्यहाँको दिव्य प्राकृतिक दृश्य र आध्यात्मिक चेतनाबाट उद्दीपित भएका कविमा प्रस्फुरण भएको भावको प्रकाशनका रूपमा आएको मन्दाक्रान्ता छन्दको यस कवितामा गङ्गाको आगमन,

प्रवहण र पाप प्रक्षालन क्षमताको भावपूर्ण वर्णन गरिएको छ। गङ्गाको प्राकृतिक सौन्दर्य र आध्यात्मिक शक्तिको कलात्मक प्रस्तुतीकरण पाइने यस कवितामा सबै व्यवस्था भइसकेपछि र जिम्मेवारी पूरा गरिसकेपछि मात्र होइन जीवनको अत्यन्त उर्वर एवम् ऊर्जाशील समयमै गङ्गाको दर्शन, स्पर्श र स्नान गर्नुपर्ने आवश्यकता पनि देखाइएको छ। पौराणिक राजा भगीरथले पितृको उद्धार गर्ने सद्विचारबाट स्वर्गदेखि मार्गदर्शन गराउँदै धर्तीमा अवतीर्ण गराइएकी गङ्गा अद्यापि पापीहरूको पाप पखाल्ने सुधाधाराका रूपमा रहेकी छन् भन्ने कविको विचार र विश्वास यस कवितामा प्रतिबिम्बित भएको छ। पहिले तिर्सनामा हराएर गङ्गा बिर्सन पुग्नुभएका कवि धेरै समय बितिसकेपछि होसमा आएर गङ्गाको समीप पुगेको ग्लानिमिश्रित आत्मस्वीकृति यसरी जनाउनुहुन्छ –

गङ्गे ! ऐले पनि घुमिघुमी दूर पर्देश जान्छ्यौ।
पापी जो छन् कलुष अति नै पार तरेर लान्छ्यौ ॥
घुम्दाघुम्दै म पनि जननी तिर्सनामै हराएँ।
गङ्गे ! आएँ समय सकियो बल्ल पो होस पाएँ ॥

## १५. ज्योतिर्गमय

पूषन्लाई सम्बोधन गर्दै मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा दिव्यरश्मि फैलाएर जगत्को अन्धकार नाश गर्न सूर्यलाई भावुक आह्वान गरिएको छ। बाक्लो कुहिरोले नेत्र ढाकिएकाले सम्पूर्ण दृश्य देख्न छाडेको र गन्तव्य भुलिसकेको दयनीय अवस्था देखाउँदै कवि सम्पूर्ण प्राणीलाई प्रकाशतर्फ प्रवृत्त गराइदिन सूर्यको प्रार्थना गर्नुहुन्छ। ज्ञान, बुद्धि, विवेक र चेतनारूपी प्रकाश दिएर जीव र जगत्को अन्तरकुन्तरलाई ज्योतिर्मय बनाइदिन सूर्योदयको आवश्यकता कविले देखाउनुभएको छ।

यस कवितालाई वाच्यार्थ र व्यङ्ग्यार्थका दुई तहबाट हेर्न सकिन्छ। वाच्यार्थमा यो कविता सूर्यको उपासनामा केन्द्रित छ र सूर्यरश्मिद्वारा

जगत्‌लाई प्रकाशमय बनाउने उद्देश्यमा अभिमुख छ। व्यङ्ग्यार्थका तहबाट हेर्दा यहाँ जीवको अज्ञान हटाउनका लागि ब्रह्मज्ञानको आवश्यकता देखाइएको देखिन्छ । प्रत्येक श्लोकबाट सूर्यरश्मि र ब्रह्मज्ञानको अर्थ अवगत गर्न सकिने यस कवितामा श्लेष अलङ्कारको सौन्दर्य पनि आभासित भएको छ। उदाहरणका लागि निम्नलिखित श्लोकले सूर्यलाई पनि सम्बोधन गरेको छ भने मुक्तिका लागि ब्रह्मज्ञानको आवश्यकता पनि दर्साएको छ –

देख्छौं चारैतिर छ धमिलो घुप्प निस्पट्ट कालो ।
के हेर्दैछौ ? अझ पर बसी फ्याँक सङ्कीर्ण जालो ॥
फैलाऊ हे झलमल हुने शक्ति सौन्दर्य आलो ।
तिम्रो आयो घनतिमिरमा चम्किने आज पालो ॥

**भावना –**

**१६. अनुभूति**

वृद्धवर्ष, २०६९ को सन्दर्भ पारेर लेखिएको मन्दाक्रान्ता छन्दको यस कवितामा वृद्धावस्थाको अनुभूति र यस अवस्थामा गर्नुपर्ने कर्तव्यको अभिव्यक्ति भएको छ। बाल्यकाल खेलमा र युवाकाल विषयसङ्ग्रहमा बित्दछ भने वृद्धावस्था चिन्तामा डुब्दछ भन्ने अध्यात्मचिन्तकहरूको भनाइ छ। कवि यस कवितामा वृद्धावस्थालाई चिन्तामा होइन सिर्जना र साधनामा बिताउनुपर्छ भन्ने सन्देश दिनुहुन्छ। वृद्धावस्थामा पुगेर पनि कुनै मानिस आफ्नो अवस्था अनुसारको कर्म गर्दैन भने उसले दुःख पाउने त छँदै छ, अरूलाई पनि दुःख दिन्छ र ऊ अरूबाट उपेक्षित पनि हुन्छ भन्ने कविको अनुभव छ। वृद्धावस्था के गर्दा कस्तो हुन्छ, त्यसको उत्तर कविले अत्यन्त सरल र सटीक रूपमा यसरी दिनु भएको छ –

वृद्धावस्था सुझबुझ भए स्वर्गको द्वार हो यो ।
वृद्धावस्था सुझबुझविना नर्कको द्वार हो यो ॥
वृद्धावस्था अनुपम छ यो ज्ञानको पुञ्ज यो हो ।
वृद्धावस्था सुखद पनि हो भक्तिको कुञ्ज यो हो ॥

कविले वृद्धावस्थालाई नर्कको द्वार नबनाई स्वर्गको द्वार, ज्ञानको पुञ्ज र भक्तिको कुञ्ज बनाउनका लागि उपाय पनि निर्देश गर्नुभएको छ । त्यो उपाय भनेको ब्रह्मको ज्ञान हो । आलस्य त्यागी सुझबुझका साथ जुर्मुराएर उठी वृद्धावस्थालाई शान्त, सुखद र सन्तोषी बनाउन कवि यसरी आग्रह गर्नुहुन्छ –

धेरै नै छन् सम विषमका मार्ग नाना अनेक ।
यौटै मात्र अभयपथ हो ब्रह्मको ज्ञान एक ।।
तस्मात् चाँडै सुझबुझ लिई ज्ञानका तर्फ लागौं ।
सुस्ती छोडी अब त सब हे ! जुर्मुराएर जागौं ।।

**१७. कविगोष्ठी**

स्थापित र उदीयमान केही कविहरू सम्मिलित भई नियमित रूपमा सञ्चालित कोठे कविगोष्ठी (कोक) का आयोजक, सञ्चालक, उन्नायक र उत्प्रेरक कविले मन्द्राक्रान्ता छन्दमा लेख्नुभएको यस कवितामा गोष्ठीको प्रारम्भिक अवस्था, त्यसमा भएको सहभागिता र गोष्ठीको समीक्षा गर्नुभएको छ। सो गोष्ठीमा विभिन्न प्रवृत्ति र प्रतिभाका कविहरू सहभागी हुन्थे । उनीहरू बढी गफ गर्थे, मिठो भोजन गर्थे, ग्राम्य रतिवार्ताका कविता लेखेर सुनाउँथे र दमित मनोवृत्तिको प्रकाशन गर्दथे । ती कवि र कविताले क्षणिक तृप्ति र मनोरञ्जन दिए पनि मानसिक परिष्कार र परिवर्तन गर्ने आत्मज्ञानलाई महत्त्व दिएनन् । ती गोष्ठीबाट लौकिक साहित्यको विकासमा योगदान पुगे पनि पारमार्थिक कल्याणका लागि सार्थक काम हुन सकेन । यही यथार्थलाई आत्मसात् गर्नुभएका कविले तिनै कविहरूको लेखनशैली र स्वभावलाई देखाउँदै त्यस्ता गोष्ठीहरूको शाश्वत मूल्य यस कवितामा खोज्नुभएको छ ।

वर्षौंदेखि चलिआएका त्यस्ता गोष्ठीहरू देखी भोगी आउनुभएका कवि तिनका विषयमा यस्तो टिप्पणी गर्नु हुन्छ र आफ्नो अवस्था पनि बताउनुहुन्छ –

लेख्तालेख्तै समय सकियो लेखमा सार छैन ।
बोल्दाबोल्दै थकित सब छौं वाक्यमा प्यार छैन ।।
सम्झी सम्झी भन त कविजी के भयो काम खास ।
सारा फुस्सा अब त कविजी हुन्छु सारै उदास ।।

यस्तो अवस्था देखाइसकेपछि त्यस्ता गोष्ठीहरूमा सहभागी कविहरूलाई कवि आत्मज्ञानका विषयमा कविता लेख्नुपर्ने आवश्यकता देखाउनुहुन्छ । सबै जना छुटिसकेपछि साथमा लाग्ने एकमात्र वस्तु आत्मतत्त्वका विषयमा कविता लेख्नुपर्छ भन्ने कविको सल्लाह पनि छ । सल्लाहका साथै आस्तिक वा नास्तिक भए पनि हामी सबै ब्रह्मका विवर्त भएकाले ब्रह्मकै उपासना गर्नुपर्ने कविको आग्रह पनि यहाँ आएको छ । जस्तै –

दौड्यौं टाढा अब त कविजी फर्कनुपर्छ भित्र ।
हाम्रो यौटा दहर तलमा मौन भै बस्छ मित्र ।।
हामी छुट्छौं जब सब जना साथमा हुन्छ सोही ।
मर्दा पर्दा सब परपरै साथमा हुन्न कोही ।।

हामी हौंला कतिपय यहाँ अस्तिको भावभित्र ।
यद्वा हौंला कतिपय कठै नास्तिको भावभित्र ।।
हौंला हामी विविध रङका फूलजस्तै विचित्र ।
जे हौं हामी सकल तर हौं ब्रह्मका नै विवर्त ।।

**१८. कविविडम्बना**

वसन्ततिलका छन्दमा लेखिएको यस कवितामा साहित्यिक क्षेत्रमा देखापरेका विसङ्गतिहरूको चित्रण गरिएको छ । विद्वान्, विवेकी, ज्ञानी र स्वाभिमानी भएर बाँच्नुपर्ने कविहरू कालो धन थुपार्नेहरूको प्रशंसामा लागेका र कालो धनबाटै स्थापित पुरस्कारहरू थापेर सम्मानित भएका देखेर कवि कविवर्गकै स्वाभिमान गुमेको र उनीहरूको उपहास

भएको अनुभव गर्नुहुन्छ । धूर्त, गफाडी, भ्रष्ट र अनैतिकहरू साहित्यिक क्षेत्रमा समेत प्रवेश गरेर यसको हुर्मत लिइरहेका छन् र अनेकौं प्रपञ्च रचेर व्यापारिक लेनदेनको शैलीमा पुरस्कार लिने र दिने गरिरहेका छन् । आशामुखी कविहरू पुरस्कारका लागि गर्नु नहुने कामजति सबै गरिरहेका छन् । पुरस्कार प्रतिष्ठा र गौरवको विषय नबनेर किनबेचको वस्तु बनिरहेको छ भन्ने कविको ठहर छ । यो कविता काव्यक्षेत्रको अप्रिय सत्यका रूपमा आएको छ । धनीको धनसँग कवित्व झुकेको देखेर कविलाई ग्लानि हुन्छ र यस्तो अभिव्यक्ति निस्कन्छ –

त्यागी अहं दमित भै सब काम गर्छन् ।
थापेर हात बबुरा किन ? पेट भर्छन् ।।
देखिन्छ दिग्भ्रमित झैं कविको समाज ।
यद्वा धनीसँग झुक्यो कि ! कवित्व आज ।।

जुनसुकै अवस्था र उमेरका भए पनि स्थापित र नवीन दुवै वर्गका कवि द्रव्यको आशा राखेर पङ्क्तिबद्ध भएर बसेका छन् । यस्ता हताश कविहरूको शब्दचित्र यसरी उतारिएको छ –

सम्पन्न संस्कृत सुसभ्य गरीब दीन ।
ठूला प्रसिद्ध कवि हुन् अथवा नवीन ।।
छन् द्रव्यका पछि अतीव लिएर आस ।
छन् पङ्क्तिबद्ध बिचरा अति छन् हताश ।।

पुरस्कारका मालिक पनि आफैं छन् र परीक्षक एवं निरीक्षक पनि आफैं छन् । त्यस्ता मानिस आफैं सभापति हुन्छन् र आफैंले आफैंलाई सबै थोक घोषणा गरेर काम पनि सबै आफैं गर्दछन् । पुरस्कार स्थापना गर्ने, पुरस्कारको निर्णय गर्ने र पुरस्कार लिने एउटै व्यक्ति भएको देखेर कवि छक्क पर्नुहुन्छ र यसो भन्नुहुन्छ –

आफैं छ मालिक परीक्षक हुन्छ आफैं ।
दाता स्वयं पनि निरीक्षक हुन्छ आफैं ।।

आफैं सभापति पुरस्कृत गर्छ आफैं ।
आफैं स्वघोषित भई सब गर्छ आफैं ॥

धूर्त, शठ, चाटुकार र भँडुवाहरूको जत्था तयार गरी कविलाई भिखारी ठान्ने कालाधनीहरूलाई कवि यसरी प्रहार गर्नुहुन्छ –

राखेर धूर्त भँडुवा शठ चाटुकार ।
बाँडेर कृष्णधन खूब गरी प्रचार ॥
ठान्छन् कि ! ती भ्रम लिई कवि हुन् भिखारी ।
छन् आज आत्मरतिमा धनका पुजारी ॥

**१९. प्रकीर्ण कवि**

जीवनमा विभिन्न कार्यहरू गर्नुभएका र अनगिन्ती तीतामीठा अनुभवहरू सँगाल्नुभएका कविको अनेक थरी कविहरूसँग पनि सङ्गत र सहकार्य भयो । ती मध्ये थोरै मात्र कवित्व र धेरैजसो कुकवित्व भएका कवि थिए । तिनीहरूको वाणी, व्यवहार, चरित्र र शरीरमा पनि सङ्गति थिएन । तिनीहरूलाई काम, क्रोध, लोभ, मोह, मद र मात्सर्य (ईर्ष्या) ले पनि गाँजेको थियो । त्यस्तो विकृत स्थिति अहिलेसम्म पनि कायम छ । कवि तिनीहरूको सङ्गत छोड्न चाहनुहुन्छ तापनि सामाजिक शिष्टताले पूर्णतः मुक्त हुन सक्नुभएको छैन । यस कवितामा तिनै बहुरूपी कविहरूको यथार्थ वर्णन गरिएको छ। कविले जे लेख्नुपर्ने र जे गर्नुपर्ने हो त्यो नगर्ने तर लेख्न नहुने, गर्न नहुने विषय र काम सबै गर्ने कविहरूको दृश्य यस कवितामा झल्काइएको छ। कहिले आलुसरि सबैतिर मिल्ने, कहिले राजनीतिमा पनि होमिने, कहिले मद्यपान गरेर कालक्षेपण गर्ने र कहिले एकोहोरो बकबक गरिरहने बहुरूपी कविहरूको शरीर र मनलाई निम्नलिखित श्लोकले स्पष्ट पारेको छ –

आँखा र कान कमजोर भए विचित्र ।
फस्तो छ ऊ तर अझै व्यवहार भित्र ॥

सेतो कपाल छ कतैतिर छैन कालो ।
कालो छ भित्र मन छैन कतै उज्यालो ॥

योग्यता, योजना र उद्देश्यका बीच विरोधाभासपूर्ण स्थिति भएका कविहरूको चित्र यसरी प्रस्तुत गरिएको छ –

जान्दैन छन्द पद शब्द र वाक्यभेद ।
लिङ्गानुशासन न जान्दछ जातिभेद ॥
बोल्दैन शुद्धसँग तैपनि काव्य लेख्छ ।
ठूलो महाकवि हुने अझ स्वप्न देख्छ ॥

वृद्धावस्थामा पुगेर पनि लेख्नुपर्ने विषय नलेख्ने र देख्नुपर्ने तत्त्व नदेख्ने तर सौन्दर्यशास्त्र पढ्ने अनि सम्पूर्ण संसारलाई रमणीय देख्ने विसङ्गत कविहरूको यथार्थ पनि यस कवितामा आएको छ । ज्ञानभन्दा धन र मुक्तिभन्दा मानको इच्छा राख्ने अनि सत्सङ्गतिको सट्टा गोष्ठी र बैठकका रङ्ग रमितामा रमाउने रसिक कविहरूको चरित्र चित्रण यहाँ भएको छ । उमेर र अवस्था अनुसार सत्सङ्गति गर्नुपर्ने र पारलौकिक विषयमा कविता लेख्नुपर्ने सदाशय राखेर कवि त्यस्ता कविहरूलाई यसरी सतर्क र जागरुक गराउनुहुन्छ –

लेख्तैन आज उसले जुन लेख्नु पर्थ्यो ।
देख्तैन वृद्धवयमा जुन देख्नु पर्थ्यो ॥
सौन्दर्यशास्त्र अझ पढ्दछ काव्य लेख्छ ।
संसार यो सकल नै अझ रम्य देख्छ ॥

इच्छा अझै छ धनको अझ खोज्छ मान ।
गोष्ठी र बैठक सबैतिर खोज्छ जान ।
लम्किन्छ भौतिक कुरातिर बारबार ।
सत्सङ्गधर्मतिर छैन कतै विचार ॥

## २०. गजल

यसको शीर्षक 'गजल' भए पनि यो गजलरचना नभएर गजल र गजलकारका विषयमा द्रुतविलम्बित छन्दमा लेखिएको कविता हो। नेपाली साहित्यमा पनि गजल सरस र लोकप्रिय विधा बन्दै गएको छ। सामान्य सर्जकले लेखे पनि साहित्यशास्त्रको उच्च अध्ययन गरी त्यसै विषयको अध्यापन समेत गर्ने गरेका कथित आधिकारिक विद्वान् मानिने व्यक्तिहरू पनि यसै विधामा लिप्त भएको देखेर कविलाई असहज अनुभूति हुन्छ। प्रौढ र परिपक्व काव्यसाहित्य लेख्नुको सट्टा हल्काफुल्का गजल लेखेर रातारात गजलकार र साहित्यकारको उपाधि लिन मस्त वर्गको तस्बिर यस कविताले खिचेको छ। युगजयी कृति लेख्नेहरू लुप्त जस्ता भएका तर गजल लेख्नेहरू चर्चित हुँदै गएको देखेर कवि यसरी व्यङ्ग्य गर्नुहुन्छ –

गजल नै नभए पनि के भयो।
गजलकार भनी दरिए भयो॥
नव विधा सबले अब सिक्नु छ।
चुरफुरे फुरती अब झिक्नु छ॥

उर्दू र फारसी स्रोतबाट नेपाली साहित्यमा प्रवेश गरेको गजलको अनुकरण पनि निकै भएको छ। जुनसुकै विधि र उपायबाट भए पनि गजलकारका रूपमा नाम दर्ता गराएर मात्र प्राण त्याग गर्न चाहने गजलप्रेमीहरूलाई कविले यसरी चिनाउनुभएको छ –

सकलबाट उतारुँ भकाभक।
नकल खूब गरौं नलिई धक॥
जुनसुकै तरिका पनि गर्नु छ।
गजलकार भईकन मर्नु छ॥

गजल र गजलकारका विषयमा कविले प्रस्तुत गरेको अभिव्यक्ति सत्य र स्वाभाविक भए पनि गजलकार र गजलप्रेमीहरूले चित्त दुखाउने सम्भावनाको आकलन गर्नुभएको छ। आफुले वर्णन गरेको विषय सोह्रै

आना सत्य भए पनि कविलाई यो अप्रिय सत्य जस्तो लाग्छ । अतः गजलव्यसनीहरूसँग कवि कवितामै यसरी क्षमायाचना गर्नुहुन्छ –

गजलको जयगान यथामति ।
सहजमा गरियो सकियो जति ॥
गजलकार जति छन् कवि पण्डित ।
शरद माग्दछ माफ सबैसित ॥

## २१. भानु

चार-चार पङ्क्तिका अगाडिका पाँच श्लोक अनुष्टुप् र पछाडिका दुई श्लोक मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा आदिकवि भानुभक्त आचार्यले देखेको काठमाडौं परिवर्तित भइसकेको सन्दर्भ उल्लेख गर्दै भानुकै भाषिक र साहित्यिक चेतनाले हामी बाँचिरहेका छौं भन्ने भाव व्यक्त गरिएको छ । भानुले यति ठुलो योगदान दिए पनि आजभोलि त्यो मेटिँदै र मासिँदै गएकोमा कविको चिन्ता यस कवितामा प्रकट भएको छ । भानुको भाव र भावनालाई पालना गर्न नसकेको यथार्थलाई कविले यसरी देखाउनु भएको छ –

भाषा छ तर हे भानो ! भावना भासिँदै गयो ।
हाम्रो एकत्वको भाव बिस्तारै मासिँदै गयो ॥
तिमीले जो दियौ भानो ! हाम्रा लागि ठुलो थियो ।
ठाडो शिर गरी बाँच्ने आधार उसले दियो ॥

हाम्रा स्नेह र सद्भाव अँध्यारोमा विलीन भइसकेकाले तिनको पुनरागमनका लागि सूर्यजस्तै भएर झुल्कन र पहिले जस्तै सुन्दर ज्योति फैलाउन कवि भानुलाई अनुरोध गर्नुहुन्छ –

राख्छौ कति अँध्यारोमा आँखा बन्द भई सके ।
हाम्रा स्नेह र सद्भाव अँध्यारोमा गई सके ॥
झुल्क भानो ! यहाँ फेरि फ्याँक यो हुस्सुको दल ।
फैलाऊ पहिले जस्तो ज्योति सुन्दर निर्मल ॥

भानुभक्तले दिएको भाषिक संस्कार समाप्त भएर आज नेपाली भाषा वर्णसङ्कर बन्न पुगेको छ। मौलिक शब्दहरू हराउँदै गएका छन् भने आगन्तुक शब्दहरू अत्यधिक प्रचलनमा आएका छन्। भाषा र भेष बदलिएको देखेर कविमा यस्तो भाव स्फुरित हुन्छ –

छोराछोरी नव समयको सभ्यतामा बिलाए।
ड्याडी मम्मी घरघर भए बाबुआमा हराए ॥
भाषा बोली अब बदलिए भेष नौलो छ आज।
हेर्दाहेर्दै सब बदलियो भानु तिम्रो समाज ॥

यसरी भानुलाई आलम्बन बनाएर नेपाली भाषा, भेष, भावना र संस्कारको संरक्षण गर्नुपर्ने चेतनामूलक सन्देश यस कविताले दिएको देखिन्छ।

**२२. ज्योतिः पुञ्ज**

प्रतिश्लोक चार पङ्क्तिमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा पनि पूर्वचर्चित 'भानु' कवितामा जस्तै वर्तमान नेपालको स्थितिको सङ्केत गर्दै भानुलाई सूर्यजस्तै बनेर नेपालमा आउन र नेपालीलाई जगाउन आह्वान गरिएको छ। भानुभक्तले दिएको भाषिक र भावनात्मक एकता आज खण्डित हुँदै गएको छ। नेपाली बाँच्ने एकताको सूत्र चुँडिएको र साझा आँगनका रूपमा रहेको नेपाल विखण्डित भएको देखेर कविलाई यस्ता प्रश्न गर्न मन लागेको छ –

किन हो आज यो आभा सबै धूमिल भैसक्यो।
हाम्रो राष्ट्रिय सद्भाव डाँडा काटेर गैसक्यो ॥
कहाँ छ एकतासूत्र ? नेपाली बाँच्तथ्यौं जहाँ।
कहाँ आँगन साझा छ ? सबै नै नाच्तथ्यौं जहाँ ॥

अहिले गीत सुसेल्न पाइने गाउँ पनि छैनन् भने हृदयको भाव पोख्ने ठाउँ पनि छैनन्। प्रत्येक घरको प्रतिष्ठाको विषय बनेको रामायण पनि अहिले पाइँदैन र रातोदिन भानुका भाका सप्रेम घन्किएका पनि सुनिँदैनन्। यही मार्मिक अवस्थाको चित्रण यसरी गरिएको छ –

कहाँ छन् ? अब ती गाउँ जहाँ गीत सुसेल्दथ्यौं ।
आफ्नू हृदय खोलेर जहाँ भाव उगेल्दथ्यौं ।।
रामायण जहाँ हुन्थ्यो प्रत्येक घरको यश ।
घन्कन्थे भानुका भाका प्रेमसाथ अहर्निश ।।

भानुका कृति र कर्म बिर्सनाले आज नेपाल कस्तो भएको छ त्यसको एक झल्को यस श्लोकमा पाइन्छ –

तिनै गाउँहरू आज बिरानासरि भैसके ।
तिम्रो सत्कार्य बिर्सेर पछाडि सब गैसके ।।
ज्यूँदो जातीय सद्भाव आज मर्दै गई सक्यो ।
डँडेलो गाउँबस्तीमा सर्ने त्रास भई सक्यो ।।

यस्तो स्थिति आइसकेको हुँदा अँध्यारो हटाउन र सबैमा प्रकाश भर्न आफ्नै घर नेपाल आउन भानुलाई यसरी निमन्त्रणा गरिएको छ –

आकाशबाट हे भानो ! तिमी नेपालमा झर ।
हटाऊ कलिमा हाम्रो प्रकाश सबमा भर ।।
ढिला नगर हे भानो ! पाउ चालेर सत्वर ।
आऊ हे ज्योतिका पुञ्ज ! तिम्रै नेपाल हो घर ।।

## २३. फेरि नयाँ वर्ष आयो

चारचार पङ्क्तिको अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा देशको २०५९ साल र यसको आसपासको त्रासद परिवेशको प्रस्तुति भएको छ । नयाँ ऊर्जा, उमङ्ग र उत्साह बोकेर आउने नववर्षमा परस्पर सद्भाव र शुभकामना बाँड्ने जाँगर छैन । प्रत्येक पुरानो वर्ष मृत्यु बोकेर जान्छ र प्रत्येक नयाँ वर्ष मृत्यु नै बोकेर आउँछ । चारैतिर मृत्युको मात्र राज भएकाले कवि पनि कवितामा मृत्यु नै लेख्न थाल्नुभएको छ । मृत्यु साथमा लिएर र माथमा बोकेर हिँड्न बाध्य

हामीले नववर्षको शुभकामना दिनु पनि व्यङ्ग्य जस्तो भएको छ भन्ने कविको कथन छ । मृत्युको स्थिति देखाउने यस श्लोकबाट देशकै स्थिति अनुमान गर्न सकिन्छ –

पुरानो वर्ष भागेछ मृत्यु बोकेर साथमा ।
नयाँ वर्ष यहाँ आयो मृत्यु बोकेर माथमा ।।
जता हेर्‍यो उतै मृत्यु हजारौं मृत्यु देख्तछु ।
अब ता कविता लेख्ता म सधैं मृत्यु लेख्तछु ।।

कविलाई बाँचिरहे पनि प्रत्येक दिन मरेको जस्तो लाग्दछ । आफ्नो त्रस्त जिन्दगीको वर्णन गरेर सबै नेपालीहरूको जीवनको मूल्यहीन अवस्था यसरी देखाइएको छ –

मान्छेको भीड देखेर म साह्रै नै डराउँछु ।
सुत्छु ऐठन बोकेर सपनामा कराउँछु ।।
यो कस्तो जिन्दगानी हो कहाँ छ यसको हद ।
बाच्नका लागि नै मर्छु प्रत्येक दिन सायद ।।

लेकाली सुगन्धित बोटवनस्पतिमा लासको गन्ध आइरहने समयमा नयाँवर्षको आगमन पनि व्यर्थ छ भन्दै कवि मृत्युदेखि मृत्यु नै डराउन थालेको भयानक दृश्य यसरी उतार्नुहुन्छ –

आएको छ नयाँ वर्ष फेरि फर्केर नाहक ।
जताततै छ चर्केको घिनौनो मृत्युवाहक ।।
भैरम्पाती र धूपीमा लासको गन्ध आउँछ ।
अब ता मृत्यु देखेर मृत्यु आफैं डराउँछ ।।

यस्तो भीषण अवस्थामा चिनेका चेहराहरू पुराना वर्षहरू विलीन भए झैं हराउँदै गएकाले देश दुःखी र मन शोकाकुल भएका छन् । यस बेला शुभकामना दिन सकिँदैन भन्ने मर्मस्पर्शी भाव यसरी पोखिएको छ –

चिनेका चेहरा धेरै देखिँदैनन् कता गए ।
पुराना वर्षका साथै अन्तर्धान सबै भए ॥
दुःखमग्न छ यो देश शोकमग्न छ भावना ।
कुन उत्साह राखेर म दिऊँ शुभकामना ॥

## २४. कसरी स्वागत गरौं ?

वसन्ततिलका छन्दमा २०६१ सालको नववर्षमा लेखिएको यस कवितामा पनि पूर्वोल्लिखित 'फेरि नयाँ वर्ष आयो' कविताको जस्तै भावसाम्य पाइन्छ । यो कविता लेखिएको समय भनेको हत्या, आतङ्क र त्रासको दबदबा भएको समय हो । यस्तो अवस्थामा नववर्षको स्वागत गर्ने कुनै उत्साह नभएको भाव 'फेरि नयाँ वर्ष आयो' भन्ने कवितामा जस्तै यस कवितामा पनि व्यक्त भएको छ । प्रतिदिन हुने हत्याले राष्ट्र नै आशौचमा छ र लासले भरिएको छ भन्दै कवि नववर्षको आगमनमा कसैको उत्सुकता पनि छैन भन्ने तर्क गर्नुहुन्छ । सहोदर दाजुभाइ शत्रुझैं लडिरहेका छन् र राष्ट्रलाई मास्ने र बिगार्ने उद्देश्यमा तल्लीन छन् । चारैतिर संवेदना मरिसकेकाले यो राष्ट्र नै लास पो भयो कि ? भन्ने उत्प्रेक्षा अलङ्कारबाट प्रतिबिम्बित सौन्दर्यका साथ कवि देशको स्थिति यसरी देखाउनुहुन्छ –

छन् शत्रुझैं अब सहोदर दाजुभाइ ।
उद्देश्य मास्नु छ बिगार्नु छ राष्ट्रलाई ॥
हावा बहन्छ अब बारुदगन्ध बोकी ।
संवेदना मरिसक्यो सब लास हो कि ?

भौतिक रूपमा भूगोल र भावनात्मक रूपमा मन चिराचिरा परेको छ । देश चिरिएर हेरिनसक्नु भएको छ भने मन चिरिएर थामिनसक्नु भएको छ । वर्तमान समयमा पनि उत्तिकै सान्दर्भिक त्यस्तो भाव प्रकाशन गर्ने श्लोक यस प्रकार छ –

मेची चिरा छ अनि पश्चिम झन् चिरा छ ।
यो राष्ट्र धर्मर भएर महाचिरा छ ॥
हेरौं जता सकल देख्छु चिरा चिरा छ ।
धेरै चिरा छ मन यो मुटु झन् चिरा छ ॥

नेपाल कतिखेर कहाँ कसले किन बन्द गर्छ, थाहा हुँदैन । बन्दका पनि अनेक प्रकार छन् । बन्दको मारमा पर्नुभएका कवि सबै नेपालीको मनको कुरा कवितामा यसरी उतारिदिनु हुन्छ –

जाऊँ जतातिर उतैतिर हुन्छ बन्द ।
नाका छ बन्द कहिले अनि देश बन्द ॥
कैले यहाँ अनि वहाँ सब बन्द बन्द ।
कैले छ पश्चिम खुला अनि पूर्व बन्द ॥

### २५. वसन्तको अन्त

अगाडिका चार श्लोक स्वागता र पाँचौ श्लोक मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा वसन्तको समापन र ग्रीष्मको आगमन हुन लागेको सङ्क्रमण कालको सुन्दर वर्णन गरिएको छ । वसन्त कालको समापनसँगै त्यसको रूप, रस र रङ्ग हराएर गएको भावार्थ प्रस्तुतिबाट कविले व्यङ्ग्यार्थका तहमा मानवजाति र जीवनको चक्रलाई पनि दर्साउन खोज्नुभएको छ । प्रकृतिमा प्रतिवर्ष वसन्त मादकता छरेर आउँछ र केही समयपछि अन्तै जान्छ अनि ग्रीष्म आउँछ । त्यसपछि क्रमशः अरू ऋतुहरू आउँछन् र अन्ततः फेरि वसन्त आउँछ । यो क्रम अनादिकालदेखि चलिआएको छ । हाम्रो जीवन पनि पूर्वजन्म र पुनर्जन्मको चक्रबाट चलिरहन्छ र मानवजीवन चाहिँ वसन्तमय हुन्छ र त्यसमा पनि यौवनकाल क्षणिक भए पनि मधुर एवम् मादकतापूर्ण हुन्छ भन्ने भाव यस कविताले वहन गरेको छ । यो कविता एक प्रकारले प्रकृति र मानवको परिवर्तनशील गतिलाई सङ्केत गर्ने बौद्धिक रचना बन्न पुगेको छ । वसन्तको प्रस्थानसँगै साथ लागेर गएको भ्रमर समूहको वर्णनमा उत्प्रेक्षाको चमत्कार देख्न सकिन्छ –

भृङ्गको दल बनेर अनाथ ।
या गयो कि ! कुसुमाकर साथ ।।
फूलको रस पिईकन धेर ।
लट्टियो कि मदमत्त बनेर ।।

वसन्त ऋतुलाई आफ्नो अनुभव अनुसार मानिसहरू अनेक रूपमा वर्णन गर्छन् । कवि चाहिँ शिशिर ऋतु देख्ने मानिसले मात्र वसन्त चिन्न सक्छ भन्नुहुन्छ । जसबाट व्यञ्जनाका तहमा जन्मजन्मान्तरको जीवन र यसै जीवनका दुःख सुखको स्थितिसमेत बोध गर्न सकिन्छ । जस्तै –

भन्छन् कोही सुखद ऋतु हो मोक्षदाता वसन्त ।
भन्छन् कोही शिवद ऋतु हो शान्तिदाता वसन्त ।।
यो हो यौटा हिमऋतु बिती आउने सौम्य सन्त ।
जल्ले देख्यो शिशिर ऋतु वा चिन्छ त्यल्ले वसन्त ।।

## २६. अधिकार र कर्तव्य

नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान (हाल नेपाल प्रज्ञाप्रतिष्ठान) द्वारा २०२६ सालमा आयोजित राष्ट्रव्यापी कविसम्मेलनमा सर्वप्रथम भई राजा महेन्द्रबाट सुवर्णपदकले विभूषित यो कविता अनुष्टुप् छन्दमा लेखिएको छ । शीर्षक अनुसार अधिकार र कर्तव्यप्रति सचेत गराउन सफल यो कविता राष्ट्रको निर्माण र जागरणका लागि पनि प्रेरक बनेको पाइन्छ । निद्रा, आलस्य र सम्भ्रम छाडेर देशका लागि बाँच्न र देशकै लागि मर्न उत्साह भरिदिने यो कविता वीररसले ओतप्रोत छ । कर्तव्य पूरा गर्नेलाई मात्र अधिकार माग्ने अधिकार हुन्छ भन्ने मान्यतालाई कविले सरल र सारगर्भित रूपमा यसरी प्रस्तुत गर्नुभएको छ –

अधिकार त हो प्राप्ति न दिइन्छ लिइन्छ यो ।
जसले गर्छ कर्तव्य त्यसैले प्राप्त गर्छ यो ।।

यसबाट कवि अधिकार प्राप्तिका लागि आफ्नो कर्तव्यको पालना र परिपूर्ति पनि गर्नुपर्ने राजनीतिक आदर्शको स्थापना गरिरहनु भएको

देखिन्छ । राष्ट्रको नेतृत्वले कृष्ण बनेर प्रत्येक नेपालीलाई कर्मयोगमा प्रवृत्त गराउनुपर्ने र प्रत्येक नेपाली पार्थ (अर्जुन) बनेर नेपाल बनाउन उठ्नुपर्ने जोसिलो सारलाई नयाँ भाषा र भावनामा व्यक्त गरिएको छ –

तिम्रो हिम्मत हो कृष्ण ! कर्मयोग पढाउन ।
उठ हे देशका पार्थ ! यो नेपाल बनाउन ॥

**२७. स्वच्छ मन**

द्रुतविलम्बित छन्दमा रचित यस कवितामा एकातर्फ मन नै दुःख र दूषणको कारण हो भने अर्को तर्फ सुख र स्वच्छताको शक्ति पनि कारण हो भन्ने आध्यात्मिक विचारको प्रतिपादन गरिएको छ । मनलाई वशमा नराख्दा अनेकौं विकृतिहरू पैदा हुने र वशमा राख्ता भने सन्तोष र शान्ति प्राप्त हुनुका साथै सबैप्रति समभावको विकास हुने चिन्तन यस कवितामा पाइन्छ । धनलाई बन्धन ठान्ने र अभावलाई नै सुख मान्ने क्षमता भएका व्यक्तिको मन सन्तुष्ट भइसकेपछि हुनु र नहुनुको भेद रहँदैन भन्ने दार्शनिक चिन्तन यसरी अभिव्यक्त भएको छ –

नहुनुमा जसले सुख मान्दछ ।
हथकडी जसले धन ठान्दछ ॥
जब भयो मन तुष्ट सरासर ।
नहुनुमा हुनुमा छ बराबर ॥

जति प्रयास गरे पनि, जति सञ्चय गरे पनि अन्तिम अवस्थामा कसैले पनि केही लान नसक्ने भएकाले मनलाई तृप्त बनाएर बस्न सक्नुपर्छ, यसले नै मनुष्यलाई अजर र अमर बनाउँछ भन्ने वेदान्ती ज्ञान यस श्लोकबाट पाउन सकिन्छ –

जति गरे पनि कोसँग जान्छ के ?
सकल छुट्तछ आखिर लान्छ के ?
मन छ तृप्त सबै छ बराबर ।
मनुज बन्छ सधैं अजरामर ॥

यस कवितामा पाइने एउटा लोभलाग्दो विशेषता यमक अलङ्कारको सुन्दर र स्वाभाविक प्रयोग हो। वेदान्ती ज्ञानलाई आलङ्कारिक चास्नीमा घोलेर आस्वादन गराउने कविको अद्भुत क्षमता यहाँ पाइन्छ। हृदय शान्त र सफा भएपछि आवरणदोष समाप्त हुन्छ भन्ने वेदान्तको मान्यतालाई यमकको चारुताका साथ यसरी प्रस्तुत गरिएको छ –

मन बुझ्के नबुझ्के पनि भै गयो ।
बखतमा खत माफ सबै भयो ॥
अतलको मल तत्क्षणमा गयो ।
हृदय शान्त सफा जहिले भयो ॥

यमकको जोडा प्रयोग मात्र नभएर दोहोरो जोडा प्रयोग गर्ने सामर्थ्य पनि कविमा रहेको पाइन्छ। निम्नलिखित श्लोकांशमा दोहोरो यमकको सौन्दर्य यसरी सिर्जना गरिएको छ –

अघि जुटे सबका सब टाँसिए ।
अब भए शव झैं सब मासिए ॥

## २८. के लेखौं कविता भन ?

प्रतिश्लोक चार पङ्क्तिका अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा देशको त्रासद र आतङ्कपूर्ण वातावरणमा कवितासमेत लेख्न नसकेको निरीह भावना प्रकट भएको छ। देशभर बम, बन्दुक र बारुदको आवाज र गन्ध फैलिएको छ। उता कविका हात भाँचिएका छन् भने मन पनि नजोडिने गरी टुटिसकेको छ। यस्तो अवस्थामा कविताको स्फुरण, लेखन, श्रवण र वाचन पनि हुन सकिरहेको छैन। यसरी कवि अरू कविहरूलाई कविता लेख्न नसकिरहेको जनाउ दिनुहुन्छ। कविता लेख्न आग्रह गर्ने कविवृन्दसँग कविको कवितात्मक प्रश्न छ –

दुखेको छ यहाँ छाती छिया छिया छ यो मन ।
भावना भत्किएको छ, के लेखौं ? कविता भन ॥
देशमा अग्निको ज्वाला ढाकी पूर्व र पश्चिम ।
सल्किएको छ, हेर्दैछु ढुङ्गो सरि बनेर म ॥

खोलो रगतको आज बगेको छ जताततता ।
म कस्का नाममा रोऊँ ? दौडिऊँ म कताकता ॥
छातीमा शान्ति नै छैन अशान्ति छ जहाँतहाँ ।
म आफैं छरिएको छु हिँडूँ खोज्दै कहाँकहाँ ॥

देशको यस्तो कहालीलाग्दो स्थिति देखाएर कवि कविता लेख्ने वातावरण नभएको सत्य देखाउनु हुन्छ तापनि यस्तो स्थितिको निवारणका लागि कविको पनि उत्तिकै दायित्व हुन्छ भन्नुहुन्छ । एउटै श्लोकमा कविता लेख्ने अवस्था नभएको वर्णन गरिएको छ भने त्यसैमा कविले पनि केही गर्नुपर्ने कर्तव्यको निर्देशनसमेत भएको पाइन्छ । जस्तै –

अब त्यो भाव नै छैन तार बज्दैन झन्झन ।
कसरी कविता लेख्ने ? तिमी नै कविजी भन ॥
कविजी उठ तातेर सुत्ने बेला गई सक्यो ।
मेची काली सम्हालेर जुट्ने बेला भई सक्यो ॥

कविको कविहरूसँग थप आग्रह यस्तो छ –

बाटो भुल्नेहरूलाई सम्झाऊ अब बेसरी ।
गरिद्यौ शान्तिको वर्षा बर्षाई कविता झरी ॥

## २९. अर्ती

शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कवितामा देशको वेथितिको वर्णन गर्दै राज्यका सञ्चालकहरू सत्पात्र र सुयोग्य हुनुपर्ने अर्ती दिइएको छ । स्वार्थी, ठग, चाटुकार र सङ्कीर्ण व्यक्तिहरू हाबी भएकाले देशमा सर्वत्र अराजकता र अस्तव्यस्तता छ । आज देशको स्थिति कस्तो छ र शासन कस्ता मानिसले चलाइरहेका छन् भन्ने प्रश्नको सटीक उत्तर यी दुई श्लोकबाट पाउन सकिन्छ –

नाङ्गो नाच छ आज दुष्टजनको हेऱ्यो जता आखिर ।
अत्याचार छ उग्र यो मुलुकमा छन् भ्रष्ट चारैतिर ।।
जल्ले जे जति भेट्छ लुट्तछ यहाँ लाजै नमानीकन ।
स्वार्थी वञ्चक चाटुकार अति छन् सानो छ छाती मन ।।

ऐले राष्ट्र छ घाटमा घिटघिटी क्यै सासझैं फेर्दछ ।
राम्रा योग्य सपूत देख्छु कि ! भनी आशा गरी हेर्दछ ।।
देख्ता बाहिर शोकमग्न सरि छन् जो घाटमा छन् बडा ।
कात्रोसम्म तयार लुट्न सब छन् जो घाटमा छन् खडा ।।

कवि समस्या देखाएर आलोचना मात्र गर्नुहुन्न, सुझाव दिएर समाधानका उपाय पनि बताउनुहुन्छ । यस देशको दुर्गति हटाउनका लागि नेताहरूको मन र आचरण शुद्ध हुनुपर्छ अनि पथभ्रष्ट एवं दुष्कर्मीहरूलाई सन्मार्गमा ल्याई राष्ट्रवादी भएर एकताको सूत्रमा अघि बढ्नुपर्छ भन्ने कविको अर्ती छ –

नेता हो गर काम शुद्ध मनले नेपालका नाममा ।
साह्रै जागृत भै तिमी अघि बढे सन्मार्ग सत्काममा ।।
जो जो छन् पथभ्रष्ट दुष्कृतहरू सारा समेटीकन ।
ल्याऊ सत्पथमा सँगै बढ तिमी एकत्वमा दी मन ।।

## ३०. जो छैन परिदृश्यमा

चारचार पङ्क्तिको अनुष्टुप् छन्दमा रचिएको यो कविता चारैतिर युद्ध, लास र रगतको दृश्य देखेर उद्विग्न बनेको कविहृदयको प्रकाशनका रूपमा आएको छ । जो ढले पनि, मरे पनि र डढे पनि आखिर नेपाली नै हुन् र देशमा जहाँ बगे पनि त्यो नेपालीकै रगत हो भन्ने संवेदनापूर्ण तर्क गर्दै कवि अन्तमा हार मात्र पाइने र हातमा शून्य आइलाग्ने युद्ध गर्नु बेकार छ भन्नुहुन्छ । पराजय निश्चित भएको नेपाली-नेपाली बीचको युद्ध लड्ने योद्धाहरूलाई सम्झाउने शैलीमा कवि यसो भन्नुहुन्छ –

जो जो छौ युद्ध संलग्न सारा हौ मृत्युवाहक ।
आफ्नू नै नाश गर्दै छौ विनाहोश अनाहक ॥
यो युद्ध जीतको हैन हारको तिमी लड्दछौ ।
जता बढ्छौ तिमी ऐले अँध्यारातिर बढ्दछौ ॥

जता हेऱ्यो उतै आज सन्त्रास अन्धकार छ ।
तिमी के लड्दछौ युद्ध जहाँ केवल हार छ ॥
छिया छिया बनाएर राष्ट्र सम्पूर्ण मास्तछौ ।
तिमीले आखिरी राष्ट्र कङ्कालमात्र पाउँछौ ॥

देशको इतिहास, राजनीति, कूटनीति र नेपाली नेताहरूको प्रवृत्ति राम्रोसँग बुझ्नुभएका कवि नेपालीहरू बीच भइरहेको युद्धको उद्देश्य र नियन्त्रणकक्ष नेपालमा नभएको ठहर गर्नुहुन्छ । नेपालीहरूको युद्ध एक प्रकारको कृत्रिम युद्ध (प्रोक्सी वार) बनेको तथ्य कविलाई राम्ररी थाहा छ । त्यसैले यो युद्ध पनि त्यसैले जित्छ जो परिदृश्यमा छैन भन्ने बौद्धिक, साङ्केतिक र सारगर्भित निष्कर्ष उहाँ यसरी दिनुहुन्छ –

नेपालै नरहे योद्धा कहाँ आसन कस्तछौ ।
खरानी हुन्छ यो देश कहाँ गएर र बस्तछौ ॥
के जितौला तिमी युद्ध जो छ दूर अदृश्यमा ।
यो युद्ध उसले जित्छ जो छैन परिदृश्यमा ॥

यस श्लोकबाट देखिने शरीरमाथिको युद्ध जितेझैं गरेर वास्तविक युद्ध जितिने होइन, परिदृश्यमा नरही दूर अदृश्यमा रहेको मन वा आत्मामाथिको विजयमात्र मानिसको मुक्तिमार्ग प्राप्त गर्ने वास्तविक विजय हो भन्ने वेदान्तपरक अर्थ पनि आभासित भएको पाइन्छ ।

**३१. हाम्रो वर्तमान**

पञ्चचामर छन्दमा लिखित यस कवितामा पनि देशको अशान्ति र आतङ्क देखाइएको छ भने नेपालीहरूको मानसिक उद्वेग पनि

प्रकाशित गरिएको छ। शान्तिको राज र शम्भुको निवास भएको यस राष्ट्रमा अशान्ति कसरी आयो भन्ने प्रश्न गर्दै कवि राष्ट्र भित्रभित्रै डढेर समाप्त हुन लागेकोमा अतिशय चिन्ता व्यक्त गर्नुहुन्छ। निम्न लिखित श्लोकले देशको स्थिति क्यामराले दृश्य उतारेझैं छर्लङ्ग पारेर देखाएको छ –

लुटिन्छ अस्मिता सधैं कहाँ गई लुकाउने।
छ भित्र घाउ बल्किँदो कहाँ गई सुकाउने॥
तुषाग्नि झैं अथाहमा छ राप भर्भराउँदो।
डढेर भित्र भित्रै नै छ राष्ट्र चर्मराउँदो॥

देशमा राजनीतिक अस्थिरता र विपन्नता छ। दाजुभाइहरू परस्पर लडेर देश युवाविहीन बन्न पुगेको छ। स्वदेश विदेश जस्तो भएको छ र हामी आफ्नो अस्तित्व बिर्सेर हराउँदै गएका छौं। शान्तिक्षेत्रमा लासको दृश्य मात्र देख्नुपर्छ। नेपालको यही भीषण अवस्थालाई निम्नलिखित दुई श्लोकबाट देखाइएको पाइन्छ –

छ नीति लर्खराउँदो छ राजनीति अस्थिर।
निरीहता विपन्नता छ राष्ट्रमा सबैतिर॥
लडेर दाजुभाइ नै समग्र नाश भै सके।
भविष्य अन्धकार भो युवा मरेर गै सके॥

स्वदेश नै विदेश भो डराउँदै गई सक्यौं।
स्वअस्मिता भुलेर नै हराउँदै गई सक्यौं।
जताततै छ लासको असह्य नग्न दर्शन।
छ शान्तिक्षेत्रमा सधैं नृशंस यो प्रदर्शन॥

यसरी प्रस्तुत कवितामा कवि नेपाल नै मानवीकृत रूप लिएर बोलिरहेको भावमा मर्मस्पर्शी अभिव्यक्ति प्रकट गर्नुहुन्छ र देशका लागि चिन्तित देखिनुहुन्छ।

## ३२. बाटो भुलेकालाई

शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कवितामा देश र जनतामा विखण्डन र विध्वंस मच्चाउने तत्त्वका कुकर्महरूको वर्णन गरिएको छ। राष्ट्रका सम्पूर्ण मूल्यमान्यता समाप्त पारेर विद्वेषको आगो लगाउने तत्त्व नै कविका शब्दमा बाटो भुलेकाहरू हुन् । उनीहरूले राष्ट्रमा के गरे, के गरिरहेका छन् र के गर्ने योजना बनाइरहेका छन् त्यसको स्पष्ट उत्तर यस कवितामा पाइन्छ । नेपाल र नेपालीहरूलाई समाप्त पार्न उद्यत तिनीहरू अन्ततः भस्मासुर झैं आफैं समाप्त हुन्छन् भन्दै कवि तिनको नग्न नृत्यको पर्दाफास यस कवितामा गरिदिनुहुन्छ। तिनीहरूले गरेका काम र त्यसबाट निस्कने परिणामको एक झल्को यस श्लोकबाट देख्न सकिन्छ –

हाम्रा शाश्वत मान्यतास्थितिहरू उद्दण्ड भै तोड्दछौ ।
हाम्रा सुन्दर धाम मन्दिरहरू उन्मादमा फोड्दछौ ।।
गाईको वध गर्दछौ अबुझ भै के के तिमी गर्दछौ ।
सारा नाश गरी परन्तु पछुतो गर्दै तिमी मर्दछौ ।।

बाटो भुलेकाहरू सबैतिर विनाश र विखण्डनमा सक्रिय छन् । नेपाल र नेपालीहरूको विनाश आफ्नो पनि विनाश हो भन्ने तथ्यको बोध उनीहरूलाई भएको छैन । मुढे बल देखाएर युद्धको उन्मादमा रमाएका मूर्खहरू देखेर कवि प्रश्नै प्रश्न गर्नुहुन्छ र उनीहरूलाई सचेत बनाउन खोज्नुहुन्छ –

तिम्रो के छ ? अभीष्ट यो सब गरी खोलेर छाती भन ।
सारा राष्ट्र विनाश जर्जर गरी बस्छौ कहाँ गैकन ।।
आफू नै अब खन्दछौ दिनदिनै आफ्नै स्वयंको जरो ।
खुट्टामा किन हान्दछौ अबुझ भै आफैं स्वयं बन्चरो ।।

बाटो भुलेका तत्त्वले विद्वान्, शिक्षक, महिला र गुणी व्यक्तिहरूको हत्या गरिरहेका छन् भने हाम्रा सम्पूर्ण सभ्यता र संस्कृतिको पनि विनाश गरिरहेका छन् । कन्याहरूलाई पथभ्रष्ट बनाएर गोला र बम हान्न तालिम दिइएको छ।

यसबाट हाम्रो सामाजिक संरचना नै ध्वस्त भएको छ। धार्मिक मूल्यमान्यता, सांस्कृतिक धरोहर र सामाजिक संरचना बिगारेर विधर्मीहरूको सेवा गरिरहेका तत्त्वको क्रियाकलाप यसरी वर्णन गरिएको छ –

विद्वान् शिक्षक मातृशक्ति जननी ज्ञानी गुणी मार्दछौ ।
हाम्रा शाश्वत सभ्य संस्कृत कुरा पोली धुजा पार्दछौ ॥
पार्छौ भ्रष्ट सुधा निरीह बबुरा कन्याकुमारीहरू ।
दिन्छौ तालिम हान्न बन्दुक खुँडा गोला र गोलीहरू ॥

हाम्रा प्राकृत सौम्य शुद्ध युवती नारीहरूमा पनि ।
सल्कायौ ननिको कुसङ्गत लुतो खूनी लडाकू बनी ॥
जो जो छौ उसतर्फ उग्र अहिले बिग्रेर टाढा गयौ ।
हाम्रो संरचना समाज सहसा सारा बिगार्ने भयौ ॥

**३३. हाउ**

द्रुतविलम्बित छन्दको यस कवितामा बह्वर्थकता पाइन्छ । 'हाउ' को सामान्य अर्थ त्रास हो तापनि कविले यहाँ यस शब्दबाट मृत्यु, रोग, त्रास, क्रोध र दुष्ट मानिसको दुष्ट्याइँ पनि बुझाउन खोज्नु भएको देखिन्छ। निम्नलिखित दुईओटा श्लोकबाट एकै पटक त्रास, रोग र मृत्युको स्वरूप बुझ्न सकिन्छ –

भवनमा वनमा घर गाउँमा ।
घुमिरहन्छ सधैं हर ठाउँमा ॥
अति कठोर छ गर्छ ढली मली ।
जति मिल्यो उति निल्छ डरै नली ॥

अलप नै नभए सरि बस्तछ ।
बल गरी घरमा तर पस्तछ ॥
जनसँगै सबको धन हर्दछ ।
मनपरी उसले सब गर्दछ ॥

यस्ता तत्त्वहरूलाई ओखतीमूलो गरेर र तन्त्रमन्त्रको उपाय अपनाएर समाप्त पार्न सकिँदैन भन्ने तथ्य यस श्लोकबाट अवगत गर्न सकिन्छ –

अतलमा छ कतै यसको चुरो ।
गरिरहेछ हुँदो नहुँदो कुरो ॥
न त छ औषधि चट्ट निको हुने ।
न त छ तन्त्र र मन्त्र सिधै छुने ॥

भाववाचक शब्द 'हाउ' लाई मानवचरित्रका रूपमा र दुष्ट व्यक्तिलाई भाववाचक शब्दका रूपमा दोहोरो सम्बन्ध स्थापित गर्ने गरी लेखिएको यस कवितामा अनेकार्थकताको बोध गर्न सकिन्छ ।

## ३४. म बनौं विरक्त

वसन्ततिलका छन्दमा रचित यस कवितामा कवि आफ्नो विगत कोट्याउँदै जीवनको उत्तरार्धमा आइपुगेपछि आत्ममूल्याङ्कन गर्नुहुन्छ र केही त्याग र सङ्कल्पबाट मानवहितका काम गर्न सकौं भन्दै मानवतावादी विचार व्यक्त गर्नुहुन्छ । पहिले जीवनलाई भौतिक दृष्टिले हेर्ने बानी बसेको भए पनि वेदान्त दर्शनको प्रभाव र प्रयोगले अब कवि सेवा र समर्पणका भावबाट हेर्न चाहनुहुन्छ । कवि अहिलेको र पहिलेको आफ्नो सोचाइ र अवस्थालाई एउटै श्लोकबाट तुलनात्मक ढङ्गमा यसरी चित्रित गर्नुहुन्छ –

यौटै छ वस्तु सँगमा पछि साथ लाने ।
सद्धर्म जान्छ सँगमा कि त पाप जाने ॥
पाएर मानिस जुनी नबुझेर मर्म ।
अज्ञानमा हुन गयो अति गर्ह्य कर्म ॥

कविले धेरै मानिस स्वार्थी र थोरै मात्र समर्पित देख्नुभएको छ । स्वार्थीहरू स्वार्थवश नजिक हुने र स्वार्थ पूरा भएपछि टाढा हुने देखेर

कविमा वेदान्तको ज्ञान सक्रिय हुन्छ। ती सबै क्षणिक भएकाले साथमा जाँदैनन् न त अन्तिममा आफुले साथमा लैजाने चीज नै बाँकी रहन्छ। अन्तिममा आफुसँग आफ्नो शरीर पनि रहँदैन, केवल पाप र पुण्यको साक्षी आत्मतत्त्वमात्र साथ लाग्दछ भन्ने आत्मज्ञान भएका कवि कवितामा यसो भन्नुहुन्छ –

जो जो थिए नजिक ती पनि दूर लागे।
स्वार्थीहरू सकल ती पनि दूर भागे॥
सम्पूर्ण हुन् क्षणिक को छ र साथ जाने।
केही रहन्न सँगमा पछि साथ लाने॥

धेरै ज्ञान भएका भनिएका मानिसहरू पनि बाँच्ने कलाका विषयमा व्याख्यान दिन्छन् तर मर्ने शैलीबारे मौन रहन्छन्। कविचाहिँ बाँच्ने कला र मर्ने शैलीलाई पनि कवितामै स्पष्ट पार्नुहुन्छ र वैरागी बनेर सत्कर्म गर्ने अभिलाषा राख्दै उदार मानवतावादी विचार प्रकट गर्नुहुन्छ। जस्तै –

बाँचौं सबैसँग सके जति सत्य बोली।
जाऔं म आखिर कसैसँग नै नबोली॥
जे जे गरेँ सब भुली म बनौं विरक्त।
सत्कार्यमा तर सधैँ म बनूँ सशक्त॥

**३५. धरती**

हे धर्तिमाता ! जति दूर भागौं।
आकाश ताकी जति दूर लागौं॥
जाऊँ जहाँ अन्तिम फर्कि आई।
म बस्छु तिम्रै पदमा रमाई॥

यसरी सुरु गरिएको उपजाति छन्दको यस कवितामा देशविदेशमा सयौं पटक आफुले गरेका विमानयात्राका अनुभूतिबाट उद्दीप्त अभिव्यक्ति

पाइन्छ । विशेष गरी विदेश भ्रमणका क्रममा अहोरात्र जेट विमानमा लामो दूरीको यात्रा गर्दा कविलाई आकाशमै हराए जस्तो र आकाशै ताकेर उडेजस्तो अनुभूति हुन्थ्यो । तर गन्तव्य आइसकेपछि त्यो यात्रा जगत्‌लाई सत्य मानेर रमाएझैं क्षणिक साबित हुन्थ्यो र कवि धर्तीमै अवतरित हुन पुग्नुहुन्थ्यो । त्यसबाट कविलाई लाग्यो – आफ्नो मूल स्थायी आधार यही धर्ती रहेछ, धर्ती छाडेर कतै पनि स्थिर र स्थायी बन्न सकिँदो रहेनछ । यही कविअनुभवको अभिव्यञ्जनाका रूपमा यो कविता आएको छ । आकाशमा पुगेर जे खोजे पनि त्यो व्यर्थ भएको र आफैं अनाथ भएको तर धर्तीमा आएपछि आफु सार्थक र सनाथ भएको धर्तीप्रेमी भाव यसरी मुखरित भएको छ –

खोजेँ जहाँ खोज्नु रहेछ व्यर्थ ।
खोजेँ गई खालि मिल्यो अनर्थ ॥
टाढा गएँ खूब बनेँ अनाथ ।
फर्केर आएँ म बनेँ सनाथ ॥

यस कवितामा आकाशमा उडे पनि अन्तिममा धर्तीकै शरण पर्नुपर्छ भन्ने भावको प्रकाशनका साथै कार्यवश संसारमा जहाँ पुगे पनि परिणाममा स्वदेशमै फर्किनुपर्छ भन्ने राष्ट्रप्रेमको आदर्श पनि स्थापित भएको छ । यस श्लोबाट यही तथ्यको बोध हुन्छ –

हे धर्तिमाता ! जति दूर भागेँ ।
आकाश ताकी जति दूर लागेँ ॥
आफैँ हराएँ अति नै डराएँ ।
हे धर्तिमाता ! अब फर्कि आएँ ॥

## ३६. काखमै फेरि आएँ

मन्दाक्रान्ता छन्दमा लेखिएको यस भावपूर्ण कवितामा आफ्नो जन्मस्थल, बाल्यकाल र मातृवात्सल्यको अनुस्मरण गर्दै जीवननिर्वाहका क्रममा जहाँजहाँ पुगे पनि अन्तिममा आमाको ममतामय काखमै

आइपुगेको कविको मार्मिक एवं संवेदनशील अभिव्यक्ति पाइन्छ । प्रौढावस्थामा पुगेपछि विगतको संस्मरणले रोमान्टिक बन्नुभएका कवि बीचमा आफ्नो जीवनवृत्ति र अज्ञानी एवं भोगवादी प्रवृत्तिका कारण मातृवात्सल्यबाट वञ्चित हुन पुगेको र मातृसेवा गर्ने कर्तव्यबाट पनि चुकेको पश्चात्ताप प्रकट गर्नुहुन्छ । उमेर, यात्रा र आकाङ्क्षाको समापन हुन लागेपछि कवि फेरि आमाकै काखमा आएकोमा प्रसन्न पनि हुनुहुन्छ र आमाको सम्बोधनबाट जन्मदात्री आमा एवं जन्मधर्ती नेपालको सान्निध्य र आधारमा रमाउन चाहनुहुन्छ –

बिस्तारै नै जब अघि बढेँ भीडमा नै हराएँ ।
आमा सम्झेँ जति पर गएँ खूब रोएँ कराएँ ॥
हिँड्दा हिँड्दै वय पनि गयो भित्र आफैं डराएँ ।
फर्कें आमा ! भ्रमण सकियो काखमै फेरि आएँ ॥

यो कविता मातृभक्ति र राष्ट्रभक्तिका दृष्टिबाट मात्र नभई अद्वैत वेदान्त दर्शनका कोणबाट पनि सूत्रात्मक र सारगर्भित देखिन्छ । वेदान्त दर्शनमा ब्रह्मलाई अनेक रूप र उपाधिबाट चिनाइएको छ । त्यस दर्शनको सम्यक् अनुशीलन गर्नुभएका कवि सांसारिक मोह र ममतामा मात्र फस्ने व्यक्ति हुनुहुन्न । लाखौं जन्मान्तरण हुँदै मानव जन्म पाउन सफल कवि जीवनको परिसमाप्ति ब्रह्ममै गराउन चाहनुहुन्छ र ब्रह्ममय भएर जन्मचक्रबाट मुक्त हुन खोज्नुहुन्छ । माथिको श्लोकले ब्रह्मलाई आमाको आरोप गरेर कविको जीवन्मुक्तिको आकाङ्क्षालाई समेत ध्वनित गरिरहेको पाइन्छ ।

### ३७. फर्केर हेर्दा

मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा कविले आफ्नो जन्म धर्तीका उच्च हिमशिखरहरूबाट प्रेरित भएको र जहाँ पुगे पनि तिनकै सम्झनाले सताइरहेको अभिव्यक्ति दिनुभएको छ । पद र सुविधा पाएर

जति दूर गए पनि मातृभूमिको ऋण तिर्न बाँकी रहेकोमा कविलाई छटपटी भएको छ र आफ्नो जन्मभूमिको स्याहारसम्भार गर्ने विषयमा पनि चिन्ता पैदा भएको छ। लामो समयपछि फर्केर हेर्दा कविमा अब आफ्नो माटाको ममता र सिर्जना मात्र बाँकी छ। कविको व्यक्तिगत भन्नुपर्ने केही पनि छैन र सम्झेका कुरा पनि सम्झनामा मात्र सीमित छन्, व्यवहारमा ती आउन सक्तैनन् । सबै आकाङ्क्षा, सम्झना, समता र तिर्सनाबाट मुक्त हुनुभएका कवि हृदयमा मातृभूमिको ममता र तिर्सना चाहिँ राखिरहनुहुन्छ । यस कविताको यही गम्भीर सारांश यसरी प्रस्तुत गरिएको छ –

त्यै माटोको अति छ ममता तिर्सना भित्र बाँकी ।
देख्ने कल्ले तर हरदमै स्वान्तमा चित्र बाँकी ॥
मैले आफ्नू सब भनुँ भने भन्न नै के छ बाँकी ।
जे जे सम्झेँ अब त सब ती सम्झना मात्र बाँकी ॥

## **३८. खोजी**

चारचार पङ्क्तिको अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा पहिलेको शरत्काल र अहिलेको शरत्कालको तुलना गरिएको छ र पहिलेको शरत्कालको खोजी पनि गरिएको छ। पहिलेको शरत्काल स्वच्छ, शुभ्र र शान्त थियो भने चारैतिर पल्लवित र पुष्पित पनि हुन्थ्यो। हिमाली सौन्दर्य र सांस्कृतिक उत्साहले पहिलेको शरत्काललाई जीवन्त पारेका थिए। तर अहिलेको शरत्काल शुष्क, शून्य, निरीह मात्र होइन रक्तरञ्जित पनि छ। अब पहिलेको शरत्काल चाहेर पनि खोजेर पनि पाइने अवस्थामा छैन। उपमा अलङ्कारको चमत्कारसहित पहिलेको शरत्काललाई कवि प्रसाद गुणको विशेषता झल्किने गरी यसरी सम्झनुहुन्छ –

जता हेर्‍यो उतै राम्रो फुलेकी प्रकृति थिइन् ।
हालेर फूलको घुम्टो खुलेकी धरती थिइन् ॥
हिलो मैलो हराएर धरती स्निग्ध सुग्घर ।
दुलही झैं नयाँ लाग्थिन् दिव्य सौन्दर्यकी घर ॥

त्यस्तो शरत्काल अहिले देख्न पाइँदै पाइँदैन । त्यो काल हाल यस्तो हालतमा पुगेको छ –

सोही शरदको याम आज शुष्क म देख्तछु ।
छैन मादकता कत्ति सारा नीरस देख्तछु ॥
हिमालमा छ सन्नाटा मौन शून्य निरीहता ॥
शुभ्रता स्वच्छता छैन रक्तिमा छ जतातता ॥

शरत्कालको परिवर्तनबाट कवि शरदकुमारमा पनि प्रतिकूल परिवर्तन भएको छ । पहिले कविको मनोवृत्ति र व्यवहार जस्तो थियो अहिले त्यस्तो छैन भन्ने कथनको प्रमाण यसरी दिइएको छ –

सपना सधैं भाग्छु बिपनामा हराउँछु ।
बोकी ऐठन छातीमा म सधैं बर्बराउँछु ॥
धमनी भित्रमा मेरो हाहाकार सुसाउँछ ।
ठूलो सन्त्रास बोकेर मेरो रात उदाउँछ ॥

वर्तमानको शरत्कालसँगै कविको हृदय पनि छियाछिया भएको छ । कविका मन र मस्तिष्क स्थिर छैनन् । परिणामस्वरूप एक्लै बोल्ने, आफैंमा हराउने र आफ्नै छायासँग पनि डराउने अवस्थामा पुगेका कवि हृदयमा फुल्ने फूल पनि लास भइसकेको हो कि भन्ने सम्भावना देखाउँदै उत्प्रेक्षाको सौन्दर्य प्रतिबिम्बित गराउनुहुन्छ –

आफैंसँग कुरा गर्छु आफैंसँग हराउँछु ।
अब ता आफ्नू नै छाया देख्ता पनि डराउँछु ॥
फूलमा सुषमा छैन सारा अस्तित्व गै सक्यो ।
मनमा फक्रने फूल यद्वा त्यो लास भैसक्यो ॥

### ३९. वृद्धावस्था

अनुष्टुप् छन्दमा लेखिएको यो कविता वृद्धावस्था के हो र यसलाई कसरी सदुपयोग गर्ने भन्ने प्रश्नमा केन्द्रित छ । यो कविता त्यस्ता

मानिसहरूका लागि सन्देश हो जो न आफ्नो यौवनलाई सम्हाल्न सक्छन् न त वृद्धावस्थालाई शान्त र सुखद बनाउन सक्छन् । यौवनावस्थालाई सन्मार्गमा लगाउने व्यक्तिको मात्र वृद्धावस्था सुन्दर हुन्छ भन्ने कविको स्पष्टोक्ति छ –

वृद्धावस्था उसैलाई बन्छ यो अति सुन्दर ।
जस्को यौवनको काल बढ्यो सन्मार्गका तिर ॥

कविका विचारमा वृद्धावस्थाका दुई राजमार्ग छन् – वरदानको राजमार्ग र अभिशापको राजमार्ग । व्यवस्थापन गर्न जान्दा यो वरदानको राजमार्गमा जान्छ भने त्यसो नगर्दा अभिशापको राजमार्गतर्फ गएर दुर्घटित पनि हुन सक्छ । जस्तै –

वरदान छ जानेमा नजाने अभिशाप हो ।
वृद्धावस्था दुवैतर्फ जाने यो राजमार्ग हो ॥

यसैगरी यो अवस्था जान्न सक्दा मुक्तिको द्वार बन्छ भने जान्न नसक्दा भयङ्कर कुम्भिपाक नरक पनि बन्न सक्छ । कविका शब्दमा यसलाई यसरी स्पष्ट पारिएको छ –

जानेदेखिन् यही बन्छ मुक्तिको द्वार सुन्दर ।
नजानेमा यही बन्छ कुम्भिपाक भयङ्कर ॥

## ४०. अभिव्यञ्जना

अनुष्टुप् छन्दको यस कवितामा कविको राष्ट्रभक्तिको भाव उच्छलित भएको छ । शान्त, सुन्दर र परिपूर्ण यस देशमा कविलाई कहिले गुनगुनाउन मन लाग्छ भने कहिले नरित्तिने दिलको प्रित लाइदिन पनि मन लाग्छ । यतिमात्र नभएर आफ्नै बैंस सँगालेर वसन्त सजाउन र नेपालको फूलबारीमा फूलजस्तै मुस्कुराउन पनि कविलाई मन लागेको छ । जस्तै –

सारा बैंस सँगालेर वसन्त म सजाइद्यूँ ।
नेपाली फूलबारीमा फूलभैंं मुस्कुराइद्यूँ ।।

स्वदेशमा सानो वास भए पनि ठुलो वैभव हो र एकै गाँस खाए पनि अमृतसरह हो भन्ने राष्ट्रवादी आदर्शवादी भावना यस्तो छ –

यहाँ वैभव नै हुन्छ सानु वास भए पनि ।
यहाँ अमृत नै हुन्छ एकै गाँस भए पनि ।।

यो देश परिपूर्ण त छँदैछ साथै ढुङ्गामा देवता र माटामा स्नेह बोल्ने पनि गर्दछ भन्दै कवि आफ्नो छातीभरि पनि नेपाल नै बोल्ने गरेको भाव पोख्तै देशभक्तिको उद्गार यसरी व्यक्त गर्नुहुन्छ –

नसम्झिद्यौ तिमी कैल्यै यहाँ अपरिपूर्ण छ ।
मेरो एकान्तको देश आफैंमा परिपूर्ण छ ।।
ढुङ्गामा देवता बोल्छ माटामा स्नेह बोल्दछ ।
यहाँ छाती भरी मेरो मेरै नेपाल बोल्दछ ।।

**समभावना**

**४१. सहस्र चन्द्रदर्शन**

राष्ट्रकवि माधव घिमिरेले एक हजार चन्द्रोदय देखेपछि अर्थात् उनी चौरासी वर्षका भएपछि स्वास्थ्य र दीर्घायुष्यको शुभकामना व्यक्त गर्दै लेखिएको चारचार पङ्क्तिको अनुष्टुप् छन्दको यस कवितामा उनको साहित्यिक योगदानको सादर स्मरण र मूल्याङ्कन गरिएको छ । कवि घिमिरेको कवित्वको चर्चा गर्दै नेपालमा उनको स्थानको निरूपण पनि कविले गर्नुभएको छ । जस्तै –

नेपाली काव्यधाराका तिमी हौ कविनायक ।
प्रेरणास्रोत हौ हाम्रो काव्यऊर्जाप्रदायक ।।
प्रेरणा र प्रयोक्ता हौ नवछन्द विधानका ।
जीवन्तज्योति हौ हाम्रा नेपाली स्वाभिमानका ।।

भावको व्यवस्थापन र शैलीको सन्तुलनमा सिपालु कविले एउटै श्लोकमा कवि घिमिरेको दीर्घायुको कामना गर्दै हाम्रा अभिभावक भएर नेपाली साहित्यको उद्यान भरिद्यौ भन्ने शुभकामना दिनुभएको छ भने उनले दिएको योगदानको सङ्क्षिप्त तर उच्च मूल्याङ्कन पनि गर्नुभएको छ –

सयौं वर्ष अझै बाँच साहित्योद्यान यो भर ।
अभिभावक भै हाम्रो बाटो देखाउने गर ॥
तिमी भविष्यद्रष्टा हौ तिमी हौ राष्ट्रका धन ।
कवि हौ राष्ट्रका साझा तिमी हौ राष्ट्रधड्कन ॥

## ४२. ब्रह्ममा वृत्ति लागोस्

मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा विदुषी तथा शिक्षा र समाजकी सेविका अङ्गुरबाबा जोशीको सुस्वास्थ्यको कामना गरिएको छ । जोशीले गरेका सत्कर्महरूको सङ्क्षिप्त सर्वेक्षण गर्दै कविले उनको शैक्षिक योगदान र आध्यात्मिक जीवनको चित्र यस कवितामा उतार्नुभएको छ । बाल्यकालदेखि नै असल संस्कार र सभ्यताबाट हुर्किएकी र राष्ट्रिय जीवनका विविध क्षेत्रमा ख्याति कमाएकी जोशीलाई ब्रह्मज्ञानी बन्न कविले आह्वान पनि गर्नुभएको छ। जस्तै –

छोडी सारा लटपटहरू ब्रह्ममात्रै अँगाली ।
बढ्दै जाऊ विकट पथमा धैर्यलाई सँगाली ॥
द्रष्टा मात्रै बन अब तिमी दृश्य सारा हटाई ।
आफैं नै हौ अब चिन तिमी ब्रह्म भै ब्रह्मलाई ॥

ब्रह्माभ्यासमा लाग्न आह्वान गर्ने कवि जोशीको चित्त ब्रह्ममै लागोस् भन्ने सद्भाव पनि प्रकट गर्नुहुन्छ –

तिम्रो आत्मा अविचल भई स्वान्तको शुद्धि मागोस् ।
तिम्रो भित्री हृदयपटमा ब्रह्मको ज्योति जागोस् ॥
तिम्रा बाधा झटपट हटुन् स्वस्थ हौ रोग भागोस् ।
बाबा ! बाँचे युगयुग तिमी ब्रह्ममा वृत्ति लागोस् ॥

### ४३. आरोग्यकामना

मन्दाक्रान्ता छन्दमा लिखित यस कवितामा कवि दैवज्ञराज न्यौपानेको स्वाथ्यलाभको कामना गर्दै स्वस्थ भएर उठ्न र काव्यको सक्रिय साधना गर्न आह्वान गरिएको छ। बोल्न र हलचल गर्न नसक्ने कवि न्यौपानेलाई सबै चिन्ता छोडेर तङ्ग्रिन र सरस कविता लेख्न र सुनाउन कवि असीम प्रेरणा दिनुहुन्छ। जस्तै –

हामी दिन्छौं भर उठ तिमी हात हाम्रा समाऊ।
सारा चिन्ता पर गर तिमी स्वस्थ भै झट्ट आऊ॥
तिम्रा राम्रा सरस कविता लौन आऊ सुनाऊ।
आऊ प्यारा तरुण कवि हे ! फूल झैं मुस्कुराऊ॥

कविले जीवन र जगत्‌लाई दार्शनिक दृष्टिबाट हेर्नु र बुझ्नु भएको छ। जीवनमा जे हुन्छ र जे भोग्नुपर्छ त्यो प्रारब्धकै खेल हो। रोग, वेदना, विपत्ति आदि निमित्त कारण मात्र हुन्। जीवनको सम-विषमयात्रामा ब्रह्मज्ञान हुन सक्ता मानिस सधैं सुखी र आनन्दी बन्न सक्छ। कवि सहकर्मी कवि न्यौपानेलाई पनि ब्रह्मज्ञानी बन्न र जीवनलाई सक्रिय बनाउन आग्रह गर्नुहुन्छ –

छन् धेरै नै सम विषयमका मार्ग नाना अनेक।
यौटै मात्रै अभय पथ हो ब्रह्मको ज्ञान एक॥
तस्मात् चाँडै सुझबुझ लिई ज्ञानका तर्फ लाग।
सुस्ती छोडी अब कवि तिमी जुर्मुराएर जाग॥

### ४४. कविजी उठ

भर्तृहरिको नीतिशतकको एउटा श्लोकको उद्धरण र त्यसको समछन्द शार्दूलविक्रीडतमा मीठो र सारगर्भित अनुवादसमेत समावेश गरेर प्रारम्भ गरिएको अनुष्टुप् छन्दको यस कवितामा बिरामी कविलाई स्वस्थ भएर उठ्न र आफ्नो बिमारीलाई वेदान्त दर्शनका आधारमा प्रारब्धको खेल मानेर सहन गर्न सुझाव दिइएको छ। शरीरको भर नहुने

भएकाले समय छँदै सत्कर्म गरिहाल्नुपर्ने र बिरामी भइहालियो भने पनि आत्मज्ञानी बनेर धैर्य र सहन गर्नुपर्ने सन्देश यस कविताले दिएको छ। ठाउँठाउँमा उपनिषद्का अंशहरू उद्धृत गरेर कविले एकातिर आफ्नो कथनलाई प्रामाणिक र शास्त्रसम्मत बनाउनु भएको छ भने अर्कातिर त्रिताप (आध्यात्मिक, आधिदैविक, आधिभौतिक) बाट मुक्त भएर सन्तोषी बनी जीवनयापन गर्न तापतप्तहरूलाई प्रेरित पनि गर्नुभएको छ। यस श्लोकले यही तथ्य प्रमाणित गर्दछ –

यो हो प्रारब्धको खेल तिम्रो कर्म विपाक हो।
'अवश्यमेव भोक्तव्यम्' ठानेर भोग्नुपर्छ यो ॥

रोगाक्रान्त कविलाई कवि वेदान्ती शैलीमा त्रिपुटी (दृश्य, दर्शन र द्रष्टा) बाट पर झलझल भएर रहने परात्पर आत्मा भएकाले रोगव्याधिले दुःख र पीडा दियो भनेर दुःखी र पीडित नबन्न सान्त्वना दिनुहुन्छ –

दृश्य दर्शन द्रष्टादि त्रिपुटीबाट भै पर।
बस्ने झलझलाकार तिमी आत्मा परात्पर ॥

संसारका अरू सबै वस्तु निरसार हुन्, एक ब्रह्म मात्र सार हो भन्ने श्रुतिको सारलाई सप्रमाण यसरी प्रस्तुत गरिएको छ –

अरू बेसार हुन् सारा ब्रह्म नै एक सार हो।
'ब्रह्मैव सन् ब्रह्माप्येति' श्रुतिको मुख्य सार हो ॥

## ४५. चिरायुकामना

अनुष्टुप् छन्दको यस कवितामा व्यक्तिको नाम नलिई सन्तशिरोमणि खेमराज केशवशरणलाई चिरायुको कामना अर्पण गरिएको छ। कविताका प्रत्येक श्लोकले आचार्य खेमराज केशवशरणको व्यक्तित्वको परिचय दिएका छन्। निम्बार्कपथका अनुयायी भगवद्भक्त खेमराज देशविदेशमा धार्मिक, आध्यात्मिक र सांस्कृतिक जागरण ल्याउने अग्रणी व्यक्तित्व भएको पुष्टि यस कविताले गरेको पाइन्छ। प्रवचनपटु खेमराजले लाखौं

मानिसलाई धार्मिक र आध्यात्मिक संस्कार दिएर चेतनशील बनाएको अभिव्यक्ति यहाँ पाइन्छ। बहुभाषाविद् खेमराज राम्रा कवि पनि भएकाले साहित्य, भक्ति, दर्शन र अध्यात्मको अपूर्व सङ्गम उनमा पाइन्छ भन्ने कविको दृष्टिकोण छ। खेमराजको भाषिकज्ञान र काव्यवैशिष्ट्यलाई यस श्लोकले सङ्केत गरेको छ –

जिब्रामा भारती नाच्छिन् भाषा सुन्दर संस्कृत।
कविता वनिता तिम्री सोह्रै शृङ्गारले युत ॥

खेमराजले धार्मिक र आध्यात्मिक जागरणका लागि संसारका धेरै देशको यात्रा गरेको र भक्तिको विस्तार गरेकाले कवि उनलाई भक्तिविशारदको उपाधि पनि दिनुहुन्छ –

गर्छौ संसारको यात्रा सधैं छौ भक्तिमै रत।
भक्ति बोल्छौ जहाँ जान्छौ तिमी भक्तिविशारद ॥

यस्ता भक्तिविशारद आध्यात्मिक अग्रणी व्यक्ति जञ्जाल, सम्भ्रम, अहङ्कार र ममत्वको भ्रम छाडेर शतायु बनुन् भन्ने कविको हार्दिक इच्छा यसरी व्यक्त भएको छ –

भक्तिका पान्थ निर्भ्रान्त छाडी सञ्जाल सम्भ्रम।
शतायु बन हे सन्त ! टाढा राख अहं मम ॥

**४६. शतायुकामना**

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा शतायुको कामना गरिएको छ। दीर्घ आयु पाउनुमात्र जीवनको सार्थकता होइन, जीवनदर्शन पढेर र संसारको चालचलन हेरेर आत्मज्ञानी बन्नु नै जीवनको वास्तविकता हो भन्ने कविको दार्शनिक तर्क छ। यसो गर्न सक्दा मात्र जीवन पूर्ण र सार्थक बन्न सक्छ भन्दै कवि मनुष्य जन्म पाएर पनि ब्रह्मचिन्तन गरिएन भने यही जीवन कस्तो हुन्छ त्यसको सङ्क्षिप्त उत्तर पनि दिनुहुन्छ –

पाई मनुष्यको योनि भएन ब्रह्मचिन्तन ।
भने निरर्थकै हुन्छ तिम्रो अमूल्य जीवन ।।

सरदर भन्दा धेरै आयु पाएका कवि दृश्य संसार के हो, ब्रह्म के हो र ब्रह्मज्ञान भए के लाभ हुन्छ भन्ने तथ्यलाई बच्चालाई सम्झाएझैं सरल शैलीमा यसरी सम्झाउनु हुन्छ –

दृश्य संसार मिथ्या हो द्रष्टा हो ब्रह्म शाश्वत ।
ब्रह्मज्ञान भए हुन्छ मुक्त मानिस वस्तुतः ।।

कविको बाह्य दृष्टिभन्दा अन्तरदृष्टि बढी सक्रिय छ । लामो उमेर र अवस्था भोगेर पनि ब्रह्मचिन्तनप्रति अपेक्षित सक्रियता नभएको बुझेर कविलाई शेष जीवन ब्रह्मचिन्तन गरेर बितोस् भन्दै स्थायी सुखको कामना प्रकट गर्नुहुन्छ –

अन्तःकरणका वृत्ति गरेर परिमार्जन ।
शेष जीवन यो लागोस् गर्न सद्ब्रह्मचिन्तन ।।

सारमा हेर्दा यस कविताले लामो उमेर पाएर पनि धेरैको धेरैथरी उपकार गरे तापनि ब्रह्मज्ञान गरिएन भने आफुले आफैंलाई ठगिन्छ र अन्तिममा सुख, शान्ति र सन्तोष पाउन सकिँदैन भन्ने औपदेशिक चिन्तन प्रस्तुत गरेको छ । जीवनको सार्थकता दीर्घायुष्यमा भन्दा पनि ब्रह्मचिन्तनबाट मुक्त हुनुमा छ भन्ने आध्यात्मिक प्रेरणा यस कविताबाट पाइन्छ ।

**समवेदना**

**४७. साझा श्रद्धाञ्जलि**

वसन्ततिलका छन्दमा लेखिएको यस कवितामा २०५८ साल जेठ १९ गते राजदरबाटरमा घटेको अकल्पनीय हत्याको घटनामा जीवन गुमाउने राजपरिवारका सदस्यहरूप्रति साझा श्रद्धाञ्जलि व्यक्त गरिएको

छ। रातको समयमा फोनबाट घटनाको सूचना पाएपछि कविमा उत्पन्न शोक, संशय, समवेदना र सहानुभूतिको कवित्वप्रवाह यस कवितामा भएको छ । घटनापछि सर्वसाधारणमा उत्पन्न जिज्ञासा, सम्भ्रम र सन्तापको परिवेशको सङ्क्षिप्त झलक पनि यस कवितामा पाइन्छ । घटनाले अरू मानिसलाई जस्तै कविलाई पनि अति नै सन्तप्त बनाएको छ। परिणामस्वरूप यस्तो अभिव्यक्ति आएको छ –

नेपालका नृपसँगै परिवार आज।
टाढा भए सकल शून्य गरी समाज ॥
दुर्भाग्य हो अब हुँदैन यहाँ भलाइ।
सन्तप्त पार्छ अति नै यसले मलाई ॥

कविले भनेझैं त्यस घटनापछि नेपालका राष्ट्रवादी नेपालीहरूको भलाइ भएको पनि देखिँदैन।

यस कविताले राजा वीरेन्द्रले नेपाललाई शान्तिक्षेत्र घोषणा गरियोस् भनेर अन्तर्राष्ट्रिय समुदायसँग राखेको प्रस्ताव र त्यसका लागि गरेको प्रयासको पनि संस्मरण गरेको छ। शान्तिक्षेत्रको प्रस्ताव राख्ने राजाकै विनाश भएको विडम्बना देखेर कवि उद्विग्न बन्नुहुन्छ र करुणाभरित भाव यसरी पोख्नुहुन्छ –

यो शान्तिको पथ छ दुस्तर कष्टसाध्य।
यो हो महाव्रत दुरूह सधैं असाध्य ॥
यै शान्तिनिम्ति नृपबाट भयो प्रयास।
त्यै वीरको हुन गयो अहिले विनाश ॥

अध्ययन, अनुभव, उत्प्रेरणा र अभ्यासबाट सधैं आशावादी बन्नु भएका कवि यस घटनाबाट अत्यन्त मर्माहत भएर घटनापछिको परिणाम र परिवेशको सङ्केत गर्दै जिजीविषा घटेको र हताशा बढेको अनुभव गर्नुहुन्छ –

राम्रा गुणी नृप गए क्षणमा हराए ।
आतेस भो र जनता बहुतै डराए ।।
देखिन्छ खिन्न जनता बहुतै उदास ।
बाँच्नै छ मुस्किल हरे ! अब छैन आस ।।

**४८. सम्झना**

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा महाकवि लक्ष्मीप्रसाद देवकोटाको व्यक्तित्व र कृतित्वको संस्मरण गर्दै श्रद्धाभाव प्रकट गरिएको छ । यो रचना देवकोटाको सिर्जनाबारे अर्को कविको सिर्जना त हुँदै हो, देवकोटाको साहित्यिक व्यक्तित्वको कविताका ढाँचामा गरिएको मूल्याङ्कन पनि हो । यस श्लोकबाट कवि महाकवि देवकोटाको साहित्यिक व्यक्तित्वको सङ्क्षिप्त सङ्केत गरिरहनु भएको छ –

सकिएर सबै खाफू भऱ्यौ साहित्य वाटिका ।
तिमी हौ चम्किने ज्योति अरू पिलपिले फिका ।।

लगभग पाँच दशकको आयु पाएका देवकोटा दीर्घजीवी भएका भए नेपाली साहित्यलाई अझै धेरै दिने थिए भन्ने कविको भावुक प्रक्षेपण पनि छ –

पचासमा गयौ लक्ष्मी पचास अहिले गए ।
हामीलाई अझै दिन्थ्यौ बाँचेका कविजी भए ।।

सहज कलाका पक्षपाती कवि देवकोटाका कवितामा अलङ्कारहरू तलाउका तरङ्गहरू सहज रूपमा तरङ्गित भएझैं यस कविताका कविले पनि यहाँ उपमा, रूपक जस्ता अलङ्कारहरूको स्वाभाविक विन्यास गर्नुभएको छ । यस श्लोकले यही तथ्यको पुष्टि गर्छ –

भुल्कियौ झल्ल बत्ती भै औंसीका मध्यरातमा ।
जसरी शीतको थोपा चम्किइन्छ प्रभातमा ।।

अनुष्टुप् छन्दको एउटा सानो श्लोकभित्र उपमा र रूपकको सहविन्यास गर्ने सीप पनि यहाँ देखिन्छ। जस्तै –

साहित्याकाशमा सूर्यजस्तै भएर फैलियौ।
फक्र्यौ कुड्मल भै पुष्प हामीलाई खुशी दियौ ॥

यस बाहेक शब्दालङ्कारका रूपमा अनुप्रास र अर्थालङ्कारका रूपमा उपमाको संयोजन गर्दै पदलालित्यको सौन्दर्य सिर्जना गर्ने क्षमता पनि यहाँ पाइन्छ। जस्तै –

महाकाव्य फुले काव्यवाटिका मग्मगाउँदै।
कुञ्जिनी कुञ्जमा आइन् जूनझैं जग्मगाउँदै ॥

सतही रूपले हेर्दा यो कविता महाकवि देवकोटाको सम्झनामा केन्द्रित भएजस्तो लागे पनि यसले उनको कवित्वको विश्लेषण र मूल्याङ्कन समेत गर्दै कवि भट्टराई स्वयंको काव्यत्वको प्रमाण पनि प्रदर्शित गरिरहेको पाइन्छ।

**४९. सन्तको अन्त**

अनुष्टुप् छन्दमा लेखिएको यस कविताले सन्त नेता कृष्णप्रसाद भट्टराईको व्यक्तित्व र विशेषतामाथि प्रकाश पारेको छ। कृष्णप्रसादको बाह्य र आन्तरिक व्यक्तित्व, विद्वत्ता, आदर्श, मनोरञ्जक कथनकला र रङ्गीन स्वभावको प्रस्तुति यहाँ पाइन्छ। नेता भट्टराईको थोरै योगी र धेरै भोगी चरित्रको साङ्केतिक वर्णन गरेर कवि आफुलाई असत्यवादी बन्नबाट बचाइरहनु भएको पनि पाइन्छ। विशेषणहरू मात्र प्रयोग गरेर लेखिएको यस श्लोकमा कृष्णप्रसादको बहुमुखी व्यक्तित्वको छनक पाइन्छ –

गीताज्ञाता सुधी वक्ता प्रत्युत्पन्न कुलाग्रणी।
कुलदीपक निष्णात गोर्खोत्पन्न महामणि ॥

मानिसहरू कृष्णप्रसादलाई सम्पत्ति सञ्चयमा वैरागी र इन्द्रियनिग्रहका सम्बन्धमा अनुरागी भनेर टिप्पणी गर्छन् । सम्पत्तिमा वैरागी भएको प्रमाणित भए पनि अनुरागी भएको विषय प्रमाणित गर्न कठिन हुन्छ । यी दुई अवस्थाका बीचमा रहेर कवि नेता भट्टराईको दुवै स्थितिलाई सावधानीपूर्वक वर्णन गर्नुहुन्छ । उनको वैरागी स्थिति यस्तो छ –

सम्पत्ति उनका छाता सुराही अनि पुस्तक ।
थिए किञ्चित् अरू केही थिएन वस्तु भौतिक ।।

भट्टराईको अनुरागी स्वभावलाई कवि आफु तटस्थ बसेर यसरी सङ्केत गर्नुहुन्छ –

अविवाहित भै बस्थे हेर्दा बाहिर ती स्वतः ।
भित्री रूप थियो कस्तो बुझिन्न अन्त वस्तुतः ।।

यस श्लोकमा चाहिँ कृष्णप्रसादको योगदानको मूल्याङ्कन गर्दै राजनीतिक प्रेरणाको संस्मरण गरिएको छ –

राष्ट्रका निम्तिमा जल्ले छोड्यो स्वार्थ र सञ्चय ।
सबैलाई दियो जल्ले अगाडि बढ्न निर्भय ।।

## ५०. श्रद्धाञ्जलि

वियोगिनी छन्दको यस कवितामा आफुसँग खाइखेली गरेका र सहकार्यमा सम्मिलित भएका कविमित्रहरूप्रति श्रद्धाञ्जलि अर्पण गरिएको छ । मानिस जन्मने र मर्ने क्रम अनादि कालदेखि चलिआएको छ र पनि हामी संसारमा भ्रमी बनेर घुमिरहेछौं भन्ने कविको दार्शनिक विचार छ । जन्म दिने कोही बिलाइसके भने कोही अझै खडा छन् तापनि अहिले खडा भएका पनि पछि हराएर जानेछन् र अन्ततः शून्य मात्र अवशिष्ट रहने वेदान्ती विचारको प्रस्तुति यहाँ भएको छ । केही समय साथ रहेको मानिस हराएर गएझैं जाने भएकाले यो संसार रिमिझिमी

देखाउने नाटकजस्तो प्रतीत हुन्छ भन्ने कविलाई लागेको छ। बाँचुन्जेल सबै जना सबैका साथ भएजस्तो लागे पनि सधैं साथ रहने कोही पनि छैन र दुःखमा सँगै रुने पनि कोही छैन भनेर कवि संसारको क्षणिकता र मिथ्या सिद्ध गर्नुहुन्छ, अनि ब्रह्मज्ञानको अभ्यास गरेर जीवनलाई सुखी बनाउन प्रेरणा दिनुहुन्छ। जस्तै –

सब हुन् क्षणका यहाँ सखा कसको को छ यहाँ सधैं हुने।
सुखमा सब साथ छौं यहाँ छ र को दुःख हुँदा सँगै रुने॥

यो कविता संसारको अनित्यता र मिथ्या बुझेर ब्रह्मज्ञानी बन्न प्रेरणा दिने अभिव्यक्ति बनेको छ।

**५१. श्रद्धासुमन**

चारचार पङ्क्तिको अनुष्टुप् छन्द र मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा कोठे कविगोष्ठीकी सक्रिय सदस्य कवयित्री ओमीको असामयिक निधनमा श्रद्धाञ्जलि अर्पण गरिएको छ। ओमीप्रति श्रद्धाञ्जलि समर्पण गर्ने क्रममा पुराना कोठे कविगोष्ठीका टेप झिकेर हेर्ने बित्तिकै मन्दाक्रान्ता छन्दमा उनीप्रति श्रद्धाञ्जलिको भावप्रवाह भएको आत्मकथनबाट सुरु भएको यस कवितामा उनको कवित्वशक्ति र वाणीको माधुर्यको प्रशंसा कविले गर्नुभएको छ –

ओमी सारै अविचल थियौ काव्यको साधनामा।
सानैदेखिन् दृढतर थियौ काव्यआराधनामा॥
तिम्रो वाणी मधुररसको छोड्दथ्यो भावधारा।
लाग्यौ छोडी अब कुन दिशा पाइ कस्को सहारा ?

अहिले ओमीले यो संसार छोडिन् तर सबैले यसलाई एक दिन अवश्य छोड्नुपर्छ। यो शाश्वत सत्यलाई हामी सबैले बुझ्नुपर्छ र मनलाई शक्तिशाली बनाएर साधनातर्फ लाग्नुपर्छ। साधना भनेको आत्मज्ञानको मार्ग हो। शक्ति र समय छँदै सुझबुझका साथ ज्ञानमार्गतर्फ प्रवृत्त हुन

सक्ता जीवनको व्यवस्थापन गर्न सकिन्छ। यस श्लोकमा यही विचारको प्रकाशन भएको छ –

यस्तै नै हो क्षणिक दुनियाँ कोपिला फुल्छ झर्छ।
आयो जो जो क्रमसँग सबै आखिरी जानुपर्छ ॥
यस्तै सम्झी मन दृढ गरी साधनातर्फ लागौं।
बेलामा नै सुझबुझ लिई ज्ञानका तर्फ जागौं ॥

**५२. केवल सम्झना**

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा चौरासी वर्षको उमेरमा दिवङ्गत वीरेन्द्रकेशरी पोखरेलको सम्झना गर्दै उनीप्रति श्रद्धाञ्जलि अर्पण गरिएको छ। पोखरेलका बहुमुखी क्रियाकलापहरूको सङ्क्षिप्त उल्लेख गर्दै कविले उनी आफ्ना कर्महरूबाट स्वतः ब्रह्म बन्न पुगेको विश्वास व्यक्त गर्नुभएको छ। साहस, सम्मान, स्वाभिमान र सक्रियताका साथ बाँचेका पोखरेलले निःस्वार्थ भई रगत र पसिना देशकै लागि छरेको विचार कविले व्यक्त गर्नुभएको छ –

तिमी कर्मठ कर्मी भै निःस्वार्थ काम गर्दथ्यौ।
पसिना रक्तका बिन्दु देशकै लागि छर्दथ्यौ ॥

उनी कालसँग पनि लड्न सक्ने वीर थिए भन्ने कविको भनाइ छ –

भयौ कालजयी वीर लड्यौ कालसँगै पनि।
झुकेनौ कहिल्यै वीर जस्तै आइपरे पनि ॥

उपनिषद् र गीतामा प्रतिपाद्य आत्माको अजरता, अमरता र अजन्मताको अनुशीलन गर्नुभएका कविले पोखरेल ब्रह्मलीन भएर अजर अमर बनेको धारणा व्यक्त गर्नुभएको छ –

थोत्रा लुगासरी त्याग्यौ थोत्रो शरीर जो थियो।
प्रारब्धले तिमीलाई भोगका निम्ति जो दियो ॥
अहिले त्यो गर्‍यौ त्याग अजरामर छौ तिमी।
कर्मको जाल फ्याँकेर ब्रह्मलीन भयौ तिमी ॥

## ५३. श्रद्धापुष्प

महाकवि भरतराज शर्मा 'मन्थलीय' प्रति श्रद्धा व्यक्त गर्दै चारचार पङ्क्तिको अनुष्टुप् छन्दमा लेखिएको यो कविता 'मन्थलीय' को शिक्षासेवा र साहित्य सेवाको परिचय दिन सफल देखिन्छ । 'मन्थलीय'ले जागिर र साहित्यसिर्जनालाई सँगसँगै लगेर राष्ट्रसेवा गरे भन्ने कविको तार्किक अभिव्यक्ति छ । पूर्वको पहाडी गाउँबाट पाखापखेरा नाघ्दै साहित्यको नदीमा भरतराज निरन्तर प्रवाहित भइरहेको साहित्यिक भाव यसरी व्यक्त भएको छ –

पूर्वबाट तिमी झुल्यौ चम्कियो पूर्वको नभ ।
फैलायौ ज्ञानको रश्मि साहित्य श्रुतिसौरभ ।।
खोँच पाखाहरू नाघ्दै तामाकोसी भई बग्यौ ।
सुनकोसी र रोसीका छालमा हेलिँदै बग्यौ ।।

ब्रह्माभ्यासी कवि भरतराज भौतिक रूपमा यस संसारमा नभए पनि उनले रसहरूको पनि रस अर्थात् ब्रह्मको सायुज्य पाएको विश्वास गर्नुहुन्छ। त्यसैले उनको निधनमा परिवारजन शोकाकुल भए तापनि कवि उनी प्रति ब्रह्मका साथ एकाकार भई बस भन्ने सद्भाव प्रकट गर्नुहुन्छ –

गयौ भरत ! साँच्चै नै टाढा टाढा कता गयौ ।
दृश्यबाट हटी ऐले स्वयं द्रष्टा तिमी भयौ ।।
तिमीले कविजी पायौ त्यहाँ जो रसको रस ।
आनन्द ब्रह्मका साथ एकाकार भई बस ।।



# खण्डकाव्य लेखनको पृष्ठभूमि

कवि शरदकुमार भट्टराईको साहित्यिक व्यक्तित्वको अर्को पाटो खण्डकाव्यकारका रूपमा परिचित भएको पाइन्छ । फुटकर कविता र भजनबाट अघि बढेको उहाँको साहित्यिक व्यक्तित्व २०५२ सालदेखि प्रबन्धकाव्यतर्फ मोडिन पुग्छ र उहाँ खण्डकाव्यकारका रूपमा पनि परिचित बन्नुहुन्छ । घरायसी वातावरण, सुरम्य ग्रामीण परिवेश, स्वाध्ययन र काठमाडौं आएपछि स्थापित कवि साहित्यकारहरूसँगको सम्पर्क र सङ्गतिले उहाँलाई कविता र काव्यतर्फ अभिमुख गराएको पाइन्छ । घरमा पढे सुनेका संस्कृतका लयबद्ध र भावपूर्ण स्तोत्र, भानुभक्तको रामायण, लोकसंस्कृतिको प्रभाव तथा पढ्नका लागि काठमाडौं आएपछि लेखनाथ पौड्याल, बालकृष्ण सम, माधवप्रसाद घिमिरे, भूपी शेरचन आदि स्थापित स्रष्टाहरूसँगको सङ्गत, प्रेरणा र प्रभावबाट उहाँको खण्डकाव्यकार व्यक्तित्वको बीजाधान भएको देखिन्छ । विद्यार्थी अवस्थामै राजनीतिक र साहित्यिक व्यक्तित्वको उठान गरिसक्नु भएका भट्टराई २०१५ सालतिरबाट कवितायात्रा प्रारम्भ गरेर २०२० सालदेखि प्रकाशनको चरणमा प्रवेश गर्नुभयो । संस्कृत काव्यशास्त्रीहरूले निर्देश गरेको काव्यहेतु अन्तर्गत प्रतिभालाई निख्खर बनाउँदै, व्युत्पत्तिलाई बढाउँदै र अभ्यासलाई निरन्तरता दिँदै अघि बढ्नुभएका भट्टराई जीवनवृत्तिका क्रममा संयोगवश सरकारी सेवामा प्रवेश गर्नुभयो भने साहित्यिक सेवालाई पनि कहिले साधना गर्दै र कहिले सहयोग पुऱ्याउँदै अघि बढाउनु भयो । सरकारी सेवाको पनि अधिकांश कालखण्ड गृहप्रशासनमा बिताउनु भएका उहाँले व्यस्तताका बीच बचेको समयमा साहित्यकै सेवा गर्नुभएको देखिन्छ । फुटकर कविता मात्र नभई महाकाव्य रचनाकै साहित्यिक उचाइ भएका भट्टराईले महाकाव्य नै भनेर कुनै रचना प्रकाशन गरेको नदेखिए पनि २०५० को दशकदेखि खण्डकाव्य प्रकाशनको शृङ्खला प्रारम्भ गरेको पाइन्छ । इतिहास, समाज र राजनीतिको समेत गहन अध्ययन, अनुशीलन र

मूल्याङ्कन गर्नुभएका भट्टराईले यिनै विषयभित्रका मार्मिक र संवेदनशील सन्दर्भहरूलाई खण्डकाव्यको केन्द्रीय कथ्य बनाउनु भएको छ। उहाँका प्रकाशित खण्डकाव्यहरू यस प्रकार छन् –

| | |
|---|---|
| १. बहादुर शाह, २०५२ | २. श्रद्धाञ्जलि, २०५२ |
| ३. अमर सिंहको चिट्ठी, २०५३ | ४. क्रान्तिदूत, २०५३ |
| ५. पृथ्वी विजय, २०६२ | ६. वन्दना, २०६८ |

खण्डकाव्यको विश्लेषणका लागि विभिन्न प्रतिमान निर्धारित छन् । अन्य काव्यविधाका तुलनामा सैद्धान्तिक चर्चा कम भएको खण्डकाव्यका तत्त्वहरू बारे पनि प्राचीन र नवीन धारणा पाइन्छन् । संस्कृत साहित्यशास्त्रमा वस्तु, नेता र रसको अपेक्षा गरिने खण्डकाव्यमा अहिले विश्लेषणका लागि खासै आवश्यक नपर्ने तत्त्वहरूको समेत उल्लेख गर्ने प्रवृत्ति पनि विकसित भएको छ। कृति विश्लेषणका लागि शीर्षक र उपशीर्षकको भीड लगाएर समीक्षाको कलेवर बढाउने तर कृतिको गहनतालाई उपेक्षा गर्दै स्रष्टाप्रति नै अन्याय गर्ने शोधकार्यहरूकै प्रशोधन गर्नुपर्ने अवस्था समेत आइसकेको छ । यही कटु सत्यलाई पृष्ठभूमिमा राखेर हेर्दा खण्डकाव्यकार भट्टराईका खण्डकाव्यहरूलाई पनि कुनकुन तत्त्वहरूलाई आधार मानेर अध्ययन र विश्लेषण गर्ने भन्ने प्रश्न स्वतः उत्पन्न हुन्छ । खण्डकाव्यकार भट्टराईका खण्डकाव्यहरू ऐतिहासिक, राजनीतिक र सामाजिक विषयवस्तुमा आधारित छन् र चरित्रको केन्द्रीयता यिनको मूल विशेषता बनेको पाइन्छ । दिवङ्गत पात्र र तिनका कार्यहरूलाई कविले विभिन्न प्रतिभा प्रविधिको प्रयोग गरेर यी काव्यमा वर्णन गर्नुभएको छ । ६ ओटै खण्डकाव्य मूलतः राष्ट्रवन्दना, मातृवन्दना र वीरवन्दनाका भावसूत्रबाट संरचित छन् र प्रत्येक भावकलाई राष्ट्र, माता र राष्ट्रवादीहरूप्रति कृतज्ञ बनाउन प्रेरक र सक्षम पनि छन् । काव्यकृतिको प्रकृति अनुसार विश्लेषणका आधारहरू पनि निर्धारित हुने भएकाले खण्डकाव्यकार भट्टराईका खण्डकाव्यहरूलाई मूलतः पाँच आधारबाट विश्लेषण गरिएको छ ।



# बहादुर शाह २०५२ का भूमिकाबाट

[ नेपालको प्राचीन इतिहास त्यसमा पनि विशेष रूपमा नेपालको एकीकरणको समयको शाहकालीन इतिहासका पानाहरू पल्टाएर अध्ययन गर्ने हो भने श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको मृत्युपछि मौसुफका माहिला पुत्र बहादुर शाहको जीवनी अत्यन्त जाज्वल्यमान तथा सङ्घर्षपूर्ण देखिन्छ। उनले एकातर्फ भाउजू राजेन्द्र लक्ष्मीदेवी र भतिजा श्री ५ रणबहादुर शाहका साथै दरबारिया भारदारहरूले अहोरात्र सञ्चालन गरेको षड्यन्त्रको सामना गरिरहनु परेको थियो भने अर्कोतर्फ उनका पिता श्री ५ पृथ्वीनारायण शाहले अधुरै छोडेर गएको नेपालको एकीकरणको गुरुतर अभिारा पनि बहन गर्नु परेको थियो। केही गरी त्यसबखत उनको त्यो साहसपूर्ण ऐतिहासिक राजकीय एकीकरण अभियानको सबल नेतृत्व राष्ट्रले प्राप्त गर्न नसकेको भए पृथ्वीको विशाल नेपालको परिकल्पना सायद अपूर्ण नै रहने थियो होला। अत्यन्त दूरदर्शी, राष्ट्रभक्त, त्यागी, वीरशिरोमणि बहादुर शाहले राष्ट्रको लागि जे जति गरेर गए सो कुराको तत्कालीन दूरभियोजनयुक्त दरबार र स्वार्थान्ध नीच व्यक्तिहरूबाट प्रशंसा हुन नसके तापनि दुर्भाग्यपूर्ण सुगौली सन्धि पछि जे जति नेपाल राष्ट्र बचेको छ त्यसले अवश्य कृतज्ञता ज्ञापन गरिरहने छ, सम्झिरहने छ र यो नेपाल राष्ट्र रहेसम्म उनीप्रति सम्पूर्ण स्वाभिमानी देशभक्त नेपालीहरू चिर ऋणी भएर रहने छन्।

नेपाल अधिराज्यको एकीकरण गर्ने गुरुतर सन्दर्भको साथै तत्कालै भोटसँग भएको युद्धको समाप्तिपछि तत्कालीन दरबारभित्र देखापरेको चरम गुटबन्दी र भर्खरै बालिग भएर सत्ता सम्हालेका श्री ५ रणबहादुर शाहमा उदय भएको सीमाविहीन तुच्छ महत्त्वाकाङ्क्षा र अतिशय पूर्वाग्रह राखी बहादुर शाहसँग बदला लिने मौका छोपी नचाहिँदो अत्तोथापी युद्धको समयमा भएको खर्चको हिसाब नबुझाएको निहुँ झिकी श्री ५ रणले थुनामा राखेको बुझिन्छ। थुनामा परेको बखत अविश्वास र त्रासयुक्त बन्दीगृहमा

बहादुर शाहको मानसिक अवस्था अत्यन्त आन्दोलित र तनावयुक्त भएको कुरा वंशावली र इतिहासको गवेषणबाट बुझ्न सकिन्छ । उनको मृत्यु जुन रहस्यमय तथा नृशंसपूर्ण तरिकाले भयो सो कुराको ज्ञान नेपालको इतिहासका संवेदनशील पाठकहरूलाई छँदैछ । थुनामा परेका बखत आफ्नो जीवनको अन्तिम प्रहरमा बन्दीगृहको कालकोठरीबाट नेपालका महान् विभूति, श्रद्धेय बहादुर शाहले गद्दीनसीन भतिजा श्री ५ रणबहादुर शाहलाई व्यक्त गरेका केही अविस्मरणीय अभिव्यक्तिहरू कविताका रूपमा यस खण्डकाव्यमा प्रस्फुटन भएका छन् । यो उनको अमर कृति उनकै सम्झनामा हार्दिक समर्पण गर्दछु ।]

# बहादुर शाह २०५२

## १. संरचना

'बहादुर शाह' खण्डकाव्यकार भट्टराईको पहिलो प्रकाशित खण्डकाव्य हो । यो ऐतिहासिक विषयवस्तुमा आधारित छ । नेपाल एकीकरणका महानायक पृथ्वीनारयाण शाहका माहिला छोरा बहादुर शाहका कार्य र चरित्रलाई यस खण्डकाव्यमा प्रस्तुत गरिएको छ । पिताको एकीकरण अभियानलाई अझ सबल र सक्षम रूपमा विस्तृत बनाई नेपालको सान र मान बढाउन सफल बहादुर शाहलाई भतिजा रणबहादुर शाहले राजा भइसकेपछि तिब्बत युद्धको हिसाबकिताब मागेको र सोही निहुँमा बन्दी बनाई यातना दिएको ऐतिहासिक सन्दर्भ यस खण्डकाव्यमा उल्लिखित छ ।

यो खण्डकाव्य तीन खण्डमा विभक्त छ । प्रथम खण्डमा १३२, द्वितीय खण्डमा १३४ र तृतीय खण्डमा २४ श्लोक गरी जम्मा २९० श्लोकमा रचित यो खण्डकाव्य मध्यम आयामको रचना हो । यसले खण्डकाव्यको मूल्य र मान्यतालाई आत्मसात् गरेकै देखिन्छ । मूलतः अनुष्टुप्, पञ्चचामर, मालिनी, उपजाति, वसन्ततिलका, मन्दाक्रान्ता, स्रग्धरा आदि शास्त्रीय छन्दको प्रयोग गरिएको यस खण्डकाव्यमा वर्ण्य विषयका आधारमा शीर्षक विधान भएको छ ।

## २. आख्यानविधान

### (क) प्रथम खण्ड

पूर्वीय काव्यमान्यता अनुसार मङ्गलाचरणबाट प्रारम्भ गरिएको यस खण्डमा काव्यको कथावस्तुको सङ्केत गर्दै हिमशृङ्खलाको वर्णन र सर्वोच्च शिखर सगरमाथाको महिमागायन गरिएको छ । हिमशिखरमाथि शिवले ताण्डव नृत्य गरेको पौराणिक प्रसङ्ग उल्लेख गर्दै तिनै हिमशिखरहरूबाट पावनी वागमती प्रवाहित भएको र सबैको पाप हरण गर्न समर्थ भएको विषय प्रस्तुत गरिएको छ । पौराणिक प्रसङ्गबाट अघि बढ्दै खण्डकाव्यकारले यिनै वागमतीलाई फोहोरी र दुर्गन्धित बनाएको समसामयिक यथार्थ देखाउनुभएको छ । वातमतीको किनारमा उपस्थित भक्तहरू पशुपतिनाथको वर्णन र स्तुतिगान गर्छन् र देशको अखण्डताको रक्षा र अन्याय, अराजकता र बेथितिको समाप्तिका लागि प्रार्थना पनि गर्छन् । भक्तहरूको दुःख पुकारा सुनेपछि पशुपतिनाथ नेत्र खोलेर प्रकट भई ऐतिहासिक घटनालाई संवादात्मक ढाँचामा वर्णन गर्न थाल्छन् । आर्यघाटमा बहादुर शाहको लास छ र वरिपरि मानिसहरू जम्मा भएका छन् । पशुपतिनाथ मेरो भक्त हो भन्दै बहादुर शाहको जीवनका घटनालाई सुनाउँछन् । भगवान् पशुपतिनाथले पृथ्वीनारायण शाहले प्रारम्भ गरेको नेपाल एकीकरणको अभियानलाई बहादुर शाहले पूर्ण गरेको भए तापनि पछि भतिजा रणबहादुर शाहले दरबारियाहरूको काल्पनिक कुरा सुनेर बहादुर शाहलाई अविवेकपूर्वक बन्दी बनाएको सन्दर्भ उल्लेख गरेका छन् । पृथ्वीनारायणपछि विशाल नेपालको निर्माण गर्ने बहादुर शाहसँग राज्यसञ्चालन र युद्धसञ्चालनको हिसाब मागेर रणबहादुर शाहले तुच्छतापूर्वक उनलाई थुनेको र यसबाट आफु पनि दुःखी भएको कुरा भगवान्ले गरेका छन् । भगवान्को वर्णन सुनेर र दुःख देखेर भक्तहरू पनि राजाको बुद्धि सपारिदिन अनुरोध गर्दछन् र प्रभुकै शरणमा आएको निवेदन पनि गर्दछन् । भक्तहरूको पुकारा सुनेपछि पशुपतिनाथले बहादुर शाहले राजा रणबहादुर शाहलाई जुन सत्य वृत्तान्त बताए त्यो भन्छु सुन

भन्दै बहादुर शाहले जीवित अवस्थामा भतिजा रणबहादुर शाहलाई भनेको प्रसङ्ग बताउन लगाएका छन् ।

### (ख) द्वितीय खण्ड

बहादुर शाह राज्यको कोष मासेको भनी आफुलाई लगाइएको आरोप अनेक युक्ति र प्रमाणबाट खण्डन गर्दै भन्दछन् – देशमा सामाजिक एकता स्थापित गरेको, आफुभन्दा शक्तिशाली राजाहरूलाई जितेर नेपालमा गाभेको, आफुले स्वार्थ नराखेको, भोट, चीन र तिब्बतका राजा र नेपाली रजौटाहरूलाई रोकेको र पूर्वमा टिष्टापारि र पश्चिममा कुमाउ गढवालसम्म पुगी राज्य विस्तार गरेको प्रमाण बहादुर शाह प्रस्तुत गर्दछन् । बहादुर शाह अति मार्मिक प्रश्न गर्छन् ः– रगत र पसिना खर्चेर जितेर ल्याएको राष्ट्र बुझाउँदा पनि उल्टै मसँग हिसाब माग्ने तिम्रो कस्तो न्याय हो ? यो राष्ट्र सम्पूर्ण नेपालीहरूको साझा सम्पत्ति हो । राजा रणबहादुर शाहलाई सम्झाउँदै बहादुर शाह भन्दछन् – यो राज्य मेरो मात्र हो र म मात्र राजा हुँ भन्ने नसोच । राष्ट्रका लागि समर्पित मलाई अनेक थरी दोष र आरोप लगाएर शत्रु ठानेर तिमीले मलाई थुनेका छौं । म थाकेँ भन्ने ठानेर शान्तिपूर्वक सुत्नका लागि तिमीले स्थान दिएका हौ भने म यहीं आराम गरेर सुत्छु । सुत्नका लागि कैदी बनायौ भन्दै बहादुर शाह व्यङ्ग्य पनि गर्दछन् ।

### (ग) तृतीय खण्ड

'बहादुर शाह' खण्डकाव्यको तृतीय खण्ड नै अन्तिम भाग हो । अन्य दुई खण्डको तुलनामा यो खण्ड सानो छ । यसमा पशुपतिनाथका माध्यमबाट नेपालको एउटा इतिहासको अन्त्य भई दरबारको जालझेल र षड्यन्त्रले विनाशको समय आउन लागेको अभिव्यक्ति प्रकट गरिएको छ । नीतिको मार्ग छोडेर राजा अनैतिक भए भने दरबार पनि अनैतिक हुन्छ भनिएको छ । कर्मचारी दरबारको चाप्लुसीमा लागे भने समाज र

जनता पनि यसको सिको गर्दछन् र अन्तिममा जनताको अस्तित्व पनि समाप्त हुन्छ भनिएको छ । बहादुर शाहलाई बन्दी बनाइनु, नेपालको एकीकरण अभियान अवरुद्ध हुनु, दरबारमा षड्यन्त्र र हत्याका सिलसिला जारी रहनु र स्वार्थ र शत्रुता बढ्दै जानुबाट विनाशको बाटो आउन लागेको तथ्य देखाइएको छ । हत्याले हत्या र त्यागले मित्रता बढ्ने उपदेश दिँदै पशुपतिनाथले बहादुर शाहको मरणले यस देशको गति असामान्य बन्न पुगेको हुँदा अब राजाको मति सुध्रियोस् भन्ने कामना गरेका छन् । पशुपतिनाथले उपस्थित भक्तहरूलाई राजाको साथ दिएर देशलाई शक्तिशाली बनाउन आह्वान गर्दै यसमा आफुले पनि साथ दिने आश्वासन दिई समाधि लिएको प्रसङ्ग यहाँ आएको छ । त्यसपछि भक्तमण्डली शिवको प्रार्थना गर्दै हामीलाई दीनदुःखी ठानेर भलो गर्नुहोस् भन्दछन् र तपाईंको आज्ञा पालन गरी राजा रणबहादुर शाहलाई सुमार्गमा ल्याउने प्रयास गर्ने र त्यसमा विफल भए तपाईंकै शरणमा आउँछौ भन्दै बिन्ती गर्दछन् । खण्डकाव्य समाप्त हुन्छ ।

## ३. भाव र विचार

पृथ्वीनारायण शाहले प्रारम्भ गरेको नेपाल एकीकरणको महायात्रालाई सक्रिय रूपमा अघि बढाउने बहादुर शाह नेपालका ऐतिहासिक राष्ट्रवादी वीरपुरुष थिए । नेपालको एकीकरण र सशक्तीकरणलाई मन नपराउने विदेशी र स्वदेशकै पनि विद्वेषी तत्त्व बहादुर शाहको पतन चाहन्थे । त्यस्ता तत्त्व टाढा मात्र नभई राजदरबारभित्रै आफ्नै नातासम्बन्धका शक्तिशाली व्यक्ति नै थिए । बहादुर शाहको राजनीतिक शक्ति र सुझबुझका अगाडि अरू कमजोर थिए । यस्तै परिवेशमा राजा भएका रणबहादुर शाहले राजपाट सम्हाल्नेबित्तिकै युद्धसञ्चालन र राज्यसञ्चालनको हिसावकिताब माग्ने निहुँमा काका बहादुर शाहलाई बन्दी बनाउँछन् र बन्दी अवस्थामा उनको निधन हुन्छ । राष्ट्र र जनताका लागि निःस्वार्थ भई काम गर्दागर्दै पनि बहादुर शाहलाई अविवेकी राजा रणबहादुरले

बन्दी बनाउनु विवेकहीनताको पराकाष्ठा थियो । वीरपुरुष बहादुर शाहको कारुणिक जीवन र मरण देखाएर खण्डकाव्यकार नेपालका लागि मर्ने र नेपालीहरूका लागि लड्ने प्रत्येक नेपालीको अहित भइरहेको तथ्यलाई उजागर गर्नुहुन्छ । बहादुर शाहले रणबहादुर शाहलाई विशाल नेपाल बुझाए तर रणबहादुरले बहादुर शाहलाई सङ्कीर्ण कालकोठरीमा कैद गरे । नेपाल र नेपालीहरूको भलो गर्नेकै कुभलो गरिने कृतघ्न चरित्रको पर्दाफास गरेर खण्डकाव्यकारले नेपाललाई 'सतीले सरापेको देश' का रूपमा चित्रित गरेको पाइन्छ । बहादर शाह वीर पुरुष भएका र उनले वीरोचित कर्म गरेका भए पनि उनको जीवन कारुणिक बन्न पुगेको र त्यो करुणाभरित भावलाई स्वयं भगवान् पशुपतिनाथले पनि वाणीद्वारा व्यक्त गरेको देखाइएको हुँदा यो खण्डकाव्य करुण अङ्गीरसप्रधान बन्न पुगेको छ ।

यस खण्डकाव्यमा पशुपतिनाथलाई मानवीय चरित्र जस्तो बनाएर प्रस्तुत गरिएको छ । यसो गर्नुको कारण के हो भने बहादुर शाहलाई तत्कालीन राज्यसत्ताले अन्याय र अपमान गरे पनि भगवान् पशुपतिनाथले चाहिँ अवश्य न्याय गर्छन् भन्ने खण्डकाव्यकारको विश्वास रहेको छ । बहादुर शाहलाई मनले पनि चिताउन नहुने अन्याय गरियो । यस्तो जघन्य अन्याय जसलाई देखेर पशुपतिनाथमा पनि सहन क्षमता नभएर बोल्नुपर्ने अवस्था आइपऱ्यो र राष्ट्रका रक्षक नै राक्षस भएर आएपछि यसको रक्षा गर्ने जिम्मा अब भगवान् पशुपतिनमा मात्र रहेकाले उनले पनि बोल्नुपर्ने अवस्था आयो भन्ने कविको भावुक अभिव्यक्ति छ ।

खण्डकाव्यकार दृष्ट रूपमा कर्मयोगी हुनुहुन्छ भने अदृष्टमा भगवद्भक्त र आस्थावान् पनि हुनुहुन्छ । खण्डकाव्यमा पशुपतिनाथले बहादुर शाहलाई आफ्ना भक्तका रूपमा चित्रण गरेको देखाएर खण्डकाव्यकार के भन्न खोज्दै हुनुहुन्छ भने राष्ट्रभक्त र भगवान्का भक्तहरूलाई भगवान्को शरण र सुरक्षा प्राप्त हुन्छ ।

यो खण्डकाव्य वैचारिक सन्देशप्रधान छ । प्रत्येक व्यक्ति आफ्ना

पूर्वजहरूप्रति कृतज्ञ हुनुपर्छ र आफ्नो जीवन उनीहरूकै श्रम, सीप र बलबुद्धिमा अघि बढेको छ भन्ने सत्य स्वीकार गर्नुपर्छ। राजाहरूले त आफ्ना पूर्वाधिकारीहरूप्रति अझ बढी कृतज्ञ हुनुपर्छ किनकि उनीहरूले नै आर्जेको र बचाएको राष्ट्रमा आफु राजा हुन पाइएको छ। पृथ्वीनारायण शाह र बहादुर शाहले विशाल नेपालको निर्माण गरी रणबहादुर शाहलाई बुझाए तर रणबहादुरले उल्टै बहादुर शाहलाई कैद गरी कृतघ्नता देखाए । यो नेपालको इतिहासको विडम्बना र राष्ट्रवादीहरूलाई सधैँ तड्पाइरहने कलङ्क पनि हो । राष्ट्रघातीहरू पुजिने र राष्ट्रवादीहरू कालकोठरीमा थुनिनुपर्ने परिस्थितिप्रति खण्डकाव्यकार विद्रोही बन्नुहुन्छ र विद्रोही भावलाई बहादुर शाहको कारुणिक जीवनकथा देखाएर प्रकाशन गर्नुहुन्छ । राष्ट्रवादीहरूले मानवीय न्याय नपाउने अवस्था आएकाले अब उनीहरूलाई दैवी न्याय नै आवश्यक भएको विचार यहाँ पाइन्छ। भावले करुणा, विचारले राष्ट्रवाद र चेतनाले विद्रोह जगाउन समर्थ यस खण्डकाव्यले भगवान् पशुपतिनाथलाई नै मानवीय चरित्रका रूपमा उपस्थापित गरेर देवादिविषयक रतिभावको उद्रेक पनि गराएको पाइन्छ। खण्डकाव्यका नायक बहादुर शाहप्रति पाठकको सहानुभूति र संवेदना जगाउन सफल खण्डकाव्यकारले ऐतिहासिक व्यक्ति र वृत्तान्त अवलम्बन गरे तापनि समसामयिक राजनीतिक यथार्थलाई पनि सङ्केत गरेको पाइन्छ। यो खण्डकाव्य विगतबाट पाठ सिकेर वर्तमानलाई सुधार गर्ने एउटा साहित्यिक माध्यम पनि बन्न पुगेको देखिन्छ।

## ४. कलाशिल्प

'बहादुर शाह' पूर्वीय खण्डकाव्य सिद्धान्त वा पाश्चात्य खण्डकाव्यधर्मी लामो कविताका मान्यतालाई आधार मानेर लेखिएको रचना होइन । बहादुर शाहको व्यक्तित्व र प्रेरक जीवनीबाट प्रभावित भई स्वस्फूर्त रूपमा खण्डकाव्यकारले रचना गर्नुभएकाले सोही अनुरूप यसको कलाशिल्पपक्ष हेर्नुपर्ने हुन्छ।

तीन खण्डमा रचित यस खण्डकाव्यमा झीनो आख्यानलाई कवित्वशक्तिबाट प्रबल र प्रभावकारी बनाइएको छ। नेपालको निर्माणमा समर्पित भएका तर तत्कालीन शासकले अन्याय गरेका राष्ट्रवादी चरित्रहरूको उद्घाटन गर्ने क्रममा यस खण्डकाव्यको रचना भएको हो। सङ्क्षिप्त आख्यानलाई खण्डकाव्यको आयाम र उचाइमा पुऱ्याइने सीप यहाँ देखिन्छ।

गद्यशैलीमा पनि सुन्दर कविता लेख्नुहुने खण्डकाव्यकारले यहाँ संस्कृतका अनुष्टुप्, पञ्चचामर, मालिनी, उपजाति, वसन्ततिलका, मन्दाक्रान्ता, स्रग्धरा आदि प्रचलित शास्त्रीय छन्दहरूको प्रयोग गर्नुभएको छ र प्रत्येक छन्दको प्रयोगमा भाषिक विचलन नभएकाले सिद्धि पनि प्राप्त गरेको पाइन्छ। प्रत्येक श्लोकमा कथ्य, भाव र छन्दको समन्वय पाइन्छ। यसको पुष्टिका लागि नमुनास्वरूप दुईओटा लामा छन्द मन्दाक्रान्ता र स्रग्धराका एउटा एउटा उदाहरण यसरी उल्लेख गर्न सकिन्छ –

छोड्यो जल्ले परिजन सबै राष्ट्रलाई भनेर।
पोख्यो सारा रगतपसिना वीर योद्धा बनेर॥
हाँस्तै सक्थ्यो सहज रणमा फ्याँक्न जो प्राणसम्म।
सोही मान्छे अब छ थुनुवा लाग्छ सारै अचम्म॥

(मन्दाक्रान्ता, पृ.१८)

मैले पृथ्वी बुबाको अनुसरण गरी वीरयोद्धा बनेर।
धेरै ठूला लडाइँ सहजसँग लडेँ राष्ट्र आफ्नो भनेर॥
मैले आफ्नू कहिल्यै गरिन जतन क्यै व्यक्तिवादी बनेर।
जे जे सक्थेँ चढाएँ जति मसँग थियो देशलाई भनेर ॥

(स्रग्धरा, पृ.५०)

'बहादुर शाह' अलङ्कार प्रयोगको सामर्थ्य देखाउने उद्देश्यले लेखिएको खण्डकाव्य होइन तापनि यसमा विभिन्न स्थानमा अर्थालङ्कार र शब्दालङ्कारको सौन्दर्य अनुभव गर्न सकिन्छ। यस खण्डकाव्यमा

निरायास अर्थान्तरन्यास, उत्प्रेक्षा, प्रश्न जस्ता अर्थालङ्कारहरूको प्रयोग भएको छ। अर्थान्तरन्यासको उदाहरण –

जो बढ्छ चाँडो उति झर्छ चाँडो।
हुँदैन राम्रो अति गर्नु चाँडो॥
हतार गर्छौ किन आत्तिएर।
बिगार गर्ला पछि यो गएर॥ (पृ.४२)

दिएर जान्छु म त लिन्न केही।
रित्तिन्छु आफु तर लिन्न केही॥
जो दिन्छ रित्तिन्छ र बन्छ भारी।
जो लिन्छ त्यो बन्छ सधैं भिखारी॥ (पृ.५५)

उत्प्रेक्षा र प्रश्नालङ्कारको संसृष्टि यस प्रकार छ –

विडम्बना यो कसले गरायो ?
उल्टो कुरा वा कसले सुनायो ?
दर्बार अन्धो छ गुँगो समाज।
लाग्यो सतीको कि ? सराप आज॥ (पृ.३३)

शब्दालङ्कार अन्तर्गत अनुप्रासको सुन्दर नमुना यस्तो छ –

जस्तासुकै अबुझ छौं सब भक्त नै छौं।
हामी अबोध अझ छौं र अशक्त नै छौं॥
जे गर्दछौं नबुझि नै सब काम गर्छौं।
बिग्रिन्छ काम अनि ता अलपत्र पर्छौं॥ (पृ.९)

दर्शनविषयका डेड दर्शनजति पुस्तक लेखिसक्नुभएका स्रष्टा भट्टराई कविता सङ्ग्रहमा जस्तै जुनसुकै विषयवस्तु भएका खण्डकाव्यमा पनि दर्शनलाई कवित्वमा ढाल्न सिपालु देखिनुहुन्छ। पूर्वका आस्तिक र नास्तिक तथा पश्चिमका प्राचीन र अर्वाचीन दर्शनका अध्येता, ज्ञाता र व्याख्याता खण्डकाव्यकारको जीवन र कृतित्वमा सर्वाधिक प्रभाव र

प्रेरणा वेदान्तदर्शनकै रहेको पाइन्छ । यो खण्डकाव्य नेपालको इतिहासमा प्रेरक चरित्रलाई केन्द्रबिन्दुमा राखी लेखिएकाले यसमा स्वाभाविक रूपमा इतिहासका सन्दर्भहरू बढी मुखरित छन् तापनि कतैकतै वेदान्तलाई कवित्वमा घुलमिल गराएर अभिव्यक्त गर्ने काव्यचातुरी देखाइएको पाइन्छ । जस्तै –

वियोग संयोग सबै खपेर ।
यो बालुवाको कणझैं बगेर ॥
जानै छ टाढा अति दूर ताकी ।
जहाँ परं सत्य रहन्छ बाँकी ॥ (पृ.६)

गीताको कर्मयोग कवित्वको जलप पाएर यसरी प्रस्फुटित भएको छ –

कर्तव्यलाई अघि सारि नित्य ।
आशा नराखी फलमा अनित्य ॥
निःस्वार्थ मैले सब धर्म सम्झी ।
सधैं गरेँ जे जति कर्म सम्झी ॥ (पृ.५४)

खण्डकाव्यकारले जीवनमा गरेका धेरै थरी काममध्ये विद्यार्थी जीवनमा गरेको राजनीति पनि एक हो । राष्ट्र जोड्न, संरक्षण गर्न र एकता कायम गर्न अति नै कठिन छ भन्ने तथ्यसँग खण्डकाव्यकार राम्ररी परिचित हुनुहुन्छ । यसैको परिणामस्वरूप राजनीतिबारे शाश्वत सुभाषित यसरी व्यक्त भएको छ –

यो राष्ट्र जोड्नै पहिले छ गाह्रो ।
जोडेर संरक्षण गर्न गाह्रो ॥
मिलाइ राख्नै पछिसम्म गाह्रो ।
यो राज्यको काम सबै छ गाह्रो ॥ (पृ.३४)

राष्ट्रभक्त बहादुर शाहलाई बन्दी बनाएर अमानवीय व्यवहारमात्र गरिएको छैन मानवतावादको उपहास पनि गरिएको छ ।

वैदिक वाङ्मयमा निबद्ध मानवतावादी विचारलाई सरल र सामयिक बनाएर प्रस्तुत गर्न निपुण खण्डकाव्यकारले सारगर्भित अभिव्यक्ति दिनुभएको छ –

आँखा सधैं हुन् सब एक देख्ने ।
वाणी बनोस् अमृत नित्य पोख्ने ।।
विशाल छाती सबलाई देऊ ।
समग्रमा बाँच्न सिकाइ देऊ ।। (पृ.२२)

संवादात्मक शैली, भाषिक आधिकारिकता, सुश्राव्य लयसिर्जना र कथनपद्धतिका माध्यमबाट प्रस्तुत खण्डकाव्य कलात्मक बन्न पुगेको देखिन्छ ।

## ५. निष्कर्ष

नेपालको इतिहासका अमर पात्र बहादुर शाहको साहसी र वीरोचित चरित्र र कारुणिक जीवनकथालाई सन्तुलित बनाई लेखिएको यस खण्डकाव्यमा कथ्य र कवित्वको पनि संयोजन भएको छ । इतिहास जस्तो नीरस विषयलाई खण्डकाव्यकारले कवित्वको रस भरेर खण्डकाव्यको सिर्जना गरी एउटा ऐतिहासिक तथ्यको उद्घाटनसमेत गर्नुभएको छ । राष्ट्रनिर्माताहरूप्रति राष्ट्रवासीहरू सधैं कृतज्ञ हुनुपर्छ र उनीहरूको योगदानको उच्च सम्मान र मूल्याङ्कन हुनुपर्छ भन्ने मूल भाव र विचार यहाँ पाइन्छ । इतिहास, दर्शन, राजनीति, राष्ट्रवाद र मानवतावादलाई काव्यशक्ति र कौशलबाट हृदयस्पर्शी बनाई प्रस्तुत गर्न खण्डकाव्यकार सफल देखिनुहुन्छ । यो खण्डकाव्य इतिहासबाट शिक्षा लिएर वर्तमानलाई सुन्दर र सुखद बनाउने काव्यिक सन्देश बनेको छ ।



# श्रद्धाञ्जलि २०५२ का भूमिकाबाट

[ श्रद्धाञ्जलि प्रातस्मरणीया वैकुण्ठनिवासी मेरी आमाका स्मृतिमा लेखिएको शोक खण्डकाव्य हो । यसमा उल्लेख भएकी सान्नानी केवल मेरी मात्र आमा नभएर भावनात्मक रूपले श्रद्धेय पाठकहरू सबैकी साझा आमाका रूपमा चित्रण गर्ने मेरो प्रयास भएको छ । अझ यसमा पनि खास गरेर नेपालका थुप्रैथुप्रै गाउँहरूमा बस्ने निम्न, निम्नमध्यम तथा मध्यमवर्गीय परिवारका असङ्ख्य आमाहरूको साझा कहानी हो । यो श्रद्धाञ्जलि खण्डकाव्य आफ्नो आत्मोत्सर्ग गरेर सन्तानको भविष्य सुखमय बनाउन चाहने प्रत्येक आमाको आत्मकहानी हो । निश्छल तथा सरल हृदय भएका अथाह वात्सल्युक्त जननीहरूको यो ज्वलन्त आपविती हो । घरघरका नारीहरूको कथा हो । ती नै करुणामयी जननीहरूमा यो सादर समर्पण छ । ]

# श्रद्धाञ्जलि २०५२

## १. संरचना

'श्रद्धाञ्जलि' खण्डकाव्यकारले आमाप्रति श्रद्धा र शोक व्यक्त गर्दै लेखेको खण्डकाव्यधर्मी शोककाव्य हो । संस्कृतका विविध शास्त्रीय छन्दमा लेखिएको यस काव्यमा काव्यकारकी आमाको जीवनीलाई ६ खण्डमा बाँडेर वर्णन गरिएको छ । काव्यकारले आफ्नी आमाको वर्णन गरे तापनि शोक स्थायी भावलाई साधारणीकरण गरेर मातृविहीन सबै सन्ततिको शोकोद्रेक गराउन सफलता प्राप्त गरेको पाइन्छ । अतः लेखकले काव्यको 'समर्पण' मा उल्लेख गरेअनुसार आत्मोत्सर्ग गरेर सन्तानको भविष्य सुखमय बनाउन चाहने प्रत्येक आमाको आत्मकहानीको रूपमा यो काव्य आएको छ ।

## २. आख्यानविधान

काव्यकारकी आमा सान्नानी प्रमुख पात्र बनेको यस काव्यमा ६ खण्ड छन् । यिनै खण्डमा यस काव्यको आख्यानसूत्र जोडिएको छ ।

**(क) मातृवन्दना**

यस खण्डमा काव्यकारले आमाको निधनबाट शोकाकुल बनेर मातृवन्दना गर्नुभएको छ । कवि शोकाकुल भएर आमा कहाँ जानु भयो ? र किन जानुभयो ? भन्ने प्रश्न गर्दै र आफैंलाई सम्हाल्दै आमालाई निश्चल दीप झैं बस भन्ने कामना पनि गर्नुहुन्छ। यस खण्डमा आमा हुँदाको र नहुँदाको घरको भिन्नता देखाई आमाको काखमा बस्दा मृत्युञ्जयलाई पनि हाँक दिन सकेको मार्मिक भाव व्यक्त गरिएको छ । साथै बाँचुन्जेल सुकर्म र शुभधर्म गरेर बाँच्ने अभिलाषा पनि व्यक्त गरिएको छ।

**(ख) बाल्यावस्था**

हिमालयको प्राकृतिक र सांस्कृतिक गौरवको वर्णन गर्दै प्रारम्भ भएको यस खण्डमा ऋषि र तपस्वीहरूको साधनास्थल बनेको दुधकोसीको किनारमा अवस्थित रावा लामिडाँडामा विवाह भएर आई काव्यकारकी आमा बसेको वर्णन गरिएको छ। त्यसभन्दा पहिले माइतीमा बाल्यकालमै आमाको निधन भएको, बाबुले दोस्रो विवाह गरेको र बाबुको विवाह भइसकेपछि काव्यकारकी आमाको पनि विवाह भएर लामिडाँडा आगमन भएको सन्दर्भ पनि यसमा उल्लिखित छ । सान्नानीका नामबाट चिनिने काव्यकारकी आमा रन्धताले विवाह भएर लामिडाँडा आइसकेपछि घरपरिवारलाई मात्र नभई चर-अचर सम्पूर्ण पदार्थमा स्नेह दर्साएको, दुधकोसीका किनारमा गई काम गरेको र त्यसको चिसो पानीले तिर्खा मेट्ने गरेको वर्णन यहाँ भएको छ । विवाहपूर्व सान्नानीले रावाखोलाका आसपासमा कहिले सँगिनीहरूसँग हाँसखेल गरी बिताएको र आमाको निधन हुँदा शोकाकुल भई बस्ने गरेको यथार्थ कविले प्रस्तुत गर्नुभएको छ। यस खण्डमा काव्यकारकी आमाले माइत र पतिगृह दुवैतिर बाल्यकाल बिताएको र पतिगृहमा बढी जिम्मेवारी वहन गर्नुपरेको वास्तविकता पनि देखाउनुभएको छ।

**(ग) गृहस्थ जीवन**

बालवधूका रूपमा आफ्नो संस्कार, सदाचार र कर्तव्यलाई सर्वोपरि महत्त्व दिँदै भित्रिएकी काव्यकारकी आमाले सफल गृहिणीको भूमिका पूरा गरेको वर्णन यस खण्डमा भएको छ । समयक्रममा सन्तानवती बनेकी सान्नानीका पाँच सन्तानको अल्पायुमै निधन भएपछि उनी शोकले सन्तप्त भईन् र रोगले पनि गाँज्न थाल्यो । बाँकी सन्तानलाई रगत पसिना खर्चेर हुर्काएको, सिंहिनी जस्ती बनेर रक्षा गरेको, रातोदिन अथक परिश्रम गरेको, जुनसुकै समस्याको पनि धैर्यपूर्वक समाधान गरेको र धार्मिक दान पुण्यादि कर्म गर्ने गरेको विवरण कविले दिनुभएको छ । ठुला भएपछि छोराहरू पढ्नका लागि परदेश जान्छन् । बीचमा उनीहरूको खबर थाहा नपाउँदा पतिलाई सोध्ने गरेको, बाडुली लाग्दा सम्झेछन् भन्ने ठानेर रोएको, घरमा मीठो मसिनो पाक्ता पनि उनीहरूकै सम्झना आएको, नराम्रो सपना देख्ता बिहानै पीपलमा पानी चढाउने गरेको र छोराहरू आउने बाटो हेर्ने गरेको प्रसङ्ग उल्लेख गर्दै एउटी मातृवात्सल्यले भरिपूर्ण आमाको स्वाभाविक चित्र यस खण्डमा उतारिएको छ । शिक्षादीक्षा पाएर जागिर खाइसकेपछि छोराहरूले मानसम्मान पाएको र उन्नति गर्दै गएको देखेर काव्यकारकी आमालाई अपार हर्ष भएको र आफ्ना जप र तपको प्राप्ति भएको विश्वास लाग्दथ्यो । तर छोराहरूले आफ्नै पत्नी र सन्तानमा मात्र ममता देखाई आफुलाई कम वास्ता गरे पनि त्यसलाई प्राकृत नियम ठानी सन्तोष मान्ने आमाको स्वभाव कविले देखाउनुभएको छ ।

**(घ) स्थानान्तरण**

पहाडको रमणीय र सुसंस्कृत परिवेशमा हुर्की बढी गरेकी कविकी आमाको एकमात्र र सबैभन्दा ठुलो स्वार्थ सन्तानसँगको सान्निध्यमा बस्ने चाहना मात्र थियो । उनी गाउँ र कर्मघर छोड्न तयार हुन्थिन् तर सन्तानबाट टाढा हुन चाहन्नथिन् । यही आशाले उनी आफ्ना पतिसँग

मधेस झरेको र त्यहाँ अलिकति सुखको अनुभव पनि गरेको घटना कविले उल्लेख गर्नुभएको छ । पहाडको पारस्परिक सहयोग, हार्दिक मित्रता, प्रकृतिको परिपूर्णता, स्वतः स्फूर्त रूपमा गर्ने गरेका श्रमशील कार्यहरू, सांस्कृतिक र साङ्गीतिक वातावरणमा अभ्यस्त सान्नानीले मधेस झरेपछि त्यस्तो कुनै अनुभव गर्न नपाएको बरु उल्टो परिस्थिति सिर्जना भएको वर्णन गरिएको छ । मधेस झरेपछि सान्नानीले दुई किसिमबाट पीडित हुनुपरेको छ – एउटा छोराहरूसँग बस्न नपाएको र अर्को पहाडको वातावरण नपाई त्यसैको सम्झनाले सताएर सान्नानीले पहाडै फर्केर जाने विचार गरेकी तर पनि त्यो सम्भव नभएको सत्य कविले दर्साउनु भएको छ। समग्रमा यस खण्डमा सान्नानी सुख सन्तोषका लागि मधेस आए पनि त्यो पूरा हुन नसकी अझ पीडित बन्न पुगेको घटनान कविले देखाउनु भएको छ।

### (ङ) वृद्धावस्था तथा अवसान

वृद्धावस्था भएपछि पहिले भन्दा पनि बढी सान्नानी पूजा, पाठ, जप, तप आदि धर्मकर्ममा तल्लीन भएको देखाइएको छ । पहिले श्रम गर्ने र तीर्थयात्रा गर्ने सान्नानी रोगले च्यापेपछि आफ्नै आँगनमा पनि हिँड्न नसक्ने अवस्थामा पुगेकी छन् । उनी अशक्त हुँदै गएकी छन् भने छोराछोरीहरूमा पिर पनि बढ्दै गएको छ। उनी थला पर्छिन् । एकोहोरो सुताइले शरीरभरि घाउ हुन्छ। उनलाई सुत्न, उठ्न, बस्न जे गर्न पनि कष्ट हुने गरेको दयनीय अवस्थाको कविले वर्णन गर्नुभएको छ। सान्नानीको यस अवस्थासँग कवि पूर्वावस्थाको तुलना गर्नुहुन्छ र भावविह्वल भएर यस्तो अवस्था किन ल्यायौ भनेर देवसँग नै प्रश्न गर्नुहुन्छ ।

रुग्ण र पीडाजनक अवस्थामै सबैलाई शोकाकुल बनाउँदै सान्नानीको देहावसान हुन्छ । सन्तानले गर्नुपर्ने सबै और्ध्वदैहिककर्म गरिदिइसकेपछि कवि सिउँदोमा सिन्दूर रहँदै मुक्त बन्ने आमाको जीवनभरको सदिच्छा पूरा भएको टिप्पणी गर्नुहुन्छ। मातृविहीन कवि आमालाई सोझी, साध्वी, व्रत र

तपले स्वर्णझैं खारिएकी, यमनियमले शुद्ध बनेकी, मातृवात्सल्यले भरिएकी, सन्ततिकी संरक्षिका र दयाकी खानी देख्नुहुन्छ र त्यस्ती आमा गुमाएकामा अतिशय पीडा पनि व्यक्त गर्नुहुन्छ। यसरी यस खण्डको पूर्वार्धमा कवि माता सान्नानीको धार्मिक र आध्यात्मिक रुचि एवं सक्रियता देखाई उनी रोगाक्रान्त भएको देखाइको छ भने उत्तरार्धमा कारुणिक अवस्था र उत्पन्न दुःखद शोक र ग्लानिको भावातिशयलाई प्रस्तुत गरिएको छ।

**(च) अन्तिम श्रद्धासुमन**

यस खण्डमा पनि पाँचौं खण्डको उत्तरार्धमा अभिव्यक्त भावको विस्तार गरिएको छ। यहाँ सान्नानीको निधन भइसकेपछि स्वजनहरूले गरेको विलाप र उनका कर्म र विशेषताको वर्णन गरिएको छ। आमा नभएपछि कविलाई सारा जगत् नै तमोमय लागेको र पिताको पनि आधा अङ्ग गुमाई होसहवास उडेको वेदनाको प्रकाशन यस खण्डमा भएको छ। कवि पूर्वस्मृतिमा डुब्दै चाडबाडमा र अन्य उत्सवहरूमा पितामातालाई भेट्न घर जाने गरेको र त्यस बेला त्यही घर पुण्यधाम हुने गरेको वर्णन गर्नुहुन्छ। यसै खण्डमा आमाको निधन भएको छोटो समयमै बुबाको पनि निधन भएको प्रसङ्ग उल्लिखित छ। आमाबाबुको निधनमा शम्भु (पशुपतिनाथ) का सिँढीमा आई विरह पोख्ने प्रयास गरेको कविकथन यहाँ पाइन्छ। आर्यघाटमा दाहसंस्कार हुँदै गरेको दृश्य देख्ता पनि कवि आफ्नै बाबुआमाको दहन भइरहेको जस्तो अनुभूति गर्नुहुन्छ। वाग्मतीका तटमा बसेर कविले आमालाई श्रद्धाको फूल चढाएको सन्दर्भ उल्लेख गर्दै सम्पूर्ण धन सम्पत्ति पाए पनि बाबुआमा कहिल्यै फर्केर नआउने भएकाले पाउन नसकिने हुन्छन् भन्ने अभिव्यक्ति दिनुभएको छ। अन्तिममा वाग्मतीको छेउमा बसेर मातापिता दम्पतीको निधनबाट व्यथित मनको भावना र अर्चनालाई उनीहरूले छोराले दिएको श्राद्ध वा तर्पण ठानेर लेऊन् भन्ने कामना गर्दै यस अश्रुप्लावित शोककाव्यको समापन गरिएको छ।

## ३. भाव र विचार

करुणरसको परिपाक, वात्सल्य रसको प्रवाह र उत्साह, भय र शम भावहरूको प्रकीर्ण प्रभाव भएको 'श्रद्धाञ्जलि' शोककाव्यमा मूलतः मातृवन्दना र अंशतः राष्ट्रवन्दना गरिएको छ। शोककाव्यकारले आफ्नी आमाको पारिवारिक पृष्ठभूमिको सङ्केत गर्दै बाल्यकाल, गृहस्थावस्था, वासान्तरण, वृद्धावस्था, रुग्णावस्था र अवसानसम्मका प्रमुख घटना उल्लेख गरी आमाको अभावमा एउटा मातृभक्त छोराले अनुभव गर्ने पीडा, वेदना, समस्यालाई यहाँ देखाउनुभएको छ। काव्यको प्रथम खण्ड 'मातृवन्दना' मै आमाको महत्त्व देखाउँदै उनको अभावमा आफुमा उत्पन्न अनेकौं भावतरङ्गको उल्लेख गरेर काव्यकारले सबै सन्ततिलाई आफ्नी आमाप्रति कृतज्ञ बन्न प्रेरित गरेको पाइन्छ। 'जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी' को आदर्शबाट अनुप्राणित काव्यकारले यस काव्यका माध्यमबाट नेपाली समाजमा यही आदर्श स्थापना गर्न खोजेको देखिन्छ। यस काव्यले खास गरी नेपालको ग्रामीण भूभागमा बालिका अवस्थादेखि नै नारीले आजीवन गर्नुपर्ने कर्तव्य, झेल्नुपर्ने समस्या र भोग्नुपर्ने नियतिलाई देखाइएको छ। काव्यकारकी आमाले आमाको काखमै बस्नुपर्ने उमेरमा आमा गुमाएको, सौतेनी आमा पाउनुपरेको, विवाहको सामाजिक, सांस्कृतिक र धार्मिक सामान्य ज्ञान पनि नहुँदै पतिगृह जानुपरेको, बालिकाले सङ्गिनीहरूसँग हाँसखेल गर्नुपर्ने उमेरमा घरको गहन दायित्व वहन गर्नुपरेको, सन्तानको प्राणवत् रक्षा र पालन गरेको र वृद्धावस्थामा पनि छोराहरूकै सान्निध्यमा बस्न चाहेको घटनावली प्रस्तुत गरेर नेपालका ग्रामीण नारीहरूको दुःखी जीवनकथाको कथन यस काव्यमा भएको छ र त्यसबाट पनि शोकभाव र करुण रस प्रवाहित गरिएको छ। भावशुद्धि र रक्तशुद्धि भएको कुलीन परिवारका नेपाली नारीहरू आफ्नो सभ्यता, संस्कार, संस्कृति र सन्तानको रक्षाका लागि जस्तोसुकै कठोर दुःख पनि सहन तयार हुन्छन् भन्ने सहानुभूतिको भाव पनि यहाँ प्रकट भएको छ।

काव्यकारकी आमा यस काव्यकी केन्द्रीय चरित्र भए तापनि सबै आदर्श आमाहरूको वर्गको प्रतिनिधित्व गरेकाले उनले प्रतिनिधि चरित्रको भूमिका पूरा गरेको पाइन्छ। यसरी काव्यकारले प्रत्येक सन्तानका लागि आमा ईश्वरमयी भएकीले सन्तानले पनि उनीप्रति श्रद्धा, सम्मान, भक्ति, समर्पण र कृतज्ञता व्यक्त गर्नुपर्ने विचार व्यक्त गर्नुभएको छ। संसारमा सबै कुरा खोजेर पाइने तर आमाबुबा कसै गरे पनि नपाइने भएकाले उनीहरूको जीवित अवस्थामै सन्ततिले सेवा र सम्मान गर्नुपर्ने सन्देश काव्यले दिएको छ। करुण रसको आस्वादन गराउन, मातृपितृभक्तिप्रति सचेत गराउन र दैवी गुणसम्पन्ना आदर्श नारीहरूको जीवनसरणि उद्‌घाटन गर्न 'श्रद्धाञ्जलि' सफल छ।

यस काव्यमा मातृभक्तिका साथसाथै राष्ट्रभक्तिको प्रेरक अभिव्यक्ति पनि पाइन्छ। यहाँ राष्ट्रभक्तिभाव शोकस्थायी भावको परिपोषक बनेर आएको छ। काव्यकारले आमाका साथै आफ्ना पिता र आफ्नै पनि जन्मस्थलको प्राकृतिक र सांस्कृतिक परिदृश्यको वर्णन गर्दै स्थानीय परिवेशको मनोहारी चित्र उतार्नु भएको छ। हिमालयीय सभ्यता र प्राकृतिक सौन्दर्यबाट प्रभावित गाउँठाउँको स्वाभाविक वर्णन गरेर कवि राष्ट्ररागको अभिव्यञ्जना गर्नुहुन्छ। सप्तकोसीको प्रमुख एक घटक दुधकोसीको स्वच्छ र चिसो पानीबाट सञ्चरित लामिडाँडाका निवासीहरू पनि मन र शरीर दुवै दृष्टिले परिशुद्ध छन् र त्यहाँका निवासी आफु पनि त्यस्तै हुन पाएकोमा काव्यकारलाई गौरवको अनुभूति भएको छ र काव्यमा पनि यही कथ्य अभिव्यक्त भएको छ। रमाइला चाडपर्व, हराभरा खेतबारी, रसिला पोषिला फलफूल, मनमिल्दा दौंतरी र निष्कपट मानवीय व्यवहारको ठाउँठाउँमा उल्लेख गर्दै राष्ट्रभक्ति देखाइएको छ भने जन्मस्थलप्रति पनि असीम ममता उजागर गरिएको छ। काव्यको अन्तिममा राष्ट्रदेव पशुपतिनाथको पावन धाममा बसेर मातापिताप्रति शब्द श्रद्धाञ्जलि व्यक्त गर्नुभएका काव्यकारले धार्मिक, सांस्कृतिक र आध्यात्मिक जीवनपथ अवलम्बन गर्नुभएको पाइन्छ। यस सन्दर्भबाट

हेर्दा पनि 'श्रद्धाञ्जलि' शोककाव्यले मातृमहिमा गायन गर्दै उनको अभावमा शोकाकुल भएको सच्चा सन्तानको संवेदना त व्यक्त गरेकै छ, साथै जन्मभूमिको ममता पनि दर्साएको छ र जननी र जन्मभूमिको सर्वोच्चता स्थापित गरेको छ ।

## ४. कलाशिल्प

आमाको निधनबाट शोकाकुल बनेका काव्यकारले यस काव्यलाई कलात्मक कालिगढीतर्फ ढाल्ने प्रयास नगरी सहज भावको प्रकाशनमा केन्द्रित गर्नुभएको छ । त्यसैले यो कलाचातुरीको नभई भावप्रवाहको काव्य बनेको छ । तर पनि सहज भावलाई शास्त्रीय छन्दमा आबद्ध गरी यथासम्भव भाषिक मानकलाई आत्मसात् गर्दै यसलाई परिष्कारपूर्ण बनाउने प्रयास चाहिँ नभएको देखिँदैन । वियोगिनी, इन्द्रवज्रा, त्रोटक, उपजाति, स्रग्धरा र मन्दाक्रान्ता छन्दहरूको सफल प्रयोग यहाँ भएको छ । छन्द र भावलाई सहयात्रा गराउन सक्षम काव्यकारले छन्दशुद्धिका नाममा शब्द, पद र पदावलीलाई विकृत नपार्नु नै यसको पहिलो कलाशिल्पगत विशेषता हो । जसरी संस्कृतका सिद्धहस्त कविले आफ्नो भाव र लयलाई जसरी पनि मिठासपूर्ण बनाएर भनेका छन् त्यसै गरी यस काव्यका काव्यकारले पनि आफुले चयन गरेर छन्दमा उद्भूत मनोभावलाई माधुर्यपूर्ण बनाएरै व्यक्त गर्न सकेको देखिन्छ । यस आधारमा हेर्दा काव्यकार स्वच्छन्दतावादी भावधारालाई परिष्कारवादी शैलीशिल्पका माध्यमबाट भावकको हृदयलाई स्पर्श गर्न सफल बनेको पाइन्छ ।

औपचारिक अध्ययनका दृष्टिले वेदान्ती र प्रशासनविद् भए पनि काव्यकारले यहाँ विभिन्न अलङ्कार केवल अलङ्कार पार्नका लागि नभई कविको भाव र विचारकै सबलीकरणका लागि आएका छन् । उदाहरणका लागि उपमाको एउटा सुन्दर बान्की यस्तो छ –

सानी सारै सरल मनकी धर्मकी मूर्ति जस्ती ।<br>
सङ्ली सोभ्फी सलल बहने धर्मकी मूल जस्ती ।।

सानी साध्वी पति अभिमुखी सूर्यकी फूल जस्ती ।
वर्षा गर्ने अमृत सबमा रातकी जून जस्ती ॥

अर्थान्तरन्यास र प्रश्नालङ्कारको सहअस्तित्व निम्नलिखित श्लोकमा अनुभव गर्न सकिन्छ –

यौटै इच्छा तनयसँगको साथ बस्ने थियो जो ।
सानीलाई समय नमिली सो अपूरै हुने भो ॥
जाने इच्छा पनि अनि गरिन् उद्‌गमस्थान फर्की ।
बग्दो पानी चपल झरना जान के सक्छ ? फर्की ॥

उत्प्रेक्षाका दुइटा नमुना यसरी देखाउन सकिन्छ –

सान्नानी हुन् सरल मनकी पूर्ण आदर्श आमा ।
विस्तारै नै जपतप गरी जो पुगिन् पूर्णतामा ॥
देखिन्थिन् ती वरद जननी एक ती तीर्थ हुन् कि !
वर्षा गर्थिन् अबल शिशुमा मातृवात्सल्य बोकी ॥

सानीलाई लिन भनि कुनै यान वैकुण्ठबाट ।
आयो साँच्चै अनि त पृथिवी थर्किइन् यानबाट ॥
कामिन् धर्ती थरथर गरी भूमिचालो गएर ।
थर्क्यो चर्क्यो जमिन सहसा क्षुब्ध सारै भएर ॥

ग्रामीण जनजीवनको सरल र स्वाभाविक वर्णनमा स्वाभावोक्ति अलङ्कारको सहज आयोजना भएको पाइन्छ। जस्तै –

साधासीधा चलन अति नै गाउँको त्यो सुरम्य ।
कान्लाबारी मधुर तुलसी फूलबारी सुरम्य ॥
ढिक्की जाँतो वन र बिरुवा त्यो पँधेरो सुरम्य ।
सानीलाई अतिशय सबै लाग्दथे ती सुरम्य ॥

नारीको नियतिलाई नजिकबाट देख्नुभएका र उनीहरूको मनोभावलाई बुझ्न सक्ने विवेक पनि भएका काव्यकार स्वभावोक्तिमा संवेदनासमेत मिलाएर यसरी प्रस्तुति गर्नुहुन्छ –

जे होस् छोरी फगत अरूका हुन् धरौटी समान ।
गर्नै पर्ने व्यथित मनले दान गाई समान ॥
जान्छन् छोरी विरह बटुली माइती देश छोडी ।
नासो जस्तै विगत दिनका सम्झना मात्र छोडी ॥

वात्सल्यभावले भरिपूर्ण आमाले छोराको खबर वा चिठी आए नआएको बारे पतिसँग राखेको जिज्ञासामा पनि स्वाभावोक्तिको सौन्दर्य पाइन्छ –

सानी सोध्थिन् पतिसँग सधैं पत्र आए कि ? भन्दै ।
बाटो हेर्थिन् दिनदिन कठै पुत्र आए कि ! भन्दै ॥
कैलेकैले हिकहिक हुँदा बाडुली नै चलेर ।
आँसू झार्थिन् तनय दुइले सम्झिएछन् भनेर ॥

कतैकतै शोकमा पनि सूक्ति आएर काव्यमा अझ मिठास र माधुर्यको सिर्जना भएको छ । यसबाट काव्यकारको जीवनदर्शन पनि प्रतिबिम्बित भएको पाइन्छ । जस्तै –

जान्छन् सोझै जल र ममता बग्दछन् ती अगाडि ।
साँच्चै नै हो प्रकृति तिनको फर्कंदैनन् पछाडि ॥

## ५. निष्कर्ष

प्रबन्ध काव्य अन्तर्गतको खण्डकाव्यविधाको शोककाव्यको उपविधामा पर्ने 'श्रद्धाञ्जलि' काव्यकार भट्टराईले आफ्नी ममतामयी माताको निधनबाट शोकाकुल र व्याकुल भई सहज रूपमा व्यक्त गरेका भावतरङ्गमा आबद्ध रचना हो । यसमा कविले शोक नै व्यक्त गर्नुभएको

हो तापनि अभिव्यक्तिको ढङ्गका कारण यो रचना शोककाव्य बन्न पुगेको छ। सबै आमाको सन्तानप्रति असीम ममता हुन्छ तापनि सबै सन्तानको आमाप्रति सेवा, सम्मान र कृतज्ञताको भाव नहुन पनि सक्छ र समाजमा यस्तो नभएका प्रशस्त उदाहरण पनि पाइन्छन्। तर काव्यकारका हकमा आमा र सन्तानको दोहोरा अखण्ड ममता र भक्तिभाव कायम रहेको पाइन्छ जसलाई प्रस्तुत काव्यका माध्यमबाट प्रमाणित नै गरिएको छ। यो काव्य काव्यकारकी आमाको मात्र जीवनकथा र नियति होइन लाखौं ग्रामीण आमाहरूको नमुना चित्र पनि हो । आमाको सेवा र सम्मान उनी जीवित छँदै हुनुपर्ने र सन्तान आजन्म मातृभक्त हुनुपर्ने सन्देश दिएर वेदान्ती काव्यकारले औपनिषदीय शिक्षोपदेश 'मातृदेवो भव' को भाव यहाँ पोख्नुभएको छ। जन्मदिने मानवमाता हुन् भने उभिन र पुरुषार्थ गर्न आधार दिने जन्मभूमि हुन्। उनीप्रति पनि श्रद्धा र कृतज्ञता व्यक्त गर्नुपर्ने भावसम्बलित विचार पनि यस काव्यले दिएको छ । आफ्नी आमाको माध्यमबाट समस्त मातृशक्तिप्रति श्रद्धा व्यक्त गर्नुका साथै नेपाली नारीवर्गको जीवनचक्रलाई काव्यकलामा ढालेर मातृभक्ति र मातृभूमिभक्तिको भावैक्य प्रस्तुत गरी सन्तति र राष्ट्रवासीलाई कर्तव्य र कृतज्ञताबारे सचेष्ट पार्न यो काव्य समर्थ देखिन्छ।



# अमरसिंहको चिट्ठी २०५३ का भूमिकाबाट

[ अमर राष्ट्रिय विभूति अमरसिंहको यो चिट्ठी उनको मात्रै चिट्ठी होइन, प्रत्येक राष्ट्रभक्त नेपालीको चिट्ठी हो। प्रत्येक संवेदनशील नेपालीका अन्तर्मनको आक्रोश र प्रतिध्वनि हो । सुगौली सन्धिले अङ्गभङ्ग र अपाङ्ग पारिएकी नेपाल आमाको असह्य वेदना र चीत्कार हो। नेपालका लागि आफ्नो तन, मन र धन समर्पण गरेका वीर शहीदहरूका समष्टि क्रन्दन हो। आफ्नु अमूल्य जीवन नेपाल आमाका लागि समराङ्गणका बलिवेदीमा वीरताका साथ बलिदान हुने बलिदानीहरूको समवेत आवाज हो। त्यति मात्रै होइन आफ्ना वीर युवा छोराहरू नेपालआमाका लागि समर्पण गरेर असहाय र अपाङ्ग भएर बाँचिरहेका आमाहरूको वेदनाको गुञ्जन हो यो काव्य। ]

# अमरसिंहको चिट्ठी

## १. संरचना

'अमरसिंहको चिट्ठी' वि.सं. १८७२ मा अङ्ग्रेज सत्तासँग भएको नेपालको असमान र अपमानजनक सन्धिबाट विरक्त प्रबल राष्ट्रवादी वीर योद्धा राष्ट्रिय विभूति काजी अमरसिंह थापाले तत्कालीन अखण्ड नेपालको पश्चिमी सीमा रणभूमि किल्ला काँगडाको मोर्चाबाट नेपालका तत्कालीन राजा श्री ५ गीर्वाणलाई लेखेको ऐतिहासिक आफ्नै पत्रका आधारमा केही समयपछि पवित्र गोसाइँकुण्डबाट राजा गीर्वाण युद्धविक्रम शाहलाई सम्बोधन गर्दै निराश तथा मर्माहत भएर भनेको काल्पनिक अभिव्यक्तिलाई विषयवस्तु बनाई लेखिएको छन्दोबद्ध खण्डकाव्य हो। यसलाई ऐतिहासिक काव्य भनिएको भए पनि आख्यान, चरित्र, भाव र विचारको प्रखरता तथा आयामका दृष्टिले यो खण्डकाव्य नै बन्न पुगेको छ। कुनै सर्ग, खण्ड वा अध्याय आदिमा विभाजन नगरी अनुष्टुप्, वसन्ततिलका, स्रग्धरा र शिखरिणी छन्दमा आबद्ध यस खण्डकाव्यमा

अन्वेषक ज्ञानमणि नेपालको खण्डकाव्यको विषयवस्तुसँग सम्बद्ध लामो भूमिका, दैवज्ञराज न्यौपानेले सूर्यविक्रम ज्ञवालीको ‘अमरसिंह थापाको जीवनी’ र बालकृष्ण समको ‘अमरसिंह’ नाटकसँग गरेको तुलनात्मक विश्लेषण र काव्यकार स्वयंले अमरसिंह थापाका सम्बन्धमा उल्लेख गरेको सङ्क्षिप्त र सटीक परिचयप्रधान भूमिकाले काव्यलाई अनुसन्धानात्मक बनाएको पाइन्छ। त्यसका साथै काव्यको अन्तिमतिर गोरखाका सेनापति बडाकाजी अमरसिंह थापाले लेखेको पत्रको सारांश तथा सुगौली सन्धि र त्यसका नेपाली, फारसी र अङ्ग्रेजी भाषाका मूल प्रतिका प्रमाणित प्रतिलिपिहरू समावेश हुनुबाट प्रस्तुत खण्डकाव्य साहित्यका पारखीहरूका लागि आस्वादन र इतिहासकारहरूका लागि अनुसन्धानको सामग्री पनि बनेको देखिन्छ। १२३ श्लोकमा रचित यस खण्डकाव्यमा आख्यानविधानलाई समग्रमा एउटै भागमा तर क्रमबद्ध रूपमा प्रस्तुत गरिएको छ भने गोसाइँकुण्डलाई अमरसिंह थापाको प्रवक्ता जस्तो बनाएर दैवी शक्ति र प्राकृतिक वस्तुलाई मानवीकृत बनाई चरित्रविधानमा नयाँ प्रयोग पनि गरिएको छ। नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानद्वारा प्रकाशित यो खण्डकाव्य साहित्य, इतिहास, वीरता, राष्ट्रभक्ति र राजनीतिक यथार्थ र आदर्शको समेत एकीकृत प्राभिलेख बनेको पाइन्छ।

## २. आख्यानविधान

वि.सं. १८७१–७२ मा अङ्ग्रेजहरू नेपाल कब्जा गर्न र नेपालीहरू नेपालको रक्षा र विस्तार गर्न युद्धमा होमिएका छन्। नेपाली वीरहरूलाई युद्धका विभिन्न मोर्चाको जिम्मेवारी दिइएको छ। यसै क्रममा काजी अमरसिंह थापाले पश्चिम नेपालको युद्धकिल्लाको नेतृत्व गरेका छन् र अङ्ग्रेज सैनिकहरूसँग भीषण युद्ध गरिरहेका छन्। उनको नेतृत्वमा नेपाली वीरहरूले पूर्वमा टिष्टादेखि पश्चिममा सतलज र दक्षिणमा गङ्गासम्म नेपालको सीमा विस्तार गरेका छन्। अमरसिंह सहितका वीरहरू युद्धमा होमिरहेकै समयमा उनीहरूलाई थाहै नदिई दरबारिया चाटुकारहरूको

उक्साहटमा सुगौली सन्धि गरिन्छ र नेपाल मेची–महाकालीमा खुम्चिन पुग्छ। यस राष्ट्रघातबाट आहत अमरसिंह क्रुद्ध र विरक्त हुन्छन् र दरबार नआई गोसाइँकुण्ड पुग्छन् ।

यस खण्डकाव्यको प्रारम्भ मङ्गलाचरणस्वरूप हिमालयको वर्णनबाट भएको छ । काव्यका नायक अमरसिंहमा अनायास भएको सन्धिबाट उत्पन्न मानसिक सन्तापको शमन हिमालयको काखमा अवस्थित गोसाइँकुण्डमा भएकाले काव्यको प्रारम्भमा भएको हिमालयवर्णनलाई वस्तुनिर्देशात्मक मङ्गलाचरणका रूपमा लिन सकिन्छ । यहाँ काव्यकारले हिमालयको भौतिक र रमणीय स्वरूपको वर्णन गर्नुभएको छ। काव्यकारका विचारमा हिमालय राजर्षि, तपस्वी र काव्यकर्मीहरूको ध्येय स्थल पनि हो। यस्तो स्थल जहाँबाट पाण्डवहरू स्वर्गप्रस्थान गरे र जुन स्थलमा मुक्तिका लागि सबै आकृष्ट हुन्छन् ।

यही हिमालयको काखमा पवित्र गोसाइँकुण्ड रहेको छ । काठमाडौंबाट उत्तरदिशामा रहेको यस कुण्डमा प्राचीन कालदेखि नै ऋषिमुनिहरू बसोबास गर्दथे। यसै कुण्डबाट विभिन्न नदीहरू प्रवाहित भएका छन् । बिहानीपखको कुहिरो हटेपछि यही कुण्ड मानवीरूप ग्रहण गरी गहभरि आँसु पारी गम्भीर वाणीमा स्नानका लागि आएका भक्तहरूलाई अमरसिंहको कथा भन्न थाल्छन् ।

कुण्डको भनाइ अनुसार नेपाली र अङ्ग्रेजका बीचमा दुर्भाग्यवश युद्ध भयो र नेपालले सुझबुझ विना सुगौली सन्धि गरेर ठुलो भुल गऱ्यो । प्राणको बाजी लगाएर लडिरहेका अमरसिंहले यो कुरा सुनेर सन्धिको विरोध गरे तापनि जोगीजस्तो बनेर यसै कुण्डका छेउमा आई विरक्त भएर बसे। रातमा पाटीमा वास बसेपछि बिहानै यसै कुण्डमा आई उनले स्नान गरे र हिमालको चुचुरामाथि चढेर भगवान् शिवको प्रार्थना गर्दै दुवै हात उठाएर भावुक भई ठुलो स्वरले थरथर कामेर बोल्न थाले। हिमालयमाथिबाट घाइते सिंहजस्तै बनेका अमरसिंहले राजा गीर्वाणयुद्ध विक्रम शाहलाई सम्बोधन गर्दै सम्पूर्ण यथार्थ भनेको कुरा कुण्डले गरेका

छन् । त्यसपछि कुण्डले अमरसिंहलाई नै उपस्थित गराएर उनीबाट नै राजालाई चिट्ठी लेखेको प्रसङ्ग उल्लेख गरेका छन् ।

अमरसिंह चिट्ठीमा लेखिएको भावलाई पुनः देहोऱ्याउँदै कवितामा टाढैबाट राजालाई बिन्ती गर्दै हामी बलशाली भएर पनि र छातीमा रगत रहेर पनि युद्धमा अङ्ग्रेजसँग कसरी हाऱ्यौं भन्ने प्रश्न गर्छन् । राजा युद्धवीर र चतुर भएर पनि युद्ध हार्नुको कारण माग्दै अमरसिंह आफ्नो तप र व्रत सकिएकाले पर्वतका टाकुरामा स्वाँस्वाँ गरी बगेको पानी जस्तै विचलित भई आँसु बगाएर बसिरहेको दुःखद स्थिति बताउँछन् । पिताको शूरता र राष्ट्रभक्तिबाट शूर र राष्ट्रभक्त बनेको आत्मकथन गर्दै अमरसिंह पृथ्वीनारायण शाहको शौर्य र सङ्कल्पले विशाल नेपालको निर्माणका लागि वीरहरूलाई आह्वान गरेको थियो । पूर्वमा टिष्टा र पश्चिममा काँगडासम्म नेपालको सीमा पुऱ्याएको ऐतिहासिक प्रमाण प्रस्तुत गर्दै अमरसिंह युद्धमा सबै वर्गका नेपाली रातोदिन भोकतिर्खा नभनी लडेका थिए जुन कुरा तिमी सानै भएकाले राम्ररी बुझ्न सक्तैनौ भन्दै राजालाई सम्झाउँछन् ।

चिट्ठीमा अमरसिंह अगाडि भन्छन् – सुगौली सन्धिलाई हेर्दा राजामा साहस र धैर्य सकिएको बुझें । हामीले सन्धि गर्नु हुँदैनथ्यो, सन्धि गर्ने त देशका शत्रु हुन् । युद्ध लडेर हामीले अझै कीर्ति विस्तार गर्नुपर्छ । म बुढो भएकाले मेरो बिन्ती नसुनिए पनि तपाईंकै सान्निध्यमा बस्न पाऊँ । तपाईंलाई सम्बोधन गरी चिठी लेखेर गोप्य नक्सा बनाएर पठाएको थिएँ । त्यसमा हाम्रा सहयोगी को को छन् ? अरू कहाँकहाँ छन् ? गोरासँग रिसाउने र मित्रता गाँस्ने को को छन् ? फिरङ्गीको फौजसङ्ख्या कति छ ? तिनीहरू विरुद्ध के गर्न सकिन्छ ? र कहाँ चढाइ गर्दा हाम्रो विजय हुन्छ ? इत्यादि कुरा खोलेर मैले चिठी लेखेको थिएँ । तर तिमीले सन्धि गऱ्यौ र हामीले जितेको मुलुकलाई अमाको अङ्ग काटे जस्तो गरेर काटी शत्रुलाई दियौ ।

युद्धमा हामीले धेरै मानिस गुमाएकाले अब तिनका सन्ततिलाई

कसले हेर्छ भन्ने प्रश्न गर्छन् र यस विषयमा आफु नबोले कसले बोल्ने त भन्ने तर्क पनि अमरसिंह गर्दछन् । सम्पूर्ण नेपालीहरूको शिर झुक्ने गरी गरिएको यस सन्धिलाई तिमीले सन्धि माने पनि यो राष्ट्रघात हो । यसबाट आफैं हिँड्न सक्नेले खुट्टा भाँचेर अरूको हात पक्रेर हिँड्नुपर्ने अवस्था आएजस्तो भयो भन्ने अमरसिंहको कथन छ ।

आफुले जीवनभर कुनै स्वार्थ नराखी देशसेवा गरेको तर अरौटे भरौटे स्वार्थी तत्त्वहरूको लहैलहैमा लागेर सन्धि गरिएको दुःखेसो प्रकट गर्दै अमरसिंह पहिले लड्नुपर्छ भनेर कस्सिनेहरू नै अहिले सन्धि गर्न तत्पर भएको विडम्बना देखाउँछन् । बहादुर शाहले नेपाल एकीकरणमा ठुलो योगदान पुऱ्याएर बाबु पृथ्वीनारायणको अभियानलाई सफल तुल्याएका थिए तर उनैलाई विविध दोष लगाई बन्दी बनाएर सिद्ध्याइयो । राष्ट्रवादीहरूलाई छानीछानी मारियो र लास टुक्राटुक्रा पारी कुकुर, स्याल र गिद्धको आहारा बनाइयो । पृथ्वीनारायण शाहको दिव्योपदेश बिर्सेर राजकाज नचल्ने र हाम्रो वीरत्वको गौरव पनि जीवित नहुने विचार अमर सिंहले व्यक्त गरेका छन् । असल, सत्यवादी र राष्ट्रवादीहरूलाई सतीको श्राप परेकाले यस्तो दुःखद स्थिति भोग्नुपरिरहेको विश्वास उनी व्यक्त गर्दछन् । कस्तुरीले आफ्नै वास्नालाई खोज्दै हिँडेझैं हामी पनि आफ्नै वीरतालाई बिर्सेर शक्तिको खोजीमा लागिरहेका छौं भन्ने अहरसिंहको कथन छ ।

अमरसिंह भन्दछन् – म वीर ओजस्वी गोरखाली राजा र उनका छोराहरूको पनि सिपाही हुँ । हामी अझै लड्नुपर्छ, मेरो लड्ने इच्छा अझै पूरा भएको छैन । हामी शत्रुद्वारा हेपिएर कदापि बस्नु हुँदैन । हाम्रो एकमात्र उद्देश्य देशलाई अघि बढाउने र ठुलो बनाउने थियो । तर तिमीले आज दुर्भाग्यवश हाम्रो धरती शत्रुलाई बुझायौ ।

अमरसिंह राजालाई आग्रह र सल्लाह दिन्छन् – हाम्रो धर्तीका प्रत्येक पाइलामा सहिदहरूको रगत देख्ने छौ । पाखापहेराका वीर हरूलाई कहिल्यै नबिर्स । युद्ध गर्ने आदेश पाए हामी अझै युद्ध गर्न

तयार छौं । कायर बनेर हामी बस्न चाहँदैनौं । आफ्नो खाँडो अझै पनि शत्रुलाई लघार्न समर्थ भएको जोस देखाउँदै अहिले हामी लड्ने हो भने सन्ततिले युगौँ युगसम्म हाम्रो वीरताका कथा भन्नेछन् र प्रशंसा गर्नेछन् भन्दछन् । अमरसिंह अहिले जनता दीन, दुःखी र अनाथ छन् र सर्वत्र निराशा छाएको वस्तुस्थिति देखाउँछन् । उनी उत्साहित हुँदै भन्दछन् – तिमीले गरेको सन्धि फालेर रातो झन्डा बोकी लड्दै लड्दै नेपालको सीमा समुद्रसम्म पुऱ्याएर साँध लगाउने मेरो इच्छा छ । उनी सानैदेखि लड्दै आएकाले कालसँग पनि लडेको सन्दर्भ उल्लेख गर्दछन् र मर्ने बेलामा नेपालको विशाल रूप हेर्न नपाएकोमा दुःख प्रकट गर्दछन् । यति भनी उनी बिदा हुन्छन् । त्यसपछि कुण्ड भन्दछन्– अमरसिंह मनको ताप पोखेर हिमालबाट बिस्तारै कुण्डमा झर्दछन् र त्यहाँ स्नान गरी तुरुन्त योगीको वेश धारण गरी कुण्ड नजिकको ढुङ्गामा बसेर पूर्ण पद्मासन कसी ध्यानमग्न हुन्छन् । उनी जताबाट आएका थिए अन्तमा त्यतै जान्छन् ।

## ३. भाव र विचार

रसाधानका दृष्टिले हेर्दा 'अमरसिंहको चिठी' वीर अङ्गीरस र करुण अङ्गरस भएको काव्य हो । नेपालका अमर विभूति अमरसिंह थापाको वीरता र राष्ट्रभक्तिको सशक्त अभिव्यक्ति बनेको यस काव्यमा उनको योगदानको अपमान र अवमूल्यन भएको वर्णनमा करुणरसको पनि प्रवाह भएको छ। १२ वर्षको उमेरमा सेनामा भर्ना भई १७ वर्षको किशोरावस्थामै सरदार (सेना नायक) बनेका र झन्डै ५६ वर्षसम्म नेपाल र नेपालीका लागि लडेका वीर, स्वाभिमानी, राजभक्त र राष्ट्रभक्त अमरसिंह थापाले सुगौली सन्धिको राष्ट्रघाती कदमबाट विरक्त भई गोसाइँकुण्ड पुगी राजा गीर्वाण युद्ध विक्रम शाहलाई लेखेको हृदयस्पर्शी पत्रको कथ्यलाई मूल विषयवस्तु बनाई लेखिएको यस काव्यमा मूलतः राष्ट्रभक्ति भाव नै उच्छलित भएको छ । जसले राष्ट्र र राष्ट्रवासीका लागि निःस्वार्थ भई

आजीवन लड्यो उसैलाई थाहा नदिई षड्यन्त्रपूर्वक गरिएको अदूरदर्शी सन्धिबाट मर्माहत बनेका नायकको मनोभावको प्रकाशन यस काव्यमा भएको छ । यो तत्कालीन राज्यसत्ताले राष्ट्रका विरुद्ध गरेको जघन्य अपराधबाट खिन्न भएका वीर योद्धाको मनोविज्ञानको प्रस्तुति मात्र नभई त्यसबाट काव्यकारमा उत्पन्न आवेग र वेदनाको काव्यात्मक प्रवाह पनि भएकाले वीरता र विषादको सहभाव अनुभव गराउने रचना पनि बनेको छ । समग्रमा राष्ट्रभक्ति र राष्ट्रगौरवको जागरणभाव यस काव्यमा केन्द्रीय तत्त्व बनेको पाइन्छ ।

यस काव्यले राष्ट्रसेवक र राष्ट्रसञ्चालकहरू कस्ता हुनुपर्ने र कस्ता हुनु नहुने हो, त्यसबारे वैचारिक सन्देश दिएको छ । अमरसिंह नेपालकै इतिहासका निःस्वार्थ राष्ट्रसेवक थिए जसले पृथ्वीनारायण शाह र उनका माहिला छोरा बहादुर शाहले आर्जेको विशाल नेपाललाई विशालतर र दृढतर बनाए । ६८ वर्षको उमेरमा पनि पश्चिम नेपालको युद्धमोर्चा सम्हालेर समुद्रसम्म नेपालको सीमा पुऱ्याउने अभियानमा लागेका उनी सुगौली सन्धि भएको समाचारले तत्कालीन राजा र भाइभारदारहरूसँग असन्तुष्ट हुन्छन् र विरक्त भई गोसाइँकुण्ड पुग्छन् र त्यही समाधिस्थ हुन्छन् । यस्तो महान् राष्ट्रभक्त नायकलाई स्वार्थी खलनायकहरूले अपमान गर्दै सुगौली सन्धिका नाममा राष्ट्रघात गर्नु सर्वथा अनुचित थियो र हो भन्ने विचार यस काव्यले दिएको छ । अतः काव्यकार राष्ट्रसेवक अमरसिंह जस्ता हुनुपर्ने विचार प्रकट गर्नुहुन्छ भन्ने बुझिन्छ । उता राज्यको सर्वोच्च पदमा बस्नेहरूले नै आफ्ना वीर सैनिकहरूले जितेर ल्याएको मुलुकलाई आमाको अङ्ग काटेर दान दिएझैं शत्रुलाई नै फिर्ता दिएको देखाएर शासकहरू डरछेरुवा, निर्विवेकी, अदूरदर्शी र बुद्धिविहीन हुँदा राष्ट्र नै गुम्छ भन्ने राजनीतिक विचार पनि यस काव्यले प्रकाशन गरेको छ । सारांश के हो भने राष्ट्रसेवक अमरसिंह जस्ता भए राष्ट्रको शक्ति र सत्ता रहन्छ तर सुगौली सन्धि गर्नेहरू जस्ता शासक भए राष्ट्रको भौतिक मात्र नभई भावनात्मक अस्तित्व नै समाप्त हुन्छ ।

## ४. कलाशिल्प

'अमरसिंहको चिठी' नेपालको राजनीतिक इतिहासको एउटा दुःखद प्रसङ्ग र एक जना विशिष्ट युद्धवीरको चरित्रलाई केन्द्रबिन्दुमा राखी लेखिएको खण्डकाव्य हो । संस्कृतका शास्त्रीय वर्गमा पर्ने अनुष्टुप्, वसन्ततिलका, स्रग्धरा र शिखरिणी छन्दमा भाषिक परिष्कारका साथ तयार पारिएको यो काव्य राष्ट्रवादी भावको सञ्चार गराउन सफल बनेको देखिन्छ । शास्त्रीय छन्दका नियमलाई अक्षरशः पालना गरेर पनि भाषिक लालित्य र भावमाधुर्यको सामञ्जस्य गराउने कलाकारिता काव्यकारले देखाउनु भएको छ। यस अर्थमा यो काव्य परिष्कारवाद र स्वच्छन्दतावादको सहयात्राबाट राष्ट्रवादको स्वर मुखरित पार्ने सामग्री बन्न पुगेको पाइन्छ। छोटा छन्दको प्रयोगकौशलमा खरो उत्रिनु भएका काव्यका लामा छन्दको प्रयोगमा पनि सिद्धहस्त हुनुहुन्छ भन्ने तथ्यलाई स्रग्धरा छन्दको निम्नलिखित श्लोकले प्रमाणित गरेको देखिन्छ –

सम्झौता राष्ट्रघाती सहज हुन गयो हुन्छ के आज बोली ।
बोल्दैनन् प्रस्ट बोली तर कपट गरी घात गर्छन् नबोली ।।
आफ्नू नै हात काटी नदिनु जब दियौ हुन्छ के फेरि बोली ।
आयो वैराग्य सारै हिमशिखर चढेँ बस्छु केही नबोली ।। (पृ.१२)

शास्त्रीय छन्दको सहज प्रयोग भएजस्तै यस काव्यमा ठाउँठाउँमा विभिन्न अलङ्कारहरूको पनि स्वाभाविक आयोजना भएको पाइन्छ । यी अलङ्कारहरू अलङ्कारकै लागि आएका नभई काव्यकारको भाव र विचारलाई तिख्खर र प्रभावकारी बनाउन उपकरणका रूपमा आएका छन् । निम्न लिखित श्लोकमा उत्प्रेक्षा अलङ्कारको सुन्दर प्रयोग भएको पाइन्छ –

औंलो ठड्याइकन सिंह निकालि ठाँट,
बोले उठेर जब उच्च हिमालबाट ।
गर्जे प्रतिध्वनि गरी सब शैल फाँट,
लाग्थ्यो झर्‍यो सबल बज्र कि ! व्योमबाट ।। (पृ.७)

कतै कतै उपमाको चित्ताकर्षक प्रयोग गरिएको छ। जस्तै –

घाइते सिंह गर्जन्छ जसरी शैलमा चढी।
गर्जिए वीर ती साँच्चै घाइते सिंहकै सरि ॥ (पृ.७)

अप्रस्तुत वा अप्रासङ्गिक विषयको वर्णन गरेर प्रस्तुत वा प्रासङ्गिक विषयवस्तु बुझाउने अप्रस्तुतप्रशंसा अलङ्कारको आयोजनामा पनि काव्यकार सफलद देखिनु हुन्छ। जस्तै –

आमा बाबा हितैषी परिजन जति छन् देशलाई चढाई।
साना निर्बोधलाई मरवट अब त्यो दिन्छ को हेर्छ आई ॥
भालेपोथी दुबै नै सहज पर भए नीड छोडी उडेर।
जान्छन् बच्चा अकालै पकपक बबुरा नीडमा नै मरेर ॥ (पृ.१४)

कुनै श्लोकमा एकै ठाउँ, प्रश्न, उत्प्रेक्षा र सन्देश अलङ्कारको समन्वित भाव सौन्दर्य पनि अनुभव गर्न सकिन्छ। जस्तै –

हामी हिँड्ने कसोरी विकल सरि बनी हात पक्री अरूको।
हामी पर्ने उनैका शरण अझ गई घात गर्नेहरूको ॥
चल्दै होला अझै ता ढुकुढुकु मुटु त्यो या भयो बन्द आज।
हिँड्दैछौं या हरायौं कि सब चुप भयौं ? या लुक्यौं मानि लाज ॥ (पृ.१६)

यस खण्डकाव्यमा भाषिक कलाशिल्पका साथै भावप्रकाशनको कलाशिल्प पनि प्रशंसनीय छ। स्वच्छन्दतावादी काव्यकर्मीहरू प्रकृतिको मानवीकरण र देवत्वकरण गर्दछन् भने देवताको पनि प्रकृतीकरण र मानवीकरण गर्ने गर्दछन् । यस काव्यमा प्रकृतिको मानवीकरण गर्ने कलाचातुर्य काव्यकारले देखाउनु भएको छ। जस्तै –

हिमाल दिनमा हाँस्छ रातमा ध्यान लाउँछ
तरेली जूनको पर्दा आफैंसँग हराउँछ। (पृ.२)

काव्यनायक अमरसिंह थापाले राजा गीर्वाणलाई लेखेको चिठ्ठीमा आफु र गोरखाली वीरहरू नेपालका लागि आजीवन लडिरहन चाहन्छन् भन्दै उत्साह भावको प्रवर्धन गरेको यथार्थलाई प्रत्येक श्लोकले प्रमाणित गरिरहेका छन् । उदाहरणका लागि दुई ओटा श्लोक उद्धत गर्न सकिन्छ –

बाँच्थेँ होला म साँच्चै नृपवर ! कहिले शत्रुले हेपिएर ।
यद्वा मर्थें म होला सितिमिति कहिले मृत्युले तर्सिएर ।।
मेरो खाँडो छ लाग्ने सुदृढ छ कर यो छैन कुँजो भएको ।
लड्ने धोको छ बाँकी अझ पनि मनमा छैन पूरा भएको ।। (पृ.२१)

राजन् ! मागौं म यौटा अनुमति कि कहीं हुन्छ होला रिसानी ।
बस्ने होला लुरे भै कति दिन यसरी हारले लाज मानी ।।
हाम्रा योद्धा लडाका अझ पनि दृढ छन् लड्नलाई तयार ।
लड्छौं हामी डटेरै सहज अघि बढी सन्धि तोड्छौं हजार ।। (पृ.२३)

राजनीतिक सफलता र दूरदर्शिताका लागि विभिन्न विषयमा जान्नु, बुझ्नु र सोधखोज गर्नुपर्दछ । त्यसपछि आफ्नो बुद्धि र विवेकको प्रयोग गरेर निर्णय गर्नु आवश्यक हुन्छ । एउटा असल र सफल शासकका लागि यो पूर्वसर्त नै हो । यसो हुन नसकेकाले सुगौली सन्धि भएको ठहर गर्ने अमरसिंह आफ्नो चिठ्ठीका माध्यमले राजनीतिक सफलताको सूत्र सङ्केत गर्दछन् । जसलाई काव्यकारले काव्यवाणीमा यसरी प्रस्तुत गर्नुभएको छ –

बाच्ने मर्ने सबै हो नियतिगत कुरा मर्नु नै पर्छ भोलि ।
मैले जे जे गरेथेँ असल नियतले बुझ्छ सन्तान भोलि ।।
कस्तो दुर्भाग्य हो यो नृपवर ! कसले बुद्धि पुग्नै दिएन ।
जान्ने बुझ्ने र सोध्ने गहनतम कुरा किन्तु केही भएन ।। (पृ.१७)

अमरसिंहको माध्यमबाट हामी सम्पूर्ण राष्ट्रभक्त नेपालीहरूको देशभक्ति भावलाई एउटै ओजस्वी श्लोकबाट अभिव्यक्त गर्न काव्यकार

सफल बन्नु भएको छ । निम्नलिखित श्लोकमा वीररसको परिपाक राष्ट्रिय भावनाको उत्कर्ष पाइन्छ –

मेरो इच्छा छ यौटै अझ पनि नृपते ! सन्धि त्यो दूर फाली ।
रातो झन्डा उठाई फरफर म गरौं सिन्धुको साँध हाली ॥
हाम्रो सर्वोच्च सेतो हिमशिखर सरी यो बनोस् उच्च राष्ट्र ।
चम्कोस् चन्द्रार्क जस्तै विशद अति बनी शुभ्र नेपाल राष्ट्र ॥ (पृ.२४)

यस काव्यका प्रत्येक पदमा काव्यकारले अमरसिंहको मनोविज्ञानको सूक्ष्म अवलोकन र अध्ययन गर्नु भएको छ । आफुले रगत पसिना खर्चेर र प्राणसमेत दाउमा राखेर आर्जेको विशाल भूभागलाई स्वेच्छचारितापूर्वक शासकहरूले शत्रुलाई नै फिर्ता गरेपछि अमरसिंह आमाको अङ्ग काटेर दान दिएजस्तै अनुभव गर्दछन् । नेपालका लागि त्यस बेला विदेशी शत्रु भन्दा स्वदेशी शत्रु अझ बढी घातक बन्न पुग्छन् । यसबाट अत्यन्त मर्माहत बनेका अमरसिंहको आवेग, आक्रोश, दुःख, ग्लानि र पश्चात्तापले ग्रस्त मनस्थितिलाई काव्यकारले सूक्ष्म रूपमा केलाउनु भएको छ। हृदयमा युद्ध र उत्साहको पवित्र भावगङ्गा बगिरहे पनि शत्रुका दृष्टिमा पराजित जस्ता बन्न पुगेका अमरसिंहको मनोदशाको दिग्दर्शन यसरी गरिएको पाइन्छ –

तिम्रै विश्वास गर्दै सकल अघि बढ्यौं राष्ट्र ठूलो बनाई ।
उल्टै सुम्प्यौ तिमीले विपुल मुलुक यो आज टुक्रा बनाई ॥
सुन्दा आश्चर्य लाग्यो व्यथित अति भएँ क्षुब्ध पाऱ्यो मलाई ।
आमाको अङ्ग काटी सहज किन दियौ ? हात जोडी डराई ॥ (पृ.१३)

## ५. निष्कर्ष

'अमरसिंहको चिट्ठी' नेपालको इतिहासको एउटा दूरगामी प्रभाव छाड्ने सुगौली सन्धिरूपी दुर्घटना र एक जना दूरदर्शी, राष्ट्रभक्त र महान योद्धा अमरसिंहको व्यक्तित्व, कृतित्व र नीतिलाई अवलम्बन गरी

लेखिएको खण्डकाव्य हो । इतिहासको नीरस कथ्यलाई काव्यकलाको सरस अभिव्यक्तिमा ढालेर प्रस्तुत गरिएको यस खण्डकाव्यको मूल स्वर र शक्ति भनेको राष्ट्रवाद नै हो । राष्ट्रवादी अमरसिंहलाई तत्कालीन शासकहरूले न्याय र सम्मान नदिए पनि वर्तमान सन्ततिले उनको उच्च मूल्याङ्कन गरिरहेको दृष्टिकोण यस काव्यमा प्रतिबिम्बित भएको छ । राष्ट्रागको तरङ्गमा तरङ्गित हुने क्रममा पवित्र तीर्थस्थललाई मानवीकृत आवरण दिई संवाद गर्ने पात्रका रूपमा प्रस्तुत गर्दै स्वैरकाल्पनिक लोकमा प्रवेश गरे तापनि काव्यनायक अमरसिंहको राष्ट्रप्रेमका अगाडि त्यो सहज र सामान्य जस्तो बन्न पुगेको पाइन्छ । छन्दसिद्धि, आलङ्कारिक सौन्दर्य, भाषाशिल्पगत कालिगढी र नाटकीय कथनपद्धतिले काव्यको गहिराइ र उचाइ दुवै बढाएको देखिन्छ । अमरसिंहजस्ता वीर विभूतिहरूकै प्रसादका रूपमा आजको नेपाल अडिइरहेकाले हामी उनीजस्ता नायकहरूप्रति कृतज्ञ हुनुपर्छ भन्ने विचार यस काव्यमा पाइन्छ । यो शासकहरूका लागि एउटा राजनीतिक शिक्षा र मार्गदर्शन पनि बनेको देखिन्छ ।



# क्रान्तिदूत २०५३ का भूमिकाबाट

[ नेपाली साहित्यका देदीप्यमान नक्षत्र, प्रजातन्त्रका अथक योद्धा र नेपाली राजनीतिका पथप्रदर्शक जननायक विश्वेशवरप्रसाद कोइरालाका बारेमा मैले केही प्रकाश पार्न खोज्नु सूर्यलाई बत्ती देखाउनु जस्तो मात्रै हुन सक्तछ। महाकवि कालिदासले तितीर्षु दुस्तरँ मोहादुडुपेनास्मि सागरम् भनेर भनेजस्तै उहाँको त्यो विशाल तथा वैविध्यपूर्ण महान् व्यक्तित्वलाई मैले आफ्ना अत्यन्त सीमित शब्दावली र ज्ञानले दीप्तिमय गर्न खोज्नु केवल धृष्टता मात्र ठहर्ने छ तथापि मैले उहाँको सबै समग्र व्यक्तित्त्वलाई समेट्ने धृष्टता नगरी केवल उहाँको जीवनको एक अत्यन्त महत्त्वपूर्ण र संवेदनशील समयलाई मात्र यस क्रान्तिदूतमा समाविष्ट गर्ने प्रयास गरेको छु । त्यो समय हो २०१७ साल पुस १ गतेको दुर्नियतिपूर्ण घटनापछि विश्वेश्वरप्रसाद कोइरालाको सुन्दरीजल बन्दीगृहमा केवल बाहिरी संसारबाट मात्र होइन आफ्ना आत्मीय स्वजनहरूको सम्पर्क समेतबाट वञ्चित भएर बिताउन बाध्य हुनु परेको एकाकीपूर्ण कष्टमय बन्दी जीवन । नेपालमा प्रजातन्त्र प्राप्तिका अग्रणी सेनानी, नेपालको प्रजातान्त्रिक समाजवादका प्रवर्तक, अदम्य उत्साहका धनी, युवा तथा जनप्रिय प्रथम निर्वाचित प्रधानमन्त्री विश्वेश्वरप्रसाद कोइरालाले विना बिराम, विना कसुर त्यस्तो पीडाजनक बन्दी जीवन बिताउनु पर्दा उहाँको मानस सरोवरमा केकस्ता तरङ्गहरू उठे होलान्, उहाँमा मानसिक रूपमा कति ठुलो पीडा भयो होला ! त्यो केवल हामी सीमित रूपमा अनुमान गर्न सक्तछौँ तर सहज अनुभूतिछ भने गर्न सक्तैनौँ । उहाँको त्यही क्षणको वेदना र भावनालाई केही सीमित रूपमा भए पनि कल्पना गरेर पत्रमय कविताको माध्यमबाट व्यक्त गर्ने प्रयास गरेको छु। यो पत्र कसलाई सम्बोधन गरेर लेखिएको हो मैले निवेदन गरिरहनु नपर्ला, विज्ञ पाठकलाई छर्लङ्ग हुने नै छ। प्रजातन्त्रका पिता तथा नेपाली साहित्यका अजस्र सर्जकलाई मेरो कवितामय श्रद्धाञ्जलि सादर समर्पण। ]

# क्रान्तिदूत २०५३

## १. संरचना

खण्डकाव्यकार शरदकुमार भट्टराईको चौथो खण्डकाव्य 'क्रान्तिदूत' प्रथम जननिर्वाचित प्रधानमन्त्री विश्वेश्वरप्रसाद कोइरालाको जीवनको एक कालखण्डलाई आधार मानी शास्त्रीय छन्दमा रचित कृति हो । कोइरालाले २०१७ सालपछि सुन्दरीजल बन्दीगृहमा रहँदा भोगेको जीवनचर्या र अनुभव गरेका अनुभूतिहरूलाई स्रोतका रूपमा लिई यस काव्यको रचना गरिएको छ। कोइरालालाई 'क्रान्तिदूत' को प्रतीक बनाएर लेखिएको यस खण्डकाव्यमा ६ खण्ड छन्। यी खण्डमा खण्डकाव्यकारले कोइरालाको बन्दीजीवनलाई केन्द्रबिन्दुमा राखे पनि प्रकृतिको चित्रणका साथै काव्यकारले राजनीतिक दृष्टिकोण समेत अभिव्यक्त गरेको पनाइन्छ।

## २. आख्यानविधान

### (क) उपक्रम

यस खण्डमा नेपालका शुभ्र र सुन्दर हिमशृङ्खलाहरूको वर्णन गरिएको छ। हिमाललाई अचल, पार्वतीका पिता र देवताहरूद्वारा पनि सम्पूज्य भनिएको छ एवं विश्वको आत्माको उपाधि दिइएको छ । हिमाललाई मानवपात्रका रूपमा रूपान्तरित गरेर उसैद्वारा नेपालमा भएका सम्पूर्ण महत्त्वपूर्ण घटनाहरूको वर्णन गरिएको छ। जसरी हिमालको शृङ्खला अग्लो र होचो भएकाले नमिल्दो हुन्छ त्यसै गरी समयको घटनाक्रम पनि नमिल्ने हुन्छ भन्ने हिमालको भनाइ छ। यस खण्डमा राणाशासनको अन्त्य भई २००७ सालमा प्रजातन्त्रको स्थापना भएको, सहिदको सपना सफल भएको र सात वर्षको अवधिमा जनताका भावना उचालिँदै गई देश अगाडि बढ्दै गएको प्रसङ्ग उल्लेख गरिएको छ। यसपछि देशमा अस्थिरता पैदा भएको, संविधानसभाको चुनाव नभएको, राजा शक्तिशाली भएको, नागरिक अधिकार कुण्ठित भएको, राजाले चुनावको मिति टारेको, नेताहरूले चुनाव गर्न अनुरोध गरेको र भद्र

अवज्ञा आन्दोलन गरेपछि मात्र चुनावको मिति तोकिएको राजनीतिक घटनाक्रम पनि यसै खण्डमा समावेश गरिएको छ। जनताको भद्रअवज्ञा आन्दोलन भएपछि चुनाव भएको र बी.पी. कोइराला बहुमत ल्याई देशको प्रधानमन्त्री बनेको वर्णन पनि हिमालका माध्यमबाट भएको छ। बी.पी. प्रधानमन्त्री भए पनि उनको र सरकारको चियोचर्चो निरन्तर भइरहने वर्णन गर्दै हिमालले बी.पी.लाई अराष्ट्रिय भएको देखाई २०१७ साल पौष १ गते थापाथलीमा तरुणदलको कार्यक्रममा सहभागी भइरहेकै अवस्थामा मन्त्रिमण्डलका सबै सदस्यलाई सैनिक नियन्त्रणमा राखिएको घटनावली पनि यस खण्डमा आएको छ । प्रजातन्त्रको समाप्तिपछि देशमा एकतन्त्रीय शासन सुरु भएको, राजा देशका सर्वोच्च शासक र पञ्चायती व्यवस्थाका नायक बनेको, काङ्ग्रेसका केही नेताहरू नै राजाका मन्त्री र सल्लाहकार बनेको, बी.पी. बन्दीगृहमा थुनिएको र उनले आफ्नो नीति, विचार र सिद्धान्तलाई जनस्तरमा फैलाएको तथा राजा महेन्द्रलाई लक्ष्य गरी बी.पी.ले गम्भीरताका साथ आफ्नो धारणा प्रकट गरेको विषयवस्तु यस खण्डमा समावेश गरिएको छ।

**(ख) बाल्यकाल र निर्वासनको समय**

सुन्दरीजलको बन्दीगृहमा रहेका क्रान्तिदूत देशको स्वच्छ र सुन्दर परिवेशको वर्णनबाट आफ्ना भनाइ राख्न सुरु गर्दछन् र राजाका कुकर्मबारे केही भन्न चाहन्छन्। क्रान्तिदूत आफ्नो पैत्रिक थलो दुम्जाको प्राकृतिक र सामाजिक चित्र प्रस्तुत गर्दै पिता कृष्णप्रसाद दुम्जा छाडेर विराटनगरको गोग्राहा पुगी त्यहीं समाजसेवा गरेर बसेको वृत्तान्त बताउँछन्। क्रान्तिदूतले आफ्ना पिता राणाशासनको विरोध गर्दा चन्द्रशमशेरद्वारा निर्वासित हुनु परेको भए पनि प्रजातन्त्रको प्राप्तिका लागि सङ्घर्ष गर्दै अघि बढेको, देशविकासका काम र कुरा गर्दा क्रान्तियोद्धाहरू सहिद भएको, राष्ट्रका लागि क्रान्ति गर्दा पिताजीलाई राणाहरूले राजद्रोहको आरोप लगाई बन्दी बनाएको र बन्दी अवस्थामै उनको निधन भएको घटनाक्रमको

पनि उल्लेख गरेका छन् । आफु जेलबाट भागेर लुकीछिपी भारत पसेको, त्यहाँबाट क्रान्तिको ज्वाला दन्काएर प्रजान्त्रका लागि सङ्घर्ष गरेको, त्यसलाई दबाउन राणाशासकहरूले कठोर नीति अवलम्बन गरेको र आफु र आफुजस्तै क्रान्तिकारीहरूलाई बन्दी बनाई यातना दिइएको पूर्ववृत्तान्त पनि क्रान्तिपुरुषले बताएका छन् ।

### (ग) क्रान्तिकाल र प्रजातन्त्र प्राप्तिकाल

यस खण्डको प्रारम्भ हिमालको भनाइबाट भएको छ । दोस्रो विश्वयुद्ध सकिएपछि विश्वभरि शान्ति फैलिएको र भारतसमेतका पराधीन राष्ट्रहरू स्वतन्त्र हुँदै गएको सन्दर्भ देखाई स्वतन्त्र मुलुक नेपालमा साम्राज्यवादी शक्तिका आडमा शासन चलाइरहेका राणाहरूलाई हटाउन क्रान्तिदूत बनेर बी.पी.ले के के गर्नुपऱ्यो त्यसको विवरण दिइएको छ । यस खण्डमा क्रान्तिदूतले २००७ सालभन्दा पहिले आफुले राणाहरूले बन्दी बनाएको, प्रजातन्त्रका लागि क्रान्ति गरेको, भारत निर्वासन भएका राजा त्रिभुवनलाई फर्काएर ल्याई राजा र प्रजाबीच सामञ्जस्य स्थापना गरिएको, देशमा प्रजातन्त्रको स्थापना भएको, जनतामा खुसी फैलिएको र सहिदको सपना पनि पूरा भएको यथार्थ वर्णन गरेका छन् । देशमा प्रजातन्त्रको बहाली भएपछि देश विकासको गति अलिकति अगाडि बढेको भए पनि राजाले प्रजातन्त्रलाई खेलौना जस्तो ठानेर र पुरानो सम्झौता बिर्सेर संविधान ढिलो दिएको ऐतिहासिक तथ्य क्रान्तिपुरुष प्रकाशित पार्दछन् । क्रान्तिदूत चुनावपछि आफु प्रधानमन्त्री भएको र देशमा राजमार्ग सहित विकासका विभिन्न निर्माणकार्य भएको र उद्योगधन्दाको स्थापना र सञ्चालन पनि भएको आत्मकथन गर्दछन् ।

### (घ) सुन्दरीजलको बन्दी जीवन र प्रजातन्त्र समाप्तिकाल

हिमालद्वारा क्रान्तिदूतको मनोभावलाई प्रकट गर्दै सुरु गरिएको यस खण्डमा थापाथलीमा भएको तरुणदलको कार्यक्रमबाट

मन्त्रिमण्डलका सदस्यहरूका साथै तरुण दलका युवाहरूलाई सेनाले घेराबन्दी गरी गिरफ्तार गरेको प्रसङ्ग उल्लेख भएको छ । सेनाको आदेश र निर्देशनमा चुपचाप हिँडेका बी.पी.लाई कुनै गोप्य ठाउँमा नजरबन्द गरिएको र पछि सुन्दरीजलमा बन्दी बनाइएको र त्यहाँ कसैसँग भेट गर्न नदिइएको विवरण हिमालबाट प्रस्तुत भएको छ । बी.पी. र अन्य मन्त्री एवं नेताहरूलाई बन्दी बनाएपछि डुब्न लागेको देश राजाले बचाए भन्ने कृत्रिम हल्ला फिँजाइएको, पार्टीहरूलाई प्रतिबन्धित बनाइएको, देशको संविधान खारेज गरिएको, सर्वत्र त्राशको वातावरण फैलाइएको, कठपुतली नेता खडा गरी राजाले शासन चलाएको, आफुलाई राजाले विभिन्न प्रलोभन देखाई अलमल्याउन खोजेको तर त्यसमा नफस्दा विभिन्न आरोप लगाई थुनामा राखेको विस्तृत विवरण क्रान्तिदूतले प्रस्तुत गरेका छन् । यस खण्डमा क्रान्तिदूतले देशमा अवश्य पनि प्रजातन्त्रको पुनर्बहाली हुने भविष्यवाणी गरेका छन् । जतिसुकै सैन्यशक्ति प्रयोग गरेर पनि राजाले नियन्त्रण गर्न नसक्ने जनक्रान्तिद्वारा देशमा प्रजातन्त्र आएरै छोड्छ भन्ने क्रान्तिदूतको विश्वास छ ।

यस खण्डमा राजाको स्वेच्छाचारिता र सर्वसत्तावादलाई पनि क्रान्तिदूतले देखाएका छन् । क्रान्तिदूतको भनाइ अनुसार राजा आफैँ नेता बनेका छन् भने देशका प्रमुख पनि बनेका छन् । मन्त्रीहरू पुतलीजस्ता बनेका छन् भने राजाविरुद्ध बोल्न खोज्नेहरू लखेटिनु परेको छ । क्रान्तिदूत राजालाई प्रश्न गर्छन् – कोसँग मिलेर विकासको मूल फुटाउने ? त्यागी, तपस्वी जस्ता असल मानिसहरूलाई हटाएर राष्ट्रसञ्चालन कसरी गर्ने ? नेपालीहरूको भाग्यरेखा मेटेर भाग्यरेखा कसरी कोर्ने ? यस खण्डमा क्रान्तिदूत प्रदूषित मूलमा भएको नदीलाई स्वच्छ बनाउन नसकिएझैं नेपालमा शक्तिको स्रोत मानिने राजा नै पूर्वाग्रही र अन्यायी भएपछि सुधार्न कठिन हुने उदाहरण दिँदै विश्वसनीय व्यक्ति नभएकाले पूर्वाग्रही नबनी प्रजातन्त्रको पुनस्थापना

गर्न राजालाई आग्रह गर्दछन् । क्रान्तिदूत आफु प्रकाशमय भएकाले थुनेर राख्न सम्भव नहुने कटुसत्य यथार्थ सुनाउँछन् र सधैँ थुनेर राखिरहन नसक्ने कुरा पनि राजालाई भन्छन् । क्रान्तिदूतहरूका कार्यलाई जेलको चौघेराले थुन्न नसक्ने जोसिलो विचार व्यक्त गर्दै क्रान्तिदूत प्रजातन्त्र नल्याई र नहेरी बी.पी. मर्दैन भन्ने प्रतिज्ञा पनि गर्दछन् । यो आफ्नो मात्र नभई जनभावनाको प्रतिज्ञा पनि हो र जनचाहनाको घोषणा पनि हो भन्ने क्रान्तिदूतको स्पष्टोक्ति छ ।

**(ङ) उपान्तकाल**

हिमालद्वारा बी.पी.को अवस्थाबारे जानकारी दिएर प्रारम्भ गरिएको यस खण्डमा लामो समयसम्म बन्दी जीवन बिताएका बी.पी.लाई देश नदीको भेलमा बगेजस्तो अनुभव भएको वर्णन गरिएको छ । जनतामा भ्रम सिर्जना गरेर एकतन्त्रीय शासन व्यवस्था लादिएको, क्रान्तिदूतका सहयात्रीहरू राजाको सत्ता र शासनमा सामेल भएको र दरबारले पुरानो षड्यन्त्रको पुनरावृत्ति गरेको आदि पुराना कुरा सम्झेर क्रान्तिदूतले फेरि बोल्न थालेको जानकारी हिमालका माध्यमबाट दिइएको छ । यस खण्डमा क्रान्तिदूतले राजालाई स्वार्थी भाइभारदारहरूको कुरा सुन्न नहुने, कर्तव्यरत भई विवेकले चल्नुपर्ने, वर्तमान व्यवस्थाले पछि नराम्रो परिणाम ल्याउने, देशको उन्नतिका लागि राजाले निःशङ्क र निःसन्देह भई क्रान्तिदूतहरूलाई कारामुक्त गर्नुपर्ने सल्लाह दिएका छन् । यहाँ क्रान्तिदूत निकै आध्यात्मिक बनेका छन् र विश्वासयोग्य व्यक्ति नभएकाले आफुमा विरक्ति पैदा भएको तथ्य प्रकाशन गर्दै आफुमा कुनै अहङ्कार नभएको र मानिसले खाली हात जानुपर्ने भएकाले राजाले समय छँदै विचार पुऱ्याउनुपर्ने आवश्यकता रहेको दूरदर्शी विचार व्यक्त गर्दछन् । क्रान्तिदूत आफुले पराजयमात्र भोग्नु परे तापनि धीर बनेको राष्ट्रका स्तम्भ राष्ट्रियता र प्रजातन्त्र नभए देश अपूर्ण हुने भएकाले देशमा प्रजातन्त्रको आवश्यकता छ भन्ने विचार व्यक्त गर्दछन् ।

### (च) उपसंहार

हिमालबाट देशको अवस्थालाई सङ्केत गर्दै प्रारम्भ गरिएको यस खण्डमा बी.पी.को त्याग र उत्सर्गलाई नबुझी प्रजातन्त्रविरोधी व्यवस्था लागु गर्न षडयन्त्र गरिएको तर नेपालमा प्रजातन्त्र आवश्यक भएको तर्क गरिएको छ। यस खण्डमा संसारमा महापुरुषहरू दुर्लभ भए पनि तिनको विरुद्धमा उत्रेर हत्या गर्ने परम्परा बसेको भन्दै सुकरात, गान्धी, लिङ्कनको उदाहरण दिई बी.पी.लाई पनि उनको मूल्य नबुझी भिल्लका देशका मणि मिल्किए झैं मिल्काइएको व्यङ्ग्यात्मक अभिव्यक्ति दिइएको छ। यहाँ हिमालद्वारा राजाका नराम्रा कामहरूको वर्णन गरिएको छ। स्वार्थी व्यक्तिहरूले कुटिल चाल चालेको, राजाले प्रजातन्त्रको अपहरण गरेको, उनले जनतालाई सद्भाव दिन नसकेको, स्वार्थी बनेकाले राजाप्रति जनताको भक्तिभाव मेटिएको, एकोहोरो शासन चलाउने राजा लामो समयसम्म टिक्न नसक्ने भएकाले जनतालाई कानुनी अधिकार दिनैपर्ने बाध्यता भएको हिमालको भनाइ छ। राजा निरङ्कुश हुने समय गएको, स्वार्थी प्रवृत्तिको पुनरावृत्ति भएको, नेपालको राजनीतिको दुर्गीति भएको, स्वार्थी व्यक्तिहरूले त्यागी व्यक्तिहरूलाई शोषण गरेको र देश अन्धकारमा डुब्न लागेको वर्णन पनि हिमालबाट भएको छ। राजाले आफ्नै समर्थक चिन्न नसकेको, स्वार्थीहरूलाई उकास्ने र देशभक्त क्रान्तिकारीहरूलाई सिद्ध्याउने नीति लिएको र यसले देशलाई हानि भएको विचार हिमालबाट व्यक्त भएको छ। हिमालबाट राष्ट्रभक्त नेपालीहरूलाई चिन्न र सम्मान गर्न राजालाई सल्लाह दिँदै कथावस्तु समाप्त भएको छ।

## ३. भाव र विचार

'क्रान्तिदूत' खण्डकाव्यमा नायक बी.पी. कोइरालाको प्रजातन्त्र र जनाधिकार प्राप्तिका क्रान्ति गर्ने र देशमा प्रजातन्त्र स्थापना र पुनः स्थापना गरेरै छाड्ने उत्साहभाव प्रबल भएकाले वीररस अङ्गी रसका

रूपमा रहेको छ। यस काव्यमा क्रान्तिदूतका रूपमा चित्रित कोइराला वीरपुरुष पनि थिए र उनले राजा तथा सैन्य शक्तिका अगाडि पनि धैर्य र साहसले काम गरेका थिए। यस काव्यमा पनि कोइरालाका यस्तै विशेषता प्रतिबिम्बित भएकाले यहाँ वीररस प्रधान बन्न पुगेको देखिन्छ। सुन्दरीजलमा बन्दी बनेर बस्नु परे पनि क्रान्तिदूत कोइरालाले निरन्तर वैचारिक क्रान्ति गरिरहे र जनतालाई जगाउने काम पनि गरिरहे। यी काम गर्दा उनले एउटा युद्धनायकको जस्तो भूमिका खेले। यसकारण पनि 'क्रान्तिदूत' वीररसप्रधान खण्डकाव्य हो भन्ने निष्कर्ष निस्कन्छ। काव्यको दोस्रो खण्डको 'बाल्यकाल र निर्वासनको समय' मा कोइरालाको कारुणिक अवस्था चित्रित भएकाले करुण रसको पनि आस्वादन गर्न सकिन्छ तापनि वीररसको प्रवाहका अगाडि त्यो फिका वा गौण बनेको छ। करुणभावले कोइरालामा रहेको उत्साहलाई अझ उद्दीपक र परिपक्व बनाउन भूमिका खेलेको देखिन्छ।

विचारवान् कोइरालाको जीवनको एउटा महत्त्वपूर्ण कालखण्डलाई आधार बनाई लेखिएकाले यस खण्डकाव्यमा राजनीतिक विचारको प्रस्तुति पनि भएको छ। क्रान्तिदूत कोइराला निरङ्कुशताका सधैं विरोधी र प्रजातन्त्रका कट्टर समर्थक र व्याख्याता थिए। उनले राणाहरूको परिवारतन्त्र र राजाको एकदलीयतावादका विरुद्ध आजीवन सङ्घर्ष गरे। उनको एकमात्र ध्येय प्रजातान्त्रिक शासनव्यवस्थाबाट देशको विकास गर्नु थियो। यही ध्येयको प्राप्तिका लागि उनी राजनीति र क्रान्तिमा होमिएका थिए। खण्डकाव्यकारले क्रान्तिदूतलाई प्रजातान्त्रिक शासन व्यवस्था लागु गर्न र पञ्चायत व्यवस्थाको अन्त्य गर्न लागिपरेका नेताका रूपमा अघि सार्दै प्रजातन्त्र नै उत्तम शासन हो भन्ने विचार व्यक्त गर्न लगाउनुभएको छ। देश र जनताका लागि काम गर्न खोज्दा खोज्दै पनि राजाले सहसा सत्ताच्युत गरी बन्दी बनाएपछि क्रान्तिदूतका मनमा उत्पन्न अवसादमय चिन्तनको केन्द्रमा रहेको यस काव्यमा प्रतिशोध, कुसंस्कार, षड्यन्त्र र वैमनस्य भन्दा सत्य, समानता, उदारता

र सहभागिताले मात्र राजनीतिक सफलता प्राप्त भई देशमा सबैको हित हुन्छ भन्ने विचार प्रकाशित भएको छ। क्रान्तिदूतजस्ता राजनीतिज्ञहरूको आवश्यक सुरक्षा र उचित सम्मान हुनुपर्छ र लोकसम्मतिका आधारमा देशको शासन चल्नुपर्छ भन्ने विचार पनि यस काव्यले दिएको पाइन्छ। काव्यमा हिमाललाई मानवको रूप प्रदान गरी बी.पी. कोइरालाका कर्म र विचारका व्याख्याताका रूपमा प्रस्तुत गरिएको छ । यस पद्धतिबाट पनि देश सर्वोच्च हो र सबैले यसैको हित र सुरक्षाका लागि काम गर्नुपर्छ भन्ने सन्देश प्रसारित गर्न खोजेको पाइन्छ । सिङ्गो खण्डकाव्यलाई एकत्रित गरेर हेर्दा निरङ्कुशताका विरुद्ध क्रान्ति गर्नुपर्ने, देशमा प्रजातन्त्र र जनाधिकारको स्थापना हुनुपर्ने तथा सबैले देशलाई सर्वोपरि मानेर काम गर्नुपर्ने विचार यहाँ पाइन्छ। वीररसको सशक्त प्रवाह पाइने यस काव्यमा विचार पनि वीरोचित नै पाइएकाले यसलाई भाव र विचारको सन्तुलन भएको काव्य मान्न सकिन्छ। राजालाई उदार र प्रजातान्त्रिक बन्न उपदेश दिँदै जनतालाई पनि यस अभियानमा सक्रिय हुन सन्देश दिनु 'क्रान्तिदूत' खण्डकाव्यको प्राप्ति हो। राजनीतिक व्यक्ति र विषयको अवलम्बन गरेर पनि काव्यलाई भावमय र विचारमय बनाएर प्रस्तुत गर्नु रचनाकारको सफलता नै देखिन्छ।

## २४. कलाशिल्प

'क्रान्तिदूत' वर्णमात्रिक वर्गमा पर्ने उपजाति, अनुष्टुप् र पञ्चचामर छन्दमा लेखिएको खण्डकाव्य हो । अन्य काव्यकृतिमा जस्तै यस रचनामा पनि काव्यकारलाई छन्दप्रयोगमा सिद्धि र सफलता प्राप्त भएको पाइन्छ। व्यक्त गर्न चाहेको भाव र विचारलाई जुनसुकै मानक पद र पदावली प्रयोग गरेर भए पनि छन्दको साँचोमा अनुकूलन गरी प्रस्तुत गर्ने काव्यकारिता यहाँ पनि झल्किएकै छ । कलाशिल्पकै कारणले यो खण्डकाव्य राजनीतिक विषयवस्तुमा आधारित भएर पनि राजनीतिनिरपेक्ष शुद्ध कलाप्रधान काव्यजस्तो बन्न पुगेको भान हुन्छ।

'क्रान्तिदूत'लाई सहज अलङ्कारहरूले विभिन्न स्थानमा अलङ्कृत पारेका छन् । यी अलङ्कारहरू ल्याएका नभई आएका देखिन्छन् । निम्नलिखित श्लोकद्वयमा उपमाको सौन्दर्य अनुभव गर्न सकिन्छ –

जसरी सूर्यको ज्योति खुल्दा कमल फुल्दछन् ।
नेताका सामुमा पर्दा त्यस्तै उत्साह खुल्दछन् ॥ (पृ.७)
युवाकै बीचमा आई चिलले गौंथली सरी ।
बी.पी.लाई लग्यो पक्री सेनाले गर्जना गरी ॥ (पृ.३१)

बी.पी.लाई जेलमा बन्दी बनाएको अवस्थामा त्यहाँको परिवेश वर्णन गर्दा स्वभावोक्ति अलङ्कारको सौन्दर्य व्यक्त भएको पाइन्छ। जस्तै –

पर्खाल लाईकन उच्च घेरा,
पारेर चारैतिर टम्म फेरा ।
चौबीस घण्टा हतियारधारी,
गर्छन् सुरक्षा बहुतै बिचारी ॥ (पृ.१५)

निम्नलिखित श्लोकमा दृष्टान्तको विच्छित्ति परेको पाइन्छ –

भाग्यका साथ लागेर दुर्भाग्य पनि आउँछ ।
गुलाफ फूलका साथ काँडा पनि पलाउँछ ॥ (पृ.५)

सूक्तिमय अभिव्यक्तिमा अर्थान्तरन्यासको प्रयोग भएको पाइन्छ –

शुभ कर्मसँगै हुन्छ छाया अशुभको पनि ।
जन्मदै मृत्यु जन्मन्छ मान्छेको साथमा पनि ॥ (पृ.५)

कतैकतै प्रश्नालङ्कारको चमत्कार देखाइएको छ। जस्तै –

यै बीचमा भूपतिले रिसाई,
सेनाहरूको दल नै पठाई ।
पक्रेर ल्याएर थुन्यौ मलाई,
विराम के भो ? भन त्यो मलाई ॥ (पृ.३३)

को रोक्छ ? नैसर्गिक शक्ति मेरो,
थुनेर फेरिन्न स्वभाव मेरो ।
राख्छौ भलै सिंह कतै थुनेर,
के घाँस खाला पिंजरा परेर ॥ (पृ.३९)

यस काव्यमा सामान्यतया तीनओटै गुणको प्रयोग भएको छ । उदाहरण स्वरूप एउटा एउटा श्लोक यसरी उद्धृत गर्न सकिन्छ –

## माधुर्य

सुशैल सेता हिमका पखाली,
स्वच्छन्दको चाल सधैँ निकाली ।
बग्छिन् जहाँ स्वर्णिम स्वर्णकोसी,
हराभरा सुन्दर फाँट पोसी ॥ (पृ.१६)

## ओज

मैले बिगारेँ कति राष्ट्रलाई,
मैले सपारेँ कति राष्ट्रलाई ।
निसाफ गर्ला पछिको समाज,
थुनेर राख्छौ नृप राख आज ॥ (पृ.५४)

यस काव्यमा सुभाषितहरूको पनि प्रशस्त प्रयोग भएको छ । जस्तै –

हार्दैन कहिल्यै शक्ति जनताको कहीं पनि ।
सक्तैन शक्ति त्यो थिच्न जस्तै शक्ति भए पनि ॥ (पृ.४)
आत्मश्लाघी कुनै मान्छे बन्दैन जनको प्रिय ।
आडम्बरी अविश्वासी बन्छ अत्यन्त अप्रिय ॥ (पृ.६०)

पूर्वीय र पाश्चात्य वाङ्मयको अध्ययन गरी बहुश्रुत बन्नुभएका खण्डकाव्यकारले दुवै जगत्का राजनीतिक आदर्शवादी विचारको एकीकरण गरी सुन्दर भाषामा शासकहरूलाई उपदेश दिएको पाइन्छ

र राजनीतिलाई कञ्चन बनाउने अभिलाषा व्यक्त गरेको देखिन्छ । निम्नलिखित श्लोकहरूले यस भनाइलाई प्रमाणित गरेका छन् –

राजा हुँ रैती सब हुन् प्रजा यी,
म गर्छु जे जे सब मान्य हुन् यी ।
भन्ने पुरानो पन छोड्नु पर्छ,
कानूनको शासन चल्नुपर्छ ॥ (पृ.४८)
सर्वज्ञ आफैं पनि भन्नु हुन्न,
निर्द्वन्द्व सर्वोपरि शक्ति हुन्न ।
म राष्ट्र भन्ने भ्रम पाल्नु हुन्न,
आफैं सबै हुँ पनि भन्नु हुन्न ॥ (पृ.५८)
राजाले जनतालाई सद्भाव दिनु पर्दछ ।
जनताले ससम्मान भूपति मान्नु पर्दछ ॥ (पृ.६८)

राजनीतिमा घात, प्रतिघात, षड्यन्त्र, छलकपट र सत्ता तथा स्वार्थका लागि जे पनि गरिने यथार्थ प्रवृत्तिको उद्घाटन यस श्लोकबाट भएको छ जुन वर्तमान समयमा पनि उत्तिकै सान्दर्भिक छ –

भत्कन्छ सीमा जब बाँध फारी,
चिरिन्छ छाती मुटुनै उघारी ।
विश्वास होला कसको मलाई,
लुकेर हत्या जब गर्छ भाइ ॥ (पृ.६४)

## ५. निष्कर्ष

नेपालको प्रजातान्त्रिक आन्दोलका अग्रणी पुरुष बी.पी. कोइरालाको व्यक्तित्व र क्रान्तिकारी क्रियाकलापलाई केन्द्रबिन्दुमा राखी शास्त्रीय छन्दको प्रयोग र सहज अलङ्कारहरूको आयोजना गरी लेखिएको 'क्रान्तिदूत' अंशतः भावप्रधान र मूलतः विचारप्रधान खण्डकाव्य हो । नेपालको सान र सम्पत्तिको रूपमा रहेको हिमालको

वर्णन गर्दै र त्यसैलाई मानवीकृत स्वरूपसमेत प्रदान गर्दै पात्रका रूपमा उपस्थापित गरेर लेखिएको यस खण्डकाव्यमा जुनसुकै रूप र नामको भए पनि निरङ्कुशतन्त्रको विरोध र प्रजातन्त्रको स्वागत एवम् समर्थन गरिएको पाइन्छ। निरङ्कुशताका पक्षपोषक शासकहरूको ठाडो विरोध भन्दा पनि वैचारिक र सङ्घटनात्मक क्रान्तिबाट प्रजातन्त्रको प्राप्ति हुने दूरदर्शी राजनीतिक परिपक्व विचारको प्रवाह यस खण्डकाव्यमा भएको छ। यहाँ शासकहरूलाई शिष्ट, सौम्य र अभ्र कतैकतै त कान्तासम्मित शैलीमा उपदेश पनि दिइएको छ र उनीहरूलाई आत्मसंशोधनका लागि हितकारी सल्लाह पनि दिइएको छ। राजनीतिक विषयवस्तुलाई काव्यकलाको सुन्दर साँचोमा ढालेर बी.पी. कोइरालाको क्रान्तिदूतको व्यक्तित्वलाई प्रकाशन गर्न यो कृति सफल छ। यसले देश र जनताका लागि लड्ने र मर्नेहरूप्रति देशवासी कृतज्ञ हुनुपर्ने सन्देश पनि दिएको छ। नेपालका शासक, जनता, राजनेता र कार्यकर्ताहरूलाई समेत वैचारिक पोषण प्रदान गर्न 'क्रान्तिदूत' नमुना कृति बनेको छ भन्न सकिन्छ।



# पृथ्वीविजय २०६२ का भूमिकाबाट

[मैले यस काव्यमा पृथ्वीनारायण शाहका केही उपदेशहरूलाई सरल भाषामा श्लोकबद्ध गर्ने प्रयास गरेको छु भने दिव्य उपदेशभित्र नपरेका केही नीतिगत कुराहरू हाम्रा स्मृतिग्रन्थ र नीतिशास्त्रहरूबाट समेत सार लिएर समावेश गर्ने धृष्टता गरेको छु। यसबाट पृथ्वीनारायण शाहको उदार तथा दूरदर्शी दृष्टिकोण बुझ्न पाठकहरूलाई सुगम नै हुने छ भन्ने मैले ठानेको छु।

बडामहाराज श्री ५ पृथ्वीनारायण शाह नेपाल राष्ट्र, नेपाली राष्ट्रियता, नेपाली सार्वभौमिकता, नेपाली जाति र नेपाली अस्मिताका स्वप्नद्रष्टा, परिकल्पनाकार र सर्जक समेत हुन्। उनकै अथक परिश्रमले आज हामी नेपाली भएर गर्वका साथ संसारमा ठाडो शिर गरेर बाँचेका छौँ। अन्यथा आज हामी कसको भाग भएर कुन भाषा बोलेर कुन हालतमा बाँचिरहेका हुन्थ्यौँ ? यो सामान्य व्यक्तिले पनि सहजै बुझ्नसक्ने कुरा हो। यस वस्तुतथ्यलाई बिर्सेर केही दिग्भ्रमित व्यक्तिहरूले परम श्रद्धेय प्रातःस्मरणीय बडामहाराज श्री ५ पृथ्वीनारायण शाहलाई साम्राज्यवादीको संज्ञा दिएर कसलाई खुसी पार्न चाहेका छन् ? विचारणीय कुरा छ। तिनलाई आफु बसेको रुखको हाँगो काटेर पतन हुन खोज्ने मूर्ख कालिदासको संज्ञा दिनु र तिनको मूर्खताप्रति दया देखाउनु बाहेक अरू के गर्न सकिन्छ र ?]

# पृथ्वीविजय २०६२

## १. संरचना

'पृथ्वीविजय' खण्डकाव्यकार शरदकुमार भट्टराईको पाँचौं खण्डकाव्य हो। यसमा नेपालका एकीकरणकर्ता बडामहाराजाधिराज पृथ्वीनारायण शाहको व्यक्तित्व, कार्य, नीति र उद्देश्यलाई मूल विषयवस्तु बनाइएको छ र उनको योगदानको उच्च मूल्याङ्कन गरिएको छ। मन्दाक्रान्ता, शार्दूलविक्रीडित, उपेन्द्रवज्रा र वसन्ततिलका छन्दमा

रचिएको यस खण्डकाव्यमा पूर्वार्ध र उत्तरार्ध गरी दुई भाग छन् । यस बाहेक श्लोकको समर्पण अंश पनि यहाँ समाविष्ट छ । पूर्वार्धमा ५१ र उत्तरार्धमा १३५ श्लोक तथा समर्पण खण्डमा २ श्लोक समेत गरी यस खण्डकाव्यमा १८८ श्लोक रहेका छन् । पृथ्वीनारायणलाई नायक बनाई लेखिएको यस खण्डकाव्यले ऐतिहासिक पात्रको राष्ट्रवादी चरित्रप्रति विशेष समर्थन र सहानुभूति जगाएको छ । पृथ्वीनारायणका वाणीहरू वर्तमान समयमा पनि उत्तिकै सामयिक छन् भन्ने तथ्यलाई यस खण्डकाव्यले समेटेको छ ।

## २. आख्यानविधान

### (क) पूर्वार्ध

नेपालको उत्तरदिशामा अवस्थित हिमालको वर्णन प्रसङ्गबाट प्रारम्भ भएको यस खण्डमा दक्षिणतिर थुप्रै राज्यहरू आपसमा लडेर बस्दथे भन्ने ऐतिहासिक तथ्यको उल्लेख गरिएको छ । पछि समाजमा हलचल आएपछि राज्यहरू सत्कर्मप्रति जागरुक हुँदै उठ्तै गएको प्रसङ्ग यहाँ आएको छ । यी मध्ये गोरखा प्रसिद्ध राजधानी भएको र राजा पनि स्वाभिमानी र सुसंस्कृत भएको वर्णन गरिएको छ । गोरखा सबै दृष्टिले सम्पन्न र परिपूर्ण भएको र त्यसै राज्यबाट पृथ्वीनारायणले दूरदर्शी दृष्टि राखेर आफ्ना वीरहरूलाई डाकी भारतवर्षलाई समाप्त पार्न लागेको अङ्ग्रेजरूपी विषालु काँडाले नेपाललाई घोच्न खोजेको आशङ्का गरेका छन् । उनी हाम्रो सहायता गर्ने कोही पनि नभएको बरु मित्र भन्दा शत्रु बढी सशक्त बन्दै गएको अवस्था देखाउँछन् । पृथ्वीनारयाण वीरहरूकै भर परेको र उनीहरूकै सल्लाह बमोजिम कालु पाँडेलाई कजाइँ सुम्पेको कुरा गर्छन् र हामी गोरखाली डटेर लड्न सक्छौं भन्दै हौस्याउँछन् । उनी गोरखालीहरूका बीचमा एकताको आवश्यकता देखाउँछन् र गोरखनाथ र कालीले सबै अनिष्ट हटाइदिने भएकाले राज्यविस्तारमा लाग्नुपर्छ भन्ने प्रस्ताव राख्छन् । पृथ्वीनारायण अदम्य उत्साह देखाउँदै आफुले कि नेपाल जोड्नु पर्ने कि त

गोरखा पनि छोड्नुपर्ने तर्क गर्छन् । गोरखाका सबैलाई सक्रिय बनाउनुपर्छ र काली जगाई नेपालका लागि बाँच्न र मर्न पनि तयार हुनुपर्छ अनि सबै जना एकीकरणका लागि उठ्नुपर्छ भन्ने जोसिलो प्रस्ताव पृथ्वीनारायणले राखेका छन् । आफ्नो राष्ट्र र धर्म सम्भेर लड्न तयार हुने गोरखालीहरू लावा उगेलेर, प्रलयाग्नि बालेर र ज्वालामुखी बनेर अघि बढ्नु पर्छ र जतिसुकै शक्तिशाली शत्रुका अगाडि पनि भुक्नु हुँदैन भन्दै पृथ्वीनारायणले अस्तित्वको रक्षाका लागि लड्नुपर्ने विचार व्यक्त गरेका छन् । चारैतिर शत्रु भएका तर तिनका बीचमा गोरखा एक्लो भएकाले पृथ्वीनारायण सबै गोरखालीलाई ढाल र खुँडा लिएर तम्तयार हुन आह्वान गर्दछन् । गोरखा सबै जनताको एउटा साभा फूलबारी जस्तो भएकाले राजा जता जान्थे जनता पनि उतै जान्थे भन्दै एकान्तमा गोप्य मन्त्रणा गरेर शुभ मुहूर्त र समय पारेर प्रस्थानका लागि तयारी भएको र त्यसमा वीरहरू बाजाका तालमा खुकुरी उठाउँदै उठेका र आमाहरूले उनीहरूलाई सिन्दूर लगाएर उत्साह थपिदिए भन्दै युद्धको परिवेश पनि देखाइएको छ । यसै मुहूर्तमा मन्दिरमा घण्टा बजेर वैदिक मन्त्रोच्चारणपूर्वक राजालाई गुरुवर्गले टीका जमरा लगाई शुभाशीर्वाद समेत दिई प्रस्थान गराए भनिएको छ ।

### (ख) उत्तरार्ध

पृथ्वीनारायण अघिअघि हिँडे भने उनका पछिपछि आलस्य र काँतरपना छाडी सैनिकहरू हिँड्थे । उनीहरू जहाँजहाँ पुग्थे त्यहाँत्यहाँ जयघोष हुन्थ्यो र कठोर व्यक्ति पनि मैन जस्तै नरम हुन्थ्यो । पृथ्वीनारायणले आइपरेका सबै कष्ट र सङ्कट धैर्यपूर्वक समाधान गरेका छन् । कहिले काहीँ उनी सुगम दुर्गम कुनै भूमाग नभनी गुप्तवेश धारण गरेर पनि हिँड्छन् र अन्त्यमा उनी विजय पनि सजिलैसँग प्राप्त गर्छन् । उनले कौटिल्यको नीति अनुसरण गरी उपत्यकाको पनि जानकारी लिएर व्यापारिक नाका बन्द गरेर पनि युद्ध गरेका छन् । उनलाई पश्चिमबाट पूर्वतर्फ चढाई गर्दै जाँदा विजय प्राप्त भएको र सबै राज्य एउटै राज्यका रूपमा परिणत

हुन पुगेका छन् । सबैको बल, विश्वास र समर्थनबाट अघि बढिरहेका पृथ्वीले वीरहरूलाई दर्जा र मानपदवी पनि उचित किसिमले दिएका छन् जसका कारण गोरखालीहरूले भीषण युद्ध लडेका छन् र त्यसमा छोरा, धन र हाँसी हाँसी प्राण पनि दिएका छन् ।

गोरखाली जहाँ जान्छन् त्यहाँ विजय पाएरै छाड्छन् । उनीहरूका अगाडि कि जित्नु, कि त मर्नु मात्र विकल्प छ। उनीहरूका लागि पराजय भन्ने वस्तु नै छैन। उनीहरूका अगाडि आउने शत्रु बत्तीका अगाडि पुतली डडेझैं भस्म हुने गर्छ। पृथ्वीनारायण गुरुले शिष्यलाई जाँचेझैं र पोलेर सुनको परीक्षा गरेझैं युद्धमा सबै सैन्यलाई जाँच्छन् । उनी जहाँ पुग्छन् आबालवृद्धवनिता जयघोष गर्दै उनको पछि लाग्छन् । पृथ्वी सच्चरित्र, अक्रोधी, परिश्रमी, दुःख भोग्न समर्थ र कर्मयोगी छन् । उनीसँग द्रोह गर्ने पछि परेका छन् र स्नेह गर्ने अघि बढेका छन् । यसरी सबल र विशाल नेपालको निर्माण गरेर उनले सुशासन प्रारम्भ गरेका छन् । यसै अवस्थामा उनका कान्छा भाइ अलिकति धक र अदब मानी विनयपूर्वक दुःख गरेर आर्जेका शक्तिशाली गोरखा राज्यमा पाँचै भाइ एकै ठाउँमा बस्दा मन दुःख्न सक्ने र सम्बन्ध पनि टुट्न सक्ने भएकाले राज्य बाँडौँ र आ-आफ्नो राज्यको राजा भएर बसौं भन्ने प्रस्ताव राख्छन् । यसका लागि उनी मल्लहरूले पनि भाग लगाएर राज्य लिएको प्रमाण पेस गर्दछन् । भाइको यस्तो अप्रत्याशित प्रस्ताव सुनेपछि पृथ्वीनारायणलाई अत्यन्त दुःख लाग्दछ र उत्साह र साहस पनि शिथिल हुन्छ । त्यसपछि पृथ्वीनारायण भाइलाई सम्झाउन थाल्छन् । पृथ्वी भन्छन् – भाइ, तिमी युद्धमा अग्रणी छौ तर उमेरमा सानै छौ । हाम्रो यो रचना नयाँ छ, त्यसैले बिस्तारै चाल चलेर हिँड्नुपर्छ। हाम्रा चारैतिर शत्रु नै छन् । हामीले अझै धेरै काम गर्न बाँकी छ र युद्ध पनि जारी नै छ। यो साझा राष्ट्रलाई कसरी भाग लगाउन सकिन्छ र ? पृथ्वी आमाजस्तै भएकीले यिनलाई बाँडेर मैले राजधर्म कसरी छाड्नु ? राज्य भन्ने चीज आफैंले आर्जन गर्नुपर्छ, मागेर अंशका रूपमा यो पाइने वस्तु होइन । मल्लहरूले जे जति राज्य

बाँडे त्यो राज्य बाँडेको होइन, भाँडेको हो। राष्ट्र बाँडियो भने त्यो ध्वंस भएर जान्छ। राज्य बाँडेकै कारण आज कोही पनि मल्ल राजा छैनन्। त्यसैले राज्य बाँड्ने कुरा मेरा लागि अनर्थ हो। तिम्रो विचार सद्विचार होइन। अत्यन्त लोभ गरियो भने सुकार्य हुन सक्तैन।

यति भनेर पृथ्वीनारायण चुप लाग्छन्। उता भाइ बाहिरतिर लाग्छन्। जे सोचेर राष्ट्रनिर्माण गरियो त्यो उद्देश्य पूरा नहुने देखेर पृथ्वीलाई दुःख लाग्छ र उनलाई मानसिक पीडा थपिन पुग्छ। जसले राष्ट्रका लागि सर्वस्व अर्पण गऱ्यो उसको भव्य स्वागत र सम्मान हुनुपर्नेमा उल्टै स्वार्थका कारण कलह पैदा भएकाले पृथ्वीलाई दुःख लाग्नु स्वाभाविक हुन्छ। पृथ्वी विश्वासिला केही व्यक्तिको सहयोग लिई धैर्यसाथ सुशासन गर्न थाल्छन्। तर रोगले च्याप्न थालेपछि शासनभार ज्येष्ठ पुत्रमा सुम्पेर पृथ्वी नुवाकोटतिर लाग्छन् र गुरुपुरोहितलाई जम्मा गरेर आफ्नो जीवनको समीक्षा गर्छन् र राष्ट्रका बारे चिन्तन पनि गरेर उपदेश दिन्छन्। यस क्रममा उनी भन्दै जान्छन् – हामी त मरेर जान्छौं तर हाम्रो उपदेश पढेर हाम्रा सन्तानले यो राज्य थामी राख्नेछन्। ससुरालीबाट फर्किंदा म छद्मवेश धारण गरी नेपालतर्फ लागेँ। त्यसपछि गोरखा पुगेपछि ६ थरका मानिसका साथमा लागेर, सैन्यरणनीति तयार पारेर, सल्लाह गरेर र लम्जुङ्का राजासँग सन्धि गरेर शक्तिशाली भई विजयका लागि हिँडियो। पैले नुवाकोट जितियो र त्यसपछि नाकाबन्दी लगाई मल्ल राजाहरूसँग लडियो। वैरीहरूलाई धपायौं र किल्लाहरू पनि बलिया बनायौं। दुईतिरका विशाल छिमेकी राष्ट्रका बीचको नेपाललाई सुरक्षित राख्ने गरी यसमा चढाइ गर्ने योजना बनायौं। व्यापार र उद्योग गर्नुपर्छ र कृषिमा सुधार गरेर कृषकलाई सम्पन्न बनाउनुपर्छ। रैती बलिया भए राजा पनि बलियो हुन्छ। सैनिक, भारदार सबै छानेर राख्नुपर्छ र तालिम पनि बारम्बार दिइरहनु पर्छ। राष्ट्रलाई कहिल्यै पनि व्यक्तिगत सम्झनु हुँदैन। नेपालका सहर अत्यन्त चिसा (हार्दिकता नभएका) छन्। सकेसम्म आफ्नो कामकाज आफैं गर्नु, अरूको भर पर्दा गोप्यता भङ्ग

हुन सक्छ । द्रोही र कुमार्गगामी सैनिक र भारदारहरूलाई मार्नुको सट्टा युद्धमा पठाउनु । त्यहाँ ती बाँचे पनि वा मरे पनि भलाइ नै हुन्छ ।

पृथ्वीनारायण दूरदर्शी उपदेश यसरी थप गर्दै भन्छन् – राजा सम्पूर्ण प्रजाको सुखदुःखको ख्याल गर्ने दयालु र विवेकी हुनुपर्छ । कर असुली पनि राम्रोसँग गर्नुपर्छ । अदालतमा पनि नैतिक, विद्वान् र न्याय बुझ्ेको मानिस राख्नुपर्छ । घुस दिने र लिने दुबै शत्रु भएकाले तिनीहरूको धनमान सबै हरण गरिदिनु । नाचगान पनि नेपालकै हुनुपर्छ । अन्यत्रका नाचगान हेर्दा आफ्नो गोप्यता भङ्ग हुन्छ र कमजोर बनिन्छ । जङ्गी प्रशासन पनि राम्रोसँग राख्नुपर्छ । गाउँबस्तीमा खानी भेटियो भने त्यसलाई सारेर खानी चलाउनु पर्छ । कृषि हुने ठाउँमा घर सारेर भए पनि खेतीपाती गर्नुपर्छ । व्यक्तिवादी नबनी राष्ट्रवादी र स्वार्थवादी नबनी कर्मवादी बन्नुपर्छ । योद्धा, लडाकुहरू सबै योग्य छन् । तिनले सम्मान प्राप्त गर्छन् । अब युवालाई अगाडि सार्नुपर्छ । मैले भनेका यी कुरा हलुकासँग नलेऊ । यति भनेर पृथ्वीनारायण चुप लाग्छन् र मन हलुको भएको अनुभव गर्छन् ।

आफ्नो नजिक भएका सबैलाई बिदा गरी पृथ्वीनारायण एकछिन शान्त हुन्छन् र हिमशैलतर्फ दृष्टि दिई अत्यन्त भावुक हुँदै आत्मचिन्तन गर्न थाल्छन् –

सकेसम्म प्रयास गरेर नेपाल एक पारेँ र सुधार पनि गरेँ तर एउटा सुधार हुन सकेन । गल्ती कहाँनेर भयो यसमा छक्क परेको छु । वनबुटेन चहारेर राष्ट्र आर्जन गर्दा कहाँ त्रुटि भयो, पत्ता लगाउन सकिएन । म आफैं आफुदेखि टाढा छु । परिवारमा भएर पनि दूर छु ।

यसपछि पृथ्वीनारायण फेरि एकछिन सुस्थिर हुन्छन् र पुत्र युवराज प्रतापसिंह शाहलाई बोलाएर यस्तो उपदेश दिन्छन् – सत्कर्म गर र कर्मयोगी बन । राष्ट्र चलाउन सक्छु भन्ने मलाई वचन देऊ । मैले जे जति गरेँ ती सबै पूर्ण होइनन् । अझै धेरै काम गर्न बाँकी छ । दोधारे र हडबडे नबन । सबैको प्रिय बनेर विश्वाससाथ भविष्य सम्झेर काम गर । शङ्का राखेर काम गर्नु तर शङ्का प्रकट नगर्नु । आत्मरक्षा र पररक्षा सधैं

गर्नु । तर पूर्वाग्रह नराख । पूरा नभई कुनै गोप्य कुरा नभन्नु । सजग भएर काम गर । तर धेरै चलाखको भर नपर । सत्य नसुन्ने राजा होइन र सत्य नभन्ने मन्त्री होइन । सत्य सुन्ने र भन्नेकै श्रीवृद्धि हुन्छ । षड्रिपु जितेर र शास्त्रहरूका भाव बुझेर अहर्निश काम गर्ने राजाको कीर्ति रहन्छ । राम्ररी जाँचेर प्रेम र मैत्री राख्नुपर्छ । त्यसपछि तोड्नु हुँदैन । सानो झगडाले पनि दरबार ध्वंस हुने भएकाले यसमा होस राख्नुपर्छ । दरबारका गोप्य कुरा बाहिर गए दरबार नै भस्म हुन्छ । व्यसन छाडेर, इन्द्रिय दमन गरेर र मनोबल दह्रो बनाएर काम गर । सबैसँग समदूरीको व्यवहार गर र सबैसँग विश्वास गर, तर कसैलाई पनि विश्वासघात नगर । न्यायका लागि लड्नु तर अन्याय गर्ने नियतले नलड्नु । सबैका कुरा सुन र शान्त भएर बोल्ने गर । प्रमादी नबन, मान्यजनको सम्मान गर र सीमा नाघेर काम नगर ।

व्यक्तिगत सुखसयलमा नलागी राष्ट्रको हित हुने काममा लाग्नुपर्छ । छिमेकीहरूसँग समभाव राखेर काम गर्नुपर्छ र स्वार्थी र शत्रुहरूलाई चिन्न पनि सक्नुपर्छ । क्रोध र विद्वेषको वशमा परेर काम गर्नुहुँदैन । अल्छी नहोऊ, मनमुटाव र कुण्ठा नराख र सबैको हित हुने काम गर्नु । शत्रुसँग मैत्री राख्नु तर विश्वास नगर्नु । मौका पर्दा शत्रुको समूल विनाश गर्नु । आफ्ना कमजोरी लुकाएर राख्नु र विश्वासिला गुप्चतरहरूद्वारा शत्रुको स्थिति थाहा पाइराख्नु । शत्रुको शत्रु आफ्नो मित्र हुन्छ । उसको सहयोग लिएर शत्रुलाई समाप्त पार्नुपर्छ । आफ्ना विरोधी सबै शत्रु भनेर जान र चारैतिर चलाख र ध्यान दिएर हेर्ने गर । अवस्था हेरेर कोमल र कठोर बन । राजनीतिको बाटो कहिले सोझो र कहिले बाङ्गो हुने भएकाले यसलाई बुझेर राज्यको काम गर्ने गर । वीरले मृत्युसँग पनि लड्ने साहस राख्नुपर्छ । दह्रो र सशक्त बनेर काम गर ।

इतिहासको समेत समीक्षा गरेर यति भनिसकेपछि पृथ्वीनारायण चुप लागे । उनलाई थकाइ लाग्यो, शरीर जर्जर भएर काम्न थाल्यो । तेज घट्तै गयो । अत्यन्त शक्तिशाली राजालाई पनि शरीरभरि घाउ आयो । उनी खिन्न र दुर्बल भए । नाम र काम मात्र बाँकी राखेर उनी परपर सर्दै गए । आकाशबाट घामको पहिलो झुल्का पृथ्वीमा झरेझैं गोरखा राज्यबाट

अघि बढ्दै र कीर्ति फैलाउँदै हिँडेका पृथ्वीनारायण पश्चिमदिशातर्फ लागे र देख्तादेख्तै टाढाटाढा हुँदै गए। उनी अनिवार्य सत्य (मृत्यु) मा पुगे। उनको निधनमा सारा मानिस रोए। राष्ट्र नै आँसुका धारा बगाएर रुन थाल्यो। एकैछिनमा राष्ट्र नै खाली भएजस्तो भयो।

## ३. भाव र विचार

नेपाल एकीकरणका अभियन्ता र महानायक पृथ्वीनारायण शाहको वीरतापूर्ण व्यक्तित्व वीरोचित कार्यहरूको वर्णनमा केन्द्रित भएकाले 'पृथ्वीविजय' खण्डकाव्यमा वीररस अङ्गीरसका रूपमा परिपाक अवस्थामा पुगेको छ। नेपाल एकीकरणको अभियान र राज्य बाँड्ने विषयमा भाइसँग गरेको संवादमा पूर्णतः वीररसको अभिव्यञ्जना भएको छ। पुत्र प्रतापसिंहलाई दिइएको उपदेशमा शान्तरस र पृथ्वीको घाउ, अशक्तता र अवसानमा चाहिँ करुणरसको अनुभूति पनि तीव्र बन्न पुगेको छ। यसरी यस काव्यमा करुण र शान्तरसको पनि अभिव्यक्ति पाइन्छ तापनि यसले अङ्गी वीररसलाई परिपुष्ट पार्न सहयोग गरेकाले 'पृथ्वीविजय' वीररसप्रधान काव्य भएकोमा सन्देह रहन्न।

भाव र विचारको समन्वय गर्ने काव्यकारिता भएका खण्डकाव्यकारले यहाँ पनि राष्ट्रवादी विचारको प्रस्तुति गर्नुभएको छ। राष्ट्र र जनता बलियो हुन अनेकता होइन एकता आवश्यक छ जसबाट राष्ट्रिय अस्मिता सुरक्षित रहिरहन सक्छ भन्ने विचार यस काव्यबाट प्रवाहित गरिएको छ। राजा र प्रजाको सद्भाव, सहकार्य, सहयोग र सहभागिताबाट नै राष्ट्रिय अभियान सफल हुन सक्छ भन्ने कविको धारणालाई खण्डकाव्यले प्रकाशित गरेको छ। दुःखसाथ आर्जित राज्य बाँड्ने होइन, अखण्डित र सुरक्षित राख्नुपर्छ। पितापुर्खाको नासोलाई अमिनले कित्ताकाट गरेर जमिन भाग लगाएझैं टुक्राटुक्रा पारेर बाँड्ने र भाइभाइ मिलेर राजा बन्ने हो भने राष्ट्र ध्वस्त र विनष्ट हुन्छ। त्यो कदापि गर्नु हुँदैन। पृथ्वीनारायण ठुलो देशको शासक बन्न मात्र चाहने व्यक्ति थिएनन्, दूरदर्शी नेता र

बुद्धिमान् राजा पनि थिए । उनले दिव्योपदेशमा भनेका र निर्देशन गरेका सूत्रहरूलाई राज्य सञ्चालनका आधार बनाउने हो भने नेपाल सबल, समृद्ध र शक्तिशाली बन्छ भन्ने विचार यहाँ पाइन्छ ।

जसले नेपाल बनायो र बचायो त्यसप्रति हामी सबै नेपाली सधैँ कृतज्ञ हुनुपर्छ । पृथ्वीनारायणले हामीलाई सुम्पेको यो शान्त र सुन्दर मुलुकको रक्षा गर्नु सबैको कर्तव्य हो भन्ने चिन्तन पनि यस काव्यमा पाउन सकिन्छ । पृथ्वीनारायणजस्ता महान् राजाका उत्तराधिकारीहरू पनि उनी जस्तै योग्य, सक्षम, दूरदर्शी, राष्ट्रवादी र शक्तिशाली हुनुपर्छ भन्ने अभिप्राय पृथ्वीले पुत्र प्रतापसिंहलाई दिएको अर्ती उपदेशमा झल्केको पाइन्छ । राष्ट्रका नायकहरूले आफुले गरेका कामहरूको समीक्षा गरी सन्ततिलाई मार्गनिर्देशन गरे र सन्ततिले पनि त्यसको अनुसरण गरे भने राष्ट्र तथा जनताको हित हुन्छ भन्ने तार्किक विचार पनि यस खण्डकाव्यमा व्यक्त भएको छ । आफु र आफ्नो राष्ट्र तथा अस्तित्वको रक्षाका लागि साहस र सङ्कल्पका साथ लड्नु पर्ने जोसिलो विचार खण्डकाव्यकार व्यक्त गर्नुहुन्छ ।

यस खण्डकाव्यमा राजा वा शासकले आर्जन गर्नुपर्ने गुण र अवलम्बन गर्नुपर्ने नीतिमाथि पनि विचार गरिएको छ । युद्धको सञ्चालन, राजकाजको सम्पादन, सैन्यसङ्गठन, जातीय सन्तुलन, पारिवारिक सद्भाव र सहयोग, शत्रु र मित्रहरूप्रति गरिने व्यवहारका विषयमा राजा वा शासकले आर्जन गर्नुपर्ने गुणबारे यहाँ प्रकाश पारिएको छ । सिङ्गो खण्डकाव्यलाई आधार मानेर हेर्दा राजा, जनता, सैनिक र सेवकका कर्तव्य उल्लेख गरी सबै वर्गले राष्ट्रलाई सर्वोच्च मानेर काम गर्नुपर्ने र राष्ट्रकै लागि बाँच्न र मर्न पनि तयार हुनुपर्ने जोसिलो विचार यहाँ अभिव्यक्त भएको पाइन्छ ।

## ४. कलाशिल्प

'पृथ्वीविजय' मन्दाक्रान्ता, शार्दूलविक्रीडित, उपेन्द्रवज्रा र वसन्ततिलका छन्दको प्रयोग गरी लेखिएको खण्डकाव्य हो । यसलाई काव्यकारले ऐतिहासिक काव्य नामकरण गर्नुभएको छ जुन विधागत

दृष्टिबाट खण्डकाव्यमै समाविष्ट हुन्छ । राष्ट्रवादी भावले भरिएको यो काव्य राष्ट्रिय एकता, अखण्डता, स्वतन्त्रता र संरक्षणको दूरदर्शी चेतना दिने वैचारिक रचना पनि हो । भावुक व्यक्तिहरूलाई काव्यकलाको सीपबाट भावनामा बगाइदिने र बौद्धिक एवम् वैचारिक वर्गलाई राजनीतिक विचार दिई आदर्श शासक बन्न प्रेरणा दिने क्षमता यस काव्यमा पाइन्छ । सर्ग, खण्ड, भाग, अध्याय आदि नामकरण नगरी पृथ्वीनारायण शाहको नेपाल एकीकरण अभियान प्रारम्भ हुनुपूर्वको व्यक्तित्व र वृत्तान्तलाई पूर्वार्ध र अभियान प्रारम्भ भइसकेपछिका कार्य, उनका उपदेश र कारुणिक अवसानलाई उत्तरार्धमा विभक्त गरी रचना गरिएको यस काव्यले पृथ्वीनारायणको जीवनी र व्यक्तित्वको प्रकाशन मात्र नगरी नेपालको इतिहासको एउटा महत्त्वपूर्ण कालखण्डको पनि दिग्दर्शन गराएको छ। यस अर्थमा ‘पृथ्वीविजय’ इतिहासको काव्यीकरण पनि बन्न पुगेको छ र भीमनिधि तिवारी, माधव घिमिरे जस्ता स्थापित स्रष्टाहरूले अघि बढाएको इतिहासको काव्यात्मक प्रस्तुति गर्ने परम्पराको उत्कृष्ट अनुगामी पनि हुन पुगेको छ ।

काव्यकारका अन्य कविता काव्यमा जस्तै ‘पृथ्वीविजय’मा पनि अलङ्कारहरूको सहज आधान भएको छ। यस्ता प्रयोगले भाव तिख्खर, विचार प्रभावकारी र शक्तिशाली भएको छ । पाण्डित्य प्रदर्शनको सट्टा भाव र विचारको तीव्र प्रवाहलाई लिप्यङ्कन गर्ने क्रममा आएका यी अलङ्कारहरूले काव्यकारको कवित्वशक्तिको साक्ष्य प्रस्तुत गरेको पाइन्छ । उदाहरणका लागि उत्साहले भरिएका पृथ्वीनारायण शाहको नेतृत्वमा नेपाल एकीकरणका लागि गोरखावासी कसरी तयार भए त्यसको वर्णन स्वभावोक्ति अलङ्कारका माध्यमबाट यसरी गरिएको पाइन्छ –

युवा उठे जाँगर जोस बोकी,
उठे सिपाही हतियार बोकी ।
उठे प्रजा सामल सातु बोकी,
आमा उठे आसिक दीप बोकी ॥ (पृ.६०

यसै गरी निम्नलिखित श्लोकहरूमा उपमाको सौन्दर्य झल्किएको पाइन्छ –

पासा जुवा युवति वा मृगया सुरामा,
कैल्यै बसेन लत यी नहुने कुरामा ।
अत्यन्त उज्ज्वल थियो उनको चरित्र,
पृथ्वी भए उदित सूर्य सरी पवित्र ॥ (पृ.१९)

सङ्क्षेपमा सकल बातहरू सुनाई,
पृथ्वी भए चुप गयो मनको थकाइ ।
ज्ञातव्य दिव्य उपदेश गरेर बल्ल,
छाती भयो सुमनझैं उनको प्रफुल्ल ॥ (पृ.३७)

सोही दुरन्त बल साहस सुस्तसुस्त,
बन्दै गयो क्रमिक दुर्बल खिन्न लस्त ।
संसाँझमा विशद सौर्य खिची समस्त ।
जान्छन् डुबेर जसरी भइ सूर्य अस्त ॥ (पृ.४७)

छोटा छन्दका सीमित श्लोकमा पनि नेपाली जातिको वीरता, साहस, सङ्कल्प र स्वाभिमानलाई जगाउने राष्ट्रभक्तिको भावना प्रभावकारी रूपमा अभिव्यक्त गर्न काव्यकारले विशिष्ट क्षमता देखाउनु भएको छ । यी दुई श्लोक यस कथनका पुष्टिकारक प्रमाण हुन् –

नेपालकै खातिर बाँच्नुपर्छ,
नेपालकै खातिर मर्नुपर्छ ।
उद्देश्य यौटै लिई जुट्नुपर्छ,
काली जगाई सब उठ्नुपर्छ ॥ (पृ.११)

स्वअस्मिता निम्ति अवश्य लड्छौं,
दुर्धर्ष सङ्घर्ष गरेर बढ्छौं ।
आउन् ठुला जो जति शक्तिशाली,
झुक्तैन कैल्यै पनि गोरखाली ॥ (पृ.१२)

राज्य बाँड्न हातमा फित्ता लिएर तम्तयार भई बसेका विखण्डनकारी तत्त्वलाई पृथ्वीनारायणको दूरदर्शी भनाइबाट चोटिलो उत्तर दिइएको छ र विखण्डनका विरुद्ध खबरदारी पनि गरिएको छ –

देख्छौ उदाहरण जो छ अगाडि ताजा,
त्यो मल्ल राज्य सकियो अब छन् न राजा ।
आएर भूल नगरौं अब फेरि सोही,
बाँडेर राज्य बढ्दैन अगाडि कोही ॥ (पृ.२६)

लामो सरकारी सेवाका क्रममा घुस्याहा भ्रष्टाचारी कर्मचारीहरूलाई मात्र होइन आफ्नै मन्त्रालयका मन्त्रीलाई समेत कारवाही गरी गराई तिरिखिरी खेलाएबापत राष्ट्रको उच्च मानपदवी समेत प्राप्त गर्नुभएका काव्यकारले घुसका विषयमा पृथ्वीनारायणले व्यक्त गरेको धारणालाई कवितामा ढालेर प्रस्तुत गर्नुभएको छ र त्यस्ता तत्त्वहरूलाई कविताकै भाषामा कडा चेतावनी पनि दिनुभएको छ –

जो दिन्छ घूस अथवा अरूबाट लिन्छ,
त्यो शत्रु हो मुलुकको रिपुमा गनिन्छ ।
त्यस्ता कपूत जनमा ममता नगर्नू,
छानेर हुर्मत लिई धनमान हर्नू ॥ (पृ.३४)

राजा कस्तो हुनुपर्छ त्यसको सानो झलक सङ्क्षिप्त र सारगर्भित रूपमा यसरी प्रस्तुत गरिएको छ –

राजा दयालु हुनुपर्छ विवेक गर्ने,
आफ्ना प्रजा सकलको सुख दुःख हर्ने ।
सेना तिखारी सब राख्नु दरो बनाई,
यी सार हुन् मुलुकका बुझ सारलाई ॥ (पृ.३४)

पृथ्वीनारायण शाहले दिएको दिव्योपदेश वर्तमान र भविष्यका लागि पनि उत्तिकै सामयिक छ। देशलाई आफ्नु बिर्ता सम्झेर ढलीमली

गर्ने वर्तमान विखण्डनकारी शासकहरूलाई नै भनेझैं उनले भनेको कुरा काव्यकार सरल र सटीक ढङ्गमा यसरी व्यक्त गर्नुहुन्छ –

यौटा कुरा हरघडी मनभित्र सम्झ,
यो राष्ट्र व्यक्तिगत हो कहिल्यै नसम्झ ।
आज्यौं सबै जन मिली तरबार मारी,
यो हो सचेत जनको सब फूलबारी ॥ (पृ.३२)

पृथ्वीनारायण उपदेशक मात्र थिएनन्, आत्मसमीक्षक पनि थिए । विशाल नेपालको निर्माण गरेर पनि उनले गर्न चाहेका सबै सुधार हुन सकेनन् । यसमा के कमी कमजोरी भयो त्यसको खोजीमा उनी लाग्छन् र त्यसलाई सुधार गरेर अघि बढ्न चाहन्छन् । उनको आत्मसमीक्षा गर्ने प्रवृत्तिको प्रमाण यसरी दिइएको पाइन्छ –

नेपाल सिर्जन गरी सब एक पारेँ,
जो सक्तथेँ अघि सरेर सबै सुधारेँ ।
धेरै गरेँ तर सुधार भएन एक,
गल्ती कहाँ हुन गयो छ यही उदेक ॥ (पृ.३८)

'पृथ्वीविजय' मा विभिन्न ठाउँमा मार्मिक र सारगर्भित सूक्तिहरूको प्रयोग भएको छ । मूल कथ्य पृथ्वीनारायणको उपदेशमा आधारित भए पनि काव्यकारले आफ्नो काव्यप्रतिभाबाट मौलिक सूक्तिहरूको अभिव्यक्ति दिनुभएको छ । निम्नलिखित तीन ओटा श्लोकलाई उदाहरणका रूपमा अघि सार्न सकिन्छ –

गर्थे पदार्पण जहाँ पृथिवी अगाडि,
हुन्थे समर्पित सबै बलराज्य छाडी ।
उद्दीप्त शौर्य सजिलै कसले सहन्छ,
को सिंहका मुख परिकन मूर्ख बन्छ ॥ (पृ.१५)

जस्तै परे पनि कसै नबनी हताश,
विश्वास साथ पछिको लिई पूर्ण आस ।
जो बढ्छ कर्मपथमा भयले छुँदैन,
सङ्कल्प व्यर्थ उसको कहिल्यै हुँदैन ॥ (पृ.१६)

राजा भुरे जति थिए क्रमले हराए,
ठूलाहरू पनि सबै मनमा डराए ।
आए लडे तर गए पर ती हटेर,
के लड्छ ? सिंहसँग स्याल कतै डटेर ॥ (पृ.२०)

यस खण्डकाव्यको शीर्षक चयनमा पनि खण्डकाव्यकारले बौद्धिक र आलङ्कारिक सीप देखाउनुभएको पाइन्छ । 'पृथ्वीविजय' को एउटा अर्थ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको विजय भन्ने अर्थ हो भने अर्को अर्थ नेपाली धर्ती वा पृथ्वीका थुम्के राज्यहरूमाथिको दिग्विजय भन्ने पनि हो । यसरी व्यक्तिराजाको पनि विजय र उनले पृथ्वी (नेपाल) मा गरेको पनि विजय भन्ने द्व्यर्थीश्लेष अलङ्कारको विन्यास शीर्षकविधानमै भएको पाइन्छ । छन्दसिद्धि, सहज अलङ्कार विधान, मौलिक प्रस्तुति, भाव र विचारको सन्तुलन र राष्ट्रप्रेमको प्रवाहलाई प्रतिभाका बलबाट कलाकारिताको ढाँचामा बदलेर व्यक्त गर्ने सफलता काव्यकारलाई प्राप्त भएको पाइन्छ ।

## ५. निष्कर्ष

'पृथ्वीविजय' नेपालका निर्माता ऐतिहासिक महापुरुष पृथ्वीनारयाण शाहलाई नायकका रूपमा वरण गरेर लेखिएको उत्कृष्ट छन्दोबद्ध खण्डकाव्य हो । यसमा गोरखा राज्यको तात्कालिक पृष्ठभूमि र परिवेशलाई देखाउँदै राजा पृथ्वीनारायण शाहको व्यक्तित्व, चिन्तन, दर्शन र राष्ट्रप्रेमको भावनालाई कवितात्मक शिल्पशैलीमा प्रस्तुत गरेर काव्यकारले इतिहासलाई नै

साहित्यमा रूपान्तरण गरिदिनु भएको देखिन्छ। पृथ्वीनारायणको व्यक्तित्व र वक्तव्य दुवै तात्कालिक गोरखालीहरूका लागि मात्र नभई वर्तमानका हामी सबै नेपालीहरूका लागि पनि जीवनयापन एवं राष्ट्रसञ्चालनका लागि ऊर्जस्वी स्पन्दन भएको तथ्य यस काव्यले सिद्ध गरिदिएको छ। शासक र शासित दुवै वर्गका अधिकार, कर्तव्य र दायित्वको सर्वेक्षण गर्ने यस खण्डकाव्यले एकातिर पृथ्वीनारायण शाहप्रति श्रद्धा र कृतज्ञताको भाव अर्पण गरेको पाइन्छ भने अर्कातिर उनका नीति र उपदेशलाई अनुसरण गरी राष्ट्रको सञ्चालन एवम् रक्षा गर्नुपर्ने सविनय आग्रह पनि गरेको देखिन्छ। छन्दसिद्ध काव्यकारले अलङ्कारहरूको पनि सहज आयोजन गर्दै सुभाषितहरूको प्रयोगबाट काव्यलाई अझ लालित्यपूर्ण र श्रुतिरम्य बनाएको पाइन्छ। प्रस्तुत काव्यले पृथ्वीनारायण शाहलाई आफुमात्र असल र योग्य राजा बन्न चाहने व्यक्तिका रूपमा प्रस्तुत नगरी उत्तराधिकारीहरूलाई पनि सक्षम र दूरदर्शी शासक बनाउन चाहने जिम्मेवार नायकका रूपमा प्रस्तुत गरेको छ। पृथ्वीका उपदेश हाम्रा लागि सधैंका लागि शाश्वत मन्त्र भएकाले तिनको अनुसरण हुनैपर्ने विचार खण्डकाव्यकारले व्यक्त गर्नुभएको छ। त्यसबाट नेपालका शासकहरू पृथ्वीनारायणजस्तै दूरदर्शी, राष्ट्रवादी, लोकप्रिय र समावेशी स्वभावका होऊन् भन्ने काव्यकारको अभिलाषा पनि प्रकट भइरहेको देखिन्छ। एकताले शक्ति र विखण्डनले विनाश निम्त्याउने भएकाले महत्त्वाकाङ्क्षी साशकहरूले राज्य टुक्र्याएर राजा बन्ने सपना देख्नु हुँदैन भन्ने राष्ट्रवादी विचार यहाँ पाइन्छ। इतिहासका महापुरुषहरू हाम्रा प्रेरणाका अजस्र स्रोत भएकाले उनीहरूका जीवन र कर्मबाट शिक्षा लिएर अघि बढ्नुपर्छ र उनीहरूप्रति सधैं कृतज्ञ पनि हुनुपर्छ भन्ने शिक्षा र सन्देश यस काव्यले दिएको छ। इतिहासलाई काव्यकलाको साँचोमा ढालेर सरस बनाई मौलिक प्रस्तुति गर्न सक्ने काव्यकारको कवित्व प्रशंसनीय देखिन्छ।



# वन्दना २०६८ का भूमिकाबाट

[अपि स्वर्णमयीं लङ्कां न मे लक्ष्मण रोचते ।
जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी ॥

वाल्मीकि रामायणको उपर्युक्त सदुक्तिले हामीहरूलाई वन्दनाको सृजना गर्ने प्रेरणा दिएको हो। दाङ तुलसीपुरको अञ्चलाधीशकार्यालयको सहायक अञ्चलाधीश पदमा कार्यरत रहँदा २०३७ साल श्रावण ३० गते मैले मेरी प्रातःस्मरणीया गुरुमाताको सम्झनामा 'उनको सम्झनामा' भन्ने कविता लेखेको थिएँ। त्यो कविता मेरो प्रथम कवितासङ्ग्रह 'सिर्जनाका फूलहरू २०५१' मा प्रकाशन भइसकेको छ। २०५२ साल माघ १ गते मेरी पूजनीया माताको स्मृतिमा मैले रचना गरेको 'श्रद्धाञ्जलि' नामक शोक खण्डकाव्य प्रकाशित भयो । त्यसपछि पनि मैले मेरा विभिन्न रचनाहरूमा माता रन्धतादेवी, पिता धर्मदत्त भट्टराई, गुरुमाता अर्थात् आमै बालकुमारी र कान्छी काकी सरस्वतीदेवीका सम्बन्धमा समेत संस्मरण लेख्ने गरेको छु। ती रचनाहरूमध्येमा पनि मेरो अनुस्मृति नामक ग्रन्थमा जानेसम्म विस्तृत रूपमा उल्लेख गरेको छु। यो क्रम पछि प्रकाशित हुने मेरा ग्रन्थहरूमा पनि रहने छ। तैत्तिरीयोपनिषद्को शिक्षावल्लीको प्रथम वल्लीको ११ औँ अनुवाक्मा उल्लेख भएको मातृदेवो भव, पितृदेवो भव र आचार्यदेवो भव भन्ने उपदेशले पनि हामीहरूलाई यो लेख्न प्रेरणा दिएको हो।

यस वन्दना काव्याञ्जलिमा मैले माता, पिता र गुरुमाताका सम्झनामा लेखिएका कविताहरूका साथै मेरी धर्मपत्नी इन्दिराद्वारा आफ्नी आमा अर्थात् मेरी जायामाता जानुकादेवीका नाममा लेखिएको कविता पनि यस वन्दनामा समावेश गरिएको छ । आदरणीय माता, पिता र गुरुजनप्रति श्रद्धाञ्जलिस्वरूप हामी दम्पतीले कविताहरू रचना गरेर यस वन्दनामा प्रकाशित गरेका हौँ। यो नै हाम्रो उहाँहरूप्रति रहेको अगाध श्रद्धा र भक्तिको प्रतीक हो।

यस वन्दनाको माध्यमबाट हामीहरू माहिला बा स्वर्गीय कुलप्रसाद भट्टराई, उहाँका स्वर्गीया दुवै पत्नीहरू वसुन्धरादेवी र विष्णुदेवीको पनि सम्झना गर्दछौँ । कान्छा बा स्वर्गीय चन्द्रकान्त भट्टराई र उहाँकी पत्नी स्वर्गीया सरस्वतीदेवीको सम्झना गर्नु हामीहरू आफ्नु कर्तव्य ठान्दछौँ ।

अन्त्यमा स्वर्गीय जायापिता हरिकृष्ण पोखेलप्रति पनि श्रद्धाञ्जलि अर्पण गर्दै यसमा नाम उल्लेख नभएका ज्ञात तथा अज्ञात सम्पूर्ण पितृहरूमा पनि श्रद्धासुमन अर्पण गर्दछौँ । ]

# वन्दना २०६८

## १. संरचना

शरदकुमार भट्टराई र इन्दिरा भट्टराईको सहलेखनमा तयार भएको 'वन्दना' माता, पिता, गुरुमाता, सासू र कान्छी काकीप्रति श्रद्धाञ्जलि प्रकट गर्दै लेखिएको काव्य हो । यस काव्यमा काव्यकारकी माता रन्धता, पिता धर्मदत्त र आमै गुरुमाता बालकुमारीप्रति काव्यकारले र काव्यकर्त्रीकी माता जानुकादेवी पोखरेलप्रति काव्यकर्त्रीले नै श्रद्धाञ्जलि प्रकट गर्दै वन्दना प्रस्तुत गरिएको छ । काव्यकारकी कान्छी काकी सरस्वतीदेवीको चाहिँ रङ्गीन तस्बिर मात्र समावेश गरिएको छ। अरू पात्रहरूको पनि यथास्थान रङ्गीन तस्बिर राखिएको छ । माता, पिता, गुरुमाता, आमा र कान्छी काकी शीर्षकका पाँच भागमा विभक्त यस काव्यमा विभिन्न शास्त्रीय छन्दका १६७ श्लोकहरू समावेश भएका छन् । काव्यकार र काव्यकर्त्रीले यस काव्यलाई 'वन्दना' शीर्षक राखे तापनि कस्तो वर्गको काव्य हो भन्ने उल्लेख गरेको देखिँदैन तथापि पितामाता र अन्य मान्यजनप्रति श्रद्धा, सम्मान र वन्दना अर्पण गरिएको यो रचना खण्डकाव्यधर्मी नै बन्न पुगेको छ। रचनाकारद्वयले जुनजुन पात्रका विषयमा काव्यको रचना गर्नुभए तापनि काव्यमा उल्लिखित सबै दिवङ्गत पात्रहरूप्रति समान श्रद्धा, सम्मान, सेवा, शोक र समर्पणको भाव भएकाले यो काव्य स्रष्टाद्वयकै शोकोद्गारको संयुक्त अभिव्यञ्जना बनेको पाइन्छ । दुवै स्रष्टाको मातृभक्ति, पितृभक्ति र गुरुभक्तिको प्रत्यक्ष प्रमाणका रूपमा यस काव्यको रचना भएको छ ।

## २. आख्यानविधान

'वन्दना' आख्यानलाई भन्दा पनि चरित्रचित्रणलाई महत्त्व दिने काव्य बनेको छ। तिनै चरित्रहरूका विशेषता वर्णन गर्ने क्रममा आख्यान चूर्णकको प्रयोग भएको छ। त्यसलाई सङ्क्षेपमा यसरी देखाउन सकिन्छ।

### (क) माता

हिमालबाट बग्दै आएकी दुधकोसीको किनारमा शान्त र सुरम्य गाउँ लामिडाँडा अवस्थित छ । भट्टराईकुलका एकथरी पुर्खा दुभे गाउँबाट यही लामिडाँडामा आई बसोबास गर्छन् । तिनकै सन्तानका रूपमा काव्यकारका ब्रह्मज्ञानी पिता धर्मदत्त भट्टराईको जन्म हुन्छ। बाक्सिलाका दाहाल कुलकी लक्षणसम्पन्ना रन्धतादेवीसँग धर्मदत्तको विवाह हुन्छ । धर्मदत्त र रन्धताका कान्छा सुपुत्रका रूपमा काव्यकारको जन्म हुन्छ ।

कालक्रममा धर्मदत्त र रन्धताका दश सन्तान हुन्छन् तापनि पाँच सन्तान मात्र दीर्घायु हुन्छन्, पाँच सन्तानको सानैमा निधन हुन्छ । घरधन्दाको चटारो, धेरै सन्तानको जन्म र शोकका कारण सानै उमेरमा पनि रन्धता रोगी भइन् तर कर्तव्यबाट कहिल्यै विचलित भइनन्। दिनभर एउटी आदर्श गृहिणीले गर्नुपर्ने सम्पूर्ण काम गर्ने रन्धता सधैं आफ्ना पति, सन्तति, सासूससुरा लगायत सबैको सेवा र सम्मान गर्दथिन् । अभावलाई पनि लुकाएर, शोकलाई दबाएर र पढ्न गएका छोराको ममतामा पग्लिएर उनी धर्मकर्म पनि प्रशस्त गर्दथिन्। पतिसँग पुत्रहरूको खबर बुझ्ने र उनीहरू आउने बाटो हेरेर बस्ने रन्धता मातृवात्सल्यकी अथाह सिन्धु थिइन्। सपना नराम्रो देख्ता पनि हत्तपत्त वरपीपलमा पानी चढाउने र छोराहरूको कल्याणकामना गर्ने अनि चाडबाडमा उनीहरू घर आउँदा अपार हर्ष मान्ने र नआउँदा रोएर निराश हुने उनको स्वभाव थियो । छोराहरूको पढाइ बढ्दा र जागिरमा उन्नति हुँदा धर्मप्रिया रन्धतालाई आफ्नो जपतपको प्राप्ति हो भन्ने विश्वास लाग्थ्यो । जागिरका कारणबाट छोराहरू बारम्बार लामिडाँडा घर जान असमर्थ

भएपछि उनीहरूलाई सजिलैसँग भेट्न र सँगै बस्न पाउने आशाले उनी पतिका साथ सुनसरी बसाई सरिन् । वार्धक्यले गाल्दै लगेपछि रन्धतालाई हिँडडुल गर्न गाह्रो हुन्छ र उनी ओछ्यान पर्छिन् । छोराछोरीहरू उनको यथाशक्य सेवा र उपचार गर्छन् । जतिखेर पनि सुतिरहेका कारणले उनका शरीरमा भीष्मका शरीरमा लागेका बाणका घाउ जस्तै धेरै घाउ हुन्छन् । पहिले अरूको सेवा टहल गर्ने र आफ्नो सुखसयललाई वास्ता नगर्ने रन्धता रामनाम मात्र जप्ने, बोल्न नसक्ने अवस्थामा पुग्छिन् । यस्तै दुःख र वेदनामा उनको निधन हुन्छ ।

परिजनहरू शोकाकुल हुन्छन् । काव्यकार हडबडाएर घर पुग्नुहुन्छ र शास्त्रीय विधिविधान अनुसार सम्पूर्ण और्ध्वदेहिक कर्म गर्नुहुन्छ । रन्धताको स्युँदोमा सिन्दूर हुँदै मुक्त हुने सदिच्छा पूरा हुन्छ । रन्धताको निधन भएकै दिन (२०४५ साल भदौ ५ गते) पूर्वी नेपालमा विनाशकारी भूकम्प आउँछ र त्यसको प्रभाव देशका सबै ठाउँमा पर्छ । पुण्यकी खानी रन्धता छोडेर गएकामा धरती दुःख मानी हल्लिएको आभास काव्यकारलाई हुन्छ । आमाको अभावमा काव्यकारलाई जगत् नै अन्धकारमय लागेको छ । काव्यकारका पिताको पनि अत्यन्त शोकाकुल भएर केही समयपछि निधन हुन्छ । मातापिता नभएकामा काव्यकारलाई सहिनसक्नु र थामिनसक्नु भएको छ । आर्यघाटमा कोही जल्दा पनि काव्यकारलाई आफ्नै मातापिताको सम्झना हुन्छ । तर एक दिन मर्नै पर्छ भनेर उहाँ वेदान्ती दृष्टिले चित्त बुझाउनु हुन्छ । काव्यकार आमालाई सपनामा आएर आफुलाई शिरमा हात राखिदिन र चित्त शान्त बनाइदिन आग्रह गर्नुहुन्छ । यो काव्य धैर्यको बाँध फोरेर निस्केको र कलम पनि आफुजस्तै रोएर दौडिएको भावुक सन्दर्भ कविले उल्लेख गर्नुभएको छ । गएका मातापिता कहिल्यै पनि नपाइने भएकाले काव्यकार वागमतीको किनारमा बसेर वाणीरूपी श्राद्ध वा तर्पण स्वरूप यस काव्यको रचना गरेको आत्मकथन गर्नुहुन्छ ।

गोरखाबाट पूर्वतिर सिन्धु (पाल्चोक), सालु (रामेछाप) मा बिर्ता पाई क्रमशः रावा दुबे हुँदै पुर्खाहरू रावा लामिडाँडामा आई बसोबास गर्ने

थाले। दूधकोसी र रावा खोलाको किनारमा अवस्थित यो गाउँ प्राकृतिक रूपमा उच्च डाँडो, घना जङ्गल र लेकबेसीले युक्त छ। यो ब्रह्मवस्ती बनेको छ। यसै गाउँको सभ्य, सुसंस्कृत र आचारनिष्ठ भट्टराई कुलमा बाबा (पिता) धर्मदत्तको जन्म भयो। बाबा खलक चार भाइ थिए। तिनमा धर्मदत्तका कान्छा भाइको चाँडै निधन भएकाले उनकी पत्नी (काव्यकारकी काकी सरस्वती) ले काव्यकारकी आमासँग धर्मकर्म गरेर जीवन बिताइन्। बाबा (पिता) ले बालककालमै टुहुरा भएकाले घरको सम्पूर्ण दायित्व लिनुपर्‍यो। पिताको बाक्सिलामा विवाह भयो। माहिला भाइ (काव्यकारका काका कुलप्रसाद) छुट्टिएर घरमुन्तिर गई बसोबास गर्न थाले। पिता एक्लै सबै काम गर्न थाले। कुनै सन्तान अल्पायुमै दिवङ्गत भए भने कोही पढ्न र काम गर्न लाखापाखा लागे। बलियो मन भएका पिता आइपरेको जे काम पनि गर्थे। डोका, डाला, गुन्द्री, घुम, नाम्ला, दाम्ला बुन्न र बाट्न पनि बाबा सिपालु थिए। चिना, पात्रो, जन्मकुण्डली बनाउने, पुराण भन्ने, पाठपूजा गर्ने, वैद्यको जस्तो उपचार गर्ने र धामी झाँक्री भएर झारफुक पनि गर्ने पिताले सेवाद्वारा सबैको मन जितेका थिए। छोरा टाढा भएपछि पिता सपत्नी सुनसरी आएर बस्न थाले। त्यहाँ पनि उनी दृढ, निडर, न्यायप्रेमी, सहयोगी र समाजसेवी भएर बसे। गीतामा बताइएको स्थितप्रज्ञजस्तो बनेर उनी लाभ-हानि, आपत्ति-विपत्ति सबै सहँदै धैर्यशील भई बसे। आफ्नो जन्मस्थल छोडेर आएका भए पनि गाउँमा वरिपरि पहाडकै वातावरण र सङ्गतसम्पर्क भएकाले पितामातालाई त्यहाँ पनि लामिडाँडाजस्तै लाग्थ्यो।

बुढ्यौली लागेपछि पिताको सक्रियता घट्यो र पहिलेको गतिविधि लगभग बन्द भयो। त्याग र वैराग्यको भावनाले उनलाई स्थितमति (धीर) बनाउँदै लग्यो। काव्यकारकी आमाको निधन भएपछि पितालाई विरक्तिले ढाक्यो। परिजनप्रतिको आसक्ति घट्तै गएका पिता ब्रह्मज्ञानमा तल्लीन हुन थाले। कतिसम्म भयो भने भेट्न आउने मानिससँग पनि सम्बन्ध छैन भन्दै उनी भेट्न अस्वीकार गर्न थाले। यो उनको ब्रह्मज्ञानप्रतिको

एकाग्रताको परिणाम थियो । पत्नी रन्धतालाई सम्झेर वा संसारलाई बिर्सेर पिता ढोका बन्द गरी बस्तथे । हेर्दाहेर्दै पिता जगत्‌लाई मिथ्या बुझेर र पत्नीवियोगले पीडित भएर कर्मसंन्यासी बन्न पुगे । सन्तानले पिताको सुझबुझ कहाँ गयो ? वा विधुर भएकाले यस्तो अवस्था भयो भन्ने जिज्ञासा समाधान गर्न नपाउँदै उनी समाधि लिएर परमपदमा पुगे ।

**(ख) गुरुमाता (काव्यकारका पिताकी फुपु)**

काव्यकारले आमै भन्ने गरेकी र आदर्श गुरुमाता मान्ने गरेकी बालविधवा बालकुमारी बालबालिकाकी सन्मार्गदर्शिका, दृढव्रती र दीपमय व्यक्तित्व थिइन् । उनी देख्ता एउटी सामान्य नारी थिइन् तर ब्रह्मको चिन्तन गर्ने आत्मज्ञानी उनी काव्यकारलाई शिक्षादीक्षा दिन्थिन् र मीठा कथा सुनाएर असल बन्न प्रेरित गर्थिन् । उनी हिमालयजस्ती उज्याली, नवपुष्पजस्ती कोमल, सतीझैं उच्च आदर्शवादी र हिमालय झैँ उच्च स्थानमा पुगेकी नारी थिइन् । स्वार्थ छोडेर परार्थ लिएर हिँड्ने उनी दीपशिखाजस्तै सबैलाई शिक्षाको ज्योति दिन्थिन् । मनस्विनी र तपस्विनी झैँ प्रेम र राग छोडेर उनी सबैका साथ अग्रगामी भएर रहन्थिन् । गुमाउँदा दुःखी र पाउँदा प्रमत्त नहुने गुरुमाता सागरझैँ अपरिमित र आकाश झैँ निर्मल, शान्त र सौम्य थिइन् । सद्भाव, अनुराग र मृदुभाव भएकी उनी वात्सल्यकी प्रतिमूर्ति थिइन् । ब्रह्मिष्ठ श्रोत्रिय सन्तजस्ती उनी सूर्य र चन्द्रमा जस्ती पनि थिइन् जो स्वर्गमा बसेर धर्तीतिर सुवास र शुभभाव छरिरहेकी छन् जस्तो लाग्छ । सङ्कट हटाई, भय र ताप आफैँ बोकी चरीले बचरा बचाएझैं उनले काव्यकारलगायत सबैलाई रक्षा गरिन्, सुख दिइन् र शिक्षाको आधार निर्माण गरिदिइन् । यस्ता महान् काम गरेकी उनी यस धरामा सहसा विलीन भइन् तर हावामा उनकै सास र माटामै उनकै सुवास फैलिएको आभास हुन्छ । उनी दूर गए पनि काव्यकार उनीबाट सधैँ प्रेरित हुनुहुन्छ र द्वैत वा अद्वैत जे बनेर भए पनि उनलाई भेट्न लालायित हुनुहुन्छ । पढेर पौरख देखाउँला

भनेर घर फर्केका काव्यकारको भेट उनीसँग भएन जसमा उहाँलाई दुःख लागेको छ र गुरुको ऋण तिर्न नपाएकोमा चिन्ता पनि लागेको छ । उनीबाट शिक्षादीक्षा, संस्कार सदाचार सिकेकाले काव्यकारका हृदयमा उनी सधैँ जीवित छन् । यस्ती गुरुमाता अनन्त ब्रह्म बनिन् कि के बनिन् काव्यकारमा उत्कट जिज्ञासा छ। तर आजसम्म जे जति गरिएको छ त्यो सबै उनकै प्रसाद हो भन्ने काव्यकारको दृढ विचार छ।

**(ग) आमा (काव्यकर्त्रीकी आमा)**

प्रारम्भमा काव्यकर्त्रीले आफुलाई कुभिन्डेका हरिकृष्ण पोखरेल र दाहाल कुलबाट विवाह भई आएकी आमा जानुका पोखरेलकी सुपुत्रीका रूपमा चिनाउनु भएको छ। सोझा र सद्व्यवहार भएका भद्र हरिकृष्ण र जानुकाका दुई छोरा र चार छोरी भए। उनीहरू यथासम्भव छोराछोरीहरूलाई पाल्दै, पोस्दै र सुसंस्कृत बनाउँदै थिए । दुर्भाग्यवश पिता हरिकृष्णको असामयिक निधन भयो। आमा विचलित नभई शोकलाई दबाएर सन्तान र स्वजनहरूमा स्नेह र सौहार्द छर्दै अघि बढिरहिन् । दुइटी छोरीको विवाह भएपछि लेखिकाको पनि थाहै नपाउने उमेरमा लामिडाँडामा शरदकुमार भट्टराईसँग विवाह भयो। लेखिकालाई घरमा आइपरेका सबै काम जानी नजानी गर्नुपऱ्यो । लेकबेसी गर्ने, घाँस दाउरा काट्ने, डोको बोक्ने, गाई भैंसीको हेरचाह गर्ने र दुहुने, खेतीपाती गर्ने सबै काम उहाँले गर्नुपऱ्यो । घरमा भएका सबै मान्यजनको सेवाटहलमा अलिकति पनि कमजोरी हुन नदिने स्वभावकी बालगृहिणी लेखिकाले पति पनि पढ्न हिँडेपछि विरहमा दिनरात कटाउनु पऱ्यो । पढाइ र त्यसपछि जागिरको व्यस्त समयमा कहिलेकाहीं पति घर आउँदा र पितामाताको सेवामा लाग्दा उहाँलाई अपार आनन्द लाग्थ्यो । तर छोटो समयका लागि घर आएका पति आफ्नो कार्यक्षेत्रमा जाँदा लेखिकालाई पनि पछिपछि लागुँ जस्तो हुन्थ्यो तर त्यो त्यस बेला सम्भव थिएन। त्यसै बीच लेखिकाकी आमा पनि दुई भाइ छोरा लिएर सुनसरी बसाइँ सरिन् ।

सासूससुराले राम्रो व्यवहार गरेको देखेर दङ्ग पर्नुभएकी लेखिका आफ्नी आमा र पतिलाई बारम्बार सम्झनुहुन्थ्यो । उहाँहरूलाई सपनामा देख्ता पनि अपार हर्ष लाग्थ्यो । पति लिन आउँछन् भन्ने आशा गरेर बसिरहँदा पति पनि देवता जस्तै बनेर घरमा पुग्छन् । पतिसँग जान पाउने आशाले हर्षविभोर हुनु भएकी लेखिका सासूससुराबाट दसैंको टीका लगाएर र आशीर्वाद पाएर पतिसाथ हिँड्न तयार पर्नुहुन्छ । हिँड्ने बेलामा बन्धुबान्धव पनि प्रशस्त आए । सासूससुराले रोएर बिदा दिए । त्यस बेला ६ वर्ष पुगेकी छोरीलाई अघि लगाएर कोसी र रोसीका किनार एवं भीर पहरा छिचोल्दै पहाडी अग्लाअग्ला नाकै ठोकिने उकाली र ओराली पैदल हिँडेर १३ दिनमा छोरी सरीतासहित दम्पती काठमाडौं आइपुग्नुभयो । काठमाडौं गएर पतिसँग बस्ने र घुम्ने इच्छा पूरा भएकोमा लेखिका अति खुसी हुनुभयो । काठमाडौंमा डेरा लिएर रहँदाबस्दा कान्छी छोरी र तीन भाइ छोराहरू पनि जन्मिए । सबै कुरा पाइयो जस्तो लाग्यो ।

लेखिकाका पति सरकारी कामका सिलसिलामा देशका विभिन्न भागमा आउजाउ गरिरहनुहुन्थ्यो । भ्रष्ट, जाली र फटाहाहरूलाई कारवाही गरेर सबैको स्याबासी र सम्मान पाउनु भएका स्वाभिमानी पति सचिवसम्म हुनुभयो । कहिले सात समुद्रपारि गएर उच्च शिक्षा प्राप्त गर्ने र सरकारी काममा व्यस्त हुने पति पनि तुच्छ आशा नराख्ने तर आदर्श कायम राख्ने हुनुहुन्छ ।

अहिले दुइटी छोरीहरू पति र सन्ततिसाथ बसिरहेका छन् भने तीनभाइ छोरा पनि सपरिवार आ-आफ्नो व्यवस्था गरेर बसिरहेका छन् । उनीहरू भेट्न आउँदा बुढाबुढी दम्पतीलाई असीम आनन्द लाग्छ । अहिले काव्यकार र काव्यकर्त्री दम्पती पढेर, गुनेर, पुराण सुनेर, ब्रह्मचर्चा गरेर र  परहित हुने पुण्य गरेर वीतरागी भएर पाहुनाजस्तै बनेर घरमा बसिरहनुभएको छ ।

आफ्नो घरतिरको सङ्क्षिप्त विवरण उल्लेख गरेपछि लेखिका फेरि आफ्नी आमाको प्रसङ्गतर्फ लाग्नुहुन्छ । आमा तराई झरेपछि

भेटघाट गर्न कठिन भयो । आमालाई भेट्न जाँदा स्वर्गीय सुखको अनुभूति हुन्थ्यो । आमा जुनसुकै काममा पनि सफल, साहसी र चतुर गृहिणी थिइन् । उनी कहिले सिंहिनी जस्ती बन्थिन् भने कहिले स्नेहकी दिव्य खानी हुन्थिन् । उनले घरको सबै काम एक्लै उतारिन् । उनले शतायु पाइन् । सय वर्षकी भएपछि उनलाई वार्धक्यले सतायो । हिँड्न डुल्न सकस हुन थालेपछि औषधी उपचारका लागि उनलाई विमानबाट काठमाडौं ल्याइयो । आफ्नै घरमा राखेर सेवा उपचार गर्दा लेखिकालाइ मातृऋणबाट केही मात्रामा भए पनि मुक्त भएको अनुभव भयो । बुढी भए पनि उनी अत्यन्त उज्याली देखिन्थिन् । आमाको सेवा गर्न पाएर लेखिकाको हृदय हलुङ्गो भयो । अज्ञान नाश भएर उऋण भएको अनुभूति उहाँलाई हुन्छ । यस्तैमा आमालाई बिर्सने रोग लाग्यो । हलचल र बोलीचाली सबै बन्द भयो । उनी एकोहोरो सुतिरहने हुनुभएछ । त्यो देखेर ब्रह्मज्ञानी बनेकी जस्तो आभास भएछ । लेखिकालाई सधैं त्रास लाग्थ्यो र कहिलेकाहीँ दिक्क पनि लाग्थ्यो । लेखिकाले आमा भनेर बोलाउँदा नबोल्ने भएकी उनका शरीरभरि घाउ आएका थिए । यसै क्रममा एक दिन बिहानै बोलाउन जाँदा आमाको मृत्यु भइसकेको थियो । उनलाई तुलसीका मठमा ल्याएर रामनाम जप्तै राखियो । लेखिका विचलित मात्र नभई विचेत बन्नुभयो । आमाको अन्तिम संस्कार गरियो । आमालाई बिदा गर्नुपरेकामा सबै जना शोकाकुल भए । पहिले आमा ल्याउँदा खुसी भएको घरपरिवार अहिले दुःखी बनेको थियो तापनि यसलाई मिथ्या ठानेर लेखिका मौनव्रती बन्नुभएको थियो । आमा ब्रह्मलीन भए पनि लेखिकाले अहिलेसम्म पनि चित्त बुझाउन सक्नुभएको छैन । चिनाको नाम लालकुमारी भएकी छोरीलाई आमाले ललिता भन्ने गरेकी र पतिले इन्दिरा भनेर नामकरण गरिएकी लेखिकालाई ती सबै उपाधि मानेर मिथ्या ठान्नुहुन्छ र शाश्वत ब्रह्ममात्र सत्य मान्नुहुन्छ । आमाका लागि केही गर्न सक्ने सामर्थ्य आफुमा केही नभए पनि संस्मरणमात्र

गरेर रक्तको कणका रूपमा रहेकी साहिँली छोरी लेखिका काव्यका माध्यमबाट जन्मदिने आमालाई श्रद्धाञ्जलि अर्पण गर्नुहुन्छ ।

कान्छी काकी शीर्षकको खण्डमा विधवा कान्छी काकी सरस्वतीदेवीको प्रसङ्ग आएको छ । उनी आमा पछिकी ममतामयी नारी थिइन् । उनले भतिजा र भतिजीहरूको लालन, पालन र हेरचाहमा जेठानी रन्धतालाई मन, वचन र कर्मद्वारा सहयोग पुऱ्याउनुका अतिरिक्त खेतीपातीमा समेत पूर्ण सहयोग गरिन् । हाल उनी पनि ब्रह्मलीन भइसकिन् ।

## ३. भाव र विचार

सनातन आर्यसंस्कृतिका निष्ठावान् अनुयायीहरू आफ्ना माता, पिता, परिवारका अग्रज सदस्य, गुरु तथा अन्य मान्यजनलाई गुरुजन मान्दछन् । औपचारिक रूपमा विद्या र शास्त्रको उपदेश दिने पुनीत काम गुरुले गर्दछन् भने जीवनका हरेक क्षणमा मार्गनिर्देशन गर्ने काम माता, पिता लगायत मान्यजनले गर्दछन् । त्यसैले यी सबैलाई एकै शब्दमा 'गुरुजन' शब्दले सम्मान र सम्बोधन गरिन्छ । यिनीहरूलाई आजीवन सेवा सम्मान गर्नुपर्दछ भने जीवनकालपछि पनि तर्पणादि दिएर तृप्त र सन्तुष्ट राख्नुपर्दछ । यसलाई सुपुत्र र सत्शिष्यको अनिवार्य कर्तव्य मानिएको छ । 'वन्दना' काव्य यसै दिशातर्फ अभिमुख छ । यस काव्यमा जति पात्रहरू उल्लिखित छन् ती सबै काव्यकार र लेखिकाका लागि निःसन्देह गुरुजन हुन् । उनीहरूबाट उहाँहरूले भौतिक जीवन मात्र पाउनु भएको छैन आदर्श, अध्यात्म र आचरणको दुर्लभ शिक्षा पनि पाउनु भएको छ । यस काव्यबाट दुबै जनाले आफ्ना गुरुजनहरूप्रति हार्दिक शाब्दिक श्रद्धाञ्जलि समर्पण गर्नुभएको छ । हृदयमा सन्निहित अमूर्त भावलाई काव्यका माध्यमबाट व्यक्त गरेपछि त्यसको स्थायित्व र प्रभावकारिता बढेर जान्छ । यस काव्यमा यस्तै अमूर्त भावहरूमध्ये करुण रसको परिपाक भएको छ । प्रत्येक चरित्रको चारित्रिक विशेषता देखाएर तिनको अवसानमा काव्यकार एवं काव्यकर्त्रीका हृदयमा उद्वेलित शोकलाई सहज रूपमा व्यक्त गर्ने निपुणता यस काव्यमा देखिन्छ ।

अतः 'वन्दना' करुणरसको परिपाक भएको काव्य हो भन्न सकिन्छ। अङ्गी भाव शोक बाहेक उत्साह, निर्वेद, रति आदि स्थायी भावहरू विकीर्ण रूपमा आएका देखिन्छन् । नौ ओटा स्थायी भाव बाहेकका वात्सल्य र भक्ति भावहरू पनि यस काव्यमा प्रतिबिम्बित छन् ।

'वन्दना' को वैचारिक पक्ष पनि सबल छ। प्रत्येक सन्तान र शिष्यले मातापिता एवम् गुरुजनप्रति नतमस्तक भई सेवा गर्नुपर्दछ र श्रद्धा पनि व्यक्त गर्नुपर्दछ भन्ने विचार यस काव्यले दिएको छ। पिता, माता, पति, पत्नी, पुत्र, पुत्री आदि मान्यजन र प्रियजनलाई केन्द्रीय चरित्र बनाई काव्य लेख्ने क्रम चलिरहेकै छ। तर 'वन्दना' मा एउटै काव्यभित्र माता, पिता, गुरुमाता (गुरुआमा) जायामाता वा आमा र कान्छी काकीलाई समावेश गरी संयुक्त रूपमा श्रद्धाञ्जलि समर्पण गरिएको छ। यसबाट गुरुजनवर्गमा पर्ने सबै मान्यजनप्रति कृतज्ञ भई उनीहरूले गरेको कृपाका लागि सधैं ऋणी हुनुपर्छ भन्ने आदर्शवादी विचार यहाँ पाइन्छ। यस काव्यको अर्को मौलिक पक्ष के हो भने काव्यकार र काव्यकर्त्री दुबै जना आफ्ना सासूससुरा आफ्नै मातापितालाई जस्तै सेवा गरिरहनुभएको देखिन्छ । घर लामिडाँडाबाट छोरा बुहारीका रूपमा रहेका काव्यकार र काव्यकर्त्री काठमाडौं प्रस्थान गर्ने बेलामा पितामाता वा सासूससुराले दर्साएको अतिशय ममता तथा काठमाडौं घरमा काव्यकर्त्रीकी आमालाई तराईबाट ल्याई राखेर गरिएको सेवा टहल र औषधोपचारले सबै चरित्रको सबै चरित्रप्रति विद्यमान सौहार्दको प्रमाण पाइन्छ। अतः परिवारमा परस्पर स्नेह, ममता, सद्भाव र सौहार्द हुनुपर्ने आदर्शवादी विचार 'वन्दना'मा अभिव्यक्त भएको पाइन्छ।

## ४. कलाशिल्प

काव्यशास्त्रमा कविको यथार्थ कवित्वभावना प्रबल काव्यमा मापन गर्न सकिन्छ भन्ने एउटा मान्यता छ। 'वन्दना' आभ्यासिक कवित्वको परिणाम नभई सहज, स्वच्छन्द र निर्वाध शोकभावको सहज प्रकाशन हो। यसमा स्रष्टाद्वयले नै काव्यशास्त्रमा बहुचर्चित तत्त्वहरूको सायास

आयोजना गर्ने लोभ देखाएको पाइँदैन । तर पनि छन्दको सफलता, अलङ्कारको सौन्दर्य, मातृत्वको महिमागायन, वैराग्यको स्वरूपदर्शन, वेदान्तदर्शनको सुबोध व्याख्यान र मातापिताको दुर्लभतालाई कलात्मक रूपमा प्रस्तुत गरिएको छ । शास्त्रीय छन्दलाई नर्तकीले आफ्नो शरीरलाई इच्छा अनुसार नचाएझैं नचाउन सक्ने काव्यकौशल यहाँ पाइन्छ । मन्दाक्रान्ता, उपेन्द्रवज्रा, अनुष्टुप् र शार्दूलविक्रीडित छन्दको साङ्गीतिक लयमाधुर्य 'वन्दना' मा झल्किएको पाइन्छ । छन्दोविधानमा पदहरूको अलिकति पनि विचलन नगरी शुद्ध, सुसंस्कृत र परिष्कृत प्रयोग यस काव्यको लोभलाग्दो विशेषता बनेको छ ।

यस काव्यमा अनुप्रासका विविध भेदहरूका साथै उपमा अलङ्कारको सुन्दर प्रयोग भएको छ । उदाहरणका लागि केही श्लोकहरू यसरी अघि सार्न सकिन्छ –

आमा सारै सरल मनकी धर्मकी मूर्ति जस्ती ।
सङ्ली सोझी सलल बहने जाह्नवीमूल जस्ती ।।
आमा साध्वी पति अभिमुखी सूर्यकी फूलजस्ती ।
वर्षा गर्ने अमृत सबमा रातकी जून जस्ती ।। (पृ.४)

सधैँ उजेली गिरिराजजस्ती,
ती वाटिकाकी नव पुष्पजस्ती ।
आदर्श उच्चो दृढता सतीझैँ,
आफैँ उठेकी हिमकी चुलीझैँ ।। (पृ.२५)

यसैगरी निम्न लिखित श्लोकहरूमा उत्प्रेक्षाको झाँकी देख्न सकिन्छ –

आमालाई सहज लिन नै यान वैकुण्ठबाट ।
आयो होला ! अनि त पृथिवी थर्किइन् यानबाट ।।
कामिन् धर्ती थरथर गरी भूमिचालो गएर ।
थर्क्यो चर्क्यो जमिन सहसा क्षुब्ध साह्रै भएर ।। (पृ.११)

सेतो अग्लो हिमशिखरले नित्य छर्थ्यो प्रकाश ।
लाग्थ्यो साँच्चै धवल अति नै शम्भुको अट्टहास ।।
रावा कोसी मृदु जल पिई स्वच्छ ताजा वतास ।
गर्ने गर्थे सघन वनका बीचमा नै निवास ।। (पृ.१७)

छ श्वास ताजा अझ यो हवामा,
छ वासझैँ लाग्दछ मृत्तिकामा ।
बोली छ उस्तै अझ घन्किएको,
मुहार आँखाभरि चम्किएको ।। (पृ.२८)

यस काव्यमा भावलाई शक्तिशाली र सम्प्रेषणीय बनाएर प्रस्तुत गर्ने क्षमता पनि देख्न पाइन्छ । एउटै श्लोकमा मातृत्वको महिमा देखाउन स्रष्टाद्वयलाई सफलता मिलेको छ । जस्तै –

छोरा जान्छन् अति निठुर भै दूर ती मस्त बन्दै ।
आफ्नै पत्नी तनयतनयामात्रमा स्नेह गर्दै ।।
आमा रुन्छिन् प्रतिपल कठै सम्झँदै दुःख मानी ।
माया लान्छे तल तल सधैँ छालले छाल तानी ।। (पृ.७)

वैराग्यको भावना पनि उत्तिकै सम्प्रेष्य बनेर व्यक्त भएको पाइन्छ । जस्तै –

ऐले हामी युगल दुइटै स्वस्थ छौँ साथ बस्छौँ ।
पढ्छौँ गुन्छौँ परहित हुने दानपुण्यादि गर्छौँ ।।
यो हो साह्रै क्षणिक दुनियाँ बस्नु नै छैन धेर ।
हामी बस्छौँ विरत अति भै पाहुनाझैँ बनेर ।। (पृ.३६)

मातपिता दुर्लभ छन् भन्ने भावलाई यस श्लोकंशबाट स्पष्ट पारिएको छ –

मिल्लान् थुप्रै परिजनहरू मिल्छ सत्कीर्तिसार ।
मिल्दैनन् ती जनकजननी फर्किंदै बारबार ।। (पृ.१५)

मृत्युको सन्त्रास, शाश्वतता र दूरगामी प्रभाव कतिसम्म शक्तिशाली हुन्छ त्यसको सशक्त र सटीक उत्तर दिँदै यसले धीर र वीर मानिसलाई पनि अधीर र विचलित बनाइदिन्छ भन्ने सत्यको उद्घाटन यसरी गरिएको छ –

रुन्छौँ छातीभरि विरह ली जान्छ जो रोकिँदैन ।
बस्नेलाई विरह छ सधैँ चल्छ जो रोकिँदैन ।।
मर्नैपर्ने नियति सबको हुन्छ जो रोकिँदैन ।
भन्ने सम्झी विरह मनको रोक्छु जो रोकिँदैन ।। (पृ.१३)

यस काव्यमा पनि वेदान्तदर्शनको प्रभाव र प्रयोग भएकै छ । मान्यजनको वियोगमा शोकाकुल बन्नुभएका स्रष्टाद्वयले वेदान्त दर्शनकै सुधारसबाट मन शान्त पार्ने प्रयास गर्नुभएको छ । जन्म, जगत् र मरणका विषयमा यी श्लोकहरूले बौद्धिक जिज्ञासुहरूलाई दार्शनिक खुराक दिएका छन् –

हाँस्थिन् पैले अनवरत जो धर्मलाई अँगाली ।
रुन्छिन् ऐले विवश बिचरी मृत्युलाई अँगाली ।।
कैले हाँसो रुदन कहिले देखिने घामछाया ।
मिथ्या हो यो क्षणिक दुनियाँ जिन्दगी रामछाया ।। (पृ.९)

यद्वा उनी दूर भएर जाउन्,
यद्वा उनी ब्रह्म बनी बिलाउन् ।
अद्वैत भै भित्र चियाउँला म,
या द्वैत भै भेट्न कि आउँला म ।। (पृ.२८)

चिन्हाको नाम हो लालकुमारी ललिता भनी ।
आमाले दिनु भो नाम इन्दिरा पतिले पनि ॥
मेरा हुन् नाम जे जस्ता मिथ्या हुन् सब यी तर ।
एउटै ब्रह्म हो साँचो जो रहन्छ सधैँभर ॥ (पृ.४०)

## ५. निष्कर्ष

काव्यकार शरदकुमार भट्टराई र काव्यकर्त्री इन्दिरा भट्टराई दम्पतीद्वारा लिखित 'वन्दना' माता, पिता, गुरुमाता र कान्छी काकीप्रति श्रद्धा, भक्ति, सम्मान र अभिवादन प्रकट गर्ने सुन्दर काव्य हो । यसलाई वन्दनाकाव्य, शोककाव्य, श्रद्धाञ्जलिकाव्य वा स्मृतिकाव्य पनि भन्न सकिने अवस्था छँदै छ तापनि कविताको आयामगत विस्तारका दृष्टिबाट हेर्दा यो खण्डकाव्यकै कोटि र कसीमा प्रमाणित हुन्छ । माता, पिता, गुरुमाता लगायतका मान्यजन र गुरुजनलाई जीवनकालमा पनि यथाशक्ति यथामति समर्पित भई सेवा भक्ति गर्नुभएका स्रष्टाद्वयले उनीहरूलाई जीवनान्तर पनि काव्यवाणीबाट सेवा र संस्मरण गरी पितृऋणबाट मुक्त हुने सरल र शास्त्रीय प्रावधान पूरा गरेको पाइन्छ । प्रस्तुत कृति पूर्वतयारी गरी काव्य लेख्ने र कीर्ति प्राप्त गर्ने लालसाले नलेखिएको भए पनि भावावेगको प्रवाहभित्र प्रशस्त काव्यतत्त्वहरूको सन्धान गर्न स्रष्टाद्वयलाई सफलता मिलेको छ । ब्रह्म र जगत्को चिन्तन गर्ने र मानिसलाई शाश्वत सुखदायी मोक्षधामतर्फ प्रवृत्त गराउने अद्वैत वेदान्त दर्शनका अध्येता, ज्ञाता, प्रयोक्ता र अनुयायी भएर पनि लौकिक जीवन व्यतीत गरिरहनु भएका आत्मज्ञानी दम्पतीले यस कृतिमा काव्य र दर्शनको समन्वय गर्नुभएको छ । काव्यपारखीहरूका काव्यको, दार्शनिकहरूका लागि दर्शनको र सांसारिक जीवनमा रमाउन चाहनेहरूका लागि पारिवारिक मोह एवम् ममताको भाव र विचार दिन यो काव्य सक्षम छ । 'वन्दना' का सर्जकद्वयको काव्यप्रतिभा र काव्यकारिता पनि वन्दनीय नै छ ।



# विविध यात्रा २०५५ का भूमिकाबाट

[ यस विविध यात्रा कवितासङ्ग्रहभित्र आफ्ना जीवनका विभिन्न मोडमा विभिन्न कोणले लेखेका कविताहरू सङ्गृहीत भएका छन् । यो जीवन नै जन्मेदेखि अवसानपर्यन्त बृहत् यात्राको श्रृङ्खला हो । आमाको काखमा आएदेखि जीवनको अन्तिम घडीसम्म पनि हाम्रो यात्रा अनवरत चली नै रहन्छ । यसै कारण मैले विविध यात्रा भनेर यसको नामकरण गर्ने धृष्टता गरेको छु । यस सङ्ग्रहमा प्रथम यात्रा बाल्यजीवनबाट सुरु हुन्छ । त्यसपछि आमाको काख हुँदै विभिन्न आरोह अवरोहमा जीवनयात्रा अघि बढ्न थाल्दछ । यात्राका क्रममा कहिले वसन्त, कहिले ग्रीष्म हुँदै ६ ऋतुहरूले हाम्रो जीवनलाई परिक्रमा गरिरहन्छन् र जीवन यिनैको चक्रमा घुमिरहन्छ । कहिले वसन्तको मनोहारी वातावरण, कहिले ग्रीष्मको उत्तप्त प्रचण्ड गर्मी र कहिले वर्षाको झञ्झावात पार गर्दै जीवन शिशिर ऋतुको कठाङ्ग्रिने जाडोमा पुगेर समाप्त हुन्छ ।

जीवनयात्रा केवल ६ ऋतुको घेराभित्र मात्र सीमित नरहेर विभिन्न मार्गमा बाहिर भौंतारिरहन्छ । कहिले अन्तर्मुखी भएर आफु र आफ्नो जीवनका बारेमा, आफु र आफ्नो परिवेशका सम्बन्धमा सोच्न पुग्दछ भने फेरि यदाकदा बहिर्मुखी भएर बाहिरी संसारको विचरण गर्न पुग्दछ । यसै सन्दर्भमा ऊ कहिले उच्च शिखरमा आरोह गर्दछ भने कहिले तराईका समथर भूमितर्फ अवरोह गर्न पुग्दछ । जीवनको विविध यात्राको क्रममा कहिले विश्वखेलमा अमेरिका पुग्दछ, कहिले चीन र कहिले अष्ट्रेलिया हुँदै संसारको भुमरीमा घुमिरहन्छ ।

आखिरी जीवनयात्रा एक परिछिन्न अपूर्ण यात्रा नै त हो, तर पनि सीमित सम्बल र सञ्चिति बोकेर अहर्निश यात्रा गरिरहनु एक बाध्यता हो । ग्रीक लोककथाका पात्र सिसिफसले जस्तो जीवनभरि भारी बोकेर अनवरत आरोह अवरोह गरिरहनुपर्ने सायद नियति नै हो । यसै कारण आधुनिक संसारको चकाचौधबाट आकर्षित हुँदै कहिले सात समुद्रपारको यात्रा त कहिले फेरि अपवर्ग प्राप्तिका लागि तीर्थयात्रातर्फ पनि जीवन अग्रसर हुन्छ ।

यसरी बारम्बार नानाथरीका यात्रामा अघि बढिरहने यो जीवनको विविध यात्रा अन्ततोगत्वा जीवनको अन्तिम यात्राको रूपमा वृद्धावस्थाको रुग्ण मृत्युशय्यामा गएर परिसीमित हुन्छ। यात्राको अवसान यहीं गएर हुन्छ।

यस प्रकार यो कवितासङ्ग्रहको नाम विविध यात्रा रहेको छ। मैले समय समयमा स्वदेश, विदेश र तीर्थयात्राका क्रममा लेखेका कविताका साथै अन्य विविध कविता पनि यसमा समावेश भएका छन् । यसमा बाल्यकालदेखि लिएर वृद्धावस्थाको अन्तिम अवस्थासम्मको अनुभूति समेट्ने प्रयास गरेको छु । यो सङ्ग्रह समग्ररूपमा प्रत्येक चेतनशील कविहृदय भएका रसिक व्यक्तिहरूको साझा अनुभूतिको रूपमा ग्राह्य हुनेछ भन्ने मैले ठानेको छु।

मैले प्रशासनिक कामको अति व्यस्त समयमा पनि केही क्षण निकालेर काव्यसाधना गर्ने र मनमा आएका भावनाहरूलाई कविताको माध्यमबाट संवेदनशील पाठकसमक्ष पुऱ्याउने क्षीण प्रयास गरेको छु। यस प्रयासलाई साकार रूप दिन साझा प्रकाशनले सहयोग गरेकोमा हार्दिक कृतज्ञता ज्ञापन गर्दछु। वार्णिक छन्दमा लेखिएका यी विविध यात्राका कविताहरू पाठकहरूका लागि कति ग्राह्य र रोचक हुन सक्लान्, म सहृदयी पाठकहरूका जिम्मामा सुम्पन चाहन्छु। ]

# विविध यात्रा २०५५

'विविध यात्रा' कवि शरदकुमार भट्टराईले जीवनमा गरेको आत्मबोधलाई अभिव्यक्त गर्ने र जीवनलाई सञ्चालनशील यात्राका रूपमा प्रतिपादित गर्ने ३५ ओटा छन्दोबद्ध कविताहरूको सङ्ग्रह हो। २०५५ सालमा साझा प्रकाशनबाट प्रकाशित यस सङ्ग्रहमा सरकारी कामका सिलसिलामा स्वदेश र विदेशमा गरेका विभिन्न यात्रा, निजी रूपमा गरेका तीर्थयात्रा र तुलनात्मक रूपले गरेका साधारण यात्राप्रसङ्गहरूको प्रस्तुति गर्दै सिङ्गो जीवन नै एउटा गतिशील यात्रा भएको भाव व्यक्त भएको छ। पूर्ववर्ती फुटकर रचना एवम् सङ्ग्रहहरूको तुलनामा भावको

तीव्रता, विचारको उचाइ, बौद्धिकताको गहिराइ एवम् कलात्मक मूल्यका दृष्टिले परिष्कृत देखापर्ने यस सङ्ग्रहका कविताहरूमा बाल्यकालदेखि वृद्धावस्थासम्मका अनुस्मृति, अनुभूति र अनुभवहरूलाई प्रकाशन गरिएको छ। मानवजीवनलाई ॠतु परिवर्तनसँग तुलनीय बनाउँदै ॠतुहरू घुमिफिरी उही रूपमा आए पनि जीवनचाहिँ परिवर्तनमात्र हुने, तर ॠतुहरूभैँ चक्रवत् परिभ्रमण गरेर फेरि फर्केर नआउने, गएको गयै हुने सत्यको प्रस्तुति यी कवितामा भएको छ। जीवनमा जे जे गरे पनि अन्त्यमा यसको अवसान हुन्छ र यात्रा पनि समाप्त हुन्छ भन्दै कविले मानव जीवन कर्मयोगी हुनुपर्ने वैचारिक सन्देश यी कविताहरूमा दिनुभएको छ। सङ्ग्रहमा विविध यात्राको वर्णन भए पनि यसै शीर्षकको कविता नभएको, केवल सम्पूर्ण यात्रालाई समेट्ने गरी साभ्रा शीर्षक ‘विविध यात्रा’ राखिएको हुँदा कविले सम्पूर्ण कविताहरूको सारांश खिच्ने प्रयास गर्नुभएको छ। यस सङ्ग्रहमा सङ्गृहीत सम्पूर्ण कविताहरूको विवरण यस प्रकार छ।

**१. प्रथम यात्रा बाल्यजीवन**

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा शीर्षक अनुरूप नै बाल्यजीवनको वर्णन गरिएको छ। आमा र अभिभावकका लागि अनेकौँ आशा तथा आफ्ना लागि विभिन्न सम्भावना बोकेर जन्मेको र जीवनको यात्रा क्रमशः थालेको भाव यहाँ पाइन्छ। अनुप्रास अलङ्कारको श्रुतिसौन्दर्य र निश्चल एवं स्वाभाविक भावको समन्वय भएको यस कवितामा जन्म र बाल्यजीवनमा प्रारम्भ भएको पहिलो यात्राको क्रमलाई मार्मिक रूपमा देखाइएको छ। जन्मको क्रमलाई यसरी सङ्केत गरिएको छ –

आँखामा रिक्तता बोकी छातीमा भरि सम्भ्रम।
आएँथेँ यस धर्तीमा आमाका गर्भबाट म॥

यसै गरी फूल वा काँडा जे प्राप्त भए पनि जीवनमा श्रम गरेर बाँच्नु पर्ने वर्गका लागि बाल्यजीवन यात्राको पहिलो क्रम भएको भाव यसरी प्रकाशित गरिएको छ –

फूल होस् अथवा काँडा हिँड्नै पर्ने गरी श्रम ।
बाल्यजीवन हो यौटा यात्राको पहिलो क्रम ॥

## २. आमा

उपजाति छन्दमा लेखिएको यस कवितामा आमाको स्नेह, शक्ति, काख र साथको महत्त्व प्रदर्शन गरिएको छ । आमा भए सबै घर उज्यालो तर नभए घरमात्र होइन विश्वब्रह्माण्ड नै अँध्यारो हुने भावुक अभिव्यक्तिका साथै आमाको काख सन्ततिका लागि सिंहासन नै हुने हृदयस्पर्शी भावना यस कवितामा प्रस्तुत भएको छ । सम्पन्नता र विपन्नतामा समान हुने र दुःखदर्दलाई हटाइदिने आमालाई कविले सर्वस्व ठान्नुभएको छ । आमाको काखमा बस्न पाए मृत्युञ्जय मृत्युलाई पनि जित्न सकिने विश्वास कविको छ । जस्तै –

त्यो काख तिम्रो अमरापुरी हो,
संसार तिम्रो मधुमाधुरी हो ।
म बस्छु तिम्रो जब काख पाई,
म जित्छु मृत्युञ्जय मृत्युलाई ॥

जतिसुकै गरिब भए पनि र झुपडीमै बस्नुपरे पनि आमाको साथ र सान्निध्य पाए दरबारको जस्तो सुखसयल भोगेसरह हुने तथा शान्ति र सन्तोष पाइने भाव यस कवितामा व्यक्त भएको छ । 'मातृदेवो भव' भन्ने सनातन वैदिक आदर्श संस्कृतिका अनुयायी कविले यस कवितामा मातृवन्दना गर्दै असीम स्नेह र सुरक्षाका लागि उनीप्रति कृतज्ञता व्यक्त गर्नुभएको छ । यस कवितामा कवि कवि मात्र नभएर एक जना सच्चा मातृभक्त र मातृसेवकका रूपमा कृतज्ञ बन्नुभएको देखिन्छ ।

## ३. दुधकोसी

अनुष्टुप् छन्दका असीओटा पद्यगुच्छमा निबद्ध १६० पद्यको प्रस्तुत रचना लघुकाव्यका रूपमा देखापर्दछ । 'सिर्जनाका फूलहरू' २०५१ को

आवरण पृष्ठको अन्तिमको बाहिरपट्टि उल्लिखित 'मनको भावमा बग' भन्ने शीर्षकका कविताका केही पद्यहरूलाई समेत अति सामान्य संशोधन गरी समावेश गरेर तयार पारिएको यस काव्यमा सगरमाथाको काखमा अवस्थित दुधकुण्डबाट निसृत भई सोलुखुम्बु, खोटाङ, ओखलढुङ्गा, भोजपुर, उदयपुर आदि जिल्ला भएर बग्ने दुधकोसीलाई विविध आकार, आयाम र भूमिकाबाट हेरिएको छ। हिमालय, दुधकुण्ड र दुधकोसीको प्राकृतिक परिवेशलाई कतै वस्तुगत रूपमा र कतै काल्पनिक जगत्मा पुऱ्याएर वर्णन गर्दै नदीको नाम कौशिकी (तद्भव रूप कोसी) रहनुको पौराणिक प्रमाण यसरी दिइएको छ –

ऋषि कौशिकको हो यो तप गर्ने थलो पनि।
यसै कारणले नाम भयो वा कौशिकी भनी ॥
ऋषि कौशिककी बैनी कौशिकी बस्तथिन् यहीँ।
तिनैको नामले यद्वा रह्यो यो नाम वा कहीँ ॥
नुहाए पहिले वंश आई कौशिकका यहीँ।
त्यसैले नाम यो तिम्रो रह्यो कौशिकी वा कहीँ ॥

दुधकोसीकै जल पिएर पितृहरू सन्तुष्ट भएको र यसैमा मानिसहरूले पूजाअर्चना र भाकल गर्ने गरेको अनि उनीहरूको अन्तिम संस्कार पनि यहीँ हुने गरेको स्वाभाविक वर्णन यहाँ पाइन्छ। यस काव्यमा कविको भावना र कल्पनाको हार्दिक उच्छलन मात्र छैन विकासवादी दृष्टिकोण पनि अभिव्यक्त भएको छ। दुधकोसीको जलको सदुपयोग गर्नुपर्ने सल्लाह र सन्देश पनि कविले दिनुभएको छ।

यस काव्यमा दुधकोसीलाई विभिन्न दैवी र मानवीय भूमिकामा पनि उतारिएको पाइन्छ। दुधकोसीको प्राकृतिक भूमिकाका साथसाथै विकास र उन्नतिकी आधारशिला एवम् आमा, रमणी, छोरी आदि मानवीय सम्बन्धको सङ्केत पनि यहाँ भएको छ। प्रकृतिलाई देवत्वकरण र मानवीकरण गर्ने स्वच्छन्दतावादी चेतनाको प्रकाशन यहाँ पाइन्छ। दुधकोसीको गतिशीलता, स्वच्छता, विस्तृति र निःस्वार्थ सेवाका विपरीत मानव अकर्मण्य, दुर्गन्धित, सीमित र स्वार्थी भएको व्यतिरेकी

तुलनाबाट प्रकृतिको सर्वोच्चता स्वीकार गर्ने रुमानी प्रवृत्ति यस काव्यमा प्रकाशित भएको देखिन्छ । यसरी दुधकोसीको प्राकृतिक, पौराणिक, सांस्कृतिक महत्त्वका साथै प्रेरणा र शक्ति प्रदान गर्ने क्षमताको वर्णन गरी त्यसबाट भौतिक विकासको लाभ लिनुपर्ने सामयिक दृष्टिकोण यहाँ व्यक्त भएको छ ।

दुधकोसीलाई आलम्बन बनाए कविले विभिन्न सामाजिक प्रसङ्ग र प्रचलनहरू लाई पनि देखाउनु भएको छ । दुधकोसीले बगाएर सबै चीज तलतिर लैजाने गरेको प्राकृत यथार्थलाई पृष्ठभूमि बनाएर छोरीले माइतीघरको जे भेट्ट्यो त्यही लिएर हिँड्ने प्रवृत्तिप्रति मीठो व्यङ्ग्य गरिएको छ –

लान्छ्यौ हिउँदमा माछा जीवजन्तु तलैतल,
लान्छ्यौ औषधिले युक्त हाम्रो अमृत झैँ जल ।
कस्ती निष्ठुरी हौ यस्ती ? जे भेट्छ्यौ माइतीघर,
बढारेर सबै लान्छ्यौ छोरीले झैँ निरन्तर ।।

यस काव्यमा प्रचलित अलङ्कारहरूको पनि सहज प्रयोग भएको छ । निम्न लिखित दुई ओटा पद्यमा उपमा एवं उपमा र उत्प्रेक्षाको समवेत सौन्दर्य प्रतिविम्बित भएको छ –

उपमा –

भूबनोट नमिल्नाले पानीका मूल शून्य यी ।
अज्ञान र गरीबीले डढेका गाउँफाँट यी ।।
ऋषिका क्रोधले भस्म भएका राजपुत्रझैँ ।
आज यी स्वर्ग चाहन्छन् चाहन्छन् गाउँ स्वर्ग झैँ ।।

उपमा र उत्प्रेक्षा –

गरेर सोह्र शृङ्गार तिमी केही लजाउँदै ।
दायाँ बायाँ नहेरेर हिँडेकी छ्यौ हतारिँदै ।।
पतिको सम्झना आई छोडेर माइतीघर ।
हिँडेकी रमणीजस्तै हिँड्यौ कि ! तिमी सत्वर ।।

निम्नलिखित पद्यमा उत्प्रेक्षाको चमत्कार पाइन्छ –

गर्दा शृङ्गार गौरीले झरेका मोती हुन् कि ! यी ।
यद्वा शङ्करले नाच्ता झरेका स्वेद बिन्दु यी ।।
यद्वा आकाश गङ्गाका झरेका जलका कण ।
झर्छन् चमचमाएर धर्तीमा जो प्रतिक्षण ।।

सूक्तिमय अभिव्यक्तिको प्राधान्य भएका पद्यहरूमा अर्थान्तरन्यास अलङ्कारको मीठास पाइन्छ । जस्तै –

पहिलो हिउँ पानी हो पानी नै बन्छ अन्ततः ।
पूर्वसंस्कार जे हुन्छ त्यै हुन्छ परिणामतः ।।
जब मैदानमा झर्छ्यौ गति बन्दछ मत्थर ।
एकैनास सधैँ चाल कहाँ थामिन सक्छ र !
बग्छ्यौ भत्काउँदै फोर्दै आफ्नू नै परिवेष्टन ।
कहिले गर्छ कल्याण छोटाको गठबन्धन ?
घाममा हिउँ चम्कन्छ थामझैँ हिउँ बन्दछ ।
बडाको साथ लागेमा सानाको भाग्य बन्दछ ।।

कतैकतै उपमा र स्वाभावोक्तिको संयुक्त विन्यास पनि अत्यन्त आकर्षक देखापर्छ । जस्तै –

तिमी झर्नु अघी गङ्गे ! विभिन्न रूप धर्दछ्यौ ।
तिमी आकाशगङ्गाझैँ आकाशैबाट झर्दछ्यौ ।।
बर्सिन्छ्यौ जल भै पैले बीचमा हिउँ बन्दछ्यौ ।
हिउँमा पुरिँदै जान्छ्यौ हिमचट्टान बन्दछ्यौ ।।

यस काव्यमा कविले व्यङ्ग्यार्थका तहमा आफुभित्रको सिर्जनाशक्तिको आराधना पनि गरेको बुझिन्छ । दुधकोसीको चौतर्फी स्वरूप र सामर्थ्यको प्रस्तुतीकरण गरेर आफ्नो कवित्वशक्ति पनि यसै गरी प्रवाहित भइरहोस्

र त्यसबाट सबैको कल्याण सम्भव होस् भन्ने कविको कामना यहाँ अभिव्यञ्जित भएको छ । दुधकोसीको सतत प्रवाह जस्तै आफ्नो काव्यप्रवाहको निरन्तरताप्रति पनि कवि सचेत भएको भावानुभूति यस काव्यमा पाउँन सकिन्छ । दुधकोसी जस्तै काव्य पनि मानवीय हृदयको कल्मष फालिदिने शक्तिशाली प्रवाह हुनुपर्ने कविको याचना छ । काव्यको शक्तिलाई कविले श्लेषमय कथनबाट यसरी सङ्केत गर्नुभएको छ –

बग हे हिमकी पुत्री ! तिमी सागरमा बग ।
पखाली मनका मैला घृणातृष्णा सबै लग ॥
वनको छेउमा बग्छ्यौ मनको छेउमा बग ।
तिमी टाढा कति बग्छ्यौ मेरै रगतमा बग ॥

यहाँ काव्य हृदयबाट निस्कनुपर्ने र अरूको हृदयलाई छुन समर्थ हुनुपर्ने समालोचकीय मान्यता समेत ज्ञातव्य छ । यसरी दुधकोसी काव्यले एकातिर दुधकोसीको चित्रात्मक वर्णन गरेर कविको प्रकृतिप्रेम, धर्मप्रतिको प्रेम, संस्कृतिप्रेम र राष्ट्रप्रेमको भाव प्रवाहित गरेको छ भने अर्कातिर सिर्जनाशक्तिको याचना र आराधना गर्दै हृदयबाट निःसृत काव्यले मात्र सहृदयको हृदयलाई अलौकिक आनन्द प्रदान गर्दछ भन्ने मान्यताको द्योतन पनि गरेको छ ।

## ४. काखमै फेरि आएँ

मन्दाक्रान्ता छन्दमा पाँचओटा श्लोकमा रचित यो कविता भाव, विचार र शिल्पको सन्तुलन भएको सरल तर उत्कृष्ट अभिव्यक्ति हो । कविले अग्ला शिखरतलका गाउँमा जन्मिएर वयोवृद्धिसँगै कर्तव्यबाट विचलित र अकर्तव्यप्रति आकृष्ट हुँदै अघि बढेको आत्मालोचनात्मक स्वीकृतिको अनुभव गर्न सकिने यस कवितामा मातृस्नेह र वात्सल्यको महिमागायनका साथै मातृभक्तिको उदात्त भाव अभिव्यक्त भएको छ । आफुले जीवनमा हाँस्ने, रुने, लुटुपुटु हुने र ताती गर्दै टुकुटुकु हिँड्ने समेत जे जति काम गरे पनि आमाकै हात समाएर गरेको सत्य कविले

श्रद्धापूर्वक यहाँ उद्घाटन गरेको पाइन्छ । जीवनमा अघि बढ्ने क्रममा भीडमा हराएको, रोएको, कराएको, वय व्यतीत गरेको, भित्रभित्रै डराएको भए पनि सम्पूर्ण भ्रमण सकेर अन्त्यमा आमाकै काखमा आइपुगेको मर्मस्पर्शी अभिव्यञ्जना यस कवितामा भएको छ । यस कवितामा वाच्यार्थका तहमा एउटा मातृभक्त सन्तान जे जति कर्म गरे पनि अन्तिममा आमाका काखमा आएर बस्छ भन्ने स्वाभाविक कथन पाइन्छ भने व्यङ्ग्यार्थका तहमा एउटा राष्ट्रभक्त व्यक्ति कार्यवश जहाँ जहाँ विचरण गर्न पुगे पनि अन्ततः आफ्नै मातृभूमिको शरणमा आइपुग्छ भन्ने अभिप्राय पनि पाइन्छ । त्यसभन्दा अझ गहिराइमा गएर अनुशीलन गर्दा जीवन एउटा भ्रमणक्रम भएकाले त्यसलाई पूरा गरेपछि मानिस अन्तमा पराम्बा जगज्जननीको शरणमा पर्न चाहन्छ र त्यसबाट पनि आध्यात्मिक ज्ञानद्वारा परमात्मा परब्रह्ममा मिल्न चाहन्छ भन्ने विचार पनि यस कवितामा प्रतीकात्मक ढङ्गबाट बोध गर्न सकिन्छ । कवि जीवनको अन्तिम साथ परब्रह्मको काख हो भन्ने वेदान्ती शिक्षालाई प्रतीकात्मक रूपमा यसरी प्रसार गर्नुहुन्छ –

बिस्तारै नै जब अघि बढेँ भीडमा नै हराएँ ।
आमा सम्झेँ जति पर गएँ खूब रोएँ कराएँ ।।
हिँड्दा हिँड्दै वय पनि गयो भित्र आफैँ डराएँ ।
फर्कें आमा भ्रमण सकियो काखमै फेरि आएँ ।।

### ५. वसन्त ऋतु

वसन्ततिलका छन्दमा वसन्त ऋतुको वर्णन गरिएको यस कवितामा वसन्तकालको प्रकृति र मानवीय प्रवृत्तिमा देखापर्ने प्रतिक्रिया र परिवर्तनको प्रस्तुतीकरण भएको छ । ऋतुराजका रूपमा सुख्यात कुसुमाकर मानवीय रूप लिएर झुल्किँदै गएको र नयाँ कोपिला र फूल उसको स्वागतमा तत्पर भएको कविकल्पना निकै मनोहारी छ । जाडो गइसकेको र ग्रीष्म आइनसकेको सङ्क्रमणकालमा सक्रिय वसन्तमा सद्धर्मको फल मिले

जस्तै गरी नयाँ विविध बीजहरू टुसा बनेर आएको स्थिति देखाएर कविले आफुभित्रको आस्तिकभावको प्रकाशन गरिरहनु भएको पाइन्छ। वसन्तयाममा बोटवनस्पति, कीटपतङ्ग, पशुवर्ग र मानवजातिमा पनि विविध क्रिया र प्रतिक्रिया देखा परेको वस्तुसत्यलाई कविले उद्घाटित गर्नुभएको छ । कविशिरोमणि लेखनाथ पौड्यालको वसन्तविचारको समेत आंशिक प्रभावको अनुभव गर्न सकिने यस कवितामा प्रसिद्ध अलङ्कारहरूको प्रयोग भएको पाइन्छ। जस्तै –

अनुप्रास –

साना सुसौम्य शिर कुड्मलले निकाले,
पाएर मस्त नवयौवन हाँस्न थाले ।
देखी नयाँ सुमन कैतव भृङ्ग आई,
चुस्तो छ सुस्तसँग मस्त भई रमाई ॥

स्वाभावोक्ति –

आयो वसन्त धरतीभरि पुष्प छर्दै,
निस्के नवीन मुजुरा नवरङ्ग भर्दै ।
को हो ? भनी वनवनै पिक घुम्न थाल्यो,
जागा भई अब चराचर झुम्न थाल्यो ॥

उत्प्रेक्षा –

आए उडेर भमरा शुभ शब्द गर्दै,
आए घुमेर महुरी श्रुतिसार भर्दै ।
ब्यौली बनिन् कि धरती दुलहा वसन्त !
लागे पछाडि भमरा कि त जान जन्त !

दृष्टान्त –

आयो वसन्त ऋतु शीत गरेर पार,
भोग्नै छ ग्रीष्म ऋतुको अति उष्ण मार ।
त्यागी गुणी सकल दुःख सहेर बाँच्छ,
काँडाहरूसँग बसेर गुलाफ हाँस्छ ॥

प्रकृतिको वर्णन, मानवीय चेतनाको प्रकाशन, भाव र विचारको तारतम्य एवम् आलङ्कारिक शैलीशिल्पका दृष्टिले हेर्दा वसन्त ऋतु जस्तै वसन्त कविता पनि मधुरिमापूर्ण भएको निष्कर्ष निस्कन्छ ।

## ६. ग्रीष्म ऋतु

२०५४ सालमा काठमाडौँमा वसन्ततिलका छन्दमा लेखिएको यस कवितामा ग्रीष्म ऋतुको स्वाभाविक प्राकृतिक स्वरूपको सुन्दर वर्णन गरिएको छ। वसन्त ऋतुको मनमोहक वातावरणलाई प्रहार गर्दै अग्निभुजा बढाई सुन्दर वनपुष्पको समेत दहन गरी आएको ग्रीष्मऋतुलाई यहाँ अनेक विम्बका रूपमा प्रस्तुत गरिएको छ । वसन्त ऋतुका राम्रा सुकार्यहरूको विनाश गरी झिँगा र मसकहरूलाई सैन्य जस्तै पछि लगाएर आउने ग्रीष्मले जगत्लाई नै विकृत र विध्वस्त पारेको भाव यहाँ पाइन्छ। ग्रीष्म ऋतुले चारैतिर सुखा र तप्त पारेको भए पनि स्वच्छ र निर्मल सरोवरमा डुबुल्की मारेर शीतलता प्राप्त गर्न सकिने भावाभिव्यक्तिबाट कविले जीवनको राप र सन्तापलाई आत्मज्ञानको माध्यमबाट परिशमन गर्न सकिन्छ भन्ने बैचारिक सन्देश पनि दिन खोज्नु भएको छ। यस कवितामा सर्वसाधारण मानिसले अनुभव गरेको ग्रीष्मकालिक परिस्थितिको चित्रण गरेर कविले ग्रीष्मले वसन्तलाई विस्थापित गरेझैँ ग्रीष्मलाई पनि अर्को ऋतुले विस्थापन गर्छ भन्ने विश्वास व्यक्त गर्दै समयको परिवर्तन सृष्टिको अनिवार्य क्रम हो भन्ने विचार यसरी राख्नुभएको छ –

यै ग्रीष्मबाट पहिले सकियो वसन्त,
त्यस्तै गरेर यसको पनि हुन्छ अन्त ।
घुम्छन् क्रमैसँग सबै ऋतु बारबार,
यो सृष्टिको नियम हो दृढ दुर्निवार ॥

सृष्टि शाश्वत र अनन्त भएकाले यस सृष्टिमा कसैको पनि एकनासले उन्नति नहुने र ज्यादा भएपछि नाश पनि निश्चित हुने नीतिवादी र

नियतिवादी चिन्तन यसरी प्रवाहित गरिएको छ –

यो सृष्टि शाश्वत छ फेरि छ यो अनन्त,
देखिन्न झट्ट यसको पनि आदि अन्त ।
कस्को छ उन्नति सधैँभरि एकनास,
ज्यादा भएपछि सुनिश्चित हुन्छ नाश ।।

यस कवितामा पनि विभिन्न अलङ्कारहरूको चामत्कारिक प्रयोग भएको पाइन्छ । उदाहरणका लागि तीन ओटा अलङ्कारको प्रयोगलाई यसरी देखाउन सकिन्छ –

उपमा –

खोला नदीनदहरू तल लुक्न थाले,
छाँगा प्रवाह झरना पनि सुक्न थाले ।
सुक्तै गए सुजल ताल कुवा इनार,
सद्धर्मका पथ सुकेसरि बारबार ।।

यस उदाहरणमा उपमाका साथै स्वभावोक्तिको पनि संयुक्त सौन्दर्य प्रतिबिम्बित भएको देखिन्छ ।

स्वभावोक्ति –

ज्यादै बढेर गरमी खपिसक्नु छैन,
जे पर्छ काम सबले नगरी हुँदैन ।
दुर्भिक्ष बढ्छ यसमै अनिकाल बढ्छ,
खानापिना कम भईकन कष्ट बढ्छ ।।

उत्प्रेक्षा –

घट्तै गए नदनदी सकिएर पानी,
सोस्यो कि ! ग्रीष्मऋतुले जल पेय ठानी ।
यद्वा गरेर जल सञ्चय माथि तानी,
बर्साउला पछि गएर भएर दानी ।।

## ७. वर्षा ऋतु

सन् १९९७ को अगस्टमा फिलिपिन्स, हनोई र सिङ्गापुरको भ्रमणका समयमा वसन्ततिलका छन्दमा लेखिएको यस कवितामा शीर्षक अनुसार नै वर्षा ऋतुको मनोहारी वर्णन गरिएको छ। उत्तप्त ग्रीष्म ऋतुको प्रस्थान र कालो बादल एवं वज्रपातको आगमनसँगै प्रारम्भ भएको वर्षा ऋतुले धरतीमा वृष्टि गरिदिएर नयाँ जीवनको थालनी गरेको कविभावना यस कवितामा पोखिएको छ। यहाँ पनि पूर्ववर्ती ऋतुवर्णन विषयक कवितामा जस्तै वर्षालाई मानवीय रूप प्रदान गरिएको छ र उसले विभिन्न क्रियाकलाप गरेको सन्दर्भको उल्लेख गरिएको छ। वर्षा ऋतुले गर्ने र यस याममा हुने क्रियाकलापलाई स्वभावोक्ति अलङ्कारका माध्यमबाट यसरी प्रस्तुत गरिएको छ –

सारा जलामय भयो जल बर्सिएर,
निस्के किसानजन गोरु हलो लिएर।
जोतेर जर्जर धरा सब ठिक्क पारी,
गर्छन् किसान अब रोपणको तयारी ॥

यस्ता किसानहरको परिश्रम र विश्रामलाई शब्दचित्रमा यसरी उतारिएको छ –

सारै कडा श्रम गरेर भएर लस्त,
फर्केर राति घरमा अनि सुस्त सुस्त।
बाँडीचुँडी सहज जे जति मिल्छ खाई,
सुत्छन् किसान गहिरो निदमा हराई ॥

तातो ग्रीष्म ऋतुको गर्मी सहेर धर्ती वर्षा ऋतु पर्खिएर बसेकी हुन् कि भन्ने सम्भावनालाई उत्प्रेक्षा अलङ्कारका रूपमा यसरी देखाइएको छ –

उत्तप्त ग्रीष्म ऋतुको अति मार खाई,
तातो अतीव ननिको गरमी बिताई।
दावाग्निको जलनताप सबै सहेर,
धर्ती बसिन् कि ! बरसा ऋतु पर्खिएर ॥

वर्षा ऋतुले मानवका साथै बोटविरुवा र वनस्पतिलाई मात्र नभई वनजङ्गलमा बस्ने कीटपतङ्ग, मृग र पक्षीहरूलाई पनि प्रभावित पारिरहेको छ भन्ने स्वाभाविक चित्र र संवेदनाको प्रस्तुतीकरण गर्दै कविले प्राणीमात्रको हितका लागि सहानुभूति पनि प्रकाशित गर्नुभएको छ –

झाडी बुटेन वनजङ्गल भित्र धेर,
बस्छन् झिँगा मसक डाँस जुका लुकेर ।
भागे खुला चउरमा मृग यो बुझेर,
निथ्रुक्क छन् तर चरा बिचरा रुझेर ॥

सार रूपमा यस कविताले वर्षा ऋतुमा देखिने प्राकृतिक प्रभाव र श्रमिक वर्गले गर्ने श्रमको मूल्यलाई उच्चतम महत्त्व दिएको पाइन्छ । वर्षा वर्णन भए पनि नेपाली प्रकृतिको चित्र र संस्कृतिको सङ्केत यहाँ देखाउन खोजिएको पाइन्छ ।

## ८. शरद् ऋतु

२०५४ सालमा काठमाडौँमा लेखिएको अठार पद्यको यस कवितामा सत्र पद्य वसन्ततिलका छन्दमा र अठारौँ वा अन्तिम पद्य मन्दाक्रान्ता छन्दमा आबद्ध भएका देखिन्छन् । यो कविता पनि शरद् ऋतुको सौन्दर्य जस्तै सुन्दर र भाव, भाषा र लयको समन्वयबाट निकै आकर्षक बनेको छ । यस याममा फूलपात र लहराहरूले धर्ती सुरम्य बनेको छ भने रवि र शशिको प्रकाशले दिन घमाइला र रात उज्याला बनेको सहज कथन यहाँ पाइन्छ । शरद् ऋतुलाई कविले वसन्तकै पुनरागमन भएको हो कि भनेर तुलनात्मक रूपमा हेर्नुभएको छ । जस्तै –

आए सफा शरदका दिन फेरि आए,
यद्वा वसन्त ऋतुकै दिन मुस्कुराए ।
सर्दी सकेर पहिले ऋतुराज आए,
वर्षा सकेर अहिले ऋतु यी उदाए ॥

यहाँ कविले शरद र वसन्तलाई असमान भएर पनि समानजस्तो भएको मीठो कल्पना गर्नुभएको छ।

शरद् ऋतुको सम्पूर्ण प्राकृतिक परिवेशलाई समेटेर एउटै पद्यमा स्वभावोक्ति अलङ्कारको सौन्दर्यसहित वर्णन गर्न सक्ने कविको प्रतिभालाई यस पद्यले प्रमाणित गरेको छ –

बाढी गयो पर सुकेर हिलो हरायो,
यो शारदी सुमन कुड्मल मुस्कुरायो।
खोला नदी सकल छन् अब सौम्य शान्त,
शैलाद्रि पर्वत दिशा सब छन् प्रशान्त ।।

नेपालीका बारी र बगैँचामा फुल्ने नानाथरी फूलको झिलिमिली सारी लाएर धर्ती नै स्वाङ पार्दै आएकी नयाँ दुलही हुन् कि भन्ने सम्भावनाको सङ्केत गर्दै उत्प्रेक्षाको चमत्कार यसरी देखाइएको छ –

छन् फूल सुन्दर सबैतिर भाग्यशाली,
गोदावरी शतमुखी मखना र लाली।
धर्ती उठिन् झिलिमिली पहिरेर सारी,
आइन् नवीन दुलही कि त स्वाँग पारी ।।

कवि भट्टराईका प्रायः काव्य कवितामा पाइने संस्कृति र दर्शनको प्रतिच्छवि यस कवितामा पनि तीव्र रूपमा झल्किएको छ। शरदऋतुमै हाम्रा धेरै सांस्कृतिक चाडपर्व र पूजादि कर्महरू सम्पन्न हुने सांस्कृतिक यथार्थलाई यसरी प्रदर्शन गरिएको छ –

यै शारदीय ऋतुमा शुभ चाडपर्व,
पर्छन् सदैव नवरात्रि र दीपपर्व।
पार्छन् खुसी भगवती गरि पूजनादि,
पूजार्चनादि पनि हुन्छ बुझी अनादि ।।

धार्मिक र दार्शनिक ग्रन्थहरूमा वर्णित सृष्टिक्रमलाई कविले सरल एवं सुबोध शैलीमा देखाउन खोज्नुभएको छ। सृष्टि के हो र कसरी हुन्छ

भन्ने जिज्ञासाको समाधान निम्न लिखित पद्यबाट गरिएको देखिन्छ –

यो चन्द्र-बिम्ब जब झर्दछ माथिबाट,
चम्कन्छ भूतल झिकी अति ठाँटबाँट ।
हो भास्य भूतल र भासक सोमरूप,
यो सृष्टि हो सकल भासक भास्यरूप ॥

छन्दोबद्ध कवितामा सबैतिर अनुप्रासको आयोजना गर्न सफल कविले यस कवितामा यमकको पनि सहज प्रयोग गरेको पाइन्छ । जस्तै –

हावा चली सिरिसिरी मन यो छुँदैन,
उत्ताउलो मदनको दनको हुँदैन ।
हाँस्छन् शशी गगनमण्डलमा उदाई,
निर्जीव जीव सबमा लहरी उठाई ॥

शरद् ऋतु वस्तुतः विभिन्न आधारबाट सौम्य, शान्त र सुन्दर छ । धरती सफा र प्रकृति सुन्दर छ भने मानवीय मनोवृत्ति पनि उमङ्ग र उल्लासले परिपूर्ण छ । यसै ऋतुमा हाम्रा सांस्कृतिक चाडपर्वहरूको आयोजना पनि हुन्छ । यही वस्तुस्थितिलाई मूल आधार बनाएर कविले यस कवितामा शारदी शोभाको भावपूर्ण प्रकाशन गर्नुभएको छ । यो कविता कविको प्रकृति र संस्कृतिलाई हेर्ने बाह्य र आन्तरिक दुवै दृष्टिको संयोजक अभिव्यक्ति बनेको पाइन्छ ।

### ९. हेमन्त ऋतु

२०५४ सालमा काठमाडौँमा लेखिएको वसन्ततिलका छन्दको प्रयोग भएको यस कवितामा हेमन्त ऋतुको चीसोपन र बालीनाली भित्र्याउने कृषिकार्यको वर्णन भएको छ । शरद् ऋतुका सफा दिनलाई पार गर्दै अनि चाडपर्वका उल्लास र उमङ्गलाई पनि शिथिल पार्दै कृषिकार्यमा संलग्न हुने परिश्रमी कृषकहरूको जीवनचर्याको चित्रण यस कवितामा अत्यन्त स्वाभाविक ढङ्गमा उतारिएको पाइन्छ । हेमन्त

ऋतु धनधान्यले परिपूर्ण भएको र सन्तजस्तै उदार, दानी र कर्तव्यरत रहेको भाव यहाँ व्यक्त भएको छ। भरिया आफ्ना गाउँठाउँमा उत्पादन लिएर मधेस झर्ने र मधेसबाट नुन, कपडा, तेल आदि लिएर पहाडपर्वत फर्कने ग्रामीण समाजको प्रचलनलाई उल्लेख गर्दै कविले त्यसबाट आफ्नै गाउँठाउँको यथार्थको पनि चित्रण गर्नुभएको छ। कवि स्वयं किशोरकालमा धानको दाइँ गर्ने काममा प्रत्यक्ष द्रष्टा र सहभागी पनि हुनुहुन्थ्यो। त्यसको शब्दचित्र स्वभावोक्ति अलङ्कारका माध्यमबाट यसरी उतारिएको पाइन्छ –

ताच्छन् खलो र खलियान किसान फेरि,
बाँध्छन् मियोसँग लगीकन गोरु हेरी।
फोरी सबै कुनिउँ धान लगेर हाल्छन्,
माले झुले ह ह भनीकन घुम्न थाल्छन्॥

कवि भट्टराईलाई न वेदान्त दर्शनले छाड्यो न त उहाँले आजीवन यसलाई छाड्न सक्नु भयो। त्यसलाई काव्यकलाको माधुर्य भरेर व्यक्त गर्ने उहाँको निजी विशेषता यस कवितामा पनि प्रतिबिम्बित भएको पाइन्छ। संसार स्वप्नवत् असत्य भएकाले अन्त्यमा शाश्वत सत्यरूप परब्रह्ममा लीन हुनुपर्ने अद्वैत वेदान्त दर्शनको मान्यतालाई काव्यकलासौन्दर्यका माध्यमबाट यसरी स्थापित गरिएको छ –

कोही यहाँ धन असीमित नै कमाओस्,
यद्वा दिओस् कि ! धन दान गरोस् लुटाओस्।
संसार हो क्षणिक स्वप्निल घामछाया,
छोडेर जानु छ भुली सब मोहमाया॥

हेमन्त ऋतु र शरद ऋतुका आ-आफ्नै विशेषता भएजस्तै शरद् ऋतु र हेमन्त ऋतु शीर्षकका कविताका पनि आ-आफ्नै

विशेषता छन् । अरू कविताहरूसँग तुलनात्मक विश्लेषण नगरी हेमन्त ऋतुको मात्र अध्ययन र अनुशीलन गर्दा यो उत्तम रचना देखिन्छ तर शरद् ऋतु कविताको सापेक्षतामा हेर्दा चाहिँ हेमन्त ऋतुमा सूर्यको ताप फिका परेजस्तै कविको कवित्वशक्तिको प्रवाह पनि केही शिथिल भएको अनुभव हुन्छ । शरद् ऋतुको उचाइ हेमन्त ऋतुले भेटिसकेको देखा पर्दैन ।

**१०. शिशिर ऋतु**

जाडो भई गँगरिए सब हातपाउ,
चल्दैन यो कलम मात्र छ हाउभाउ ।
फुर्दैन भाव जति लेख्न म खोजुँ कस्तै,
छोटो भयो शिशिर वर्णन रातजस्तै ॥

शिशिर ऋतुको जाडोबाट कवि स्वयं हातपाउ गँगरिएर भाव नफुरेर कविता लेख्न असमर्थ भएको उपर्युक्त आत्मस्वीकृति जनाउँदै वसन्ततिलका छन्दमा लेखिएको यस कवितामा शिशिरयामको सहज प्राकृतिक अवस्थाको वर्णन भएको छ । शिशिर ऋतुले प्रकृतिमा मात्र नभएर मानवजाति र कविव्यक्तिमा समेत पारेको अतिशय प्रभावलाई कविले यसरी अनुभव गर्नुभएको छ –

छाती भयो बरफझैँ क्षमता हरायो,
कक्रक्क भै सकल तागत थर्थरायो ।
लेख्तै थिएँ तर भएँ अडिएर टक्क,
कस्तो रहेछ ऋतु यो जड पर्छु छक्क ॥

यस ऋतुमा फूलपात सबै झरेका, पर्वतमाला जमेसरि देखिएका, हिमनदी जम्न थालेका र शिरमा हिउँ थपेर हिमाल अझ चम्किएका छन्

भने वृद्धवृद्धा, बालबालिका र विपन्न व्यक्तिहरू लुगलुग कामेर चिसा रात बिताउन बाध्य छन् भन्ने स्वाभाविक वर्णन यहाँ भएको छ। हुस्सु लाग्ने, तुषारो पर्ने, दिन छोटिने र रात लामा हुने यस ऋतुको वर्णनमा पनि अरू कवितामा जस्तै प्रायः स्वाभावोक्ति अलङ्कारको सौन्दर्य अनुभव गर्न सकिन्छ –

बर्सिन्छ रातभर खूब कडा तुसारो,
निस्पट्ट रात अब जम्छ भएर सारो।
जाडो बढी लुगलुगी सब काम्न थाल्छन्,
ओछ्यानमा सिरक कम्बल छाम्न थाल्छन्।

समय बलवान् भएकाले ऋतुहरू पनि परिवर्तित भइरहन्छन् भन्ने वैचरिक पक्षलाई यस पद्यले सङ्केत गरेको छ –

संसार हो सरणि दुस्तर एक नाम,
यो बढ्छ सुस्तसँग काम गरी तमाम।
चक्का घुमेसरि घुम्यो जुन फेरि आज,
धक्का दिई शिशिरको जड यो समाज ॥

प्रस्तुत कविताले पनि शिशिर ऋतुको आधारभूत चित्र उतारेकै छ तापनि कवि स्वयंले आत्मस्वीकृति जनाएझैँ 'वसन्त ऋतु' र 'शरद्ऋतु' को तुलनामा यो केही फिकाजस्तो अनुभव गर्न सकिन्छ।

## ११. ऋतु उपसंहार

६ ओटा ऋतुहरूको वर्णन गरिसकेपछि तिनलाई हेर्ने र बुझ्ने कविको दृष्टिकोण भएको यस कवितामा ऋतु आएर पनि नसकिने र ऋतुगीत गाएर पनि कहिल्यै नसकिने भाव पोख्दै यो प्रकृतिको अनिवारणीय चक्र भएको तर्क प्रस्तुत गरिएको छ। यो सृष्टिको नियम भएको मान्ने कविले यस कवितामा प्रभुको अपार अनन्त महिमा पनि हो

भन्ने मान्यता स्थापित गर्दै आस्थावादी जीवनसरणिको मार्ग अवलम्बन गरेको पाइन्छ । जस्तै –

आए गए ऋतुहरू सुख दुःख बाँडी,
सर्दै गए क्रमिक शेष कुनै नछाडी ।
यो सृष्टिको नियम हो दृढ निर्विकार,
यो हो अनन्त महिमा प्रभुको अपार ॥

यहाँ सृष्टि, प्रकृति र परिवर्तन प्रभु परमात्माको नियम हो भन्ने दार्शनिक विचार पनि प्रवाहित भएको छ ।

## १२. कोषराज

२०५४ सालमा काठमाडौँमा लेखिएको वसन्ततिलका छन्दको यस कवितामा कवि स्वयं आयोजक र सहभागी हुने गरेको कोठे कविगोष्ठी (कोक) का सक्रिय सदस्य एवं कविका भाइउमेरका मित्र कोषराज न्यौपानेको व्यक्तिचरित्र उतारिएको छ । कोषराज कवि र प्राध्यापक हुन् भने स्वभावका हिसाबले अरूको दोषलाई पनि ठुलठुला स्वर र कडा शैलीमा सार्वजनिक गरिदिने छुचा व्यक्ति पनि हुन् । धार्मिक प्रवचनका नाममा धनसङ्ग्रह गर्ने व्यक्तिदेखि राजनीतिक नेता एवं इष्टमित्रलाई समेत छाँस्न बाँकी नराख्ने कोषराजको यथार्थ शब्दचित्र यस कवितामा आएको छ । यस कवितामा कविले कोषराजका कमजोर पक्षसमेत उल्लेख गरे तापनि आदिकवि भानुभक्त आचार्यले आफ्ना मित्र तारापतिलाई घरपरिवारको शान्ति र सुव्यवस्थाका लागि 'वधूशिक्षा' लेखेर मार्गदर्शन गर्न खोजे जस्तै कोषराजका दाजुमित्रका भूमिकामा रहनुभएका कवि भट्टराईले उनलाई सुध्रिन र आत्मालोचना गर्न सुहृत्सम्मित उपदेश दिएको पाइन्छ । कोषराज जस्ता भए पनि कविका लागि चाहिँ नभई नहुने पात्र हुन् भनेर सन्मित्रको उदारभाव यसरी प्रकाशित गरिएको छ –

क्वै भन्दछन् असल सौम्य छ कोषराज,
क्यै भन्दछन् अति छुचो शठ कोषराज ।
जे भन्दछन् मकन ती सबले छुँदैनन्,
ती कोषराज अब ता नभई हुँदैनन् ॥

यस्ता नभई नहुने कोषराजलाई कविले विनयपूर्ण भाषामा सल्लाह पनि दिनुभएको छ –

साँचो र सत्य सहजैसँग नित्य बोल,
झूटो कुरा तर तिमी सहसा नबोल ।
अन्यायको बन तिमी बहुतै नजाती,
सत्कर्मको बन तिमी अति पक्षपाती ॥

सद्ज्ञानका सँग तिमी बन नित्य ज्ञानी,
अज्ञानका सँग तिमी लड शास्त्र जानी ।
सक्छौ भने सँग बसी मन माझ धोऊ,
बेकारमा निहुँ झिकेर छुचो नहोऊ ॥

कोषराजका बानी र व्यवहारलाई देखेर कविलाई उनी परपीडक हुन् भन्ने आशङ्का पनि भएको छ जसलाई यसरी अभिव्यक्त गरिएको छ –

लेख्छौ समीक्षक बनी जति लेख आदि,
देखाउँछौ सकल दोष बनी प्रमादी ।
यो चित्र हो कि ! मनभित्र छ जे जसो हो,
हे कोषराज ! परपीडक छौ कसो हो ?

यसरी यस कवितामा कवि भट्टराईले आफ्ना साहित्यिक सहयात्री एवम् अनुजमित्र कोषराजको चरित्र चित्रण गर्दै उनमा विद्यमान दुर्बल पक्षहरूको निराकरणका लागि कवितात्मक आग्रह र उपदेश दिएको पाइन्छ ।

### १३. भानु

२०५४ सालको भानुजयन्तीका उपलक्ष्यमा काठमाडौँमा लेखिएको लघु आकारको यस कवितामा शीर्षक अनुसार नै आदिकवि भानुभक्त आचार्यले गरेका काम, दिएको योगदान र पाएको सम्मानलाई सटीक ढङ्गबाट वर्णन गरिएको छ । यस कवितामा कवि भट्टराई कविको भूमिकामा मात्र नभई नेपालमा अनेकौँ कवि भए पनि भानुसरिको कवि हुन नसकेको समीक्षात्मक टिप्पणी गर्नुहुन्छ । नेपालीहरूका मुटुमा भिजेका र भरिएका भानु टाढा गए पनि नजिक छन् र उनकै देनले हामी धन्य छौँ भन्ने भाव यस निम्नलिखित पद्यमा अनुभव गर्न सकिन्छ –

जति दूर गए उति छन् नजिकै,
जति देन दिए सब हो उनकै ।
जति दूर गए पनि भानु उनी,
तर छन् सबका मनभित्र उनी ॥

यस पद्यमा आकाशमा भानु (सूर्य) टाढा भए पनि जगत्लाई प्रकाश दिएर नजिक बने जस्तै आदिकवि भानु पनि टाढा (परलोक) गए पनि काव्यरूपी प्रकाशले प्रकाशित गरेर हाम्रा नजिकजस्तै रहेका छन् भन्ने उपमागम्य श्लेषको सौन्दर्य पनि प्रतिबिम्बित भएको पाइन्छ ।

### १४. तिमी

शार्दूलविक्रीडित छन्दमा लेखिएको यस कवितामा 'तिमी' सर्वनामको प्रयोगबाट भ्रष्ट व्यक्ति र प्रवृत्तिको प्रस्तुति गरिएको छ । यहाँ 'तिमी' सर्वनाम त्यस्ता व्यक्तिको बोधक बनेर आएको छ जसले राष्ट्र लुटेर कालो धन सञ्चय गरेका छन् र सबै नैतिक मूल्य र मान्यता समाप्त पारेका छन् । तिनै व्यक्तिहरू इमानदार मानिसलाई दुःख दिने र उपदेश सुनाउने काममा लागेको देख्दा कविलाई आश्चर्यको अनुभूति भएको छ । हृदयमा कालकूट विष भरिएका यी व्यक्तिहरू भ्रष्टहरूबाट

सुरक्षित भएकाले षड्यन्त्रमा मस्त भएका छन् र स्वार्थपूर्तिका निमित्त शिष्टजनको हत्या गर्न समेत तत्पर छन् भन्ने कविको दृष्टिकोण छ। यस्ता दुर्मीति व्यक्तिहरूको दुर्नाम छरपस्ट भएकाले यिनीहरू बाँच्नु पनि व्यर्थ जस्तो लागेर ठाडो प्रश्न गर्दै कवि यसो भन्नुहुन्छ –

के गर्छौ ? धनमात्रले हृदयको मर्दैन तृष्णा भने।
के गर्छौ ? पदमात्रले हरघडी भोग्छौ वितृष्णा भने ॥
आफ्नै लास लिएर यो सडकमा हिँड्छौ तिमी के अझै ?
तिम्रो नाम कुनाममा दरिन गो बाँच्छौ तिमी के अझै ?

तीन दशक भन्दा लामो सरकारी सेवाका उच्च पदमा रही काम गर्नुभएका कविले भ्रष्ट, महाभ्रष्ट र राष्ट्रिय भ्रष्टहरूलाई पनि देख्नुभयो र उनीहरूलाई दण्डको वर्षा पनि गर्नु भयो, गराउनु पनि भयो, तर सङ्गत र सम्पर्क कहिल्यै गर्नुभएन। तिनीहरूलाई सुध्रिन उहाँले कवितात्मक सल्लाह यसरी दिनुभएको छ –

सारै लुब्ध भएर दुर्यश बनी गर्छौ उपद्रो जति।
तिम्रो उठ्तछ भित्रको भ्रम सधैँ मुन्टो उठाई उति ॥
होला उन्नति बाहिरी धन लुटी नासिन्छ भित्री धन।
छोडी यो सब दुष्टता समयमै सन्मार्गगामी बन ॥

समग्रमा यस कविताले सबै अवैधानिक र अनैतिक उपायहरूबाट भ्रष्टाचार गरी कालो धन सङ्ग्रह गर्ने व्यक्तिहरूको प्रवृत्तिप्रति व्यङ्ग्य गर्दै त्यसबाट मुक्त हुन र सच्चिन निःस्वार्थ सल्लाह दिएको पाइन्छ।

**१५. म**

यस भन्दा ठीक पहिले लेखिएको 'तिमी' कवितामा भ्रष्टहरूको प्रवृत्ति र चरित्रको प्रकाशन गरिएको छ भने अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा चाहिँ कविले आत्माख्यान गरेको देखिन्छ। अरूले आफुलाई अनेक रूपमा

हेरेको, बुझेको र टिप्पणी गर्ने गरेको आत्मस्वीकृतिबाट कविले अरूको भन्दा आफ्नो व्यक्तित्व, प्रवृत्ति र परिचय भिन्न भएको सत्यको प्रकाशन यहाँ गर्नुभएको छ। यसलाई निम्नलिखित पद्यमा यसरी प्रकाशित गरिएको छ –

आधार म हुँ कोहीको कोहीको म विनाशक।
म हुँ शासित कोहीको कोहीको म हुँ शाशक ॥
मलाई भेट्तछन् कोही आई सम्बन्ध जोड्दछन्।
मलाई देख्तछन् कोही मुख मोडेर हिँड्दछन् ॥

समयको गति एकातिर छ भने कविको आस्था र विश्वास अर्कातिर छ। मानवीय मूल्यमान्यता, चरित्र र चेतनाको क्रमिक स्खलन र विचलन भइरहेको वर्तमान अवस्थामा कवि आफ्नो संस्कार एवम् आदर्श बोझिलो र अभिशप्त बन्दै गएको कटु यथार्थ स्वीकार गर्दै यसो भन्नुभुन्छ –

मेरो आस्था र विश्वास ऐले हथकडी भयो।
मेरो विशुद्ध संस्कार अति नै बोझिलो भयो ॥
मेरो चरित्र आदर्श अभिशाप हुँदै गयो।
बडाका नेत्रमा सोही काँडाझैँ खट्किने भयो ॥

अरूको बिगार गरेर मानिस आफ्नै विकार पोख्तछ र अरूको नाश गर्न खोजेर आफैँ नासिन पुग्छ भन्ने जीवनदर्शन भएका कविले आफु एउटा मान्छे भएर पनि कसैको दृष्टिदोषका कारण अनेक जस्तै देखिएझैँ परब्रह्म एक र अविचल भए पनि उसको सिर्जनालाई मानिसले अनेक दृष्टिले हेर्ने गरेका हुन् भन्ने अद्वैत वेदान्तको दार्शनिक अवधारणा पनि अभिव्यक्त गर्नुभएको छ –

नाना थरी हुँदै हैन मान्छे मात्र म एक हुँ।
कसैको दृष्टिको दोष भएमात्र अनेक हुँ ॥
जेसुकै कोणले हेरुन् हेर्नेको दृष्टि भेद हो।
म यौटा सत्य हुँ, खालि अरू सारा विभेद हो ॥

उपर्युक्त पद्यमा 'एकोऽहं बहु स्याम' भन्ने वैदिक वाणीको भावानुभूति सरल शैलीमा आएको पाइन्छ ।

### १६. के भनौं

तीन श्लोकमा रचित यस कविताले स्वार्थी र लोभीहरूको झुन्डले राष्ट्र रित्तो पारिसकेको तीतो अनुभव प्रस्तुत गरेको छ । राष्ट्रका लागि न गर्न न त मर्न सक्ने अकर्मण्य कुकर्मीहरूका क्रियाकलापबाट व्यथित कविले यो उद्गार व्यक्त गर्नुभएको बुझिन्छ । राष्ट्रको चिन्ता गर्ने कवि सबैका लागि सुबोध एवम् आलङ्कारिक शैलीमा यसो भन्नुहुन्छ –

सिद्धियो सिद्धियो राष्ट्र यो सिद्धियो,
रित्तियो रित्तियो राष्ट्र यो रित्तियो ।
हेर्छ कल्ले र बेवारिसे भैसक्यो,
गैसक्यो गैसक्यो राष्ट्र यो गैसक्यो ॥

यस कविताले भ्रष्ट र अकर्मण्य व्यक्तिहरूप्रति व्यङ्ग्य गर्दै राष्ट्रको उत्थानका लागि कविले गरेको चिन्तालाई सहभावका रूपमा व्यक्त गरेको पाइन्छ ।

### १७. रोग

२०५४ सालमा काठमाडौँमा लेखिएको तीन श्लोकको यस कवितामा रोग लागेर थलिएको बेलाको पीडादायक अभिव्यक्ति पाइन्छ । रोगले पीडित भएपछि केही बोल्न, अलिकति उठ्न र त्यसपछि केही गर्न चाहने कवि उठ्न सकियो भने पनि त्यसपछि के गर्न सकिने हो, आफैँले नबुझेको कारुणिक भाव पोख्नुहुन्छ –

जुरुक्क उठ्न खोज्छ दीन देह यो,
उठाउने बुता यसै कता गयो ।
उठौँ भने अझै छ व्याप्त दुर्दिन,
उठेर गर्न सक्छु के म बुझ्दिनँ ॥

यस कवितामा रोगले आक्रान्त व्यक्तिका भावतरङ्गलाई देखाएर मनोवैज्ञानिक यथार्थको उद्घाटन गरिएको देखिन्छ।

**१८. तरङ्ग**

२०५४ सालमा काठमाडौँमा लेखिएको यस कविताले पनि रोगले अक्रान्त भएर एक ठाउँमा बसिरहनुपरेको पीडादायी अवस्थाको वर्णन गर्दै प्रभातकालमा गर्नुपर्ने नित्यकर्म गर्न नसकेको र प्रतिदिन मन्दिर जाने क्रम पनि टुटेकोमा दुःख लागेको भावतरङ्ग प्रस्तुत गरिएको छ। शरीर गलित र अस्वस्थ छ तर बाल्यकालदेखिको गतिविधि चक्रभैँ मस्तिष्कमा घुमिरहेकाले कविलाई अति छटपटी भएको छ। रोग र जिजीविषा एकैसाथ बढिरहेको वस्तुस्थिति देखाउँदै हृदयमा दुःख पालेर पनि अन्तहीन भवसागरको तरङ्गमा कीरो भैँ उमङ्गका साथ घुमिरहेको आत्मकथन यहाँ पाइन्छ। जस्तै –

म आज अन्तहीन यो भवाब्धिको तरङ्गमा।
घुमीरहेछु कीटभैँ अभै यहाँ उमङ्गमा॥

जीवनमा जतिसुकै पीडा भए पनि, प्रतिष्ठा गुमे पनि र शरीर निष्क्रिय बने पनि मानिसको जिजीविषा रहिरहन्छ। जसका कारणले ऊ अभ्र बढी पीडित, अपमानित र शिथिल हुन्छ भन्ने वृद्धावस्थाको अनुभव यस कवितामा साधारणीकृत भएको छ।

**१९. माछापुच्छ्रे**

२०५२ सालमा लेखिएको मन्दाक्रान्ता र अन्तिम पद्य उपजाति छन्दमा रचित यस कवितामा सुन्दर नगरी पोखराको उत्तरी भागमा माछाको पुच्छरको आकारमा अनादिकालदेखि अवस्थित माछापुच्छ्रे हिमालको वर्णन गरिएको छ। प्रकृतिपरक यस कवितामा माछापुच्छ्रेलाई मानवीयस्वरूप पनि प्रदान गरिएको छ र कविको

कल्पना र सिर्जनाको प्रेरक स्रोत मानिएको छ। कहिले फेवातालमा झलमल झल्किने, कहिले बादलले ढाकिएर बस्ने र कहिले गाउँबस्ती हँसाई आफु पनि हाँसिरहने माछापुच्छ्रेलाई पोखरामा लुकेर बग्ने सेतीका स्रोतका रूपमा हेरिएको छ। माछापुच्छ्रे आफ्नो सौन्दर्यबाट थुप्रै यात्रीहरूलाई आफुतिर आकर्षित गर्न सफल छ भने उत्तरी चिसो स्याँठ रोकेर सबै प्राणीको रक्षा गर्न समर्थ पनि छ भन्ने कविभावना यहाँ पाइन्छ। यहाँ माछापुच्छ्रेलाई प्रकृति, मानव र समाधि लगाउने तपस्वीको भूमिकामा प्रस्तुत गरेर कविले आफु भित्रको स्वच्छन्दतावादी चेतनाको अभिव्यञ्जना गरेको पाइन्छ। यस्तो माछापुच्छ्रेप्रति कृतज्ञता जनाउँदै हामी सबै उसकै नामबाट आफ्नो परिचय दिन्छौँ भन्ने कविको सङ्कल्प पनि यस कवितामा प्रकट भएको छ। अनुभूतिलाई आलङ्कारिक बनाएर प्रकाशन गर्ने सामर्थ्य यहाँ पनि उत्प्रेक्षा आलङ्कारबाट देखा परेको छ –

हेर्दा सारै नजिक सरि छौ पोखरादेखि माथि।
बस्छौ टाढै तर गिरि तिमी नित्य लाई समाधि॥
मान्छेको यो खपिनसकिने स्वार्थ देखेर चर्को।
मानी झर्को धवल हिमको सुत्तछौ ओढि बर्को॥

यो कविता पाश्चात्य साहित्यमा पनि अत्यधिक प्रचलित सम्बोधनकविता (ओड) शैलीको निकट छ। एउटै पद्यमा माछापुच्छ्रेलाई तीन पटक सम्बोधन गरेर कविले त्यस्तो शैली शिल्पको आस्वादन यसरी गराउनु भएको छ –

माछापुच्छ्रे! प्रथम कविका कल्पना सिर्जना हौ।
माछापुच्छ्रे! रसिक जनका भावना तिर्सना हौ॥
माछापुच्छ्रे! मुकुटमणि हौ पोखराका जुहार।
ऐना नै हौ टलटल तिमी नित्य हेर्ने मुहार॥

## २०. नयाँ पोखरा

पहिले बसेको पोखरामा चौबीस वर्षपछि फेरि पुग्दा कविले त्यहाँ अनुभव गरेको नवीनतालाई केन्द्रीय कथ्य बनाएर २०५४ सालमा पोखरामै लेखिएको अनुष्टुप् छन्दको यस कवितामा पोखराको गतिशीलता र परिवर्तनलाई देखाइएको छ । भूगोल उही छ तर भावना भिन्न छ र फेवाताल उही छ तर मानिसको काम गर्ने ताल भिन्न छ भन्ने कविको तर्क छ। मानिसको अनुहार मात्र होइन धर्तीभित्र लुकेकी सेती पनि अझै नयाँ देखिन्छिन् भन्ने कविको अनुभूति छ। सबैतिर नयाँपनको चहलपहल मात्र देखेपछि कवि पुराना चिह्न खोज्ने क्रममा फेवाभित्र चियाएर हेर्नुहुन्छ र त्यसको गर्भमा माछापुच्छ्रे मात्र पुराना भावना बोकेर तपस्वी जस्तो बसिरहेको कल्पना गर्नुहुन्छ। पोखराको वस्तुवर्णनबाट काल्पनिक भावलोकतर्फ प्रवेश गरेको यस कवितामा फेवाको गर्भमा बसेको माछापुच्छ्रेलाई हाम्रो अनादिकालदेखिको सभ्यता, संस्कृति र परिचयको प्रतीक बनाइएको छ र त्यसबाट हिमालयबाट निःसृत हाम्रो सनातन धर्मदर्शन र संस्कृति प्राचीनतम, अविचल र अन्तहीन छ भन्ने बौद्धिक विचारको प्रवाह गरिएको छ। हाम्रो राष्ट्रको गर्भमा यही सनातन धर्म र संस्कृतिको अस्तित्व जीवित भएको दृष्टिकोण कविले अघि सार्नुभएको छ । तपस्वीको आर्ष व्यक्तित्व प्रदान गरिएको माछापुच्छ्रेको वर्णनमा उपमाको सौन्दर्य पनि प्रतिबिम्बित भएको छ –

उपर्ना हिउँको ओढी नहेरेर कतैतिर ।
तपस्वीसरि निश्चिन्त बसेको छ बनी स्थिर ॥

## २१. मुस्ताङ

२०५४ सालमा युनेस्कोको गोष्ठीमा सहभागी हुन मुस्ताङको जोमसोम जाने क्रममा विमानभित्रै लेखिएको अनुष्टुप् छन्दको यस

कवितामा स्थानीय परिवेशको पर्यङ्कन र कविको अनुभूतिको प्रस्तुतीकरण तीव्र रूपमा भएको छ । विमानको यात्रा गर्दा देखेका र जोमसोम पुगेपछि प्रत्यक्ष भएका प्राकृतिक र सांस्कृतिक स्थलहरूको सौन्दर्य एवम् महत्त्वलाई कविले यहाँ उतार्नुभएको छ। नाङ्गा डाँडादेखि लिएर सेता हिमाल, मुक्तिक्षेत्र, कालीगण्डकी र शालिग्रामको वर्णन यस कवितामा भएको छ । आस्था र भगवद्भक्ति भावले ओतप्रोत कवि मनभरि मुक्तिनाथ दर्शन गर्ने इच्छा राखेर पनि मन्त्रीसँग सरकारी काममा जानुभएकाले त्यो इच्छा पूरा गर्न असमर्थ हुनुभयो तापनि भविष्यमा पूरा गर्ने सोचाइ र सङ्कल्प लिएर त्यहाँबाट फर्किनु भएको यथार्थ कवितामा अवगत गर्न सकिन्छ ।

यस कवितामा पनि विषयवस्तु र कविकल्पनाको अन्तर्मिश्रण सुन्दर ढङ्गबाट भएको छ । नीलगिरि र धवलागिरि वस्तुका रूपमा आएका छन् भने उनीहरूले हाँसेर थरीथरी बात मारेको सन्दर्भ चाहिँ कल्पनाका रूपमा आएको छ। जस्तै –

वारि नीलगिरि हाँस्छन् पारि छन् धवलागिरि ।
हाँसेर दुइटै शैल बात मार्छन् थरीथरी ॥

उत्प्रेक्षाको चमत्कार पनि दर्शनीय रहेको छ। जस्तै –

चारैतर्फ छ शैलेन्द्र सेतो श्रीपेचमण्डित ।
लाग्छ आकाश छोएझैँ एकाकार समन्वित ॥

यसैगरी अनुप्रासको शाब्दी सौन्दर्य, विषयप्रतिपादन र भावप्रवाहको सन्तुलन भएको प्रमाण यी पद्यबाट पाउन सकिन्छ –

खाल्डोमा छ बसेको यो कालीबगरमा तल ।
कालीका जलमा देख्छु हिमको उर्लंदो भल ॥
चुचुरा छन् अति उच्चा चुच्चा छन् अति सुन्दर ।
कैलाश छुन्छ टुप्पीले देखिइन्छन् मनोहर ॥

## २२. दाङ

२०५४ सालमा दाङको बेलभ्फुन्डीमा आयोजित तत्कालीन महेन्द्र संस्कृत विश्वविद्यालय (हाल नेपाल संस्कृत विश्वविद्यालय) को दीक्षान्त समारोहमा विश्वविद्यालयका कुलपति राजा वीरेन्द्रका साथ सहभागी हुन जाने क्रममा हेलिकप्टरमा उड्दा उड्दै लेखिएको अनुष्टुप् छन्दको यस कवितामा हिमशिखर, पहाड र गाउँघरका साथै दाङ उपत्यकाको सुन्दर र स्वाभाविक वर्णन गरिएको छ। यस कवितामा उच्च हिमशिखरहरूको सौन्दर्य र त्यसमा गाँसिएको हाम्रो सम्मानको वर्णन पनि भएको छ। दाङलाई दानवीरहरू बस्ने शुभस्थल हो भनेर प्रशंसा गरिएको छ। दाङ उपत्यकाको भूगोल र वहाँको उर्वर भूमिलाई निकै स्वाभाविक रूपमा उतारिएको छ –

रापती सरिताछेउ दाङ सारै रमाइलो ।
उपत्यका सधैँ राम्रो तराई यो घमाइलो ॥
दाङ देखिन्छ विस्तीर्ण खेतबारी गरागरा ।
तोरी धान भ्फुलेका छन् देखिइन्छन् हराभरा ॥

## २३. विश्वखेल

सन् १९९६ मा अमेरिकाको एटलान्टा सहरमा आयोजित ओलम्पिक खेलकुदमा नेपाली खेलाडीको टोलीप्रमुख भएर गएको समयमा लेखिएको पञ्चचामर छन्दको यस लामो कवितामा जेटको लामो यात्रा, यात्राका क्रममा जमिनमा देखिएका विविध प्राकृतिक र मानवनिर्मित दृश्य एवं संरचना, जर्मनीको शक्ति र समृद्धि, अमेरिकाको सौन्दर्य र वैभव तथा ओलम्पिक खेलको आयोजना, सुव्यवस्था र सुखद समापन जस्ता मुख्य विषयलाई कवितात्मक वाणी दिइएको छ। कवि सरकारी प्रशासकका रूपमा नेपाली खेलाडीहरूका टोलीप्रमुख बनेर जानुभएकाले अमेरिकाका तत्कालीन राष्ट्रपति बिल क्लिन्टनसँग भेटघाट गर्ने र छोटो संवाद गर्ने ऐतिहासिक अवसर उहाँलाई प्राप्त भयो। नेपालका सर्वोच्च शासकका

लागि समेत दुर्लभ त्यस अवसरको शब्दचित्र पनि यस कवितामा उतारिएको छ । आत्मज्ञानका अभ्यासी कविले आफुले देखेका पात्र र पदार्थ तथा परिवेशलाई समेत सूक्ष्म दृष्टिबाट हेर्ने प्रवृत्ति यस कवितामा पनि झल्काउनु भएको छ । उडिरहेको जेटले उचाइ र गति कसरी लिन्छ भन्ने यथार्थ यस पद्यबाट अवगत गर्न सकिन्छ –

यता घुम्यो उता घुम्यो बटारियो र फन्कियो,
र आखिरी चढ्यो उँभो र माथिबाट घन्कियो ।
सुसाउँदै रिसाउँदै अनन्त माथि जो चढ्यो,
पुगेर माथि व्योममा स्वलक्ष्यतर्फ नै बढ्यो ॥

जेटबाट धर्तीको दृश्यावली हेर्दै जर्मनी पुग्नु भएका कविले यहाँ पाइने आर्यसभ्यताको अवशेष र राष्ट्रको सान एवं शक्तिलाई यसरी सङ्केत गर्नुभएको छ –

सुवास आर्यको अरे यहाँ अझै छ पाइने,
ऋचा पवित्र वेदका यहाँ अझै छ गाइने ।
गरेर टाउको उचो ठड्याइ सव्य तर्जनी,
उठीरहेछ आज यो उही अदम्य जर्मनी ॥

आफ्नो मूल गन्तव्य अमेरिका पुगेपछि कविले जे देख्नुभयो र अनुभव गर्नुभयो त्यसलाई यसरी व्यक्त गरिएको छ –

हराभरा सधैँ सफा रहेछ यो अमेरिका ।
विभिन्न जातजातिको रहेछ सौम्य वाटिका ॥
सुस्वस्थ छन् सबै जना सबै स्वकर्म गर्दछन् ।
बनेर विश्वअग्रणी अमेरिकी समृद्ध छन् ॥

ओलम्पिक खेलकुदको उद्घाटनका क्रममा अमेरिकाका तत्कालीन राष्ट्रपति बिल क्लिन्टनसँग कविको भेट हुन्छ र छोटो संवाद पनि हुन्छ । त्यस क्षणको कवितात्मक प्रस्तुति यस्तो छ –

उठेर सामुमा गई दिएँ जनाउ नामको,
दिएँ सहर्ष सूचना स्वकामको स्वधामको ।
मिलाई हात सुस्तरी गरेँ शुभाभिनन्दन,
प्रफुल्ल भावमा थिए युवा सशक्त क्लिन्टन ॥

खेलकुदको समापन पनि अत्यन्त भव्य, सभ्य र सद्भावपूर्ण थियो । समापनमा सबै जना सँगै बसेको, हिँडेको र खाएको देखेर कविमा आर्षभावनाको उदय हुन्छ र त्यो कविताका रूपमा यसरी व्यक्त हुन्छ –

असाध्य मस्त भै सबै थिए प्रफुल्ल आनन ,
भयो अपूर्व ढङ्गले सुखेल त्यो समापन ।
छ आर्षभावना यहाँ विशुद्ध भावना सँगै,
सँगै बसौँ, सँगै हिँडौँ र खाउँ जे छ सो सँगै ॥

राष्ट्रको गहन जिम्मेवारी वहन गर्दै अन्तरराष्ट्रिय प्रतिष्ठाको विषय बनेको विश्व ओलम्पिक खेलकुदमा नेपाली खेलाडीहरूका टोली नेता बनेर कविले एकातिर आफ्नो प्रशासनिक क्षमताको परिचय दिनुभयो भने अर्कातिर यात्राका मूल प्रसङ्गहरूलाई छन्दोबद्ध कवितामा आबद्ध गरी एकै पटक साहित्यको सेवा पनि गर्नुभयो । काठमाडौँदेखि प्रारम्भ गरेको यात्राका क्रममा उड्दाउड्दै जहाजमा बसेर पनि विविध विषयहरूमा लौकिक र पारलौकिक कविता, काव्य र अद्वैत वेदान्त दर्शन जस्तो दुरूह विषयमा समेत कलम चलाउन अभ्यस्त भइसकेका भट्टराईले जहाजमा समेत काठमाडौँ फर्किएर नटुङ्गिदासम्मको विवरणलाई कविताका रूपमा प्रस्तुत गरेर ऐतिहासिक घटनाको अभिलेख राख्ने काम पनि यस कविताबाट भएको छ । सङ्क्षेपमा हेर्ने हो भने यो कविता यात्रावर्णन, खेलविवरण र भौगोलिक जानकारीको त्रिवेणी हो । यसमा पनि कविले उडिरहेको जेटलाई वर्ण्य विषय बनाएर वेदान्तको प्रभाव देखाउनुभएकै छ –

छ ब्रह्मकै दुरन्त झैँ नजानिने नभेटिने,
सकिन्न पार पाउनै छ सर्वदा लखेटिने ।
उडेर के सकिन्छ यो अथाह नै जतै पनि,
उडी रहेछ जेट यो लिएर वेग तैपनि ॥

## २४. दूरदेश

सन् १९९६ मा संयुक्त राज्य अमेरिकाको एटलान्टा सहरमा आयोजित ओलम्पिक खेलकुदमा भाग लिन गएको समयमा अमेरिकामा बसेका नेपालीहरूले जर्जियाको सामुदायिक भवनमा आयोजना गरेको बृहत् भेलामा वाचन गरिएको पञ्चचामर छन्दको यस कवितामा अर्काको देशमा बसेर पनि आफ्नो मूल्य, मान्यता र मौलिकता नछोड्न नेपालीहरूलाई अनुरोध गरिएको छ। आफ्नो मातृभूमि छोडेर अर्काको देशमा श्रम र सीप खर्च गरे पनि अन्ततः स्वदेशमा नै केही गर्न र स्वदेशकै लागि मर्न उत्प्रेरित गर्ने यस कविताले विदेशमा बस्न बाध्य हुनु परे पनि धीर, कर्मठ र लक्ष्यकेन्द्रित भएर काम गर्न कविले सल्लाह दिनुभएको छ । देशको विकृत अवस्था र अस्थिर राजनीतिले विदेश पलायन भएका युवाहरूलाई नेपाल नै फर्किन सकिन्छ कि भन्ने कविको विनयपूर्ण प्रस्ताव छ –

छ राष्ट्र धर्मराउँदो, छ राजनीति अस्थिर,
अझै छ नृत्य स्वार्थको छ दीनता सबैतिर ।
बसेर दूर देशमा नबिर्स हे युवाहरू !
बरु गएर देशमै गरौँ कि ! काम लौ सुरु ॥

उदार चेतनाका कविले धेरै नेपालीहरूका लागि विदेशको बसाइ रहर नभएर बाध्यता भएको यथार्थ थाहा पाउनु भएको छ। त्यसैले विदेश जानु, त्यहाँ बस्नु, इलम सिक्नु अन्यथा होइन तर आफ्नो बसाइको लक्ष्य पूरा भएपछि स्वदेश नै फर्किनुपर्छ भन्ने कविको सल्लाह यस्तो छ –

पढेर फुर्तिलो भई भरेर जोस जाँगर,
अवश्य फर्क है तिमी स्वदेशमै सरासर ।
सुपुत्रको छ चाहना स्वदेशभित्र सम्प्रति,
बसेर देशभित्र नै बढाउ राष्ट्रको गति ।।

कविलाई विदेशमा बसेका नेपाली युवाहरू नेपाल नफर्किएर विदेशमा नै हराउने हुन् कि भन्ने चिन्ता र चासो पनि छ । युवाले के हुनुपर्छ र के हुनु हुँदैन भन्ने सन्देश एउटै पद्यमा यसरी दिएको पाइन्छ –

प्रकाशझैँ उभो उठे बने दीप्तिमान् रवि,
सदैव चम्क है युवा बनेर राष्ट्रको छवि ।
असाध्य मस्त छौ कि के ! बसेर दूर लोकमा,
हराउँछौ कि वा यतै भुलेर स्वप्नलोकमा ।।

समग्रमा हेर्दा यस कविताले कविको असीम राष्ट्रप्रेमको अभिव्यक्ति दिनुका साथै विदेश र त्यसमा पनि विशेषतः अमेरिकामा विभिन्न प्रयोजनले बसेका नेपालीहरूलाई आफ्नो मूल लक्ष्य पूरा भएपछि स्वदेशमै फर्किन र स्वदेशका लागि केही गर्न अनुरोध गरेको छ । यहाँ 'जननी जन्मभूमिश्च स्वर्गादपि गरीयसी' को अमर भावना कविको कवित्वशक्ति र भाषिक मिठासको सहजात बनेर आएको देखिन्छ ।

**२५. जर्मनी**

सन् १९९६ मा अमेरिकाको एटलान्टामा आयोजित ओलम्पिक खेलकुद समाप्त भएपछि स्वदेश फर्कने क्रममा बाटामा पर्ने जर्मनीको बोनमा दुई रात बस्ता लेखिएको पञ्चचामर छन्दको यस कवितामा जर्मनीको विगत कोट्याउँदै भविष्यमा यो राष्ट्र शक्तिशाली हुने विश्वास व्यक्त गरिएको छ । जर्मनी त्यस्तो राष्ट्र हो जहाँ दुरन्त विश्वयुद्धका चिह्नहरू यत्रतत्र देख्न पाइन्छन् । हिटलरको युद्धउन्मादले ल्याएको

वीभत्स परिणामको पीडा अद्यापि जर्मनीले केही मात्रामा भोगिरहेको छ । यही वस्तुस्थितिलाई कविले उत्प्रेक्षा अलङ्कारको माध्यमबाट यसरी दर्साउनु भएको छ –

छ गन्ध वायुमा अझै वीभत्स ग्यास नर्तन,
निरीह प्राणिको अझै सुनिन्छ आर्त क्रन्दन ।
म सुन्छु शब्द रातमा कराइँदो भयङ्कर,
हिँडी रहेछ वा अझै कुस्वप्न बोकि हिट्लर ॥

त्यसै गरी जर्मनीको विभाजनलाई सङ्केत गर्दै हाल यो राष्ट्र एक भएको र भविष्यमा दबेर बस्नुको सट्टा माथि उठ्छ भन्ने कविको विश्वास छ –

तथापि देख्छु द्वारमा निरीहभाव अङ्कित,
बसेर दूरमा कतै छ मध्यकाल शङ्कित ।
बन्यो उठ्यो फुट्यो यहाँ र फेर एक यो भयो,
कहाँ दबेर बस्छ यो अवश्य उठ्छ उठ्छ यो ।

**२६. चीनको यात्रा**

२०५३ सालमा छिमेकी मित्रराष्ट्र चीनमा गरेको यात्रालाई समेटेर अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा चीनको इतिहास, विकास र वैभवको विवरण दिँदै तिब्बतको वर्तमान स्थितिको झलक प्रस्तुत गरिएको छ । चीनको भ्रमण गर्ने क्रममा साङ्घाई, बेजिङ, छेन्दु र तिब्बत पुग्नुभएका कविले चीन दुःखमा नलत्रेको र शक्तिशाली हुँदा पनि अरूको खान नतम्सिएको भनेर यसलाई असल छिमेकी राष्ट्रका रूपमा हेर्नुभएको छ । चीनमा विभिन्न राजनीतिक एवं सांस्कृतिक क्रान्ति भए पनि प्रजातन्त्र चाहिँ आउन नसकेको सत्य उल्लेख गर्दै आफुभित्र संस्कारका रूपमा सन्निहित प्रजातान्त्रिक विचारको प्रकाशन कविले यहाँ गरेको पाइन्छ । चीनले पहिले के खेप्यो र के गऱ्यो अनि अहिले के गर्दैछ भन्ने तुलनात्मक अवस्थालाई यसरी देखाइएको छ –

कहिल्यै चीन लत्रेन कस्तै दुःख परे पनि ।
चाहेन अरूको खान जस्तै शक्ति भए पनि ।।
खोलेर देशका ढोका भित्र्याई बाहिरी धन ।
आज चीन बढेको छ दिई उन्नतिमा मन ।।

विद्यार्थी अवस्थामा माओको चीनमा भएको साम्यवादी क्रान्तिको अतिशय कठोर र तानाशाही दमन देखेका कविले माओको अवसानपछि चीनको टेनम्यान स्क्वायरमा उठेको आन्दोलनलाई चीनबाट भएको निर्मम दमनलाई कविले यसरी व्यक्त गर्नुभएको छ –

रातो क्रान्ति म देख्तै छु रातो किताब देख्तछु ।
राता सैनिक गर्जेको चारैतिर म देख्तछु ।।
प्रजातन्त्र भनी नारा लागेको दृश्य देख्तछु ।
गोलीको बुटको चर्को गड्गडाहट सुन्दछु ।।

भ्रमणको क्रममा तिब्बत पुग्नुभएका कविले त्यसलाई धर्म, कर्म, आस्था र सभ्यताको स्रोत भूमि मान्नुभएको छ र स्वर्गको रूप पनि ठान्नु भएको छ । यो भूमि उमाको माइतीदेश हो भने शिवको तपस्थली पनि हो । तपस्वीको तपोभूमि र साधुको साधनास्थली पनि यही तिब्बत हो भन्ने धार्मिक सांस्कृतिक प्रसङ्ग यहाँ आएको छ । जस्तै –

धर्मको स्थल यो मानौँ या मानौँ कर्मको स्थल ।
सभ्यताको कि ! यो मानौँ विशुद्ध उद्गमस्थल ।।
आस्थाको केन्द्र हो हाम्रो स्रष्टाको उच्च सिर्जना ।
त्रिविष्टप यही हो वा हाम्रो प्राप्तव्य सिर्जना ।।
उमाको माइतीदेश शिवको हो तपस्थली ।
तपस्वीको तपोभूमि साधुको साधनास्थली ।।

धार्मिक र सांस्कृतिक दृष्टिले उन्नत तिब्बत आज नवीनता प्राप्तिका लागि मौन र निरीह बन्दै गएको अनुभूति कविलाई भएको छ र त्यसको अभिव्यक्ति यसरी भएको छ –

पोटाला देख्छु निर्जीव गुम्बामा देख्छु मौनता ।
देख्छु तिब्बतमा आज चारैतिर निरीहता ।।
ह्लासाखोलाभरी देख्छु आँसु तिब्बतीका अझै ।
दूरको आस राखेर मान्छे बाँच्छ यहाँ अझै ।।

थियो पवित्र यो देश सबैको केन्द्रबिन्दुझैँ ।
अनार्य आर्य साराको थियो मिलन सिन्धुझैँ ।।
तर आज गुमाएर आफ्ना प्राचीन मान्यता ।
यो तिब्बत बढेको छ प्राप्त गर्न नवीनता ।।

तिब्बतबाट नेपाल फर्किने क्रममा माथि विमानबाट देखेका उच्च हिमशिखर, जलकुण्ड, नागबेली परेर प्रवाहित भएका हिमनदी, गहिरा खोँच र हरिया वन देखेर कवि भावुक बन्नुहुन्छ । प्राकृतिक सौन्दर्य र स्वदेशप्रवेशको उमङ्गबाट उद्वेलित बन्नुभएका कविले स्वाभाविक अभिव्यक्ति कवितामा यसरी दिनुभएको छ –

हिमका जलका कुण्ड देखिइन्छन् जताततै ।
नागबेली परी बग्ने नदी छन् चञ्चले कतै ।।
खोँच छन् गहिरा सारै देखिए हरिया वन ।
देखेर तलको दृश्य अति भावुक भो मन ।।

'चीनको यात्रा' लाई यात्रा वर्णन, राजनीतिक सञ्चेतना, भौगोलिक जानकारी, धार्मिक तथा सांस्कृतिक आस्थाभावको समन्वय भएको कविताका रूपमा बुझ्न सकिन्छ । यहाँ यात्राका प्रत्येक प्रसङ्ग कविता बनेर प्रवाहित भएको पाइन्छ । यात्रावर्णन गरेर कवि यस कवितामा काव्यात्मक आस्वादन गराउन सफल हुनुभएको देखिन्छ ।

## २७. अनुभूति

सन् १९९७ मा पाकिस्तानको इस्लामावाद र लाहौरमा गरेको

भ्रमणका बेला लेखिएको शार्दूलविक्रीडित छन्दको यस कवितामा पाकिस्तानको धार्मिक र सांस्कृतिक महत्त्व देखाइएको छ र यसलाई हिन्दु धर्म र आर्यजातिको उद्‌गमस्थलका रूपमा पनि हेरिएको छ। राजनीतिक भागबन्डा भएर मात्र हिन्दु र मुसलमान भिन्न भएर रहेका तर मूल स्थान धमनीमा बहने रगत र उत्पत्तिस्थल एउटै भएको ऐतिहासिक तथ्यलाई कविले उल्लेख गर्नुभएको छ। जस्तै –

देखिन्छन् सब चेहरा सहजमा जानेचिनेकै सरि।
आँखामा अझ स्नेह देख्तछु उही आवाज उस्तै सरि ॥
माटामा अझ गन्ध बस्तछ उही पानी उही बग्दछ।
सारा देख्नु उही तथापि किन हो ! क्यै भिन्न झैँ लाग्दछ ॥

हामी छौँ जति यत्रतत्र अहिले साझा उही मूल हो।
हिन्दूका प्रति राख्तछौ रिस भने तिम्रो महाभूल हो ॥
बन्डा भो जब भूमि यो त्रसित भै भागेर जो जो गए।
बाँकी छन् जति हिन्दु ती पनि यहाँ रोएर बस्ने भए ॥

मुसलमानहरूको बाहुल्य भएको पाकिस्तानमा हिन्दुहरूमाथि थिचोमिचो भएको र उनीहरूको धर्म, संस्कृति र संस्कारलाई समेत घोर अपमान र नष्टभ्रष्ट गरेको कुकृत्य देखेर कविको सनातन हिन्दुधर्म मान्ने हृदयमा आघात पुग्छ। अरूको धर्म र संस्कृतिको रक्षा गर्न र सहिष्णुताको नीति अवलम्बन गर्न कविले निम्नलिखित तीनओटा श्लोकहरूबाट प्रश्न गर्दै सुझाव पनि दिनुभएको छ –

तिम्रा मस्जिद भव्य छन् सब नयाँ भग्नांश छन् मन्दिर।
बोल्छन् मस्त भएर मस्जिदहरू छन् मौन यी मन्दिर ॥
हिन्दू छन् सब दीनहीन बहुतै राख्छौ दबाईकन।
यो कस्तो कुन धर्मको चलन हो आफू तिमी नै भन ॥

फेऱ्यौ नाम र चिह्न हिन्दुहरूका आफ्ना बनायौ सब ।
आफ्नो नै इतिहास मात्र किन हो ! राख्ने भएछौ अब ॥
ऐले मुस्लिम छौ र हिन्दु पहिले आफैँ थियौ रे तिमी ।
हिन्दूकै सब रक्त बग्छ मुटुमा के फेर्न सक्छौ तिमी ?

तिम्रो नै खुस हो कराउ जति नै अल्ला खुदा जे भन ।
खाली धर्म भनेर नै निठुर भै गर्छौ उपद्रो किन ?
आफैँ झैँ अरू देख सृष्टिभरमा श्रीईशको सिर्जन ।
आफु बाँच र बाँच्न देउ अरूको गर्छौ नराम्रो किन ?

राजनीतिक विभाजनले संसारलाई भूगोलमा मात्र बाँडेन भावनामा पनि बाँडिदियो । मूलरूपमा मानवीय प्रवृत्ति र व्यवहार एउटै थियो । पाकिस्तानमा पनि पहिले वेदमन्त्र घन्कने, संन्यासाश्रमको निर्माण हुने, योगी र तपस्वीहरू धुनी बालेर बस्ने र ब्रह्मसमाधिमा रहने गरेको ऐतिहासिक सत्यलाई कविले उद्घाटन गर्नुभएको छ । अहिले इस्लाम धर्मको वर्चस्व रहेको यस देशमा पहिले सनातन हिन्दु धर्म र संस्कृतिको प्रभाव रहेको यथार्थ कवि यसरी सम्झनुहुन्छ –

घन्कन्थे अघि वेदमन्त्र द्विजका सारा यिनै गाउँमा ।
संन्यासाश्रम बन्दथे वनभरी यद्वा यिनै ठाउँमा ॥
योगी तापस अग्निहोत्र सब ती बस्थे जगाई धुनी ।
लाई ब्रह्मसमाधि निश्चल भई बस्थे गुफामा मुनि ॥

## **२८. पूर्वको यात्रा**

सन् १९९७ मा थाइल्यान्ड, फिलिपिन्स, भियतनाम र सिङ्गापुर आदि देशहरूमा शिक्षासम्बन्धी गतिविधिको अध्ययन गर्ने क्रममा सिङ्गापुर भ्रमणको अवसरमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा विमानयात्रा एवम् सम्बद्ध देशहरूको शैक्षिक, सामाजिक, आर्थिक र

राजनीतिक अवस्थाका साथै कविले अनुभव गरेका अरू तथ्यहरूको पनि प्रस्तुति भएको छ। विश्वको भौगोलिक दृष्टिले पूर्व भागमा पर्ने यी देशहरूको भ्रमणलाई कविले 'पूर्वको यात्रा' शीर्षकमा समेट्न खोज्नुको कारण पनि स्वाभाविक बन्न पुगेको छ। ती देशका विभिन्न शैक्षिक संस्थाको भ्रमण र व्यक्तिहरूसँगको सम्पर्कको विवरणलाई कविले अनुभूतिमा घोलेर भावमय र सरस तुल्याउनुभएको छ। विमानको यात्राको स्वाभाविक वर्णन गरे पनि त्यसबाट पाठकमा भावनात्मक शक्ति पैदा गराउन कविलाई सफलता प्राप्त भएको छ। कुनै देशको खास विशेषतालाई कवितामा ढालेर भावकलाई परिचित गराउने शक्ति र शिल्प कविलाई प्राप्त छ। उदाहरणका लागि थाइल्यान्डको चहलपहल र व्यस्त परिस्थितिलाई यसरी प्रस्तुत गरिएको छ –

कहीं निर्माण आवाज नवीन सिर्जनाक्रम।
कहीं व्यापारको भीड लेनदेन परिश्रम॥
कहीं छात्र र छात्राको दौडादौडी यताउता।
कहीं धूमान्ध बाटामा धमाधम जताततता॥

यसै गरी फिलिपिन्सका नागरिकको मौलिक विशेषतालाई कविले यसरी देखाउनुभएको छ –

वाचाल छन् फिलीपीनो हाँस्छन् बोल्छन् सबैसित।
मबुहाई भनी गर्छन् स्वागतादि खुसीसित॥

भियतनामको भ्रमण गर्ने क्रममा कविले यस देशलाई यसरी चिनाउनु भएको छ –

धेरै वर्ष लडी युद्ध देह पारेर जर्जर।
विकासपथमा उठ्ने आज गर्दैछ तर्खर॥
हेर्दा गरीब अत्यन्त नेपालसरि देखिने।
स्रोत साधन आदिमा अति सम्पन्न देखिने॥

भ्रमणको क्रममा सिङ्गापुर पुग्नुभएका कविले यस देशको सफाइ र शालीनतालाई यसरी सङ्केत गर्नुभएको छ –

स्वच्छ सुग्घर शालीन स्वप्न संसारमा गयौँ ।
दुई दिन बस्यौँ हामी यात्राको क्रम बिर्सियौँ ।।

विमानयात्रामा देखिएको बिजुली चम्केको दृश्यलाई कविले आकाशमा नाचेकी नर्तकी जस्तै कल्पना गर्नुभएको छ जसबाट उत्प्रेक्षा अलङ्कारको मिठास अनुभव गर्न सकिन्छ । जस्तै –

काला बादल देखिन्थे पानी बोकेर दौडँदा ।
गर्जनासाथ पानीका धारा बर्साउँदा छँदा ।।
साथमा दामिनी सेती चम्केकी गरी चम्चम ।
विशाल व्योममा यद्वा नाचेकी गरी छम्छम ।।

सारांशमा हेर्दा यस कविताले सम्बद्ध देशको वस्तुस्थितिलाई कवितात्मक आस्वादका साथ अवगत गर्न सफलता पाएको देखिन्छ ।

## २९. फ्रान्सको यात्रा

२०५४ साल कार्तिकमा फ्रान्सको राजधानी पेरिसमा आयोजित युनेस्कोको सम्मेलनमा सहभागी हुन गएको समयमा विमानमै लेखिएको अनुष्टुप् छन्दको यस कवितामा यात्राको क्रम, फ्रान्सको यथार्थ र युनेस्कोको सम्मेलन जस्ता मूलतः तीन सूत्रलाई समावेश गरिएको छ । नेपालबाट सोझै फ्रान्स जाने व्यवस्था नभएकाले दिल्ली हुँदै त्यहाँ पुग्नु परेको र नेपाल फर्किँदा पनि जर्मनी र भारतको दिल्ली हुँदै उड्नु परेको वास्तविकतालाई यहाँ देखाइएको छ । फ्रान्सको विगत कस्तो थियो र वर्तमान कस्तो छ भन्ने जिज्ञासाको समाधान कविताबाट भएको छ । फ्रान्समा रहँदा आफुले भ्रमण गरेका विभिन्न ऐतिहासिक, सांस्कृतिक र धार्मिक स्थलहरूको कवितात्मक परिचय दिएर पाठकहरूलाई

फ्रान्सबारे जिज्ञासु बनाउन कविता निकै सफल भएको छ। युनेस्कोको सम्मेलनको भव्यतालाई शब्दचित्रमा उतार्न सिपालु कविले आफु त्यहाँ सहभागी हुँदा स्वप्नमा भएजस्तो वा भ्रममा परेजस्तो अनुभूति भएको निश्छल अभिव्यक्ति दिनुभएको छ। अतः यो कविता फ्रान्सको यात्रा, त्यहाँको समृद्ध वैभव, युनेस्कोको भव्य अन्तर्राष्ट्रिय सम्मेलन र कविको अनुभूतिको समन्वित प्रस्तुतीकरण बनेको देखिन्छ।

सबैलाई फ्रान्स पुग्ने अवसर प्राप्त हुँदैन र भइगयो भने पनि बाहिरी दृश्य रमझममा सीमित हुन्छन् भने कतिपय मानिसलाई त्यस देशको भ्रमण गर्ने र त्यस देशको विशेषताबारे जान्ने संयोग पनि जुटेको हुँदैन। निम्नलिखित पद्यबाट फ्रान्सको वर्तमान स्वरूप बुझ्न ठुलो सहयोग पुगेको देखिन्छ –

अहिले शान्त सम्पन्न देखिन्छ शश्यश्यामल।
फ्रान्सेली धरती सारा देखिइन्छ सुनिर्मल॥
ठूला सडक छन् राम्रा घर छन् अति सुन्दर।
हरियाली छ सर्वत्र प्राचीन भव्य छन् घर॥

युनेस्कोको सम्मेलनको भव्य दृश्यलाई कविले शब्दमा यसरी उतार्नु भएको छ –

भाषा थरीथरी बोल्ने अनुहार थरीथरी।
परिधान सबै नाना भेषभूषा थरीथरी॥
उम्लँदो भावना भेल मान्छेको सबमा थियो।
सम्पूर्ण रूपमा हेर्दा सिङ्गो संसार यो थियो॥

कविमा आफुले गरेका कामको सिंहावलोकन गर्ने र कुनै कमी कमजोरी देखिए सुधार संशोधन गरेर अघि बढ्ने स्वभाव छ। यस कवितामा पनि आफुले गरेका पचासौँ पटकका विदेशयात्रा र हजारौँ किसिमका कामहरूको समीक्षा गर्ने धुन कविमा पैदा भएको छ। यस्तो

तृष्णा किन बढिरहेको छ कवि स्वयंलाई थाहा छैन । किशोरकालदेखि नै अद्वैत वेदान्त दर्शनको अध्ययन, मनन र अभ्यासमा संलग्न कविलाई वैराग्यको बोध पनि भएको छ तापनि निवृत्तिमार्गको अनुसरण गर्न नसकिइरहेको अवस्था छ । प्रवृत्तिमार्ग र निवृत्तिमार्गको मध्यबिन्दुमा उभिएर कवि आफ्नै अवस्था यसरी दर्साउनु हुन्छ –

बितेछन् वर्ष धेरै नै फर्केर जब हेर्दछु ।
के पाएँ के गरेँ मैले आफैँ नै छक्क पर्दछु ।।
दूर देश म कुद्दैछु तृष्णा बोकी अझै पनि ।
यो केका लागि गर्दैछु केही बुझ्दिन तैपनि ।।

## ३०. अष्ट्रेलियाको यात्रा

अष्ट्रेलियाको शैक्षिक संस्थाहरूमा भ्रमण गर्ने क्रममा २०५४ सालमा सिड्नीमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा त्यहाँको भौगोलिक अवस्थिति, शैक्षिक सुव्यवस्था र सांस्कृतिक समन्वयको वर्णन गरिएको छ । अष्ट्रेलियाका परिश्रमी जनता र उनीहरूको सफा मनको सङ्केत पनि कविले यस कवितामा गर्नुभएको छ। अष्ट्रेलियाको एउटा सिङ्गो तस्बिर यस पद्यबाट अवगत गर्न सकिन्छ –

पातलो जनसङ्ख्या छ अति शान्त छ देश यो ।
धनी छन् जनता सारा अति उन्नत देश यो ।।
काममा सब छन् व्यस्त पौरखी छन् सबै जन ।
नयाँ क्यासलका मान्छे गोरा छन् छ सफा तन ।।

नेपालको शिक्षाक्षेत्र दूषित राजनीतिको हस्तक्षेप र नग्न नृत्यले वीभत्स बन्दै गएको छ । शिक्षण संस्थाको काम छोडेर नेताको दास र दलाल बन्ने प्रवृत्तिका विपरीत अष्ट्रेलियाका शिक्षकहरूले आफ्नो कर्तव्य पूरा गरेको यथार्थ यसरी चित्रित भएको छ –

भोलिपल्ट सबै हामी गयौँ सर्कारी प्रा.वि.मा ।
दुई प्रा.वि. घुम्यौँ सारा हामी प्रत्येक ठाउँमा ।।
व्यवस्था अति नै राम्रो नलागी राजनीतिमा ।
गुरुवर्ग थिए व्यस्त अध्यापनादि काममा ।।

सिड्नी टावर चढेर चारैतिर हेर्दा कविले अनेकौँ आश्चर्यजनक दृश्यहरू देख्नुभयो । क्रिश्चियन धर्मको वर्चस्व भएको ठाउँमा सबै धर्म र संस्कृतिका स्मारकहरू देख्दा कविलाई हर्षको अनुभूति हुन्छ । धार्मिक सहिष्णुता र सद्भावलाई सङ्केत गर्ने सिड्नीवासीको विशेषता यस पद्यबाट पनि प्रतिबिम्बित भएको पाइन्छ –

घुम्दै जाँदा कतै देखेँ चर्च ठूला भयङ्कर ।
देखिए हिन्दुका भव्य राधाकृष्ण सुमन्दिर ।।
कतै इस्लामका फेरि कतै शिव र रामका ।
देखिए संस्कृति धर्म धेरै राष्ट्र र देशका ।।

## ३१. अष्ट्रियाको यात्रा

भावी सन्ततिका लागि लागु पदार्थले मुक्त संसार कसरी बनाउने र त्यसको दुष्प्रभावबाट शिशुहरूलाई कसरी सुरक्षित राख्ने भन्ने सम्बन्धमा सन् १९९८ मा अष्ट्रियामा आयोजित सम्मेलनमा सहभागी हुन जाने र आउने क्रममा अष्ट्रिया एवम् बेलायतमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा विमानयात्राको स्वाभाविक वर्णनका साथै दुवै देशमा यात्रा अवधिभर भए गरेका कार्यहरूको विवरण समेत समावेश गरिएको देखिन्छ । अष्ट्रियाको भियना पुगेपछि कविले देखेको त्यहाँको दृश्य स्थानीय परिवेशको अङ्कनमा निकै सशक्त देखा पर्दछ –

भियना अति नै सौम्य रहेछ दिव्य सुन्दर ।
पुराना भव्य दर्बार सम्भ्रान्त जनका घर ।।
कलाकौशलले पूर्ण मुक्तदूषण सुस्थिर ।
जता हेर्‍यो उतै राम्रो सुसंस्कृत मनोहर ।।

अष्ट्रियाको भ्रमण सकेर बेलायत पुग्नु भएका कवि बीस वर्षपछि पनि त्यो देश त्यस्तै देख्नुहुन्छ र कवितामा यसो भन्नुहुन्छ –

बीस वर्ष बिते मैले छोडेको आङ्लभूमि यो ।
जिजीविषा र सङ्कल्प उस्तै नै अझ देखियो ॥
मान्छेका चेहरा उस्तै उस्तै छ बाह्य आकृति ।
चालढाल सबै उस्तै खानपान र संस्कृति ॥

यस कवितामा ठाउँठाउँमा विभिन्न अर्थगाम्भीर्ययुक्त सुभाषितहरूको पनि प्रयोग भएको पाइन्छ । केही उदाहरण यस प्रकार छन् –

पुराना सपना बोकी मान्छे बाँच्छ अझै तर ।
सुखदुःख सधैँ घुम्छन् चक्रजस्तै निरन्तर ।
आफ्नू नै शत्रु हो आफु आफैँ नै मित्र हो नर ॥

बेलायतमा सहरी रमझम र तामझाम भए पनि नेपालको वसन्त ऋतु, फलफूलको समृद्ध सौन्दर्य र कोइलीको सुमधुर ध्वनिको आनन्द लिन अभ्यस्त कविलाई त्यहाँ त्यस्तो केही पनि अनुभव गर्न नपाएकोमा ग्लानि हुन्छ र यस्तो भावको अभिव्यञ्जना हुन्छ –

हिमले ढाकिँदी धर्ती टाढै छन् मधुमाधव ।
देखिँदैनन् अझैसम्म वृक्षमा पुष्प पल्लव ॥
धर्ती यहाँ सुतेकी छन् बाक्लो चादरका मुनि ।
सुनिदैन अझैसम्म पिकको मधुर ध्वनि ॥

## ३२. वाराणसी

२०५२ सालको मकरसङ्क्रान्तिमा गङ्गामा स्नान गर्न वाराणसी गएको समयमा लेखिएको मन्दाक्रान्ता छन्दको यस कवितामा गङ्गामा स्नान गरिसकेपछि विश्वनाथको पूजा सकेर फर्किंदा देखेको दृश्यबाट विचलित भई निःसृत सहज आवेगको अभिव्यक्ति भएको छ । मुसलमानहरूले विश्वनाथ मन्दिर ध्वस्त पारेको र काशी नगरलाई नै

अस्तव्यस्त पारेको ऐतिहासिक दुष्कर्मका अवशेष देखेपछि कविमा धैर्य र सहनशीलताको बाँध फुट्छ र आक्रोश, आवेश र आवेगको प्रवाह बग्न थाल्छ। त्यसैको परिणामका रूपमा यो कविता आएको छ। विश्वनाथको मन्दिर ध्वस्त पार्ने आततायी जङ्गली जत्थालाई साह्रै चोटिलो प्रश्न गरिएको छ –

फोर्‍यौ मान्छे किन भवन यो शम्भुको ध्वस्त पारी ?
होला तिम्रो हित र कसरी धर्म हाम्रो बिगारी ॥
सोझै हाम्रा घर हुँदि पस्यौ बाहिरी तत्त्व आई ।
फ्याँक्यौ सारै किन ? रिस गरी विश्वका मूर्तिलाई ॥

मन्दिर लडाउने र मूर्ति फोर्नेहरू साँच्चै नै आतङ्ककारी हुन् । तिनीहरूसँग कविको आक्रोशपूर्ण यक्ष प्रश्न यस्तो छ –

फोर्‍यौ हाम्रा सकल किन ? यी देवका मन्दिरादि ।
साझा नै हुन् मनुज सबका यी उनै हुन् अनादि ॥
के भो ? तिम्रो मन किन भयौ घोर आतङ्ककारी ?
फोर्‍यौ हाम्रा तपघरहरू के मिल्यो ती बिगारी ?

कवि केवल आक्रोश मात्र पोख्नुहुन्न, आतङ्ककारीहरूलाई न्यूनतम मान्छे बन्न शालीन शैलीमा कवितामय सुझाव पनि दिनुहुन्छ –

अल्ला भन्छौ भन बस तिमी त्यो तिमी भन्न सक्छौ ।
हामी भन्छौँ शिव शिव यहाँ त्यो तिमी सुन्न सक्छौ ॥
फोर्छौ हाम्रा घर किन ? तिमी आइ अन्यत्रबाट ।
मान्छे जस्तै बन अब तिमी छोड निर्लज्ज आँट ॥

कवि आफुहरू भौतिक सम्पत्ति र सुखसयलमा केही कमजोर भए पनि भित्री शक्ति र साहसले सम्पन्न भएकाले पङ्गु नसम्झी आफ्ना कुकृत्य बन्द गर्न अधर्मी विधर्मीहरूलाई यसरी चेतावनी पनि दिनुहुन्छ –

हामी हौँला अझ पनि यहाँ सम्पदामा पछाडि ।
हामी हौँला सुखसयलमा दौड पर्दा पछाडि ।।
हाम्रो भित्री धन छ अति नै शक्ति हाम्रो छ सम्झ ।
हामीलाई अब बुझ तिमी पङ्गु लाछी नसम्झ ।।

आफ्नो धर्म र संस्कृतिमा नाङ्गो हमला गरे पनि सबै प्राणी र पदार्थमा ईश्वरको अंश देख्ने हिन्दुहरूको उदार चरित्रलाई उजागर गर्दै कविले एउटै श्लोकमा हिन्दुधर्म र जातिको मूल विशेषताको सारांश यसरी खिच्नु भएको छ –

हामी गर्छौं परहित हुने काम लोभी हुँदैनौँ ।
अर्कालाई छलबल गरी दुःख हामी दिँदैनौँ ।।
पूजाआजा जपतप गरी प्राप्त गर्छौं विवेक ।
हामी हिन्दू चरअचरमा देख्तछौँ ब्रह्म एक ।।

**३३. गङ्गा**

यो कविता पनि पूर्वोक्त 'वाराणसी' जस्तै २०५२ सालमा मकर सङ्क्रान्तिमा गङ्गामा स्नान गर्न वनारस गएको बेला गङ्गातटमा बसेर मन्दाक्रान्ता छन्दमा र अन्तिम श्लोक वसन्ततिलका छन्दमा लेखिएको देखिन्छ । सम्पूर्ण प्राणीहरूको पाप पखालिदिने पवित्र नदीका रूपमा परिगणित र प्रतिष्ठित गङ्गामा स्नान गरिसकेपछि त्यसको फोहोरले आकुलव्याकुल भएका कविको भाव यस कवितामा व्यक्त भएको छ । गङ्गाको जल देख्नेबित्तिकै सङ्कोच मान्न थाल्नु भएका कविले शरीर अलिकति भिजाउँदा मात्र पनि कस्तो अनुभव गर्नुभयो त्यसलाई यस पद्यले अत्यन्त मार्मिक ढङ्गले अभिव्यक्ति दिएको छ –

पानी छोएँ अति सकसले जीउ केही भिजाएँ ।
लाग्यो सारै दिगमिग यसै फर्कि आवास आएँ ।।
धोएँ आफ्नो सकल जिय नै शुद्ध पारी सुकाएँ ।
गङ्गे ! उल्टो किन हुन गयो लाजले मै हराएँ ।।

गङ्गा दूषित हुनुमा गङ्गाको दोष होइन मानवीय व्यवहार नै कारण हो । मानवले नै गङ्गालाई प्रदूषित बनाएको वास्तविकतालाई कविले व्यङ्ग्यात्मक भङ्गीमा यसरी उद्घाटन गर्नुभएको छ –

गङ्गे ! हाम्रा अरू पनि नदी धेर मैला हुँदैछन् ।
बोकी गन्दा मयल बहुतै लाज मानी रुँदैछन् ॥
हामी आफ्नै मल र ढलले नित्य फोहोर गर्छौं ।
गङ्गे ! भन्छौँ सतहतहमा, भित्र दुष्कर्म गर्छौं ॥

मूर्ख बनेर चकचक गर्दै गङ्गामा फोहोर गर्नेहरू पाप भोगेर मर्नेछन् भन्ने सावधानी देखाउँदै कविले गङ्गा सधैँ सबैले सफा राख्नुपर्छ भनेर सल्लाह दिन खोज्नुभएको छ र काशीको पौराणिक महत्त्वको पुनराख्यान गर्नुभएको छ। जस्तै –

आमा नै हौ मनुज सबकी जात या धर्म जे होस् ।
राख्छ्यौ साझा सहज ममता जे गरुन् कर्म जे होस् ॥
हामी गर्छौं चकचक सधैँ धेर फोहोर गर्छौँ ।
गङ्गे ! हामी अबुझ शठ छौँ पाप भोगेर मर्छौँ ॥

गङ्गे बग्द्यौ सलल अघिझैँ फेरि वाराणसीमा ।
तिम्रो सोही विमल जल होस् शान्तिदायी सबैमा ॥
हाम्रा बाबा शिव पनि बसून् पूर्ववत् फेरि भित्र ।
काशी साँच्चै अब पनि बनोस् मोक्षदायी पवित्र ॥

### ३४. पशुपतिनाथ

मन्दाक्रान्ता छन्दमा लेखिएको यस कवितामा भगवान् पशुपतिनाथको सान्निध्यमा बस्न पाएर भाग्यमानी बनेका व्यक्तिहरूले नै मन्दिरको चारैतिर फोहोर गरेकामा चिन्ता व्यक्त गरिएको छ । आराध्यदेवको दर्शन र पूजाआजा गर्ने तर त्योभन्दा बढी फोहोर गरेर

मन्दिर परिसरलाई दूषित एवं दुर्गन्धित बनाएकोमा कवि अति व्यग्र र व्यथित बन्नुभएको छ र त्यसकै प्रस्तुति यस कवितामा भएको छ। पशुपतिनाथको कृपाले नेपालीहरू युगौँयुगसम्म बिघ्नबाधा हटाएर बाँच्न सकेका छन् र भाग्यमानी बनेका छन् भन्ने कविको अतिशय आस्थाभाव यस कवितामा पाउन सकिन्छ। जस्तै –

नेपाली छौँ जति पनि यहाँ भाग्यमानी सनाथ।
बस्छौ शम्भो ! अविचल तिमी विश्वका विश्वनाथ ॥
तिम्रै पाई वरद अति नै शान्तिदायी छहारी।
बाँचेका छौँ युगयुग यहाँ बिघ्नबाधा लघारी ॥

हाम्रो धर्म र कर्मका बीच विसङ्गति छ। हामी चेतनाशून्य हुँदै गएका छौँ र आफ्नो विगत बिर्सेर भ्रष्ट हुँदै गएका छौँ अनि अधपतनको मार्गमा पनि डुब्दैछौँ भन्ने कविको आत्मालोचना छ –

हामी सारा जडमति भयौँ धेर दुष्कर्म गर्छौँ।
शम्भो ! तिम्रा परिसरभरी नित्य फोहोर गर्छौँ ॥
बिर्सी आफ्नू विगत सब नै भ्रष्ट सारै हुँदैछौँ।
साँच्चै हामी अधपतनका मार्गमा होमिदैछौँ ॥

आफ्नो सत्त्व र निजत्व बिर्सेर अरूको धर्म, संस्कार, संस्कृति र अनीति बोकेर हिँड्ने हामी संसारमा असह्य दुःखी भएर बाँच्न बाध्य हुनेछौँ भन्ने कविको क्रान्तदर्शी चिन्तनको प्रवाह पनि यस कवितामा भएको छ। यसबाट सबै नेपालीलाई धार्मिक, आध्यात्मिक र सांस्कृतिक रूपमा जागरुक र उद्बोधित गराई राष्ट्रिय जागरणको सन्देश दिन खोजेको देखिन्छ। जस्तै –

बिर्स्यौँ सारा जति पनि थिए धर्मका मूल नीति।
हामी हिँड्छौँ अधमजनका साथ बोकी अनीति ॥
सिक्तै नौलो चलन अरूको धर्म संस्कार सारा।
हामी बाँच्छौँ कति दिन धराधाममा बेसहारा ॥

### ३५. अन्तिम यात्रा वृद्धावस्था

२०५३ सालमा काठमाडौँमा लेखिएको शार्दूलविक्रीडित छन्दको यो कविता कवि भट्टराईको सिङ्गो जीवन, कर्म, चिन्तन, आत्ममूल्याङ्कन र दर्शनको सारसङ्ग्रह हो । बाल्यकालदेखि वृद्धावस्थासम्म कविले भोगेका र गरेका उल्लेख्य अनुभव एवम् क्रियाकलापहरूको मार्मिक अभिव्यक्ति यस कवितामा भएको छ । बाल्यकाल, किशोरकाल र यौवनकालका क्रियाकलाप कविकेन्द्रित भए पनि वृद्धावस्थाको वर्णन कविनिरपेक्ष बन्न पुगेको छ र जीवनको उत्तरार्धमा सबैले भोग्ने, सोच्ने र सम्झने विषयवस्तु साधरणीकरण भएर यहाँ आएको छ । बाल्यकाल, प्रतिभाको प्रस्फुटन, काठमाडौँ आगमन, शिक्षा, राजनीति र जीवनवृत्तिका चरणहरू पार गर्दै कविले वृद्धावस्थामा अनुभव गरेका तिक्त तर यथार्थ अनुभूतिहरूको स्वाभाविक प्रवाह यस कवितामा भएको पाइन्छ ।

बाल्यकालदेखि नै सिर्जनात्मक प्रतिभाको प्रस्फुटन भएपछि कवि सुमार्गमा लाग्नुभएको यथार्थलाई यस पद्यले सङ्केत गरेको छ –

आफ्नो सौम्य समाजको मधुरिमा केही नछोडीकन ।
आएँ बालखकालमा म घरको संसार छोडीकन ।।
मेरा अन्तरमा कलासृजनको बीजांश केही थियो ।
सोही कारण भाग्यले विगतमा बाटो लगाई दियो ।।

किशोरकालसँगै काठमाडौँ आएपछि एकैपटक संस्कृत र आधुनिक अङ्ग्रेजी शिक्षा पढ्दै गरेको र त्यसै क्रममा राजनीतिमा पनि लागेको आत्मकथन यसरी प्रस्तुत गरिएको छ –

मैले यी सब भावना सँगसँगै बोकेर बढ्दै गएँ ।
खूबै जाँगर जोस साथ दुइटा भाषा म पढ्दै गएँ ।।
जे पढ्थेँ अहिले जहाँ पनि म ता उत्तीर्ण बन्दै गएँ ।
एकातर्फ म पढ्दथेँ तर उता विद्यार्थिनेता भएँ ।।

एकातिर कविको पढाइ बढ्दै गयो भने अर्कोतिर राजनीतिको नसा पनि चढ्दै गयो । विद्यार्थीहरूको नेता हुँदै अघि बढेको, जेल परेको र बी.पी. कोइरालाको अनुयायी भएर सक्रिय हुँदै गएको अवस्थामा २०१७ साल पुसमा गरिएको संसदीय व्यवस्था अन्त्यसँगै आफ्नो राजनीतिक भविष्य पनि हुन्डरीले उडाएझैँ उडेर गएको र जीवनमा नयाँ मोड आएको सत्य घटनालाई कविले कवितामा यसरी चित्रण गर्नुभएको छ –

नेता-छात्र भएर छात्रहितमा सङ्घर्ष गर्दै गएँ ।
भोगी जेल र नेलका क्षणहरू केही म बुझ्ने भएँ ॥
बीपीका पदचिह्नका पछि भई क्यै दूर हिँड्दै गएँ ।
आयो हुण्डुर सत्र साल पुसको त्यै हुण्डरीले गएँ ॥

त्यसपछि कवि जीवनयापनका लागि सरकारी जागिरमा प्रवेश गर्नुहुन्छ । अरू मानिस जागिर पाउनुलाई परमपद पाएजत्तिकै जीवनको मूल्यवान् उपलब्धि ठान्छन् । तर कवि जागिरे भएपछि क्रमशः हराउँदै गएको, माथिमाथि मात्र हेर्ने बनेको, दुर्गुण बोक्ने भएको र अन्त्यमा कामै नलाग्ने भएको टिप्पणी गर्नुहुन्छ र जागिरलाई लाभ भन्दा हानिको विषय ठान्नुहुन्छ । जस्तै –

खाई जागिर सुस्तसुस्त सकिएँ आफैँ हराएँ गएँ ।
पाएँ के भनुँ ? माथि माथितिर नै ताकेर हिँड्ने भएँ ॥
बिर्सी सद्गुण धेर दुर्गुणहरू बोकेर हिँड्ने भएँ ।
मेरा सुन्दर कल्पना सब गए कामै नलाग्ने भएँ ॥

यो कविता लेखेको समय २०५३ सालमा कवि ५८ वर्षजति हुनुभएको छ । उहाँ अब जीवनलाई फर्केर हेर्दै हुनुहुन्छ र अपेक्षित वस्तु (आत्मज्ञान) प्राप्त हुन नसकेकोमा रोएर बस्ने भएँ भनेर बिलौना गर्दै हुनुहुन्छ –

मेरा जीवनका अमूल्य दिन ती बेकारमा नै गए ।
खाली बाहिर दौडिएँ बुझिनँ क्यै साथी कुसङ्गी भए ॥
पैले खूब प्रमत्त भै अकडिएँ के के गरेँ के भएँ ।
ऐले अन्तिम कालमा शिव हरे ! रोएर बस्ने भएँ ॥

कविले आफ्नो वृद्धावस्थाको चित्रण गरे जस्तो गरेर सबैले जीवनको उत्तरार्धमा कस्तो स्थिति र नियति भोग्नुपर्दछ त्यसको झलक कवितामा देखाउनुभएको छ । निम्न लिखित दुई ओटा पद्यले हामी सबैको वृद्धावस्थाको चित्र खिचे जस्तो लाग्छ र सचेत र सावधान हुन प्रेरित गरिरहेको अनुभव हुन्छ । जस्तै –

ऐले जीर्ण असाध्य नै हुन गएँ खोकेर बस्ने भएँ ।
मेरा जीवनका अपूर्ण सपना बोकेर बस्ने भएँ ॥
काम्छन् थर्थर हातपाउ दुइटै हिँड्नै नसक्ने भएँ ।
ऐले के भनुँ ? बिर्सिंदै सब गएँ सोच्नै नसक्ने भएँ ॥

लठ्ठीका भरमा म हिँड्छु अहिले कम्जोर सारै भएँ ।
खाली सुत्नु छ इन्तुचिन्तु नगरी चल्नै नसक्ने भएँ ॥
मान्छे हूँ अथवा म जीर्ण तरु हूँ खोक्रो म सारै भएँ ।
बाँचेको छु कि वा यसै मरिसकेँ ज्यूँदो म मुर्दा भएँ ॥

वृद्धावस्थामा पुगेपछि आसन्न मृत्युले मानिस अझ चिन्तित र सन्त्रस्त हुन्छ । औषधीले मात्र जीवनलाई अमर बनाउन सक्दैन । कवि वृद्धावस्थामा अनेकौँ रोग पालेर बसेका मनिसहरूलाई सचेत गराउँदै यसो भन्नुहुन्छ –

छातीमा कफ बज्छ घर्घर गरी फोक्सो सबै शीर्ण छ ।
मिर्गौला मधुमेहले क्षति गरी उस्तै महाजीर्ण छ ॥
सारै उच्च भएर रक्त मुटुको बाजा बजाई सक्यो ।
खाने हो कतिसम्म औषधि हरे ! सन्देश आई सक्यो ॥

'सन्देश आइसकेको' साङ्केतिक कथनलाई निम्नलिखित पद्यमा कवि अझ स्पष्ट पारिदिनुहुन्छ –

तन्द्रा मात्र छ तर्कना हरघडी मस्तिष्कमा छाउँछन् ।
मेरा पूर्वज पित्र रातभरि नै बोलाउँदै आउँछन् ॥
मूर्छा पर्छु अचेत भै समय यो काट्तै छु धेरैजसो ।
बिस्तारै अब मृत्युको समय नै आई सक्यो वा कसो !

यस्तो चिन्ता र वेदनाको स्थिति आउनुको कारण पनि कविलाई थाहा छ । धार्मिक र आध्यात्मिक ग्रन्थहरूको अध्ययन, अनुशीलन र अनुसरण नगर्नुको परिणाम नै यस्तो दयनीय अवस्थाको कारण हो भन्दै कवि दार्शनिक दृष्टिकोण यसरी व्यक्त गर्नुहुन्छ –

सारै नै डर लाग्छ मर्छु कि भनी त्यो मृत्युकै त्रास छ ।
यस्तो जीर्ण भएँ अझै पनि हरे ! बाँच्ने महाआस छ ॥
यो सारा फल हो नपढ्नु कहिल्यै गीता पुराणादिक ।
खाली भौतिक वस्तुमा मन दिएँ बिर्सेर आध्यात्मिक ॥

मानिस जन्मने एक्लै हो र पाप पुण्यको अभिलेख लिएर मर्ने पनि एक्लै हो । त्यसको बोध बौद्धिक कविलाई नहुने प्रश्नै भएन । कर्म आफुले गरेपछि परिणाम पनि आफैँले भोग्नुपर्ने शाश्वत नियमलाई स्वीकार गर्दै कविले आफ्नो अन्तिम यात्राको मानसिक तयारी गर्नुभएको छ र यस्तो सन्देश अरूलाई पनि साधारणीकृत गर्न खोज्नुभएको छ । जस्तै –

मान्छे मात्र भएर जन्मन गएँ सारै कुसङ्गी भएँ ।
खाली हात म जन्मिएँ अनि यसै खाली म जाने भएँ ॥
जाला अन्तिम साथ के अब सबै छोडेर जाने भएँ ।
मेरा सम्बल पापपुण्य दुईटा ती मात्र लाने भएँ ॥

यस कवितालाई भाव र विचारका दृष्टिबाट मात्र नहेरी कविको लेखनकौशलका आधारबाट पनि हेर्न सकिन्छ । एउटा फुटकर कविताभित्र सक्रिय, साधनशील बहुआयामिक र चिन्तनप्रधान जीवनी र व्यक्तित्वलाई अटाउन सक्नु कविमा विद्यमान सङ्क्षेपीकरण शिल्पकै प्रमाण मान्न सकिन्छ । कवि कहाँबाट उठ्नुभयो ? के के गर्न समर्थ हुनुभयो ? कहाँ पुग्नुभयो ? र के सोच्नुहुन्छ ? भन्ने प्रश्नका उत्तर प्रस्तुत कविताका प्रत्येक पद्यमा अन्तर्निहित छन् । यसरी हेर्दा यो रचना कविको व्यक्तिगत विवरणको कवितात्मक प्रस्तुतीकरण बन्न पुगेको छ । त्यसका साथै जीवनको उत्तरार्धमा सबैले भोग्नु र देख्नुपर्ने यथार्थप्रति सचेत गराउँदै निवृत्तिमार्गतर्फ लाग्न र त्यसबाट सुख शान्ति प्राप्त गर्नका लागि समयमै व्यक्तिगत तयारी गर्नुपर्ने सन्देश दिन पनि यो कविता सफल छ । अहिले विभिन्न व्यक्तिहरू जीवन जिउने कलाका विषयमा पुस्तक लेख्ने, प्रवचन गर्ने र शिविरसमेत चलाउने फेसन गर्दछन् । उनीहरूमा प्रचारप्रसारको भोक र प्रसिद्धि प्राप्त गर्ने एषणा असीमित देखिन्छ । यस कविताको सार र सन्देशलाई आत्मसात् गर्ने हो भने यो पनि वास्तविक जीवन जिउने कला सिकाउने उपकरण बन्न सक्ने देखिन्छ । कविको जीवनको पूर्वार्धको वस्तुस्थितिको वर्णनभन्दा उत्तरार्धमा चित्रित वृद्धावस्थाको यथार्थ बढी मार्मिक र हृदयस्पर्शी छ । 'विविध यात्रा' कवितासङ्ग्रहको मूल तत्त्व र सत्त्व भनेकै प्रस्तुत कविता हो भन्न सङ्कोच मान्नु पर्दैन ।



# यात्रैयात्रा २०५८ का भूमिकाबाट

[ यस सङ्ग्रहमा परेका २६ कविताहरूमा सबै कविताहरूको विषय भिन्नाभिन्नै र परिवेश पनि भिन्नाभिन्नै भएको तथ्य समेत पाठकहरूले पाउनु हुने नै छ। २०१६ सालदेखि लिएर २०५७ सालसम्म गरिएका भिन्नभिन्न प्रकृतिका भिन्नभिन्न यात्राहरूको विवरण समयको लामो अन्तरालमा तयार गरिएको हुँदा प्रस्तुतिको दृष्टिकोणले विभिन्नता आउनु स्वाभाविकै हो। यात्राको उद्देश्यमा विविधताका साथै विषयमा पनि विविधता भएको हुँदा समष्टिमा यात्रा वर्णन भए पनि व्यष्टिमा वर्ण्य विषयमा पार्थक्य भएको पाठकहरूले निश्चित रूपमा पाउनु हुनेछ। वर्ण्य विषयमा अध्ययन भ्रमण, सांस्कृतिक यात्रा, शैक्षिक यात्रा, सभासम्मेलनमा सहभागिता, खेलकुदमा सहभागिता, संझौता र सहायताको खोजीको यात्रा, अपराध नियन्त्रण गर्ने भेलाको यात्रा, विश्वस्काउटको एसियाप्रशान्त उच्चस्तरीय भेलामा सहभागी हुन जाँदाको यात्राको साथै धार्मिक, आर्थिक आदि विविध उद्देश्यबाट गरिएका विविध यात्राहरूको संक्षिप्त काव्यात्मक वर्णन गर्ने धृष्टता गरिएको छ। यात्रा कविता लेख्ता सबै कविताको अन्त्यमा यात्रामा सम्मिलित व्यक्तिहरूको नामावली, यात्रा गरेका देशहरूको नाम, यात्रा सुरु गर्दाको र फर्केर आउँदाको मिति समेत दिएको छु। यसबाट यात्रामा सम्मिलित भएका व्यक्तिहरूको जानकारकि साथै देश र समयको समेत जानकारी लिन सुगम हुनेछ।

यात्रावर्णन लेख्ता धेरै लामा छन्द प्रयोग गर्दा जटिलता आउन भएकाले २३ ओटा कविता अनुष्टुप् छन्दमा र ३ कविता पञ्चचामर छन्दमा प्रस्तुत गरेको छु। अनुष्टुप् छन्दमा लेखिएका २३ ओटा कवितामध्ये अन्त्यमा तीन ओटा लामा कविताका बीचबीचमा पञ्चचामर छन्द पनि प्रयोग गरेको छु। यसबाट पाठकहरूलाई असुविधा नपर्ने मैले ठानेको छु। ]

# यात्रैयात्रा २०५८

'यात्रैयात्रा' कवि शरदकुमार भट्टराईले २०१६ सालदेखि २०५७ सालसम्म गरेका विभिन्न देशका भिन्नभिन्न उद्देश्य र योजनाका यात्राहरूको कवितात्मक वर्णनको सङ्ग्रह हो । यस सङ्ग्रहमा सङ्गृहीत अनुष्टुप् र पञ्चचामर छन्दका २६ ओटा कवितामध्ये कुनै सरकारी सेवामा प्रवेश गर्नुपूर्वका यात्रासँग सम्बद्ध छन् भने कुनै सोही सेवाकालमा गरेका विविध यात्रासँग सम्बद्ध छन् । एकथरी कविता चाहिँ ३२ वर्षभन्दा बढी लामो सरकारी सेवाबाट निवृत्त भइसकेपछि गरेका विविध प्रकृतिका यात्राहरूमा केन्द्रित छन् । जुन अवसरका भए पनि सम्पूर्ण कविता यात्रासँग नै जोडिएकाले यसको 'यात्रैयात्रा' शीर्षक निर्धारित हुनु उपयुक्त देखिन्छ ।

अस्तित्ववादीहरू वैयक्तिक स्वतन्त्रतालाई सर्वाधिक महत्त्व दिँदै मानिस यो विशाल ब्रह्माण्डमा क्षुद्र जीव होइन जानिनसक्नु सत्ता र शक्ति हो भन्दछन् । उनीहरूले यसो भन्नुको कारण मानिसको आन्तरिक व्यक्तित्वको अपरिमेयता नै हो । संसारमा यस्ता व्यक्ति पहिले पनि थिए होलान् र अहिले पनि छन् होला र नै अस्तित्ववादीहरूले यसो भन्ने आँट गरेका होलान् । हाम्रा सन्दर्भमा कवि शरदकुमार भट्टराई पनि स्थूलदृष्टि भएका सामान्य मानिसले मापन गर्न सक्नेभन्दा भिन्न शक्ति र प्रवृत्तिका व्यक्ति हुनुहुन्छ । अध्ययन, अनुभव र अभ्यासले उहाँको स्वभाव र जीवनदर्शनको निर्माण भएको पाइन्छ । विभिन्न समय र देशमा भएका यात्राहरूको जीवन्त चित्र उतार्न उहाँले जुन सफलता पाउनु भएको छ त्यो उहाँको निजी स्वभाव र शैलीको परिणाम हो । जुनसुकै देशको यात्रा गर्दा पनि विमान, रेल वा बस जस्ता यातायातसाधनमा यात्रा गर्दागर्दै कवितात्मक वर्णन गर्ने शक्ति र शैली उहाँमा पाइन्छ । नेपाली भाषामा विभिन्न व्यक्तिहरूले देशविदेशमा गरेका यात्राहरूको वर्णन र विवरण प्रकाशन गरेका छन् तापनि तीमध्ये धेरै जसो रचना सरकारी कर्मचारीले दैनिक भत्ता र भ्रमणभत्ताको व्यवस्थाका लागि काजमा जाँदा तयार

पारेका भ्रमण प्रतिवेदनजस्ता निर्जीव लेखनमात्र बन्न पुगेका देखिन्छन् । तिनको गुणात्मक मूल्य छैन । कवि शरदकुमार भट्टराईले गरेका जुनसुकै यात्रालाई पनि तथ्यको सीमाबाट बाहिर नपुऱ्याई कविता बनाएर प्रस्तुत गर्नुभएको छ । त्यसैले यी रचना श्लोकबद्ध यात्राप्रतिवेदन नबनी कविको प्रतिभा, भावना र कवित्वशक्तिका कारण रसिला, भरिला र मीठा कविता बनेका छन् । विशेषकारण यात्रा अवधिमै लेख्न नभ्याएका कविता पनि सत्यतथ्यको सङ्कलन गरी गन्तव्यमा पुग्नेबित्तिकै लेख्ने गरेका कारण यात्रावर्णन र कवित्वको आस्वादन एकैपटक अनुभव गर्न पाइन्छ ।

लामो समयको यात्रामा सहयात्रीहरूका अनेकौँ रुचि, सोख र व्यवहारहरू देखिने गर्छन् । धेरै यात्रीहरू यात्रामा खानेपिउने, ठट्टा रमाइलो गर्ने, टेलिभिजन हेर्ने र सुत्ने गर्दछन् र समय कटाउँछन् । कुनै पढैया परिहाल्यो भने पनि एकछिन पत्रिका वा पुस्तक पढ्छ र थन्क्याउँछ । अधिकांश यात्री कुनै पनि सिर्जनात्मक काम गर्दैनन् । यस्तो कटु यथार्थका बीच कवि शरदकुमार भट्टराई भिन्न शैलीका व्यक्ति बन्नुहुन्छ र विमान यात्राका क्रममा खान, पिउन, सिनेमा हेरेर समय यापन गर्ने तर्फ नलागेर सिर्जनात्मक काम गर्नुहुन्छ र त्यसलाई प्रकाशनमा ल्याउनुहुन्छ । लामो विमानयात्रा गर्दा उहाँका सहयात्रीहरू अमूल्य समय काट्न मादकपदार्थ सेवन गरेर मस्त हुन्थे भने कवि भट्टराई चाहिँ अलौकिक ब्रह्मरसको पान गरेर मस्त हुने गर्नु हुन्थ्यो । फलस्वरूप कवितामात्र नभएर अद्वैतसिद्धिजस्तो वेदान्त दर्शनको गहन ग्रन्थको नेपाली भाषामा आधिकारिक अनुवाद पनि विमानयात्रामै गर्नुबाट उहाँको सिर्जनात्मक सक्रियता, ब्रह्मरसमा अवगाहन गर्ने प्रवृत्ति र समयको सदुपयोग गर्ने प्रवृत्ति प्रकाशित हुन्छ । यस सङ्ग्रहका अधिकांश कविता यात्राक्रमकै प्रतिफल हुन् जुन रचना स्वाभाविक भएकाले घरमा एकान्तमा धेरै समयसम्म घोरिएर यत्नपूर्वक लेखिएका कविताभन्दा अझ बढी सरस र आस्वादनीय छन् । यस सङ्ग्रहको 'यात्रैयात्राको छोटो यात्रा' शीर्षकको भूमिकामा कविले कविता लेख्दा आफुले तीन प्रकारको विधि अपनाउने गरेको सन्दर्भ उल्लेख गर्दै विमानद्वारा विदेशको लामो समयसम्म उड्नु

पर्दा अथाह आकाशको उचाइबाट तल धरतीमा देखिएका विविध प्राकृतिक, मनुष्यकृत र मनोगत वस्तुहरूको तुरुन्तातुरुन्तै कवितामय चित्र उतार्न सक्ने कौशल कविमा देखिन्छ। दिनको विमानयात्रामा मात्रै होइन रात्रिको विमानयात्राको क्रममा पनि उहाँ गूढाकेश भएर लेखेर नै आफ्नु आकाशीय समयको सदुपयोग गर्नुहुन्थ्यो। 'यात्रा गरेर जहाँ गयो प्रत्यक्ष रूपमा देखिएका कुराहरू र मनमा स्फुरण भएका भावनाहरू तुरुन्तै कवितामा आबद्ध गरिहाल्ने" पहिलो विधि भएको स्पष्टोक्ति प्रस्तुत गर्नुबाट पनि यस सङ्ग्रहका धेरैजसो कविता यात्राक्रमकै सहजात बनेका छन् भन्ने प्रमाणित हुन्छ। प्रत्येक कवितामा यात्रामा सहभागी व्यक्तिहरूको नामावली र यात्राको अवधि उल्लेख हुनुबाट यो सङ्ग्रह सम्बद्ध व्यक्तिहरूका लागि एउटा अभिलेख पनि बन्न पुगेको छ। तथ्यसञ्चिति, विषयवस्तुको प्रतिपादन, छन्दसिद्धि र कवित्वप्रवाहको सन्तुलन भएको प्रस्तुत सङ्ग्रहका कविताहरूले कवि भट्टराईलाई सिद्धहस्त कविका रूपमा स्थापित गरेका छन्। २६ ओटै कविताहरूको सारसङ्क्षेप यस प्रकार छ।

### १. सीमापारको यात्रा २०१६

काठमाडौँमा पढ्न बसेको समयमा विभिन्न महाविद्यालयहरूका छात्रछात्राहरूबीच भएको प्रतिस्पर्धाबाट सफल भई भारतका विभिन्न क्षेत्रमा गरेको शैक्षिक भ्रमणको विषयवस्तु समेटी अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा कविले जीवनमा पहिलोपटक आर्जन गरेका अनुभवहरूसमेत समाविष्ट छन्। यो यात्रा कविका लागि पहिलो विमानयात्रा मात्र थिएन पहिलो विदेशयात्रा पनि थियो। फेरि विमानयात्रा र विदेशयात्राको वर्णन भएको पहिलो यात्राकविता पनि यही थियो। यिनै तीन प्रकारको संयोग जुटेको यस कवितामा कविले कतै यात्राको सूचनामूलक वर्णन गर्नुभएको छ भने कतै त्यसैभित्र रहेर पनि नवोदित कवित्वको परिचय दिनुभएको छ। यात्राको सूचनामूलक वर्णन यस्तो छ –

सोह्र साल थियो वर्ष पुसको महिना थियो ।
नयाँ संसद सर्कार नवीन सिर्जना थियो ॥
लड्दै पढ्दै थिएँ सोझो अबोध निमुखो थिएँ ।
पाई भारतको निम्तो त्यतैतर्फ म लम्किएँ ॥

भारतयात्राका क्रममा कवि कृष्णा नदीका किनारमा अवस्थित वृन्दावन बगैँचा पुग्नुहुन्छ र त्यहाँको प्राकृतिक सौन्दर्य देखेर मन्त्रमुग्ध बन्नुहुन्छ । त्यसपछि उहाँको कवित्व पनि कृष्णाको प्रवाहजस्तै यसरी छचल्किन्छ –

एक रात गयौँ हामी कृष्णाका तटका तिर ।
वृन्दावन बगैँचा छ जहाँ अत्यन्त सुन्दर ॥
अँधेरी रात फोरेर ज्योतिका मूल फुट्तछन् ।
नवटै रङ्गका झर्ना धर्ती फोरेर छुट्तछन् ॥

पानीमा जीवनी चल्छ हावामा खुस्बु चल्दछ ।
फूलमा भँवरा घुम्छन् बिजुली जब बल्दछ ॥
देखिन्छ सब स्वर्गीय अलौकिक सबैतिर ।
कृष्णाका मूलको पानी जब छल्कन्छ बाहिर ॥

२१ वर्षको अल्लारे उमेरमा पनि कवि भारतको विकास र व्यवस्थापनलाई गहिरिएर हेर्नुहुन्छ । उदाहरणका लागि बम्बईमा गरिएको खानेपानीको व्यवस्थालाई कविले सङ्क्षेपमा यसरी देखाउनुभएको छ –

बम्बईबाट क्यै टाढा चढी पहाडको शिर ।
बिहानीमा गयौँ हेर्न पानी मूल भएतिर ॥
ठूला ताल जमाएर नाला हालेर सुस्थिर ।
खाने पानी लगेका छन् बम्बई नगरीतिर ॥

कवि बाल्यकालदेखि नै मातृभक्त, पितृभक्त, गुरुभक्त र भगवद्भक्त हुनुहुन्छ र उहाँको यो भक्तिभाव आजन्म शिथिल भएको पाइँदैन । बाल्यकालमै

कृष्णको मूर्ति बनाएर आमासहित इच्छुक भक्तजनलाई बाँड्ने बानी परेका कवि मथुरा पुगेर सबैतिर कृष्णकै छवि देख्नुहुन्छ र कवितमा भन्नुहुन्छ –

कृष्णमा छ सधैँ श्रद्धा आएँ शरणमा परेँ ।
पुगेर मथुरा मैले अनुभूति नयाँ गरेँ ।।
वातावरण देखिन्छ मनमुग्ध मनोहर ।
जता हेर्छु उतै देख्छु कृष्णको छवि सुन्दर ।।

कविले नेपालको मात्र होइन भारतको पनि इतिहास पढ्नुभएको छ र अनुशीलन पनि गर्नुभएको छ । भारतको राजधानी नयाँ दिल्ली पुगेर भ्रमण गर्दा उहाँलाई त्यहाँको इतिहासको सम्झना आउँछ । यस पद्यले यस्तै सङ्केत गर्दछ –

नयाँ दिल्ली घुम्यौँ सारा पुरानु देहली पुग्यौँ ।
इतिहास पुरा सम्झी प्राचीन युगमा पुग्यौँ ।।
समग्ररूप हो दिल्ली सुखदुःख र त्रासको ।
मूक साक्षी छ यो दिल्ली दुर्दान्त इतिहासको ।।

सारांशमा हेर्दा 'सीमापारको यात्रा' रङ्गरमिता गरेर हिँड्ने यौवनकालमा पनि विशेष अवसरबाट करिब ४ हप्तासम्म भारतभ्रमण गर्ने सौभाग्य पाई पहिलो विदेशयात्रा प्रारम्भ गर्नुभएका कविले त्यहाँका प्राकृतिक, धार्मिक, सांस्कृतिक, ऐतिहासिक र विकासनिर्माणसम्बन्धी महत्त्वपूर्ण स्थलहरूको स्थलगत विवरणलाई कवित्व र प्रतिभाको चास्नीमा चोबेर तयार पार्नुभएको पहिलो यात्राकविता बन्न पुगेको छ ।

## २. चिसो मुलुकमा २०३४/३५

२०१६ सालमा विद्यार्थी छँदा भारतको भ्रमण गर्ने अवसर पाउनुभएका कविले सरकारी सेवामा प्रवेश गरेर लामो अन्तरालपछि गृहमन्त्रालयमा काम गर्दागर्दै तीव्र प्रतिस्पर्धाबाट एक वर्षका लागि बेलायतमा सार्वजनिक प्रशासनसम्बन्धी उच्च अध्ययन गर्ने अवसर पाउनुभयो । पहिलो विदेशयात्राको

भन्दै अठार वर्षपछि समुद्रपारको पहिलो यात्रा गर्ने अवसर पाउनुभएका कविले बेलायतमा पढ्न बस्दा गरेका क्रियाकलापहरूको वर्णन यस कवितामा भएको छ। अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा बेलायतको अध्ययन, त्यस देशका प्रसिद्ध स्थलहरूका साथै प्रसिद्ध अङ्ग्रेज कवि वडस्वर्थ, नाटककार कवि शेक्सपियर समेतका जन्मस्थल र कर्मस्थलहरूमा समेत भ्रमण र अवलोकन गर्नुका साथै शब्दचित्र र छायाचित्र समेत कविले उतारेको देखिन्छ । त्यसै अवधिमा नेदरल्याण्ड्सको भ्रमणसमेत उहाँले गर्नुभएको देखिन्छ। कविले आफुलाई तोकिएको औपचारिक अध्ययनका साथै भ्रमणमा प्राप्त गरेको अनौपचारिक ज्ञानलाई पनि कवितामा यथासम्भव समेट्ने प्रयास गर्नुभएको छ। आफु जहाँ पुग्दा जे जस्तो देखिन्छ त्यसलाई यथावत् उतार्दै भावमय बनाएर प्रस्तुत गर्ने काव्यशिल्प यस कवितामा पनि देख्न सकिन्छ। जिज्ञासु, अनुसन्धाता र कविप्रतिभा भएकै कारणले त्यहाँको प्रायः विवरणलाई यहाँ कवितात्मक बनाएर उतारिएको छ। अङ्ग्रेज जाति र बेलायतको विश्वनेतृत्वकारी विगतको उल्लेख गर्दै कविले "बेलायत थियो मेरो आकर्षण सधैँ भर" भन्दै त्यहाँको भ्रमणका लागि तीव्र आकाङ्क्षा राखेको बुझिन्छ जसलाई यस भ्रमणले परिपूर्ति गरेको छ। आकाङ्क्षा परिपूर्ति गर्ने क्रममा पहिलो पटक बेलायत पुगेपछि कविलाई जे अनुभूति भयो त्यसको प्रस्तुतीकरण यसरी भएको छ –

मुद्रा नयाँ नयाँ मान्छे हावापानी थियो नयाँ।
भाषाभेष कुराकानी भावभङ्गी सबै नयाँ ॥
जता गयो नयाँ वस्तु बुझ्नै समय लाग्दछ।
विदेश पहिले पुग्दा अत्यन्त डर लाग्दछ ॥

नेपालका शिक्षणसंस्थाहरू राजनीतिक दलका कार्यालयहरू तथा शिक्षक र प्राध्यापकहरू दलका पूर्णकालीन कार्यकर्ता बन्दै गएको देखिए पनि बेलायतको प्रसिद्ध म्यानचेस्टर युनिभर्सिटीमा अध्ययन गर्दा भने बेलायतमा कविले नेपालमा जस्तो बेथिति र अनुशासनहीनता देख्नु

भएन । संसारका सबै थरी मानिस पढ्ने गरेको र अघि बढ्दै गएको यथार्थ तस्बिर कविले यसरी खिच्नुभएको छ –

यो हो प्रसिद्ध प्राचीन विशाल युनिभर्सिटी ।
पढ्ने काम यहाँ गर्छन् वृद्ध हुन् वा ठिटाठिटी ।।
संसारभरिका मान्छे यहाँ आएर पढ्दछन् ।
सिकेर शिल्प या ज्ञान सधैँ अगाडि बढ्दछन् ।।

कुनै पनि ऐतिहासिक व्यक्ति र वस्तुका स्मारकलाई सुरक्षित राख्नु भनेको आफ्नै अस्तित्वको सुरक्षा गर्नु हो भन्ने तथ्यलाई अङ्ग्रेजहरूले राम्ररी बुझेका छन् । कवि बेलायती कवि र साहित्यकारहरू विलियम वर्डस्वर्थ र विलियम सेक्सपियरका जन्मस्थलमा पनि पुग्नुभयो । उहाँले प्राचीन र ऐतिहासिक व्यक्ति र वस्तुलाई सुरक्षा गर्न अभ्यस्त अङ्ग्रेजहरूले वर्डस्वर्थका स्मारक चिह्नहरूलाई यसरी राखेको पाउनुभयो –

वर्ड्स्वर्थ कवि जन्मेको ठाउँ लेकडिस्ट्रिकै थियो ।
देखेर शान्त सो ठाउँ मन सारै खुसी भयो ।।
कविको घरमा हामी गयौँ भयौँ प्रभावित ।
सम्पूर्ण कविका वस्तु थिए पूर्ण सुरक्षित ।।

भ्रमणको क्रममा वैज्ञानिकहरूको जन्मस्थल, संसद्, दूतावास, सङ्ग्रहालय र चिडियाखानासमेत पुगेको प्रसङ्ग पनि कविले उल्लेख गर्नुभएको छ । यस क्रममा राजप्रासादसम्म पुग्न पाएको वर्णन पनि कवितामा भएको छ । नेदरल्याण्डससम्म घुम्न पुग्नुभएका कविले त्यहाँको सौन्दर्यलाई यसरी प्रस्तुत गर्नुभएको छ –

जता हेऱ्यो उतै फूल फूलको नगरी थियो ।
यात्रा गर्ने सबैलाई आनन्द अति नै दियो ।।

स्वदेशको माया र ममता विदेशमा बस्दा झन् बढी उर्लेर आउँछ र कविलाई पनि यस्तै भएको छ । उहाँको यो भावराशि कवितामा यसरी

प्रकाशित भएको छ –

बसी बाहिर देखिन्छ नेपाल राष्ट्र सुन्दर ।
देशप्रेम खुबै बढ्छ लाग्छ सारा मनोहर ॥
यही नै भावनाबाट भई भावुक तत्क्षण ।
लेखेथेँ कविता मैले झारेर आँसुका कण ॥

**३. थाइको देशमा २०४५/४६**

गृहमन्त्रालयमा राजपत्राङ्कित प्रथम श्रेणीको अधिकृतका रूपमा कार्यरत रहँदा थाइल्यान्डको राजधानी बैङ्ककमा इस्क्यापद्वारा आयोजित अपराध नियन्त्रण सम्बन्धी सम्मेलनमा सहभागी हुन जाँदा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा सम्मेलनका गतिविधि र त्यहाँ मनाइने नयाँ वर्षको उत्सवसम्बन्धमा प्रकाश पारिएको छ । यस बाहेक नेपालको गृहमन्त्रालयको कार्यक्षेत्रका विषयमा पनि सङ्क्षेपमा स्पष्ट पारिएको छ । गृहमन्त्रालयमा लामो अनुभव आर्जन गर्नुभएका कविले मन्त्रालयको कार्यक्षेत्र र आफ्नो कर्तव्यलाई कवितामा सटीक ढङ्गबाट उतार्नुभएको छ –

गृहको काम भित्री हो भित्र नै बस्नु पर्दथ्यो ।
सुरक्षा कामका लागि पटुका कस्नु पर्दथ्यो ॥
मधेस घुम्दथेँ कैले पहाडतिर घुम्दथेँ ।
नेपाल भित्रका जिल्ला लगातार म डुल्दथेँ ॥

बैङ्ककमा आयोजित दुईदिने भेलाको सङ्क्षिप्त विवरणलाई कविले कवितामा यसरी स्पष्ट पार्नुभएको छ –

कार्यपत्रहरू पढ्थ्यौँ दिन्थ्यौँ उत्तर तत्क्षण ।
थियो विषय भेलाको अपराध नियन्त्रण ॥
राम्रा सुझावका साथ भयो काम उपान्तमा ।
सकियो थाइको भेला गरी निर्णय अन्तमा ॥

**४. स्वप्निल देशमा २०४६**

अपराध नियन्त्रणका सम्बन्धमा अध्ययन गर्न र तालिम लिन तीन महिना जापान बसेको समयमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा आफ्नो प्रकृत विषयका साथसाथै त्यहाँको विगत र वर्तमान केलाइएको छ। दोस्रो विश्वयुद्धको अपूरणीय क्षति बेहोरेर अघि बढेको जापानले गरेको प्रगति र जापानी जनताको श्रमशील राष्ट्रवादी चरित्रको चित्रण यस कवितामा भएको छ। लामो समयदेखि जापानको भ्रमण गर्ने आकाङ्क्षा पालेर प्रतीक्षारत कविले टोकियो पुगेपछि यस्तो दृश्य देख्नुभएको छ –

पुराना मठ छन् राम्रा नयाँ भवन सुन्दर।
दुवै थरी मिलाएर बनाएका मनोहर॥
देखियो दिव्य संसार जापानी जनको घर।
जता गयो उतै राम्रो सारा सहर सुन्दर॥

दोस्रो विश्वयुद्धमा अमेरिकाले हिरोसिमामा खसाएको अणु बमबाट नरसंहार भयो। त्यहाँको विनाश र विश्वंसलाई कविले यसरी उतार्नु भएको छ –

द्वितीय विश्वको युद्ध हुँदा भो नाश उद्धुम।
हिरोसिमा भयो ध्वस्त पड्केर अणुको बम॥
लागेर बम विध्वंस भएका घर देखियो।
नृशंस नरसंहार विध्वस्त सब देखियो॥

जापानीहरूको एउटा विशेषता नेपालीहरूले जस्तै अतिथिको सेवा, स्वागत र सत्कार गर्नु हो। जापानी दम्पतीका घर पुग्दा कविलाई नेपालीकै घर पुगेजस्तो लाग्छ, जसको अभिव्यक्ति यस्तो छ –

जापानी घरमा हामी अभ्यागत भई गयौँ।
गरे स्वागत अत्यन्त प्रभावित निकै भयौँ॥

जापानी दम्पती साथै माया छोरीसँगै थिए ।
जापानी शिष्टतासाथ सत्कार बहुतै दिए ।।

जापानीहरू आफ्ना कर्महरूद्वारा अरूको मन जित्न असाध्य निपुण छन् भन्ने यथार्थलाई उनीहरूले गरेको बिदाइको प्रसङ्ग उल्लेख गरेर कविले यसरी छर्लङ्ग पार्नुभएको छ –

शिक्षादीक्षा दिए राम्रो सम्मान बहुतै दिए ।
जापानी मित्रले हाम्रो मनमस्तिष्क नै लिए ।।
एकै जहानका जस्ता जापानी जन जो थिए ।
पारी विह्वल अत्यन्त हामीलाई बिदा दिए ।।

राष्ट्रका लागि जे पनि उत्सर्ग गर्न तत्पर राष्ट्रवादी जापानीहरूको स्वभाव यसरी प्रस्तुत गरिएको छ –

अनुशासन, सौहार्द, सत्कार, मान, दानमा ।
जापानी जनता देखेँ उत्साही काम गर्नमा ।।
आफ्नू सधैँ भलो ठान्ने राष्ट्रको हो भलो भनी ।
गर्छन् उत्सर्ग जापानी राष्ट्रकै लागि जे पनि ।।

## ५. प्रशासकको भेलामा २०४८

जापान सरकारको आयोजनामा भएको उच्च प्रशासकहरूको भेलामा सहभागी हुन त्यहाँ जाँदा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा पनि पूर्वचर्चित कवितामा जस्तै जापान र जापानीहरूका विशेषता वर्णित छन् । प्रशासकहरूको भेलामा सहभागीहरूलाई जापानका विभिन्न धार्मिक, ऐतिहासिक र अन्य महत्त्वपूर्ण स्थानहरूको भ्रमण गराइएको थियो । जसमा आकासाका, सान्दाइ, होकाइडो, टोकियो जस्ता प्रसिद्ध नगरहरूका साथै सुन्दर ग्रामीण भूभागमा पनि पर्दछन् । त्यहाँका दृश्य देखेर उहाँ मोहित बन्नुहुन्छ । त्यहाँका विकास प्रयास देखेर कविको काव्यवाणी यसरी मुखरित हुन्छ –

घुम्दै हेर्दै सबै हामी अझै उत्तरमा गयौँ।
होकाइडो समीपैको समुद्रतीरमा गयौँ॥
जता हेऱ्यो उतै राम्रो जापानी गाउँमा गयौँ।
देखी विकास सम्पूर्ण प्रभावित खुबै भयौँ॥

मानिस जति टाढा पुगे पनि धरती, घर र आमाको काखले उसलाई सधैँ तानिरहन्छ । यिनमा ममताको शक्तिशाली चुम्बकजस्तै आकर्षण रहन्छ। कवि पनि जापानको भ्रमणको प्रयोजन पूरा गरेर हङकङ र बैङ्कक हुँदै नेपाल फर्किनुहुन्छ। आफुलाई चङ्गा र ममतालाई धागोको बिम्बमा रूपान्तरित गर्दै कविको राष्ट्रवादी चेतना यसरी अभिव्यक्त हुन्छ –

सकी ब्याङ्कक्को काम हामी कार्तिक माझमा ।
फर्कियौँ जेटमा सोझै आफ्नै नेपाल साँझमा ॥
जति टाढा पुगोस् चङ्गा उडोस् जतिसुकै पर ।
धागोले तान्छ त्यल्लाई सोझै जमिनमा तर ॥

## ६. न्यायको खोजीमा २०४९

अनुष्टुप् छन्दमा लेखिएको यो कविता पनि तेस्रो पटक गरेको जापान भ्रमणकै विषयसँग सम्बद्ध छ। त्यस बेला कवि ए.सी.पी.एफ. संस्थाका एक जाना संस्थापक र अन्तर्राष्ट्रिय निर्देशक पनि हुनुहुन्थ्यो । सोही संस्थाको निम्तोमा कवि जापान भ्रमणमा जाँदा यो कविता लेखिएको देखिन्छ । यसमा पनि दुईपटक भ्रमण गरिसकेको हुँदा जापान पुग्दा कविका लागि त्यहाँ धेरै विषय चिरपरिचित जस्तै भएको अनुभूति व्यक्त गरिएको छ । संस्थाको भेला र बैठकबाट निस्केको समयमा टोकियो टावर, फुचु, अतामी हाकुने र नारितामा गरेको घुमफिरको सम्झना पनि कवितामा व्यक्त भएको छ। तेस्रो पटक जापान पुग्दा कवि यसलाई यसरी देख्नुहुन्छ र सम्झना गर्नुहुन्छ –

मान्छे जापानका राम्रा सभ्य देश रमाइलो ।
नयाँ जस्तो सधैँ लाग्ने छ जापान रमाइलो ॥

जापान सुन्दर, मनोहर, सभ्य र सुसमृद्ध मात्र होइन सुखको घर नै पनि हुनसक्छ, अझ भूस्वर्ग पनि हुन सक्छ। तर कविलाई आफ्नै देश सबैभन्दा बढी सुन्दर लाग्छ। उहाँ कवितामा स्पष्ट भन्नुहुन्छ –

देश सानो सिँगारेको पुतलीसरि सुन्दर।<br>
सर्वांशमा छ जापान सुसमृद्ध मनोहर ॥<br>
होला भूस्वर्ग जापान होला त्यो सुखको घर।<br>
लाग्छ तैपनि साँच्चै नै आफ्नू नै देश सुन्दर ॥

**७. मलया छाउनीमा २०५०**

मलेसियाको राजधानी क्वालालम्पुरमा आयोजित ए.सी.पी.एफ्. को दोस्रो अन्तर्राष्ट्रिय भेलामा सहभागी हुन गएको समयमा लेखिएको अनुष्टुप् छन्दको यस कवितामा क्वालालम्पुर र सिङ्गापुरको वर्णन गरिएको छ। संस्थाको भेलामा सहभागी भएको, नेपालीहरूसँग भेट गरेको, सिङ्गापुरमा किनमेल गरेको, देवीमन्दिरमा पूजा गरेको र राति होटलमा गजल सुनेको वृत्तान्तसमेत कवितामा समाविष्ट छ। अधिकांश लामो यात्रा विमानबाट गर्ने कवि क्वालालम्पुरदेखि सिङ्गापुरसम्म रेलको यात्रा गर्नुहुन्छ। सो यात्राको सहज स्वाभाविक वर्णन यस्तो छ –

उठी बिहानमा हामी चढेर ट्रेन छक्छक।<br>
कोलालुम्पुरदेखिन् नै गयौँ सिङ्गापुरै तक ॥<br>
सारा हराभर देख्यौँ हरियै हरियो थियो।<br>
हिँड्यौँ जङ्गलको बाटो पूर्ण मङ्गल नै थियो ॥

सिङ्गापुर पुगिसकेपछि कविले त्यहाँको एक झलक यसरी देखाउनुभएको छ –

सुविधायुक्त मान्छे छन् सबैले काम गर्दछन्।<br>
अति उन्नत यो देश दिन रात समान छन् ॥

कविलाई स्वदेश छोडेर अन्यत्र गई बस्न कत्ति पनि मन छैन । जतिसुकै सुन्दर र समृद्ध देशमा पुगे पनि अन्ततः स्वदेशमै फर्किनुपर्छ भन्ने मान्यताका अनुयायी कवि कवितामै बोल्नुहुन्छ –

जाऊँ जतिसुकै राम्रो ठूलो उन्नत देशमा ।
आखिरी फर्किनै पर्छ हामी आफ्नै स्वदेशमा ॥

## ८. टापुको देशमा २०५१

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा फिलिपिन्समा आयोजित ए.सी.पी.एफ्. संस्थाको तेस्रो विश्वबैठकबारे वर्णन गरिएको छ । फिलिपिन्सका राष्ट्रपति रामोसद्वारा उद्घाटन भई तीन दिनसम्म चलेको सो बैठकमा भएका कामकारबाहीलाई कलात्मक शैलीमा प्रस्तुत गरेको यस कविताले कविको पहिलो फिलिपिन्स यात्राको अनुभवलाई पनि समेटेको छ । स्वदेश फर्कने क्रममा हङकङ हुँदै चीन माथिबाट उडिरहँदा कविलाई रातको समयमा धर्ती नयाँ दुलही जस्तो अनुभूति हुन्छ जसलाई उपमा अलङ्कारको सौन्दर्यका साथ यसरी चित्रित गरिएको छ –

उडेँ हेर्दै सफा धर्ती चीनको क्रमले तरी ।
रातमा देखिइन् धर्ती नवीन दुलही सरी ॥

यस कवितामा ए.सी.पी.एफ. संस्था स्थापना गर्नुको उद्देश्य पनि स्पष्ट पारिएको छ । जस्तै –

सारा दुष्कृति रोकेर अपराध घटाउन ।
विश्वकल्याणका लागि सहयोग बढाउन ॥

संस्था स्थापना गर्नुको पछाडि विश्वमा बढ्दै गएका अपराधहरूको दुष्प्रभाव नै कारण बनेको देखाइएको छ । जुनसुकै अपराध भए पनि ती विश्व मानवका लागि अभिशाप हुन् भन्ने कविको तर्क छ –

सन्त्रास दुःख नैराश्य थिचोमिचो र वञ्चना ।
हत्या चोरी बलात्कार परपीडन ताडना ।।
नयाँ प्रकारका हुन् वा पुराना अपराध हुन् ।
विश्वमानवका लागि ती सबै अभिशाप हुन् ।।

## ९. सहस्रद्वीपको यात्रा २०५१

प्रशासनिक सुधारसम्बन्धी अध्ययनका लागि इन्डोनेसिया र सिङ्गापुरमा गरेको भ्रमणलाई विषयवस्तु बनाई अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा विदेशयात्राका समस्या र उपलब्धि दुवैलाई दर्साइएको पाइन्छ । इन्डोनेसियालाई कविले सहस्रद्वीप वा हिन्देसिया भनेर चिनाउनु भएको छ र त्यस देशको राजधानी जकार्तामा भोग्नुपरेको समस्या पनि देखाउनुभएको छ । मोलमोलाइ गरेर बसेको होटलमा खाना खान नपाएर भोकै बस्नुपरेको पीडालाई कविले नलुकाई व्यक्त गर्नुभएको छ र विदेशयात्राको नयाँ अनुभव भएका व्यक्तिलाई सचेत बन्न निर्देशन गर्नुभएको छ –

खोज्यौँ आवास सर्वत्र होटेल धेरमा गयौँ ।
मोल भाउ भयो ज्यादा दिग्दार बहुतै भयौँ ।।
यौटा होटेलमा हाम्रो मोलतोल मिल्यो बस्यौँ ।
खानाको दुःख भो सारै पेटमा पटुका कस्यौँ ।।

यो समस्या भोग्नु परे पनि त्यहाँका विभिन्न निकाय र विभागहरूको भ्रमण गरेर प्रशस्त उपलब्धि हासिल भएको तथ्य पनि यहाँ उद्घाटन गरिएको छ । त्यसको सङ्केत यस पद्यबाट भएको छ –

चौथो दिन सबेरै नै लिई काम सुकार्यको ।
गयौँ विभागमा हेर्न प्रशासन सुधारको ।।
कागजात सबै हेर्‍यौँ अन्तर्वार्ताहरू गर्‍यौँ ।
अधिकारीहरू भेटी जिज्ञासा बहुतै गर्‍यौँ ।।

नेपाल फर्किने क्रममा कविले सिङ्गापुरमा पनि भ्रमण गर्नुभयो । एक हप्तासम्म सिङ्गापुर बस्दा प्रधानमन्त्री कार्यालयदेखि चिडियाघर र समुद्री द्वीपको पनि भ्रमण गरेर नेपाल फर्कंदा विमानबाट कविले हेमन्त ऋतुको धर्तीलाई बेहुली जस्ती देख्नुभयो । त्यसको सहज, स्वाभाविक र सुन्दर अभिव्यक्ति यसरी दिनुभएको छ –

थियो मङ्सिरको अन्त्य थिएन घामको भय ।
निरभ्र नभ देखिन्थ्यो थिए शुभ्र जलाशय ।।
पहेँलपुर देखिन्थे धानका खेतका गरा ।
फलफूल थिए टन्न थिइन् राम्री वसुन्धरा ।।

## १०. चीनको यात्रा २०५३

दक्षिण कोरिया र चीनको परिवार नियोजन सम्बन्धी नीति र प्रयोगात्मक कार्यक्रमहरूको अध्ययन गर्ने उद्देश्यले गरिएको भ्रमणबारे प्रकाश पारिएको अनुष्टुप् छन्दको यस कवितामा कवि पुगेको प्रत्येक स्थानको विशेषता वर्णन गरिएको छ । विमानयात्रा र होटलको बसाइलाई समेत आंशिक रूपमा समेटिएको यस कवितामा विशेषतः चीनको नीति र कार्यक्रमका बीच पाइने समन्वयको प्रस्तुतीकरण भएको छ । चीनको सक्रियता र लगनशीलताको उदाहरणबाट हाम्रो देश पनि विकसित र व्यवस्थित हुन सक्छ भन्ने प्रेरणा यस कविताबाट पाउन सकिन्छ । कोरियाका विभिन्न संस्था र व्यक्तिहरूसँग सम्पर्क र संवाद गरेर त्यहाँको कार्यनीति बुझेर चीनतर्फ प्रस्थान गर्नुभएका कविको भ्रमणको केन्द्रबिन्दु पनि चीन नै भएकाले कविताको शीर्षक पनि 'चीनको यात्रा' राखिएको छ । बेइजिङ पुगेर संस्कृतिमन्त्रीलगायत उच्च पदस्थ अधिकारीहरूलाई भेट्दा उनीहरूले नेपालका मित्र बनेर जिज्ञासा राखेको प्रसङ्ग उल्लेख गरेर कविले नेपालप्रति चीन सधैँ असल मित्र भएको कूटनीतिक विचार व्यक्त गर्नुभएको छ । जस्तै –

उसै दिन गयौँ भेट्यौँ मन्त्री नेताहरूसँग ।
रात्रिभोज दिए भेट्यौँ आतिथेयहरूसँग ॥
ठूला मान्छे अरू भेट्यौँ भेटिए जति जो पनि ।
जिज्ञासा बहुतै राख्थे मित्र नेपालका बनी ॥

कविले सरकारी र गैरसरकारी कार्यालयहरूमा गएर हेर्दा नीति अनुसार काम गर्न सरकार तल्लीन भएको पाउनुभयो । त्यसलाई कवितामा यसरी प्रस्तुत गरिएको छ –

सर्कारी गैरसर्कारी कार्यालयहरू गयौँ ।
कार्यनीतिसँगै काम बुझ्यौँ जान्यौँ खुसी भयौँ ॥
नीतिका साथमा काम भएको पनि देखियो ।
चीन सर्कार अत्यन्त लागेको पनि देखियो ॥

अध्ययन भ्रमणका क्रममा कवि चीनका विभिन्न नगर गाउँ पुग्नुहुन्छ । यस क्रममा नान्जिङ पुग्नुभएका कविले एउटै पद्यमा त्यहाँको सारसङ्क्षेप यसरी खिच्नुभएको छ –

नान्जिङ अति नै राम्रो रहेछ स्वच्छ सुग्घर ।
तलाउ वनउद्यान हरियाली मनोहर ॥
मान्छे हँसीखुसी राम्रा देख्यौँ सहर गाउँमा ।
देखिए सुखी सम्पन्न वासिन्दा यस ठाउँमा ॥

कम्युनिस्ट शासन भएको चीनले विदेशीको ऋण र अनुदान लिएर आर्थिक क्रान्ति गरिरहेको सूचना ज्याङलिङ लुकुको भ्रमणबाट कविले पाउनुभएको छ जसलाई कवितामा यसरी प्रस्तुत गरिएको छ –

अपराह्न गयौँ हेर्न लुकू आर्थिक क्षेत्रमा ।
चीनको नमुना ठाउँ रहेछ यस क्षेत्रमा ॥
विदेशी राष्ट्रका साथ ऋण दान सबै लिई ।
अर्थक्रान्ति चलाएछ चीनले ध्यान नै दिई ॥

हङ्कङबाट विमान चढी स्वदेश फर्किन लाग्नुभएका कविले रातको समयमा के देख्नुभयो र कस्तो अनुभव गर्नुभयो त्यसको स्वाभाविक वर्णन यसरी गर्नुभएको छ –

उडी आकाशमा माथि हेर्दै बाहिरको छवि ।
रनभुल्ल भयो सारै अँध्यारो रातमा कवि ।।
न देखियो कुनै दृश्य न धर्ती नभ देखियो ।
हेर्दा बाहिर सर्वत्र अँध्यारो घुप्प देखियो ।।

## ११. नयाँ संसार २०५३

'विविध यात्रा' (२०५५) कविता सङ्ग्रहमा 'विश्वखेल' शीर्षकको कवितालाई केही परिष्कार, परिवर्धन र परिवर्तनसमेत गरी प्रकाशन गरिएको पञ्चचामर छन्दको यस कवितामा अमेरिकाको एटलान्टा सहरमा आयोजित विश्व ओलम्पिक खेलकुदमा नेपालको टोलीनेता भई सहभागी भएको र नेतृत्वदायी भूमिका पूरा गरेको विषयवस्तु वर्णित छ। विमानयात्राको अनुभव, अमेरिकाको अप्रतिम वैभव, विश्वखेलकुदको भव्य आयोजन, व्यवस्थापन र समापनजस्ता महत्त्वपूर्ण सन्दर्भहरूलाई केन्द्रबिन्दुमा राखेर लेखिएको यस कविताले कविको कवित्वको मात्र नभई नेतृत्वक्षमताको पनि परिचय दिएको पाइन्छ। अमेरिकाका तत्कालीन राष्ट्रपति बिल क्लिन्टन र पत्नी हिलारी किलन्टनको समेत उपस्थितिमा सम्पन्न उद्घाटन समारोहलाई देखेर कवि आफुमा उत्पन्न अनुभूति यसरी व्यक्त गर्नुहुन्छ –

न जातको न रङ्गको न धर्मको विभेद छ ।
न स्यानु या ठुलो कुनै धनी गरीब एक छ ।।
बगी रहेछ भेल झैँ मिलेर विश्व साथमा ।
म देख्छु दृश्य यो सबै बसेर आज माझमा ।।

खेलको भव्यता अमेरिकाको शक्ति, समृद्धि र सम्पन्नतासँग पनि गाँसिएको छ। कविले अमेरिकालाई यसरी देख्नु र बुझ्नुभएको छ –

सबै छ साथ साधना छ दक्षता र चातुरी ।
छ युद्धकार्यमा कला सतर्क छन् सधैँभरी ॥
सदैव विश्वमञ्चमा गरेर नै चुरीफुरी ।
उठीरहेछ राष्ट्र यो बनेर विश्वको धुरी ॥

कविले अमेरिकाको वर्तमान मात्र नभई भविष्य पनि देख्नुभएको छ । यसले विश्वमा शान्ति स्थापना गर्न पनि महत्त्वपूर्ण कार्य गर्न सक्ने कविको विश्वास यसरी प्रकट भएको छ –

मिलाइ हात हातमा तटस्थ भै विवादमा ।
उठाइ शान्तिको ध्वजा बढीरहेछ विश्वमा ॥
हटाइ भेदभावना समग्र शान्ति छर्छ यो ।
यसै गरी सधैँ सधैँ अनन्तसम्म बढ्छ यो ॥

अरू यात्रामा जस्तै यस यात्रामा पनि कविले विमानबाट तल देखेको दृश्यको एक झलक यसरी प्रकाशन गर्नुभएको छ –

कहीं छ भूमि उर्वरा जतातत्तै छ जङ्गल ।
जतातत्तै हराभरा असाध्य नै सुमङ्गल ॥
कहीं जमीन देखिने उजाड फुङ्ग बालुवा ।
चिराचिरा जहाँ धरा छ शून्य वृक्षपालुवा ॥

**१२. दूरदेशमा बस्नेलाई २०५३**

पञ्चचामर छन्दमै लेखिएको यो कविता पनि 'विविध यात्रा' (२०५५) मा 'दूरदेश' शीर्षकको कविताको केही संशोधित र परिवर्तित संस्करणका रूपमा आएको छ । अमेरिकाको एटलान्टामा आयोजित विश्व खेलकुदमा नेपालको तर्फबाट टोलीनेता भई सम्मिलित हुने सन्दर्भमा जर्जियाको सामुदायिक भवनमा अमेरिकामा बस्ने नेपालीहरूले आयोजना गरेको भेलामा वाचन गरिएको यस कविताले युवाहरूलाई

उद्यमी र पौरखी बन्न उत्प्रेरित गरेको छ भने स्वराष्ट्र, स्वधर्म, स्वसंस्कृति र स्वकर्तव्य नबिर्सन आह्वान पनि गरेको छ। यो कविता एक प्रकारले प्रवासमा बस्ने नेपालीहरू र त्यसमा पनि युवाहरूका लागि राष्ट्रिय जागरण र उद्बोधनको सशक्त गीतजस्तै बनेको पाइन्छ। यसले जहाँ बसे पनि र जे कर्म गरे पनि मनमा सधैँ नेपाली रहनुपर्ने राष्ट्रियताको भावना सञ्चार गरेको छ। यही भावनाले ओतप्रोत भएका कवि दूरदेशमा बसेका युवालाई यसरी हौस्याउनुहुन्छ –

बसेर दूर देशमा स्वदेश लौ नबिर्सनु।
झुकेर आत्मग्लानिले यहाँ तिमी नतर्सिनु ॥
जहाँ रहू युवा तिमी हिमाल हौ स्वरूपमा।
म ठान्छु राजदूत हौ यहाँ समग्ररूपमा ॥

विदेश बस्नका लागि होइन सिक्नका लागि जानुपर्छ र सीप सिकेर आएपछि त्यो नेपालका लागि खर्च गर्नुपर्दछ नत्र युवाजमात विदेश बसे राष्ट्र सधैँ पछाडि पर्दछ भन्ने कविको विचार छ –

सिकेर काम दक्ष भै गरेर खूब सत्वर।
अवश्य फर्क हे युवा ! नबिर्स गाउँको घर ॥
प्रवासमा जसै गई युवा समग्र बस्तछ।
गएर राष्ट्र आखिरी पछाडि नै त पर्दछ ॥

दूरदेशमा बसेका युवालाई माता र मातृभूमिलाई कुनै पनि हालतमा नबिर्सन सचेत गराउँदै कविले कर्तव्यप्रति तल्लीन रहन सुझाव दिनुभएको छ –

पिएर दूध मातृको हिँड्यौ समर्थ भै जहाँ।
नबिर्स मातृभूमि ती भयौ युवा तिमी जहाँ ॥
उता स्वमातृ हेर्दछिन् बसेर नित्य द्वारमा।
यता भने तिमी सधैँ रमाउँछौ बहारमा ॥

### १३. स्वाभिमानीको देशमा २०५३

पञ्चचामर छन्दमा लेखिएको यो कविता पनि 'विविध यात्रा' (२०५५) को 'जर्मनी' शीर्षकको कविताको परिष्कृत, परिवर्धित र केही परिवर्तित रूप हो । अमेरिकाको एटलान्टामा सम्पन्न विश्व खेलकुदमा नेपालको टोलीनेताका रूपमा सहभागी भई स्वदेश फर्किने क्रममा जर्मनी आइपुग्दा त्यस देशको विगत र वर्तमानलाई समेटी यस कविताको रचना भएको हो । जर्मनीको इतिहास पढेपछि र त्यहाँ पुगेपछि कविलाई युद्धमा नहोमिएको भए यो देश संसारमा पहिले नै चुरीफुरी देखाएर अघि बढ्ने थियो जस्तो अनुभूति हुन्छ । यही अनुभूति कवितामा यसरी प्रकट भएको छ –

लडी बढी कठैबरी पछारिएछ जर्मनी ।
भई विभक्त खण्डमा भएछ पङ्गु जर्मनी ॥
अजेय राष्ट्र जर्मनी बनेर विश्वको धुरी ।
हुने थियो अगाडि नै गरेर नै चुरीफुरी ॥

जर्मनी युद्धको विभीषिकाबाट अझै राम्ररी मुक्त हुन नसकेको भान कविलाई हुन्छ । स्थानीय राइन नदीमा रगत बगिरहेको र त्यसको तीरमा नृशंस युद्धका कथाको अवशेष रहिरहेको जस्तो लागेर कवि भन्नुहुन्छ –

म देख्छु पारि गाउँमा अझै छ क्यै मरीचिका ।
छ भूत भूतकालको कुयुद्धको विभीषिका ॥
सुसाउँदै छ राइना अझै छ रक्त नीरमा ।
नृशंस युद्धको कथा उता छ व्याप्त तीरमा ॥

यस कविताले युद्धको उन्मादले ग्रस्त नभएको भए जर्मनी शक्तिशाली राष्ट्र बनिसक्ने तर्क गर्दै कतै पनि कहिल्यै पनि युद्ध नहोस् भन्ने शान्तिकामना प्रकट गरेको पाइन्छ ।

### १४. सांस्कृतिक यात्रा २०५३

'विविध यात्रा' (२०५५) को 'चीनको यात्रा' शीर्षकको अनुष्टुप् छन्दको कविताकै संशोधित संस्करणका रूपमा आएको यस कविताले चीनका विभिन्न क्षेत्रको भ्रमण गर्दा कविले देखे बुझेका विषयहरूको वर्णन गरेको छ। छिमेकी राष्ट्रको नाताले त्यहाँका सांस्कृतिक स्थलहरूको भ्रमण गर्ने उद्देश्यले प्रस्थान गर्नुभएका कविले कविताको प्रारम्भमै छिमेकीको अपरिवर्तनीयताका कारण पनि भ्रमण गर्नुपरेको औचित्य दर्साउनुभएको छ। कविका दृष्टिमा छिमेकीको रूप यस्तो हुन्छ –

साथी स्थायी र अस्थायी छान्न सक्छौँ सधैँ भरि।
लुगाको खोल फेरेझैँ फेर्न सक्छौँ घरी घरी ॥
साथी रोजिन्छ फेरिन्छ छिमेकी हुन्छ सुस्थिर।
छिमेकी तर रोजिन्न यौटै हुन्छ निरन्तर ॥

कवि विश्वको सातौँ आश्चर्यमध्येको एक मानिने चीनको विशाल पर्खाल पनि पुग्नुहुन्छ। त्यसको भौतिक स्वरूप देखेर कविको भावना तरलित हुन्छ र यस्तो अभिव्यक्ति आउँछ –

यो पर्खाल छ साक्षीझैँ चीनको भूतकालको।
मानदण्ड भनौँ यद्वा आरोह अवरोहको ॥
ढुङ्गाको पत्रमा मैले आवाज मुटुको सुनेँ।
टेकी पर्खालको छाती चीत्कार सहसा सुनेँ ॥

भ्रमणको क्रममा बेइजिङ स्थित तियानमेन चोक पुग्नुभएका कविले प्रजातन्त्रका लागि सङ्घर्ष गर्ने व्यक्तिहरूलाई सम्झँदै यस्तो देखेको र सुनेको अनुभव गर्नुभएको छ –

रातो क्रान्ति म देख्तै छु रातो पुस्तक देख्तछु।
राता सैनिक गर्जेको चारैतिर म देख्तछु ॥
प्रजातन्त्र भनी नारा लागेको दृश्य देख्तछु।
गोलीको बुटको चर्को गड्गडाहट सुन्दछु ॥

तिब्बत समृद्ध सांस्कृतिक सम्पदाको प्राचीन भूमि हो । हिन्दु र बौद्धहरूको साझा तपस्थलीका रूपमा परिचित यस भूभागमा पुग्दा कविलाई केही हराएको र गुमेको जस्तो लाग्छ र यस्तो प्रश्न गर्न मन लाग्छ –

तिब्बतीजनको देश यो तिब्बत रमाइलो ।
कविको सिर्जनालोक कल्पनामा रमाइलो ॥
स्वतन्त्रता कहाँ भाग्यो बौद्ध धर्म कहाँ गयो ?
परम्परा हराएर यो ल्हासा आज के भयो ?

यसरी कविले यस कवितामा एकातिर चीनमा भौतिक विकासको सञ्चय हुँदै गएको र अर्कातिर तिब्बतमा सांस्कृतिक समृद्ध परम्पराको अपचय देखिँदै गएको तुलनात्मक स्थितिको दिग्दर्शन गराउनु भएको देखिन्छ ।

### १५. प्रकाशको खोजीमा २०५४

'विविध यात्रा' (२०५५) मा प्रकाशित अनुष्टुप् छन्दको 'पूर्वको यात्रा' शीर्षकको कविताको केही संशोधित र परिवर्धित रूपमा आएको यस कवितामा डानिडा (डेनिस सहयोग नियोग) को सहयोगमा कवि नै टोलीनेता भई सम्पन्न गरेको थाइल्यान्ड, फिलिपिन्स, भियतनाम र सिङ्गापुरको भ्रमणबारे वर्णन गरिएको छ । सम्बद्ध देशको शैक्षिक अवस्थाबारे जानकारी लिने उद्देश्यले भएको यस भ्रमणको विषयवस्तुलाई कविले कवितामै बताइदिनु भएको छ –

शिक्षामा कसरी कस्तो सुधार र विकास भो ।
गुणात्मक भयो यद्‌वा सङ्ख्यात्मक विकास भो ॥
कस्तो शिक्षा छ सापेक्ष अहिलेको समाजमा ।
कसरी कुन पाराले उठ्छ राष्ट्र समग्रमा ॥

भ्रमणको क्रममा थाइल्यान्डबाट फिलिपिन्स पुगेपछि भ्रमणटोलीको भेटवार्ता मन्त्रीसँग हुन्छ । मन्त्रीको राजनीतिक व्यक्तित्व र वार्ताको प्रसङ्गलाई कविले यसरी उल्लेख गर्नुभएको छ –

मन्त्री अत्यन्त फुर्तिला रहेछन् राजनीतिक ।
शिक्षा विकास आदिको वार्ता भो अति हार्दिक ॥

भियतनाम पुगेका कविले यहाँ कर्मठ र राष्ट्रवादी बहादुर नागरिक भएकै कारणले यो देश सधैँ स्थिर भएको टिप्पणी गर्नुभएको छ –

अति कर्मठ छन् मान्छे राष्ट्रवादी बहादुर ।
भियतनाम बनेको छ यिनैबाट सधैँ स्थिर ॥

**१६. क्रान्तिको केन्द्रमा २०५४**

अनुष्टुप् छन्दमा लेखिएको यो कविता पनि 'विविध यात्रा' (२०५५) मा प्रकाशित 'फ्रान्सको यात्रा' को केही संशोधित र परिवर्तित प्रस्तुति हो । फ्रान्सको राजधानी पेरिसमा आयोजित युनेस्कोको अन्तर्राष्ट्रिय सम्मेलनमा मन्त्री जाने निश्चित भएर पनि परिस्थितिवश उनी जान नसकेका कारण कविले नै देशको प्रतिनिधिमण्डलको नेतृत्व गर्दै सहभागी हुनुपर्ने अवस्था आयो । संयोगले जुरेको त्यही भ्रमणको विषयवस्तु यस कवितामा वर्णित छ । त्यो भ्रमण भाग्यकै कारणले हुन सकेको विश्वास गर्ने कवि कवितामै भन्नुहुन्छ –

जे गर्दछ सबै काम भाग्यले पनि गर्दछ ।
सहसा कहिले दिन्छ कहिले फेरि हर्दछ ॥
यसपालि भयो त्यस्तै भाग्य आएर बर्सियो ।
मन्त्रीका ठाउँमा मैले जानुपर्ने भई दियो ॥

भारतको नयाँ दिल्ली हुँदै पेरिस पुग्नुभएका कवि त्यहाँका ऐतिहासिक पात्र र प्रसङ्ग सम्झेर भावुक बन्नुहुन्छ र यस्तो काल्पनिक उद्‌गार निकाल्नुहुन्छ –

घोडाका टापका शब्द वीरको सुरिलो ध्वनि ।
घन्केका छन् अझैसम्म फ्रान्समा प्रेरणा बनी ॥
नेपोलीयनको कीर्ति बोकी हावा अझै पनि ।
तीव्रतासाथ बग्दैछ अति नै विरही बनी ॥

युनेस्कोको उनन्तीसौँ सम्मेलन हुने स्थल यति भव्य र व्यवस्थित थियो जसलाई देखेर कविलाई स्वप्न संसार झैँ भ्रम भएको छ । त्यो भव्यता र व्यवस्थापनलाई यसरी वर्णन गरिएको छ –

ठूलो भव्य थियो कक्ष मञ्च अत्यन्त सुन्दर ।
झण्डाहरू सजाएर राखिएका मनोहर ॥
वर्णानुक्रमले हाम्रो थियो बस्ने यहाँ क्रम ।
स्वप्न संसार झैँ लाग्थ्यो मलाई हुन गो भ्रम ॥

कवि पेरिसमा अवस्थित आइफेल टावर पनि चढ्नुहुन्छ र चारैतिर हेर्नुहुन्छ । त्यसरी हेर्दा फ्रान्स यस्तो देखिन्छ –

सौम्य वास्तुकलायुक्त फ्रान्सेली घर देखिए ।
अहम् र अस्मितायुक्त फ्रान्सेली जन देखिए ॥
जता हेऱ्यो उतै राम्रा युवायुवती देखिए ।
रम्य भन्दा पनि रम्य कलाकौशल देखिए ॥

फ्रान्सको वर्णनमा कविले स्वभावोक्ति, उत्प्रेक्षा र रूपक अलङ्कारको सौन्दर्य पनि आभासित गर्नुभएको छ । यस पद्यमा यिनै अलङ्कारहरूको कलात्मक प्रयोग भएको छ –

विशाल पथ फ्रान्सेली घना वृक्ष जतातता ।
राम्रा विशाल देखिन्थे दरबार यताउता ॥
कलापूर्ण थिए मूर्ति तिलस्मी अति सुन्दर ।
लाग्दथ्यो सहरै सारा कलाको जिउँदो घर ॥

## १७. अर्कै संसारमा २०५४

अनुष्टुप् छन्दमा लेखिएको यो कविता पनि 'विविध यात्रा' (२०५५) मा सङ्गृहीत 'अष्ट्रेलियाको यात्रा' कविताको परिवर्धित रूप हो । यसमा अष्ट्रेलियाका शैक्षिक गतिविधिको अध्ययन गर्ने उद्देश्यले गरिएको भ्रमणको विषयवस्तु समावेश गरिएको छ । समुद्रको मेखलाले युक्त जस्तो देखिने अष्ट्रेलिया पुग्न मात्र होइन नाम सुन्न नै गाह्रो पर्ने देश भएकाले त्यो आफ्ना लागि पनि कल्पनालोक नै भएको भाव कविले व्यक्त गर्नुभएको छ –

नाम नै सुन्न गाह्रो छ आउने अति दुस्तर ।
मेरो पहुँच भन्दा छ अष्ट्रेलिया निकै पर ॥
कल्पनालोक हो मेरो अष्ट्रेलिया सधैँ भर ।
समुद्रमेखलायुक्त महाद्वीप मनोहर ॥

यस कवितामा कविले जोन सिलरसँग विश्वविद्यालयका शैक्षिक क्रियाकलाप अध्ययन गरेको सन्दर्भ उल्लेख गर्नुभएको छ । जुन देश, ठाउँ र गाउँ पुग्यो त्यहाँको चौतर्फी ज्ञान हासिल गर्ने अभ्यास भएका कविले अष्ट्रेलियाको इतिहास पनि पढ्नुभयो जसलाई सङ्क्षेपमा यसरी प्रकाशित गरिएको छ –

अष्ट्रेलिया थियो पैले महाद्वीप अमङ्गल ।
मरुभूमि थियो ज्यादा वन्यजन्तु र जङ्गल ॥
आदिवासी थिए पैले सम्पूर्ण यस गाउँमा ।
यूरोपबाट आएछन् मनुष्य चढी नाउमा ॥

यस्तो इतिहास भएको अष्ट्रेलिया अहिले कस्तो छ त्यसको दिग्दर्शन पनि कविले गराउनुभएको छ –

अरू ठाउँहरू जस्तै आदिवासी गए कता ।
वन्यजन्तु यहाँ सारा भएछन् अब बेपता ॥
जन्तुका ठाउँमा गोरा मान्छेमात्र म देख्तछु ।
के लेखौँ ? यस धर्तीमा सम्झना मात्र लेख्तछु ॥

फ्रान्सको भ्रमण गर्दा पेरिसको आइफेल टावर चढेर कविले फ्रान्सलाई जस्तो देख्नुभयो त्यसको यथावत् दृश्य उतारेझैँ अष्ट्रेलियाको सिड्नी टावर चढेर हेर्दा त्यहाँ देखिएको दृश्यलाई कवितामा कैद गर्नुभएको छ। त्यसैगरी गाडीको यात्रा र पैदल भ्रमण गर्दा पनि त्यहाँका सुन्दर दृश्यले कवि चकित बन्नुहुन्छ। यस पद्यमा अष्ट्रेलियाको दृश्य पनि हाम्रै गाउँघरको दृश्य जस्तो लाग्ने सम्झना पोखिएको छ –

धेरै नै घर छन् साना राता टायलले युत ।
सफा चिटिक्क देखिन्छन् फूलबारी समन्वित ।।
हरिया वृक्ष सर्वत्र देखिन्छन् घर गाउँमा ।
जता हेर्‍यो उतै राम्रो सफा छ यस ठाउँमा ।।

## १८. परिचित देशमा २०५४

सन् १९९७ मा कविलाई पाकिस्तान भ्रमणको समयमा त्यहाँ हिन्दुहरूप्रति गरिएको व्यवहारबाट जस्तो अनुभूति भएको थियो त्यसलाई समेटेर उहाँले विविध यात्रामा 'अनुभूति' शीर्षकमै कविता प्रकाशित गराउनुभएको छ । त्यहाँ हिन्दुहरूका धार्मिक मूल्यमान्यताहरू प्रति गरिएको विध्वंसात्मक व्यवहारबाट कवि अत्यन्त व्यथित बन्नु भएको भाव व्यक्त छ। प्रस्तुत 'परिचित देशमा' शीर्षकको अनुष्टुप् छन्दको कवितामा पनि त्यही पाकिस्तानमा देखेको र अनुभव गरेको पक्षपातपूर्ण व्यवहारको मार्मिक संवेदना व्यक्त गरिएको छ । हिन्दुहरूको आदिभूमिमा आफ्ना चेहरासँग मिल्ने चेहराहरू देखेर कसैसँग सोधौँ जस्तो लाग्छ तर गोवध भएको देखेर असीम पीडा पनि हुन्छ –

सोधौँ सोधौँ यहाँ लाग्छ भीडभित्र कसैसँग ।
धेरैका चेहरा मिल्छन् आफ्ना नै चेहरासँग ।।
पवित्र भूमिमा देख्छु एकतर्फी ढलीमली ।
पूजा हुन्थे जहाँ गाई बन्दैछन् आज ती बलि ।।

पवित्र भूमि अरूको भएको र देवता पनि यो ठाउँ छोडेर अन्त गएजस्तो अनुभूति गर्ने कवि अति नै भावुक बन्नुहुन्छ र कवितामा यसरी बिलौना गर्नुहुन्छ –

पाँचोटा नदका क्षेत्र दुर्गम्य सरि भै सके ।
हिन्दूका स्थल हुन् सारा अरूका हात गै सके ॥
पुर्खाको पुण्य धर्ती यो बिरानो भै सक्यो अब ।
आफ्नू धाम गुमाएर गए द्यौता कहाँ अब ॥

अरूको धर्मको विनाशमा आफ्नो धर्मको उन्नति हुन्छ भन्ने भ्रम भएका विधर्मी वर्गप्रति प्रश्न गर्दै कविले पाकिस्तानमा हिन्दुहरूको दयनीय अवस्थाको चित्रण यसरी गर्नुभएको छ –

कस्तो हो धर्म यो तिम्रो अरूको धर्म छेक्दछौ ।
अरूको धर्म नासेर आफ्नो उन्नति देख्तछौ ॥
स्वत्व सर्वस्व नासेर पारेछौ हिन्दु निर्बल ।
देखिन्छ पाकमा बग्दो हिन्दूको आँसुको भल ॥

आफु सनातन वैदिक हिन्दुधर्मका अनुयायी भए पनि कवि सबै धर्मको अभ्यास र उन्नतिप्रति सहिष्णु हुनुहुन्छ । उहाँमा सर्वधर्मसमभाव विद्यमान छ । सबै धर्मको सार सबैको भलो हो र सबैको अन्तिम गन्तव्य पनि एउटै हो भन्ने निष्कर्षलाई कवितामा यसरी प्रकाशित गरिएको छ –

समत्वभाव हो धर्म धर्मले अघि सर्दछौ ।
अरूको धर्म नासेर के तिमी धर्म गर्दछौ ?
सम्पूर्ण धर्मको सार गर्नु हो सबको भलो ।
जहाँबाट यहाँ आयौँ जाने हो एउटै थलो ॥

## १९. अचिन्त्य यात्रा २०५५

युनेस्कोको आयोजनामा उज्बेकिस्तानको राजधानी तासकन्दमा आयोजित नारी शिक्षा र जागरण सम्बन्धी अन्तर्राष्ट्रिय सम्मेलनमा

शिक्षाविद्का रूपमा सहभागी हुन जाँदा जेटविमानभित्रै लेखिएको अनुष्टुप् छन्दको यस कवितामा विमानबाट देखिएका धर्तीका विविध दृश्यहरूको मनमोहक वर्णन छ भने त्यस देशको विगत र वर्तमानको स्वरूप पनि देखाइएको छ । चिसो मुलुक उज्बेकिस्तानले पहिले गलत बाटो लिएको तर अहिले सही बाटो लिएको तर्क गर्ने कविले बाहिर बोक्रे भौतिक सुन्दर आकृति देखाए पनि भित्र खोक्रोपन देखाएको यथार्थलाई यसरी प्रस्तुत गर्नुभएको छ –

भाषा संस्कृति संस्कार शैली जीवनको गति ।
सबै नै भिन्न देखिन्छन् धर्म आचारपद्धति ।।
हेर्दा बाहिर राम्रो छ बोक्रे भौतिक सुन्दर ।
के गर्नु बाहिरी मात्रै भित्र खोक्रो भयङ्कर ।।

यस देशको इतिहासलाई पनि कविले सरल र शैक्षणिक शैलीमा यसरी प्रकाश पार्नुभएको छ –

कैयौँ दशक यो राष्ट्र रुसी शासनमा थियो ।
रुसीबाट फुटी ऐले बनेको छ स्वतन्त्र यो ।।
उजबेकी थिए पैले लडाकु हमलावर ।
यहीँबाट गए दिल्ली तैमूर अनि बाबर ।।

कविले नेपालदेखि उज्बेकिस्तानसम्मको यात्रा हिमालय माथिबाट उड्दै पूरा गर्नुपरेको थियो । आउँदाजाँदा विमानबाट देखिएका अनेकौँ हिमशिखरहरूको शृङ्खलाले विभिन्न देश, भेष, भाषा, भाव, धर्म र संस्कृतिका मानिसलाई जोडेको ठान्ने कवि यसो भन्नुहुन्छ –

हाम्रो परम्परा भाषा धर्म भिन्न भए पनि ।
यै सेतो शृङ्खला जोड्छ जस्तै भिन्न भए पनि ।।
जिन्दगी नित्य यात्रा हो हिँड्नुपर्छ निरन्तर ।
घुमाउने उही नै हो म पर्छु उसकै भर ।।

यस पद्यमा जीवनलाई एउटा यात्राका रूपमा आरोप गरेर रूपक अलङ्कारको सौन्दर्य सिर्जना गरिएको छ भने उही' र 'उसकै' सर्वनामद्वारा परमेश्वर वा परब्रह्मलाई सङ्केत गर्दै वेदान्ती दृष्टिको रमरम आस्वाद पनि दिन खोजिएको छ।

यस कवितामा नीति र सूक्तिका उपदेशात्मक कथनहरू पनि आएका छन् जसले कविको प्रौढ र परिपक्व जीवनदर्शनको छनक दिन्छन्। जस्तै –

सारै जीवट हो मान्छे जसरी पनि बाँच्तछ।
अति निर्जन दुर्गम्य ठाउँमा पनि हाँस्तछ ॥
भाग्यको चक्र पाङ्ग्राभैँ सदा घुम्छ क्रमैसित।
कैले शासक त्यो हुन्छ कैले बन्दछ शासित ॥

## २०. यूरोपको फूलबारीमा

'विविध यात्रा' २०५५ मा सङ्ग्रहीत 'अष्ट्रियाको यात्रा' शीर्षकमा लेखिएको अनुष्टुप् छन्दको कविताको परिवर्धित र संशोधित संस्करण बनेको यस कवितामा भावी सन्ततिका लागि लागुपदार्थले मुक्त संसार कसरी निर्माण गर्ने भन्ने सम्बन्धमा अष्ट्रियामा आयोजित अन्तर्राष्ट्रिय सम्मेलनमा भाग लिन जाँदा र आउँदा गरेको यात्रासम्बन्धी विवरण प्रस्तुत गरिएको छ। कविकै शब्दमा –

लागू पदार्थले मुक्त संसार कसरी हुने।
हाम्रा शिशुहरूलाई सुरक्षा कसरी दिने ॥

भन्ने विषयमा आयोजित सो सम्मेलनमा सहभागी भई स्वदेश फर्कने क्रममा बीस वर्षपछि बेलायत पुग्दा त्यहाँ देखेका, बुझेका र अनुभव गरेका विषयहरू पनि कवितामा समेटिएका छन् । सद्भाव, सहभाव र सामूहिताको भावबाट परिश्रमपूर्वक मूल कार्य सम्पन्न गर्न सफल कविले यस भ्रमणलाई पनि भाग्यवश आइलागेको संयोगको रूपमा लिनुभएको छ। राम्रो भाग्य र राम्रो मन छ भने चाहेको कुरा पाइने

नत्र नपाइने विश्वासलाई सूक्तिमय शैलीमा प्रदर्शित गर्नुभएको छ –

नखोजे पनि पाइन्छ राम्रो भाग्य भएपछि ।
खोजेर पनि पाइन्न खोटो भाग्य भएपछि ॥
मनमा गाभ राखेर कुनै काम भयो भने ।
हुँदैन काम त्यो पूर्ण मन कालो भयो भने ॥

यस कवितामा लागु पदार्थको दुर्व्यसन कसरी बढ्दै छ र त्यसबाट मुक्त हुन सके हाम्रा बालबालिका कस्ता हुनेछन् भन्ने भावी दृष्टिकोण पनि अभिव्यक्त गरिएको छ । जस्तै –

कालकूट छ सर्वत्र जता हेऱ्यो उतैतिर ।
अँध्यारो व्याप्त देखिन्छ तलमाथि सबैतिर ॥
बनोस् भविष्य सर्वोच्च चढ्दै माथि अटालिका ।
अँध्यारो तम फालेर मुस्काउन् बालबालिका ॥

कवि बेलायमा एउटा सङ्ग्रहालयको अवलोकन गर्दै हुनुहुन्छ । यसै क्रममा राजप्रासाद, विभिन्न पार्क, संसद् भवन लगायतका स्थानहरूमा पनि पुग्नुहुन्छ । यी सबै ठाउँहरूको भ्रमण गरिसकेपछि कविमा उत्पन्न जीवनबोधलाई सूक्तिमय शैलीमा यसरी व्यक्त गरिएको छ –

सङ्ग्रहालय दर्बार घरभित्र र बाहिर ।
यद्वा संसदका भित्र तलमाथि सबैतिर ॥
आफ्नू नै स्वार्थका लागि लाचार दास झैँ बनी ।
पुराना सपना बोकी मान्छे बाँच्छ अझै पनि ॥

## २१. मृगमरीचिका २०५५

अनुष्टुप् छन्दका चार चार पङ्क्तिका ८५ ओटा पद्यमा आबद्ध यो कविता यस सङ्ग्रहकै सबैभन्दा लामो खण्डकाव्यधर्मी रचना हो । ४ पङ्क्तिका ८५ ओटा पद्यलाई फुटाएर २/२ पङ्क्तिमा राख्ने हो भने

यसले एक्लै लघुकाव्यको हैसियत राख्दछ । ऋणसम्झौताबारे विश्व बैङ्कसँग वार्ता गर्नका लागि गरिएको अमेरिकाको भ्रमणसम्बन्धी विषयवस्तु भएको यस कवितामा बाटोमा आउँदाजाँदा पर्ने अबुधाबी, बहराइन, लन्डन, सिउल, सिङ्गापुरसमेत र अमेरिकाकै वासिङटन, सनफ्रान्सिस्को जस्ता सहरहरूको रमझमको वर्णन पनि भएको छ । विमानमा कहिले २० घण्टा र कहिले १६ घण्टासम्म यात्रा गर्दा धर्तीमा देखेका विशाल महासागर र अन्य दर्शनीय स्थलहरूको मनमोहक प्रस्तुति पनि यस कवितामा भएको छ । यात्राका मुख्य दृश्य, कार्य र अनुभवको त्रिवेणी यस कवितामा प्रवाहित भएको देखिन्छ । लामो विमानयात्रा गरिरहनु भएका कवि जेटको गति र स्थितिको यथार्थ चित्र यसरी उतार्नुहुन्छ –

कहिले जेट यो उड्छ बनेर अति अस्थिर ।
के गर्ने भर यस्ताको आफुमै छैन जो स्थिर ।।
नटेक्ने ठाउँ नै यस्को नसमाउने कतैतिर ।
विना आधार यो उड्छ छड्गाछुर सबैतिर ।।

कवि युगबोध भएका सचेत व्यक्ति हुनुहुन्छ । उहाँ अमेरिका गएको समयमा त्यहाँका राष्ट्रपति बिल क्लिन्टनले आफ्नै सहयोगी मोनिका लेवेन्स्कीसँग व्यभिचार गरेको चर्चा देशविदेशमा फैलिएको थियो । त्यो मुद्दा अमेरिकी सिनेटमा चलिरहेको थियो । वेदान्तदर्शनको अध्ययन, सद्गुरुहरूको सङ्गत र सम्पर्क तथा इन्द्रियनिग्रहबाट आत्मसंयमी बन्नुभएका कविले क्लिन्टनको अवस्था देखेर यस्तो अभिव्यक्ति दिँदै चरित्रको संरक्षणमा जोड दिनुभएको छ –

विश्वशक्ति भई खिन्न झोक्राएको म देख्तछु ।
आफ्नू नै दोषले आफु हराएको म देख्तछु ।।
चरित्र शक्ति हो ठूलो त्यो नै नाश भएपछि ।
विश्वका सामुमा आफु परिहास भएपछि ।।

कविले चरित्रनिर्माणका आदर्श र अमरगाथाका रूपमा रहेका वेद, उपनिषद्, रामायण, महाभारत, पुराणसहित विभिन्न नीति र राजनीतिका ग्रन्थहरूको अनुशीलन गरी आफ्नो स्पष्ट दृष्टिकोण निर्माण गर्नुभएको छ। अमेरिकी राष्ट्रपतिको चर्तिकलाबाट कविको नैतिक चेतना अझ उद्दीप्त हुन्छ। राष्ट्र, राष्ट्राध्यक्ष, चरित्र र नैतिकताको अन्तरसम्बन्धलाई देखाउँदै दार्शनिक बन्न पुग्नुहुन्छ र यसो भन्नुहुन्छ –

आफ्नै छायासँगै मान्छे यहाँ अत्यन्त त्रस्त छ।
आफैँसँग हराएर लुकेर भित्र बस्तछ ॥
रूपयौवन के गर्नु ? भित्री आत्मा मरेपछि।
सम्पत्ति शक्ति के गर्नु ? आस्था श्रद्धा हटेपछि ॥

जसले भित्र जित्दैन जितेर बाह्य हुन्छ के ?
अस्मिता शून्य मान्छेले जितेर पनि हुन्छ के ?
विवाद अति नै देख्छु जित या हार हुन्छ के ?
जस्को चरित्र नै छैन त्यल्ले आखिर जित्छ के ?

परिवार छ स्नेहार्द्र चेल्सी हिलारि क्लिन्टन।
शङ्का आपसमा बढ्दा हुन सक्छ विखण्डन ॥
राष्ट्राध्यक्ष जहाँ हुन्छ व्यभिचारी अनैतिक।
कसरी राष्ट्र यो हुन्छ सदाचारी र नैतिक ॥

विमानको लामो उडानपछि कवि अमेरिकाको सनफ्रान्सिस्को माथि पुग्नुहुन्छ र त्यहाँको धर्तीलाई देखेर यस्तो अनुभूति प्रकट गर्नुहुन्छ –

बुझ्दा यथार्थ झैँ लाग्छ नबुझेमा प्रहेलिका।
स्वप्नसंसारझैँ लाग्छ हामीलाई अमेरिका ॥

अधिकांश मानिसलाई अमेरिका पुग्ने आकाङ्क्षा हुन्छ तर सबैको आकाङ्क्षा पूरा हुँदैन। कवि आफु चाहिँ भाग्यले हो वा केले हो, त्यहाँ

पुग्नुभएको छ। त्यसो नभए त्यहाँ पुग्ने र घुम्ने सामर्थ्य आफुमा नभएको स्पष्टोक्ति कविले यस पद्यमा प्रकाशित गर्नुभएको छ –

हामी आउन नै खोज्छौँ हेर्न यो राष्ट्र सुन्दर।
सबैको आउने इच्छा कसरी पूर्ण हुन्छ र ?
भाग्यले हो कि ? के ले हो म घुम्दै छु निरन्तर।
अन्यथा कसरी घुम्थेँ मेरो सामर्थ्य के छ र ?

कवि सहयात्री र सहकर्मीहरूका साथ जेटको लामो उडानबाट अमेरिकास्थित विश्व बैङ्कसँग ऋण सम्झौताका लागि वार्ता गर्न सरकारका उच्च अधिकारीका रूपमा उडिरहनु भएको छ। यो उहाँको बाह्य व्यक्तित्व र परिचय हो। तर आन्तरिक रूपमा उहाँ यात्रापद्यकार पनि हो र अझ आन्तरिक तहमा गएर बुझ्न खोज्दा अद्वैत वेदान्त दर्शनका अध्येता, प्रणेता र अभ्यासी व्यक्ति हो। बादलमाथि विमानमा उडिरहनु भएका कवि एकछिनका लागि ऋणको वार्ता गर्न हिँडेका सरकारी उच्च अधिकारीको भूमिकाबाट मुक्त झैँ बन्नुहुन्छ र सांसारिक मायाको जञ्जालबाट माथि उठ्न सके जीवन निर्मल बन्ने अर्थात् मुक्त हुन सक्ने वेदान्ती व्याख्यान कविताबाटै गर्नुहुन्छ। जस्तै –

जसले तलको छोडी माया जञ्जाल दल्दल।
माथि उठ्छ भने त्यस्को बन्छ जीवन निर्मल॥

यस कवितालाई समग्रतामा अध्ययन गर्दा कविको काव्यव्यक्तित्व धर्तीमा हिँडेको वेलामा भन्दा विमानमा उडेको समयमा बढी प्रबल बनेको पाइन्छ र त्यो वेग स्वच्छन्दतावादी काव्यधारातर्फ बढी ढल्किएको देखिन्छ। व्योमचारी कविले धर्तीका विविध दृश्यहरू देखेर आलङ्कारिक भावको प्रकाशन गर्नुभएको छ र भावकलाई पनि कविसँगै यात्रा गर्ने सहयात्री जस्तो बनाएर साधारणीकरण सामर्थ्य देखाउनु भएको छ। वासिङ्टनबाट सनफ्रान्सिस्कोका लागि उड्नुभएका कविले चारैतिर हिउँले ढाकिएको

धर्तीलाई मानवीकृत स्वरूप प्रदान गर्दै स्वच्छन्दतावादी भावधाराबाट प्रवाहित भएर उत्प्रेक्षा अलङ्कारको सहज तारतम्य यसरी देखाउनुभएको छ –

चारैतर्फ म देख्तै छु हिउँमात्रै जहाँतहाँ ।
उपर्ना हिउँको ओडी सुतिन् कि ? धरती यहाँ ।।
उपर्ना हिउँको ओडी सिरानै हिउँकै लिई ।
हिउँकै पत्रमा सुत्छिन् धर्ती गुटुमुटू भई ।।

प्रशान्त महासागरको सुशान्त जलराशी देखेर कवि आफैँ डुब्दै गएको अनुभव गर्नुहुन्छ । जसको अभिव्यक्ति पनि उत्प्रेक्षाकै सौन्दर्यबाट यसरी प्रकट भएको छ –

प्रशान्त शान्त देखिन्छ उठ्छन् लहर तैपनि ।
प्रशान्तभित्र बिस्तारै डुब्छु शायद मै पनि ।।

स्वदेश फर्कने क्रममा सगरमाथाको अलौकिक छटा र छवि देखेर स्वच्छन्दतावादी कवि भावुक भएर कल्पनालोकमा दौडिएको अनुभूति पनि उत्प्रेक्षाकै सौन्दर्यबाट अभिव्यक्त भएको छ –

देखी सगरमाथाको अलौकिक छटा छवि ।
कल्पनालोकमा दौड्यो यद्वा भावुक भै कवि ।।

अलङ्कारहरूको प्रयोगमा कविको एउटा अनुकरणीय प्रतिभाचातुर्य छ । त्यो भनेको प्रत्येक विषयको वर्णनमा अलङ्कारको स्वाभाविक विन्यास हो । यस कवितामा प्रशान्त महासागरमाथि उडिरहनुभएका कवि सागरका तीर र तरङ्गहरूको वर्णन स्वभावोक्ति अलङ्कारको सहज आयोजनाबाट यसरी गर्नुहुन्छ –

उर्लंदा छाल देखिन्छन् तीरमा सल्बलाउँदा ।
देख्छु क्षितिजमा टाढा लाखौँ छाल उदाउँदा ।।
यौटा लहरमा पर्दा बालुवा पारि तर्दछ ।
अर्को लहरमा पर्दा बालुवा वारि सर्दछ ।।

यस कवितामा पनि नीति र सूक्तिका प्रेरक पङ्क्तिहरू विन्यस्त छन् । उदाहरणका लागि सुख र दुःखका क्षणहरूलाई भाग्यका चक्रका रूपमा हेरिएको छ –

भाग्य दुर्भाग्यका साथ सुख वा दुःखका घरी ।
तलमाथि हुँदै घुम्छन् भाग्यका चक्रमा परी ॥

अमेरिकामा आफ्नो कार्योद्देश्य (मिसन) पूरा गरेर घर फर्किनुभएका कविले यात्रालाई जीवनका रूपमा लिँदै यस्तो सुभाषितबाट यसलाई चिनाउनु भएको छ –

यात्रा जीवन हो हाम्रो यही शायद प्राप्ति हो ।
विश्रान्ति अड्नु हो हाम्रो यद्वा परिसमाप्ति हो ॥

**२२. सहायताको खोजीमा २०५५**

अमेरिकाको वासिङ्टनस्थित विश्व बैङ्कसँग विपन्न वर्गका लागि शिक्षाको विकास गर्न सुविधापूर्ण ऋण प्राप्तिसम्बन्धी सम्झौता गर्न गरेको भ्रमणलाई समेटेर अनुष्टुप् छन्दमा लेखिएका ४ ।४ पङ्क्तिका ८४ ओटा पद्य भएको यो कविता प्रस्तुत सङ्ग्रहको दोस्रो लामो लघुकाव्यात्मक रचना हो । भ्रमण गरेको स्थान, उद्देश्य, विषय र आयामविस्तारका दृष्टिले यो कविता पूर्वचर्चित 'मृगमरीचिका' कै उत्तरार्ध जस्तो बन्न पुगेको छ । 'मृगमरीचिका' मा कवि ऋणवार्ताका लागि वासिङ्टन पुग्नुभएको विषय उपस्थापित छ भने यसमा ऋणवार्ता र सम्झौता भएको सन्दर्भ उल्लेख गरिएको छ । यसबारे कवि स्वयं स्पष्ट पार्नुहुन्छ –

शिक्षा विकासका लागि सौविध्य ऋण प्राप्त भो ।
अति सौहार्दमा हाम्रो ऋणवार्ता समाप्त भो ॥
वार्तासमाप्तिका साथै हस्ताक्षर गर्‍यौँ गई ।
हिँड्यौँ भ्रमणका लागि तम्तयार सबै भई ॥

यस कवितामा पनि जेटको लामो यात्रा, अमेरिकाका तत्कालीन राष्ट्रपति क्लिन्टन र लेवेन्स्की प्रसङ्ग, ह्वाइट हाउस, स्वतन्त्रताकी मूर्ति र संयुक्त राष्ट्रसङ्घको भ्रमणका साथै जर्मनीको यात्रा एवं हिटलरका कार्य र चरित्र बारे पनि प्रकाश पारिएको छ। कवि जहाँ पुगेर जे देख्नुहुन्छ र भोग्नुहुन्छ त्यसको कवितात्मक प्रस्तुति गरेरै छोड्नुहुन्छ। तेस्रो पटक गरिएको अमेरिका भ्रमणका क्रममा जेटमा यात्रा गरिरहेका कवि कालो बादललाई देखेर र त्यसकै कारण आन्ध्र महासागरलाई चाहिँ नदेखेर उत्पन्न यमक र उत्प्रेक्षाको आलङ्कारिक सौन्दर्यसमन्वित भाव यसरी पोख्नुहुन्छ –

फैलिएको छ ढाकेर कालो बादलको दल।
देखिन्न तलको धर्ती खालि बादल बादल ॥
सेतो बादल ओढेर मारेर सब जाँगर।
कुम्भकर्ण बनेको छ अथवा अन्धसागर ॥

हावाको चापका कारण जेटले गरेको उतारचढावलाई कविले स्वभावोक्ति र उपमाको चमत्कारद्वारा यसरी दर्साउनु भएको छ –

कहिले जेट उर्लन्थ्यो वायुको छालमा परी।
कहिले फेरि हल्लन्थ्यो तलमाथि गरी गरी ॥
कोक्रोझैँ लाग्दथ्यो जेट, यात्री बालकझैँ थियौँ।
हावाले जेट हल्लायो सुत्ने तर्खरमा थियौँ ॥

अमेरिका भ्रमणको मूल उद्देश्य सफलतापूर्वक पूरा गरिसकेपछि कवि ह्वाइट हाउसको अवलोकनका लागि जानुहुन्छ। त्यसबेला तत्कालीन राष्ट्रपति क्लिन्टन र उनको रोमान्सकथाकी नायिका लेवेन्स्कीको चर्चा केही शिथिल भएको थियो। जनतासँग रोइकराइ गरेर क्षमायाचना गरेपछि क्लिन्टनले विजय प्राप्त गरे पनि प्रतिष्ठा प्राप्त गर्न सकेका छैनन्। राष्ट्रपतिभवन ह्वाइट हाउसको भ्रमण गरिसकेपछि कविमा

जेजस्ता भावतरङ्गहरू तरङ्गित भए तिनलाई निम्नलिखित पद्यहरूमा प्रकाशित गरिएको छ –

विजेता वीरझैँ ऐले मुद्दा जितेर क्लिन्टन ।
हिँडेका आज देखिन्छन् प्रफुल्ल झैँ गरी मन ॥
ह्वाइट हाउसका भित्र लत्रेको देखियो शिर ।
केनेडी लाज मानेर झुकेझैँ धरतीतिर ॥

के हो नैतिकता साँचो ? के हो राष्ट्रिय अस्मिता ।
कर्तव्य कुन हो कस्को ? के हो राष्ट्रिय मान्यता ?
समाजसामुमा मान्नु पर्ने त्यो लाज हो कुन ?
त्यो सबै नै पचाएर गरे क्लिन्टनले जुन ॥

कहाँ छ लाज या शर्म घिन सभ्य समाजमा ?
व्यापार छ र पैसा छ मौका छोपिन्छ ब्याजमा ।
समाज कसरी चल्छ यस्तो नाङ्गो सधैँ बनी ।
केही सीमा हुनै पर्छ जति सभ्य भए पनि ॥

गरेको भूल हो भन्ने स्वीकारोक्ति सिधै गरे ।
जनतासँग रोएर क्षमायाचना जो गरे ॥
साक्षी प्रमाण साराले प्रमाणित कुरा थियो ।
हुँदाहुँदै सबै दोष त्यो सबै माफ नै भयो ॥

मुद्दा जितेर के हुन्छ ! आफु नै जित्नुपर्दछ ।
छोपी फोहोर के हुन्छ ! फोहोरै फ्याँक्नुपर्दछ ॥
आँखा छलेर मान्छेको ठूलो बन्दैन क्वै पनि ।
आफ्नै चरित्रले मान्छे हुन्छ सम्मानको धनी ॥

कविले अमेरिकालाई भव्य, सभ्य, स्वच्छ, समृद्ध, सुसंस्कृत र परिष्कृत देख्नुभएको छ र शीतयुद्धपछि सम्पूर्ण शक्ति समेटेर विश्वको महाशक्ति बनेको मूल्याङ्कन पनि गर्नुभएको छ । तर "न क्षीणो वित्ततः क्षीणो वृत्ततस्तु हतो हतः" अर्थात् धनले हीन मानिस वास्तविक हीन होइन चरित्रले हीन मानिस मात्र मृतवत् हो भन्ने नीतिवचनका अनुयायी कविले धन र सुन्दर शरीर भएर पनि चरित्र पवित्र नभएपछि त्यसको कुनै मूल्य नहुने मार्मिक भावना यसरी मुखरित गर्नुभएको छ –

ठूला भवन छन् भव्य धनी छन् र सुसंस्कृत ।
जता हेऱ्यो उतै लाग्छ सफा राम्रो परिष्कृत ॥
सारा शक्ति समेटेर शीतयुद्ध पछाडिका ।
विश्वशक्ति बनेको छ महाशक्ति अमेरिका ॥
धनले मात्र के गर्नु चरित्र नभएपछि ।
राम्रो शरीर के गर्नु पवित्र नरहेपछि ॥

भ्रमणकै सिलसिलामा कवि न्युयोर्कस्थित संयुक्त राष्ट्रसङ्घमा पुग्नुहुन्छ । त्यहाँ राष्ट्रपति किलन्टनकी पत्नी हिलारी लामो भाषण गर्दै थिइन् । उनको विद्वत्ता, नेतृत्वक्षमता, धैर्य, विवेक, चातुर्य, मातृवात्सल्य, परिश्रमी स्वभाव, नैतिकता र पतिको प्रतिष्ठाका लागि गरेको समर्पणलाई कविले उच्च महत्त्व दिनुभएको छ र निम्नलिखित तीन ओटा पद्यमा उनको समग्र बाह्य एवम् आन्तरिक व्यक्तित्वको प्रकाशन गर्नुभएको छ –

विख्यात विधिवेत्ता हुन् विदुषी बहुतै यिनी ।
नेतृत्व सक्तछिन् गर्न घुम्छिन् मान्छे चिनी चिनी ॥
सुखदुःख परोस् जस्तै धैर्यपूर्ण छ चिन्तन ।
यिनकै आडले गर्दा बने सफल क्लिन्टन ॥

हुन् राष्ट्रपतिकी पत्नी चतुरी अनि सुन्दरी ।
जननी एक पुत्रीकी मातृवात्सल्यले भरि ।।
जस्तै काण्ड परी आउन् पाल्दिनन् मनमा भ्रम ।
अक्षुण्ण राख्न सम्बन्ध सधैँ गर्छिन् परिश्रम ।।

मोनिका काण्ड होस् यद्वा अरू काण्ड परे जति ।
धर्मसङ्कष्टमा पर्दा जोगाइन् यिनले पति ।।
जस्तै काण्ड गरुन् लोग्ने बनुन् जस्तै अनैतिक ।
आत्मग्लानि सबै त्यागी भइन् ती खूब नैतिक ।।

स्वदेश फर्किने क्रममा कवि जर्मनीको बर्लिन पुग्नुभएको छ । विश्व इतिहासका साथै जर्मनीको इतिहास समेत पढ्नुभएका कविले हिटलरको मानवताविरोधी चरित्र र विश्वसम्राट् बन्ने सपनालाई यसरी वाणी दिनुभएको छ –

इतिहास पढेँ मैले महासमरको कथा ।
नरसंहारको सारै नृशंस ननिको व्यथा ।।
अर्धपागल झैँ जाग्यो यहाँ हिट्लर सर्वथा ।
सम्राटै विश्वको बन्ने देखेथ्यो सपना वृथा ।।

बर्लिन घुम्दा चारैतिर युद्धका अवशेषहरू देखेर कवि अझै पनि यहाँ हिटलरको छाया घुमेको अनुभव गर्नुहुन्छ र उत्प्रेक्षा एवम् उपमाको सौन्दर्य संयोजन गरेर यस्तो अभिव्यक्ति दिनुहुन्छ –

जता हेऱ्यो उतै देख्छु युद्धका चिह्न घाउझैँ ।
अझै हिट्लरको छाया घुम्छ वा ग्रस्त राहुझैँ ।।

जातिको भयङ्कर साम्प्रदायिक नारा लगाएर हिँड्ने हिटलरकै कारण आज जर्मनी अभिशप्त र कुण्ठाग्रस्त बनेको वस्तुसत्य देखाउँदै कविले वक्रोक्तिपूर्ण शैलीमा नेपालका परजीवी र गैर नेपाली राष्ट्रियता भएका राष्ट्रविखण्डनकारी

विदेशी र विद्वेषी तत्त्वहरूलाई सचेत गराउन खोज्नुभएको छ –

जातिको नाममा नारा लगाएर भयङ्कर ।
नररक्तपिपासाले भएथे अन्ध हिट्लर ॥
जे गरे उनले त्यस्को अभिशाप अझै बनी ।
भोग्दै छ अझ लाटो भै कुण्ठा बोकेर जर्मनी ॥

युद्धको परिणाम प्राप्ति होइन पतन हो । जर्मनीबाट यही शिक्षा पाउन सकिने सन्देश यस पद्यबाट बुझ्न सकिन्छ –

वैरियो मित्रको सेना अत्यन्त निर्दयी बनी ।
भयो लडाइँको अन्त्य भयो पतन जर्मनी ॥
आए थरीथरी सेना ढाकेर कमिला सरि ।
टुक्र्‍याए जर्मनी सारा अंशबन्डा सबै गरी ॥

युद्ध मैदान छोडेर भागेका हिटलरका विषयमा अनेक किसिमका अडकलबाजी छन् । कविले पनि यस्तै अनुमान पढ्नु र सुन्नुभएको छ । कोही उनले आत्महत्या गरेको भन्छन् भने कोही अद्यापि अनेकरूपमा जीवित भएको तर्क गर्छन् । कवि यही विवाद, अनुमान र सम्भावनालाई यसरी दर्साउनुहुन्छ –

भन्छन् कोही मरे होलान् भित्र बङ्करमा कता ।
कोही भन्छन् चढी यान भए बाहिर बेपता ॥
कोही भन्छन् अझै होलान् बाँचेका भित्र गाउँमा ।
दाह्री पालेर जोगी झैँ कतै एकान्त ठाउँमा ॥
कोही निश्चित जान्दैनन् छन् हिट्लर कहाँ भनी ।
छन् मरे पनि बाँचेका यहाँ ज्यूँदो अझै बनी ॥

अद्वैत वेदान्त दर्शन कविका रगतमा भिजेको छ र नसानसामा सञ्चारित भएको छ । शरीरलाई छायाले नछोडेझैँ कविका पारलौकिक वेदान्तविषयका रचनाहरू बाहेक लौकिक सिर्जनात्मक साहित्यका साथै अन्य विधाका गद्यात्मक रचना र सम्भाषणहरूमा पनि वेदान्त पछि

लागिरहेकै हुन्छ । त्यसैले उहाँका यात्रा र यात्रावर्णनप्रधान साहित्यमा पनि यसको प्रभाव परिलक्ष्यित हुने गर्दछ । जेट विमानमा यात्रारत कवि जेटलाई संसारका रूपमा, यात्रीलाई जीवात्माका रूपमा र यात्राको समाप्ति एवम् गन्तव्यलाई आ-आफ्नो प्रारब्धका रूपमा देख्नुहुन्छ । निम्न लिखित पद्यमा संसारीहरू जेटको यात्रा र त्यहाँका यात्री तथा आ-आफ्नो गन्तव्यलाई वाच्यार्थका तहमा बुझेर आनन्दित हुन सक्छन् भने आध्यात्मिक अन्तर्दृष्टि भएका बुद्धिजीवीहरू वेदान्त दर्शनको प्रस्तुतिबाट अझ ज्ञानी हुन प्रेरित हुन्छन् –

जेटमा जति छौँ यात्री केही क्षण अभिन्न छौँ ।
सारा क्षणिक हो यात्रा, यथार्थमा विभिन्न छौँ ।।
सकेर क्रम यात्राको ठाउँमा जब पुग्दछौँ ।
आफ्नै गन्तव्यमा लाग्छौँ आफ्नै प्रारब्ध भोग्दछौँ ।।

अमेरिकामा आफ्नो भ्रमणको उद्देश्य पूरा गरेर जर्मनीको यात्रासमेत सम्पन्न गरेर स्वदेश आइपुगेपछि कवि नेपालीहरूलाई जागरुक हुन र राष्ट्रका लागि बाँच्न र मर्न आह्वान गर्नुहुन्छ । आफ्नो स्वत्व सम्झेर अघि बढ्न प्रेरित गर्ने निम्नलिखित पद्यले जागरण गीतको ओज र अर्थ प्रकाशित गरेको पाइन्छ –

हामी छौँ अति समृद्ध धर्मका बहुतै धनी ।
हाम्रो दर्शन सर्वोच्च अति जागृत छौँ पनि ।।
अरूको दृष्टिमा हामी दरिद्र सरि खिन्न छौँ ।
बाहिरी दृष्टिले हेर्दा अझै हामी विपन्न छौँ ।।

सिकी बाहिरको शिल्प राखेर अति संयम ।
लघुताभास छोडेर त्यागेर अब सम्भ्रम ।।
देशलाई उठाएर जातिको उन्नति गरौँ ।
जातिकै निम्तिमा बाँचौँ जातिकै निम्तिमा मरौँ ।।

## २३. अँध्यारो देशमा २०५५

अनुष्टुप् छन्दका ४ ।४ पङ्क्तिका ४७ ओटा पद्यमा लेखिएको यस कवितामा शैक्षिक अवस्थाको अध्ययन र अवलोकन गर्ने र नेपालमा सहयोग बढाउने वातावरण निर्माण गर्ने उद्देश्यले गरिएको डेनमार्कको भ्रमणबारे वर्णन गरिएको छ। जुन ठाउँको भ्रमण गरे पनि घरबाट पाइला निकालेदेखि फर्केर घरभित्र पाइला राखुन्जेलसम्मका मुख्यमुख्य सम्पूर्ण गतिविधिको कवितात्मक वर्णन गर्न अभ्यस्त कविले यस कवितामा पनि विमानयात्रा, बाटोमा पर्ने देश, सहर, प्राकृतिक दृश्य, भ्रमणको मूल कार्यक्रम लगायत आफ्ना अनुभूतिहरूलाई पनि यस कवितामा समेट्नु भएको छ। कविताको प्रारम्भमै ज्ञानको ज्योति दिने आफ्नो देशबाट अँध्यारो देशका रूपमा परिचित डेनमार्कमा ज्ञान प्राप्तिकै लागि जानुपरेकोमा कविलाई अलिकति ग्लानि र अलिकति सङ्कोच पनि भएको अनुभूति प्रकट गरिएको छ। तर गरिबले धनीकहाँ जानुपर्ने नियम सम्झेर उहाँले आफैँलाई आश्वस्त पनि पार्नुभएको छ। एक रात बैङ्ककमा वास बसेर डेनमार्कतिर उडिरहनु भएका कविले जे जस्तो भूदृश्य देख्नुभएको छ त्यसको एक झलक निम्न लिखित दुई ओटा सुन्दर पद्यमा यसरी उतारिएको छ –

कहिले सूर्य चम्किन्छन् कहिले उठ्छ बादल ।
निरभ्रव्योम माथि छ श्यामला धरती तल ।।
जति उड्छ छिटो जेट दृश्य घुम्छन् थरीथरी ।
चारैतर्फ म देख्तैछु दिव्य सौन्दर्य माधुरी ।।

कहीँ बादल देखिन्छ सुनौलो शुभ्र छिर्बिर ।
कहीँ आकाश देखिन्छ नौवटै रङ्ग तिर्मिर ।।
नदी पहाड मैदान खोला ताल र जङ्गल ।
देखिइन् रूपसी राम्री उर्वरा धरती तल ।।

कवि अखण्डताका पक्षपाती हुनुहुन्छ। साझा धरतीलाई राष्ट्रहरूले कृत्रिम सीमामा बाँधेको देखेर कविलाई यस्तो अनुभूति भएको छ –

माथिबाट म देख्तै छु नाना रूपवती धरा।
सारा बनावटी सीमा राष्ट्रको छ परम्परा॥
धर्ती हुन् सबकी साझा बाँडेका छन् चिरा गरी।
मेरो तेरो गरी लड्छन् तानासाह थरीथरी॥

न कसैकी बनिन् धर्ती न छन् शासक शाश्वत।
खाली यो मृगतृष्णा हो अस्थायी छ अश्वाश्वत॥
जित्यो र कसले धर्ती कसका साथ यी भइन्।
न मर्दा कसका साथ यी धर्ती कहिल्यै गइन्॥

विमानको लामो यात्रा पार गरेर डेन्मार्कको राजधानी कोपनहेगेन पुग्नुभएका कविले त्यसको एक झलक यसरी प्रस्तुत गर्नुभएको छ –

राजधानी सफा राम्रो रहेछ स्वच्छ सुग्घर।
भित्र अत्यन्त राम्रा छन् पुराना देखिने घर॥
जनसङ्ख्या छ थोरै नै सम्पन्न आत्मनिर्भर।
राम्रा मानिसको देश सर्वत्र छ मनोहर॥

डेनमार्कले विनास्वार्थ सद्भाव राखेर शिक्षाको उन्नतिका लागि नेपाललाई सहयोग गरेकामा गुणग्राही कवि यो देश नेपालको भलो गर्ने थलो हो भन्ने प्रशंसापरक अभिव्यक्ति दिनुहुन्छ –

विना स्वार्थ विना लाभ राखी सद्भावको मति।
ठूलो राशि दिएका छन् शिक्षाको गर्न उन्नति॥
लाग्यो यो देश हो साँच्चै परोपकारको थलो।
आफ्नू गाँस कटाएर गर्छन् नेपालको भलो॥

डेनमार्क शिक्षा र सेवामा उदार छ भने खुलापनका लागि अझ उदार छ। कोपनहेगेन सहरको नग्न सभ्यता छाडापनतर्फ उन्मुख हुँदै

गएको देखेर यौनका विषयमा सीमा नाघ्नु अनिष्ट हो र पुरानो युगमा फर्किनु सभ्यता होइन भन्दै कविले चोटिलो प्रश्न गर्नुभएको छ –

कोपेनहेगनमा देखेँ वात्स्यायन जताततता ।
भूत फ्रायडको यद्वा घुम्दै छ कि यताउता ॥
लोकलाज सबै त्यागी मातेको पनि देखियो ।
जाडोको देशमा मान्छे तातेको पनि देखियो ॥

कतिसम्म खुला बन्नु कतिसम्म अभीष्ट छ ।
सीमामा जेसुकै राम्रो सीमा नाघे अनिष्ट छ ॥
सभ्यताको सही अर्थ के यस्तो हुन सक्छ र ?
पुरानै युगमा पुग्नु सभ्यता हुन सक्छ र ?

विमानबाट यात्रा गरिरहँदा कविमा अद्वैत वेदान्त दर्शनको अध्ययनबाट उद्दीप्त दार्शनिक भावतरङ्गहरू पनि उर्लिरहन्छन् । सांसारिक सीमामा बाँधिने मानिस मुक्त हुन सक्तैनन् तर त्यो सीमा नाघेर परब्रह्म प्राप्तिका लागि तल्लीन व्यक्तिहरू अन्तिममा मुक्त भई सीमारहित ब्रह्मजस्तै बन्दछन् भन्ने औपनिषद मान्यतालाई विमानको यात्राले एसिया र युरोपको सीमा नाघेर अघि बढ्न पाएको सामान्य प्रसङ्गबाट अभिव्यक्त गरिएको छ –

जो सीमाभित्र बाँधिन्छन् सधैँ सीमित बन्दछन् ।
सीमा नघेर जो हिँड्छन् सीमारहित बन्दछन् ॥

संसारीहरूको तृष्णा संसारमा भुलेर कहिल्यै पूरा नहुने भएकाले आफ्नो पनि प्रत्येक यात्रा सकेर विश्राम लिन चाहेको तर मृगतृष्णा जस्तै यात्राको क्रम अविराम चलिरहेको प्रसङ्ग ल्याएर कविले जीवात्माको अतृप्तिलाई दार्शनिक कोणबाट दर्साउनु भएको छ –

सारा हो मनको तृष्णा पुरिन्न कहिल्यै पनि ।
जति हाल्यो अझै रित्तो भरिन्न कहिल्यै पनि ।।
यो हो सायद संसार रीत हो यसको यही ।
यही सम्झेर उड्दै छु सुखदुःख सबै सही ।।

स्वच्छन्दतावादी भाव, दार्शनिक विचार, स्वाभाविक वर्णनसामर्थ्य र परिष्कृत शैलीको अपूर्व सङ्गम पाइने कविका अन्य कवितामा काव्यमा जस्तै यस कवितामा पनि अलङ्कारको सुन्दर प्रयोग पाइन्छ । उदाहरणका लागि हिमालयमा परेको सूर्यको किरणको प्रतिबिम्ब विमानमा आउँदा कविका आँखामा पनि त्यसको प्रभाव पर्दछ जसबाट लेखनी रोकिएको वा कवि विमूढ भएको विशिष्ट अवस्थालाई उत्प्रेक्षा अलङ्कारको विधानबाट यसरी देखाइएको छ –

सेताम्मे हिउँमा चम्के जब जाज्वल्य भै रवि ।
प्रतिबिम्ब पऱ्यो आई जेटमा त्यसको छवि ।।
आँखामा ठोकियो आई सहसा सूर्यको छवि ।
लेखनी रोकियो टक्क यद्वा विमूढ भो कवि ।।

आकाशपाताल जहाँ पुगे पनि संसारीहरूका लागि घर र राष्ट्र भक्तहरूका लागि आफ्नो राष्ट्रमा पुगेर मात्र वास्तविक विश्रान्ति मिल्दछ भन्ने सार्वभौम सत्यलाई सूक्तिमय बनाएर प्रस्तुत गरिएको छ –

यद्वा आकाशमा जाउँ यद्वा पाताल जाउँ म ।
विश्रान्ति आखिरी मिल्छ पुगेर घर अन्तिम ।।

### २४. माओको धरतीमा २०५७

अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा ए.सी.पी.एफ्. को विश्वसम्मेलनमा सहभागी हुने उद्देश्यले तेस्रो पटक गरिएको चीनको भ्रमणका क्रममा पुगेका बेइजिङ, च्याङ्सी, सेन्जेन र हङ्कङ जस्ता

प्रसिद्ध स्थानहरूको वर्णन गरिएको छ। विमानयात्रा, सम्मेलनमा भएको सहभागिता, उच्च अधिकारीहरूसँगको भेटघाट, माओका कार्य र व्यक्तित्व तथा स्वदेश फर्काइका क्रममा कविमा उत्पन्न अनुभूतिको अभिव्यक्ति यस कवितामा भएको छ।

चीनको राजधानी बेइजिङ पुगेर ए.सी.पी.एफ्. को सम्मेलनमा सहभागी हुने क्रममा समय बचाएर माओको शव राखेको घरमा पुग्दा कविले उनको शवलाई जस्तो देख्नुभयो त्यसैलाई सहजरूपमा वर्णन गर्दै उनको व्यक्तित्व, कार्य र प्रभावलाई सङ्क्षेपमा सटीक रूपमा यसरी वर्णन गर्नुभएको छ –

माओको शव राखेको घरमा पहिले गएँ।
सुतेझैँ मस्त निद्रामा देखी चकित झैँ भएँ ॥
माओ थिए ठुला नेला बलवीर्य समन्वित।
जस्को एक इसारामा हल्लन्थ्यो चीन भै नत ॥

युवालाई तताएर सारा चीन ताताउँथे।
प्रतिगामीहरूलाई अत्यन्त नै सताउँथे ॥
चीनका क्रान्तिका नेता थियो नाम भयङ्कर।
सुतेछन् चिरनिद्रामा बनेर आज सुस्थिर ॥

कवि चीनमा पुगेको समयमा सांस्कृतिक क्रान्तिको दुष्प्रभाव शिथिल भइसकेको थियो र चिनीयाहरू आफ्नो धर्म र संस्कृतिप्रति जागरुक र आस्थावान् हुँदै गएका थिए। लुसाङ पहाड पुग्दा कविले देखेको दृश्यबाट चीनको समकालीन सांस्कृतिक तस्बिरको सङ्केत पाइन्छ –

धर्मसंस्कृतिमा आस्था बढेको स्पष्ट देखियो।
बुद्धमन्दिरमा पूजा चलेको पनि देखियो ॥

चीनको कृषिसम्पत्ति, जलसमृद्धि, भव्य संस्कार र संस्कृति तथा मौलिक आचारपद्धतिलाई कविले एउटै पद्यबाट स्पष्ट पारिदिनु भएको पाइन्छ –

देखिए धानका खेत खोला नाला र जङ्गल ।
ह्वाङ्हो याङ्त्सी बगेका छन् सारा पारी सुमङ्गल ।।
इतिहास पुरानो छ भव्य संस्कार संस्कृति ।
खानपान सबै आफ्नू आफ्नै आचारपद्धति ।।

चीनले अल्पसङ्ख्यक जातिहरूलाई सुरक्षित राख्ने नीति अवलम्बन गरेको छ र राष्ट्रिय एकतालाई बलियो पनि बनाएको छ । सेन्जेनमा यस्तै अल्पसङ्ख्यक जातिहरूलाई एकत्रित राखेर चीनले सम्पूर्ण चीनको सारांश प्रस्तुत गरेको अनुभूति कविलाई भएको छ –

अल्प जातिहरूलाई ल्याएर यस गाउँमा ।
जीवन्त रूपमा सारा राखेका एक ठाउँमा ।।

सबै मानिस जन्मेपछि एकदिन जानुपर्छ भन्ने थाहा भएर पनि तदनुरूप आचरण र अभ्यास गर्दैनन् । तर यसको विपरीत कविले यो शाश्वत सत्य थाहा पाउनु भएको छ र माओको शवलाई देखेर यो सत्य अझ गहन रूपमा बोध गरी अरूलाई पनि यस बारे सचेत बनाउने उद्देश्यले दार्शनिक विचार व्यक्त गर्नुभएको छ –

को बाँच्छ यस धर्तीमा दीर्घजीवी भई सदा ।
आखिरी जानु नै पर्छ यै हो नियम सर्वदा ।।

अध्यात्मविद्या र योगदर्शनमा आत्मसंयम र इन्द्रियनिग्रहलाई जिज्ञासुका प्राथमिक शर्त मानिएका छन् । आफ्नो क्षुद्रता र मनसँग विजय प्राप्त नगरी अरूको मन जित्न नसकिने भएकाले विजयका लागि आत्मसंयमी र इन्द्रियनियन्ता बन्नुपर्ने दार्शनिक मान्यताको सारलाई कविले सरल र स्वाभाविक शैलीमा यसरी प्रस्तुत गर्नुभएको छ –

मान्छेले पहिले हार्छ आफ्नू नै क्षुद्रतासित ।
अर्काको मन के जित्छौ आफ्नू नै मन त्यो जित ।।

वेइजिङमा कवि नेपाली भाषामा प्रसारण गर्ने रेडियो केन्द्र पनि पुग्नुहुन्छ । त्यहाँ पनि आफ्नो आशुकवित्वको परिचय दिँदै सुनाएको कवितामा कविले चीनको विशालताको प्रशंसा गर्दै यस देशको उन्नतिको शुभकामनाका साथ पञ्चचामर छन्दको कविता सुनाउनु भएको छ –

विशाल राष्ट्र चीन यो विशाल शक्तिको घर ।
विशाल नै विशालमा विशालता निरन्तर ॥
म देख्छु आज चीनमा जतातत‌ै छ उन्नति ।
उठोस् अझै उँभोउँभो गरोस् अझै समन्नुति ॥

यस कवितामा चीनका दुई महान् राजनेता माओ र च्याङ काइ सेकको बसोवास एकै ठाउँमा भएको ऐतिहासिक तथ्यको प्रकाशन गरिएको छ । कुलिङ पहाडमा पहिले च्याङ काई सेक बस्ने गरेको र पछि माओ पनि त्यहीँ गएर बसेको ऐतिहासिक घटनालाई कवितामा यसरी उतारिएको छ –

च्याङ् काई सेकको वास रहेछ पहिले यहाँ ।
माओ पनि सँगै आई बसेछन् साथमा त्यहाँ ॥

कवितामा भाव सौन्दर्य मात्र नभई शिल्पसौन्दर्य पनि प्रतिबिम्बित गराउन सफल कविले यस कविताको पहिलो पद्यमै रूपक, उपमा, उत्प्रेक्षा र अर्थान्तरन्यासको सौन्दर्य सृष्टि गरेर चमत्कार देखाउनुभएको छ –

विश्व यो नाट्यशाला हो हामी हौँ नटुवा सरि ।
घुम्दछौँ रूप फेरेर गर्दै नृत्य थरीथरी ॥
मान्छे यौटै सधैँ हुन्छ भूमिका धेर बन्दछन् ।
संसारमा यसैलाई यद्वा नाटक भन्दछन् ॥

## २५. कङ्गारुको देशमा २०५७

अनुष्टुप् र पञ्चचामर छन्दमा लेखिएको ६९ पद्यको यस कवितामा अष्ट्रेलियाको मेलबर्नमा आयोजित स्काउटको राष्ट्रिय प्रमुख आयुक्तहरूको

एसिया र प्रशान्त क्षेत्रको अन्तर्राष्ट्रिय भेलामा सहभागी हुन गएको, सहभागी भएको र त्यहाँबाट स्वदेश फर्केर आएको विषयवस्तुको सुन्दर र स्वाभाविक वर्णन गरिएको छ । विमानबाट देखिएको मनोहारी भूदृश्यलाई यथावत् कवितामा उतारेर कविले प्रकृतिको चित्रणमा दक्षता देखाउनुभएको छ । अस्ट्रेलिया पुग्ने बेलामा कविले विमानबाट यस्तो दृश्य देख्नुभएको छ –

पानी पानी कतै देख्छु कतै भूमि छ जर्जर ।
धेरै जङ्गल देखिन्छ देखिन्छ भुइ उर्वर ॥
कतै छन् श्यामला धर्ती मरुभूमि कतै तल ।
यसैमा बस्तछन् मान्छे भोगेर कर्मको फल ॥

अष्ट्रेलियाको बहुरूपी प्राकृतिक परिवेशलाई यसरी उतारिएको पाइन्छ –

हराभरा धरा कतै कतै उजाड निर्जन ।
कतै धनाढ्य छन् धनी कतै अतीव निर्धन ॥
कतै छ तीर नीरको कतै छ फुङ्ग बालुवा ।
कतै छटा छ ग्रीष्मको कतै वसन्त पालुवा ॥

सम्मेलनस्थ मेलबर्न पुगेपछि कवि एकातिर मानिस र भावना नयाँ देख्नुहुन्छ भने अर्कातिर बजारमा पनि नयाँ किसिमको झिलिमिली देख्नुहुन्छ। उहाँलाई मेलबर्नमा सबै कुरा नयाँ लाग्छन् जसको अभिव्यक्ति यसरी प्रस्तुत गरिएको छ –

नयाँ थियो सभा जहाँ सबै जना नयाँ थिए ।
नयाँ थिए कुराहरू नवीन भावना थिए ॥
नयाँ थिए बजारमा झिलीमिली नयाँ थिए ।
समस्त मेलबोर्नमा सबै कुरा नयाँ थिए ॥

अहिलेको संसारमा नारी र पुरुषको भेद हट्तै गएको छ भने नारीको उच्छृङ्खलता पनि बढ्दै गएको छ। नारीको लज्जा, मर्यादा, अनुशासन

जस्ता गुण क्षीण हुँदै गएका छन् । मेलबर्नमा देखिएका नारीहरूको नग्नतालाई व्यङ्ग्य गर्दै कवि भावना यसरी मुखरित भएको छ –

थिए पुरुष शालीन नारीमा नग्नता थियो ।
नग्नताको परिदृश्य यहाँ सर्वत्र देखियो ।।
लज्जा हो धन नारीको भन्ने वेला गई सक्यो ।
लाज मानेर मान्छेले भाग्ने वेला भई सक्यो ।।

मेलबर्नबाट ब्रिस्बेनतिर विमानमा उडिरहनु भएका कविले धर्तीमा जेजस्ता दृश्य देख्नु भयो तिनलाई कवितामा अत्यन्त स्वाभाविक बनाएर चिनाउन खोज्नुभएको छ –

देख्तै छु तल धर्तीमा हरियाली जताततै ।
हरिया फाँट छन् सारा बस्ती देख्छु कतैकतै ।।
लामा सडक देखिन्छन् घना वृक्ष सबैतिर ।
खेतबारी मिलाएर बनेका अति उर्वर ।।

कविको शरीर विमानमा छ, उद्देश्य स्काउटको अन्तर्राष्ट्रिय भेलामा राष्ट्रको सहभागिता र गौरवपूर्ण स्थानको सुरक्षामा केन्द्रित छ र चेतना चाहिँ वेदान्त दर्शनबाट अनुप्राणित बनेको छ । यस कवितामा विभिन्न ठाउँमा यस्तै दार्शनिक विचारपथको अनुसरण गरिएको छ र केही अभिव्यक्ति पनि दिइएको छ । विमानमा अस्थायी रूपमा भेटिने र छुट्टिने यात्रीहरूलाई देखेर कवि वेदान्ती आँखाले विमानलाई हेर्नुहुन्छ र त्यहाँ गरेको यात्रालाई संसारको यात्रा मान्नुहुन्छ । विमानमा कोही सुतेको देखेर जीवले एक दिन सुत्नु (मर्नु) नै पर्दछ भन्ने दार्शनिक सन्देश दिनुहुन्छ । जस्तै –

सँगै आयौँ यहाँसम्म तर सारा गए छुटे ।
नचिनेका नयाँ फेरि आएर साथमा जुटे ।।
सारा रात सँगै उड्छौँ छुट्छौँ फेरि प्रभातमा ।
यै हो सायद संसार भेट्नु छुट्टिनु घाटमा ।।

कति ऐले सुतेका छन् म भोलि सुत्नुपर्दछ ।
त्यल्लाई कसले टार्छ त्यसैमा मिल्नुपर्दछ ॥
छु मस्त आफु भित्र नै म बुझ्न सक्छु के अरू ?
म आफुमा छु मस्तझैँ छ अन्त्य के र के सुरु ?

संसारमा जीवले अनन्त यात्रा गरेपछि मात्र ब्रह्मज्ञानको माध्यमबाट अन्तिममा यात्राबाट पार पाएर मुक्त हुन्छ भन्ने वेदान्त वचनलाई कवि विमानयात्राको प्रसङ्गबाट कवितामा प्रकाशित गरिदिनु हुन्छ –

कहाँ छ पार उड्नुको अडिन्छ दूरमा गई ।
छ यात्रु यो अनन्तको अडिन्छ सुस्त यो भई ॥

यात्रा पूरा गरेर स्वदेश फर्किने क्रममा कवि यात्राको आत्ममूल्याङ्कन गर्नुहुन्छ र यसबाट के उपलब्धि भयो भनेर आफैँलाई प्रश्न गर्नुहुन्छ । त्यसपछि संसारमा जे पढे पनि, जहाँ घुमे पनि आत्मज्ञान वा ब्रह्मज्ञान नभई जीवन सार्थक नहुने निष्कर्ष सजिलो अर्थमा यसरी प्रस्तुत गर्नुहुन्छ –

घुमेँ भनौँ कि के भनौँ नवीन पत्र पल्टियो ।
घुमेर हुन्छ के भनी विचार आज उल्टियो ॥
छ दूरभित्र जो सदा घुमेर विश्व के भयो ?
सकिन्न बुझ्न भित्र नै घुमेर बाह्य के भयो ?

आफुले गरेको काम केका लागि हो त्यसको उत्तर कविसँग नै छैन र पनि घुम्ने इच्छा समाप्त नभएको सत्यको उद्घाटन गर्दै सङ्ग्रहवादीहरूलाई सङ्केत गरेर त्यागको भाव उदित गर्नुपर्ने अभिप्राय देखाउन खोजिएको छ –

के निम्त काम गर्दै छु मुख्य आयुक्त भै बसी ।
तैपनि किन घुम्दै छु नबुझी यसमै पसी ॥

वेदान्त दर्शनले परिपक्व बन्दै गएको कविको वैचारिक शक्ति र समकालीन प्रवृत्तिको सन्तुलित भावलाई यसरी देखाइएको छ –

चारैतिर म देख्तै छु प्रश्नचिह्न सधैँ किन ?
यो हो विडम्बना यद्वा नबुझेर गए दिन ॥
विश्वास अब भागेर अति दूर गई सक्यो ।
छलछाम र षड्यन्त्र व्यवसाय भई सक्यो ॥

निर्जीव साधनले जता लैजान्छ अज्ञानी संसारी जीव पनि त्यतै जान्छ भन्ने वेदान्ती मान्यतालाई कवितामा यसरी उद्घाटित गरिएको छ –

गरी प्रस्थान तत्कालै उडेँ माथि कताकता ।
निर्जीवले जता लान्छ जीव जान्छ उताउता ॥

यस कवितामा पनि विभिन्न अलङ्कारहरूको चामत्कारिक प्रयोग भएको छ । उपमा र उत्प्रेक्षाको सहप्रयोगको सौन्दर्य यस पद्यमा अनुभव गर्न सकिन्छ –

धर्तीको रूप सौन्दर्य कुहिरोबाट छेकियो ।
नवीन दुलहीजस्तै धर्तीको रूप देखियो ॥
अथवा धरती ऐले लाज मानेर सुस्तरी ।
घुम्टोमा लुक्न लागिन् कि नवोढा दुलही सरि ॥

प्रशान्त महासागरलाई रातको समयमा चादर ओढेर सुतेको मानिसका रूपमा गरिएको रम्य कल्पनाबाट उत्प्रेक्षाको प्रस्तुति भएको छ –

देखिँदैन कहीं केही प्रशान्त शान्त सागर ।
यद्वा तल सुतेको छ रातको ओडी चादर ॥

बादलले ढाकेको आकाशलाई मलदोषले ढाकेको मनसँग तुलना गरेर अलङ्कार प्रयोगमा समेत वेदान्त दर्शनको बौद्धिक चस्को मिसाउने सीप कविमा विद्यमान छ । जस्तै –

देख्छु बादलले पूरा ढाकेको व्योम निर्मल ।
जसरी बुद्धि ढाकिन्छ कुसंस्कार बनी मल ॥

सङ्क्षेपमा हेर्दा 'कङ्गारुको देशमा' कविताले वाच्यार्थका तहमा यात्रावर्णनको आस्वादन गराउने क्षमता राखेको पाइन्छ भने

व्यङ्ग्यार्थको श्रेणीमा पुग्दा अद्वैत वेदान्तको कवितात्मक प्रस्तुतीकरण पनि गरेको देखिन्छ ।

### २६. एक यात्रा अनेक आयाम २०५७

सम्पूर्ण सरकारी कामबाट मुक्त भएपछि छात्र जीवनमा पहिलो पटक गरेको विदेशयात्राको सम्झना सँगाल्दै निजी रूपमा गरिएको भारतका विभिन्न तीर्थस्थलहरूको भ्रमणबारे अनुष्टुप् छन्दमा लेखिएको यस कवितामा धार्मिक स्थल र कार्यहरूको रोचक वर्णन गरिएको छ । कविले सरकारी सेवामा रहँदा विश्वका विभिन्न देशहरूको भ्रमण गर्नुभयो । २०१६ सालमा नै भारत सरकारको अतिथि भएर भारत भरका मुख्य मुख्य धार्मिक स्थलहरूको एकमहिना लामो अवधिको भ्रमण नेपाल भरिका कलेज र विशवविद्यालयका छात्रछात्राका साथ गरिसक्नुभएको थियो । त्यसको लामो अन्तरालपछि फेरि भारतका तीर्थहरूको यात्रा गर्न केही सहयात्रीहरूलाई लिएर उहाँ जहाँजहाँ जानुभयो, उहाँले जे जे गर्नुभयो र भोग्नुभयो त्यसको कवितात्मक अभिव्यक्ति यसमा भएको छ । एउटा यात्रा भए पनि काम धेरै पूरा गरेकाले यसको शीर्षक पनि 'एक यात्रा अनेक आयाम' राखिएको छ जुन कविताको कथ्य अनुरूप देखा पर्दछ । काठमाडौँदेखि विराटनगरसम्म विमानमा र त्यसपछि भारतभर रेल र बसमा यात्रा गर्दा कविले अभुभव गरेका विषय र कविमा उत्पन्न भावहरूको प्रकाशन यहाँ भएको छ । विमानमा यात्रा गर्दा त धर्तीको शब्दचित्र खिच्न सिपालु कवि पुरीबाट बालाजीतर्फ रेलमा चढेर हिँडिरहँदा झ्यालबाट दुवैतिर जे देख्नुहुन्छ कवितामा त्यसलाई यसरी लेख्नुहुन्छ –

बायाँतर्फ म देख्तै छु नीलो सागरको जल ।
दायाँतर्फ म देख्तै छु डाँडाकाँडा र जङ्गल ॥
जता हेर्‍यो उतै देख्छु सारा दृश्य मनोहर ।
बीचमा म गुडेको छु लक्ष्य राखेर सुन्दर ॥

कविले सर्वप्रथम नवद्वीप, कलकत्तामा कालीको दर्शन, जगन्नाथ पुगेर भगवान् विष्णुको दर्शन गरेर रामेश्वर पुगेर सदाशिवको दर्शन गर्नुभयो । त्यस सन्दर्भमा पनि कवि आफु पुगेको ठाउँको भौगोलिक जानकारी राख्न अभ्यस्त हुँदा यहाँ पनि त्यसको भावनात्मक अभिव्यक्ति दिनुहुन्छ । भ्रमणको क्रममा कन्याकुमारीस्थित हिन्दमहासागर, अरब सागर र बङ्गालको खाडीको त्रिवेणीमा पुगेपछि स्नान गरेर प्रसन्न हुनुभएका कवि त्यहाँको निकै सुन्दर र स्वाभाविक वर्णन गर्नुहुन्छ –

दूर दक्षिण यो ठाउँ सीमा भारतवर्षको ।
जता हेऱ्यो उतै नीलो पानी पानी समुद्रको ॥
हिन्दू अरब बङ्गाल तीन सागर सङ्गम ।
रहेछ अति नै ठूलो महिमा अति उत्तम ॥

यो ठाउँ देखेर कवि भावुक बन्नुहुन्छ र सूर्यको उदय र अस्तको क्रम उल्लेख गर्दै यसलाई नियतिको चक्रका रूपमा प्रस्तुत गर्नुहुन्छ –

यहीं उदाउँछन् सूर्य यहीं फेरि हराउँछन् ।
भोलिपल्ट उदाएर सूर्य फर्केर आउँछन् ॥
पूरा नियतिको चक्र यहाँ प्रत्यक्ष देखियो ।
कविको कल्पना हैन कुरा यथार्थ लेखियो ॥

विधर्मीहरूको वर्चस्व भएका राष्ट्रहरूको भ्रमणमा समेत वेदान्ती विचार स्फुरण हुने कवि वेदान्तकै उद्‌गम र अभ्यासको प्राचीन भूमिमा पुग्दा यसबाट अझ बढी प्रेरित बन्नुहुन्छ । रेलमा यात्री आउने र जाने गरेको देखेर रेललाई नै संसारको रूप मान्नुहुन्छ र संसारमा आउने जाने क्रम सामान्य र शाश्वत नियम हो भन्ने वेदान्ती विचार व्यक्त गर्नुहुन्छ –

यानमा आउँछन् मान्छे जान्छन् फेरि गरी श्रम ।
जानुआउनु संसार यही हो सबको क्रम ॥

रेल दौडिँदा नजिकका वृक्ष, भवन, पर्वत आदि पनि दौडिएको भ्रम हुन्छ । तर ती दौडिने होइनन्, रेल मात्र दौडिने हो । यसै गरी संसार पनि स्थायी जस्तो लागे पनि केही समयको भ्रमपूर्ण खेलमात्र हो भन्ने

वेदान्ती विचार यसरी प्रवाहित भएको छ –

दौडन्छ जति यो यान दौडन्छन् वृक्ष बाहिर ।
स्थिर जङ्गल दौडेका देखिइन्छन् सबैतिर ।।
दौडिँदैनन् कुनै वस्तु दौडिने रेल मात्र हो ।
त्यस्तै अध्यस्त संसार देखिने खेल मात्र हो ।।

गुणग्राही कविले आफु पुगेका स्थानहरूको सुन्दर वर्णन गर्नुका साथै समालोचनात्मक दृष्टि राखेर त्यहाँ सुधारको सन्देश पनि दिनुभएको छ । उदाहरणका लागि काशीमा विराजमान भगवान् शिवको छेउछाउमा फोहोर गरेको देखेर कवि यस्तो टिप्पणी गर्नुहुन्छ –

काशी हो शिवको धाम साक्षात् छन् शिवजी यहाँ ।
पानको थुकले गर्दा विद्रूप छ जहाँतहाँ ।।

कवि बाल्यकालदेखि नै सेवा र परोपकार गर्ने संस्कार र परिवारबाट हुर्किनुभएकाले अरूले त्यस्तै गरुन् भन्ने अभिलाषा राख्नुहुन्छ । अझ तीर्थयात्रीहरूका लागि त सेवा, सत्कार, सम्मान र सहयोग गर्नुपर्ने सदिच्छा उहाँमा छ । तर भारतका कतिपय स्थानहरूमा उहाँले उल्टो व्यवहार पाउनुभयो । त्यो देखेर उहाँलाई दिक्क लाग्छ र यस्तो कविता फुर्दछ । जसले तीर्थयात्रा गर्न चाहने व्यक्तिहरूलाई सावधानी अपनाउनका लागि मार्गदर्शन समेत गरेको छ –

यात्रामा भेटिए ज्यादा मान्छे स्वार्थी र वञ्चक ।
तीर्थमा हुनु पो पर्थ्यो सदाचारी प्रबन्धक ।।
सहयोगी हुनुपर्थ्यो यात्रीको गर्न पोषण ।
दुर्भाग्य ती बसेका छन् यात्रीको गर्न शोषण ।।
पण्डा दलाल पूजारी धाम या मार्गमा पनि ।
सारा शोषण नै गर्छन् अति निष्ठुर ती बनी ।।



# गद्य

शरदकुमार भट्टराईको साहित्यिक यात्रामा पद्यवर्गले जस्तै गद्यवर्गले पनि उल्लेख्य आधार निर्माण गरेको छ। विषयवस्तु, भाव र शिल्पलाई शास्त्रीय छन्दोबद्ध कवितामा प्रवाहित गराउन सिपालु भट्टराईले साहित्यिक गद्यलेखनमा पनि निपुणता देखाउनुभएको छ । कवि र खण्डकाव्यकारका रूपमा परिचित उहाँ यात्रावृत्तान्तकार र अनुस्मृतिकार पनि बन्नुभएको छ। आजभोलि भन्ने गरिएको 'नियात्रा' साहित्यमा उहाँ नाम छुटाउन नमिल्ने लेखकका रूपमा स्थापित हुनुहुन्छ।

गद्यकार भट्टराईको गद्यकारिता मूलतः दुई धारबाट अगाडि बढेको छ – यात्रासाहित्य र अनुस्मृति । यात्रासाहित्य नै उपर्युक्त 'नियात्रा' साहित्य हो भने अनुस्मृति आत्मकथा र संस्मरणको समग्र अभिलेख हो। यसलाई लेखकले जीवनयात्रा नामकरण गर्नुभएको छ। यात्रासाहित्य पनि भारतको तीर्थयात्रा र अष्ट्रेलियामा गरिएको पारिवारिक मिलनयात्रा गरी दुई उपवर्गमा बाँडिएको छ। यसरी हेर्दा उहाँको साहित्यिक गद्यको विषयक्षेत्र यस्तो देखिन्छ –




यी तीनओटै विषयक्षेत्रमा उहाँका एउटा एउटा पुस्तक प्रकाशित छन् –

१. तीर्थयात्रा (भारत)
विभिन्न तीर्थहरूको यात्रावृत्तान्त (काठमाडौँदेखि काठमाडौँसम्म), २०६४
२. अनुस्मृति (जीवनयात्रा), २०६७
३. पारिवारिक मिलनयात्रा (अष्ट्रेलिया)
तेस्रो अष्ट्रेलियायात्राको दैनिकी, २०६९
यी पुस्तकको रूपरेखा यस प्रकार छ।

## १. विभिन्न तीर्थहरूको यात्रावृत्तान्त २०६४

[ यात्राविवरणलाई नेपाली साहितयमा नियात्राको नामले पनि सम्बोधन गर्ने गरेको पाइन्छ। नेपाली बृहत्‌शब्दकोशमा नियात्रा भन्नाले यात्रानिबन्धको औपन्यासिक वा उपाख्यानात्मकरूप वा यात्रावर्णन बारे कथात्मक शैलीमा लेखिएको निबन्ध भनेर उल्लेख गरेको देखिन्छ। त्यस परिभाषा अनुसार मैले लेखेका तीनै थरी यात्रावृत्तान्तहरू केही नियात्राभित्र पर्न सक्लान् र केही नपर्न पनि सक्लान्। यो नियात्रा शब्द संस्कृतबाट लिइएको तत्सम शब्द भन्ने शब्दकोशमा उल्लेख भए तापनि यो शब्द संस्कृतको व्याकरणबाट व्युत्पन्न भएको भने देखिँदैन। संस्कृतबाट आएको यात्रा शब्द "या+ष्ट्रन्+टाप्" भएर बन्दछ। यसको अर्थ – जानु, गति, सेनाको प्रयाण, आक्रमण, तीर्थयात्रा, तीर्थयात्रीको समूह, उत्सव, पर्व, संस्कारको अवसर, जुलुस, उत्सवयात्रा, सडक, जीविका, निर्वाह, रीति, उपाय, प्रथा, प्रचलन, वाहन र सवारीसमेत हुन आउँछ। यो कुरा वामन शिवराम आप्टेको संस्कृत कोषबाट बुझ्न सकिन्छ। यसैगरी यात्राको अर्थ बुझाउने शब्दलाई English Dictionary मा यसरी उल्लेख गरेको पाइन्छ – Travel - to journey, to go, to walk, to go round, soliciting orders, to go on circuit, to move along a course, to go with impetus, to pass, to move आदि। यसैगरी अङ्ग्रेजी भाषाको अर्को शब्द – Journey हो। यसको अर्थ A day's work or travel, a campain, any travel, tour, excursion, movement from end

to end of a fixed course आदिलाई लिन सकिन्छ। यसै गरी अङ्ग्रेजीको अर्को शब्द Tour भन्ने छ। यसको अर्थ a round a prolonged journey from place to place esp for pleasure or for acting, a pleasure trip or outing आदि छ । अङ्ग्रेजी भाषामा यात्रालाई बुझाउने अरू पनि शब्दहरू छन् तर हाम्रो नियात्राले परिकल्पना गरे अनुसार सम्पूर्ण अर्थ समेट्ने एउटै शब्द भने पाउन सकिँदैन ।

नियात्रा शब्द व्युत्पत्तिको दृष्टिकोणले यात्रा शब्दका अगाडि निः, निर् अथवा निस् उपसर्गहरू लागेर बनेको भन्ने हो भने नियात्रा शब्द नबनेर निर्यात्रा शब्द बन्दछ। अथवा नितरां यात्राको व्युत्पत्तिबाट नियात्रा शब्द बनाउने हो भने अनवरत यात्रा भन्ने बुझाउँछ। अथवा निर्गता यात्राको व्युत्पत्तिबाट बनाउने हो भने यात्राबाट उपराम भन्ने बुझिन्छ । यसरी नियात्रा शब्द व्युत्पन्न हुने देखिँदैन। नियात्रा शब्द संस्कृतको रूढ शब्द पनि होइन । संस्कृत व्याकरणमा या धातुमा अगाडि निर् उपसर्ग लागेर पछाडि क्तिन् प्रत्यय भएर (निर्+या+क्तिन्) निर्याति शब्द बन्दछ। यसले निक्लिनु, प्रस्थान गर्नु, मर्नु आदि समेतलाई जनाउँछ। संस्कृत साहित्यमा शब्दका पाँच भेद छन् । तिनमा द्रव्यवाचक शब्द, गुणवाचक शब्द, क्रियावाचक शब्द, जातिवाचक शब्द र संज्ञावाचक शब्दहरू पर्दछन् । (द्रव्यं गुणं क्रिया जातिमाहुः शब्दाश्चतुर्विधाः । यदृच्छया प्रयुक्तः स्यात् संज्ञा शब्दस्तु पञ्चमः) यी शब्दहरूका तीन भेद छन् – रूढ शब्द, यौगिक शब्द र योगरूढ शब्द। व्युत्पत्ति भएर बनेका यौगिक शब्द र पहिलेदेखि प्रयोग भएर आएका रूढ (व्युत्पत्तिरहिताः शब्दा रूढाः) शब्द हुन्छन् । नियात्रा शब्द रूढशब्द होइन, व्युत्पत्ति गरेर बनाइएको व्युत्पन्न शब्द पनि होइन र योगरूढ शब्द पनि होइन । तैपनि नेपाली यात्रासाहित्यमा एउटा नयाँ शब्द जन्मिएकोमा खुसी नै मान्नु पर्ने देखिन्छ।

मैले यात्राविवरण कवितामा वा गद्यमा लेख्ता कुनै यात्राको परिभाषाभित्र आबद्ध भएर लेखेको होइन । केवल आत्मसन्तोषका लागि अथवा बसिबियाँलोको रूपमा समयको सदुपयोग गर्न मैले लेख्ने गरेको हुँ । यसका अतिरिक्त वार्णिक छन्दका कतिपय कविता यात्राको

वर्णन गर्नुभन्दा पनि आफुभित्रको भावना अभिव्यक्त गर्ने दृष्टिकोणले लेखेको थिएँ । विविधयात्रामा प्रकाशित कविताहरूमध्येमा दूरदेश, जर्मनी, वाराणसी र गङ्गा कविताहरूलाई लिन सकिन्छ। केही कविता र विवरणहरू मैले माथि भनेजस्तो सम्झनाका लागि र केही कविताहरू विदेशमा यात्रा गर्दाखेरि समयको सदुपयोग गर्ने दृष्टिकोणले पनि लेखेको थिएँ। मेरा यी यात्रावृत्तान्तहरूबाट औपन्यासिक वा साहित्यिक रसास्वादन प्राप्त हुन सक्तैन। तैपनि स्वान्तःसुखायका लागि लेखिएका यी यात्राविवरणहरूले कुनै एक जिज्ञासु पाठकलाई मात्र पनि सन्तोष दिन सक्यो भने म आफु सफल भएको ठान्नेछु। ]

यो पुस्तक कडा प्रशासक तथा शालीन व्यवहार र भक्तिचेतनाका समृद्ध व्यक्तित्व शरदकुमार भट्टराईले ३२ वर्ष र २ महिना लामो सरकारी सेवामै रहँदा र त्यसबाट अवकाश लिएपछि पनि भारतका विभिन्न तीर्थस्थलहरूमा गरेको भ्रमणको यथार्थ वृत्तान्त हो। उहाँले स्वदेश र विदेशमा गरेका पचासौँ भ्रमणहरूको कवितात्मक प्रस्तुति गद्यवर्गमा भएको छ। यसमा चाहिँ भारतमा मात्र गरेका प्रसिद्ध र प्रमुख तीर्थस्थलहरूको गद्यात्मक वर्णन गरिएको छ। यस पुस्तकमा तीर्थस्थलमा पुगेको, आफुले त्यहाँ गरेका कामहरूको र त्यहाँबाट फर्केर आएको वर्णन मात्र छैन, तत्तत् स्थानको भौगोलिक र शास्त्रीय परिचय एवं महत्त्व निरूपण गरी आधिकारिक ज्ञान दिने प्रयास पनि गरिएको छ। अतः यो पुस्तक तीर्थहरूको अभिलेखका साथै तिनको अनुसन्धानमा सहायता पुऱ्याउने सामग्री पनि बनेको छ। 'यात्रीको भनाइ' शीर्षकको भूमिकामा लेखकले 'नियात्रा' शब्दको व्युत्पत्ति र व्याकरणात्मक शुद्धिको प्रश्न उठाउँदै यसको अङ्ग्रेजी स्वरूप बारे पनि चर्चा गर्नुभएको छ। यसका साथै नेपालीमा विकसित यात्रासाहित्यको साङ्केतिक स्वरूप उल्लेख गरेर यस विधाका जिज्ञासुहरूमा अभिरुचि बढाइदिनुभएको छ। भूमिका नै अनुसन्धानको एउटा नमुना बनेको

पाइन्छ । आफु पुगेका तीर्थस्थलहरूको पौराणिक महत्त्व देखाउने क्रममा पौराणिक ग्रन्थहरूका मूलसंस्कृत उद्धरण अनुसूचीमा समावेश गरेर लेखकले यस पुस्तकको औचित्य र उपादेयता अझ पुष्ट र सबल बनाउनु भएको छ । कहिले एक्लै र कहिले सपत्नी र मित्रहरूको समेत सहयात्रामा विभिन्न तीर्थस्थलहरूमा पुग्नुभएका लेखकले यात्रावर्णनमा अनुल्लेख्य प्रसङ्गलाई छाडिदिनु भएको छ भने आफुले अनेकौँ बाधा सहेर पनि अरूलाई यात्रा सुकर हुन सकोस् भन्ने ध्येयले आवश्यक प्रसङ्ग र घटना उल्लेख गर्नुभएको छ । लेखकमा हुनुपर्ने मार्गदर्शक धर्मको पालना उहाँले गर्नुभएको छ । पुस्तकमा समाविष्ट विभिन्न स्थलका दुर्लभ रङ्गीन चित्रहरूले यसको महत्त्व अझ बढाएका छन् । यो धार्मिक, अनुसन्धानमूलक र शिक्षाप्रद यात्रावृत्तान्तको साहित्यिक कोसेली बनेको पाइन्छ । भारतका तीर्थस्थलहरूको भ्रमणका लागि उत्सुक व्यक्तिले प्रस्तुत पुस्तक आद्योपान्त पढी कार्य प्रारम्भ गरेमा यात्रा सार्थक र सफल बन्न सक्ने देखिन्छ । यसरी यो पुस्तक भारतीय तीर्थहरूको यात्राका लागि गुरुग्रन्थ नै बनेको छ ।

यो पुस्तक पाँच खण्डमा विभक्त छ । पहिलो खण्डमा भगवान् शिवका ज्योतिर्लिङ्गहरूको सङ्क्षिप्त यात्रावर्णन गरिएको छ । यसमा सरकारी सेवाबाट अवकाश लिएपछि लेखकमा उत्पन्न मनोविज्ञान, विकल्पहरूको खोजी र निर्णय, द्वादश ज्योतिर्लिङ्गको परिचय र महत्त्ववर्णन र तिनको दर्शनबाट पैदा भएको मानसिक परितोषको प्रकाशन गरिएको छ ।

दोस्रो खण्डमा भारतका विभिन्न तीर्थस्थलहरूको यात्रावर्णन गरिएको छ । पहिलो खण्डमा शिवका केही प्रसिद्ध ज्योतिर्लिङ्गहरूको वर्णन गरिएको छ भने दोस्रो खण्डमा विभिन्न धाम र मन्दिरहरूको विवरण प्रस्तुत गरिएको छ । भगवान् श्रीकृष्णले जरासन्धबाट मथुरानगरी र यसका निवासीहरूका लागि गरेको प्रतिरक्षाको उपाय सम्बन्धी पौराणिक प्रमाण पनि दिइएको छ । द्वारका नगरको भव्य र दिव्य स्वरूपबारे पनि यहाँ चर्चा

भएको छ । श्रीकृष्णका पत्नीको सङ्ख्या, शाखासन्तान, श्रीकृष्णको स्वधामगमन, शङ्कराचार्यबाट स्थापित मठहरूको प्रसङ्ग, श्रीकृष्णका गुरु सान्दीपनिको आश्रम, महाकवि कालिदासकी इष्टदेवी, शिप्रा नदीको विगत र वर्तमान, मथुरा, वृन्दावनको यात्रा, यमुनानदीको स्वरूप, श्रीकृष्णको जन्मस्थल, नन्दबाबाग्राम आदिको उल्लेख गरिएको छ । यस खण्डमा पनि ठाउँठाउँमा भागवत र दुर्गासप्तशतीका श्लोकहरूको उद्धरण दिई लेखकले आफ्नै मौलिक कवितासमेत समावेश गरी उपयोगी बनाउनु भएको छ ।

तेस्रो खण्डमा यमुनोत्तरी, गङ्गोत्तरी, केदारनाथ र बद्रीनाथको यात्रावर्णन गरिएको छ । काठमाडौँबाट यी स्थलको यात्राका लागि राय बरेली पुग्दा लेखक कवि बन्नुहुन्छ र यसरी कविता फुराउनुहुन्छ –

कलिला सूर्यका रश्मि सुनौला धर्तीमा झरे ।
धर्तीका शिरमा यद्वा सिन्दूर सूर्यले छरे ॥

रेलको यात्राबाट हरिद्वारतर्फ प्रस्थान गरी चारधाम यमुनोत्तरी, गङ्गोत्तरी, केदारनाथ र बद्रीनाथसम्म पुगेको वर्णन यस खण्डमा गरिएको छ । संस्कृतसाहित्यका चम्पू (गद्य पद्यको मिश्रण भएको शैली) काव्यमा सामान्य वर्णन गद्यमा र भावप्रधान वर्णन पद्यमा भएको देखिन्छ । लेखकले पनि नेपालीमा सामान्य वर्णनमा गद्य र विशिष्ट मनोदशाको अभिव्यक्तिमा पद्य शैली अपनाएको पाइन्छ । यस्तो पद्यात्मक प्रयोगले यस कृतिलाई यात्रासाहित्यको श्रेणीमा सुरक्षित राख्न सहयोग पुर्‍याएको छ । गङ्गोत्तरी पुग्नका लागि स्थानीय स्तरमा अपनाउनुपर्ने उपायहरूको विवरण दिएर त्यहाँ जान चाहने मानिसलाई पूर्वसचेतता अपनाउन सहयोग पुर्‍याइएको छ । यसैगरी केदारनाथको दर्शन र पूजनविधिको वस्तुगत परिचय पनि दिइएको छ । यसै खण्डमा बद्रीनाथको दर्शन र पूजन तथा ब्रह्मकपालीमा पितृहरूका लागि दिइने पिण्डदानका साथै बाटामा पर्ने अन्य तीर्थस्थलहरूको उल्लेख पनि भएको छ । यसै खण्डमा

यमुनोत्तरी, गङ्गोत्तरी, केदारनाथ, बद्रीनाथका साथै विभिन्न स्थलको छुट्टाछुट्टै शीर्षकमा परिचय दिएर पुस्तक बढी उपयोगी र जानकारीमूलक बनाइएको छ।

चौथो खण्डमा वाराणसीको यात्रावर्णन गरिएको छ। सरकारी सेवामा कार्यरत अवस्थामै केही सहयोगीका साथ सपत्नी लेखकले गरेको वाराणसीको यात्राको वर्णन यस खण्डमा भएको छ। फल्गुनदीमा श्राद्ध गर्दा पण्डाले देखाउने अभद्र व्यवहार र पैसाको बार्गेनिङ जस्ता सन्दर्भ पनि यस खण्डमा आएका छन्। अरू खण्डको तुलनामा चौथो खण्डन निकै छोटो छ।

अनुसूचीको रूपमा आएको पाँचौँ खण्डमा मायापुरीदेखि वनारससम्मको यात्रावर्णन भएको छ। कलकत्तामा कालीको दर्शन गर्नुका साथै जगन्नाथपुरी तिरूपतिबालाजीसम्मको यात्रा र दर्शन एवं पूजाको सन्दर्भ लेखकले उल्लेख गर्नुभएको छ। पण्डाले दिने दुःखको विवरण यहाँ पनि दिइएको छ। यहाँ रेलको टी.टीको लुब्ध र घुस्याहा व्यवहारको दृश्य पनि प्रस्तुत गरिएको छ। रामेश्वरम् र कन्याकुमारीको यात्रा एवं अरब सागर, हिन्दमहासागर र बङ्गोपसागरको त्रिवेणीमा गरेको रोमाञ्चक स्नान यस खण्डमा आएका विशिष्ट पक्ष हुन्। वनारसमा विश्वनाथ, पार्वती, अन्नपूर्णा आदि देवीदेवता र विन्ध्याचल गएर विन्ध्यवासिनी देवीको दर्शन गरेको सन्दर्भ समेत यस खण्डमा उल्लिखित छन्। यसरी पुस्तकमा लेखकले विभिन्न समयमा भारतका विभिन्न तीर्थस्थलहरूमा गरेको यात्रा र त्यस क्रममा भोग्नुपरेका समस्याको चित्रण गरी अनुसन्धानमूलक सूचना र सामग्री दिइएको पाइन्छ।



# अनुस्मृति २०६७ का भूमिकाबाट

(जीवनयात्रा)

[ भोगा न भुक्ता वयमेव भुक्तास्तपो न तप्तं वयमेव तप्ताः ।
कालो न यातो वयमेव यातास्तृष्णा न जीर्णा वयमेव जीर्णाः ।।
बलिभिर्मुखमाक्रान्तं पलितेनाङ्कितं शिरः ।
गात्राणि शिथिलायन्ते तृष्णैका तरुणायते ।।
– वैराग्यशतक, भर्तृहरिः

भर्तृहरिको यो कालजयी तथा शाश्वत उक्ति अत्यन्त जीवन्त र मर्मस्पर्शी पनि छ। जब जब म यो कविता पढ्दछु, तब तब यो कविता मलाई नै लक्ष्य गरेर कविले लेखेका हुन् कि ? जस्तो मलाई भान हुन्छ। सायद मजस्ता उमेर नाघेका संवेदनशील मान्छे सबैलाई यस्तै अनुभूति हुन्छ होला। यदि हुँदैन भने त्यो दुर्भाग्य हो। खास कुनै महत्त्व र उपयोगिता नभए तापनि यिनै भावनाहरूको अन्तरालमा रहेर मैले यो मेरो अर्थहीन जीवनयात्रा अर्थात् अनुस्मृति लेख्ने रहर गरेको हुँ।

तीन दशकभन्दा पनि बढी लामो समयसम्म जागिरमा रहँदा मेरो बानी एकोहोरो भइसकेको थियो । त्यहाँबाट बाहिर निस्किएपछि दिनचर्या नियमित गर्न मलाई सुरु सुरुमा मुस्किल परेको थियो। एषणा र संस्कारको वशीभूत भएर मैले केही समय पुनः केही प्राप्तिको कामना गरेँ । सुरु सुरुमा अवकाश प्राप्त जीवन अभिशाप लागेको थियो, तर बिस्तारै यसलाई वरदानका रूपमा परिणत गर्ने मैले निश्चय गरेँ। मैले व्यवहारमा गर्नुपर्ने छोराहरूको विवाहका साथै अन्य धार्मिक कृत्यहरू पनि यसै बेला गरेँ। यात्रा गर्न बाँकीरहेका उत्तर भारत र दक्षिण भारतका चारधाम लगायतका तीर्थहरूको यात्रा श्रीमती र परिजनका साथ मैले यसै समयमा गरेँ। यसका अतिरिक्त मैले केही पुस्तकहरू लेखेर प्रकाशित पनि गरेँ। यात्रा र प्रकाशनका सम्बन्धमा मैले विभिन्न किताबहरू लेखेको र प्रकाशन गरेको तथ्य यस पुस्तकमा पनि उल्लेख गरेको छु।

फुर्सतका समयमा मैले केही कृतिहरूको लेखन र प्रकाशन गर्ने काम २०२६ सालदेखि नै नियमित रूपमा गर्दै आएको हुँ । अवकाश लिएपछि पनि २०५८ सालमा यात्रैयात्रा र २०५९ सालमा पत्रैपत्र नामका दुई कवितासङ्ग्रहहरू तयार गरेर मैले प्रकाशित गरेको थिएँ । लोकार्पण समारोहमा तिनको समीक्षा प्रा.डा. तारानाथ शर्माले गर्नुभएको थियो । उहाँले तिनै कृतिहरूलाई लिएर एउटा लेख 'कान्तिपुर' पत्रिकामा प्रकाशित पनि गराउनु भएको थियो । त्यस लेखमा कृतिहरूको समीक्षाका साथै प्राञ्जल गद्यमा आफ्नो जीवनको अनुभव लेख्न शर्माले मलाई उत्प्रेरित पनि गर्नुभएको थियो ।

त्यसरी डा. शर्माको उत्प्रेरणाका साथै मेरा परम मित्र मुकुन्द शमशेर थापाले पनि मलाई बारम्बार घच्घच्याउनुभएको थियो । मैले खास उपयोगी र महत्त्वको नहुने ठानेको थिएँ तापनि मित्रहरूको प्रेरणा र फुर्सतको समयलाई सदुपयोग गर्ने सदुद्देश्यले संस्मरण लेख्तै कम्प्युटर गराउँदै गरेको थिएँ । त्यसरी लेखिसक्नै लागेको समयमा कम्प्युटरको हार्डडिस्क जल्यो र त्यसमा सुरक्षित मेरो सम्पूर्ण संस्मरण पनि जलेर समाप्त भएको थियो ।

त्यसपछि म फेरि संस्मरण लेख्नेतर्फ नलागेर अरू नै किताबहरू लेखी प्रकाशित गर्ने तर्फ लागेँ । यसै बेलामा फेरि प्रा. डा. तारानाथ शर्मा र मित्र मुकुन्द शम्शेर थापाले जसरी पनि लेख्ने भनेर अत्यन्त प्रेरित गर्नुभएको हुँदा म पुनः संस्मरण लेख्न थालेँ र लामो समय लगाएर पनि गरेको हुँ । यसै बीचमा यस संस्मरण लेखनका उत्प्रेरक मध्येका एक जना मित्र मुकुन्द शमशेर थापा यस संसारबाट बिदा भइसक्नु भएको छ ।

संस्मरण लेखिसकेर पनि यसको उपयुक्त नाम भने मैले जुराउँन सकेको थिइन । यसका धेरैथरी नामहरू जुर्न सक्तथे । नाम आत्मकथा पनि हुनसक्तथ्यो । म जस्तो सामान्य मान्छेको जीवनीलाई आत्मकथा कसरी भन्न सुहाउँछ ? महात्मा गान्धी, विश्वेश्वरप्रसाद कोइरालाजस्ता महामानवहरूको जीवनकथालाई पो आत्मकथा भन्न सुहाउँछ भन्ने मलाई लाग्यो । आत्मकथा, आत्मवृत्तान्त आदि जस्ता शब्दहरू पनि मेरा

लागि नमिल्ने देखेपछि मेरा अग्रज जागिरेहरूले लेखेजस्तै गरेर जागिरे जीवन, जागिरेको अनुभव, जागिर खाँदा, जागिरतिर अलमलिँदा जस्ता सबैले बुझ्ने जागिरसँग सम्बन्धित शीर्षक राखौँ कि ! जस्तो पनि मलाई लागेको थियो, तर जागिर खानकै लागि यो मनुष्य जीवन पाएजस्तो गरेर त्यसैमा मात्रै सीमित भएको नाम के राख्नु जस्तो लाग्यो, उपयुक्त लागेन। किनभने जागिरको कुरामात्रै नलेखेर जन्मदेखि अर्थात् मैले सम्झन सक्ने उमेर भएदेखिका र अहिले यो भूमिका लेख्तै गरेको समयसम्मका सबै कुरा मैले यसमा समावेश गर्ने प्रयास गरेको छु । अतः जागिरमा मात्रै सीमित भएर किताबको शीर्षक जुराउन मिलेन । धेरै सोचविचार पछि यसको शीर्षक 'जीवनयात्रा' राख्नु पो ठीक हुन्छ कि भनेर मैले नाम जुराउन खोजेँ । किनभने म टुकुटुकु हिँड्न थालेपछि यो सत्तरी वर्षको उमेरसम्म जसरी तसरी म हिँडिरहेकै छु। यो ठीकै होलाजस्तो लाग्यो। फेरि अर्को कुरा मैले मेरा लेख र किताबहरूको नाम राख्ता पनि कतिपयको नाम यात्रा शब्द अघि र पछि जोडेर राखेको छु। जस्तै – चीनको यात्रा, पूर्वको यात्रा, फ्रान्सको यात्रा, अष्ट्रेलियाको यात्रा, अष्ट्रियाको यात्रा, अन्तिम यात्रा वृद्धावस्था, विविधयात्रा, यात्रैयात्रा, यात्रावृत्तान्त आदि कुराहरूले गर्दा पनि मलाई यो जीवनयात्रा नाम ठीकै लागेको थियो ।

किताबको शीर्षक अझै राम्रो जुरिनसकेको समयमा मैले बिहान बिहान पाठ गर्ने गरेको पञ्चरत्नगीतामध्येको एक गीता 'अनुस्मृतिः'मा र ब्रह्मसूत्रको 'अनुस्मृतेश्च' भन्ने सूत्रमा पनि मेरो ध्यान गएको थियो । त्यस 'अनुस्मृतेश्च' सूत्रको अर्थमा – 'अनुभवं अनु उत्पद्यमाना स्मृतिरेव अनुस्मृतिः' अर्थात् अनुभवपछि उत्पन्न हुने स्मरण नै अनुस्मृति हो भनेर लेखिएको छ । तर पञ्चरत्नगीताको अनुस्मृतिको अर्थ त्यतिमा मात्र सीमित छैन । त्यो अनुस्मृति त महाभारतको युद्धमा पराजित भएर एकान्त स्थानमा एक्लै शरशय्यामा छटपटाएर सुतिरहेका भीष्मपितामहले धर्मराज युधिष्ठिरलाई बताएको तत्त्वसम्बन्धी कुराको अनुस्मृति हो । यो शब्द अनु+स्मृ+क्तिन् भएर बन्दछ । यो शीर्षक मलाई अझ राम्रो र मिल्दोजुल्दो लाग्यो । किनभने यो मेरो जीवनको प्रतिच्छाया हो र

तत्त्वजिज्ञासा गर्ने उत्कण्ठाको प्रतिध्वनियुक्त अनुस्मरण हो । लामू जीवनको युद्ध हारेर विविध रोगहरूका शरशय्यामा सुतेर एकान्तमा छटपटाउँदै अहिले बिस्तारै जुन म सम्झिरहेको छु । शरशय्यामा सुतेका मरणासन्न भीष्मपितामहले अनुस्मृतिपछि 'इति मतिरूपकल्पिता वितृष्णा' भनेर आफ्नो तृष्णारहित मतिलाई भगवान्मा समर्पण गरेका थिए भने म चाहिँ रोगहरूको शरशय्यामा सुतेर मेरो तृष्णायुक्त मति भगवान्लाई समर्पण गर्न चाहन्छु ।

यसरी दुवै नाम मन परेपछि यस किताबको मुख्य नाम 'अनुस्मृति' र कोष्ठभित्रको उपनाम 'जीवनयात्रा' राख्नु उपयुक्त हुने मलाई लाग्यो । किनभने मेरा पनि दुइटा नाम छन् । यसरी लामो ऊहापोहपछि किताबको नाम पनि जुऱ्यो अर्थात् नामकरण भयो ।

मैले माथि उल्लेख गरेजस्तै मेरो आफ्नै नामका बारेमा पनि स्पष्टीकरण दिनुपर्ने भएको छ । किनभने म लौकिक वा सांसारिक विषयमा लेख्ता शरदकुमार भट्टराई लेख्तछु भने ज्ञान, भक्ति वा आध्यात्मिक विषयमा लेख्ता भने शरत्कुमार भट्टराई लेख्ने गरेको छु । केही वर्ष अघि मदन पुरस्कार गुठी तथा पुस्तकालयका अध्यक्ष कमलमणि दीक्षितले टेलिफोनबाट यही प्रश्न गर्नुभएको थियो । मैले दुवै नाम लेख्ने गरेको कुरा भनेको थिएँ, तर यसरी विषय छुट्याएर भने मैले सायद भन्न बिर्सिएँ कि ! सो कुरा अहिले लेख्नु प्रासङ्गिक नै हुने ठान्दछु ।

यस भूमिकामा अब लामू गन्थन लेख्नेतिर नलागेर म यसको बिट मार्नेतर्फ लागेको छु । किनभने धेरै लामो कुरा त मैले मूल किताबमा नै लेखिसकेको छु ।

जन्मिएपछि मर्नु पर्ने, माथि पुगेपछि तल खस्नुपर्ने, भेटिएपछि छुट्टिनु पर्ने र उदाएपछि अस्ताउनु पर्ने त यो प्रकृतिको अकाट्य नियम नै हो । भनिएको पनि छ –

सर्वे क्षयान्ता निचयाः पतनान्ताः समुच्छ्रयाः ।
संयोगा विप्रयोगान्ता मरणान्तं च जीवितम् ।। – वाल्मीकि २।१०५।१६

संसार यस्तै मायिक छ, अस्थिर छ र कुटिल पनि छ । यस संसारमा

आ-आफ्ना प्रारब्ध अनुसार हामीहरू विभिन्न योनिमा घुम्ने गर्दछौँ र सुखदुःख पनि भोग्दछौँ। एकैनास दुःख पनि कसैलाई हुँदैन र सुख पनि हुँदैन । यो त घुमिरहने चक्र नै हो । यही कुरा महाकवि कालिदासले आफ्नू मेघदूतकाव्यमा व्यक्त गर्नुभएको छ। जस्तै –

कस्यात्यन्तं सुखमुपनतं दुःखमेकान्ततो वा ।
नीचैर्गच्छत्युपरि च दशा चक्रनेमिक्रमेण ॥

सुख र दुःख कसैले दिन पनि सक्तैन र लिन पनि सक्तैन । आफ्नै कर्मका डोरीमा सबै प्राणीहरू बाँधिएका हुन्छन् । नीतिले पनि यही कुरो भनेको छ। जस्तै –

सुखस्य दुःखस्य न कोऽपि दाता परो ददातीति कुबुद्धिरेषा ।
अहं करोमीति वृथाभिमानः स्वकर्मसूत्रे ग्रथितो हि लोकः ॥

अनेकौँ जन्महरूमा सञ्चय गरेका शुभाशुभ कर्महरूको फल हामीहरूले अहिले भोगिरहेका छौँ । यस जन्ममा पनि गरेका शुभाशुभ कर्महरूको फलसमेत आगामी जन्महरूमा हामीहरूले भोग्नु पर्ने नै हुन्छ। अविद्या, काम र कर्मको दुश्चक्रमा परेर युगयुगान्तर, जन्मजन्मान्तर र कल्पकल्पान्तरसम्म हामीहरूले संसारमा घुमिरहनु नै पर्नेहुन्छ । यसबाट सधैँका लागि मुक्ति पाउन सकेमा नै मनुष्यजीवन पाएको सार्थक हुन आउँछ । अन्यथा मनुष्यजीवन निरर्थक हुन्छ । निरर्थक हुने मात्रै होइन, त्यस्ता व्यक्तिलाई आत्मघाती भनेर शास्त्रहरूले भनेका छन् । जस्तै – 'इह चेदवेदीदथ सत्यमस्ति न चेदिहावेदीन्महती विनष्टिः ।' (केनोपनिषद् २।५) 'तांस्ते प्रेत्याभिगच्छन्ति ये के चात्महनो जनाः ।' (ईशावास्योपनिषद् ३) यही कुरा श्रीमद्भागवतले पनि भनेको छ। जस्तै –

नृदेहमाद्यं सुलभं सुदुर्लभं प्लवं सुकल्पं गुरुकर्णधारम् ।
मयानुकूलेन नभस्वतेरितं पुमान् भवाब्धिं न तरेत्स आत्महा ॥

– भा.११।२०।१७

यो दुर्लभ मनुष्यजीवन सुलभ भएको बेलामा नै ब्रह्मज्ञान गरेर अनन्त जन्मदेखि हाम्रा अन्तःकरणमा जम्मा भएर रहेका सम्पूर्ण सञ्चितकर्महरूको हामीहरू नाश गर्न सक्तछौँ । ज्ञानद्वारा सम्पूर्ण

सञ्चितकर्महरू नाश हुने कुरा गीताले उद्घोष गरेको छ। जस्तै–

यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरुतेऽर्जुन।
ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरुते तथा॥

ब्रह्मज्ञान भएपछि सम्पूर्ण कर्महरू भस्म भएर जान्छन्। यही कुरा मुण्डकोपनिषद्ले पनि भनेको छ। जस्तै –

भिद्यते हृदयग्रन्थिश्छिद्यन्ते सर्वसंशयाः।
क्षीयन्ते चास्य कर्माणि तस्मिन्दृष्टे परावरे॥

ब्रह्मज्ञानी आफुमात्रै मुक्त हुँदैन, उसको कुल पनि पवित्र हुन्छ। उसकी आमा कृतार्थ हुन्छिन्। पृथिवी पुण्यवती हुन्छिन्। यही कुरा स्कन्दपुराणको माहेश्वरखण्डले भनेको छ। जस्तै –

कुलं पवित्रं जननी कृतार्था वसुन्धरा पुण्यवती च तेन।
अपारसंवित्सुखसागरेऽस्मिन् लीनं परे ब्रह्मणि यस्य चेतः॥

यस अनुस्मृतिको भूमिका र उपसंहारमा समेत ज्ञान र भक्तिका कुराहरू विनाप्रसङ्ग किन लेखिएका होलान् भन्ने जिज्ञासा पनि आउन सक्ने म देख्तछु। ज्ञान र भक्ति मेरा जीवनसँग सम्बन्धित छन्। मेरो जीवनको प्रथम कालखण्डको कुरा भूमिकाले इङ्गित गर्दछ भने सेवाबाट अवकाश लिएपछिको कालखण्डको चाहिँ उपसंहारले प्रतिनिधित्व गर्दछ। बीचको लामो कालखण्डलाई चाहिँ अनुस्मृतिको बीचको भागले प्रतिनिधित्व गर्दछ। ]

# अनुस्मृति २०६७

शरदकुमार भट्टराईद्वारा हालसम्म लिखित पुस्तकहरूमध्ये ५९० पृष्ठको यही कृति विशालतम पुस्तक हो। यो उहाँको वंशवृक्ष, परिवार, जन्मस्थल, जीवनी, जीवनवृत्ति, प्रवृत्ति, कार्यशैली, स्वभाव, उद्देश्य, अभिरुचि र योगदानको प्रामाणिक दस्तावेज हो। यसको 'अनुस्मृति' (जीवनयात्रा) भनेर नामकरण गरेर संस्मरण जस्तो अर्थ लाग्ने

अवस्था आए पनि यो उहाँको संस्मरणका साथै आत्मकथा, जीवनी, अनुभवसञ्चय, इतिहास र प्रशासनसञ्चालनको दर्पण बनेको छ । राष्ट्रिय अन्तर्राष्ट्रिय भ्रमणको नालीबेली पनि उल्लेख भएकाले यसलाई यात्राविवरण पनि भन्न सकिने अवस्था छ । समग्रमा हेर्दा 'अनुस्मृति' (जीवनयात्रा) शरदकुमार भट्टराईलाई चिन्ने चिनाउने प्रमुख लिखित सामग्री देखिन्छ । तपाईंले पढिरहनुभएको यस पुस्तकमा उल्लिखित पृष्ठभूमि अंश र प्रशासनिक व्यक्तित्वको खण्डको मूल आधार सामग्री पनि 'अनुस्मृति' (जीवनयात्रा) नै हो । अनुस्मृतिकार भट्टराईले सत्य घटना र त्यसमा संलग्न व्यक्तिलाई अलिकति पनि नलुकाई अलिकति पनि घटबढ नगरी प्रत्यक्ष वर्णन गर्नुभएको छ । यसरी हेर्दा 'अनुस्मृति' सत्य घटनाको सङ्कलन पनि बन्न पुगेको छ । वर्षौं लगाएर दुर्लभ फोटाहरू समेत खोजी गरी प्रामाणिक दस्तावेज तयार पार्नुभएकाले यो अनुसन्धानात्मक रचना पनि बनेको भन्न सकिन्छ ।

पितामातालाई समर्पण गरिएको यस पुस्तकमा मूल ३३ ओटा शीर्षक छन् र तिनका पनि उपशीर्षक राखिएका छन् । यी शीर्षकबाट लेखकको पुर्ख्यौली पृष्ठभूमिदेखि पुस्तक प्रकाशनवर्ष २०६७ सम्मका सबैजसो विवरण बुझ्न सकिन्छ । लेखकको बहुमखी व्यक्तित्वको रूपरेखा नै 'अनुस्मृति' (जीवनयात्रा) मा आएको छ भन्नु अतिशयोक्ति हुँदैन । लेखकको सरकारी सेवाप्रवेशपूर्वको, सेवाकार्यकालको र सेवाबाट अवकाश लिइसकेपछिको अवस्थाको चित्र देखाउन यस पुस्तकले सफलता पाएको छ ।

यस पुस्तकको सबैभन्दा ठुलो विशेषता खलनायकीय चरित्र र दानवी प्रवृत्ति भएका व्यक्तिहरूको द्वैध चरित्रको उद्घाटन गर्नु हो । सार्वजनिक रूपमा सज्जन-साधुका रूपमा परिचित व्यक्तिहरू भित्री रूपमा ब्वाँसोभन्दा पनि धूर्त र घातक भएको प्रमाण यस पुस्तकबाट पाइन्छ । राजनीतिक नेता र प्रशासनिक व्यक्तिहरू कस्ता हुन्छन् र कतिसम्म गर्छन् भन्ने तथ्य बुझ्न यो पुस्तक पर्याप्त हुन्छ । त्यागी र

वीतरागी भनिनेहरू भोगी र ढोँगी बनेका, ब्रह्मचारी व्यभिचारी बनेका, इमानदार मालदार भएका र महात्मा दुरात्मा र तुच्छात्मामा प्रमाणित भएका रमाइला प्रसङ्गहरू यसमा समेटिएका छन् । उदाहरणका लागि तत्कालीन भूमिसुधारमन्त्री जगन्नाथ आचार्य नेपाली काङ्ग्रेसका नाम चलेका वृद्ध नेता थिए । भट्टराईज्यू भूमिसुधार मन्त्रालयमा सचिव भएर गएपछि छद्मभेषी मन्त्रीको भ्रष्टाचारी स्वरूप नाङ्गिएको थियो । उहाँको अडान र प्रशासनिक कुशलताले गर्दा उनी त्यागपत्र दिएर भाग्न बाध्य हुनुपरेको थियो । यस पुस्तकमा उल्लिखित कतिपय प्रसङ्ग पढिसकेपछि सम्बद्ध व्यक्तिका विषयमा पाठकमा पूर्वनिर्मित दृष्टिकोणको पूर्णतः मस्तिष्क प्रक्षालन (Brain wash) हुन्छ जुन पुस्तकको प्रभावकारिताको पनि प्रमाण हो । यहाँ कसैलाई उचालिएको र कसैलाई अपमान गरेर पछारिएको पनि छैन, उनीहरूले जेजस्तो गर्थे त्यसको यथार्थ विवरणमात्र दिइएको देखिन्छ । यथार्थमा यो केवल उनीहरूका लागि अप्रिय सत्य लाग्ने लेखकीय इमान्दारीको अभिव्यक्ति मात्र हो । लेखक स्वयंले तत्कालीन प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालालाई सिफारिस गरेर भूमिसुधार राज्यमन्त्री बनाइएका सिद्धराज ओझाको समेत चरित्रचित्रण गरेर त्यस्तो इमान्दारी देखाइएको छ । यस बाहेक आफ्नै परिवारका सदस्यहरूको कमजोर पक्षलाई पनि यस पुस्तकमा खुलस्त पारिएको छ ।

यस पुस्तकमा भ्रष्ट, उद्दण्ड, अपराधी र अक्षम व्यक्तिहरूका अवैधानिक क्रियाकलापको वर्णन त भएकै छ त्यस बाहेक कतैकतै लेखकले आत्मसमीक्षा पनि गर्न खोजेको देखिन्छ । सरकारी र शारीरिक शक्तिका कारण पदीय हैसियतले गरेका कुनै काम नगरेको भए पनि हुन्थ्यो कि भन्ने अनुभूति लेखकलाई यो पुस्तक लेख्ने बेलामा भएको छ । पाल्पा जिल्लामा प्रमुख जिल्ला अधिकारी भएर पुगेकै दिन तानसेन बजारमा भड्किलो र खर्चिलो किसिमबाट भइरहेको विवाह सामाजिक विधिव्यवहार सम्बन्धी कानुनको विपरीत भएको कारण देखाई रोकिदिएको र धनीमानी मानिएको प्युठाने साहूका विरुद्ध मुद्दासमेत

चलाएको घटनालाई लेखकले अनुस्मृति लेख्ने समयमा बढी कडा भएको अनुभव गर्नुबाट आत्मसमीक्षा गर्न खोजेको बुझिन्छ । यसबाट उहाँमा आफुलाई पनि फर्केर हेर्ने, बुझ्ने र कुनै कमजोर पक्ष भए सुधार्ने स्वभाव थियो र अझै छ भन्ने तथ्य अवगत हुन्छ ।

नेपालको प्रशासनिक पद्धति र प्रवृत्ति, शासकहरूको भ्रष्ट मनोवृत्ति तथा उच्च पदस्थ सरकारी कर्मचारीहरूको नीति बुझ्न चाहनेहरूका लागि मात्र नभई आफ्नो कुल र वंशको गौरवपूर्ण परम्परा बुझ्ने चाहना भएका भट्टराईहरूका लागि पनि यो पुस्तक बढी पठनीय छ । यसको प्रारम्भमै भट्टराईहरूको वंश र कुलको मूल शेषशायी भगवान् नारायणसम्म पुगेको देखाइएको छ र त्यो भावुकतामा नभई प्रमाण र अनुसन्धानमा आधारित छ । उच्च शिक्षा प्राप्त गरी पद पनि उच्च तहकै पाइसकेका धेरै भट्टराईहरूलाई आफ्नो वंशवृक्ष र कुलबारे अझै पनि सामान्य जानकारी छैन । यस पुस्तकमा भट्टराईहरूको कुलको मूल, 'भट्टराई' नाम रहनुका कारण, भट्टराई कुलका प्रतिनिधि महापुरुषहरू, भट्टराईहरूको राष्ट्रव्यापी प्रसारण र उनीहरूको मौलिक पहिचानलाई स्पष्ट पारिएको छ । यस कारण पनि यो पुस्तक भट्टराईहरू सबैले एक पटक पढ्नु र मनन गर्नुपर्ने बनेको छ ।

यो पुस्तक अर्को कारणबाट पनि विशिष्ट बनेको छ । लेखकले प्रारम्भिक शिक्षा प्राप्त गर्ने समयमा देशका अन्य भूभागमा जस्तै तत्कालीन पूर्व ३ नम्बर ओखल्ढुङ्गाको रावा लामिडाँडामा पनि नारीहरूले पढ्ने अवसर र वातावरण थिएन । बालकहरू त घरमै अनौपचारिक रूपमा वेद, रुद्री, चण्डी, कौमुदी आदि पढ्दथे भने बालिकाहरू विद्यालय गएर औपचारिक रूपमा पढ्ने भन्ने कुरा एकादेशको कथा जस्तै अचम्मको विषय थियो । तर शरदकुमार भट्टराईको घरमा चाहिँ अचम्मै भएको थियो । लेखकले अनौपचारिक रूपमा प्रारम्भिक शिक्षा बालविधवा ऋषिकाकल्प गुरुमाता बालकुमारी (लेखकका पिताजीकी फुपू) बाट प्राप्त गर्नुभयो । बालकुमारी लेखक लगायत परिवारका अधिकांश

सदस्यकी अभिभावक, गुरु र मार्गदर्शक थिइन् । उनकै गुरुत्व र अभिभावकत्वमा लेखकको बाल्यकाल शिक्षातर्फ प्रवृत्त हुन थाल्यो । पिता, माता र दाजुले पनि लेखकलाई शिक्षातर्फ प्रवृत्त हुन प्रेरित गरेकै हुन् तापनि गुरुमाता बालकुमारीको विशेष स्नेह र सक्रियताबाट आजको उहाँको व्यक्तित्व निर्माणमा योगदान पुगेको छ । पहाडको दुर्गम गाउँमा एउटी साध्वी तपस्विनी विदुषीको कुशल शिक्षण र संरक्षणमा व्यक्तित्वको शिलान्यास गर्ने उहाँको विशिष्ट परिस्थिति यस पुस्तकमा प्रेरणाको विषय बनेको छ ।

यस पुस्तकमा लेखकले सरकारी सेवामा प्रवेशपूर्व, सेवाकाल र सेवाबाट अवकाश लिइसकेपछि पनि गरेका विदेशयात्राका विवरणहरू पनि उल्लिखित छन् । सरकारी खर्चमा भएगरेका धेरै यात्रा उपलब्धिहीन हुन्छन् र भइरहेका पनि छन् । तर यहाँ उल्लेख गरिएका प्रत्येक यात्रामा लेखकले तोकेका काम जतिसुकै विषम परिस्थितिमा पनि पूरा गरेको, प्रत्येक यात्रामा राष्ट्रको हितका लागि काम गरेको, मितव्ययिता अपनाएको र कूटनीतिक सम्बन्धमा सुधार र सबलीकरण गर्न भूमिका समेत खेलेको प्रमाण पाइन्छ । विदेशयात्राका लागि लालायित हुनेभन्दा देशका लागि आवश्यक भएका कारणले शक्तिशाली प्रधानमन्त्रीले विशेष आग्रह गरेर सम्पन्न गरिएका यात्राहरूको यथातथ्य विवरण लेखकले दिनुभएको छ । यी सबै यात्राहरूका प्रेरक, रोचक र शिक्षाप्रद प्रसङ्गहरू पढ्दा के निष्कर्ष निकाल्न सकिन्छ भने अरू कमाउन र घुम्न विदेश जाँदा रहेछन् तर उहाँ देशको हितका लागि प्रधानमन्त्रीको समेत आग्रहमा विदेश जान बाध्य पारिनु हुँदो रहेछ । सबै यात्रामा प्रधानमन्त्रीकै आग्रह नभए पनि दूरगामी महत्त्व राख्ने र प्रभाव पार्ने कामका लागि चाहिँ उहाँले नै नेतृत्व गरेर विदेश जानुपरेछ ।

यस पुस्तकमा धेरै भ्रष्टहरूको भन्डाफोर गरिएको छ भने गुणग्राही, सहयोगी र इमान्दार मन्त्री र प्रशासकहरूको प्रसङ्ग पनि समावेश गरिएको छ । उदाहरणका लागि नेपाली काङ्ग्रेसका नेता अर्जुननरसिंह

के.सी.को शालीन, शिष्ट र सरल व्यवहारको उल्लेख यहाँ भएको छ। त्यस्तै लेखकले सरकारी सेवामा प्रवेश गर्दा रक्षा मन्त्रालयमा सचिव भएका क्षेत्रविक्रम राणा र उपसचिव (पछि सचिव भएका) मुकुन्द शमशेर थापाको सहयोगी व्यवहार र कार्यशैलीको प्रस्तुति पनि यहाँ भएको छ। त्यसैले यो पुस्तक एकातिर भ्रष्टहरूको भाँडभैलो देखाउने ऐना बनेको छ भने अर्कातिर वास्तविक राष्ट्रसेवकहरूको आदर्श चरित्र देखाउने प्रामाणिक सामग्री पनि भएको छ।

लेखकले सरकारी सेवाबाट अवकाश लिएपछि पनि नेपाल स्काउटको नेतृत्व लिनुपर्‍यो भने त्यही नाताले विदेश पनि जानुपर्‍यो। इमानदारीपूर्वक ठुलो सङ्गठन चलाउन सक्ने सामर्थ्य भएकै कारणले उहाँलाई उक्त जिम्मेवारी आइलाग्यो। यसबाट के देखिन्छ भने उहाँले सरकारी सेवा छोडे पनि सरकारले उहाँलाई छोडेको रहेनछ र उहाँको आवश्यकता खोजिरहेको रहेछ। यसलाई पुष्टि गर्ने सामग्री पनि यस पुस्तकमा समाविष्ट छन्। राष्ट्रिय खेलकुद परिषद्देखि नेपाल स्काउटसम्मका राष्ट्रव्यापी सङ्गठनहरूको नेतृत्व गर्ने जिम्मा पाउनुबाट उहाँका विद्यमान साङ्गठनिक कौशल बुझ्न सकिन्छ।

सरकारी सेवाबाट अवकाश लिएपछि लेखकका लागि विदेशी संस्था, अन्तर्राष्ट्रि संस्था विश्वबैङ्क लगायत गैरसरकारी निकाय र राष्ट्रकै सम्मानित सर्वोच्च संस्थामा समेत काम गर्ने आग्रह, अवसर पाएर पनि तिनलाई उहाँले स्वीकार गर्नुभएन। बरु उहाँ थुप्रै धार्मिक, सामाजिक संस्थामा आबद्ध हुनुभयो। जयतु संस्कृतम्, विश्वहिन्दु महासङ्घ आदि संस्थामा आबद्ध लेखक नेपालको एकमात्र अद्वैतवेदान्तविषयक संस्था राजर्षि जनक स्मृतिकोषमा संस्थापक अध्यक्ष भई अद्यापि सक्रिय रूपमा कार्यरत हुनुहुन्छ। त्यस्ता संस्था र तिनमा उहाँको सक्रियताबारे पनि यस पुस्तकमा प्रकाश पारिएको छ। पुस्तकका विशेष प्रसङ्ग र अनुसूचीमा समेत समावेश भएका तस्बिर तथा जन्मपत्रिका एवं चिठ्ठीपत्रहरूको विन्यासले पुस्तकको प्रामाणिकता र उपादेयता सिद्ध गरेका छन्।

यस पुस्तकमा प्रयुक्त गद्य तीव्रवेगी खहरेजस्तो नभई गम्भीर समुद्रजस्तो छ । प्रत्येक विषय, घटना, सूचना, सन्दर्भ र परिवेशलाई चारैतिरबाट पुष्टि र प्रमाणित गर्ने शैलीको गद्य यहाँ पाइन्छ । पुस्तक पढ्दा लेखकले अत्यन्त धैर्य र सावधानी राखेको देखिन्छ। तिथिमिति, स्थान र पात्रको उल्लेख गरेर लेखकले विषयवस्तुलाई अखण्डनीय र आधिकारिक बनाउनु भएको छ। यो पुस्तक हाल बजारमा निस्किरहेका यस्तै प्रकृतिका पुस्तक भन्दा प्रमाण र प्रस्तुतिका दृष्टिले भिन्न देखिन्छ।

द्रष्टव्य – यात्रा साहित्यका रूपमा अथवा हाल प्रचलित अव्युत्पन्न नियात्रा साहित्यका रूपमा अत्यन्त परिष्कृत गद्यविधामा उपर्युक्त तीन कृतिहरू पाठक समक्ष आइसकेका छन् । यिनका अतिरिक्त यात्राका नाममा पद्यविधामा रचित विविध यात्रा २०५५ र यात्रैयात्रा २०५८ को पनि प्रकाशन भइसकेको छ। तिनको सङ्क्षिप्त चर्चा र विश्लेषण साहित्य खण्डमा भएको छ।



# तेस्रो अष्ट्रेलियायात्राको दैनिकी २०६९ का भूमिकाबाट

[ संसारको गरेँ यात्रा जहिले पृथ्वीमा झरेँ ।
पञ्चाग्निमा हुँदै होम आमाको गर्भमा परेँ ॥

घुम्नु पर्ला कहाँसम्म थाहा छैन अझै पनि ।
विना होस घुमेको छु अन्धो बनेर फन्फनी ॥

अनन्त जन्मको जेथा बोकी सम्बल सञ्चित ।
प्रारब्धकर्मले गर्दा भएँ मानिस सम्प्रति ॥

गरेँ यात्रा अरू धेरै त्यसैका चक्रमा परी ।
गएँ अष्ट्रेलिया घुम्न मायाका वशमा परी ॥

गर्दैछु भवको यात्रा यात्री भएर यो घरी ।
यात्राबाट उतारेर लगाऊ पार हे हरि ! ॥

यात्रा साहित्य लेख्न मैले २०५४ सालदेखि नै सुरु गरेँ । पहिलो यात्रा कविता २०५५ सालमा विविध यात्राका रूपमा साझा प्रकाशनबाट प्रकाशित भयो । जीवन एउटा अनवरत चलिरहने यात्रा भएको हुँदा पञ्चाग्निमा हवन हुँदै आमाको कोख र काखमा आएको कुराको प्रतीकका रूपमा विविधि यात्रामा परेको पहिलो कविता 'बाल्यजीवन' हो । जुन यस्तो छ –

आँखामा रिक्तता बोकी भरी हृदयमा भ्रम ।
यात्री भएर आएथेँ आमाका गर्भबाट म ॥

त्यो यस योनिको पहिलो यात्रा थियो । त्यसपछि यो यात्री विभिन्न उकाली र ओरालीको यात्रा गर्दै अन्तिम यात्रा वृद्धावस्थामा पुग्दछ र भन्दछ –

अर्को जन्म लिएर खानु नपरोस् संसारको चक्कर ।
मेरो यो भगवन् ! अनन्त जुनिको यात्रा इतिश्री गर ।।

– विविध यात्रा २०५५

त्यसपछि पनि बाह्ययात्रा र आन्तरयात्राको क्रम अघि बढ्दै गयो । 'अहम्' र 'मम'को यात्रा अझै विस्तृत हुँदै गयो र त्यस क्रमले अन्ततः संयुक्त राज्य अमेरिका र अष्ट्रेलियासम्म पनि पुऱ्यायो । यसै अनवरत यात्राको परिणतिका रूपमा २०५८ सालमा यात्रैयात्रा जन्मियो । त्यसको एउटा कविता –

पृथ्वीमा जहिले आएँ सम्झेँ भ्रमण अन्तिम ।
अझै होस हराएर घुमिरेछु म सम्भ्रम ।।

– यात्रैयात्रा २०५८

तीर्थयात्राको वृत्तान्त २०६४ सालमा बाहिर आयो । बाह्य यात्रापछि आन्तर यात्राको क्रममा पद्यमा थोरै र गद्यमा धेरै लेखिएको छ । त्यसमा परेको एउटा पद्य यस्तो छ –

थाकेँ साह्रै भ्रमण अति भो पर्छु हे नाथ ! पाउ ।
मेरो यात्रा अब सक तिमी हात मेरो समाऊ ।।

– यात्रैयात्रा २०५८

यस क्रमले चरम अवस्था जीवनयात्रा अर्थात् अनुस्मृतिमा गएर पायो । यो समग्र जीवन यात्रा सचित्र ६५० पृष्ठमा गद्यमा बाहिर देखा पऱ्यो । गद्यमा लेख्तालेख्तै पनि भावनाको बाढी चलेर ठाउँ ठाउँमा कविताको प्रस्फुटन भयो विभिन्न विधा र छन्दमा । जस्तै –

लेखेँ जीवनयात्रा यो के लेखेँ छक्क पर्छु म ।
उसको रचना सामु अति नै तुच्छ ठान्छु म ॥
लेखायो जसले लेखेँ म ता निमित्त मात्र हुँ ।
प्रतिबिम्ब उसैको म संसारी एक पात्र हुँ ॥

– जीवनयात्रा २०६७

अब लेख्तिनँ संसारी कुरा भन्ने ठान्दा ठान्दै पनि फेरि उसै अन्तर्यामीले यो अष्ट्रेलिया यात्रा गरायो र यो 'तेस्रो अष्ट्रेलियायात्राको दैनिकी' पनि लेखायो । यसमा पनि म केवल एउटा निमित्त पात्र हुँ ।

लेखायो उसले जे जे लेखेँ निमित्त भैकन ।
यसमा क्यै कतै छैन मेरो आफ्नू कुनै पन ॥

सर्वसाक्षी महान् आत्मन् ! मिथ्या आभास यो क्षण ।
तिम्रो नै सिर्जना गर्छ तिमीलाई समर्पण ॥

अन्त्यमा यसमा उल्लेख भएका कुराहरू र दैनिकी लेख्ता टिपोटमा परेका तीता मीठा कुराहरू तत्कालीन भावुक अनुभवको परिणति मात्र भएकाले यसका अध्येताहरूले अन्यथा नसम्झीकन पढ्न, स्वीकार्य कुरा भए लिन र अन्यथा भए विस्मृतिका गर्ततिर विसर्जन गरिदिनुहुन आग्रह गर्दछु । ]

# तेस्रो अष्ट्रेलियायात्राको दैनिकी २०६९

शरदकुमार भट्टराईले विभिन्न देशको यात्रा गर्ने क्रममा अष्ट्रेलियाको पनि दुई पटक यात्रा गरिसक्नुभएको थियो । ती यात्रामा आफुले गरेका काम, जानेबुझेका कुरा र अनुभवमा सँगालेका अनुभूतिहरूलाई उहाँले 'यात्रैयात्रा' कवितासङ्ग्रह र 'अनुस्मृति' (जीवनयात्रा) मा उल्लेख गर्नुभएको छ । उहाँ आफैँलाई अष्ट्रेलिया जानु आवश्यक थिएन तर पनि

सहधर्मिणी इन्दिरा भट्टराई र परिवारका अन्य सदस्यहरूका लागि भने यो गन्तव्य बन्यो। उहाँ सरकारी, संस्थागत एवं साङ्गठनिक कामका लागि दर्जनौँ पटक विदेश भ्रमणमा जानुभयो। कतिपय नैतिक र कानुनी आधार र अवसर नहुँदा नहुँदै पनि सरकारी खर्च वा अरूकै खर्चमा पत्नीसहित परिवारका सदस्यहरू लिएर विदेशको सयर गर्छन् र गरिरहेको देखिएकै पनि छन्। तर उहाँले नैतिक र कानुनी आधार हुँदा पनि परिवारका अन्य सदस्यहरू त परै जाउन्, पत्नीलाई पनि कहिल्यै कतै सहयात्री बनाउनु भएन र जागिरको सुविधाको दुरुपयोग गर्नेहरूको ताँतीमा एक्लो अपवाद भएर रहनु भयो। यसको पुष्टि उहाँको 'अनुस्मृति' (जीवनयात्रा) बाट हुन्छ भने उहाँलाई नजिकबाट निरपेक्ष रूपमा चिन्नेजान्नेहरूबाट पनि यो तथ्य अवगत गर्न सकिन्छ।

यस्तै प्रवृत्ति र पृष्ठभूमि भएका शरदकुमार भट्टराई सरकारी सेवाबाट अवकाश लिएपछि लेखपढ लगायत सिर्जनात्मक काममा व्यस्त हुनुभयो। विदेशी कन्सलट्यान्सीदेखि राजदरबारको उच्च पद तथा संवैधानिक अङ्गसम्ममा नियुक्तिका लागि प्रस्ताव मात्र नभई विशेष आग्रह हुँदा पनि ती सबै आकर्षणलाई शालीनतापूर्वक अस्वीकार गरी उहाँ ब्रह्माभ्यास र विद्याभ्यासलाई नै आत्मोद्धारको 'कन्सल्ट्यान्सी' ठानी रहिरहनु भयो र अद्यापि त्यसैमा तल्लीन हुनुहुन्छ।

वर्तमान पुस्ताको रुचि, प्रवृत्ति, सङ्गत, सोचाइ र महत्त्वाकाङ्क्षाको तीव्र प्रवाहमा परेर उहाँको कान्छो छोरो सगुनकुमार भट्टराई र बुहारी श्रीमती पूजा भट्टराई अष्ट्रेलिया गएर बसे। उनीहरूबाट २०६७ साल फागुन २२ गते पुत्र सुदीपको जन्म अष्ट्रेलियाको सिड्नी सहरमा भयो। छोरा सगुन र बुहारी पूजा उनीहरूको पुत्र सुदीपको अन्नप्राशनका लागि काठमाडौं घर आए। २०६८ साल श्रावण ३० गतेको शुभसाइतमा सुदीपको वैदिक विधिपूर्वक अन्नप्राशन सम्पन्न भयो। छोराबुहारीले २०६८ सालको विजयादशमीको टीका पितामाताको हातबाट सिड्नी सहरमा बनेको नयाँ घरमा लगाउने इच्छा देखाए। त्यसमा सबैको

सहमति भयो । उनीहरू पुत्र सुदीपलाई लिएर अष्ट्रेलिया फर्के । उहाँ अष्ट्रेलिया जाने गृहकार्यमा लाग्नु भयो । उहाँकी सहधर्मिणी इन्दिरा पनि पहिलो पटक सात समुद्रपारि अष्ट्रेलिया पुगेर छोराबुहारी र नातिलाई टीका लगाएर आशीर्वाद दिन पाइने भएकाले हर्षले गदगद हुनुभयो । यसै क्रममा दम्पतीले अष्ट्रेलियाको ६ महिनाको भिसा पाएपछि २०६८ साल असोज ६ गतेदेखि २०६८ साल कार्तिक २२ गतेसम्म ४६ दिन सो देशमा गरेको भ्रमणको दैनिक विवरण नै 'तेस्रो अष्ट्रेलिया यात्राको दैनिकी' हो । यो उहाँका लागि अष्ट्रेलियाको तेस्रो भ्रमण हो तापनि उहाँकी पत्नी इन्दिराका लागि अष्ट्रेलियाको मात्र नभई पहिलो विदेश भ्रमण हो । यही भ्रमणमा भए-गरेका क्रियाकलापको इमान्दारीपूर्ण सङ्ग्रहका रूपमा यो यात्रावृत्तान्त अर्थात् काठमाडौंबाट अष्ट्रेलिया प्रस्थान गरी फेरि काठमाडौं फर्केर आएसम्मको प्रत्येक दिन प्रातःकाल निद्राबाट बिउँझेदेखि राति नसुतेसम्मको यथार्थ विवरण दिनदिनै लेखेर यस पुस्तकमा समावेश गरिएकाले यसको दैनिकी नाम सार्थक भएको देखिन्छ । यसै कारण यो पुस्तक दैनिकीका रूपमा आएको छ । इन्दिरा भट्टराई नै प्रकाशिका रहनु भएको यस पुस्तकमा सबै सत्य घटनाको विवरण समावेश भएकाले अनर्थ गर्ने र दुराचारमा मस्त हुने मनमौजी वर्ग र व्यक्तिका लागि यो पूर्णतः सुपाच्य नहुन पनि सक्तछ, जुन प्रसङ्ग प्रकाशिकाले पनि आफ्नो प्रकाशकीय मन्तव्यमा सङ्केत गर्नुभएको छ । काठमाडौँबाट सिङ्गापुर हुँदै अष्ट्रेलियाको सिड्नी सहर पुगेको बयान गरिएको यस कृतिमा लेखकले पत्नी इन्दिरालाई लामो बाटो पैदल हिँड्न गाह्रो पर्ने भएकाले Wheel Chair (पाङ्ग्रे कुर्सी) को व्यवस्था गर्नुपरेको, त्यसलाई आफुले गुडाउनुपरेको र झोलासमेत बोक्नुपरेको रोचक र स्वाभाविक वर्णन गर्नुभएको छ र ठाउँठाउँमा तिनको चित्रसमेत समावेश गर्नुभएको छ ।

यस दैनिकीमा लेखकले छोरा सगुनका साथै अष्ट्रेलियामा बसोबास गरिरहेका नेपालीहरूको स्थिति, गति र नियतिलाई नजिकबाट नियाल्नु

भएको छ। त्यहाँको यन्त्रवत् जीवनको यथार्थ तस्बिर उतार्नुभएको छ। वेदान्तको रन्कोले नछोडेका लेखकले अद्वैत वेदान्तको सबैभन्दा दुरूहतम ग्रन्थमा पर्ने 'अद्वैतसिद्धि' को अनुवाद नेपालमै प्रारम्भ गर्नुभएको थियो। अष्ट्रेलिया जाँदा पनि उहाँले त्यसलाई सँगै लानुभयो र अलिकति समय हुँदा पनि त्यसकै अनुवादमा लागिपर्नु भयो। पहाडको लामिडाँडाको घर, इनरुवा, जागिरको कार्यक्षेत्र र काठमाडौँको घरमा पनि विभिन्न देवकार्य र पितृकार्यलाई सविधि सम्पन्न गर्ने उहाँले अष्ट्रेलियामा पनि परिवारका सदस्य तथा अरू नेपाली इष्टमित्र र अतिथिहरूको उपस्थितिमा दसैँको नवरात्रमा शुक्लयजुर्वेद र दुर्गासप्तशतीको विधिपूर्वक पाठ गरेर नौ दिनसम्म दुर्गापूजा गर्नुभयो। त्यसरी उहाँले एकातिर आफ्नो संस्कृतिको निष्ठा र नियम पूरा गर्नुभयो भने अर्कातिर छोरो सगुनको घरलाई नेपाली सनातनी हिन्दुहरूको घर जस्तै पवित्र र सुसंस्कृत पारिदिनु भयो। त्यसको यथातथ्य प्रस्तुति यस दैनिकीमा भएको छ।

यस दैनिकीमा अष्ट्रेलियामा परिवर्तन भइरहने मौसमको पनि सूक्ष्म अवलोकन गरिएको छ र त्यसको वर्णन गरिएको छ। सहरका विभिन्न भागमा भ्रमण गरेको, त्यहाँको व्यवस्थापन देखेर प्रभावित भएको, त्यस महादेशमा ६ ऋतुको सट्टा ४ ऋतुको भएको, यहाँ बस्दा आफ्नो ब्रह्माभ्यासमा बाधा पर्छ कि भनेर चिन्ता लिएको र क्रिश्चियन बाहुल्य देशमा पनि हिन्दुका देवीदेवताको दर्शन गर्न पाएर प्रफुल्ल बनेको वर्णन यहाँ पाइन्छ। रेलमा हिन्दु, क्रिस्चियन र मुस्लिम नारीहरूले आ-आफ्नो पहिचान र परम्परा झल्कने गरी पोसाक लगाएर यात्रा गरेको समावेशी चरित्रको दृश्य पनि यहाँ खिचिएको छ। ६ महिनाको भिसा पाएको भए पनि पतिपत्नी दुवै जनालाई त्यहाँ वातावरण आफ्नू संस्कार सुहाउँदो नदेखी त्यति समय त्यहाँ नबस्ने सोचाइ बन्दै गएको, नेपालीहरूलाई भेटेर उनीहरूको कार्य र विचार बुझेको, त्यहाँ बस्ने नेपालीहरूको बिहान ढिला उठ्ने बानी बस्न लागेको र नेपाली गृहिणीहरूको परिधान र भोजनका बीच कताकति सन्तुलन नमिलेको अनुभूति भएको

सत्योक्ति लेखकले प्रकट गर्नुभएको छ । अष्ट्रेलियामै बसिरहनेहरूका लागि अति व्यस्त भए पनि उहाँ दम्पतीलाई भने कहिलेकाहीँ पट्ट्यार लाग्ने गरेको प्रसङ्ग यसमा पाइन्छ। यसले परिवारका सदस्यका अतिथि बनेर विदेश जान चाहने प्रौढवर्गलाई शिक्षा र सतकर्ता दुवै दिएको छ। कविचेतका लेखक भट्टराईले प्रकृतिको सूक्ष्म निरीक्षण गर्दै अष्ट्रेलियाका बोटबिरुवा, फलफूल, तरकारी, पशुपक्षी आदिको विवरण पनि दिनु भएको छ। लेखकले अष्ट्रेलियामा बसोबास गरिरहेका नेपालीहरूको अतिथि बनेर घुमेको अनुभव यसमा दिनुभएको छ। यस दैनिकीमा पाइने अर्को उल्लेख्य विशेषता भनेको लेखकलाई जहाँ जस्तो परिस्थिति उत्पन्न हुन्छ र मनस्थिति बन्छ, सोही अनुसारका प्रायः भागवतका श्लोकहरूको उद्धरणको उल्लेख हुनु हो । ती श्लोकबाट उत्पन्न परि स्थिति र मनस्थितिको विश्लेषण यहाँ गरिएको छ। यो विद्वान्हरूको लेखाइमा मात्र पाइने विशेषता हो । अष्ट्रेलियाको ४६ दिनको यात्रा पूरा गरेर स्वदेश फर्कने क्रममा जहाजको सिटमा बसेर पनि लेखकले यो दैनिकी लेख्नुभएको देखिन्छ। यसबाट उहाँको अध्यवसायी प्रवृत्ति बुझ्न सहज भएको छ। भट्टराईदम्पती स्वदेश फर्केको भोलिपल्ट २०६८ साल कार्तिक २३ गते जेठो छोरो सञ्जीवकुमार भट्टराई र बुहारी सुषमा क्यानडाबाट नेपाल आएको र त्यसले परिवारमा हर्ष बढेको स्वाभाविक अभिव्यक्ति यहाँ पाइन्छ। छोराबुहारी, छोरीज्वाइँ, नातिनातिना विदेशमा भए पनि समयसमयमा स्नेह र सम्झना दर्साइरहेकोमा लेखक सन्तुष्ट हुनुभएको आत्मकथन यस पुस्तकमा पाइन्छ । पुस्तकको अन्तिममा रङ्गीन दुर्लभ फोटाहरू समावेश भएकाले यो दैनिकी स्नेह र सम्झनाको प्रामाणिक दस्तावेज बनेको देखिन्छ। सरल शैली र प्रस्तुतिले पुस्तक पठनीय पनि बनेको छ।



# गीत तथा भजनहरू २०५२ का भूमिकाबाट

[ यो सङ्ग्रह मेरो भगवान्प्रतिको असीम आस्था र राष्ट्रभक्तिको प्रतिगुञ्जन हो। विभिन्न भजन लेखकहरूको शब्दसंयोजन र अपरिष्कृत पदावली आदिको अनुपयुक्त तथा असंस्कृत प्रयोग मेरा लागि अत्यन्त श्रुतिकटु लाग्दथ्यो। राष्ट्रिय गीतको पनि त्यस्तै दयनीय अवस्था देखिन्छ।

यस लघुसङ्ग्रहमा त्यसै दयनीय अवस्थाको परिमार्जनका लागि किञ्चित् सत्प्रयास हो । म प्रथमतः साहित्यकै विद्यार्थी भए पनि मैले आफ्ना कविता, काव्य, गद्यपद्य रचनाहरूमा समेत निरङ्कुश तथा उच्छृङ्खल नखशिखको वर्णन गरेर शृङ्गाररस प्रधान वाक्यांश यस सङ्ग्रहमा पनि पर्न दिएको छैन। यसमा भरसक मेरो सिद्धान्तको प्रतिपालन मैले गरेको छु। कुनै रचना त्यस्ता लाग्ने पदावली प्रयोग भएका भए पनि तिनलाई प्रेमास्पद आराध्य प्रतिको अगाध श्रद्धा र समर्पणको द्योतक वा प्रतीक भनेर यसका पाठक र गीत तथा भजनका श्रोताहरूले सुन्नु नै उपयुक्त ठान्दछु। यी गीत र भजनहरू मेरा चेतन, अवचेतन र अर्धचेतन मन मस्तिष्कमा संस्कारका रूपमा जन्मजन्मान्तरदेखि वासनाका रूपमा रहेका भावनाहरूको प्रतिध्वनि वा प्रतिगुञ्जन हुन् भन्ने मैले ठानेको छु। ]

# गीत तथा भजनहरू २०५२

यस सङ्ग्रहमा राष्ट्रगीत, प्रेमगीत र भजनहरूसमेत गरी ३२ ओटा लघु आकारका रचना सङ्गृहीत छन्। यी तीनै प्रकारका गीत र भजनहरूले रचनाकारको राष्ट्रप्रतिको अतिशय ममता, प्रेममा निष्ठा र नैतिकता तथा देवीदेवता एवं परमात्मामा अटल श्रद्धा एवम् आस्था भावलाई प्रकाशित

गरेका छन् । शीर्षक नदिई अङ्क मात्र अङ्कित गरिएका यी रचनाको सामान्य विवरण र सङ्क्षिप्त विशेषता यस प्रकार प्रस्तुत गर्न सकिन्छ ।

१

यस गीतमा नेपाल राष्ट्रको वन्दना गरिएको छ । संस्कृतनिष्ठ लामा पदावलीको प्रयोग भएको यस गीतमा नेपालको सांस्कृतिक, ऐतिहासिक र प्राकृतिक गौरवको वर्णन भएको छ । तीनओटा गीतिगुच्छमा रचित यस गीतका प्रत्येक अन्तिम पङ्क्तिको पुनरावृत्ति भएकाले यो गायनका लागि उपयुक्त रचना बन्न पुगेको छ । संस्कृतनिष्ठ समस्त पदावलीहरूको अत्यधिक प्रयोग भएको प्रमाण यस गीतमा पाउन सकिन्छ । जस्तै –

रक्तगुराँसमयवदनप्रस्फुटित बुकिफूलसुरभिकृत
निर्भय विशालवक्षयुत राष्ट्र नेपाल
विश्ववन्दित शाश्वतमानवहित प्रेरित
उन्नतसंस्कृतिपरिपूरित राष्ट्र नेपाल
अनवरत अक्षय्य हिमनदीसिञ्चित झरझर
निर्झरवात सुसेवित सुखद राष्ट्र नेपाल
रविशशियुत राष्ट्रध्वजसमलङ्कृत
जय जय हे ! राष्ट्र नेपाल ।

१ र २

यी गीतमा पनि नेपालको वर्णन र वन्दना गरिएको छ । यिनमा देशको प्राकृतिक, सांस्कृतिक र ऐतिहासिक महत्त्व देखाई नेपाललाई जननीको आरोप गरी कोटि कोटि प्रणाम गरिएको भाव व्यक्त भएको छ । पङ्क्ति लामा तर पदावली सरल भएका दोस्रो गीतमा देशको काख हाम्रा लागि स्वर्गको जस्तै सुखधाम बनेको राष्ट्रभक्तिभाव पाइन्छ । अनेकतामा एकता ल्याउने र मुटुको ढुकढुकी बन्ने नेपालकै अस्तित्वसँग हाम्रो जीवन निरन्तर गाँसिएको छ भन्ने गीतकारको अभिव्यक्ति छ । जस्तै –

नानाविध संस्कृति भाषा इतिहासकी तिमी हौ साझा जननी,
तिम्रो मुटुको स्पन्दन हाम्रो ढुकढुकी बन्दछ जननी ।

तिम्रो अस्तित्वसँगै गाँसिएको छ हाम्रो जीवन अविराम,
जय जय जननी नेपाल आमा तिमीलाई कोटी कोटी प्रणाम ।

३

तेस्रो गीतमा देशलाई सृष्टिकी प्रथम सिर्जना र पृथ्वीको सुन्दर फूलबारीका रूपमा परिकल्पना गरिएको छ र युगयुगदेखि जागृत जनकी सौम्य छाहरीको आरोप पनि गरिएको छ। जस्तै –

सृष्टिकी प्रथम सिर्जना सरिकी तिमी हौ पृथ्वीकी सुन्दर फूलबारी
अम्लान अभेद्य सधैँ युगयुगदेखिन् जागृत जनकी तिमी हौ सौम्य छहारी।
जसले धर्तीमा आफ्ना वैशिष्ट्य राख्नु नै मान्दछ ठूलो अभिमान
जय आमा जन्मभूमि तिमीलाई श्रद्धानत शिरले गर्छु नित्य नमन ।

४ र ५

सरल पदावली र छोटा पङ्क्तिको चौथो गीतमा देशलाई माथि लैजानका लागि हामी सबैलाई आह्वान गरिएको छ । यो चौथो गीत राष्ट्रोत्थानका लागि नेपालीहरूलाई जागरुक बनाउने र एकताबद्ध भएर अघि बढ्न प्रेरित गर्ने मन्त्र बनेको छ। एक्लै मात्र जान्ने सुन्ने भन्नु नहुने र एक जनाले गरेर मात्र पनि केही नहुने भएकाले सबैको साथ र सक्रियता जुटाएर हामी सबै उठौँ भन्ने गीतकारको जोसिलो उद्घोष यसरी प्रकट भएको छ –

आफैँ मात्र जान्नेसुन्ने पनि भन्नु हुन्न,
मैले आफैँ मात्रै सबै गर्छु भन्नु हुन्न ।
सबै उठे देश उठ्छ एक्लै केही हुन्न,
जागृतिको गीत गाई सँगै जानुपर्छ ।
उठौँ हामी देशलाई माथि लानुपर्छ ।।

पाँचौ गीतमा परिश्रम गरेर सँगै बाँच्न र सँगै मर्न देशले भनिरहेको छ भन्ने भाव पाइन्छ। परिश्रमी र स्वावलम्बी बन्न सके सधैँ बाँच्न सकिने र ठाडो शिर गरेर हाँस्न सकिने गीतकारको विश्वास यसरी व्यक्त भएको छ –

आफैँसँग आफैँ बनी सधैँ बाँच्नलाई,

हिमालजस्तो ठाडो शिर गरी हाँस्नलाई,
तरतर पसिनाले भिज्न सक्नुपर्छ,
सँगै बाँच सँगै मर आज देशले भन्छ ।

चौथो गीतका प्रत्येक गीतिगुच्छका अन्तिममा 'उठौँ हामी देशलाई माथि लानुपर्छ' भन्ने पङ्क्ति र पाँचौ गीतका पनि प्रत्येक गीतिगुच्छका अन्तिमा 'सँगै बाँच सँगै मर आज देशले भन्छ' भन्ने पङ्क्तिको पुनरावृत्ति भएकाले यी दुवै गीत गेयगुणले सम्पन्न बनेका देखिन्छन् । दुवै गीतबाट एकताबद्ध, परिश्रमी, स्वावलम्बी र सहभोजी बनेर राष्ट्रोत्थानमा लाग्न र नेपालकै लागि बाँच्न र मर्न प्रेरित गरेर राष्ट्रभावनाको तीव्र वेगको प्रवाह गरिएको पाइन्छ ।

६

यस गीतमा पनि पसिना पोखेर वा बगाएर विकासमा जुट्न अनुरोध गरिएको छ । लघुताभास हटाएर र विश्वास जगाएर अरूले गरेको उन्नतिबाट पनि सिकेर तुरुन्त उठ्न र विकासमा जुट्न आह्वान गर्दै गीतकारले हिम्मत बटुलेर हाँस्नुपर्ने र जनताको जीवनका लागि बरु आफु मर्नुपर्ने आदर्शवादी चेतना यस गीतमा सञ्चारित गर्नुभएको छ । सरल र सङ्क्षिप्त पद र पदावली एवं छोटा पङ्क्तिको प्रयोग गरिएको यस गीतमा परहितका लागि मर्न समेत तत्पर हुनुपर्ने वीरोचित अनुभूतिको अभिव्यञ्जना भएको छ –

हिम्मत बटुलीकन हाँस्न सिकौँ,
बाँचुन् जनता बरु आफु मरौँ,
पोखौँ पसिना र विकास गरौँ ।

७

प्रेमगीतका रूपमा रहेको यस गीतले प्रियतमाले प्रियतमसँग निश्छल प्रेम गर्न चाहेर हात दिन चाहेको तर प्रियतमले हाँसीहाँसी घात गर्न खोजेको दुई विपरीत मनोवृत्तिको प्रस्तुति गरेको छ । आफु सम्पूर्ण रूपमा प्रियतममा समर्पित हुन खोजेर पनि उसको हाँसी हाँसी घात गर्ने स्वभावबाट व्याकुल बनेकी प्रियतमाको मर्मस्पर्शी कथन नै यहाँ गीत बनेर

आएको छ। प्रियतमको साथ पाउने आसमा बसेकी प्रियतमाले वसन्त वा पतझड नबनी मधुमास बन्नुपर्ने बिम्ब अघि सार्दै जीवनको रङ्गीन रूप देखेकी छ र प्रियतमलाई यसमा साथ दिन शालीन बिन्ती गरेकी छ। विप्रलम्भ शृङ्गारको रसास्वादन गर्न सकिने यस गीतमा अभिसारिका नायिकाको मनोविज्ञान पनि प्रकट भएको छ। प्रेममा नायिका मानिनी बन्नुपर्नेमा नायक अभिमानी मात्र होइन छली र पलायनवादी बनेको सूक्ष्म भाव पनि अनुभव गर्न सकिन्छ। जस्तै –

बाँचिरहेछु प्रियतम म अझै छातीभरि बोकी तिम्रो आस
वसन्त बन्ला पतझड कसरी बन्नुपर्छ यसले मधुमास
कति बस्छौ गुमसुम जस्तै अब ता देऊ तिम्रो हात
कति निष्ठुर बन्दछ मान्छे हाँसी हाँसी गर्दछ घात।

चार ओटा गीतिगुच्छका प्रत्येक पङ्क्तिका अन्त्यमा 'कति निष्ठुर बन्दछ मान्छे हाँसी हाँसी गर्दछ घात' भन्ने पङ्क्तिको पुनरावृत्ति हुनुबाट भाव र लयको तारतम्य मिलेको पाइन्छ। प्रस्तुत गीतले प्रेममा छलकपट होइन निश्छल हृदयको विनिमय हुनुपर्छ भन्ने गीतकारको दर्शन पनि बोध्य छ।

८ र ९

भाव, भाषा र लयको अपूर्व संयोजन भएका यी दुवै गीतमा प्रेयसीले बैँस ढल्नै लाग्दा पनि प्रेमी नआएकोमा विरहवेदना पोखेको भाव व्यक्त भएको छ। प्रेमीलाई पर्खंदापर्खंदै मनको बाँध फुट्न लागेको र बैँस ढल्न लागेको दुःखेसो पोखेकी प्रेमिकाले प्रेमीलाई सपनीमा नभएर विपनीमा आउन आग्रह गरेकी छ र आठौँ गीतमा यसो भनेकी छ –

सपनीमा कति देखौँ बिपनीमा आऊ
वसन्त झैँ मेरो माया मनभरि आऊ
आकाशको जून पनि अब ढल्न लाग्यो
कति पर्खौं मेरो हजूर ! बैँस ढल्न लाग्यो।

नवौँ गीतमा पनि उही प्रेमिका आफुमा लाज लाग्ने बैँस आउँदा पनि प्रेमी नआएकामा आकुलव्याकुल बनेको अवस्था वर्णित छ । आफ्नो बैँसमा वसन्त ऋतुले हात हालिसकेको र गालाभरि लाली छाइसकेको भए पनि आफ्नो नजिक नआउने प्रेमीले देख्न नपाएको प्रतीकात्मक अर्थ यस गीतमा ध्वनित भएको छ । प्रेमी नआए पनि उसकै प्रेमको प्रतीक्षामा बसिरहेकी प्रेमिकाले सपनामा भए पनि रातभरि उसलाई सँगै राखेको र उसमै समर्पित भएको हार्दिक अनुभूति यस गीतमा पोखिएको छ । जस्तै–

जतिसुकै टाढा जाऊ मेरो छातीभरि
स्वप्नसरि सँगै हुन्छौ तिमी रातभरि
गालाभरि लाली छायो देख्नै पाएनौ
लाजै लाग्न बैँस आयो तिमी आएनौ ।

आठौँ गीतका तीनओटा गीतिगुच्छका प्रत्येक गीतका अन्त्यमा आएको 'कति पर्खौं मेरो हजूर ! बैँस ढल्न लाग्यो' भन्ने पङ्क्ति र नवौँ गीतका तीनओटा गीतिगुच्छका प्रत्येक गीतका अन्त्यमा आएको 'लाजै लाग्ने बैँस आयो तिमी आएनौ" भन्ने पङ्क्ति एक अर्काका परिपूरक बनेर आएका छन् र कथयिताका रूपमा आएकी प्रेमिकाको तीव्र भावसाम्यको प्रस्तुतीकरण गरेका छन् । यी दुवै गीतले यौवनले परिपूर्ण प्रोषितभर्तृका नायिकाको मनोलोकलाई स्पर्श गरेको देखिन्छ ।

१०

आठौँ र नवौँ गीतमा प्रेमीको अनुपस्थितिमा प्रेमिकामा उत्पन्न मनोभावको प्रकाशन भएको पाइन्छ भने यस दसौँ गीतमा चाहिँ प्रेमीले प्रियतमालाई सम्बोधन गर्दै एक्लै बस्नु नपर्ने विषयमा आश्वस्त पार्दै मिलनको सुन्दर मधुमासमा रम्न आग्रह गरेको भावतरङ्गको प्रस्तुति भएको छ । प्रेमिकाको स्वरूपमा आएकी रजनीलाई सम्बोधन गरेर गीतकारले मिलनको सुन्दर मधुमासलाई तुच्छ विलासको क्षण बनाउन नहुने सावधानी देखाउनु भएको छ र त्यसबाट शरीरको सुखभन्दा घुमाउरो

शैलीमा आत्माको उद्धार र परिष्कारको आवश्यकता दर्साउनु भएको छ। त्यसैले यो गीत वाच्यार्थका तहमा प्रेम र मिलनको भोगवादी अभिव्यक्ति हो भने व्यङ्ग्यार्थका स्तरमा आत्मोद्धार एवं जीवनमुक्तिको उपाय निर्देशन गर्ने दार्शनिक मान्यता हो। यसमा भोग र योग, शरीर र आत्मा तथा तृष्णा र मुक्तिको द्व्यर्थी बौद्धिक प्रयोगकौशल अवगत गर्न सकिन्छ।

११

यस गीतमा विरह र वेदनाले भरिएको कुनै एक जना व्यक्तिको मनःस्थिति देखाइएको छ। नयाँ वर्ष आउँदा पनि यौवन नफर्किने, वसन्त नै आए पनि छाती नफक्रिने, कोइली बोल्दा मन दुखेजस्तो हुने र जून पनि लुके जस्तो लाग्ने व्यक्तिको विरहलाई गीतकारले प्रकृतिका विविध बिम्बबाट व्यक्त गर्नुभएको छ। निराश र हताश अवस्थाको व्यक्तिलाई रोऊँजस्तो लागेको र जीवनका सबै सम्बन्ध र उपलब्धिलाई छोडूँ जस्तो लागेको अनुभूति उत्पन्न भएको देखाएर यस गीतमा निवृत्तिमार्गको खोजी गर्नुपर्ने सन्देश दिन खोजिएको छ। यो गीत एउटा विरही र वैरागीको कथनमात्र नभएर गीतकारको दार्शनिक मान्यताको प्रतिनिधि अभिव्यक्ति पनि हो। यस गीतमा आएका दुइटा पङ्क्ति यस प्रकार छन् –

आफैँसँग अब टाढा होऊँ जस्तो लाग्छ,<br>
आफ्नै माया आफैले नै धोऊँ जस्तो लाग्छ।

यी पङ्क्तिबाट गीतकारले सांसारिक एषणाको त्याग गर्दै ब्रह्मज्ञानको प्राप्तिद्वारा जीवन्मुक्तिको कामना राखेको अद्वैत वेदान्तको दार्शनिक मान्यताको स्थापना गर्न खोजेको देखिन्छ। प्रस्तुत रचना एकातिर लौकिक पात्रको विरह र वेदनाको सरल एवम् स्वाभाविक प्रस्तुति हो भने अर्कातिर गीतकारको अन्तश्चेतनामा उत्पन्न मुमुक्षाको दार्शनिक अभिव्यञ्जना पनि हो।

१२

तीन ओटा श्लोकगुच्छकमा रचित यस भजनले अविराम हिँड्नुपर्ने जीवनयात्राबाट आराम गर्न चाहेको भाव प्रस्तुत गरेर मुक्तिधाममा पुग्ने अभिलाषा राखेको अभिव्यक्ति दिएको छ। कहिले रजनी र कहिले

प्रभात देखिने अनि पलपलमा आँधी बतास भोग्दै भुमरीबीचमा हिँड्नुपर्ने जीवनयात्राबाट मुक्त भएर लौकिक प्रियतमको सट्टा पारलौकिक प्रियतम अर्थात् भगवान्को दिव्यधाममा विचरण गर्ने इच्छा यस भजनमा व्यक्त भएको छ । जीवनलाई मृगतृष्णाका रूपमा देख्ने गीतकारले मीठा स्वप्न देख्न खोज्दाखोज्दै आफैँसँग टाढिन लागेको प्रसङ्ग उल्लेख गरेर मानिस इच्छा र आकाङ्क्षाको परिपूर्ति गर्दागर्दै आफैँलाई नचिन्ने हुन्छ र अन्तिममा दुःखको भुमरीमा पर्दछ भन्ने सारसन्देश दिएको पाइन्छ । जानी नजानी जीवनको लामो यात्रा पूरा गरिसकेपछि अन्तिममा भगवान्को रिमझिम मुक्तिधाममा पुग्नका लागि प्रत्येक व्यक्तिले प्रयत्न गर्नुपर्ने आध्यात्मिक प्रेरणा पनि यस गीतमा पाउन सकिन्छ । जस्तै –

कति हेर्ने बाटो तिम्रो पारि किनारा देख्दछु दूर,
आफैँसँग नै टाढिन लागेँ खोज्दाखोज्दै स्वप्न मधुर ।
कस्तो होला प्रियतम साँच्चै रिमझिम तिम्रो मुक्तिधाम,
हिँड्नै पर्ने जानी नजानी जीवनयात्रा यो अविराम ॥

१३

चार ओटा गीतिगुच्छमा रचित यस गीतमा बैगुनी र निठुरी मायाको सम्झनाले सताएकी प्रेमिकाको मनोभाव व्यक्त भएको छ । मायालुलाई रोई रोई, पर्खी पर्खी र सम्झी सम्झी बस्ने र बाँच्ने बानी परेकी प्रेमिकाको हृदयतललाई स्पर्श गरेर लेखिएको यस गीतमा प्रेमीको प्रतीक्षामै लाली जोवन बितेर जान लागेकोमा चिन्ता पनि बढेर गएको कथ्य प्रस्तुत गरिएको छ । अनुप्रास अलङ्कारको शाब्दी सौन्दर्य र भावसौन्दर्यको विशिष्ट समन्वय भएको यस गीतमा मायामा रमण गर्नेहरूको मनोविज्ञानलाई यसरी उद्घाटन गरिएको छ –

रातभरि निद छैन दिनमा चैन छैन,
आसआसै कति बाँच्ने भेट्ने टुङ्गो छैन ।
तर पनि सम्झी सम्झी बाँच्ने बानी बस्यो,
मेरो छाती भरि हरे कस्को माया पस्यो ।

१४

प्रियतमको सम्बोधन गरेर परमात्माका अगाडि जीवनलाई एउटा पहेलीका रूपमा प्रस्तुत गरिएको यस भजनमा भगवद्भक्तिभाव र जीवनको मुक्तिकामना एकै पटक प्रकट भएको पाइन्छ । प्रथम प्रहरमा जीवनमा आएको एउटा सपना अब सान्ध्य प्रहरमा आइपुग्दा जीवननै जीर्ण घर झैँ ढलपल हुन लागेकाले शिथिल र समाप्त हुँदै गएको वैराग्यबोध गीतकारलाई भएको छ र त्यसैको अभिव्यक्ति यहाँ प्रकाशित छ ।

जीवनको पूर्वार्धमा पालेका सुन्दर सपना अब आएर भारी भएर थिच्न लागेको मार्मिक यथार्थ देखाउँदै गीतकारले ती सबै मृगतृष्णा भएको ज्ञान यस भजनमा प्रसारित गर्नुभएको छ । तृष्णा जाग्दै जाने तर सपनाहरू हराउँदै जाने भएकाले गीतकारलाई यो जीवन पहेली लागेको दार्शनिक विचार यस गीतले दिएको छ र सारांशमा पुनर्जन्मलाई सुधार्न सचेत पनि गराएको पाइन्छ ।

१५

यस भजनमा ढुण्डिराज गणपतिको वन्दना र आराधना गरिएको छ । विघ्नबाधा दूर गरी मङ्गल प्रदान गर्ने लम्बोदर गणेशका भक्तहरू सागर पार तरेर जाने भएकाले आफुले पनि उनको पूजा गर्न चाहेको तर विधिविधान थाहा नभएको अबोध बालभाव यहाँ अभिव्यक्त छ । तर मनले भक्तिभावका साथ दिनदिनै पूजा गर्ने गरेको सत्यलाई पनि गीतकारले उद्घाटित गर्नुभएको छ । सरल भाव र प्रस्तुति भएको यस भजनमा ढुण्डिराज गणपतिको बाह्य स्वरूपलाई स्वाभाविक ढङ्गबाट यसरी चित्रण गरिएको छ –

वर्ण छ ध्वाँसे ठूला कान भुँडे भन्छन् सबले
हात्ती जस्तो सुँड छ लामु लड्डु खान्छौ करले
एकदन्त हौ सिद्धिदाता जान्दिन पूजा आजा
जय ढुण्डिराज जय गणपति गर्दछु मनले दिनदिनै तिम्रो पूजा

१६, १७ र १८

यी तीनओटै भजनमा जगज्जननी कल्मषहारिणी दुर्गतितारिणी भगवती दुर्गाको स्तुति र वन्दना गरिएको छ । सोह्रौँ र सत्रौँ भजन

तुलनात्मक रूपमा लामा पङ्क्ति र लयका छन् भने अठारौँ भजन शास्त्रीय लय र लोकलयको मिश्रणका रूपमा आएको छ। यी भजनमा देवी भागवत, दुर्गासप्तशती आदि धर्मग्रन्थमा वर्णित देवीका चरित्रको प्रशस्त प्रभाव परेको छ र भजनकारले अज्ञानी र मूढ भएकाले दयादृष्टि राखेर आफ्नो उद्धार गरिदिन अनुनय गरेको पाइन्छ। आफुले देवीको जपतप, ध्यान र आराधना गर्न नसकी जीवन बिताएकोमा ग्लानि एवम् पश्चात्ताप समेत भएको आत्मालोचना यी भजनमा प्रकट भएको छ। आदि शङ्कराचार्यले लेखेको 'देव्यपराधक्षमास्तोत्रम्' मा उल्लेख भएको पुत्र कुपुत्र भए पनि माता कुमाता हुन नसक्ने तर्कपूर्ण वन्दनाको भावलाई यी भजनमा भजनकारले 'निर्मम छोरा हुन सक्छन् तर ममतामयी हुन्छन् आमा' भनेर सरलीकृत गर्दै सुबोध बनाउनु भएको देखिन्छ। देवी सृष्टिकी मूल भएकीले अन्त्यमा सबै कुरा उनमै विलीन हुने धर्मशास्त्रीय मान्यताको सरल र सुबोध अभिव्यक्ति यसरी भएको छ –

तिमी हौ जननी कारक तत्त्व,
तिमी नै हो सृष्टिकी मूल।
घुम्दछ जननी तिम्रै वरिपरि,
मिल्दछ तिमीमै अन्त्य समूल॥

१९

यस भजनमा भगवान्‌लाई कल्पतरु र जीवनका आधार मान्दै यो सारा सृष्टि उनकै भएको र हामी यसमा फनफनी घुम्ने गरेको भाव प्रस्तुत गरिएको छ। अन्तिममा भगवान्‌को भक्ति बाहेक कसैले पनि केही लैजान नसक्ने भएकाले केही सम्बल नभएको हुँदा आफु पनि कसरी पार तर्ने होला भनेर भजनकार चिन्तित हुनुभएको छ। जीवन क्षणिक भएको र सारा संसार सपनाजस्तो हुँदा पनि मृगतृष्णालाई नै जीवनको सार ठान्ने मानवीय प्रवृत्तिलाई यहाँ देखाउन खोजिएको छ। भगवान्‌को भक्ति नगरेको तथा अज्ञानी र अकिञ्चन भएको हुँदा आफ्ना लागि भगवान्‌ले द्वार खोलिदिए केही सान्त्वना मिल्ने आशा राख्नुभएका भजनकारले "कल्पतरु हौ प्रभु तिमी सबका हौ तिमी जीवन आधार" भन्ने पङ्क्तिको

पुनरावृत्ति गरेर यस भजनलाई लयात्मकता र भगवद्भक्तिभावको समन्वय प्रधान रचना बनाइएको छ ।

२०

भगवान् शिवको नमन र स्तवन गरिएको यस भजनमा शिवको बाह्य र आन्तरिक स्वरूपको बयान गरिएको छ । आफु अकिञ्चन भए पनि अरूलाई भुक्ति र मुक्ति दिने शिव आशुतोष र सबैका तारक भएको भाव यस भजनमा व्यक्त छ । आफु मूढ भएको र नाम जप्न मात्र जान्ने तर अरू भक्ति र पूजा गर्न नजान्ने भएकाले मनको अन्धकुनामा आएर जगमग बनिदिन र सुन्दर ज्योतिर्मय धाम दिन पनि यहाँ अनुरोध गरिएको छ । समग्रमा हेर्दा यस भजनले अज्ञानी भए पनि भजनकारले शिवको नमन गरेर सान्निध्य खोजेको भाव व्यक्त गरेको पाइन्छ ।

२१

चार ओटा भजमगुच्छमा लेखिएको यस रचनामा प्रत्येक भजनको अन्त्यमा “जयजय भगवान् जय अविनाशी” भन्ने पङ्क्तिको पुनरावृत्ति गर्दै सर्वशक्तिमान् भगवान्को जयकार गरिएको छ । भगवान्लाई सबैको पाप पखाल्ने, कणकणमा बत्ती बाल्ने र सबैका अन्तःकरणमा बास गर्ने विश्वविहारीका रूपमा लिँदै मनको सम्पूर्ण भ्रम नाश गरिदिन पनि यहाँ आह्वान गरिएको छ । आफु भगवान्को चरणको भक्त भएको र मनको मैलो धुन तत्पर रहेको भए पनि वृद्ध भएकाले काशीमा पुग्न नसकेको ग्लानि पनि यस भजनमा प्रकाशित भएको छ । एक दिन सबै छोडेर जानुपर्ने भएकाले मनको सम्पूर्ण भ्रम नाश गरिदिन भगवान्सँग आग्रह गरिएको छ । आफु र भगवान्का बीच अतुलनीय भिन्नता रहेको सत्यलाई अत्यन्त सरल शैलीमा यसरी प्रस्तुत गरिएको छ –

पापी म हुँ तिमी पापाहारी,
म भुसुनु हुँ तिमी विश्वविहारी ।
तिम्रै चरण पर्दछु हाँसी हाँसी,
जय जय भगवान् जय अविनाशी ॥

२२

यस भजनमा जगत्का नियन्ता हर्ताकर्ता प्रभुलाई आफ्नो उद्धार गरिदिन भजनकारले अनुनयविनय गरेको भाव प्रकाशित भएको छ। पञ्चमहाभूतले बनेको यो शरीर पछि त्यसैमा विलीन हुने भएकाले सम्पूर्ण संसारलाई भजनकारले मृण्मय देख्नुभएको छ। यो सत्य बुझ्रेर पनि मानिसले व्यर्थमा अहङ्कार गरिरहेको देखेर भजनकारलाई आश्चर्य पनि लागेको छ। जगत्का नियन्तालाई भेट्ने बाटो नदेखेकाले आफ्ना ज्योतिर्मय आँखा खोलिदिएर भगवान्को द्वार देखाइदिन पनि यहाँ निवेदन गरिएको छ। सन्तहरूको सङ्गत जुटाइदिएर अपार ज्ञान प्रवाहित गरिदिन पनि प्रार्थना गरिएको यस भजनमा अद्वैत वेदान्त दर्शनको प्रशस्त प्रभाव परेको छ र जगत्लाई मायामय र जगन्नियन्ता प्रभुलाई अविनाशी र अविचल ब्रह्ममय स्वरूपमा देखाउन खोजिएको छ –

अन्धकार सबतिर देख्तछु मायामय यो जगलाई,
बाटो कुन हो कससँग जाने कसरी भेट्ने तिमीलाई।
खोल्द्यौ आँखा ज्योतिर्मय भगवन् देखौँ तिम्रो द्वार,
जगत् नियन्ता हर्ताकर्ता प्रभु गर मेरो उद्धार ॥

२३

यस भजनमा पनि दुःखमय संसारबाट छुटकारा पाउनका लागि चेतनद्वार खोलिदिन 'तिमी' सम्बोधन गरेर भगवान्सँग प्रार्थना गरिएको छ। जन्म र मृत्युको शाश्वत चक्र चालिरहने र यी दुईका बीच विस्मृतिको कालो पर्दा लागिरहने सांसारिक प्रक्रियाको वैराग्यपूर्ण यथार्थ यस भजनमा प्रस्तुत गरिएको छ। आफु बसिरहेको र बाँचिरहेको संसारमा स्वर्ग नरकको दुविधा भएको, मृत्युपछि ठुलो त्रास रहेको, विषयवासनाको मोहमा घिटिघिटी सास अल्झिरहेको र आफ्नै लागि आफु नहुने अवस्थामा पनि अरूको आस गरेर मरुभूमिमा मधुमास देखेर लोभिइरहेको कटुसत्यको प्रकाशन यसरी गरिएको छ –

स्वर्ग नरकको दुविधा छ सधै मृत्युपछि ठूलो त्रास,
विषयवासना दुइ थोपा महमा अल्झिरहेछ घिटिघिटि सास।

आफु नै जब आफ्नो हुँदैन के गर्ने अनि अरूको आस,
देख्तछु केको लागि अझ पनि यो मरुभूमिमा मधुमास ।
खोल्द्यौ तिमी अब ता चेतनद्वार,
जान्छु छोडी सब यो दुःखमय संसार ॥

२४

यस भजनमा स्वास्थ्य, शक्ति, सम्पत्ति र आयु हुँदै भगवान् रामको स्मरण र नाम कीर्तन गर्नुपर्ने भाव पाइन्छ । भोलिभोलि भनेर टार्नुको सट्टा समय रहँदै रामनामको स्मरण र कीर्तन गर्नाले हाम्रो भविष्य सुखद र शान्त हुने तर्क भजनकारको छ । प्राणान्त कालमा राम नाम भन्न नसकिने भएकाले श्रद्धाले नमस्कार गरेर र रातोदिन रामनाम जपेर बस्ने हो भने कालले पनि केही गर्न नसक्ने विश्वास यहाँ अभिव्यक्त छ । चिन्मयस्वरूप भएकाले राममा मिल्ने मार्ग बताइदिन अनुरोध गरिएको यस भजनमा भगवद्भक्ति गरिहाल्नुपर्ने र त्यसबाट आत्मोद्धारतर्फ प्रवृत्त हुनुपर्ने सार पाइन्छ ।

२५

सारा संसार स्वार्थी भएको तर भगवान् मात्र स्वार्थरहित भएको तथ्य समयमै बुझ्न सके सबैको हित हुने विश्वास व्यक्त भएको यस भजनमा भगवान् अज्ञेय तथा मन र बुद्धिभन्दा पनि टाढा एवं मायाभन्दा माथि भएको दार्शनिक विचार आएको छ । यस्तो भगवान्लाई जान्दछु भन्ने मानिस अबुझ र अकिञ्चन हो भन्ने भजनकारको तर्कसमेत यहाँ अनुभव गर्न सकिन्छ । संसारको स्वार्थ र परमात्मा परमेश्वरको शक्ति र सत्ता बुझ्न सके जीवन सुखद हुने सन्देश यस भजनले दिएको छ । यसका लागि आफुलाई अर्थात् आत्मालाई चिन्न सक्नुपर्ने भावार्थ यी पङ्क्तिबाट प्रकाशित भएको पाइन्छ –

मनोरम झलमल सारा संसार कणकणमा बिन्न सके,
कालो सेतो सब छुट्टिन्छ आफैँलाई चिन्न सके ।
जानी नसक्नु तिमी छौ भगवन् जति पनि गाउँ तिम्रो गीत,
स्वार्थी छ सारा संसार तिमी छौ यौटा स्वार्थरहित ॥

यसरी यस भजनले सदसद् छुट्ट्याउन सक्ने विवेक हुँदा मात्र संसार र भगवान् दुवैलाई राम्ररी बुझ्न सकिने र त्यसबाट जीवनमा उद्धार हुने सारपूर्ण उपदेश दिएको देखिन्छ।

२६

अनमोल प्रभुपदको प्राप्ति नै जीवनको एउटै लक्ष्य भए पनि अज्ञानवश मानिसको जीवन विपत्ति भोगेर बित्तछ भन्ने भाव बोकेको यस भजनले सबै स्वार्थका लागि प्रिय हुने र स्वार्थ पूरा भएपछि टाढिने हुन्छन् भन्ने वेदान्तको दार्शनिक मान्यतालाई सरल शैलीमा प्रकाशित गरेको छ। सच्चित् प्रभुको ध्यान गर्दा मनको दुस्तर माया हटेर जाने र मनलाई सुस्थिर बनाउन सक्दा शान्त सरोवरी बन्न जाने भएकाले त्यसैमा प्रभुको सुन्दर छाया देखिन्छ भन्दै स्वच्छ आत्मामा नै ईश्वरको साक्षात्कार हुने विचार यहाँ पाइन्छ। अरू सबै काम छोडेर प्रभुको शरण पर्ने हो भने हाम्रो उद्धार हुन्छ भन्ने विश्वासको अभिव्यक्ति पनि यहाँ भएको छ। शास्त्र र सन्तहरूको अध्ययन, मनन, सङ्गत र साधनाले मात्र प्रभुको चिन्मय द्वार भेटिने आस्थाभावसमेत यस भजनमा प्रतिबिम्बित भएको छ।

२७

यस भजनमा अन्तिम समयमा अरूको घर जानुभन्दा भगवान्कै मन्दिरमा जानु सर्वोत्तम भएकाले आफ्नो हात समाएर उद्धार गरिदिन भजनकारले भगवान्लाई पुकारा गरेको भाव प्रकट भएको छ। बाँचुन्जेल सुखदुःख खेपिरहनुपर्ने र तृष्णाले सधैँ बन्धनमा पारिरहने भएकाले त्यसबाट मुक्त भएर भगवान्को सान्निध्यमा रहन चाहेको लोभ यस भजनमा भावमय बनेर व्यक्त भएको छ। जीवन बुझेर पनि भगवान्लाई भेट्न गाह्रो भएको र मनमा भ्रमको घेरो पनि रहिरहेको हुँदा भविष्यमा के होला भन्ने चिन्ता पनि यहाँ व्यक्त भएको छ –

तिमी छौ टाढा अझ पनि भगवन् कसरी भेट्ने होला,
तिम्रो मेरो बीचको दूरी कसरी मेट्ने होला।

मनमा धरमर भ्रम पालेर कसरी काट्ने घेरो,
घोर रजनी एक्लै हुन्छु के गति होला मेरो ।
घनघन घण्टी बज्यो मनमा आयो अन्तिम बेला हात समाऊ मेरो ।

२८

यस भजनमा मर्यादा पुरुषोत्तम भगवान् रामचन्द्रको चरित्र गाथा वर्णन गरिएको छ र बारम्बार उनलाई प्रणाम गरिएको छ। रामले आदर्श पुत्र, प्रजापालक राजा र त्यागको आदर्श प्रतिरूप बनेर सबैलाई सुमार्ग देखाएको भाव यहाँ पाइन्छ । धर्मका विनाशक दुष्ट दानवहरूलाई समाप्त पारेर सबैलाई संसारसागरबाट पार लगाउने राम मानवरूपका सनातन ब्रह्म हुन् भन्ने भजनकारको दृष्टिकोण छ । मानवकै रूपमा रामले पनि पूर्णविराम लिएको तर्क गर्दै दुःखमय र क्षणिक भन्ने बुझ्ेर पनि मानिसले लोभ, माया र मृगतृष्णा बोकेर संसारमा दुच्छर काम गरिरहेको टिप्पणी गरिएको छ । यो भजन रामको जीवनसरणिको अनुराग गरेर सबैलाई सन्मार्गतर्फ लाग्न प्रेरित गर्ने धार्मिक आह्वान बनेको छ ।

२९

नन्दनन्दन, गोपीजनस्पन्दन, मुनिजनवन्दित श्याम जस्ता सम्बोधन पदावलीको प्रयोग भएको यस भजनमा भगवान् श्रीकृष्णका लीलामाधुर्यको वर्णन गरिएको छ । मानिसका रूपमा जन्मेर व्रजवासीहरूका मात्र नभई सम्पूर्ण धरावासीहरूकै मुक्तिका दाता बनेर श्रीकृष्णका बाल्यलीला, कर्ममय जीवनको उपदेश र दुःखमय संसारबाट पार लगाउने सामर्थ्यको सरल एवं मनोहारी प्रस्तुति यस भजनमा भएको छ । उनी मानव जस्तै अल्पेर गए पनि पावन नाम छोडेर श्रद्धा, भक्ति, आस्था एवं समर्पणका अविचल प्रतिरूप भएको भावार्थ यस भजनमा अवगत गर्न सकिन्छ । कृष्णको जीवनको सार यसरी खिचिएको छ –

जन्म्यौ मानिसजस्तै देखायौ लीला गर्‍यौ अतिमानव काम,
कर्ममय जीवन कर्मको उपदेश गर्‍यौ कर्म गर्‍यौ अविराम ।

मानव जस्तै तर तिमी अल्प्यौ छोड्यौ केवल पावन नाम,
हे नन्दनन्दन ! गोपीजनस्पन्दन ! मुनिजनवन्दित श्याम !

३०

यस भजनमा निरञ्जन निराकार सच्चिदानन्द प्रभुलाई बारम्बार कोटीकोटी प्रणाम गर्दै यो सारा सृष्टि पनि उनकै भएको र निर्विकार भए पनि उनी नै सबैको दिव्य सहारा भएको भाव प्रकाशन गरिएको छ। प्रभुले विभिन्न अवतार र नाम लिएर लीला गरेकाले यो धर्ती नै शुभधाम बनेको छ भन्ने भजनकारको धारणा छ । भित्री स्वरूप बुझ्न गाह्रो भएकाले मानिसमा बाहिरी काम बुझ्ने र नाम मात्र जप्ने सामर्थ्य भएको विचार व्यक्त गर्दै भजनकार पनि पूजा, कीर्तन आदि शुभकाम गर्न नसके पनि उनैतिर बढ्न अनवरत प्रयासरत रहेको निष्कर्ष यहाँ पाइन्छ। निम्नलिखित भजनले परब्रह्म परमात्मा प्रभुको स्वाभाविक वर्णन गरेको छ –

तिम्रा नै हुन् मत्स्य कूर्म वराह कल्की आदि अवतार,
नाना रूपमा आयौ भगवन् हर्न धराको ठूलो भार ।
गर्छौं कीर्तन खालि भगवन् जप्छौँ केवल तिम्रो नाम,
भित्री स्वरूप त बुझ्न छ गाह्रो बुझ्छौँ केवल बाहिरी काम,
निरञ्जन निराकार सच्चिदानन्द प्रभुलाई कोटी कोटी प्रणाम ॥

३१

भगवान् श्रीकृष्णको शरण र चरणमा परेको समर्पण भावबाट प्रारम्भ भएको यस भजनमा उनको साकार रूप र लीलाका साथै अज्ञानीका लागि अगोचर र ज्ञानीका लागि साथी हुने व्यक्तित्वको पनि वर्णन भएको छ। यहाँ श्रीकृष्णलाई भक्तहरूका पाप नाश गरिदिने र शरणमा आएकालाई तारिदिने उपकारी चरित्रका रूपमा अङ्कन गरिएको छ। भगवान्को दया र कृपा नजागे जति खोजे पनि उनलाई पाउन नसकिने र भक्तले भाँडो नथापे उनी जति बर्से पनि भेटिन नसकिने सत्ता भएकाले भजनकार भक्तिको भाँडो अघि सारेर खडा हुनुभएको अभिव्यक्ति यहाँ पाइन्छ। श्रीकृष्णलाई पाउन नसके शरणागतको दुर्गति हुने भएकाले भक्तिरूपी भाँडो थापेर पार तर्न चाहेको अभिलाषालाई यसरी सहजरूपमा व्यक्त गरिएको छ –

जति खोजे पनि तिमी मिल्दैनौ तिम्रो दया जागेन भने,
जति बर्षे पनि तिमी पाइन्नौ भक्तले भाँडो थापेन भने ।
अब त झरझर बर्सिद्यौ घनश्याम थापेँ भक्तिको भाँडो अघि सरी,
शरणागतको दुर्गति कसरी होला प्रभुजी लाऊ पार उतारी,
आएँ अब त तिम्रै शरणमा भगवन् पर्छु चरणमा दुई हात पसारी ॥

३२

शरणागत बनेर आँखा खोली अन्तिम सास भगवान्को मन्दिरमा चढाउन पुगेको भक्तिभावले भरिएको यस भजनमा अन्तिममा भगवान् बाहेक अरू केही पनि नहुने सत्यको उद्घाटन गरिएको छ। चञ्चल मनका भरमा छाडा इन्द्रियहरू छोड्न नसकिने र केही नगर्ने स्थितिको सिर्जना गर्न पनि भित्री मनमा प्रशस्त अभ्यास गर्नुपर्ने आत्मचिन्तनपरक दृष्टिकोणका माध्यमबाट डुब्न लागेका मानिसका लागि भगवान्ले मात्र हात समाएर उद्धार गर्ने विश्वास यहाँ स्थापित भएको पाइन्छ। अरूले केही नलगेकाले आफुले पनि केही नलाने आत्मबोधको प्रस्तुतिद्वारा जीवनका कमाइका रूपमा रहेका पाप र पुण्य मात्र साथमा जान्छन् भन्ने वैराग्यचेत पनि यस भजनमा प्रतिबिम्बित भएको छ । विश्व पाए पनि मन तृप्त नहुने तर यही मनलाई जित्न सके तुरुन्त तृप्ति पाइने अनुभवको साधारणीकरण गर्दै भजनकारले मनको मैलो नहटेसम्म सारा शास्त्र पढेर पनि कुनै उपलब्धि हुन नसक्ने यथार्थलाई सहज रूपमा देखाउनुभएको पाइन्छ। जस्तै –

सारा विश्व मिले पनि भवमा हुन्न परितृप्ति मनमा,
मनलाई जित्न सके भगवन् मिल्दछ तृप्ति क्षणमा ।
सारा शास्त्र पढे पनि हुन्छ र के ? हट्दैन जबतक मनको झ्याउ,
शरणागत छु अविचल भगवन् ! आऊ पार लगाऊ ॥

यसरी यस भजनले तृष्णा छोडेर, आत्मज्ञान गरेर र भगवान्को शरण परेर मात्र जीवनधारी मानिस मुक्त भई सुखी हुन्छ भन्ने बौद्धिक विचार व्यक्त गरेको पाइन्छ।



# समीक्षक व्यक्तित्व

भावयित्री प्रतिभा भएका शरदकुमारका दुई ओटा समीक्षात्मक कृति प्रकाशित छन् – (क) कवि श्री एम्.बी.बी. शाहका कृतिहरू ‘उसैको लागि’ र ‘फेरि उसैको लागि’ को एक अध्ययन र (ख) ऋतु-मन्थन। यी मध्ये पहिलो कृतिमा कवि एम्.बी.बी. शाहका दुई ओटा कवितासङ्ग्रहमा सङ्गृहीत फुटकर कविताको विश्लेषण गरिएको छ भने दोस्रोमा कवि मोहन कोइरालाको कवितासङ्ग्रह ‘ऋतु-निमन्त्रण र गरलपान’ मा समाविष्ट कविताहरूको विविध दृष्टिकोणबाट विवेचना गरिएको छ। यी दुवै कृतिले उहाँको समीक्षक व्यक्तित्वको प्रकाशन गरेका छन्।

# उसैको लागि र फेरि उसैको लागिको एक अध्ययन २०२६ का भूमिकाबाट

[“मनुष्यजीवनका विभिन्न अनुभूतिलाई आफ्‌आफ्नो ढङ्गले कलात्मक रूपमा मानव मस्तक उच्चा पार्ने किसिमसँग शब्दाङ्कित गर्नु नै साहित्य हो” (स्र.सा.) भनेर साहित्य सम्बन्धी आफ्नो दृष्टिकोणलाई स्पष्ट गर्नुहुने कवि एम्.बी.बी. शाहको आधुनिक साहित्यको सम्बन्धमा पनि खास आफ्नै किसिमको विवेचनापूर्ण धारणा पाइन्छ। “आधुनिक साहित्य नै आजकल लेखिने साहित्य हो भनिन्छ र कसैले त भविष्यका सन्ततिका निमित्त तयार गरिने साहित्य नै आधुनिक हो भन्छन्। तर जे होस्, आधुनिक युग सुहाउँदो साहित्य नै आधुनिक साहित्य हो भनी मानेमा उचित होला। वास्तवमा साहित्य जन आकाङ्क्षाको पृष्ठभूमिमा उच्चतम अनुभूतिद्वारा सज्जित भएर व्यक्त गरिएको र जुनसुकै वेला पनि मानव समाजको कल्याण गर्ने हुनुपर्दछ र यसलाई नै आधुनिक साहित्य वा आजकलको साहित्य जे भनेर नामकरण गरे पनि हुन्छ।” (स्र.सा.) यसरी साहित्यको सिर्जना र यसको उपयोगिताको बारेमा परिभाषात्मक

रूपमा उहाँ यस किसिमको व्यापक दृष्टिकोण राख्नुहुन्छ तापनि यस सम्बन्धमा एम्.बी.बी. शाहको एउटै शुद्ध तथा मूर्त धारणा पाइन्छ, त्यो हो – "जनता र समाजको निमित्त नै कलात्मक रूपमा साहित्यको सिर्जना हुनुपर्छ।" र "साहित्य कृति रचिँदा पहिले आफ्नो देश र जनतालाई मान गर्नुपर्छ, त्यसपछि मात्र त्योभन्दा बाहिर जानुपर्छ।" (स्र.सा.) वस्तुतः राष्ट्रवादी कवि एम्.बी.बी. शाहको यथार्थवादी सिद्धान्त पनि यही हो र यस अनुरूप नै उहाँले आफ्ना रचनाहरूमा आफ्नो अनुभूति व्यक्त गर्नुभएको छ। देश र जनताको निमित्त आफुलाई सम्पूर्ण रूपबाट समर्पण गर्नुहुने कवि शाहको राष्ट्रवादी भावना सारै सशक्त र दूरदर्शितापूर्ण पनि छ। कविज्यूले आफ्ना गीत र कविताहरूमा स्वदेशको गान र नेपाली जनताको भावपूर्ण सम्मान पनि गर्नु भएको छ।

कविशिरोमणि लेखनाथज्यूले श्रीगणेश गर्नु भएको प्रकृति चित्रणको परम्परा नेपाली साहित्यको नवीनतम विधा मध्येको एक विधा हो। तथापि यति छिटै समयमा पनि यसले आशातीत रूपमा सफलता प्राप्त गरेको छ। यस परम्परामा कवि एम्.बी.बी. शाहको स्तुत्य देनलाई उपेक्षा गर्न सकिँदैन। "नेपाल जस्तो मनोरम प्राकृतिक स्थलले मेरो साहित्यिक मनोवृत्तिलाई कुतकुत्याइरहेको थियो। कहिले के लेखूँ, के भाव व्यक्त गरौँ जस्तो लागि रहन्थ्यो।" (स्र.सा.) भनेर आफ्नो जागरुक तथा सिर्जनामूलक भावनालाई व्यक्त गर्नुहुने कवि शाहको अन्तरमा, बाहिर निःसृत हुने क्षण पर्खेर बसिरहेको कति तीव्र अनुभूतिको अक्षय स्रोत रहेछ, सो यसबाट स्पष्ट हुन आउँछ। तदनुरूप नै उहाँका रचनाहरूमा प्रकृतिका विभिन्न सौम्य तथा आह्लादकारी रूपहरूको चित्रण भएको हामी पाउँछौं।

कवि शाहलाई सर्वाधिक रूपमा प्रेमको कवि भनेर मैले व्यक्त गरिसकेको छु। उहाँलाई यस मार्गमा अग्रसर गराउने उहाँकै सहधर्मिणीसँगको अत्यधिक प्रेम, अनि उनीसँगको असामयिक वियोग र तज्जन्य करुणात्मक अनुभूति नै हो। मुख्यतः यस घटनाद्वारा नै शाहज्यूको प्रवृत्ति साहित्योन्मुखी हुन गयो भन्नु उपयुक्त होला। उहाँकै शब्दमा – "क्रमशः मेरा जीवनमा विभिन्न त्यस्ता घटना घट्न आइपुगे,

जसले गर्दा मेरो कलम जगैदेखि रसाइदियो र यसको नतिजा जनसमक्ष प्रस्तुत नै छ।" (स्र.सा.) भनेर आफुलाई स्पष्ट गरेर देखाइदिने शाहज्यूका रचनाका मूलमा यौन (सेक्स) ले सर्वाधिक रूपमा काम गरेको छ, भनेर भन्न खोज्नु उत्ताउलोपना बाहेक अरू केही हुने छैन । जीवनको यो पनि एक विवेच्य अङ्ग हो भन्दैमा जहाँ पनि र जहिले पनि यौनवादी दृष्टिकोणलाई अघि सार्नु उपयुक्त होला जस्तो लाग्दैन।

"जहाँसम्म साहित्य र धर्म बीचको सम्बन्ध छ, दुवैको लक्ष्य मानवताको संरक्षण र संवर्द्धन गर्नु नै भएकोले साहित्यको सम्बन्ध धर्मसँग अटुट रूपमा रहनु स्वाभाविक नै हो।" (स्र.सा.) भनेर धर्म र साहित्यको बीचको तादात्म्यप्रति अटल श्रद्धा र विश्वास राख्नुहुने कविबाट ईश्वरभक्ति सम्बन्धी कविताको सिर्जना हुनु स्वाभाविकै हो । उहाँका निश्छल तथा सात्त्विक हृदयबाट निस्केका ईश्वरभक्ति सम्बन्धी धार्मिक रचनाहरूमा विश्वजनीन तथा मानवतावादी उदार भावनाको झल्को हामी पाउँछौँ।

साङ्ख्यको सिद्धान्त अनुसार आफ्ना प्रयासजन्य समस्त भुलहरूलाई सृष्टिकी मूलाधार प्रकृतिमा नै समर्पण गर्दै आफ्नो विनयशील व्यक्तित्वलाई व्यक्त गर्नुहुने कविज्यू नेपाली साहित्यमा अनुकरणीय व्यक्ति हुनुभएको छ । उहाँको साहित्य साधनाको सम्बन्धमा उहाँका प्रकाशित कृति 'उसैको लागि' र 'फेरि उसैको लागि' को आधारमा मैले यहाँ छोटकरीमा केही उल्लेख गर्ने धृष्टता गरेँ, जो यहाँहरूका समक्ष नै छ। तर यसमा मेरो क्षमताको अभावमा जे जति त्रुटि र अपूर्णताहरू हुन गए, त्यसको लागि म स्वयं कवि एम्.बी.बी. शाहज्यू, विद्वान् समीक्षक र साहित्यिक बन्धुहरूसँग क्षमा याचना गर्दछु। ]

# उसैको लागि र फेरि उसैको लागिको एक अध्ययन २०२६

प्रस्तुत कृति कवि एम्.बी.बी. शाहका दुई ओटा कवितासङ्ग्रहहरू 'उसैको लागि' र 'फेरि उसैका लागि' मा सङ्गृहीत कविताहरूको समीक्षा

र विश्लेषण हो । २०२७ सालमा मुकुन्द शमशेर थापाद्वारा प्रकाशित यस कृतिमा कवि शाहका ६ वर्षका अन्तरालमा प्रकाशित दुई ओटा कवितासङ्ग्रहहरूलाई विभिन्न दृष्टिकोणबाट हेरिएको छ। सर्वप्रथम दुवै सङ्ग्रहमा सङ्कलित सम्पूर्ण कवितालाई समीक्षक शरदकुमार भट्टराईले सरलताका लागि चार थरी विषयवस्तुमा वर्गीकरण गर्नुभएको छ – (अ) देशभक्तिमूलक वा राष्ट्रवादी कविता, (आ) प्रेमसम्बन्धी कविता, (इ) प्रकृतिसम्बन्धी कविता र (ई) ईश्वर भक्तिमूलक वा भक्तिवादी कविता । यिनमध्ये राष्ट्रवादी भावनाका कवितालाई समान शीर्षकमा दुई भागमा विश्लेषण गरिएको छ। कवि एम्.बी.बी. शाह राष्ट्रियता र राष्ट्रिय भावनालाई उद्दीप्त पार्ने कवि भएकाले उनका कवितामा यही भाव नै बढी प्रखर भएको पाइन्छ। समीक्षकले कविताको विषयविस्तार र केन्द्रीय विशेषतालाई ठम्याई यस विषयका कवितालाई एकै शीर्षकमा दुई खण्डमा राखेर अध्ययन र विश्लेषण गर्नु औचित्यपूर्ण देखिन्छ।

कवि शाह आधुनिक नेपाली कविहरूमा सबल राष्ट्रिय चेतना भएका कवि हुन् । उनका कवितामा नेपाली संस्कृति, प्रकृति र समाज सर्वत्र व्याप्त भएको पाइन्छ। समीक्षकले कवि शाहको मूल काव्यप्रवृत्तिलाई ठम्याउँदै "एम्.बी.बी. शाहको हृदयकुहरमा अन्तर्निहित जुन अगाध देशभक्तिपूर्ण राष्ट्रवादी भावनाको अक्षय स्रोत छ त्यही भावना उहाँका कविताहरूमा यत्रतत्र प्रकाशमान भएर रहेको छ ।" भन्ने टिप्पणी गर्नुभएको छ र कविताहरू पनि सोही टिप्पणीका अनुकूल छन् ।

कवि शाहले आफुभित्र छचल्किरहेको राष्ट्रवादी भावनालाई 'उसैको लागि' र 'फेरि उसैको लागि' दुवै सङ्ग्रहमा अभिव्यक्त गरेका छन् भन्ने यथार्थको पुष्टिका लागि समीक्षकले जुन कवितांशको उद्धरण दिनुभएको छ त्यसबाट समीक्षकमा निहित गहन अन्तर्दृष्टि र काव्यविभावन गर्न सक्ने सामर्थ्यको प्रकाशन भएको पाइन्छ । समीक्षकका दृष्टिमा 'फेरि उसैको लागि' का यी पङ्क्तिहरूले कविको राष्ट्रागको भावना अभिव्यञ्जित गरेका छन् –

जुन राष्ट्रको पृष्ठभूमि छ,
विश्वभरीको उच्च हिमाल ।
त्यस राष्ट्रको गौरव राखौँ,
हाम्रो हो यो देश नेपाल ॥

कवि शाह एक जना राष्ट्रवादी भावना भरिएका स्रष्टा मात्र नभएर राष्ट्र सञ्चालनको नेतृत्व गर्ने शक्तिशाली नायक पनि थिए । कवितामा त्यो व्यक्तित्व प्रत्यक्षतः मुखरित नभए पनि जनतामा व्याप्त रोग, भोक, अभाव र अशिक्षाको निराकरण गरी समतामूलक समाजको निर्माण गर्नु कविको ध्येय देखिन्छ । सबै नेपालीको सुखदुःखमा साथ र सहयोग दिने कविको भावनाप्रधान लक्ष्यलाई यी पङ्क्तिले प्रमाणित गरेका छन् भन्ने समीक्षकको दृष्टिकोण छ –

एकै देशका सन्तान हामी,
को टाढा को नजीकको ?
रगत सबै रातो भए,
कुन धनी, कुन गरीब को ॥

यसरी सबै नेपालीलाई समानताको बोध गराई एकताको भावनाद्वारा राष्ट्रवादी चेतनाको अभिवृद्धिमा कवि शाहका कविताले योगदान गरेको विचार समीक्षक भट्टराईले व्यक्त गर्नुभएको छ ।

कवि शाहमा 'देशको माटो' प्रति अटल श्रद्धा र निश्छल भक्ति भएको काव्यिक सत्यलाई समीक्षकले उजागर गरिदिनुभएको छ । देश बिर्सने बाँचेर पनि मरेको हो र देश सम्झने मरेर पनि बाँचेको हो भन्ने मार्मिक अनुभूतिलाई कविले अभिव्यक्त गरेको पाइन्छ । त्यसलाई समीक्षकले निम्न लिखित पङ्क्तियुगलद्वारा सिद्ध गरिदिनुभएको छ –

मर्‍यो ज्युँदै त्यो, जसले बिर्स्यो 'देशको माटो' ।
बाँच्यो सधैँ त्यो, जसले सम्झ्यो 'देशको माटो' ॥

'उसैको लागि' मा सम्पूर्ण नेपालीलाई "हे वीर हिँड अघि सरी" भनेर आह्वान गर्दै कविले राष्ट्रियताको भावना अभिवृद्धि गर्न खोजेका छन्

भन्ने समीक्षकको विचार पनि सूक्ष्म दृष्टिकोण र चिन्तनको परिणामका रूपमा रहेको पाइन्छ ।

प्रस्तुत दुई कृतिका कविताहरूलाई राष्ट्रवादी भावनाका दृष्टिबाट विश्लेषण गर्दै समीक्षकले कवि शाहलाई मोतीराम भट्ट, लेखनाथ पौडेल, सिद्धिचरण श्रेष्ठ, केदारमान व्यथित र माधव घिमिरे जस्तै राष्ट्रप्रेमी कविका रूपमा तुलना गर्नुभएको छ । त्यसबाट समकालीन कृतिहरूका सापेक्षतामा कुनै साहित्यकारको अध्ययन र विश्लेषण गर्दै वस्तुगत मूल्याङ्कन गर्ने समालोचनाको धर्मको पालना भएको पाइन्छ। आफुभन्दा पूर्ववर्ती, समकालीन र उदीयमान साहित्यिक पुस्ताका कतिपय सर्जकहरूजस्तै कवि शाह पनि हिमालयबाट प्रेरित भएका र अरूलाई पनि प्रेरित गर्न तत्पर व्यक्तित्व हुन् भन्ने समीक्षकको ठहर छ। निम्नलिखित उद्धरण दिएर समीक्षकले कवि शाहको हिमालयप्रतिको गौरव र ममताभावलाई प्रमाणित गर्न खोज्नुभएको छ –

हाम्रै हो सर्वोच्च चुचुरो ।
हामी छौँ प्रसिद्ध विश्वका ॥
हामी छैनौँ कतै झुकेका ।
हामी हौँ त्यही सन्तान देशका ॥

यसरी कवि शाहका दुवै कवितासङ्ग्रहमा प्रकीर्ण रूपमा व्याप्त राष्ट्रवादी भावनालाई कविताका पङ्क्तिहरू समेत उद्धृत गरी समीक्षक भट्टराईले वस्तुवादी समालोचकको व्यक्तित्व स्थापित गर्नुभएको पाइन्छ।

कवि शाहका दुवै कवितासङ्ग्रहमा सङ्कलित कविताहरूमध्ये विषयवस्तुका दृष्टिले दोस्रो वर्गमा परेका कविताहरूलाई प्रेमात्मक अनुभूतिका दृष्टिबाट हेरिएको छ । यस्ता कवितालाई प्रेमसम्बन्धी कवितामा समावेश गरिएको छ। पात्र अनुसार प्रेमका अनेकौँ क्षेत्र छन्– भगवत्प्रेम, राष्ट्रप्रेम, मान्यजनप्रेम, सन्ततिप्रेम, नारीपुरुषप्रेम, मानवप्रेम, प्राणीप्रेम आदि । संसारका अधिकांश साहित्यमा प्रायः नारीपुरुषप्रेमका मनोरागी प्रसङ्गहरू वर्णित हुने भएकाले सर्वसाधारण मानिसले प्रेम

भन्नेबित्तिकै सामान्यतया नारीपुरुषकै अनुरागपूर्ण सम्बन्ध भनेर बुझ्दछ।

समीक्षक भट्टराईद्वारा समीक्षित कवि शाहका दुवै सङ्ग्रहहरूका कवितामा पनि प्रेमका यिनै विविध रूप पाइन्छन् तापनि नेतृत्वदायी भूमिका नारीपुरुषप्रेमको वर्णनले खेलेको छ भन्ने दृष्टिकोण अभिव्यक्त भएको पाइन्छ । समीक्षकले सम्पूर्ण कविताहरूको अध्ययन र अनुशीलन गरी निकाल्नु भएको यस निष्कर्षले कवि म.बी.बी. शाहका नारीपुरुषप्रेमसम्बन्धी कविताको बाहुल्य प्रमाणित हुन्छ – "यो अवश्य मान्नु नै पर्दछ कि प्रेमको करुणपक्ष अथवा यसो भनौँ विरहपक्ष नै श्री एम्.बी.बी. शाहको मुख्य विषय हुन गएको छ । किनभने उहाँको काव्यसाधनाको प्रथम स्रोत विरहव्यथा हो ।" यसरी समीक्षकका दृष्टिमा कवि शाहका लागि प्रेम र विरह नै कवितासिर्जनाका प्रेरक हेतु बनेको छन् । समीक्षकको यो निष्कर्ष निकै सूक्ष्म र वस्तुपरक छ ।

संस्कृत, अङ्ग्रेजी र नेपाली साहित्यको गहन अध्ययन गर्नुभएका भट्टराईले कवि शाहले प्रेयसीबाट छुट्टिनुपर्दा अनुभव गरेको वेदनालाई कालिदासको रघुवंशमा वर्णित अज राजाको विलाप र अङ्ग्रेजी कवयित्री क्रिश्चिना रोजेटीको वियोगवेदनासँग तुलना गरेर हेर्नुभएको छ । यसबाट तटस्थ समालोचकमा आवश्यक मानिने अध्ययन, विश्लेषण, तुलना, मूल्याङ्कन र निष्कर्ष निकाल्नुपर्ने गुण शरदकुमार भट्टराईमा रहेको देखापर्छ । प्रेमबद्ध क्रौञ्चपक्षीको विलापबाट द्रवीभूत शोक पद्यात्मक वाणीबाट व्यक्त भएपछि महर्षि वाल्मीकि संस्कृतका आदिकवि भए जस्तै कवि शाह पनि प्रियतमासँगको स्थायी वियोगबाट व्यथित भई प्रेम र करुणाका भावधारातर्फ अभिमुख भएको र मधुर स्मृतिबाट विह्वल बन्न पुगेको तर्क समीक्षकले उपस्थापन गर्नुभएको छ –

जुनिलो छाया, मायालु मेल म भन्न सक्तिनँ,
हातमा हात परेको बेला बिर्सिन सक्तिनँ ।

प्रतीक्षा प्रेमीका लागि महान् परीक्षाको घडी हुने र मिलनको प्रतीक्षा वा आशामा ऊ बाँचिरहने हुन्छ भन्दै समीक्षक भट्टराईले कवि शाह र

कवयित्री प्रेमराजेश्वरी थापाका कवितामा पनि यही भाव साम्यको बोध गर्न सकिने विचार व्यक्त गर्नुभएको छ । पूर्व र पश्चिम तथा प्राचीन र अर्वाचीन कविसाहित्यकारहरूका कृतिहरूबाट विविध प्रसङ्गहरू उद्धृत गर्दै तिनैका सापेक्षतामा कवि शाहका कविताहरूको अध्ययन र बहुआयामिक विश्लेषणद्वारा समीक्षक भट्टराईले तुलनात्मक पद्धतिको समेत अनुसरण गरेको पाइन्छ ।

कवि शाहका कवितालाई प्रेमसम्बन्धी भावनाका दृष्टिबाट अध्ययन र अनुशीलन गर्ने क्रममा समीक्षक भट्टराईले कविलाई सच्चारूपमा प्रेमका कवि भनेर निर्णय दिनु भएको छ । समीक्षकको निर्णयात्मक निष्कर्ष छ –

यस प्रकार कवि श्री एम्.बी.बी. शाहका कविताहरूमा पाइने प्रेमका लयालु ढुकढुकी र विरहजन्य हृदयद्रावक करुणात्मक अनुभूतिको अध्ययन गर्दा हामी यही निष्कर्षमा पुग्दछौँ कि उहाँ सच्चा रूपमा प्रेमका कवि हुनुहुन्छ । (पृ.५१–५२)

समीक्षकले अर्को ठाउँमा पनि यस्तै खाले निर्णय दिनुभएको छ – म उहाँलाई सर्वाधिक रूपमा प्रेमको कवि र प्रेमको गायक नै मान्दछु । (पृ.५३)

विवेच्य कृतिको दोस्रो अध्ययनको रूपमा आएको प्रेमात्मक अनुभूति शीर्षकको प्रेमसम्बन्धी कविताको विश्लेषणबाट समीक्षक भट्टराईले कवि शाहको हृदयतलसम्म पुगेर केन्द्रीय प्रवृत्तिलाई ठम्याउँदै गम्भीर एवम् अध्ययनशील समीक्षक व्यक्तित्व प्रकाशन गर्न सफलता प्राप्त गरेको पाइन्छ । यस सन्दर्भमा समीक्षकको भावयित्री प्रतिभा सफल र सार्थक बनेको छ । कवि शाहका गद्य र गीति शैलीका कविताले अभिव्यक्त गरेको उच्च र अमर प्रेमको निरूपण गर्न समीक्षक समर्थ हुनुभएको छ ।

प्रस्तुत कृतिको तेस्रो अध्ययन प्रकृति चित्रणमा आधारित छ । यो खण्ड कवि शाहका प्रकृतिप्रधान कविताहरूको समीक्षा र मूल्याङ्कन हो । यस खण्डमा परेका कविताहरूलाई प्रकृतिसम्बन्धी कविता पनि भन्न सकिन्छ ।

संसारका धेरै साहित्यमा प्रकृतिको चित्रण र वर्णन भएको पाइन्छ। कतै आलम्बन र कतै उद्दीपनका रूपमा प्रकृतिलाई वरण गर्ने परम्परा प्राचीन कालदेखि चलिआएको छ। वेदको उषः सूक्त नै प्रकृतिचित्रणको प्राचीन सुन्दर निदर्शन हो । त्यसपछि लौकिक साहित्य हुँदै यो परम्परा नेपाली साहित्यमा पनि प्रचलित हुन पुग्छ। कवि शाहले पनि नेपालका सुन्दर प्राकृतिक स्थान र परिवेशको जीवन्त चित्र उतारेका छन् । समीक्षकले कवि शाहका यस्तै प्रयोग र प्रवृत्तिका कविताहरूको अध्ययन र विश्लेषण यस खण्डमा गर्नुभएको छ।

कवि शाहको सूक्ष्म दृष्टि प्रकृतिका विभिन्न क्रियाकलापमा गएर परेको विचार समीक्षकले व्यक्त गर्नुभएको छ। कविले प्रकृतिलाई कतै शुद्ध प्रकृतिकै रूपमा र कतै आफ्ना सुख र दुःखको रङ्गमा रञ्जित भएर भावानुकूल बन्ने तत्त्वका रूपमा प्रस्तुत गरेको ठम्याइ समीक्षकको छ। 'तितरी पङ्खी' कविता प्रकृतिको बाह्य रूपरङ्ग प्रस्तुत गर्ने शुद्ध प्रकृति कविता हो भने 'आकाशका तिर्मिरे तारा' कविता कविको मानसिक अवस्थालाई प्रकृतिका विभिन्न रूप र क्रियाकलापहरू सँगसँगै राखेर व्यक्त गर्ने रचना हो भन्ने तर्कपूर्ण विश्लेषणले समीक्षकमा विद्यमान अन्तर्दृष्टि र तटस्थ मूल्याङ्कनको सामर्थ्य अवगत हुन्छ।

कवि शाहका प्रकृतिपरक कवितामा प्रकृतिको चित्रण मात्र नभएर राष्ट्रप्रेमको भावना सहकारी भएर आएको हुन्छ । यो एउटा प्रमुख विशेषता हो। समीक्षक भट्टराईले 'कसले भाऱ्यो तिमीलाई' शीर्षकको कवितामा रारातालको प्राकृतिक स्वरूप र सौन्दर्य वर्णन गरेर कविले राष्ट्रप्रेमको भावना समेत समन्वित गरेको धारणा व्यक्त गर्नुभएको छ। कविले सिङ्गो नेपाललाई प्रकृतिको भण्डारका रूपमा परिकल्पना गरेर यस्तो अभिव्यक्ति दिएको दृष्टिकोण अघि सार्दै समीक्षकले प्रमाणस्वरूप यी पङ्क्ति उद्धृत गर्नुभएको छ :

हेर हेर यही हो हाम्रो,
जन्मभूमि नेपाल आएर।

छैन कतै बनौटी स्वाँग,

प्रकृतिको यही छ भण्डार ॥

कवि शाहका कवितामा प्रकृति आकाशदेखि हिमालय, लेक र पहाडसम्म व्याप्त भएको पाइन्छ । त्यस्तै जुनेली र अँधेरी रात, साँझ-बिहान र विभिन्न ऋतुहरू पनि प्राकृतिक विषय बनेर आएका हुन्छन् । प्रकृतिका अरू पनि रूप र अवस्था हुन्छन् तर कविले नेपाली माटो र मुटुलाई छुने चित्र मात्र उतारेर एकातिर मौलिक प्रकृतिको वर्णन गरेका छन् भने अर्कोतिर त्यसैसँग राष्ट्रप्रेमको भावना पनि सम्पृक्त गराएका छन् भन्ने समीक्षकको अभिप्राय छ। कविको प्रकृतिप्रतिको सूक्ष्म निरीक्षणशक्ति र हृदयमा व्याप्त राष्ट्रप्रेमको भाव समेट्ने गरी गरिएको विश्लेषणबाट समीक्षकको कविता अनुशीलन गर्न सक्ने क्षमताको परिचय पाइन्छ।

समीक्षक भट्टराईले यो कृति प्रकाशित गर्नुभएको समय २०२७ सालमा एम्.बी.बी. शाह एक जना कवि मात्र थिएनन् राज्यसत्ताका सर्वोच्च शक्तिका रूपमा रहेका राजा पनि थिए । त्यस बेला नेपालको सार्वभौमिक, राजनीतिक लगायत सम्पूर्ण निर्णय गर्ने अधिकार राजामा मात्र थियो । त्यस बेला उनका कार्य र कदमलाई चुनौती दिने त परै जाओस्, सामान्य टिप्पणी गर्ने हिम्मत पनि कसैमा थिएन। त्यसैले उनका गीत र कवितामा अनुभव गर्न सकिने प्रत्यक्ष कमजोरी बारे पनि कोही बोल्दैनथे । यस्तो परिवेशमा प्रकाशित यस कृतिको प्रस्तुत अध्ययनको खण्डमा समीक्षक भट्टराईले 'तितरी पङ्खी' कविताको विश्लेषण गर्ने क्रममा यसका विशेषता देखाउँदै विशुद्ध साहित्यिक दुर्बलताको पनि सङ्केत गर्नुभएको छ । बाह्य रूपमा कविता राम्रो भए पनि यसमा अपेक्षित मात्रामा संवेदनशील अभिव्यक्ति हुन नसकेको भन्दै समीक्षकले यसरी टिप्पणी गर्नुभएको छ :

यसरी हेर्दा यो कविता बाहिरी वर्णनात्मक रूपमा राम्रो मान्ने पक्षमा पुग्छौँ तापनि मैले माथि भनेजस्तै कविको अन्तसमा भिजेर तदाकार

भई कविको ज्ञानात्मक वृत्तिमा मिली नसक्तै बाहिर कविताका रूपमा अभिव्यक्त भैसकेको हुँदा जति मात्रामा यसमा काव्यात्मक अभिव्यञ्जन हुनुपर्दथ्यो त्यति संवेदनशील अभिव्यक्ति हुन सकेन । (पृ.६३)

यस अभिव्यक्तिबाट कुन तथ्य सिद्ध भएको छ भने समीक्षक भट्टराई प्रशासन सञ्चालनका क्रममा सशक्त भएर कसैसँग डराउनु हुन्नथ्यो । त्यसै गरेर समालोचकको मानक धर्म अनुसार उहाँ व्यक्तिलाई निरपेक्ष मानी साहित्यिक कृतिको गुणदोष विवेक गरी प्रकाशन गरिदिनुहुन्छ । समालोचककै पृष्ठपोषण (Feed back) पाएर कुनै पनि साहित्यकार परिष्कृत, संशोधित र स्थापित हुने भएकाले समीक्षक भट्टराईको यस टिप्पणीले कवि शाहलाई काव्यपरिपाकका लागि सहयोग पुगेको मान्न सकिन्छ ।

कवि श्री एम्.बी.बी. शाहका कृतिहरू 'उसैको लागि' र 'फेरि उसैको लागि' एक अध्ययन कृतिको चौथो तथा अन्तिम अध्ययनको शीर्षक भक्तिवादी भावना हो । यसमा कवि शाहका भगवद्भक्तिसम्बन्धी कविताहरूको अध्ययन र विश्लेषण गरिएको छ । माथि चर्चा गरिएका तीन प्रकारका विषयवस्तुको तुलनामा ईश्वरभक्ति विषयका कविताहरू नगण्य सङ्ख्यामा भएका र यस्ता कविता कविको पहिलो कवितासङ्ग्रह 'उसैको लागि' मा मात्र भएको जानकारी समीक्षक भट्टराई दिनुहुन्छ । यति सानो जानकारी दिनका लागि पनि दुवै सङ्ग्रहका सम्पूर्ण कविता एक एक गरी विषयवस्तुका आधारमा छुट्ट्याएर समीक्षकले कष्टसाध्य र श्रमसाध्य अनुशीलन गर्नुपरेको बुझिन्छ । 'उसैको लागि' मा सङ्गृहीत कविताहरूको रचनाकालमा कविमा परेको पीडा र आघातबाट सच्चा अभिव्यक्ति बाहिर आएको सन्दर्भ उल्लेख गर्दै समीक्षक भट्टराईले स्वाभाविकताको प्रथम प्रस्फुटन नै कविको भक्तिवादी कविताको प्रथम काल भएको तर्क अघि सार्नुभएको छ ।

नेपाली साहित्यको भक्तिवादी कविताको इतिहासमा इन्दिरस, विद्यारण्यकेशरी, यदुनाथ, भानुभक्त हुँदै पछिसम्म पनि यस धराका

कविताले निरन्तरता पाएको ऐतिहासिक परिप्रेक्ष्य दर्साउँदै समीक्षकले कवि शाहका कवितामा भाषिक परिष्कारका साथसाथै सोचाइ, उपासना र स्तवनको परिपाटीमा पनि नवीनता आएको वस्तुसत्य उल्लेख गर्नुभएको छ। प्राथमिक कालका विशेषतः कृष्णभक्ति धाराका कवितामा रतिभावरञ्जित भक्तिको बाहुल्य पाइन्छ। यसलाई माध्यमिक कालीन पद्यविधाले नखशिखवर्णबाट पराकाष्ठामा पुऱ्यायो। भगवद्भक्तिभित्रको यही अभद्र प्रस्तुतिपछि उदाएका कवि शाहका भगवद्भक्तिभावका कवितामा चाहिँ शृङ्गारिकताको उच्छृङ्खल गन्धसम्म पनि नपाइने निष्कर्ष समीक्षक भट्टराईले यसरी प्रस्तुत गर्नुभएको छ :

श्री एम्.बी.बी. शाहका यी कविताहरूमा पाइने अर्को खास विशेषता हो – परम्परादेखि चलिआएको भक्तिवादी साहित्यमा पाइने शृङ्गारी उच्छृङ्खलपनाको आफ्ना कविताहरूमा गन्धसम्म पनि आउन नदिनु। (पृ.७५)

यसरी कवि शाहका कवितालाई ऐतिहासिक भक्तिवादी काव्यधाराका आलोकमा तुलनात्मक अनुशीलन गर्दै कविमा निहित भक्ति चेतनाको निरूपण गर्नुबाट समीक्षक भट्टराईमा विद्यमान सूक्ष्म र गहन अवगाहन गर्न सक्ने शक्ति र मेधाको प्रमाण पाउन सकिन्छ।

कवि शाहमा निहित भगवद्भक्ति र भारतीय भक्तिमती साहित्यसाधिका मीरामा पाइने भक्तिभावलाई पनि तुलनात्मक रूपमा हेरिएको छ। कवि शाह र मीराका बीच जीवनदर्शन, परिवेश, भूमिका आदि आधारमा प्रशस्त भिन्नता भए पनि दुवै जनाले भगवान्लाई सर्वात्मना आफ्ना शरण्य मान्दै प्रार्थना गर्नुबाट समानता अभिव्यञ्जित हुने समीक्षकको विचार छ। यसको पुष्टिका लागि कवि शाह र मीराका कविताका एउटाएउटा अंशलाई यसरी उद्धरण गरिएको छ :

भगवान्! मेरो तेरो सिवा छैन सहारा।
आधार मेरो तेरो सिवा छैन पराया॥ (शाह)

हरि मोरे जीवन प्राण आधार,
और आसरो नाही तुम विन...,
आप विना मोहि कछु न सुहावे ...॥ (मीरा)

भगवान्‌लाई धर्मग्रन्थ, दर्शन, साहित्य लगायतका वाङ्मयले अनेक रूपमा चिनाउने प्रयास गरेका छन् । भगवद्‌तत्त्वबारे साधु, सन्त र तत्त्ववेत्ता त्रिकालदर्शी महात्माहरूका पनि आ-आफ्नै व्याख्या र वर्णन छन् । जुन रूपका भए पनि भगवान्‌लाई कवि शाहले बालसुलभ शैलीमा खोजी गरेका छन् भन्दै समीक्षक भट्टराईले निम्न लिखित उद्धरणबाट आफ्नो कथनको पुष्टि गर्नुभएको छ –

नाथ विना अर्को यहाँ खोजूँ हरे कहाँ,
पाइन दर्शन तिम्रो अझै भन्दै जाऊँ कहाँ ?
हात जोडी बिन्ति गर्छु खोजूँ भनन कहाँ,
जपमा या तपमा मूर्तिमा या देहमा,
पुरुष या नारीमा भनन छौ कहाँ ?

समीक्षक भट्टराई वेदान्तका विद्यार्थी, चिन्तक, लेखक र अभ्यासी व्यक्ति हुनुहुन्छ । त्यसैले वेदान्त विषयको खोजी, अनुशीलन र प्रकाशन गर्नु उहाँको रुचि र अधिकारको विषय हो । कवि शाहका भक्तिवादी कविताहरूलाई उहाँले उपनिषद्‌दर्शनको प्रभावबाट पनि पर्यवेक्षण गर्नुभएको छ । कवि शाहको निम्नलिखित कवितांशमा महावाक्य ‘ तत्त्वमसि’ को स्पष्ट झल्को पाइन्छ भन्ने समीक्षकको दृष्टिकोण छ –

म हूँ तिमी, तिमी मै हूँ,
न जानूँ भन्न तँ र म,
न जाने के कसुर पाई धपायौ सर्वशक्तिमान् ॥

नेपाललाई आफ्ना सन्तान थरी थरी नदेख्ने, एकैथरी देख्न चाहने आमाका रूपमा वर्णन गर्ने कवि शाहले सम्पूर्ण चराचरमा अभेद

दृष्टि राख्दै भक्तिवादी कवितालाई मानवतावादबाट उत्प्रेरित सिर्जना बनाएको तर्क पनि समीक्षक भट्टराईले यस खण्डको अध्ययनमा प्रस्तुत गर्नुभएको छ ।

श्रीमद्भगवद्गीतामा श्रीकृष्णले साधुहरूको रक्षा र दुष्टहरूको विनाशका लागि समयसमयमा आफुले अवतार लिने घोषणा गरेका छन् –

परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।
धर्मसंस्थापनार्थाय सम्भवामि युगे युगे ॥

यसैको प्रतिच्छवि कवि शाहको निम्नलिखित कवितांशमा बिम्बित भएको तुलनात्मक विचार समीक्षक भट्टराईले व्यक्त गर्नुभएको छ ।

पालक तिमी हौ भक्तहरूको ।
संहारक पनि दुष्टहरूको ॥

कवि शाहका भक्तिवादी कविताहरूको अध्ययनको पर्यवसानमा समीक्षकले उनका कुनै पनि कविता सम्प्रदायका सङ्कुचित घेराभित्र सीमित हुन नपुगेको निचोड निकाल्नु भएको छ । कविले भक्तिभावको अभिव्यक्तिमा समन्वयवादी सिद्धान्त अवलम्बन गरेका छन् भन्ने समीक्षकको मूल्याङ्कन छ ।

विवेच्य कृतिको प्राक्कथनमा समीक्षकले कवि शाहले साहित्यका सम्बन्धमा व्यक्त गरेका विभिन्न विचारलाई समावेश गर्नुभएको छ । यी विचारको स्रोत सामग्रीका रूपमा 'स्रष्टा र साहित्य' को उल्लेख गरिदिएर कवि शाहका साहित्यविषयक विचारको अन्वेषण र अनुसन्धान गर्ने व्यक्तिका लागि समीक्षकले पुस्तक निकै उपयोगी बनाउनुभएको छ । आफुले अध्ययन गर्न चाहेका चार आधारहरूलाई पुट दिने कवि शाहका सान्दर्भिक विचारहरूको उल्लेख गरेर समीक्षकले कृतिको संरचनापक्षलाई प्रामाणिक एवं तारतम्यपूर्ण बनाउनु भएको देखिन्छ । यसले समीक्षकको कृति लेखनका लागि मानसपटलमा उत्पन्न संरचनाको रूपरेखालाई प्रकाशित गरेको पाइन्छ ।

प्रस्तुत कृतिलाई प्रकाशनकाल (२०२७) को सन्दर्भबाट हेर्नुपर्ने हुन्छ। त्यस बेला नेपाली साहित्यका सीमित र स्थापित केही रचनाहरूको मात्र समीक्षा भएको थियो । नेपाली समालोचनाका मूल्य र मानकहरू अद्यापि राम्ररी स्थापित भइसकेका छैनन् र भएका पनि निर्विवाद छैनन् भने त्यस बेला समालोचनाको बहुपक्षीय अभ्यास नहुनु स्वाभाविकै थियो । फेरि समीक्षकको पेसा नेपाली साहित्य पढ्ने पढाउने नभएर सरकारी जागिर थियो । त्यहाँ सिर्जनात्मक लेखनभन्दा कानुनी र प्रशासनिक वस्तुवादी लेखन प्रचलित हुन्छ। त्यस्तो प्रतिकूल अवस्थामा पनि कवि शाहका कविता एवं गीतहरूका दुई ओटा सङ्कलनको सम्यक् अनुशीलन गरी व्यक्तिगत प्रयासबाट समीक्षाग्रन्थ प्रकाशन गर्नु यसै पनि प्रेरक कार्य हो। दुवै सङ्ग्रहका कविताहरूलाई मूलतः चार आधारबाट अध्ययन एवं विश्लेषण गरेर विभिन्न भाषा, काल र प्रतिभाहरूका रचना एवं प्रवृत्तिहरूसँग तुलना पनि गर्दै निष्कर्ष दिन सक्ने समीक्षक भट्टराईको योगदान अविस्मरणीय छ । देशका सर्वाधिक शक्तिशाली व्यक्तिका रचनामा खट्किने दुर्बल पक्षको समेत उद्घाटन गरेर उहाँले निर्भीक तर बौद्धिक व्यक्तित्वको परिचय दिनुभएको छ। प्रस्तुत समीक्षा ग्रन्थले कवि शाहको समग्र कविव्यक्तित्वको वस्तुगत विश्लेषण र निष्पक्ष मूल्याङ्कन गरेको छ।



# ऋतुमन्थन २०४४ का भूमिकाबाट

[ नेपाली साहित्यका प्रसिद्ध आधुनिक कवि मोहन कोइरालासँग नेपाली साहित्यका विज्ञ पाठकहरू सुपरिचित नै हुनुहुन्छ । उहाँले धेरै समयदेखि नेपाली साहित्यलाई समृद्ध गराउन जसरी पसिना बगाउनु भएको छ, त्यसबाट नेपाली साहित्यको फाँट अत्यन्त उर्वर भएको छ । उहाँले आफ्नो रुचिपूर्ण शैलीमा लेखिएका गद्य कविताका माध्यमबाट नेपाली जनतालाई जागरुक गराउने काम अवश्य गर्नुभएको छ । तर उहाँका कविताहरू सर्वसाधारण पाठकका लागि के कति संप्रेषणीय भएका छन्, सोच्नुपर्ने विषय जस्तो लाग्छ । उहाँले केवल केही शिक्षित एवं जागरुक नेपाली साहित्यका पाठकलाई मात्र ध्यानमा राखेर आफ्ना कविताको रचना गर्नुभन्दा सर्वसाधारण नेपाली साहित्यका पाठकलाई पनि हुने गरी कविता अझ बढी जोसका साथ लेख्नुहुने आशा अझै पनि हामी नेपाली साहित्यका पाठकले गर्नु कुनै अर्घेल्याई गरेको ठहरिने छैन ।

मेरो धेरै दिनदेखिको कवि मोहन कोइरालाका सम्बन्धमा रहेको जिज्ञासा र उनका कविता प्रतिको आकर्षण उनको नयाँ कृति 'ऋतुनिमन्त्रण र गरलपान' भन्ने काव्यले झन् बढायो । यसै जिज्ञासाले नै यसको यो संक्षिप्त विवेचनाको जन्म भयो पनि । उनका आजसम्म प्रकाशित सबै कृतिहरूमध्ये यो उत्तम कृति हो भन्ने मेरो धारणा रहेको छ । मैले सबैभन्दा राम्रो भन्दैमा सबै पाठकले राम्रो मान्नै पर्छ भन्ने केही छैन । तर सहृदयी पाठकले भने अवश्य नै राम्रो मान्नु हुनेछ भन्ने मेरो विश्वास छ ।

जेहोस्, यो सानु विवेचनाको जन्म विना कारण भएको छैन । विना उद्देश्य कसले पाइला चाल्ने ? विना कारण यसको पनि जन्म भएको छैन भने विना कारण ऋतुनिमन्त्रण पनि भएन होला । यसै कारण नै कवि मोहन कोइराला ऋतुनिमन्त्रण काव्यको प्रथम पङ्क्तिमा नै यो कुराको उद्घोषणा गर्दछन् –

"कारण विना उठ्दैनन् छालहरू, कारण विना हल्लिँदैनन् पातहरू।"

पौराणिक कालका महाकवि महर्षि वेदव्यासले समुद्रमन्थनको प्रसङ्गमा कालकूट विषको उद्भव पनि अमृतको पनि मूल फुटाउनु भएको थियो भने हाम्रा आधुनिक कवि कोइरालाले भने आफ्नो ऋतुमन्थनपछि नेपाली साहित्यका पाठकहरूलाई गरलपान गराएर काव्यको समाप्ति गर्नुभएको छ । पाठकहरूले यसपछि पीयूषपान गर्ने आशा गर्नु के अर्घेल्याई ठहर्ला त ?

यस विवेचनामा कवि मोहन कोइराला, कविशिरोमणि लेखनाथ पौडेल, समालोचक डा. ईश्वर बराल लगायत अरू लेखक समालोकहरूका जे जति कविता वा लेखका अंशहरू उद्धरण गरिएका छन्, ती सबै नै उहाँहरूका आफ्ना व्याकरण र लेखाइ अनुसार जस्ताका तस्तै उद्धरण गरी समयमा समावेश गरिएको कुरा पनि पाठक वर्गमा निवेदन गर्दछु। ]

# ऋतुमन्थन २०४४

समीक्षक शरदकुमार भट्टराईको दोस्रो समालोचनात्मक कृति 'ऋतुमन्थन' हो । श्रीमती इन्दिरा भट्टराईद्वारा २०४१ सालमा प्रकाशित यो कृति पाँच ओटा खण्डभित्र पाँच शीर्षकमा समेटिएको छ। यी पाँच खण्डभित्र आधुनिकताको अर्थका साथै प्रमुख आधुनिक प्रयोगवादी कवि मोहन कोइरालाको कविव्यक्तित्वका विषयमा चर्चा गरिएको छ र उनको 'ऋतुनिमन्त्रण' कविताको विभिन्न आधारमा सूक्ष्म विश्लेषण गरिएको छ । यस कृतिको केन्द्रीय विषय कवि कोइरालाको 'ऋतुनिमन्त्रण' कविताको कविशिरोमणि लेखनाथ पौड्यालको 'ऋतुविचार' खण्डकाव्यसँग गरिएको तुलना नै हो । विषयवस्तुको प्रतिपादनका दृष्टिले हेर्दा पहिलो, दोस्रो, तेस्रो र पाँचौँ खण्डलाई सहायक खण्ड र ' ऋतुनिमन्त्रण' को विस्तृत चर्चा र तुलना भएको चौथो खण्डलाई प्रधान खण्ड मान्न सकिन्छ। कृतिको 'ऋतुमन्थन' भन्ने शीर्षक पनि यही चौथो खण्डको विषयवस्तुलाई केन्द्रमा राखी निर्धारण गरिएको देखिन्छ।

कवि मोहन कोइरालालाई आधुनिक कवि मानिएको सन्दर्भमा सर्वप्रथम समीक्षक भट्टराईले प्रस्तुत कृतिको पहिलो खण्डमा आधुनिकता र आधुनिक कवितालाई विभिन्न विद्वानूहरूका अवधारणा र आफ्नै दृष्टिकोणका आधारमा चिनाउने प्रयास गर्नुभएको छ । आधुनिकता समयसापेक्ष विषय र व्यक्तिसापेक्ष विचारमा निर्भर हुने भएकाले यसलाई ठोस रूपमा चिनाउन निकै जटिल छ । यस सन्दर्भबाट हेर्दा मोहन कोइरालाका कवितालाई आधुनिक कविता र उनलाई आधुनिक कविका रूपमा स्थापित गर्नु पनि सहज कार्य मान्न सकिँदैन । तर समीक्षक भट्टराईले विभिन्न साहित्यकार एवं समालोचकहरूका अर्थलाई पृष्ठभूमिमा राख्दै परम्पराविरोधी, धर्मविरोधी, जीवनवादी, नवचेतनायुक्त, स्वच्छन्दतावादी, क्रान्तिकारी, पाश्चात्त्यधारणाका अभिव्यञ्जक, वैज्ञानिक र अन्तर्राष्ट्रियवादका समर्थक कवितालाई आधुनिक मान्न सकिने विचार व्यक्त गर्नुभएको छ ।

आधुनिक कविता एकातिर स्पष्टवादी, निश्छल र आलस्यरहित हुन्छन् र यिनले सामाजिक, राजनीतिक, आर्थिक एवं शैक्षिक जीवनका बहुआयामिक पक्षलाई अँगाल्दछन् भने अर्कातिर यिनमा दुर्बोधता, पलायनवादिता, राजनीतिक नारा, लाञ्छना, धम्की, वितण्डा एवम् अशक्तता अत्यधिक मात्रामा पाइने भएकाले यस्ता कविता पूर्ण र समग्र हुन नसकेको तटस्थ चिन्तन पनि प्रस्तुत गर्नुभएको छ । आधुनिकताका नाममा कविका अल्पज्ञता र दुर्बलतालाई लुकाउँदै आफुभन्दा पूर्ववर्ती कविहरूको अपमान, अवमूल्यन र तिरस्कार गर्ने परम्परागत मूल्यमान्यतालाई बुझ्न प्रयास नगर्ने तथा थोत्रा पाश्चात्त्य मान्यतालाई नै आधुनिकताका सूचक मान्ने प्रवृत्ति आधुनिक नभएको स्पष्ट दृष्टिकोण समीक्षकले राख्नुभएको छ । यसरी आफ्नो पुरानो वा नयाँ केही पनि नराम्रो र थोत्रो मान्ने तर पश्चिमाहरूको जे पनि राम्रो र आधुनिक मान्ने प्रवृत्तिका विपक्षमा तर्क गर्दै समीक्षकले समन्वयवादी चेतना नै आधुनिकताको परिसूचक भएकाले मोहन कोइरालालाई पनि यसै सन्दर्भबाट आधुनिक

कविका रूपमा मान्न सकिने अभिप्राय व्यक्त गर्नुभएको पाइन्छ । पहिलो खण्डबाट समीक्षक भट्टराईले कवि कोइरालाका कवित्वको आधुनिकता पर्गेल्ने र त्यसैबाट उनको 'ऋतुनिमन्त्रण' को तुलनात्मक विश्लेषण गर्ने पृष्ठभूमि निर्माण गर्नुभएको छ ।

कृतिको दोस्रो खण्डमा समीक्षक भट्टराईले आफुलाई सोझै समालोचकका रूपमा देखाउन नचाही कवि कोइरालाका कविताको समीक्षा गर्ने पृष्ठभूमि मात्र अघि सार्नुभएको देखिन्छ । यसमा कवि कोइरालाका विषयमा विभिन्न समालोचकहरूले गरेको सङ्क्षिप्त टिप्पणी प्रस्तुत गरिएको छ र यसलाई समीक्षकले आफ्नो मौलिक समीक्षाधर्मिताको पूर्वपक्षका रूपमा राख्नुभएको छ। जल्प र वितण्डाबाट मुक्त भई स्थिरवाद वा सिद्धान्तको स्थापनाका लागि पूर्वपक्ष र उत्तरपक्षको तुलना गर्नुपर्ने पूर्वीय विमर्शन एवम् विश्लेषण पद्धतिबाट समेत उत्प्रेरित समीक्षक भट्टराईले यस खण्डलाई एक किसिमले पूर्वपक्षकै रूपमा समावेश गर्नु भएको देखिन्छ। यस क्रममा स्थापित समालोचकहरू डा. ईश्वर बराल, अभि सुवेदी, वासुदेव त्रिपाठी र कुमारबहादुर जोशीदेखि लिएर उदीयमान समालोचक रमेश श्रेष्ठसम्मका विद्वान्हरूले कवि कोइरालाको कवित्व र कृतित्वका विषयमा व्यक्त गरेका विचारहरू उल्लेख गरिएका छन् ।

त्यसपछि समीक्षक भट्टराईले कविताको विषय र प्रस्तुतिलाई आधार बनाई कवि कोइरालाका विशेषताको निरूपण र कमजोर पक्षको सङ्केत गर्नुभएको छ । रोमान्सवाद र प्रगतिवादको संयोजन, प्रकृतिप्रेम, भावुकता, सौन्दर्यचेत, यथार्थवाद, आनुप्रासिक पदयोजना, सङ्क्रान्तिकालीन सामाजिक विसङ्गति, बिम्ब प्रतीकको आयोजना आदि विशेषता हुन् भने दुर्बोध्यता, व्याकरणिक विचलन, विचारको विशृङ्खलता आदि कमजोर पक्ष हुन् भन्ने उहाँको धारणा छ। वर्तमान कालका कविमा अनेकौँ जटिल ज्ञान र विषयको प्रभाव पर्ने र ती सबैसँग साधारण पाठक परिचित नहुने भएकाले उनीहरूका कविता जटिल हुने

तार्किक विश्लेषण गर्दै समीक्षक भट्टराईले कवि कोइराला कतिसम्म बोध्य बने भन्ने कुरा भविष्यले निर्धारण गर्ने निष्कर्ष निकाल्नुभएको छ। यस खण्डमा कोइरालालाई समग्र कविव्यक्तित्वका रूपमा हेर्दै उनका विशेषता र दुर्बलतको यथार्थ देखाइएको पाइन्छ।

'ऋतुमन्थन' को तेस्रो खण्डको 'कवि मोहन कोइराला आफ्नै दृष्टिमा' शीर्षकको समीक्षामा समसामयिक साहित्य र आफ्नै रचनाका बारेमा कवि कोइरालाले व्यक्त गरेको दृष्टिकोणको चर्चा गरिएको छ। यसमा कवि कोइरालाले जनआस्थाका नाममा झन्डा बोकेर हिँड्ने जनवादी साहित्य बदनाम मात्र हुने भएकाले स्वस्थ, उपलब्धिपूर्ण, मनोरञ्जन दिन समर्थ, स्पष्ट र चिन्तनशील साहित्य मात्र वास्तविक साहित्य हो भन्ने विचार व्यक्त गरेको प्रसङ्ग उल्लिखित छ। जनसाहित्यका नाममा देशका सारा उपलब्धिलाई धराशायी बनाउनु नहुने तर्क पनि कविले अघि सारेको सन्दर्भलाई यहाँ देखाइएको छ। कवि कोइरालाले २००६ सालदेखि २०१७ सालसम्मको झन्डै एक दशकको अवधिमा प्रकाशित 'शारदा', 'इन्द्रेनी', 'धरती' आदि पत्रिकाले आफ्नो कवितायात्राको प्रारम्भ गरेको पृष्ठभूमि केलाउँदै अहङ्कारबाट मुक्त कवि, रङ्गकार, सङ्गीतकार र मूर्तिकारले मात्र राम्रो कलाको रचना गर्न सक्छ भनेर गरेको टिप्पणीलाई समीक्षकले विश्लेषणात्मक रूपमा प्रस्तुत गर्नुभएको छ। यसै खण्डमा कवि कोइरालाले आफ्ना कविताका बारेमा प्रकट गरेको धारणालाई उत्तम कुँवरले पनि प्रस्तुत गरेको प्रसङ्ग उल्लेख गरिएको छ। यसमा कविले गद्य कविताको पक्ष लिएको र छन्दप्रति चाहिँ पूर्वाग्रह देखाउन खोजेको सङ्केत पाइने तर्क पनि गरिएको छ। साथै साहित्यलाई कुनै 'वाद' का आधारमा नहेरी विशुद्ध साहित्यिक दृष्टिबाट मात्र मूल्याङ्कन गर्नुपर्छ भन्ने मान्यताको उपस्थापन भएको विचार पनि समीक्षकले व्यक्त गर्नुभएको छ।

आफ्नो तर्क र विचारलाई प्रमाणका आधारमा पुष्टि गर्ने पद्धतिको अवलम्बन गर्नु समीक्षक भट्टराईको विशेषता हो। यस खण्डमा पनि

यो विशेषता प्रतिबिम्बित भएको छ । कवि कोइरालाले आफ्ना 'गङ्गाप्रवास', 'हिमचुली रक्तिम छ', 'नदी किनाराका माझी' जस्ता सिर्जनात्मक रचना तथा 'कविताबारे केही चर्चा' शीर्षकको समीक्षात्मक कृतिमा आफ्ना कविता, आधुनिक कविता र गद्य एवं पद्य शैलीका कविताबारे गरेको चर्चालाई समीक्षक भट्टराईले उद्धरणसहित प्रस्तुत गरेर कविको आत्ममूल्याङ्कनको स्तरलाई देखाउनु भएको छ। यसले कवि कोइरालालाई समीक्षकहरूका दृष्टिबाट मात्र नबुझी उनकै दृष्टिबाट पनि बुझ्ने अवसर पाठकहरूका लागि प्राप्त भएको छ। मोहन कोइराला गद्य र पद्य कविताको तुलना गर्न पनि प्रयास गर्ने कवि हुन् भन्ने तथ्यको प्रकाशन यहाँ भएको छ । कवि कोइरालाले आफ्नै कविताहरूबारे लेखेका भूमिका र आधुनिक कविताबारे व्यक्त गरेको विचारलाई समाहित गर्दै समीक्षक भट्टराईले निकालेको निम्नलिखित निष्कर्ष निकै मननीय छ – ... उहाँ केवल एक कविमात्र नभएर तीक्ष्ण प्रत्युत्पन्न मति भएका समालोचक वा विवेचकका रूपमा देखिनुहुन्छ । उहाँमा एक प्रतिभाशाली कवि एवं विचक्षण समालोकमा हुने गुणहरू समेत सन्निवेश भएका छन् भन्नु अत्युक्ति हुने छैन। (पृ.२६–२७)

यस निष्कर्षबाट अर्को के निष्कर्ष निकाल्न सकिन्छ भने कवि कोइरालाकै दृष्टिमा पनि उनका कविताको आधुनिकताको वरण गरेका छन् र कुनै पनि वादका व्याख्याता र अनुयायी नभई काव्यकलागत मूल्यको स्थापना गरेका छन् भन्ने समीक्षक भट्टराईको चिन्तन सारपूर्ण र वस्तुगत बन्न पुगेको छ।

प्रस्तुत कृतिको केन्द्रीय विषयमाथि चर्चा गरेझैँ चौथो खण्डमा समाविष्ट कवि कोइराला र उनको 'ऋतुनिमन्त्रण' काव्यको विस्तृत विश्लेषण र मूल्याङ्कन हो। यस काव्यको रचनाको कारण, प्रेरणास्रोत र दार्शनिक पक्ष काव्यकै भूमिकाबाट अवगत हुन सक्ने भन्दै समीक्षकले त्यहीँबाट विभिन्न उद्धरणहरू प्रमाणका रूपमा प्रस्तुत गर्नुभएको छ । ' ऋतुनिमन्त्रण' ऋतुको विश्वजनीन परब्रह्मवत् भूमिका देखाउन कति सक्षम भयो भनेर पाठकहरूले नै नीरक्षीर (दूध र पानी) को भेद छुट्ट्याउनुपर्ने

दायित्व काव्यकारले दिएका छन् भन्ने समीक्षकको मान्यता छ।

'ऋतुनिमन्त्रण' को विश्लेषणका क्रममा समीक्षक भट्टराईले एकातिर यसको भाव, विचार, दर्शन र कलापक्षलाई पर्गेल्न खोज्नुभएको छ भने अर्कातिर कवि स्वयंले आफ्नो काव्यलाई कविशिरोमणि लेखनाथ पौड्यालको 'ऋतुविचार' सँग तुलना गर्न खोजेको प्रसङ्गलाई आधार मान्दै दुवै कृतिको तुलनात्मक अध्ययन पनि गर्नुभएको छ। दुवै कृतिले ऋतुलाई केन्द्रीय वर्ण्य विषय बनाएका भए पनि कवि कोइरालाले गद्य शैलीद्वारा ६ ओटै ऋतुहरूको मनोमय चित्र उतारेको तर लेखनाथले पद्य शैलीद्वारा यिनको बाहिरी रूप र रङ्ग सुन्दर ढङ्गबाट उतारेको वस्तुवादी अवधारणा समीक्षकको छ। ऋतुहरू र जीवनबीचको सम्बन्ध निर्देशन र कविको ऋतुहरूप्रतिको संवेदनाका दृष्टिबाट लेखनाथभन्दा पनि मोहन कोइराला अग्रणी रहेको तथा काल्पनिक शक्ति पनि कोइरालामै अधिक भएको विश्लेषण यहाँ भएको छ। कोइरालामा ऋतुहरूप्रति अन्तर्दृष्टि बढी सशक्त रहेको र त्यसले दार्शनिक उचाइसमेत प्राप्त गरेको तथ्यलाई समीक्षक भट्टराईले निम्नलिखित उद्धरणबाट पुष्ट पार्नुभएको छ –

कारण विना उठ्दैनन् छालहरू।<br>
कारण विना हल्लिँदैनन् पातहरू॥

कवि कोइरालामा साङ्ख्यदर्शन र गीतादर्शनको प्रभाव र प्रेरणा परेको तर्क गर्दै समीक्षकले ऋतुहरूको नियमित गतिचक्रलाई सङ्केत गरेर कवि कोइरालाले पूर्वजन्म र पुनर्जन्मको अस्तित्वमा आस्था राखेको अभिप्राय व्यक्त गर्नुभएको छ।

प्रस्तुत खण्डमा समीक्षकले प्रमाण उद्धरण गरेर तुलना गर्ने र आफ्नो निष्कर्ष निकाल्ने प्रवृत्तिको प्रकाशन गर्नुभएको छ। लेखनाथले 'ऋतुविचार' मा ऋतुहरूको वर्णन वसन्त ऋतुबाट प्रारम्भ गरेका छन् भने कवि कोइरालाले 'ऋतुनिमन्त्रण' मा हेमन्तबाट यो उपक्रम अघि बढाएका छन् भन्ने यथार्थ देखाई लेखनाथले हेमन्तलाई भयङ्कर रूपमा र कोइरालाले शान्त, सुन्दर र समृद्ध रूपमा देखाएको तुलनात्मक प्रस्तुति यहाँ भएको छ –

मैलो दुर्गुणको थैलो त्यो हेमन्त भयङ्कर ।
देखेर डरले भागी शरद्बाला दिगन्तर ॥  (लेखनाथ)
पहेँलेपुर धानका बाला लागेको छ,
माटोसरि खेतमा बाली छ,
धरती प्राणमय बनेको छ,
अन्नमय बनेको छ उज्यालाहरू ।

चेलीबेटी पीङमा देखिन्छन् ओठमा मुस्कान लिएर – अन्नपूर्णाको मन्दिर खलिहान बनेको छ । (कोइराला)

हेमन्तलाई हेर्ने दृष्टिकोणमा दुई कविमा भिन्नता मात्र छैन, समानता पनि छ भन्ने समीक्षकको धारणा छ । दुवै कविले धानको दाइँ गरेको खेतमा पहेँलपुर धान भएको र भकारीमा धान भरेर किसानहरू सुखी बनेको वस्तुगत वर्णन गरेका छन् भन्दै दुवै कविका काव्यलाई अन्वय र व्यतिरेकका आधारमा सूक्ष्म निरीक्षण गरिएको पाइन्छ ।

वसन्त ऋतु र त्यसमा पनि विशेषतः चैत्र महिनालाई माधुमास भन्ने लोकप्रसिद्धि छ र काव्यकलाका क्षेत्रमा पनि यसैलाई अनुसरण गरिएको पाइन्छ । तर धनधान्य दिने र विपन्न किसानलाई सुखी र सम्पन्न बनाउने भएकाले कवि कोइरालाले हेमन्त वा मंसिर महिनालाई पनि मधुमास भनेको र त्यसैबाट ऋतु वर्णन पनि प्रारम्भ गरेको तर्क समीक्षकको छ । साहित्यको व्यङ्ग्यार्थसम्म पुगेर अनुशीलन गर्ने र साहित्यकारको अन्तस्तलको मनोभावलाई प्रकाशन गर्ने गम्भीर भावयित्री प्रतिभा भएकै कारणले समीक्षकले दुवै कविका कथ्यलाई तार्किक, प्रामाणिक र औचित्यपूर्ण बनाएर प्रस्तुत गरेको देखिन्छ ।

दुवै कविले वर्ण्य विषयका रूपमा आएका ऋतुहरूको मानवीकरण गरेका छन् । त्यसप्रति पनि सिमीक्षकको नजर गएकै छ । ढल्कँदो शिशिर र उदाउँदो वसन्तको वर्णन गर्ने क्रममा दुवै कविले शिशिरलाई युद्धमैदानबाट पलायन हुँदै गएको वा त्यही ढलेको र वसन्तलाई त्यही

मैदानमा प्रवेश गरेको योद्धाका रूपमा परिकल्पना गरेका छन् भन्ने समीक्षक भट्टराईको सुन्दर टिप्पणी छ। यसबाट एउटै विषयलाई अनेक आधार र मूल्यहरूबाट बहुपक्षीय विश्लेषण गर्ने समीक्षकको प्रवृत्ति प्रकाशित भएको पाइन्छ।

लेखनाथ र कोइराला दुवैले शरद ऋतुलाई पनि भिन्नभिन्न स्वरूपमा बुझेको, देखेको र वर्णन गरेका प्रसङ्ग समीक्षकले उल्लेख गर्नुभएको छ। लेखनाथले शरदलाई मालिक्नी जस्ती ठानेका छन् भने कोइरालाले ओभानो सिउँदो भएकी कुमारी जस्ती मानेका छन् भन्ने अभिव्यक्तिलाई निम्नलिखित उद्धरणद्वारा पुष्ट पारिएको छ –

वर्षा जाँगरिली दासी धोई पोती लिपी चली।
शरद् मालिकिनी जस्तै गर्न थाली ढली मली॥ (लेखनाथ)

ओभानो सिउँदो छ, कौमार्य ऋतुको शान्त प्रभा, घाम छाया परेको छ। (कोइराला)

यसरी नेपाली साहित्यका परिष्कारवादी धारा र प्रयोगवादी धाराका दुई जना स्थापित कविका दुई ओटा चर्चित काव्यलाई विभिन्न दृष्टिकोणबाट हेरी ऋतुहरूको आगमन, गमन र प्रत्यागमनको नियमित एवम् स्वाभाविक चक्रलाई देखाउन खोजिएको छ भन्ने समीक्षकको विश्लेषण छ। यो प्रकृतिको विचित्र लीला हो र सृष्टिमा अनवरत चलिरहन्छ भन्ने सन्देश 'ऋतुनिमन्त्रण' ले प्रवाहित गरेको छ भन्ने निष्कर्ष निकाल्दै समीक्षक भट्टराईले 'ऋतुविचार' ले पनि प्रकृतिको बाह्य रूप र अवस्थाको अङ्कन गर्न सकेको विचार अभिव्यक्त गर्नुभएको छ। दुवै कविले जीवन र प्रकृति बीचको सम्पृक्त सम्बन्धलाई आआफ्नै भाव र शैलीमा दर्साएका भए पनि कवि कोइरालाका प्रकृतिप्रतिको संवेदना र कल्पना अधिक अनुभव गर्न सकिने मूल्याङ्कन यहाँ भएको छ।

पाँचौ खण्डको शीर्षक 'निष्कर्ष' हो। यसमा 'ऋतुनिमन्त्रण' का सम्बन्धमा गरिएको अध्ययनको सार प्रस्तुत गरिएको छ। कवि कोइरालाको

प्रस्तुत कृतिले २०१७ सालपछि नेपाली कविताको प्रयोगवादी धारामा व्याप्त प्रवृत्तिहरूको प्रकाशन गरेको छ भन्ने समीक्षकको ठहर छ । यस बाहेक समकालीन विश्वमा शान्तिको अझ बढी आवश्यकता भएको यथार्थतालाई पनि कविले आत्मसात् गरेको विचार यस खण्डमा पाइन्छ।

कवि कोइरालाको 'ऋतुनिमन्त्रण' को अन्तमा 'गरलपान' शीर्षकको लामो गद्य कविता पनि समावेश भएको छ। गरलपान अर्थात् विषपानलाई ऋतुको वर्णनमा जोड्नुको औचित्य के हो भन्ने स्वाभाविक प्रश्न उठ्न सक्छ । यसलाई समीक्षक भट्टराईले युक्ति र युक्त रूपमा चर्चा गरेर पाठकको जिज्ञासाको शमन गरिदिनु भएको छ । वर्तमान विश्वको आसुरी शक्तिको परिशमन, शस्त्रास्त्रको प्रतिस्पर्धाको समाप्ति र आकुलव्याकुल वातावरणको निर्माणका लागि भगवान् शङ्करले कालकूट विषपान गरेजस्तै गर्न सक्ने महापुरुषको आवश्यकता देखाउन कविले यो शीर्षक राखेका हुन् भन्ने समीक्षकको जुन तर्क छ त्यो औचित्यपूर्ण नै छ। आजको संसारमा विषको पान गर्ने भन्दा विस्तार गर्ने प्रवृत्ति बढ्दै गएकोले त्यसको परिणामप्रति चिन्तित भई कविले ऋतुवर्णनसँगै यो कविता पनि समावेश गरेका हुन् भन्ने तर्क निकै सबल र सामयिक छ।

यसरी कवि मोहन कोइरालाको 'ऋतुनिमन्त्रण' काव्यलाई पूर्वापर प्रसङ्गहरूको उपस्थापनद्वारा विभिन्न दृष्टिकोणबाट हेरी यसको विषयगत र कलात्मक मूल्यको निरूपण यस समीक्षाकृतिमा भएको छ। बुझ्न र अर्थ्याउन जटिल मानिने प्रयोगवादी काव्यको चयन गरी यसका विभिन्न ग्रन्थि र व्यङ्ग्यार्थलाई सरल भाषाशैलीद्वारा प्रकाशन गर्नु बहुमुखी व्यक्तित्व भट्टराईको बौद्धिक सफलता मान्न सकिन्छ।

समीक्षक भट्टराईले यी दुई ओटा समीक्षात्मक कृतिका अतिरिक्त 'चिसो चूह्लो : एक परिशीलन' शीर्षकमा नाटककार एवं महाकवि बालकृष्ण समको प्रयोगधर्मी महाकाव्य 'चिसो चूह्लो' को पनि समीक्षा गर्नुभएको छ। यसमा महाकाव्यका पौरस्त्य एवं पाश्चात्य मानकहरूका आधारमा 'चिसो चूह्लो' महाकाव्यत्वको परीक्षण गरिएको छ ।

साहित्यकार सम उच्च बौद्धिक व्यक्तित्व र सफल नाटककारका रूपमा स्थापित भए पनि वस्तु, नेता र रसको प्रतिपादन एवं परिपाकका दृष्टिले 'चिसो चूल्हो' मा अपेक्षित मात्रामा सबल र सफल हुन सकेका छैनन् भन्ने समीक्षकको तार्किक विश्लेषण यसमा पाइन्छ । आफुले देखाउन खोजेको साध्य वा उद्देश्यलाई साधनका रूपमा आएका पात्रहरूद्वारा प्रकाशन गर्न महाकाव्यकार सफल नभएका र नायक सन्ते एवं नायिका गौरीले महाकाव्यकारले देखाउन खोजेको प्रेमको शाश्वत सुन्दर रूपलाई स्थापित गर्न पनि नसकेका भन्ने समीक्षकको व्याख्या छ। नायक नायिका दुवै महाकाव्यकारको बौद्धिकताले थिचिएका मात्र छन्, स्वाभाविक बन्न पुगेका छैनन् भन्दै समीक्षकले यसमा करुण रसको अभिव्यक्ति गराउन खोजे पनि त्यसको परिपाक गराउन सम असमर्थ देखिएको विचार व्यक्त गर्नुभएको छ । प्रस्तुत महाकाव्य बौद्धिक विलासको रचना भए पनि भाव, हार्दिकता, आस्वादन, संवेदना र कोमलताका दृष्टिले कमजोर रहेको बलियो तर्क समीक्षकले स्थापित गर्नुभएको छ ।

कृतिकारले गहन परिशीलनपछि यसका प्राप्ति र अप्राप्तिहरू केलाउँदै यस महाकाव्यको रचना गरेर समले एकथरी महाकाव्य धाराको अन्त्य र अर्काथरी महाकाव्य धाराको आरम्भ गरेको वस्तुगत मूल्याङ्कन पनि यस समीक्षामा भएको छ ।

यस बाहेक समीक्षक भट्टराईले लेखनाथ पौडेलको 'तरुणतपसी' नव्यकाव्यको पनि विश्लेषण गरेर यसमा प्रतिबिम्बित आधुनिक चेत र वेदान्त दर्शनको रन्कोलाई केलाउने एवं देखाउने काम गर्नुभएको छ ।



# अनुवाद

बहुमुखी व्यक्तित्वका धनी शरदकुमार भट्टराई वेद र वैदिक साहित्य, पुराण र पौराणिक साहित्य तथा संस्कृतका अन्य काव्य र साहित्यशास्त्रका बहुश्रुत विद्वान् हुनुहुन्छ । उहाँका पारलौकिक र लौकिक साहित्यको गहन अध्ययन गर्ने गुणग्राही पाठक यी कृतिको अनुशीलन गर्दा उहाँको प्रशासनिक व्यक्तित्व बिर्सन पुग्छ र उहाँलाई साहित्यकारका रूपमा मात्र बुझ्न थाल्छ। पाठकलाई यस्तो मनोदशामा पुऱ्याउन सक्ने लेखनकौशल उहाँमा पाइन्छ। यस्तै व्यक्तित्वलाई परिष्कार गर्ने उहाँको साहित्य साधनाको अर्को क्षेत्र अनुवादकला हो । उहाँले वेदान्त विषयका प्रौढ ग्रन्थहरूको पनि अनुवाद गर्नुभएको छ। यसको चर्चा वेदान्ती व्यक्तित्वमा गरिनेछ। साहित्यिक अनुवादतर्फ चाहिँ उहाँले श्रीमद्भागवतमहापुराणका बढी मार्मिक र अत्यधिक चर्चित श्लोक एवम् प्रसङ्गहरूको सरस र सारपूर्ण अनुवाद गर्नुभएको छ । यस्ता अनुवादमध्ये कुनै पद्यात्मक छन् भने कुनै चम्पू शैलीका गद्यपद्यात्मक छन् । श्रीमद्भागवतमहापुराणको समग्र श्रवण, अध्ययन र अनुशीलन गर्न नसक्ने वा त्यसो गर्न पर्याप्त समय पाउन नसक्ने व्यक्तिहरूका लागि ग्रन्थको मूल विषयसँग परिचित हुन तथा त्यसमा प्रवेश गरी आत्मकल्याणतर्फ प्रवृत्त हुन यी ग्रन्थले सहायता पुऱ्याएका छन् । यस वर्गका दुई ओटा ग्रन्थको सामान्य रूपरेखा यस प्रकार छ।

## पद्यात्मक
## ज्ञान र भक्ति २०६३ का भूमिकाबाट

[यो 'ज्ञान र भक्ति' नामक अनूदित ग्रन्थ ज्ञान र भक्तितर्फ अग्रसर हुन लागेको संसूचन गर्ने प्रथम प्रयास हो । यस ग्रन्थलाई पछि प्रणयन हुने भक्ति र अद्वैत वेदान्तपरक ग्रन्थहरूको समग्र मङ्गलाचरणको

प्रतिनिधित्व गर्ने प्रतीकका रूपमा मैले ठानेको छु । यो अनुवाद मेरो दुरूह आध्यात्मिक ग्रन्थ रचनातर्फ प्रविष्ट हुने पहिलो सोपान वा द्वार हो भन्ने ठानेको छु ।

ब्रह्मसूत्रको दोस्रो सूत्र 'जन्माद्यस्य यतः' भन्ने अद्वैत वेदान्तको अत्यन्त अगम्य ब्रह्मको तटस्थ र स्वरूपलक्षण बुझाउने मङ्गलाचरणपरक वाक्यबाट सुरु भएको श्रीमद्भागवतमहापुराण अन्त्यमा गएर वेदान्तमा नै समाप्त हुन्छ ।

यस ग्रन्थमा सुरु मङ्गलाचरण श्लोकदेखि लिएर अपौरुषेय वेदहरूद्वारा अत्यन्त गहन तथा अप्रचलित नर्कुटक छन्दमा लेखिएका श्लोकहरूको यथामति तथा यथाशक्ति कतै समछन्दमा र कतै विषम छन्दमा अनुवाद गरिएका अमूल्य भागवत अन्तर्गतका अठार श्लोकहरूको यो पुञ्ज हो । भरसक सरल तथा सबैले बुझ्न सक्ने गरी नेपाली भाषामा अनुवाद गरिएको छ । यसबाट जिज्ञासु तथा मुमुक्ष पाठकहरूलाई आफ्नो भक्ति र ज्ञानका वृद्धिमा सहयोग पुग्ने छ भन्ने म ठान्दछु । ]

# ज्ञान र भक्ति २०६३

'भूमिका' देखि 'वेदस्तुति' सम्मका अठार शीर्षकका रचनाहरूको सङ्ग्रहका रूपमा आएको यस कृतिमा 'भूमिका' र 'मङ्गलाचरण' गद्यशैलीमा लेखिएका छन् भने बाँकी रचना अनूदित पद्यका रूपमा आएका छन् । पद्यको प्राधान्यका दृष्टिबाट यसलाई आत्मकथाको रूपरेखा प्रस्तुत गरिएको छ भने 'मङ्गलाचरण' मा श्रीमद्भागवतमहापुराणको आध्यात्मिक अर्थ र प्रयोजनलाई सप्रमाण सारगर्भित रूपमा प्रस्तुत गरिएको छ । 'मङ्गलाचरण' मा अनुवादकले उल्लेख गर्नुभएको भागवतको प्रथमस्कन्धको प्रारम्भमै आउने र धेरै भगवद्भक्तहरूले भन्ने गरेको श्लोकको अनुवादबाट नै अनुवादकलाको प्रमाण पाउन सकिन्छ –

मूल – निगमकल्पतरोर्गलितं फलम्–
शुकमुखादमृतद्रवसंयुतम् ।

पिबत भागवतं रसमालयं–
मुहुरहो रसिका भुवि भावुकाः ॥

अनुवाद – निगमका रुखको रसिलो फल
ठुँग दिई शुकले चुहुँदो तल ।
पिउन लायक यो नमरेतक
पिइरहू रस यो प्रिय भावुक ॥

'भीष्मस्तुति' मा संस्कृतमा समेत स्पष्ट हुन नसकेका कतिपय विषयवस्तुलाई सुस्पष्ट पारेर कवितात्मक शैलीमा प्रस्तुत गरिएको छ –

मूल – धर्मार्थकाममोक्षाँश्च सहोपायान् यथा मुने ।
नानाख्यानेतिहासेषु वर्णयामास तत्त्ववित् ।

अनुवाद – भीष्मले यिनका साथै धर्मार्थकाममोक्ष ती ।
पुरुषार्थहरू प्राप्त गर्ने साधन हुन् कति ?
तिनको अति विस्तार उपाख्यानहरूसँग
इतिहास सुनाएर बताए तत्त्वका सँग । (पृ.३८)

'सबीज योग' आलम्बनयुक्त भक्तिको लक्षणमा भगवान्को सूत्रात्मक कथनलाई सारपूर्ण तर स्पष्ट र सरल शैलीमा यसरी प्रस्तुत गरिएको पाइन्छ –

मूल – स्वधर्माचरणं शक्त्या विधर्माच्च निवर्तनम् ।
दैवाल्लब्धेन सन्तोष आत्मविच्चरणार्चनम् ॥

अनुवाद– स्वधर्म पालना गर्नु शास्त्रानुसार शक्तिले ।
विधर्मको गरी त्याग काम गर्नु विरक्तिले ॥
प्रारब्धबाट जे मिल्छ त्यसैबाट खुसी हुनु ।
ज्ञानीको अर्चना गर्नु ज्ञानीका पाउ नै धुनु ॥ (पृ.(४६)

लामो छन्दका श्लोकमा निहित भाव र विषयवस्तुलाई पूर्णतः सुरक्षित राख्तै मौलिक जस्तो बनाएर सरल शैलीमा प्रस्तुत गरिएको छ। यस श्लोकबाट यसको पुष्टि हुन्छ –

मूल – यच्छौचनिः सृतसरित्प्रवरोदकेन
तीर्थेन मूर्ध्न्यधिकृतेन शिवः शिवोऽभूत्।
ध्यातुर्मनः शमनशैलनिसृष्टवज्रं
ध्यायेच्चिरं भगवतश्चरणारविन्दम् ॥

अनुवाद – धोएर ती दुवै पाउ गङ्गाजी सिर्जना भइन्।
यिनै नदी बनी बग्दै शिवका शिरमा गइन् ॥
शिव कल्याणका मूर्ति स्वयं शुद्ध थिए शिव।
गङ्गाजी शिरमा राखी साँच्चै शिव भए शिव ॥
श्रीका पाउहरू ध्यान गर्नेका मनमा पसी।
सम्पूर्ण पापका शैल इन्द्रको वज्रझैं खसी ॥
नास्तछन् क्षणमा तस्मात् श्रीका चरणमा सदा।
लामू समयका सम्म लगाओस् ध्यान सर्वदा ॥ (पृ.५३)

'आमाको गर्भबाट जीवात्माले गरेको भगवान्को स्तुति' मा जीवले गरेको भगवान्को स्तुतिको अनुवादमा दर्शन, कवित्व र प्रस्तुतीकरणको शिल्पका बीच तारतम्य मिलेको पाइन्छ। जस्तै –

मूल – यस्त्वत्र बद्ध इव कर्मभिरावृतात्मा
भूतेन्द्रियाशयमयीमवलम्ब्य मायाम्।
आस्ते विशुद्धमविकारमखण्डबोध
मातप्यमानहृदयेऽवसितं नमामि ॥

अनुवाद – ऐले म यो उदरमा जड देह आदि,
मायात्मिका प्रकृतिबाट मिली उपाधि।
प्रारब्धकर्मवश बद्ध भएर नाथ !
भोग्दोछु दुःख अति नै म भई अनाथ ॥

सन्तप्त यो हृदयभित्र भई प्रबोध,
बस्छौ सधैंभर भएर अखण्डबोध ।
हे शुद्ध बुद्ध भगवन् ! म भई अनाथ ।
गर्छु प्रणाम अहिले अति भक्ति साथ ।।

'रहूगणजडभरतसंवाद' मा रहूगण र जडभरतको संवादलाई नाटकीय रूपमा प्रस्तुत गरिएको छ । जडभरतले रहूगणसँग गरेको संवादलाई नेपाली नाटकमा प्रयोग हुने बोलचालको भाषाजस्तो बनाई स्वाभाविक ढङ्गमा उतारिएको छ । जस्तै –

मूल – विशेषबुर्द्धेर्विवरं मनाक् च
पश्याम यन्न व्यवहारतोऽन्यत् ।
क ईश्वरस्तत्र किमीशितव्यं
तथापि राजन् करवाम किं ते ।।

अनुवाद– यथार्थमा मालिक दास भेद,
कहाँ छ साँच्चै सब यो विभेद ।
असत्य हो यो सब के भनौं ? म
तथापि राजन् ! भन के गरौं ? म ।। (पृ.७३)

जडभरतले रहूगणलाई श्रीकृष्णको पाउ स्पर्श गरेर मुक्त हुन दिएको सल्लाहलाई अनुवादकले सर्वसाधारण पाठकले पनि राम्ररी बुझ्ने गरी सरल शैलीमा प्रकाशित गरिदिनु भएको छ । जस्तै –

मूल – रहूगण त्वमपि ह्यध्वनोऽस्य
संन्यस्तदण्डः कृतभूतमैत्रः ।
असज्जितात्मा हरिसेवया शितं
ज्ञानासिमादाय तरातिपारम् ।।

अनुवाद – राजन् ! तिमी दुस्तर यै कुबाटो,
हिँड्छौ सधैं भैकन बक्क लाटो ।
दण्डादिको काम समस्त छोडी,
प्राणीहरूमा समभाव जोडी ॥

छोडेर आसक्ति गरेर पूजा,
ज्ञानासिले कर्म गरेर धूजा ॥
श्रीकृष्णकै पाउ तिमी समाऊ,
भवाटवीबाट तरेर जाऊ ॥ (पृ.१०३)

'देवताहरूको गीत' मा हरिभक्तिसम्बन्धी कार्य हुँदैनन् भने ब्रह्मलोक पनि तुच्छ हुन्छ भन्दै मुमुक्षुले हरिको गुणानुवाद गर्नुपर्ने अनुवादकको दृष्टिकोण सजीव बनेर व्यक्त भएको पाइन्छ । जस्तै –

मूल – न यत्र वैकण्ठकथासुधापगा ,
न साधवो भागवतास्तदाश्रयाः ।
न यत्र यज्ञेशमखा महोत्सवाः,
सुरेशलोकोऽपि न वै स सेव्यताम् ॥

अनुवाद – जहाँ हुँदैनन् हरिकीर्तिवर्णन,
जहाँ हुँदैनन् हरिभक्त सज्जन ।
जहाँ हुँदैन हरियज्ञ उत्सव,
ब्रह्मादि लोकै पनि तुच्छ हुन् सब ॥

'वृत्रासुरको स्तुति' मा वृत्रासुरले भगवान्लाई छाडेर कुनै पनि लोक र आधिपत्य मात्र होइन मोक्षको समेत कामना नराखेको विषयवस्तुलाई अनुवादको ढाँचामा ढालेर अनुवादकले सबैलाई भगवद्भक्तिमा प्रेरित गर्नुभएको देखिन्छ । जस्तै –

मूल – न नाकपृष्ठं न च पारमेष्ठ्यं,
न सार्वभौमं न रसाधिपत्यम् ।
न योगसिद्धीरपुनर्भवं वा,
समञ्जस त्वा विरहय्य काङ्क्षे ॥

अनुवाद – हे नाथ ! चाहन्न सुरेन्द्रलोक,
चाहन्न कैल्यै पनि सत्यलोक ।
साम्राज्य चाहन्न, रसाधिपत्य,
चाहन्न सिद्ध्यादि कुनै असत्य ।
चाहन्न कैल्यै पनि मोक्ष नाथ !
छोडी तिमी लानु छ के र साथ ?

'प्रह्लादको उपदेश' मा सम्पूर्ण चराचर जगत्को हित चिताइएको छ र मनलाई श्रीकृष्णको कीर्तनतर्फ प्रवृत्त गराउन प्रेरित गरिएको छ । भागवतको दार्शनिक वाणीलाई अनुवादकले सर्वबोध्य बनाएर यसरी प्रस्तुत गर्नुभएको छ –

मूल – स्वस्त्यस्तु विश्वस्य खलः प्रसीदता,
ध्यायन्तु भूतानि शिवं मिथो धिया ।
मनश्च भद्रं भजतादधोक्षजे,
आवेश्यतां नो मतिरप्यहैतुकी ॥

अनुवाद – संसारमा शान्ति हओस् सधैं भरि,
सद्बुद्धि देउन् खलमा स्वयं हरि ।
प्राणी सबैको हित होस् परस्पर,
सद्भाव राखुन् सबले निरन्तर ।
सन्मार्गमा त्यो मन नित्य लागोस्,
श्रीकृष्णको कीर्तन तर्फ जागोस् ॥

'प्रह्लादको स्तुति' मा प्रह्लादले भगवान्‌को स्तुति गरेको प्रसङ्ग आएको छ। यहाँ जति गुणगण भए पनि भगवान्‌लाई सन्तुष्ट पार्ने एउटा मात्र अमोघ उपाय भक्ति हो भन्ने भाव व्यक्त भएको छ। यस भावलाई अनुवादकले निकै सहज बनाई नेपालीमा उतार्नु भएको छ –

मूल – मन्ये धनाभिजनरूपतपः श्रुतौज–
स्तेजः प्रभावबलपौरुषबुद्धियोगः ।
नाराधनाय हि भवन्ति परस्य पुंसो
भक्त्या तुतोष भगवान् गजयूथपाय ॥

अनुवाद – बुद्धि प्रभाव धन भाग्य घरान रूप,
विद्या सुकर्म बल तेज तपः स्वरूप ।
सम्पूर्ण बाह्र गुण यी जति हुन् सशक्त,
सन्तुष्ट पार्न भगवन् ! सब छन् अशक्त ॥
यौटै छ तुष्ट रहने प्रभुभक्तिसार,
हात्ती भयो सहजमा जसबाट पार ॥

सम्पूर्ण अशक्त जनका सहारा पनि भगवान् नै हुन् भन्ने प्रह्लादको वाणीलाई नेपालीपनमा ढालेर यसरी प्रस्तुत गरिएको छ –

मूल – प्रायेण देवमुनयः स्वविमुक्तिकामाः,
मौनं चरन्ति विजने न परार्थनिष्ठाः ।
नैतान्विहाय कृपणान्विमुमुक्ष एको,
नान्यं त्वदस्य शरणं भ्रमतोऽनुपश्ये ॥

अनुवाद – धेरै जसो मुनिहरू वनमा गएर,
गर्छन् तपश्चरण मौन सधैं रहेर ।
जान्छन् तरेर तर दीन निमित्त खास,
बन्छन् म ठान्दछु सधैंभरि नै उदास ॥

मेरो त हालत छ आज विचित्र नाथ,
यी दीनहीन बिचरा टुहुरा अनाथ ।
छोडेर मुक्ति कसरी हुनु, बेसहारा,
सारा अशक्त जनका प्रभु हौ सहारा ॥

'वेणुगीत' मा गोपिनीहरूले पशु भए पनि हरिणीहरू श्रीकृष्णमा मन समर्पण गरेर बस्छन् भन्ने भक्तिभाव व्यक्त गरेका छन् । उनीहरूको यस भनाइबाट श्रीकृष्णप्रतिको अतिशय भक्ति र समर्पण झल्किएको पाइन्छ । मूलको भावलाई नेपालीमा जीवन्त रूपमा उतार्न सक्ने अनुवादशिल्प यहाँ पनि देख्न पाइन्छ । जस्तै –

मूल – धन्याःस्म मूढमतयोऽपि हरिण्य एता,
या नन्दनन्दनमुपात्तविचित्रवेषम् ।
आकर्ण्य वेणुरणितं सहकृष्णसाराः,
पूजां दधुर्विरचितां प्रणयावलोकैः ॥

अनुवाद – ती धन्य छन् हरिणका गृहिणी समस्त,
मूढै भएर पनि छन् हरि साथ मस्त ।
ती बाँसुरी धुन सुनीकन कान्तसाथ,
जान्छन् उनै नगिचमा अति भै सनाथ ॥

प्रेमार्द भै नयनले हरितर्फ हेर्छन्,
पूजा समर्पण सबै क्रमसाथ गर्छन् ।
हे मित्र हो ! पशु भए पनि धन्य ती छन्,
श्रीकृष्णमै मन दिई पतिसाथ बस्छन् ॥

'प्रणयगीत' मा गोपिनीहरूको मन कृष्णमा विलीन भएका कारणले उनीहरू घर जान सक्ने अवस्थामा नभएको मनोहारी चित्र उतारिएको छ । त्यसलाई अनुवादकले मौलिक जस्तो बनाएर नेपाली स्वरूप दिनुभएको छ –

मूल –	चित्तं सुखेन भवतापहृतं गृहेषु,
यन्निर्विशत्युत करावपि गृह्यकृत्ये ।
पादौ पदं न चलतस्तव पादमूलात्,
यामः कथं व्रजमथो करवाम किं वा ॥

अनुवाद –	चोऱ्यौ सुटुक मन यो घरबाट ऐले,
पुत्रादिमा रत थियो पहिले मजैले ।
जाऊँ भने घर हरे ! जडभैं छ पाउ,
चल्दैन जानु कसरी अब लौ बताऊ ॥

'गोपीगीत' मा गोपिनीहरूले कृष्णका प्रेममा आकण्ठ डुबेर र अन्तिम आश्रय ठानेर उनको शरणमा आएको कुरा बताएका छन् । कृष्ण र गोपिनीहरूको दिव्य प्रेम कुन स्तरको थियो, त्यसको सङ्केत यस श्लोकबाट गरिएको छ –

मूल –	पतिसुतान्वयभ्रातृबन्धवा–
नतिविलङ्घ्य तेऽन्त्यच्युतागताः ।
गतिविदस्तवोद्गीतमोहिताः,
कितव योषितः कस्त्यजेन्निशि ॥

अनुवाद –	पति छोरा सुहृद् बन्धु सारा छोडेर निर्भय ।
तिम्रै शरणमा आयौं ठानी अन्तिम आश्रय ॥
तिम्रो चाल सबै बुझ्छौं लट्ठ छौं प्रभु नै सित ।
रातमा कसले छोड्छ ? तिमी बाहेक योषित ॥

'युगलगीत' मा गोपिनीहरूले कृष्णले साथीहरूका साथ यमुनातटमा गई खेलेको स्वाभाविक वर्णन गरेका छन्, जसलाई अनुवादकले पनि स्वाभाविकरूपमै उतार्नुभएको छ –

मूल –	कुन्ददामकृतकौतुकवेषो गोपगोधनवृतो यमुनायाम्,
नन्दसूनुरनघे तव वत्सो नर्मदः प्रणयिनां विजहार ॥

अनुवाद – हे यशोदे ! तपाईंका छोरा प्रिय जनार्दन,
आफ्ना साथीहरूलाई आनन्द अति नै दिन ॥
कुन्दको फूलको माला लगाइ कौतुकी भई,
खेल्दछन् हर्षका साथ यमुनातटमा गई ॥

'विरहगीत' मा कृष्णसँग छुट्टिनु पर्दा गोपिनीहरूलाई थामिनसक्नु पिर परेको छ । कृष्णसँग बिताएको लामो रात पनि एक क्षण जत्तिकै छोटो लागेको छ । त्यो मार्मिक भावपूर्ण परिस्थिति र गोपिनीहरूको मनस्थितिको प्रतिनिधित्व यसरी गराइएको छ –

मूल – यस्यानुरागललितस्मितवल्गुमन्त्र–
लीलावलोकपरिरम्भणरासगोष्ठयाम् ।
नीताः स्म नः क्षणमिव क्षणदा विना तं,
गोप्यः कथं न्वतितरेम तमो दुरन्तम् ॥

अनुवाद – जस्को असाध्य रसिलो स्मितपूर्ण गालो,
लीलाविलाससँगको भरिलो अँगालो ॥
पाएर रासरसको अति दीर्घ रात,
चाँडै गयो क्षण समान भयो प्रभात ॥
त्यो श्याम नै जब गयो अब के गरौंला ?
हे गोपिनी ! विरह यो कसरी तरौंला ?

'भ्रमरगीत' मा गोपिनीहरूले कृष्णका विषयमा गरेको प्रेमपूर्ण टिप्पणीलाई अनुवादकले समसामयिक प्रवृत्तिलाई समेत सङ्केत गर्दै यस ढाँचामा अभिव्यक्त गर्नुभएको छ –

मूल – सकृदधरसुधां स्वां मोहिनीं पाययित्वा,
सुमनस इव सद्यस्तत्यजेऽस्मान् भवादृक् ।
परिचरति कथं तत्पादपद्मं तु पद्मा,
ह्यपि बत हृतचेता उत्तमश्लोकजल्पैः ॥

अनुवाद –  कृष्णले एकबाजी नै पियाइ मोहनी रस ।
भए टाढा तिमी जस्तै भई स्वार्थी र नीरस ॥
थाहा छैन उनै लक्ष्मी कसरी सुख पाउँछिन् ।
अथवा कृष्णको मीठो बोलीमा मख्ख पर्दछिन् ॥

'गोपीहरूलाई श्रीकृष्णको सन्देश' मा श्रीकृष्णले प्रेमी सधैं साथै रहेको अवस्थामा भन्दा टाढा भएको बेला बढी माया बढ्ने तर्क गरेको देखाइएको छ र आफ्नो दूरदेश प्रस्थानको औचित्य सिद्ध गर्न खोजिएको छ । यस प्रसङ्गलाई अनुवादकले सूक्तिमय बनाएर यसरी अभिव्यक्त गर्नुभएको छ –

मूल –  यथा दूरचरे प्रेष्ठे मन आविश्य वर्तते ।
स्त्रीणां च न तथा चेतः सन्निकृष्टेऽक्षिगोचरे ॥

अनुवाद –  जस्तै स्त्रीहरूको आफ्नो प्रेमी अत्यन्त दूर छ ।
भने सर्वांशमा चित्त उसैमा नित्य लाग्दछ ॥
आफ्ना साथै भए प्रेमी उपेक्षा हुन सक्तछ ।
टाढा हुँदा भए जस्तो माया नहुन सक्तछ ॥ (पृ.१९१)

'वेदस्तुति' मा वेदहरूले भगवान्‌को स्तुति गरेको देखाइएको छ । यहाँ भगवान्‌लाई आनन्दस्वरूप, शरणागत र सबैका शक्तिका रूपमा हेरिएको छ । प्रभु परमेश्वर नै आत्मा पनि मन पनि भएपछि पुत्र कलत्रको पनि प्रयोजन रहेन । परमेश्वरबाट नै शाश्वत सुख पाइने प्रबल विश्वास वेदले व्यक्त गरेका छन् । वेदको यो दार्शनिक स्तुतिभावलाई अनुवादकले सर्वसाधारण पाठकका लागि सुबोध बनाएर प्रस्तुत गर्नुभएको छ –

मूल –  स्वजनसुतात्मदारधनधामधरासुरथै–
स्त्वयि सति किं नृणां श्रयत आत्मनि सर्वरसे ।
इति सदजानतां मिथुनतो रतये चरतां
सुखयति को न्विह स्वविहते स्वनिरस्त भगे ॥

अनुवाद – अखण्ड अनि आनन्दस्वरूप शरणागत –
जनका प्रभु हौ आत्मा तिमी हौ खास तागत ॥
हे प्रभो ! जब छौ साथ तिमी आत्मा तिमी मन ।
पुत्र स्वजन देहादि यिनको के प्रयोजन ?
बिर्सेर सब यो सत्य फसेर स्त्रीसुखादिमा ।
भएका छन् सधैं मस्त मायिक तुच्छ वस्तुमा ॥
संसारमा कहाँ मिल्छ नित्य शाश्वत चिन्मय –
वस्तु, जस्बाट पाइन्छ स्थायी सुख निरामय ॥

वेदले नारायणको गुणकीर्तन गरेर उनलाई उठाउँछन् सनन्दनले भनेका छन् । अनुष्टुप् छन्दको यस सारगर्भित भनाइलाई नेपालीमा यसरी व्यक्त गरिएको छ –

मूल – यथा शयानं सम्राजं वन्दिनस्तत्पराक्रमैः ।
प्रत्युषेऽभ्येत्य सुश्लोकैर्बोधयन्त्यनुजीविनः ॥

अनुवाद – बिहान जसरी गाई राम्रा ठूला पराक्रम ।
जगाउन भनी राजा भाट गर्छन् परिश्रम ॥
त्यसै गरेर यी वेद भाट जस्तै बनीकन ।
गुणको गर्दछन् चर्चा नारायण उठाउन ॥ (पृ.२०१०)



# श्रीकृष्णाय वयन्नुमः २०६९ का भूमिकाबाट

[ आफ्नै कृतिका बारेमा आफ्ना भनाइ मैले राखेको यो २८ औँ पटक भएछ । समीक्षात्मक कृतिबाट मैले २०२६ सालबाट सुरु गरेको ग्रन्थ लेखन र प्रकाशनको काम आज २०६९ सालमा आइपुग्दा ४३ वर्ष भएछ । यस अन्तरालमा मैले आफ्नो व्यस्तताका बीचमा समय निकालेर समीक्षा, काव्य, गीतिकाव्य, कवितासङ्ग्रह, अनुवाद, भक्ति, ज्ञान र अद्वैत दर्शन लगायतका २८ ओटा ग्रन्थहरू लेखेर प्रकाशन गरिसकेको छु । त्यसै कारण नै मैले आजसम्मका २८ प्रकारका भूमिका लेखिसकेको छु । वस्तुतः लेख्तालेख्तै मैले लेख्नुपर्ने कुरा नै समाप्त भएजस्तो मलाई लागेको छ ।

यस कवितासङ्ग्रहमा २१ ओटा केही अनूदित र केही मौलिक कविताहरू समाविष्ट छन् । जसमा प्रायजसो श्रीमद्‌भागवतबाट केही महत्त्वपूर्ण श्लोकहरू लिएर समछन्दमा अनुवाद गरिएको छ । त्यसै गरेर केही कविताहरू उपनिषद्‌का मन्त्रहरूको सार लिएर, केही श्लोकहरू श्रीमधुसूदन सरस्वतीका श्लोकहरूको समछन्दमा अनुवाद गरेर, केही कविताहरू विभिन्न फुटकर श्लोकहरूको अनुवाद गरेर र केही मौलिक कविताहरू पनि समावेश गरेर यो सङ्ग्रह प्रकाशन गरिएको हो ।

केही वर्षदेखि लौकिक साहित्य, काव्य, कविता, अनूदित श्लोकहरू लेख्ने काम क्रमशः घटाउँदै लगेर हाल म अद्वैत वेदान्तका केही प्रकरण ग्रन्थहरूको सार र अरू केही ग्रन्थहरूको नेपालीमा अनुवाद गरेर प्रकाशन गर्ने काम गरिरहेको छु । लौकिक साहित्यको लेखन बिस्तारै छोडेर ज्ञान र भक्तिपरक ग्रन्थहरूको लेखनमा मैले हाल आफुलाई समर्पित गरेको छु । फलतः श्रीमद्‌भागवत महापुराण भित्रका केही श्लोकहरूको

समछन्दमा र केहीको विषमछन्दमा अनुवाद गरेर २०६३ सालमा ज्ञान र भक्ति, त्यसपछि २०६४ सालमा रासपञ्चाध्यायी, २०६५ सालमा ज्ञान र भक्तिपरक निबन्ध सङ्ग्रह ब्रह्मसाक्षात्कार, २०६९ सालमा परमसत्य नामक निबन्ध सङ्ग्रह र यो अनूदित कविता सङ्ग्रह श्रीकृष्णाय वयन्नुमः समेत पाठक समक्ष आउन सकेका हुन् । यो क्रम अगाडि पनि चल्दै जाने छ। ]

# श्रीकृष्णाय वयन्नुमः २०६९

संस्कृत वाक्यकै शीर्षकीकरण भएको 'श्रीकृष्णाय वयन्नुमः' ज्ञान र भक्तिसम्बन्धी अनूदित एवं मौलिक कविताहरूको सङ्ग्रह हो । यहाँ विभिन्न स्रोतका ज्ञानप्रधान अनूदित कविताहरू छन् भने कुनै भक्ति, स्तुति र विनति प्रस्तुत गरिएका मौलिक कविताहरू पनि छन् । २८ ओटा कविताहरूमध्ये प्रायः उपनिषद्का मन्त्रहरूको सार, भागवतका श्लोकहरू, मधुसूदन सरस्वतीका श्लोकहरू र फुटकर श्लोकहरूको अनुवादका रूपमा आएका छन् भने अन्य केही कविता मौलिक छन् । अनूदित र मौलिक दुवै वर्गका कविताले अद्वैत वेदान्तको ज्ञान दिन र भक्तजनलाई भगवद्भक्तितर्फ प्रवृत्त गराउन भूमिका खेलेका छन् । यी सबै कविताहरूद्वारा जान्नुपर्ने के हो ? र कसको भक्ति किन गर्ने हो ? दुवै प्रश्नको कवितात्मक उत्तर दिएका छन् । जुनसुकै स्रोतबाट अनुवाद गरे पनि मौलिकजस्तो बनाएर सुमधुर लय र माधुर्य मिश्रित अभिव्यक्ति दिनुबाट विषयवस्तुप्रति पाठकको आकर्षण बढेको देखिन्छ । यस सङ्ग्रहले अनुवादक कविको बाल्यावस्थामै अङ्कुरित श्रीकृष्णभक्ति, युवाकालमा अध्ययन गरेको अद्वैत वेदान्त र प्रौढावस्थामा अभ्यास, चिन्तन एवम् लेखन र ब्रह्माभ्यास गरेको आध्यात्मिक ज्ञानको गहिराइलाई समेत प्रकाशित गरेको छ । ब्रह्मतत्त्वको मीमांसा गर्ने अद्वैत वेदान्त जस्तो गम्भीर र जटिल विषयलाई वाक्यकलाबाट पाइने सुमधुर

आस्वादनजस्तो बनाई प्रस्तुत गर्न सक्ने कृतिकारको मौलिक प्रतिभाको परिचय यस सङ्ग्रहबाट पनि पाउन सकिन्छ।

श्रीमद्भागवतको रसलाई सङ्क्षेप र सारपूर्ण रूपमा बुझाउन आएको भागवतका प्रसिद्ध श्लोकहरूलाई नेपालीमा अझ मीठो र आनन्ददायी बनाएर प्रस्तुत गर्ने अनुवादकला अनुवादकमा पाइन्छ। जस्तै –

मूल – निगमकल्पोतरोर्गलितं फलं,<br>
शुकमुखादमृतद्रवसंयुतम्।<br>
पिबत भागवतं रसमालयं,<br>
मुहुरहोरसिका भुवि भावुकाः॥

अनुवाद – निगमका रुखमा रसिलो फल,<br>
ठुँग दिँदा शुकले चुहुँदो तल।<br>
पिउन लायक यो नमरेतक,<br>
पिइरहू रस यो भुविभावुक॥ (पृ.४)

मूलको भावलाई पूर्णतः सुरक्षित राखी नयाँ र परिष्कृत पदावलीको प्रयोग गरेर मीठो भाव र गहन भक्तिभावको अभिव्यक्ति गर्ने सीप पनि यत्रतत्र देखिन्छ। उदाहरणका लागि छोटो छन्दको श्लोकको अनुवाद अघि सार्न सकिन्छ –

मूल – ब्रह्मन् भगवतस्तस्य भूम्नः स्वच्छन्दवर्तिनः।<br>
गोपालोदारचरितं कस्तृप्येतामृतं जुषन्॥

अनुवाद – गोपालकृष्ण हुन् ब्रह्म आत्मतन्त्र परात्पर।<br>
सुनी अमृतझैँ मीठो लीला को तृप्त हुन्छ र ? (पृ.८)

साहित्यशास्त्रका दृष्टिमा वात्सल्य, शृङ्गार र भक्तिरस परस्पर विरोधी मानिन्छन्। रसानुभूतिका क्रममा काव्यका मर्मज्ञहरूलाई यसको अनुभव पनि हुन्छ। तर यी भावलाई भागवतले समन्वय गरेर व्यक्त गरेको छ भने अनुवादकले परस्पर विरोधानुभूतिको सट्टा भक्तिभावको

परिपुष्टिका लागि समन्वय गरेर प्रस्तुत गर्नुभएको छ। यस श्लोकले यही तथ्यको पुष्टि गर्दछ –

मूल – अजातपक्षा इव मातरं खगाः
स्तन्यं यथा वत्सतराः क्षुधार्ताः ।
प्रियं प्रियेव व्युषितां विषण्णा
मनोऽरविन्दाक्ष दिदृक्षते त्वाम् ।।

अनुवाद – चरा बचेरा जननी भनेर,
बस्छन् जसोरी गुँडमा कुरेर ।
बाछा ससाना अति भै क्षुधार्त,
बस्छन् कुरी माउ भएर आर्त ।।
टाढा बसेको पति सम्भिईकन,
बस्छे नवोढा जसरी दिई मन ।
त्यस्तै बसेको छु म भै अनाथ,
पाऊँ प्रभु दर्शन हौँ सनाथ ।। (पृ.४६)

भागवतले भगवान् श्रीकृष्णसँगको रासलीलाको लालसाले आएका गोपिनीहरूलाई स्त्रीधर्मको शिक्षा दिएको छ । त्यसलाई अझ मौलिक, व्यावहारिक, सामयिक र सारपूर्ण बनाएर अनुवादकले प्रस्तुत गर्नुभएको छ। यो आफ्नो कर्तव्य र चरित्रबाट विचलित हुँदै गएका कतिपय स्त्रीहरूका लागि भागवतले दिएको सुधारको सूत्रात्मक सन्देश पनि हो । जस्तै –

मूल – भर्तुः शुश्रूषणं स्त्रीणां परो धर्मो ह्यमायया ।
तद्बन्धूनां च कल्याण्यः प्रजानां चानुपोषणम् ।।

अनुवाद – हे कल्याणमयी गोपि ! सावधान भई सुन ।
पति, बन्धु र ठूलाको सेवा गर्नु दिई मन ।।
आफ्ना सन्तानको गर्नु राम्रो पालनपोषण ।
यही नै मानिएको छ स्त्रीको धर्म सनातन ।। (पृ.५३)

समाजमा श्रीकृष्ण र गोपिनीहरूबीचको रासलीलालाई गहिराइ र आध्यात्मिक तहबाट नबुझी जारकर्म वा व्यभिचारकर्मका रूपमा व्याख्या गर्ने नयाँ विनिर्माणवादी विद्वान् पनि छन् । यस्तै कथाको व्याख्या सुनाएर भागवतलाई नाफाको व्यापारमा चलाउने वर्ग र तिनका भनाइमा विश्वास गर्ने भक्तहरूलाई पनि सद्ज्ञान दिई उपकार गर्ने श्लोक भागवतमै छन् । रासलीला गर्नुको मूल प्रयोजन निरूपण गर्ने श्लोकलाई स्पष्ट हुने गरी नेपालीमा यसरी उतारिएको पाइन्छ –

मूल – विक्रीडितं व्रजवधूभिरिदञ्च विष्णोः
श्रद्धान्वितोऽनुशृणुयादथ वर्णयेद् यः ।
भक्तिं परां भगवति प्रतिलभ्य कामं
हृद्रोगमाश्वपहिनोत्यचिरेण धीरः ॥

अनुवाद – श्रीकृष्णले व्रजवधूसँग रासखेल,
गर्दा भयो अतुल चिन्मय दिव्य मेल ।
खेले गरी सकल इन्द्रिय पूर्ण रुद्ध,
लीला थियो विजय मन्मथका विरुद्ध ॥
श्रद्धा लिएर जसले सब यो चरित्र,
सुन्ला सुनाउँछ भने अति नै विचित्र ।
कामज्वर प्रशम भैकन दिव्य शक्ति,
त्यल्ले परा अतुल पाउँछ कृष्णभक्ति ॥

ब्रह्मज्ञानी अनुवादकले स्वतन्त्ररूपमा लेख्नुभएका कवितामा श्रुतिले समेत 'अवाङ्मनसगोचर' भनेर बताएको अवर्णनीय तर अनुभवगम्य ब्रह्मलाई सजिलोसँग बुझाउनु भएको छ । यसलाई यस उदाहरणले पुष्टि गर्न सकिन्छ –

म पूर्ण हूँ अखण्ड हूँ म एक हूँ अनेक हुँ ।
म ढुक्ढुकी हुँ धड्कने प्रकाशको प्रकाश हुँ ॥ (पृ.९१)

यस सङ्ग्रहमा सांसारिक एषणामा लिप्त मानिसलाई झकझक्याउँदै ब्रह्मज्ञानतर्फ लाग्न र शाश्वत सुख प्राप्त गर्न प्रेरित गर्ने कविता पनि छन् । अनुष्टुप् छन्दको छोटो श्लोकमा पनि रसरङ्गमा रङ्गिएको वर्गप्रति व्यङ्ग्य, प्रश्न र आश्चर्य प्रकट गर्दै ज्ञानमार्ग अवलम्बन गर्न यसरी उत्प्रेरित गरिएको छ –

अहं ब्रह्मास्मिको भाव कहिले हो पलाउने ?
यसै दुश्चक्रमा फेरि घुमेर कति आउने ? (पृ.९३)

आत्मज्ञानका लागि तडपिएका व्यक्तिलाई आत्मज्ञान प्राप्त गर्ने सरलतम उपाय सरलतम शैलीमा यसरी सम्झाइएको छ –

न वेदले मिल्दछ गूढ आत्मा,
न बुद्धिले मिल्छ अचिन्त्य आत्मा ।
पढेर धेरै न त मिल्छ आत्मा,
आत्मैकृपाबाट छ लभ्य आत्मा ॥ (पृ.९८)

शरीरका धर्मभन्दा आत्मा भिन्न हो भन्ने दार्शनिक विचारलाई प्रतिपादन गर्ने अभिव्यक्तिमा पनि सरलता र स्पष्टता पाइन्छ । मूलको मर्मलाई समेट्न सक्ने र विशिष्ट विचार पैदा गरिदिन सक्ने अनुवादशिल्प पाइन्छ । जस्तै –

मूल – स्थौल्यं कार्श्यं व्याधय आधयश्च
क्षुत्तृड्भयं कलिरिच्छा जरा च ।
निद्रा रतिर्मन्युरहंमदः शुचो
देहेन जातस्य हि मे न सन्ति ॥

अनुवाद – मोटो र दुब्लो भय दुःख शोक,
बुढ्याइँ तिर्खा अनि कष्ट भोक ॥
निद्रा अहं क्रोध सँगै पियार,
यी देहका हुन्, म हुँ निर्विकार ॥ (१०२)

शरीर, सम्बन्धीजन र संसारमा ममता नराखेर भगवान् श्रीहरिमा भक्ति लगाउन यस श्लोकले मार्गनिर्देशन गरेको छ –

मूल – देहेऽस्थिमांसरुधिरेऽभिमतिं त्यज त्वं ।
जायासुतादिषु सदा ममता विमुञ्च
पश्यानिशं जगदिदं क्षणभङ्गनिष्ठं
वैराग्यरागरसिको भव भक्तिनिष्ठः ॥

अनुवाद – यो देह हो फगत मासु र रक्तहाड,
पत्नी स्वयं र सुतमा पनि राग छाड ।
संसार यो क्षणिक हो ममता नराख,
वैराग्य साथ हरिमा अति भक्ति राख ॥



# मणिरत्नमाला प्रश्नोत्तरीको अनुवाद २०६७ का भूमिकाबाट

[यो मणिरत्नमालाप्रश्नोत्तरी जगद्गुरु आद्य श्रीशङ्कराचार्यद्वारा रचित अमूल्य कृति हो । उपजाति छन्दमा लेखिएको यस कृतिमा अत्यन्त सुन्दर र प्रसादगुणले युक्त जम्मा ३२ ओटा श्लोक छन् । यसको अनुवाद आदिकवि भानुभक्त आचार्यले प्रश्नोत्तरमालाका नामबाट धेरै अघि गर्नुभएको थियो । मैले सानै उमेरमा त्यो अमूल्य रत्नको उच्चारण मेरी गुरुआमा बालकुमारीज्यूबाट सुनेको थिएँ । त्यसले मेरो बालमस्तिष्कमा ठुलो प्रभाव पारेको थियो ।

उपर्युक्त कुरा धेरै अघिको हो । म काठमाडौँ पढ्न आएपछि त्यो मणिलाई मैले बिर्सिसकेको थिएँ । यसलाई धेरै रसिक विद्वान्हरूले अनुवाद गरेर जिज्ञासु पाठक समक्ष पुऱ्याउँदै गएका छन् । यसै क्रममा एक वर्ष अघि मेरा मित्र हेमराज ज्ञवालीले अनुवाद गरेर गीता समुदय प्रकाशन संस्थाद्वारा लोकार्पण गराउनुभएको थियो । त्यसले मलाई बाल्यकालमा गुरुआमाबाट सुनेको प्रश्नोत्तरीको पुनः स्मरण गराएको छ ।

श्री १००८ डा.स्वामी रामानन्द गिरिज्यूको प्रवचन श्रवण गर्ने क्रममा मलाई उहाँले आद्य शङ्कराचार्य विरचित मणिरत्नमाला-प्रश्नोत्तरीको समछन्दमा नेपाली भाषामा अनुवाद गर्न भन्नुभएको थियो । सो अनुसार मैले यसको यथाशक्ति र यथामति अनुवाद गरेर स्वामीज्यूमा समर्पण गरेको छु ।

योभन्दा अघि भक्ति र ज्ञान, रासपञ्चाध्यायी, अन्य फुटकर श्लोकहरू, कालियदमन समेत भागवतका केही श्लोकहरू, उपनिषद्का केही मन्त्रहरू, पञ्चदशीका केही श्लोकहरू र स्वामी मधुसूदन सरस्वतीप्रणीत केही श्लोकहरूको पनि समछन्दमा अनुवाद गरेर मैले प्रकाशन गरिसकेको छु । त्यही कुरा थाहा पाएर होला सायद स्वामीज्यूले

मणिरत्नमालाप्रश्नोत्तरीको अनुवाद गर्न मलाई अह्राउनुभएको हुनसक्तछ भन्ने सम्झेर मैले तुरुन्तै उहाँको भनाइ मानेर अनुवाद गरी प्रकाशित गरेको हुँ । प्रेरणाका र शुभाशीर्वादका लागि स्वामीज्यूमा म हार्दिक कृतज्ञता अर्पण गर्दछु। त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पये। ]

# मणिरत्नमाला प्रश्नोत्तरीको अनुवाद २०६७

आद्य जगद्गुरु शङ्कराचार्यद्वारा रचित ग्रन्थहरूमध्ये मणिरत्नमाला प्रश्नोत्तरी एउटा ग्रन्थरत्न हो। उपजाति छन्दका ३२ ओटा श्लोकमा रचित यो कृति ब्रह्मतत्त्वको चिन्तन, मानवकर्तव्यको पालना, विषयभोगबाट निवृत्ति र परमार्थप्रति प्रवृत्ति गराउने गम्भीर रचना हो। सुन्दर पदावली र प्रसादगुणयुक्त प्रस्तुति भएको यो रचना संवादात्मक शैलीमा लेखिएको छ । प्रश्न र उत्तरको ढाँचा भएकाले विषयप्रतिपादन अत्यन्त स्पष्ट, प्रभावकारी र सम्प्रेषणीय छ। यसले मानवजातिलाई सचेत र सावधान हुन सिकाएको छ। यस्तो अमूल्य ग्रन्थको अनुवाद आदिकवि भानुभक्त आचार्यले पनि 'प्रश्नोत्तरमाला' नामबाट गरेका थिए।

विषयको औचित्यलाई विचार गरी त्यस अनुवादका केही अंशलाई नेपालका विश्वविद्यालयहरूले ऐच्छिक नेपाली विषयको पाठ्यक्रममा समावेश गर्ने गरेको पाइन्छ। भानुभक्तपछि वर्तमान समयसम्म पनि केही विद्वान्ले यसको अनुवाद गर्ने र प्रकाशन गर्ने गरेको देखिन्छ । तर ती अनुवादमा कतै विषयप्रस्तुतिमा त्रुटि त कतै भाषिक कमजोरी लुकाउन नमिल्ने गरी देखा पर्छन् । यही परिवेश र पृष्ठभूमिमा अद्वैत वेदान्तका विद्वान् शरत्कुमार भट्टराईले यसको समछन्दमा अनुवाद गरी प्रकाशन गर्नु भएको हो । बाल्यकालमै आफ्नी गुरुमाता बालकुमारी (अनुवादकका पिताजीकी फुपू) ले उच्चारण गरेको सुन्नु, अध्ययन कालमा गुरुहरूबाट प्राप्त ज्ञानको संस्कार रहिरहनु, अनुवादकका मित्र हेमराज ज्ञवालीले यसैको अनुवाद गरेर प्रकाशन गरेको देख्नु र डा. स्वामी रामानन्द गिरिबाट अनुवाद गर्न प्रेरणा प्राप्त हुनुको परिणामस्वरूप यसको अनुवाद र प्रकाशन

भएको देखिन्छ। कहिलेकाहीँ अनुवाद मौलिक लेखनभन्दा पनि जटिल हुन्छ। मौलिक लेखनमा लेखक विचार वा भावको प्रकाशनमा स्वतन्त्र हुन्छ भने अनुवादक अर्काको विचार वा भाव तथा आफ्नो ज्ञानको सीमामा बाँधिन पुग्छ। आफ्नो विचार वा भावमा कुनै त्रुटि भए जति आलोचना हुन्छ त्यो भन्दा बढी भर्त्सना अरूको विचार वा भावको प्रकाशनमा सहनुपर्ने स्थिति पनि आउन सक्छ। यो चुनौतीलाई स्वीकार गर्दै, आफुले गरेको अध्ययनको विषयलाई प्रकाशन गर्ने अभिलाषा राख्दै र गुरुमाता बालकुमारीदेखि डा. स्वामी रामानन्दबाट समेत उत्प्रेरित र निर्दिष्ट हुँदै अनुवादकबाट यसको अनुवाद र प्रकाशन भएको हो।

शरत्कुमार भट्टराईले मणिरत्नमाला प्रश्नोत्तरीको भाषान्तर अनुवाद मात्र गर्नुभएको छैन, कुशल र कलात्मक अनुवाद गर्नुभएको छ। सुन्दर पदविन्यास भएको मूललाई नेपालीमा पनि लालित्यपूर्ण पदावली प्रयोग गरी विषयवस्तुको सरल प्रस्तुतीकरण भएको छ। संस्कृतका छन्दोबद्ध श्लोकहरूमा प्रायः अन्त्यानुप्रास हुँदैन। तर अनुवादकले नेपालीमा ल्याउँदा उपजाति छन्दको पूर्ण पालना गरी अन्त्यानुप्रासको आलङ्कारिक मिठास भरिदिनुभएको छ। यसले गर्दा प्रत्येक अनूदित पद्य मौलिक जस्ता बनेका छन्। विषय र प्रस्तुति दुवै दृष्टिले अनुवादकले मूल संस्कृतरूपप्रति न्याय गर्नुभएको त छँदै छ, त्यसलाई अझ सुन्दर र गरिमामय बनाइदिनु भएको छ। मूलको मर्मलाई आघात नपारी र शाब्दिक अनुवाद मात्र नगरी विषयको गहिराइमा प्रवेश गरी सामयिक र प्रिय बनाएर प्रस्तुति गर्ने सीप अनुवादकमा छ। उदाहरणका लागि मूलमा नरकको द्वार नारी भनिएको छ तर अनुवादकले 'नारी' का ठाउँमा अविद्या राखेर विषयको पनि सम्मान र नारीको पनि सम्मान गर्नुभएको छ। जस्तै –

मूल – संसारहृत्कः श्रुतिजात्मबोधः
को मोक्षहेतुः कथितः स एव।
द्वारं किमेकं नरकस्य नारी
का स्वर्गदा प्राणभृतामहिंसा॥

अनुवाद –	संसार नास्ने श्रुतिजन्यबोध
हो मोक्षको कारण सो प्रबोध ।
हो नर्कको कारण नै अविद्या
र मुक्तिको कारणमात्र विद्या ।। (श्लोक ३)

यसै गरी मूलमा त्याज्य वस्तु कनक (सुन) र कान्ता (पत्नी) भनिएकोमा अनुवादकले क्रमशः ममता र अविद्या भनेर बुझाउनु भएको छ । वेदान्तको गहन ज्ञान भएकै कारण यस्तो सार्थक अनुवाद भएको मान्न सकिन्छ । जस्तै –

मूल –	किं भूषणाद्भूषणमस्ति शीलं
तीर्थं परं किं स्वमनो विशुद्धम् ।
किमत्र हेयं कनकं च कान्ता
श्राव्यं सदा किं गुरुवेदवाक्यम् ।।

अनुवाद –	राम्रो छ के भूषण ? शील शुद्ध
र तीर्थ के हो ? मन नै विशुद्ध ।
के छोड्नु राम्रो ? ममता अविद्या
श्रोतव्य के हो ? गुरु वेदविद्या ।। (श्लोक ८)

यस अनुवादमा मूलको सङ्क्षेपीकरण गर्ने क्षमता पनि अनुवादकले देखाउनु भएको छ । मूलको 'मनोजबाण' अर्थात् कामदेवको वाण र 'ललनाकटाक्ष' अर्थात् सुन्दरीहरूको कर्के हेराइलाई नेपालीमा रत्तिएको र वेदान्तमा अत्यधिक प्रयोग भएको 'माया' शब्दबाट मीठोसँग बुझाइएको छ । जस्तै –

मूल –	शूरान्महाशूरतमोऽस्ति को वा
मनोजबाणैर्व्यथितो न यस्तु ।
प्राज्ञोऽथ धीरश्च समस्तु को वा
प्राप्तो न मोहं ललनाकटाक्षैः ।।

अनुवाद – शूराहरूमा अति को छ शूर ?
फस्तैन मायासँग जो छ शूर ।
ज्ञानी गुनी धीर छ को जगत्मा
लत्रिन्न मायासँग जो फगत्मा ॥ (श्लोक १२)

अल्पज्ञानी तर मोक्षको चाहना राख्ने वर्गलाई सरलतम शैलीमा मार्गनिर्देशन गरिएको छ। जस्तै –

मूल – वासो न सङ्गः सह कैर्विधेयो
मूर्खैश्च नीचैश्च खलैश्च पापैः ।
मुमुक्षुणा किं त्वरितं विधेयं
सत्सङ्गतिर्निर्ममतेशभक्तिः ॥

अनुवाद – को साथमा बोल्नु र बस्नु हुन्न ?
पापी भँडाहा खलसाथ हुन्न ।
मुमुक्षुले के अति शीघ्र गर्ने ?
सत्सङ्ग सन्तोष र भक्ति गर्ने ॥ (श्लोक १७)

एषणाको वशमा परेका पशुवद् व्यक्तिलाई वैराग्यबोध गरी ब्रह्मज्ञानको निवृत्तिमार्गतर्फ लाग्न उत्प्रेरित गर्न मूलको अंशभन्दा अनूदित श्लोक बढी प्रभावकारी देखिन्छ। जस्तै –

मूल – पशोः पशुः को न करोति धर्मं
प्राधीत शास्त्रोऽपि न चात्मबोधः ।
किं तद् विषं भाति सुधोपमं स्त्री
के शत्रवो मित्रवदात्मजाद्याः ॥

अनुवाद – को हो पशुको पशु ? जो अधर्मी
शास्त्रज्ञ भै जो छ अतज्ज्ञ कर्मी ।
सुधा सरीको विष के ? कुदारा
को शत्रु हुन् ? मित्र समान छोरा ॥ (श्लोक २९)



# अजातवाद २०७१ का भूमिकाबाट

[ अद्वैत वेदान्तको अध्ययनका सन्दर्भमा २०१८ सालमा लेखकले आदरणीय गुरु प्राध्यापक गोपालनिधि तिवारीज्यूबाट माण्डूक्योपनिषद् श्रवण गरेको थियो । परीक्षा उत्तीर्ण गरेपछि वेदान्तको श्रवण, मनन, निदिध्यासन गर्न छोडेर जीविकोपार्जनका लागि सरकारी सेवामा लेखक प्रविष्ट भयो । समयको तीन दशक लामु अवधिसम्म यतातिर सोच्ने अवकाशसम्म नपाएको लेखक सं. २०५० सालमा सरकारी सेवामा कार्यरत छँदाछँदै आफ्नो संस्कारअनुसार पुनः अद्वैतवेदान्तको श्रवण, मनन, निदिध्यासन र लेखनका साथै ब्रह्माभ्यासतर्फ प्रवृत्त हुन पुग्यो । तदुपरान्त यस दुई दशकको अन्तरालमा वेदान्तका गुरु, महात्मा, ज्ञानी संन्यासी र विद्वान्हरूबाट अद्वैतवेदान्तका गुह्य तथा महत्त्वपूर्ण सन्दर्भहरू सुन्ने र बुझ्ने अनुपम मौका लेखकले पायो । जसमा अद्वैतवेदान्तका अत्यन्त महत्त्वपूर्ण शास्त्रहरू माण्डूक्योपनिषद् र माण्डूक्यकारिका पनि पर्दछन् ।

माण्डूक्योपनिषद् १२ मन्त्रहरूमात्र भएको सङ्क्षिप्त उपनिषद् हो । यसको व्याख्याका रूपमा माण्डूक्यकारिका आएको देखिन्छ । जसमा आद्यजगद्गुरु श्रीशङ्कराचार्यको प्राञ्जल तथा विशद भाष्यसमेत छ । यसबाट उपनिषद् र कारिकाको समेत महत्त्व थाहा हुन्छ । माण्डूक्योपनिषद् अथर्ववेदीय ब्राह्मणभागअन्तर्गत पर्दछ । माण्डूक्य-कारिकाका लेखक गौडपादाचार्य श्रीशुकदेव स्वामीका शिष्य भएको भनाइ अद्वैतवेदान्तको गुरुपरम्परामा पाइन्छ । उहाँका कारिकाहरू अद्वैतवेदान्तको परम्परामा अत्युत्तम मानिन्छन् र अरूहरूका लागि पनि आदरणीय देखिन्छन् । कारिकाहरू अत्यन्त उदात्त र मर्मस्पर्शी छन् । कविता र साहित्यका दृष्टिकोणले पनि यिनको ठुलो महत्त्व देखिन्छ । यी कारिकाहरू अद्वैतसिद्धान्तका आधारशिला मानिन्छन् । कारिकामा सङ्क्षेपमा साधन, सिद्धान्त, परमतनिराकरण र स्वमतप्रतिष्ठापन समेतको शास्त्रसम्मत र

सयुक्तिक वर्णन पाइन्छ । यो ग्रन्थ जिज्ञासु मुमुक्षुका लागि अत्यन्त ग्रहणीय भएको कुरामा विद्वान्‌हरू एक मत देखिन्छन् ।

माण्डूक्यकारिकामा चारओटा प्रकरणहरू छन् । प्रथम आगमप्रकरणमा २९ कारिका, द्वितीय वैतथ्यप्रकरणमा ३८ कारिका, तेस्रो अद्वैतप्रकरणमा ४८ कारिका र चौथो अलातशान्तिप्रकरणमा १०० कारिका छन् । स्वरूपका दृष्टिकोणले स्वल्पकाय भए पनि सिद्धान्तका दृष्टिले यसको अत्यन्त ठुलो महत्त्व छ ।

प्रथम आगमप्रकरण हो । यसमा सम्पूर्ण माण्डूक्योपनिषद् र त्यसका व्याख्यात्मक कारिकाहरूका अतिरिक्त जगत् उत्पत्तिका धेरैथरी मतहरू देखाएर तिनको खण्डनसमेत गरिएको छ । अद्वैतसिद्धान्तअनुसार पूर्णकाम भगवान्‌को सृष्टि गर्नुमा कुनै प्रयोजन छैन र यो चाहिँ उहाँको स्वभाव नै भएको हो भन्ने सिद्धान्त स्थापना गरिएको छ । त्यतिमात्रै होइन, यो जुन सृष्टिप्रपञ्च देखिन्छ त्यो वास्तविक नभएर भ्रमले देखा परेको भनिएको छ ।

अत्यन्त विश्लेषणात्मक रूपमा माण्डूक्योपनिषद्‌मा ओङ्कारका तीन मात्रा 'अ', 'उ' र 'म्' द्वारा स्थूल, सूक्ष्म र कारणशरीरका व्यष्टिअभिमानी विश्व, तैजस र प्राज्ञको वर्णन गरिएको छ । त्यसै गरेर समष्टिअभिमानी वैश्वानर, हिरण्यगर्भ र ईश्वरका साथ अभेदरूपमा पनि वर्णन गरिएको छ । यिनीहरूको अभिव्यक्तिका अवस्थाहरूको पनि वर्णन गरिएको छ । जसमा क्रमिकरूपमा जाग्रत्, स्वप्न र सुषुप्ति अवस्थाहरू पर्दछन् । यिनीहरूका भोग स्थूल, सूक्ष्म र आनन्द क्रमैसँग हुन्छन् । यी सबैमा अनुस्यूत भएर चेतनतत्त्व रहेको छ । यही नै सबैको अधिष्ठान हो र यही साक्षी पनि हो । यसै साक्षीलाई उपनिषद्‌ले ओङ्कारको चतुर्थपाद अमात्र भनेको छ । यसैलाई तुरीय आत्माका रूपमा वर्णन गरिएको छ ।

तुरीय आत्मा नित्य, शुद्ध, आनन्दरूप, सर्वात्मा र सर्वसाक्षी हो । ऊ प्रकाशस्वरूप हो जसमा अन्यथाग्रहणरूप स्वप्न र तत्त्व अग्रहणरूप सुषुप्तिको सर्वथा अभाव छ । जुन समयमा अनादि मायाद्वारा सुतेको जीव जागा हुन्छ त्यसै समयमा उसलाई अजन्मा, स्वप्न र निद्राबाट रहित

यस अद्वैततत्त्वको बोध हुन्छ।

उपर्युक्त अनुसार आगमप्रकरणमा वस्तुको निर्देशन गरेर जीव र ब्रह्मको एकता र प्रपञ्चलाई मायामय भनेर प्रतिपादन गरिएको छ। दोस्रो वैतथ्यप्रकरणमा त्यसलाई युक्ति र उपपत्तिपूर्वक पुष्ट गरिएको छ। धेरैथरी युक्तिहरू दिएर सपनालाई मिथ्या भनेर सिद्ध गरिएको छ। यसैका आधारमा जाग्रत्कालीन दृश्यलाई पनि मिथ्या भनेर प्रतिपादन गरिएको छ। यसका साक्षीका रूपमा कुनै शाश्वत तथा अविनाशी चेतनतत्त्वको विद्यमानता हुनु आवश्यक छ, अन्यथा यो भनाइ कोरा कपोलकल्पना मात्र ठहरिने छ र अन्ततोगत्वा वैनाशिकको प्रलाप जस्तै ठहरिने छ। अतः यस्तो नभएर अद्वैत वेदान्तमा यो जाग्रत्, स्वप्न र सुषुप्तिसमेत सम्पूर्ण प्रपञ्च स्वयं प्रकाश आत्मा आफ्नो मायाद्वारा स्वयं नै कल्पना गर्दछन् र उनै परमब्रह्म सबै सांसारिक प्रपञ्च र भेदलाई समेत जान्दछन् भन्दै गौडपादाचार्यले यही नै वेदान्तको निश्चय हो भन्नुभएको छ।

उपर्युक्त अनुसार यसमा प्रपञ्चको प्रतीति मायाकै कारण भएको भनेर प्रतिपादन गरिएको छ। यसै मायाबाट नै भेदको प्रतीति हुन्छ। मायाको परिचय दिँदै मायालाई न सत्, न असत्, न सदसत्, न भिन्न, न अभिन्न, न भिन्नाभिन्न, न सावयव, न निरवयव र न उभयरूप नै हो भनिएको छ। वास्तवमा आफ्नो निजी स्वरूपको विस्मृति माया हो भनिएको छ। स्वरूपज्ञान वा स्वस्वरूपानुभूतिबाट नै बहुरूपा मायाको निवृत्ति हुने कुरा पनि कारिकाको वैतथ्यप्रकरणमा आएको छ। किनभने मायामोहित जीवको ब्रह्मज्ञानद्वारा मायाको आवरण नासिन्छ र एउटै मात्र अखण्ड, शाश्वत तथा अद्वैत वस्तु ऊ आफुमात्रै अवशिष्ट रहन्छ।

यसमा प्राणात्मवाद, भूतात्मवाद, गुणात्मवाद, तत्त्वात्मवाद, पादात्मवाद, विषयात्मवाद, लोकात्मवाद, देवात्मवाद, वेदात्मवाद, यज्ञात्मवाद आदि अनेकौँ मतवादहरूको उल्लेख गरिएको छ। अन्त्यमा यी सबै मतवादहरू मिथ्या र भ्रान्ति भन्दै न प्रलय छ, न उत्पत्ति छ, न कोही बद्ध छ, न कोही साधक छ, न कोही मुमुक्षु छ, न कोही मुक्त छ भन्दै यही नै परमार्थ भएको कुरा बताइएको छ।

परमार्थतत्त्व एक, अखण्ड, चिद्घन वस्तुलाई छोडेर उत्पत्ति, प्रलय, बद्ध, साधक, मुमुक्षु, मुक्त आदि द्वैतप्रपञ्च नभएको हुँदा अरू सबै मिथ्या हुन्, मायाको विलासमात्र हो । वस्तुतः सांसारिक द्वैत जन्मेकै छैन । अतः देखिएको सबै मिथ्या हो भन्दै यस वैतथ्यप्रकरणमा युक्तिपूर्वक द्वैताभावको प्रतिपादन गरिएको छ । जुन कुरा आगम-प्रकरणमा शास्त्रप्रमाणबाट अद्वैतमात्र भएको कुरा उल्लेख गरिएको थियो । यसमा आगमप्रमाण र युक्तिसमेतबाट द्वैतवादी कृपण र अद्वैतवादी अकृपण भएको कुरा देखाउन खोजिएको छ । किनभने समभावमा स्थित अजाति अर्थात् अजन्मा वस्तु नै अकार्पण्य हो ।

वैतथ्यप्रकरणमा सारा प्रपञ्च मिथ्या र खरायोको सीङ जस्तै अत्यन्त असत् भन्न खोजिएको छ । वस्तुतः जुन वस्तु आदि र अन्त्यमा हुँदैन अर्थात् भूतकालमा र भविष्यत्कालमा जुन असद्रूप हो त्यो वर्तमान कालमा देखिए पनि असत् नै हो । किनभने सांसारिक मायिक वस्तुहरू असत् भएर सत् जस्ता देखिएका हुन् ।

कारिकाको तेस्रो प्रकरण अद्वैतप्रकरण हो । यसमा अद्वय तत्त्वको प्रतिपादन गरिएको छ । श्रवण, मनन, निदिध्यासन आदिको लामु ब्रह्माभ्यासबाट कालान्तरमा जब मुमुक्षुलाई आत्मतत्त्वको बोध हुन्छ त्यसपछि चित्त सङ्कल्परहित हुन्छ । त्यसपछि मन अमनस्क हुन्छ । उसले संसारको कुनै वस्तुको ग्रहण गर्दैन । त्यो अग्रह निरोधजनित नभएर बाहिरी ग्राह्य वस्तुका अभावका कारणले नै भएको हो । यसलाई शास्त्रले ब्रह्माकाराकारित वृत्ति भनेको हो । यसैलाई ‘अस्पर्शयोग’ पनि भनिएको छ । अस्पर्शयोग भनेको निश्चय पनि योगीहरूलाई अत्यन्त मुस्किलले देखापर्दछ । अभयपदमा भय देख्ने योगीहरू यसबाट त्रस्त बन्दछन् । अद्वैत प्रकरणको अन्त्यमा गएर कुनै पनि जीव उत्पन्न हुँदैन, किनभने उत्पन्न हुनुपर्ने कारण नै छैन । जुन अजन्मा ब्रह्ममा कुनै कुराको उत्पत्ति हुँदैन त्यही नै सर्वोत्तम सत्य हो भन्दै अद्वैतप्रकरणको उपसंहार गरिएको छ ।

माण्डूक्यकारिकाको चौथो र अन्तिम प्रकरण अलात-शान्तिप्रकरण

हो। संस्कृतशब्द अनुसार अलात भनेको भुङ्ग्रो वा बल्दो अगुल्टो हो। अलात शब्दको प्रयोग संस्कृत साहित्य र दर्शनशास्त्रहरूमा प्रशस्त भएको पाइन्छ। महाकवि कालिदासले आफ्नो महाकाव्य 'कुमारसम्भवम्'मा अलात शब्दको प्रयोग गर्दै यमराज पनि आफ्नो त्यस तेजहीन दण्डले भुइँ कोतर्दछन्, जुन अमोघ भएर पनि आज आगो निभेको अगुल्टो जस्तो तुच्छ र व्यर्थ जस्तो भएको छ भनिएको छ।

यस प्रकरणमा बलेको अगुल्टाको प्रतीक दिएर आचार्यले यो दृश्यमान प्रपञ्च आगाको बल्दो अगुल्टाबाट निस्केको झिल्का जस्तै क्षणिक, मिथ्या र अस्तित्वहीन भनेर देखाउन खोज्नुभएको देखिन्छ। सृष्टिचक्र पनि आगोबाट निस्कने क्षुद्र झिल्काहरू जस्तै भएको वर्णन पुराणहरूमा पनि पाइन्छ।

अलातशान्तिप्रकरणमा प्रमाण र युक्तिसमेत दिएर प्रपञ्च मिथ्या हो भनिएको छ। आगाको बल्दो अगुल्टो घुमाउँदा आगाका नानाथरीका आकृतिहरू देखा पर्दछन्। साँच्चै भन्ने हो भने न त्यस अगुल्टाबाट कुनै आकृति निस्कन्छ न त त्यसमा फेरि गएर लीन नै हुन्छ। अगुल्टो घुमाउन छोडेपछि निस्कन बन्द हुन्छ। यदि अगुल्टाबाट निस्कने र फेरि त्यसैभित्र पस्ने भए घुमाउन छोडेपछि पनि निस्कनु र पस्नु पर्ने थियो। यस कुरालाई अद्वैतवेदान्तका दृष्टिले हेर्ने हो भने अगुल्टाका स्पन्दनबाट मात्रै सबै भएको हो। त्यसको खास अस्तित्व देखिँदैन। त्यसै गरेर यो सारा दृश्य प्रपञ्च केवल मनका स्पन्दनका कारण प्रतीत भएको हो। जब मन अमनीभावमा पुग्दछ तब यो सारा प्रपञ्च कपूर हावामा उडेझैँ गरेर हराएर जान्छ।

यो सम्पूर्ण प्रपञ्चको प्रतीति र अप्रतीति भ्रान्तिजनित हो। पारमार्थिक दृष्टिले न प्रपञ्चको उत्पत्ति हुन्छ न लय नै हुन्छ। सम्पूर्ण भ्रान्तिजन्य प्रपञ्चको आधार परब्रह्म नै हो। किनभने कुनै पनि भ्रान्ति अधिष्ठानविना निराधार रहन सक्तैन। जस्तै रज्जुविना सर्पको भ्रान्ति र शुक्तिविना रजतको भ्रान्ति हुन सक्तैन।

अलातशान्तिप्रकरणमा विभिन्न वादहरूको खण्डन गरेर आचार्यले

अजातवादको स्थापना गर्नुभएको छ । सयुक्तिक र सप्रमाण खण्डन गरिएका वादहरूमा सद्वाद, असद्वाद, बीजाङ्कुरसन्ततिवाद, विज्ञानवाद, शून्यवाद समेत प्रमुखवादहरू पर्दछन् । तिनको निराकरणपछि अजातवादको कुरा बुझ्न सुगम हुन्छ । त्यस कुरालाई एउटै कारिकामा सङ्क्षिप्तरूपले लोहोटामा महासमुद्र भरेझैँ गरेर आचार्यले भनुभएको छ। वस्तुतः कुनै पनि वस्तु न ता आफैँबाट उत्पन्न हुन्छ, न ता कुनै अरूबाट उत्पन्न हुन्छ । जसरी कुनै घट अहिलेसम्म उत्पन्न भएको छैन भने उसैबाट उही घटको कसरी उत्पत्ति हुनसक्तछ ? त्यसै गरेर तयार भएको घटबाट पनि अर्को कुनै घट कसरी उत्पन्न हुन्छ ? त्यतिमात्रै होइन सत् असत् अथवा सदसत्रूपबाट पनि कुनै वस्तुको उत्पत्ति हुन सक्तैन । जुन वस्तु छ त्यसको उत्पत्ति कसरी हुने ? जसको अत्यन्ताभाव छ, त्यसको पनि कसरी उत्पत्ति हुने ? र अत्यन्ताभावबाट पनि भावको कसरी उत्पत्ति हुने ? कुनै पनि वस्तुलाई छ र छैन पनि भन्न मिल्दैन । किनभने एउटै वस्तु छ र छैन हुन सक्तैन । यसरी विचार गर्दा कुनै प्रकारको कुनै पनि वस्तुको उत्पत्ति हुने सम्भावना नै छैन । अतः अजातवाद सिद्ध हुन्छ ।

उपर्युक्त भनाइलाई सशक्तरूपमा अघि बढाउँदै कारिका अगाडि भन्दछ – न ता असत्पदार्थ असत्को कारण हुनसक्तछ, न सत् पदार्थ नै असत्को कारण हुनसक्तछ, त्यसै गरेर सत् पदार्थ पनि सत्को कारण हुँदैन भने फेरि असत् नै सत्को कारण कसरी हुनसक्तछ ? अर्थात् हुनसक्तैन ।

निरालम्ब स्थितिको वर्णन गर्दै आचार्य फेरि अगाडि भन्नुहुन्छ कि जुन जुन धर्मको आग्रह हुन्छ त्यस सर्वविशेषशून्य परमार्थतत्त्व अनायास नै आच्छादित हुन्छ । त्यसरी आच्छादित भएपछि त्यस आवरणलाई भङ्ग गर्न कठिन हुन्छ । यसकारण ब्रह्म अत्यन्त दुदर्श हो । ब्रह्मलाई आच्छादन गर्ने मतमतान्तरहरू धेरैथरी छन् । तीमध्येमा कसैले ब्रह्म छ भन्दछ, कसैले छैन भन्दछ । कसैकसैले भन्दछन् ब्रह्म छ पनि छैन पनि । कसैकसैले जोड दिँदै छैन छैन भन्दछन् । यी सबै भनाइहरूमध्ये अस्तिभाव चल हो । किनभने घटादि अनित्य पदार्थहरू भन्दा यो विलक्षण हो । नास्तिभाव भने स्थिर हो । किनकि त्यसमा कुनै विशेषता छैन । अस्ति र नास्तिभाव

उभयरूप हो भने नास्ति नास्तिभाव अभावरूप हो आदि भनाइहरूबाट मूर्खहरू परमात्मालाई आच्छादित गर्दछन् र जान्न सक्तैनन् । किन्तु ब्रह्म यी सबै भावदेखि विलक्षण हो । माथि आएका मतमतान्तरहरू मायिक हुन् भने ब्रह्म मायातीत र सर्वभावातीत हो । जसले परमार्थतत्त्वलाई यसरी जान्दछ त्यो नै सर्वज्ञ हो ।

सम्पूर्ण वादीहरूका अल्पज्ञतापूर्ण कुदृष्टिहरूलाई खण्डन गर्दै श्रीगौणपादाचार्यले अन्त्यमा अजातवादको स्थापना गर्नुभएको छ । जुन अत्यन्त दुरूह र सामान्य वेदान्तीका लागि दुर्बोध पनि छ । अन्तिम परमार्थतत्त्व त्यो विशुद्ध ब्रह्म दुदर्श, अत्यन्त गम्भीर, अज, निर्विशेष र भेदशून्य हो भन्ने जानेर हामीहरू त्यस परमसत्तालाई बारम्बार नमस्कार गर्दछौँ भन्दै परमगुरु गौडपादाचार्य माण्डूक्यकारिकाको अलातशान्तिप्रकरणको उपसंहार गर्नुहुन्छ ।

अद्वैतवेदान्तको महाकाशमा माण्डूक्यकारिकाको ठुलो स्थान छ । यसलाई अद्वैतसिद्धान्तको परिष्कृत, सुस्पष्ट, सशक्त, सुसङ्गठित तथा सारगर्भित प्रथम निबन्ध भनिन्छ । कारिकाकार आचार्य गौडपादको जीवनी, देश, वंश र जीवनकालका बारेमा इदमित्थंरूपमा विद्वान्हरूले भन्न सकेका छैनन् । बङ्गालमा वेदान्तदर्शनको इतिहास भन्ने ग्रन्थका लेखक स्वामी प्रज्ञानानन्द सरस्वतीले उहाँलाई गौडदेशीय अर्थात् बङ्गाली भनेर लेखेका छन् । उनले प्रमाणका रूपमा नैष्कर्म्यसिद्धि ग्रन्थका ग्रन्थकार आचार्य सुरेश्वरको उक्त ग्रन्थबाट एउटा श्लोक दिएर प्रमाणित गर्न खोजेका छन् । त्यस श्लोकमा 'यसप्रकार हाम्रा पूज्य गौडपादाचार्य र द्राविड भगवत्पूज्यपाद श्रीशङ्कराचार्यले पनि अज्ञानमात्र उपाधि भएको अहङ्कारादिको साक्षी भएर जीवरूपले ब्रह्म रहेको छ' भनिएको छ । मुक्तिकोपनिषद्मा 'माण्डूक्यमेकमेवालं मुमुक्षूणां विमुक्तये' भनिएको छ । यसबाट पनि यसको महत्त्व र प्राचीनता थाहा पाइन्छ ।

वस्तुतः अद्वैतसिद्धान्त औपनिषद सिद्धान्त हो र अनादि पनि हो । आचार्यहरूले यसै परम्परालाई अगाडि बढाएका हुन् । त्यसै शृङ्खलामा गौडपादाचार्यको पनि अद्वैताकाशमा जाज्वल्य नक्षत्रका रूपमा उदय

भएको देखिन्छ। आफ्ना परमगुरुद्वारा प्रणीत यसै माण्डूक्यकारिकालाई समेत आधार बनाएर आद्यजगद्गुरु श्रीशङ्कराचार्यले अद्वैतसिद्धान्तलाई जोडदार र सशक्तरूपले अगाडि बढाउन सफल हुनुभएको हो भन्ने विद्वान्हरूको धारणा देखिन्छ।

गौडपादीय माण्डूक्यकारिकालाई अद्वैतसिद्धान्तको परम्परामा एउटा कोसेढुङ्गा वा प्रकाशस्तम्भका रूपमा उदारमना विद्वान्हरूले लिएका छन्। किन्तु केही सम्प्रदायका सीमित सीमाभित्र सीमित पूर्वाग्रहपीडित विद्वान्हरू भने यसमाथि कुदृष्टि राख्ने गर्दछन्। गौडपादको यो माण्डूक्यकारिका यद्यपि औपनिषद् ब्रह्मवादको स्थापनाका लागि प्रणीत हो तापनि भाव र भाषाका दृष्टिकोणले आदिदेखि अन्त्यसम्म माध्यमिक दर्शनको प्रभाव परेको स्पष्टै देखिन्छ भन्दै उनीहरूले यसको प्रमाणका लागि माण्डूक्यकारिकामा आत्माका विषयमा आएको अस्ति, नास्ति, अस्तिनास्ति र नास्तिनास्ति भन्ने चतुष्कोटियुक्त कारिकालाई अगाडि सारेका छन्। जसमा आत्मा सत्, असत्, सदसदुभयात्मक तथा सदसद्विलक्षण यी चारै कोटिमा कुनै कोटिबाट पनि स्पृष्ट छैन भनिएको छ।

चतुष्कोटिविनिर्मुक्त आत्मालाई जसले साक्षात्कार गरेको छ त्यो नै सर्वदर्शी र सर्वज्ञ हो भन्ने कारिकाहरूले देखाउँछन्। किनभने यी कारिकाहरूमा आएको चतुष्कोटिविनिर्मुक्त आत्माको कुरा गौडपादाचार्यभन्दा धेरै पहिले नागार्जुनबाट लेखिएको माध्यमिक कारिकामा आइसकेको हुँदा गौडपादाचार्यको माण्डूक्यकारिकामा उपर्युक्त भनाइ नागार्जुनका कारिकाको प्रतिध्वनिमात्र हो, उनको त्यो आफ्नो मौलिक भनाइ होइन भन्ने समालोचकको मत पाइन्छ। त्यतिमात्रै होइन, समालोचकले फेरि दुवै कारिकाहरूबाट एउटा एउटा कारिकाको उद्धरण गर्दै शून्यवादीको शून्य अथवा तत्त्व र गौडपादाचार्यको आत्मा प्रायः एकै प्रकारको देखिन्छ भनेका छन्। यस तुलनाबाट ती आलोचकहरूको विचारमा गौडपादाचार्यको अजातवाद पनि नागार्जुनरचित माध्यमिककारिकामूलक नै हो भन्ने देखिन्छ।

कुन कारिकाको प्रभाव कुन कारिकामा परेको हो अथवा केवल

काकतालीमात्र हो भन्ने सम्बन्धमा यस भूमिकाको उपान्ततिर गएर दुवै कारिकाहरूको रचनाकालसमेतको विवेचनाबाट पनि समीक्षा गर्ने प्रयास गरिनेछ। त्यसभन्दा अघि ती आलोचकहरूका केही विचारको यहाँ उद्धरण गर्नु अझै सान्दर्भिक हुनेछ। अद्वैत वेदान्तमा आएको व्यावहारिक सत्ता र पारमार्थिक सत्ताको विभाग वा सत्ताभेद बौद्धदर्शनका अति प्राचीन पालिसाहित्यहरूमा पाइन्छ। यो भेद अरू दर्शनहरूमा पाइँदैन भन्दै त्यसको प्रभावका साथै माण्डूक्यकारिकामा आएका केही पारिभाषिक शब्दहरू केवल बौद्धदर्शनका ग्रन्थहरूमा मात्रै पाइन्छन्, अन्यत्र पाइँदैनन् पनि उनले भनेका छन्। यस कारण पनि बौद्धदर्शन र आचार्य नागार्जुनरचित मध्यमकारिकाको प्रभाव गौडपादको माण्डूक्यकारिकामा परेको हो भन्ने उनीहरूको भनाइ पाइन्छ।

नागार्जुनको मध्यमकारिका अनुसार बौद्धदर्शनको शून्यवादी सिद्धान्तले दुईओटा सत्यलाई आधार मानेर उपदेश गर्दछ। ती हुन् लोकसंवृत्ति सत्य अर्थात् व्यावहारिक सत्य र पारमार्थिक सत्य।

उपर्युक्त सम्बन्धमा कुन कारिकाको प्रभाव कुन कारिकामा परेको हो वा खालि त्यस्तो संयोग मिल्न गएको हो भन्ने सम्बन्धमा दुवै आचार्यको आविर्भाव भएको समय, रचना र प्रभाव समेतको विश्लेषणबाट छुट्याउनु न्यायोचित हुने देखिन्छ। कालक्रम र गुरुपरम्पराअनुसार गौडपादाचार्यलाई श्रीशुकदेव स्वामीका साक्षात् शिष्य मानिन्छ। यसबाट भगवान् बुद्धभन्दा गौडपादाचार्यको समय प्राचीन मान्न सकिन्छ। बुद्धको समय गौडपादाचार्यको समयभन्दा पछाडि मानिएपछि बुद्धका अनुयायी नागार्जुनको समय बुद्धभन्दा प्राचीन हुने कुरै भएन। बुद्धका सिद्धान्तका आधारमा लेखिएको आचार्य नागार्जुनको मध्यमकारिका भगवान् बुद्धभन्दा निकै पछि लेखिएको इतिहासबाट थाहा हुन्छ। गौडपादाचार्यप्रणीत माण्डूक्यकारिकामा आचार्य नागार्जुनप्रणीत मध्यमकारिकाको प्रभाव नपरेर बरु त्यसको उल्टो मध्यमकारिकामा माण्डूक्यकारिकाको प्रभाव परेको हुनसक्तछ भन्ने तथ्य उपर्युक्त छोटो विश्लेषणबाट अनुमान गर्न सकिन्छ। अथवा कुनै प्रभाव कुनैमा पनि नपरेर केवल शब्दावली र

भावनासमेत मिल्न जानु काकताली वा संयोगमात्र हुनसक्तछ । दुवै आचार्यहरू आफ्नाआफ्ना दर्शनका मूर्द्धन्य विद्वान्हरू भएकाले उच्छृङ्खल प्रलाप गरेर कुनै आचार्यको पनि मानमर्दन गर्नु विद्वान्, समीक्षक र समालोचकको कर्तव्य होइन ।

व्यावहारिक सत्ता र पारमार्थिक सत्ताको विभाग वा भेद अरू दर्शनमा नभएर बौद्धदर्शनका अति प्राचीन पालिसाहित्य र ग्रन्थहरूमा मात्र पाइन्छ, तिनैको प्रभाव अद्वैत दर्शनमा, त्यसमा पनि खास गरेर गौडपादाचार्यका कारिकामा र शङ्कराचार्यका भाष्यहरूमा समेत परेको हो भन्ने आलोचकको जुन भनाइ छ त्यो भनाइ अध्ययनको अत्यन्त कमी र पूर्वाग्रहजन्य हो भन्ने स्पष्टै देखिन्छ । किनकि यी कुराहरू वेद, उपनिषद्, ब्राह्मण र आरण्यक ग्रन्थहरू समेतमा भएको तथ्य अध्ययनशील, गुणग्राही र पूर्वाग्रहरहित विद्वान्हरूले थाहा पाउनुभएकै विषय हो । जानकारीका लागि केही उदाहरण उपनिषद्बाट दिनु सान्दर्भिक ठान्दछु । जस्तै – व्यावहारिक सत्ता केवल वाणीमाथि अवलम्बित मायिक सत्ता हो । वस्तुतः पारमार्थिक सत्ता नै परम सत्ता हो । त्यतिमात्रै होइन परमार्थ अर्थात् पारमार्थिक सत्ता भूमा हो, महान् हो । व्यावहारिक सत्ता अल्प हो, जुन मायिक हो र त्रिपुटीको पेटभित्र पर्दछ । अतः भूमा अर्थात् पारमार्थिक सत्ताको जिज्ञासा गर्नुपर्दछ इत्यादि ।

उपर्युक्त अनुसार पूर्वाग्रहहीन भएर स्वच्छ र स्वस्थ बुद्धिले शास्त्रहरूको अध्ययन र आलोडन गर्ने हो भने अद्वैत दर्शनको विचार, पारिभाषिक शब्दावली र सिद्धान्तको बौद्धदर्शनमा, आचार्य नागार्जुन आदि आचार्यहरूका साथै सम्पूर्ण बौद्ध वाङ्मयमा परेको सजिलै थाहा पाइन्छ । केवल २५०० वर्षको छोटो अवधिमा सिर्जित बौद्धदर्शनको प्रभाव शाश्वत तथा अनादि वेदान्तदर्शनमा परेको भन्नु कुवाको अल्प पानीको प्रभाव अगाध समुद्रको जलमा पऱ्यो भन्नुजस्तै हो । अथवा वृद्ध हजुरबामा भर्खरै जन्मेको बालकको संस्कार पऱ्यो वा घटाकाशको प्रभाव महाकाशमा र एक अल्पज्ञ वा अज्ञको प्रभाव ब्रह्मज्ञानीमा पऱ्यो भन्नुजस्तै हास्यास्पद कुरा हो । किनभने अद्वैतदर्शन भनेको अपौरुषेय,

शाश्वत र अनादि ब्रह्मका निःश्वासभूत वेद, उपनिषद् आदि आकर ग्रन्थमा अवलम्बित र अनुप्राणित शाश्वत दर्शन हो। बौद्धदर्शन जस्तो लामु परम्परा र आकरग्रन्थशून्य एउटा अवतारी पुरुषको उपदेश र देशनामा अवलम्बित यो अद्वैतदर्शन होइन। अद्वैत दर्शन मुक्तिका लागि सुन्नुपर्ने, मनन गर्नुपर्ने र निदिध्यासन गर्नुपर्ने दर्शनहरूमध्येको अत्यन्त दर्शनीय र सर्वश्रेष्ठ दर्शन हो।

वनमा जसरी स्याल आदि क्षुद्रजन्तुहरू त्यति बेलासम्म हल्ला मच्चाइरहन्छन्, जतिबेलासम्म सिंहले गर्जना गर्दैन। सिंहको गर्जना सुनेपछि स्याल आदि क्षुद्र जन्तुहरू कुनामा गएर लुक्छन्। त्यसै गरेर त्यति बेलासम्म यी आस्तिक र नास्तिक दर्शनहरू मनगढन्त तथा कपोलकल्पित सिद्धान्त बोकेर वादविवाद मच्चाइरहन्छन्, जबसम्म अद्वैतवेदान्तरूपी सिंह गर्जंदैन। वेदान्तरूपी औपनिषद् दर्शन जब गर्जन थाल्दछ तब अरू क्षुद्रदर्शनहरू चुप लागेर भाग्दछन्। यसै कुरालाई गर्वोक्तिसाथ आचार्य श्रीहर्षले भन्नुभएको छ – जुन योद्धाले आफ्ना हातमा ब्रह्मतत्त्व नामको एउटा अमोघ ब्रह्मास्त्र लिएको छ र ऊ धीरवीर पनि छ भने उसले युद्धभूमिमा आफ्नो प्रतिद्वन्द्वीलाई भुसुनो जति पनि गन्दैन। त्यसै गरेर ब्रह्मज्ञानरूपी अस्त्र धारण गरेका ब्रह्मज्ञानीले अरू क्षुद्र दर्शनहरूलाई केही कत्ति नसम्झिएर शास्त्रार्थको रणभूमिमा सबैलाई जित्तछ।

कतिपय विद्वान्‌हरू अजातवादपरक योगवासिष्ठ महारामायणको हजारौँ पटक अध्ययन गरेर अद्वैतसिद्धान्तको शिखरमा पुगेका गौडपादाचार्यले अद्वैतवेदान्तको अत्यन्त निचोड अर्थात् सारमात्रैको सङ्ग्रह गरेर माण्डूक्योपनिषद्‌को छत्रछायामा माण्डूक्यकारिकाको रचना गर्नुभएको हो भन्दछन्। वस्तुतः उक्त भनाइ सत्य देखिन्छ। यसै कारण यस ग्रन्थको नाम अजादवाद रहन गएको हो। ]

# अजातवाद २०७१

उप र नि उपसर्ग पूर्वमा हुने षद्‌लृ धातुका विशरण (दुर्बल बनाउनु), गति (प्राप्त गर्नु) र अवसादन (नाश गर्नु) भन्ने तीनथरी अर्थ हुन्छन्। यी तीनै थरी

अर्थलाई एकत्रित गरी हेर्दा उपनिषद् भनेको त्यो आत्मविद्या, रहस्यविद्या, ब्रह्मविद्या वा पराविद्या हो जसको अनुशीलनबाट जीवको अज्ञान प्रतिदिन दुर्बल हुँदै जान्छ, जुन विद्याले जीव र परमात्माको एकताको ज्ञान गराउँछ र जसको अनुशीलनद्वारा अन्त्यमा कार्यसहित अज्ञानको निवृत्ति हुन्छ त्यो विद्या हो भन्ने बुझिन्छ। ब्रह्मविद्या, आत्मविद्या, अध्यात्मविद्या, पराविद्या, अमृतविद्या, वेदान्त, उपनिषद् आदि शब्दहरूबाट बुझिने तात्त्विक अर्थ एउटै हो र त्यही अर्थमा उपनिषद् शब्दको प्रयोग लामो समयदेखि हुँदै आएको छ। चारै वेदका सयौं उपनिषद् प्रसिद्ध छन्। तिनमा पनि आद्य जगद्गुरु शङ्कराचार्यले प्रौढ भाष्य लेखेका कारण ११ उपनिषद् सुप्रसिद्ध छन्। ती ११ उपनिषद्हरूमध्ये १२ मन्त्रहरूमात्र भएको माण्डूक्योपनिषद् आकारका दृष्टिबाट सानो तर ज्ञानको दृष्टिले विशिष्ट मानिन्छ। मुण्डक ऋषिले आफ्नो समाधि अवस्थामा साक्षात्कार गरेका कारणबाट माण्डूकयोपनिषद् भनिएको हो। यस उपनिषद्का विषयमा मुक्तिकोपनिषद्मा मुमुक्षुहरूको मोक्षका लागि एउटै माण्डूक्योपनिषद्को अध्ययन पर्याप्त छ भनिएकोबाट पनि यस उपनिषद्को विषयको गाम्भीर्य अवगत हुन्छ। माण्डूक्योपनिषद्को मुख्य प्रतिपाद्य विषय वाचक ओङ्कारको निरूपणद्वारा ओङ्कारवाच्य तुरीय ब्रह्मतत्त्वको साक्षात्कार गराएर जीवहरूलाई सदाका लागि दुःखबाट निर्मुक्त गर्नु हो। यही गहन विषयको प्रतिपादन माण्डूक्योपनिषद्को प्रौढ तर सुस्पष्ट नेपाली अनुवाद 'अजातवाद' को पूर्वार्ध खण्ड हो।

माण्डूक्योपनिषद्को गहन अद्वैत वेदान्तपरक रहस्यमय अर्थलाई प्रकाशित गर्ने उद्देश्यले शुकदेवका शिष्य तथा आद्य जगद्गुरु शङ्कराचार्यका परम गुरु गौडपादाचार्यले २१५ कारिकाहरूको रचना गरेका हुन् जसलाई गौडपादकारिका भनिन्छ। गौडपादकारिकामा वज्रतुल्य अभेद्य तर्क, प्रमाण र युक्तिहरूद्वारा द्वैतको मिथ्यात्वलाई सिद्ध गरी अद्वैतवादको स्थापना गरिएकाले अद्वैत वेदान्तमा यसको विशिष्ट योगदान छ। भारतका लब्धप्रतिष्ठ विद्वान्हरूले स्वीकार गर्नु र विश्वका प्रसिद्ध विश्वविद्यालयहरूमा अध्ययन, अध्यापन र अनुसन्धान समेत भइरहनुबाट यस कारिकाको महत्त्व

आकलन गर्न सकिन्छ । आगमप्रकरण, वैतथ्यप्रकरण, अद्वैतप्रकरण र अलातशान्तिप्रकरण गरी चार प्रकरणमा विभक्त यस कारिकाको समछन्दमा पद्यमा गरिएको नेपाली अनुवाद 'अजातवाद' को उत्तरार्ध खण्ड हो । यसरी माण्डूक्योपनिषद्को गद्यानुवाद र गौडपादकारिका वा माण्डूक्यकारिकाको समछन्दको पद्यानुवादको संयुक्त रूप नै 'अजातवाद' हो । अद्वैत वेदान्तका दुरूह दार्शनिक ग्रन्थको सरल एवं सुसचिपूर्ण नेपाली अनुवाद गरी अनुवादकले मुमुक्षुगणको उपकार नै गर्नु भएको छ ।

'अजातवाद' वेदान्तको गहन विषय प्रतिपादनका दृष्टिबाट मात्र नभई डा. स्वामी रामानन्द गिरिको विद्वत्तापूर्ण र अनुवादकको अनुसन्धानपूर्ण भूमिकाका कारणबाट पनि थप महत्त्वशाली बनेको पाइन्छ । डा. स्वामी रामानन्द गिरिले उपनिषद्को अर्थ, माण्डूक्योपनिषद्को प्रतिपाद्य विषय, माण्डूक्यकारिका वा गौडपादकारिकाको महत्त्व र यसको अनुवादका विषयमा सङ्क्षेपमा सारगर्भित रूपमा स्पष्ट पारेको पाइन्छ भने अनुवादकले आफ्नो भूमिकामा कारिकाका चारओटै प्रकरणमा निबद्ध विषयवस्तुको सूचना दिई यसलाई अद्वैत सिद्धान्तको परिष्कृत, सुस्पष्ट, सशक्त, सुसङ्गठित र सारगर्भित प्रथम निबन्धका रूपमा स्थापित गरेको देखिन्छ । अद्वैत वेदान्तको गहन दर्शनलाई बुझ्न विद्वद्जनद्वयको प्रौढ र परिष्कारपूर्ण भूमिकाले पनि भूमिका खेलेको छ । यसबाट विषयवस्तु बुझ्न र विश्लेषणात्मक दृष्टिकोणको विवेचना गर्न सहयोग पुगेको छ ।

गौडपादाचार्यको माण्डूक्यकारिका अद्वैत वेदान्तको परम्परामा एउटा कोसेढुङ्गा हो भने द्वैतवादीहरूका विरुद्धको सिंहनाद पनि हो । यथार्थ यही हो तापनि सम्प्रदाय विशेषका सीमाभित्र सीमित केही पूर्वाग्रहग्रस्त विद्वान्हरूले माण्डूक्यकारिकामा उल्लिखित केही पद र पदावलीलाई आफु अनुकूल व्याख्या गरी खास गरी आत्माका विषयमा व्यक्त मत गौडपादाचार्यभन्दा धेरै पहिले नागार्जुनबाट लेखिएको माध्यमिककारिकासँग मिल्दोजुल्लो भएकाले गौडपादाचार्यको मत नागार्जुनका कारिकाको प्रतिध्वनि मात्र हो, मौलिक होइन भन्ने प्रवाद फैलाएको प्रसङ्ग उल्लेख गरी अनुवादकले

सोको युक्तिपूर्वक खण्डन गर्नुभएको छ। शुकदेव स्वामीका साक्षात् शिष्य गौडपादाचार्यमा पच्चीस सय पचास वर्ष पहिलेको हाराहारीमा जन्मेका बुद्धभन्दा पनि पछिल्ला नागार्जुनको कारिकाको प्रभाव पर्‍यो भन्नु कुतर्क र बौद्धिक दारिद्र्यको नमुना भएको प्रखर दृष्टिकोण अनुवादकले अघि सार्नुभएको छ । परमात्मा, परमेश्वर, परब्रह्मका निःश्वास भूत वेद र उपनिषद् जस्ता आकरग्रन्थमा वर्णित शाश्वत वेदान्तदर्शनमा नागार्जुनको मध्यमकारिकाको प्रभाव छ भन्नु वृद्ध हजुरबुबामा सद्योजात नातिको संस्कारको प्रभाव पर्‍यो भन्नुजस्तै हो भन्ने रसिलो र रमाइलो तर्क गरेर दुराग्रही साम्प्रदायिक कथित विद्वान्‌हरूको मत खण्डन गरी प्रवादको समाधान गरिएको छ । यसरी 'अजातवाद' अनुवाद, दर्शन, समीक्षा, विश्लेषण र अनुसन्धानको गुणसन्निपात बनेको पाइन्छ।

माण्डूक्योपनिषद् र माण्डूक्यकारिकाको अनुवाद भएको ग्रन्थलाई यी नाम नदिईकन 'अजातवाद' भनिएको छ, जसबारे पाठकहरूमा जिज्ञासा उठ्नु स्वाभाविकै हो। विद्वान्‌हरूको भनाइ अनुसार अजातपरक योगवासिष्ठ महारामायणको हजारौं पटक अध्ययन गरेर अद्वैत सिद्धान्तको शिखरमा पुगेका गौडपादाचार्यले अद्वैत वेदान्तको सारमात्र सङ्ग्रह गरेर माण्डूक्योपनिषद्‌को दर्शनसरणिलाई अनुसरण गरी माण्डूक्यकारिकाको रचना गरेकाले यस ग्रन्थको नामकरण 'अजातवाद' भएको भन्ने स्पष्टीकरण अनुवादकले दिनुभएको छ । ग्रन्थको प्रारम्भमा १५ ओटा श्लोकमा लेखिएको 'समर्पण' शीर्षकको रचनाले अनुवादकको वेदान्तविज्ञता र कवित्वको पहिचान दिएको छ। यहाँ अजातवादलाई सङ्क्षेपमा यसरी चिनाइएको छ –

कहिल्यै छैन जन्मेको यो संसार सुनिश्चित।<br>
अजातवाद यो नै हो बुझ्नुपर्दछ निश्चित ॥

मूलमा रहेको अद्वैत वेदान्तको दार्शनिक चिन्तनलाई अनुवादकले अत्यन्त स्पष्ट र सरल शैलीमा उतार्नुभएको छ। माण्डूक्योपनिषद्‌को अनुवादबाट एउटा उदाहरण यसरी देखाउन सकिन्छ –

मूल – एष सर्वेश्वर एष सर्वज्ञ एषोऽन्तर्याम्येषु योनिः सर्वस्य प्रभवाप्ययौ हि भूतानाम् ।

अनुवाद – यी सबैका ईश्वर हुन् यी सर्वज्ञ हुन् । यी अन्तर्यामी हुन् र सम्पूर्ण जीवहरूका उत्पत्ति तथा लयको स्थान भएका कारण उनी सबैका कारण हुन् । (पृ.३७)

यसै गरी माण्डूक्यकारिकाका प्रत्येक प्रकरणबाट नमुनाका लागि एउटा एउटा उदाहरण यसरी प्रस्तुत गर्न सकिन्छ –

**आगमप्रकरण**

मूल – प्रणवं हीश्वरं विद्यात्सर्वस्थ हृदि संस्थितम् ।
सर्वव्यापिनमोङ्कारं मत्वा धीरो न शोचति ।।

अनुवाद – सबैका स्वान्तमा बस्ने यो हो प्रणव ईश्वर ।
सर्वभू यो भनी जाने हुन्छ मानिस विज्वर ।। (पृ.४७)

**वैतथ्यप्रकरण**

मूल – तस्मादेवं विदित्वैनमद्वैते योजयेत्स्मृतिम् ।
अद्वैतं समनुप्राप्य जडवल्लोकमाचरेत् ।।

अनुवाद – यसरी सब जानेर अद्वैतमा दिई मन ।
भई अद्वैत आफैं नै लोकमा जडभैं बन ।। (पृ.५६–५७)

**अद्वैतप्रकरण**

मूल – न कश्चिज्जायते जीवः सम्भवोऽस्य न विद्यते ।
एतत्तदुत्तमं सत्यं यत्र किञ्चिन्न जायते ।।

अनुवाद – जीव उत्पन्न नै हुन्न छैन कारण वस्तुतः ।
उत्पत्ति ब्रह्ममा छैन ब्रह्म हो सत्य नै स्वतः ।। (पृ.६९)

**अलातशान्तिप्रकरण**

मूल – आदावन्ते च यन्नास्ति वर्तमानेऽपि तत्तथा ।
वितथैः सदृशाः सन्तोऽवितथा इव लक्षिताः ।।

अनुवाद – आदिमा अन्त्यमा छैन त्यो छैन अहिले पनि ।
असत् पदार्थ देखिन्छन् व्यर्थमा सत्य भैं बनी ।। (पृ.७७)



# ब्रह्मानुभूति २०७२ का भूमिकाबाट

(अपरोक्षानुभूति)

[पाँच दशकभन्दा लामो समयदेखि अहिलेसम्म यस अनुवादकले आचार्य शङ्करका ग्रन्थहरू र केही भाष्यहरूसमेत अध्ययन गर्ने र अनुवादसमेत गर्ने सौभाग्य पाएको हो। किन्तु उहाँका भाष्यबाहेकका अरू ग्रन्थहरूमा भने अनुवादकले कलम चलाएको थिएन। यस पटक भने अरू ग्रन्थहरूलाई छोडेर आचार्यको ग्रन्थ अपरोक्षानुभूतिको समछन्दमा नेपालीमा अनुवाद गर्ने यस अनुवादकले विचार गऱ्यो र सो अनुवाद चाँडै पूरा पनि भयो। अनुवाद पछि यसको नाम 'ब्रह्माऽनुभूति' हुन गयो।

यस ग्रन्थमा श्रीशङ्कराचार्यको तत्त्वबोध, आत्मबोध, विभिन्न भाष्यहरू र ग्रन्थहरूमा समेत उल्लेख भएका महत्त्वपूर्ण कुराहरू आचार्यले एकै ठाउँमा सङ्ग्रह गरेर सङ्क्षिप्त, सरल, सुस्पष्ट भाषा र शैलीमा दिनुभएको छ। जसमा मुख्यरूपमा अनुबन्धचतुष्टय, साधनचतुष्टय, अज्ञानको स्वरूप, ज्ञानको स्वरूप, शून्यवादको निराकरण, ब्रह्म, जीवब्रह्मैक्य, प्रपञ्चको मिथ्यात्व, अवस्थात्रयको मिथ्यात्व, प्राब्धकर्म, यमनियमादि अष्टाङ्गयोग, श्रवण, मनन, निदिध्यासन, वेदान्तसिद्धान्त, ब्रह्म, राजयोग आदि महत्त्वपूर्ण विषयहरू पर्दछन्।

यस ग्रन्थमा अनुष्टुप् छन्दमा लेखिएका १४४ श्लोकहरू छन्। यसमा प्रायः सबैजसो वेदान्तका मुख्यमुख्य विषयहरू समावेश गरेको पाइन्छ। यसमा आचार्य विद्यारण्य स्वामीको अत्यन्त विद्वत्तापूर्ण तर सरल संस्कृतमा लेखिएको दीपिका टीका समेत छ।

अज्ञानीहरू यस अखिल विश्वब्रह्माण्डको सर्जक परमात्मा परब्रह्मको बारेमा कहिल्यै पनि सोच्ने प्रयास गर्दैनन् र नगरीकन नै कालको मुखमा कवलित हुन पुग्दछन्। त्यतिमात्रै होइन अज्ञानीहरू सर्जक परमात्माका बारेमा थाहा नपाईकन उनको विचित्रको सिर्जनामा

डुबुल्की मारेर हराइरहेका हुन्छन् । यस मिथ्या संसारलाई नै सत्य मानेर रमाइरहेका हुन्छन् । किन्तु यस विचित्रको मिथ्या संसारको स्रष्टा, पालक र संहारक सर्वव्यापक ब्रह्मको भने अज्ञानीले झल्को नै पाउन सकेको हुँदैन । अज्ञानीले निष्पट्ट अन्धकारमा बसेर अमूल्य नरजीवन बिताउँछ र अन्धकारबाट फेरि अन्धकारतर्फ जान्छ । मनुष्यको जस्तो दुर्लभ योनि पाएर पनि ब्रह्मज्ञान नै नगरीकन यस लोकबाट बिदा भएर जाने मान्छेलाई श्रुतिले आत्मघाती भनेको छ । त्यस्ता आत्मघातीहरू मृत्युपश्चात् अन्धकारपूर्ण असुर्या नाम गरेको लोकमा जान्छन् । त्यस्ताको कहिल्यै मुक्ति हुँदैन ।

अज्ञानी मनुष्यले आफ्नो अमूल्य जीवन विधि र निषेधपरक कर्महरू गरेर बिताइरहेको हुन्छ । घाम उदाउने र अस्ताउने क्रममा उसको आयु समाप्त भइरहेको हुन्छ । अत्यन्त अन्धो मान्छेले सांसारिक नाफा र नोक्सानको हिसाब गर्दागर्दै आफु बुढो भएकोसम्म पनि थाहा पाउने कोसिस गर्दैन । अज्ञानी मनुष्य यतिसम्म अन्धो हुन्छ कि आफ्नै आँखा अगाडि मान्छे जन्मेको, बुढो भएको, विपत्तिमा परेको र मृत्युमा प्राप्त भएको प्रत्यक्षरूपमा झलझली देखेर पनि पटक्कै डराउँदैन, मेरो पनि गति यही हो भन्ने सम्झँदैन । किनभने उसको त्यसो हुनु संसारप्रतिको अत्यन्त आसक्तिको कारणले नै हो । वस्तुतः अज्ञानी मनुष्य प्रमादरूपी मदिरा पिएर उन्मत्त भएको हुन्छ, बेहोस भएको हुन्छ र बेसुद्धि हुन्छ, जसरी टन्न रक्सी पिएको मान्छेले आफु नाङ्गो भएको पनि थाहासम्म पाउँदैन र सबै एकछत्त देख्तछ । संसारप्रति हिरिक्क हुने अज्ञानी मान्छे पनि त्यस्तै मदमत्त अन्धो नै हो ।

मिथ्या प्रपञ्चलाई नै सत्य मानेर रमाउँदा रमाउँदै अज्ञानी मनुष्यका दिन, रात, बिहान, बेलुका, शिशिर, वसन्तादि ऋतुहरू आउने जाने गरिरहन्छन् । कालचक्र उसको आयु काटेर घुमिरहेको हुन्छ, तर संसाररूपी आसक्ति भने झन् बढ्दछ तर घट्तैन र अज्ञानीलाई त्यसै आशक्तिजन्य वासनाले अन्धो बनाएको हुन्छ । त्यो कहिल्यै पारै नपाउने संसृतिको चक्रवालमा परेर जन्मने र मर्ने गरिरहन्छ ।

यदि मानिसले अत्यन्त घोरिएर यस सपनाजस्तो मिथ्या संसारको आशक्ति छोडेर म को हुँ ? मभन्दा भिन्न ऊ को होला ? म कहाँबाट आएको हुँ ? मेरी आमा को हुन् ? मेरा बाबु को हुन् ? हाम्रो भेट यस सपनाजस्तो असार संसारमा कसरी र किन भएको होला ? भन्ने इत्यादि प्रश्नहरू आफैंले गर्ने गरे पनि अज्ञानीले ज्ञानको किरण आफुभित्र झुल्क्याउन सक्तछ । उसले सपनाजस्तो संसारलाई ठानेर बिस्तारै निष्काम कर्म, अहैतुकी भक्ति गर्दै अन्तःकरणमा रहेको मलदोष र विक्षेप दोष हटाएर आवरण दोष भङ्ग गर्न ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष ऊ पुग्न सक्तछ । किन्तु यसका लागि आत्मकृपा, शास्त्रकृपा, गुरुकृपा र ईश्वरकृपा हुनु आवश्यक छ । यसका साथै प्रारब्ध कर्म पनि अनुकूल हुनै पर्दछ। अन्यथा अज्ञानीले निस्तार पाउन अत्यन्त मुस्किल पर्दछ ।

मुमुक्षु जिज्ञासुले ब्रह्मज्ञानका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष गएर उपसत्तिपूर्वक ब्रह्मजिज्ञासा गर्नुपर्दछ । साधनचतुष्टययुक्त शिष्यले अनुशासित र समर्पित भएर गुरुको सेवा गरेर गुरुलाई खुसी पारेर गुरुमा भएको ब्रह्मविद्या जान्ने प्रयत्न गर्नुपर्दछ । गुरुमा भएको त्यो विद्या भूमिको गर्भमा रहेको जल जस्तै अगम्य र अप्राप्य हो । अतः त्यसका लागि मुमुक्षु शिष्यले प्रयत्न गरेर पाउने प्रयास गर्नुपर्दछ, अन्यथा मुक्ति सम्भव छैन ।

ब्रह्मज्ञानका लागि वा ब्रह्मसाक्षात्कार गर्न योग्य मुमुक्षु शिष्यले सर्वप्रथम गुरुबाट वेदान्तवाक्यहरूको श्रवण गर्नुपर्दछ । त्यसपछि उपपत्तिपूर्वक मनन र दृढताका लागि निदिध्यास गर्नुपर्दछ । त्यसको लामु समयसम्म अभ्यास अर्थात् ब्रह्माभ्यास गर्नु पर्दछ । यिनीहरू नै ब्रह्मसाक्षात्कारका साक्षात् साधनहरू हुन् । निष्कामकर्म र उपासना आदि साक्षात् साधन नभएर ती बहिरङ्ग वा परम्परया साधनहरू हुन् । अपरोक्षानुभूतिमा यिनै कुराहरूलाई समेटेर राखिएको छ ।

मुमुक्षुले दुरूह र दुर्लभ ब्रह्मज्ञान गर्नेपर्ने आत्यन्तिक मोक्षका लागि

हो । क्षणिक मुक्तिले संसारको आवागमनलाई सधैँका लागि निमिट्यान्न पार्न सक्तैन । जबसम्म जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि अन्तःकरणमा जमेर बसेका वासनाहरूलाई मुमुक्षुले भुसुक्क पारेर डढाउन सक्तैन तबसम्म उसले आत्यन्तिक मोक्ष प्राप्त गर्न सक्तैन । जसरी दनदन बलेको आगोले सारा दाउराको थुप्रोलाई खरानी पारेर डढाइदिन्छ त्यसै गरेर ब्रह्मज्ञानरूपी जाज्वल्यमान आगोले अन्तःकरणमा थुप्रिएर रहेका सञ्चित, क्रियमाण र आगामी सबै कर्मलाई डढाइदिन्छ । कर्मको फल भोगाउन वर्तमान शरीरको प्रारम्भक प्रारब्धकर्मलाई भने ब्रह्मज्ञानले नाश गर्न सक्तैन । किनभने यो शरीरलाई सृजना गर्ने प्रारब्धकर्म शरीरपातसँगै नाश हुन्छ, बीचमा नाश हुँदैन ।

भोग्न सुरु भएको प्रारब्धकर्म भोग गरेर नै समाप्त हुन्छ र सञ्चितकर्म ब्रह्मज्ञानद्वारा समाप्त हुन्छन् । त्यसपछि जीवको आत्यन्तिक मोक्ष हुन्छ भन्ने कुरा आद्य जगद्गुरु श्रीशङ्कराचार्यले आफ्ना तत्त्वबोध लगायतका ग्रन्थहरूमा लेख्नुभएको छ । यसका साथै गीता ४।३७ को भाष्य, छान्दोग्योपनिषद् ६।१४।२, ५।१४।३, बृहदारण्यकोपनिषद् ४।४।२२, मुण्डकोपनिषद् २।२।८, ब्रह्मसूत्र ४।१।९।१३, ४।१।११।१५, ४।१।१४।१९ का भाष्यहरूमा समेत सञ्चित कर्म ब्रह्मज्ञानबाट नाश हुने र प्रारब्धकर्म भने भोग गरेर मात्र नाश हुने भनेर उहाँले स्पष्ट नै लेख्नुभएको छ। किन्तु यस अपरोक्षाऽनुभूतिग्रन्थको ८९ औँ श्लोकदेखि ९९ औँ श्लोकसम्म प्रारब्धकर्मको चर्चा गरिएको छ र ब्रह्मज्ञान भएपछि सञ्चित कर्मको साथसाथै प्रारब्धकर्मको पनि नाश हुन्छ भनिएको छ। यसको पुष्टि गर्न ९८ औँ श्लोकमा मुण्डकोपनिषद् (२।२।८) मन्त्रको पनि उद्धरण गरेर त्यस मन्त्रमा कर्माणि भन्ने बहुवचन आएको हुँदा प्रारब्ध कर्मको समेत नाश हुन्छ भनिएको छ। किन्तु उपनिषद्मा आएको उक्त मन्त्रको भाष्यमा भने उहाँले देहारम्भक प्रारब्ध कर्मबाहेक अरू कर्मको नाश हुन्छ भनेर लेख्नुभएको छ । आफैँले लेखेको भाष्य र यस ग्रन्थका बीचमा यस्तो अमिल्दो कुरा कसरी लेखिन गयो ? विचारणीय छ। ]

# ब्रह्मानुभूति (अपरोक्षानुभूति) २०७२

यो ग्रन्थ आद्य जगद्‌गुरु शङ्कराचार्यद्वारा संस्कृत भाषामा लिखित 'अपरोक्षानुभूतिः' को समछन्दमा नेपालीमा गरिएको अनुवाद हो । अनुवादक शरत्कुमार भट्टराईले आचार्य शङ्करको 'अपरोक्षानुभूति'लाई नेपालीमा अनुवाद गर्दा ब्रह्मानुभूति शीर्षकीकरण गर्नुभएको देखिन्छ । मूल ग्रन्थमा आचार्य शङ्करले आफ्ना विभिन्न ग्रन्थहरूमा उल्लिखित वेदान्तप्रधान विभिन्न विषयहरूको सारपूर्ण सङ्ग्रहका रूपमा अनुष्टुप् छन्दका १४४ श्लोकको प्रणयन गरेको देखिन्छ। यसमा आचार्य विद्यारण्य स्वामीको सरल संस्कृतमा लिखित विद्वत्तापूर्ण दीपिका टीका पनि छ । अनुवादकले मूल ग्रन्थको साङ्गोपाङ्ग अध्ययन, अनुशीलन, चिन्तन र मनन एवम् दीपिका टीकाको तुलनीय समीक्षण समेत गरी प्रस्तुत ग्रन्थको रचना गर्नुभएकाले यसको गहनता, प्रामाणिकता, औचित्य र आवश्यकता स्वतः सिद्ध हुन्छ ।

भोग्न प्रारम्भ गरिएको प्रारब्धकर्म भोग गरेर र सञ्चित कर्म ब्रह्मज्ञानद्वारा समाप्त हुन्छ, त्यसपछि जीवको आत्यन्तिक मोक्ष हुन्छ भन्ने औपनिषद सिद्धान्त हो । यो सिद्धान्त शङ्कराचार्यका मौलिक ग्रन्थ एवम् भाष्यग्रन्थहरूमा पनि संस्थापित छ । किन्तु अपरोक्षानुभूतिको ८९ औं श्लोकदेखि ९९ श्लोकसम्म प्रारब्धकर्मको चर्चाका क्रममा ब्रह्मज्ञान भएपछि सञ्चित कर्मका साथै प्रारब्धकर्मको पनि नाश हुन्छ भन्ने अभिमत व्यक्त भएको प्रमाणपूर्ण प्रसङ्ग उल्लेख गर्दै अनुवादकले शङ्कराचार्यका औपनिषद भाष्यग्रन्थ र प्रकृत ग्रन्थ अपरोक्षानुभूतिको तुलनात्मक र अनुसन्धानपूर्ण टिप्पणी गरेर यसको उपादेयतालाई द्विगुणित बनाउनुभएको छ । उपशीर्षक, संस्कृतको मूल र समछन्दमा नेपाली अनूदित पद्यसमेत एकत्र समावेश गरेर यस ग्रन्थलाई पाठकोपयोगी पनि बनाइएको छ । वेदान्तका विभिन्न पारिभाषिक शब्द एवम् प्रसङ्गहरूसँग स्पष्ट हुन पनि यसको आवश्यकत बढेको अनुभव गर्न सकिन्छ । अझै जिज्ञासुहरूका लागि स्पष्ट बुझ्न ग्रन्थको भूमिकाको केही अंश पनि उद्धृत गरिएको छ ।



# द्रष्टा र दृश्य २०७२ का भूमिकाबाट

[ अनन्त विश्वब्रह्माण्ड, चर, अचर, स्थूल, सूक्ष्म, दृश्य, अदृश्य आदि सम्पूर्ण सृष्टि परमात्माको विवर्तितरूप हो । अपरिमेय शक्तिसम्पन्न द्रष्टा परमात्माको विश्वसृष्टि गर्ने कामना र इच्छाबाट नै यो दृश्यात्मक मायिक प्रपञ्चको उद्भव भएको हो । अचिन्त्य शक्ति र सत्तायुक्त परब्रह्मको उन्मेषमा सृष्टि हुन्छ र निमेषमा प्रलय हुन्छ । द्रष्टाको दृष्टि नै सृष्टि हो । द्रष्टा, दृष्टि र दृश्यात्मक त्रिपुटीयुक्त मिथ्या जड प्रपञ्च नै दृश्य हो । स्वप्न प्रपञ्च जस्तै क्षणिक, प्रातिभासिक, मिथ्या तथा व्यावहारिक सत् जस्तो दृश्यप्रपञ्च हो । पारमार्थिक अवस्थामा दृश्य त्यसरी नै हराउँछ जसरी रज्जुमा देखा परेको तुला अविद्याद्वारा उद्भूत प्रातिभासिक सर्प हराउँछ, शिपिमा देखा परेको चाँदी हराउँछ र तातेको बालुवामा देखा परेको मृगमरीचिका अर्थात् जल हराउँछ ।

द्रष्टा स्वयं प्रकाश, चेतनस्वरूप, सत्स्वरूप, ज्ञानस्वरूप, आनन्दस्वरूप, अनन्त, अनादि, अपरिमेय, कर्तुं, अकर्तुं, अन्यथा कर्तुं समर्थ एकमात्र अद्वितीय ब्रह्मतत्त्व हो । किन्तु त्यसको विपरीत दृश्य परप्रकाश्य, अचेतन, असत्, मूढ, अन्धकार, दुःखद, सीमित, परिच्छिन्न, सादि, परिमेय, अचेतन, नाना, मायाको विकार र घोर जडतत्त्व हो । द्रष्टा त्रिगुणातीत, माया र मायाको कार्यभन्दा पर परमकारण स्वरूप हो । चेतन ब्रह्मको सत्ता पाएर प्रकृति, महत्तत्त्व र त्रिगुणात्मक अहङ्कार समेत ब्रह्मको सृष्टिचक्र सञ्चालन गर्ने कार्यमा सहयोगी हुन्छन् । चेतन द्रष्टाको आध्यासिक सम्बन्धले गर्दा उपर्युक्त जडमायाका विकारहरू चेतन जस्ता भएर काम गर्दछन् । व्यावहारिक दृष्टिले चित् र जडको सम्बन्धलाई आध्यासिक भनिए पनि वस्तुतः यो जड प्रपञ्च ब्रह्मको विवर्त हो ।

आध्यासिक सम्बन्धद्वारा अधिष्ठानभूत भौतिक पदार्थ जड, देख्न, छुन र महसुस गर्न सकिने मायिक वस्तु हो । त्यसै अधिष्ठानमा अज्ञानको आवरण शक्तिले आवृत गरेर त्यसै आवृत अधिष्ठानमाथि अज्ञानले

आफ्नो विक्षेपशक्तिद्वारा व्यावहारिक तद्वस्तु अधिष्ठान विपरीतको प्रातिभासिक अतद्वस्तुको सिर्जना गरेर भ्रम सिर्जना गर्दछ । यसलाई अद्वैत दर्शनको शब्दावलीमा 'अतस्मिन् वस्तुनि तद्बुद्धिः' जुन वस्तुमा त्यो वस्तु छैन त्यसैमा त्यस नभएका वस्तुको प्रतिभास वा झल्को भनिन्छ । उदाहरणका लागि सर्प नभएको रज्जुमा अर्थात् डोरीमा सर्पको प्रतिभास, सर्पबुद्धि वा सर्पको प्रतीति हुनु हो । यो अतस्मिन् तद्बुद्धि हो । शुक्तिमा रजतको प्रतिभास र तातो बालुवामा जलको प्रतिभास आदि पनि यसका उदाहरणहरू हुन् । त्यसै गरेर चेतन आत्मामा अचेतन, जड देह र देहधर्म अर्थात् स्थूलत्व, कृशत्व, सुखित्व, दुःखित्व, प्रमातृत्व, कर्तृत्व, भोक्तृत्वादि मायिक धर्मको प्रतीति हुनु पनि हो । साराशंतः प्रत्येक प्राणी वा जीवात्मा पुञ्जीभूत वा एकीभूत द्रष्टा र दृश्यको नमुना हो । गम्भीर भएर चिन्तन गर्ने हो भने जीव दुवै आफैं हो । जे ब्रह्माण्डमा छ प्रत्येक शरीरमा सूक्ष्मरूपमा त्यही छ । किनभने अद्वैतवेदान्त अनुसार चिद् अंश र जड् अंश आध्यासिक सम्बन्धबाट मिलेर अहंस्वरूप जीव बन्दछ । प्रत्येक जीव चेतन र जडको ग्रन्थि अर्थात् गाँठो हो । जीवमा रहेको चेतन अंश द्रष्टा हो भने जड अंश दृश्य हो ।

उपर्युक्त आध्यासिक प्रतीति मायिक दृश्य अधिष्ठानमा हुन्छ । आधार र आधेय प्रायः मायिक पदार्थ नै हुन्छन् । वस्तुतः अद्वैत वेदान्त दर्शनले सम्पूर्ण चराचर सृष्टिको अभिन्नरूपमा उपादान कारण र निमित्तकारण पनि चेतन ब्रह्मलाई मानेको छ । किन्तु जगत् सृष्टिको उपादान कारण न्याय, योग, वैशेषिक, साङ्ख्य आदि आस्तिक दर्शनहरूले त्रिगुणात्मक जड तथा अचेतन प्रधान वा प्रकृतिलाई नै उपादान कारण मान्दछन् । यसै परिप्रेक्ष्यमा उनीहरू चेतन तथा गुणातीत ब्रह्मबाट अचेतन तथा जड प्रपञ्चको कसरी सृष्टि हुन्छ ? भनेर जिज्ञासा प्रकट गर्दछन् । 'कारणगुणाः कार्य गुणानारभन्ते' अर्थात् उपादान कारणहरूका गुणहरूले कार्यका गुणहरू आरम्भ गर्दछन् भन्ने जडकारणवादीहरू मान्दछन् । किन कि प्रधान वा प्रकृति दुवै त्रिगुणी, जड र अचेतन हुन् । तदनुरूप कारणका गुणहरू नै सम्पूर्ण स्थूल र सूक्ष्म प्रपञ्चमा समेत अनुस्यूत भएर रहन्छन् ।

अतः त्रिगुणरहित सद् चेतन ब्रह्म जड तथा त्रिगुणात्मक सृष्टि प्रपञ्चको उपादान कारण हुन सक्तैन भन्ने उनीहरूको भनाइ छ ।

उपर्युक्त जडवादी अवैदिक सिद्धान्त स्थूल दृष्टिले व्यावहारिक रूपमा ठीकै हो जस्तो देखिए पनि पारमार्थिक दृष्टिले सूक्ष्मरूपमा विचार गर्दा भने ठीक होइन । किनभने अद्वैत वेदान्तको सृष्टिसिद्धान्त 'अद्वैतवादस्तु विवर्तवादः' अर्थात् विवर्तवाद हो । विवर्तवादमा उपादान कारणका गुणहरू कार्यप्रपञ्चमा सर्दैनन् । यसमा 'विवर्तो नाम उपादानविषमसत्ताककार्यापत्तिः' भन्ने सिद्धान्त लागु हुन्छ। यतिमात्रै होइन मायाका जडविकाररहितको सृष्टि नै विवर्त हो, अर्थात् 'अतत्त्वोऽन्यथा प्रथा विवर्त इत्युदीरितः' भनेर शास्त्राचार्यहरूले भनेका छन् ।

यो भयो द्रष्टा र दृष्टिको सम्बन्धमा शास्त्रहरूका आधारमा गरिएको सङ्क्षिप्त विवेचना । यसपछि यस अल्पकाय द्रष्टा र दृष्टिको उद्भवको सङ्क्षिप्त वृत्तान्त दिनु सान्दर्भिक ठान्दछु । समग्र जीवनमा मैले प्राप्त गरेको भनेको मेरो घरको वातावरण, मैले बालक कालमा प्राप्त गरेको सुसंस्कृत संस्कार र गाउँको ब्रह्मसमाजले प्रदान गरेको लोकोत्तर सनातन वैदिक परिवेश नै हो । त्यस वेला मेरो घर एउटा जीवन्त गुरुकुल थियो । त्यसकी कुलगुरु गुरुमाता आबाल ब्रह्मचारिणी, सती, साध्वी बालकुमारी हुनुहुन्थ्यो । उहाँले शिशु अवस्थाबाट नै घरका सबै बालक बालिकाहरूलाई मात्र होइन वयस्कहरूलाई पनि आफ्नै घरको दलानमा जम्मा गरेर काठको धुलौटे पाटीमा र बाँसको पटँ्यासमा समेत क, ख लेख्न सिकाएर अक्षरारम्भ गराउनुहुन्थ्यो । अत्यन्त वात्सल्यपूर्ण व्यवहारका साथ माया गरेर सबैलाई पढाउनुहुन्थ्यो । कसैकसैलाई आफ्नै काखमा राखेर पनि पढाउनुहुन्थ्यो । त्यस्तो भाग्यमानी बालकहरूमा म पनि एक थिएँ । वैखरी अर्थात् बारखरी र मात्रा समेत जानेपछि गुरुमाताकै काखमा बसेर भानुभक्तीय रामायणको वाचन गर्न मैले उहाँबाटै सिकेँ । त्यसबाट दुईथरी संस्कारहरू ममा आधान हुन गए । पैलो किताब पढ्ने संस्कार र दोस्रो रामायण वाचन गर्ने शैली । त्यसको प्रभाव ममा अमिट भएर रहन गयो र अझै पनि अक्षुण्ण छ । वनवासरूपी प्रवासमा रहेका बेला मायिक

शूर्पणखा र सुनको मृगले आकृष्ट गर्ने दुष्प्रयास गर्दा राम आकृष्ट नभएको दृढ चरित्रबाट अनुप्राणित भएर म कामिनी र काञ्चनको आकर्षणबाट आजीवन जोगिन सफल भएँ । मातापिताप्रतिको भक्ति, परोपकार, सहयोग, जतिसुकै ठुलो आकर्षण दिए पनि सत्ता र धनसम्पत्तिप्रतिको अनाकर्षण, त्यागको भावना र जतिसक्यो उति यी सबैबाट उपरत भएर साक्षी भावमा रहन प्रयास गर्ने संस्कार पनि रामायणले ममा बसाल्यो । आफ्ना र अरूबाटसमेत अपमानित भएमा, ईर्ष्या गरेमा र विनास्वार्थ आफुले अत्यन्त उपकार र सहयोग गरेका मान्छेले कृतघ्नता देखाए पनि सहन गर्ने जस्ता सद्‌गुणका साथै अभावमा बसेर पनि हाँस्न सक्ने जस्ता सद्‌गुणहरू पनि रामायणबाटै सिक्ने सत्प्रयास मैले गरेँ ।

गुरुमाताले मलाई रामायणपछि कृष्णचरित्र, महाभारत, भागवत, सप्तशती चण्डी आदि नेपाली र संस्कृतका धेरै थरी किताबहरू पढ्न सक्ने बनाउनुभयो ।

गुरुमाताको काखबाट बिस्तारै भूमिमा झरेर म किताब पढ्न थालेँ। जस्मा मुख्य किताब भानुभक्तको रामायण नै थियो । व्रतबन्ध नभएसम्म गाई, बाख्रा र भैंसी चराउन वन, पाखा र चउर आदिमा जाँदा पनि पुस्तक लिएर जान्थेँ र वनको एकान्त वृक्षको छायामा बसेर म पढ्दथेँ । घाँस काट्न नकटी आदि अटव्य वनमा जाँदा र घरमाथिका लङ्गुर, नुनथला, लेखर्क समेतका लेकाली वनमा जाँदा चाहिँ कण्ठस्थ पारेका रामायण आदिका श्लोकहरू म लेघ्रो तानेर गाउने गर्दथेँ। व्रतबन्ध उपनयन संस्कार गर्दा गायत्री मन्त्र श्रवण गराउने र आफ्नो शाखाको समग्र वेद पढाउने अधिकार र कर्तव्य सनातन वैदिक परम्परामा पिताको हुन्छ । तदनुसार आफ्नो पढ्ने अधिकार भएको माध्यन्दिनीयवाजसनेयिशुक्लयजुर्वेद शाखाको समग्र अध्ययन मैले पिताजीबाटै गर्ने सौभाग्य पाएँ ।

वेद पढिसकेपछि मेरो अध्ययन गर्ने इच्छा बढेर गयो । दाजुसँग घरमा नै वसन्तपञ्चमीको शुभमुहूर्त पारेर लघुकौमुदी, अमरकोश र रघुवंश महाकाव्य पढ्न थालेँ । पढ्नुका साथै घरमा परि आउने खेती, किसानी, गाई, बाख्रा, घाँस, दाउरा, लेक, बेसी गर्नुका साथसाथै पिताजी

र दाजुका साथ लागेर पात्ले, भन्ज्याङ, खार्पा, तिर्पा र चिउरीवास समेतका यजमानका घरमा म जान थालेँ ।

दाजु काठमाडौंमा पढ्न हिँडेपछि मेरो घरको पढाइमा पूर्णविराम लाग्न गयो । त्यसै वेला गाउँमा नै स्थानीय व्यक्तिहरूको सक्रियता र सहयोगमा संस्कृत समेत पढाउने गरी एउटा पाठशाला खुल्यो । मेरो तत्कालीन गाउँ प्रायः उपाध्याय भट्टराईहरूको वसोवास भएको अत्यन्त रमणीय तथा सम्म परेको र वरिपरि घना जङ्गल भएको गाउँ थियो । त्यो जङ्गली जनावर, पक्षीहरूयुक्त र दुधकोसी तथा रावा, लङ्गुर र जुके खोला आदि नदीनालाहरूले परिवेष्टित लेकबेसी मिलेको सुन्दर ब्रह्मबस्ती थियो । धेरैजसो गृहस्थका घरमा सुसंस्कारपूर्ण कर्मिष्ठ पढे लेखेका पण्डित विद्वान्हरू हुन्थे । गाउँमा सधैं शास्त्रचर्चा, पुराण, कीर्तन, सभा, बैठक, कचहरी र पञ्चायत समेत चलिरहन्थे । प्रत्येक घरका पण्डित, पुरोहित र ज्योतिषीहरू आफ्ना पढ्ने उमेर पुगेका छोराहरूलाई आफ्नो परम्परा थाम्न थोरै भए पनि संस्कृत शिक्षा दिन चाहन्थे । यसै उद्देश्य परिपूर्तिका लागि प्राथमिक संस्कृत पाठशाला खुल्न पुग्यो । त्यस पाठशालामा पढाउने एकमात्र विद्वान् गुरु महाप्रसाद तिमल्सिना हुनुहुन्थ्यो ।

जुनसुकै उद्देश्यबाट पाठशाला खुलेको भए पनि पढ्ने मेरो उत्कट अभिलाषा थोरै मात्रामा भए पनि पूर्ण भएको थियो । मैले घरमा सुरुमा नै गुरुमाताबाट अक्षरारम्भ र साधारण शिक्षा पाएको थिएँ । पिताजीबाट वेद, रुद्रीका साथै सामान्य कर्मकाण्डको शिक्षा, भक्तिमती साध्वी माताबाट निष्काम भगवद्भक्तिको शिक्षा र दाजुबाट संस्कृतको प्रारम्भिक शिक्षा समेत पाइसकेको हुँदा मेरो प्राथमिक शिक्षाको जग तयार भइसकेको थियो । यसै परिप्रेक्ष्यमा पाठशालामा प्रवेश गरेर मैले अत्यन्त सहजताका साथ आफ्नो पढाइ अघि बढाउन सफल भएँ । ममा अध्ययन गर्ने तीव्र इच्छा, जाँगर र प्रतिभा भएर पनि मलाई घरव्यवहारले पढ्न साथ दिएको थिएन । मेरो घर सामान्य शिक्षा, कर्मकाण्ड, भागवतको प्रशिक्षण दिने केन्द्र नै भएको थियो । केही टाढा गाउँहरूबाट मावली, दिदीबहिनी,

सानी आमा, ठुली आमाका छोरा नाति समेत हाम्रै घरमा बसेर पढ्दथे, खान्थे र सुत्दथे। घर एक प्रकारले विना शुल्कको आवासीय विद्यालय भएको थियो।

दुई छोरा मध्ये दाजु पढ्न काठमाडौं हिँडेपछि घरमा पिताजीलाई सहयोग गर्ने म बाहेक भरपर्दो अर्को कोही पनि मान्छे थिएन। हुन त घरमा पढ्न बसेका विद्यार्थीहरू पनि थिए तर ती आलाकाँचा र अपरिष्कृत भएकाले भर पर्न सम्भव थिएन। यसै कारण पिताजीलाई खेतीपाती र जजमानीमा समेत मैले सघाउनु पर्दथ्यो। मेरो पढाइ निर्बाधिरूपमा चल्न सकेन। तैपनि लघुकौमुदी, अमरकोश, रघुवंश समेतका संस्कृत शिक्षाका आधारभूत ग्रन्थहरू घरमा नै दाजुबाट थालनी गरेर गाउँका पाठशालाका गुरुबाट केही अघि बढाउन म सफल भएको थिएँ। तर पनि मेरो इच्छा भने अपूर्ण नै थियो।

अगाडिको संस्कृत शिक्षाका लागि खार्पामा रहेको सरकारी भाषापाठशालामा घरबाटै धाएर गुरु ढुण्डीराज पोखेलसँग संस्कृत र गुरु ज्वालाप्रसाद पोखेलसँग मैले English ABC पनि पढ्न सुरु गरेँ। किन्तु मेरो पढाइ त्यहाँ धेरै दिन चल्न सकेन र दिङ्लास्थित बालब्रह्मचारी षडानन्द संस्कृत विद्यालयमा पढ्न गएँ। त्यहाँको विद्यालयको परिवेश, पढाइको स्तर, ग्रामीण वातावरण र छात्रवृत्तिको उपलब्धता समेतबाट म अत्यन्त प्रभावित भएँ। त्यस विद्यालयमा पढाउने सबै गुरुहरू योग्य र विद्वान् हुनुहुन्थ्यो। उहाँहरू मध्ये गुरु पद्मराज अधिकारी र गुरु सेमन्तराज अधिकारीको प्रभाव ममा गहिरोसँग पऱ्यो। दुर्भाग्यवश पढ्दापढ्दै मलाई चैत वैशाखको गर्मी र औलोको ज्वरो आयो। धेरै समय बस्न स्वास्थ्यले दिएन। फर्केर घर आएँ। पढाइ छुट्यो। फेरि म पूर्ववत् घरव्यवहारमा संलग्न भएँ।

केही समयपछि म पढ्न काठमाडौं आएँ। मेरो यसपछिको अरू विस्तृत वृत्तान्त मद्वारा लिखित जीवनयात्रा अर्थात् अनुस्मृतिमा परिसकेको छ। काठमाडौंमा दिनमा संस्कृत र रातमा अङ्ग्रेजी पढ्थेँ। विद्यार्थीहरूको नेतृत्व गर्दै जेलयात्रा पनि गर्दथेँ। केही पढाइ पूरा गरेर

र बाँकी चाहिँ पछि पूरा गर्ने उद्देश्यले म सरकारी सेवामा प्रविष्ट भएँ । बाँकी पढाइ स्वदेश र विदेशमा समेत गएर मैले पूरा गरेँ । पटक पटक विदेशको यात्रा अध्ययन, लेखन र प्रकाशन समेत गर्दै मैले आफ्नो सरकारी सेवाको तीन दशक पूरा गरेँ ।

मेरो बाल्यकालको घरको वातावरण एकातर्फ शिक्षा, संस्कार, सनातन वैदिक धर्म र कर्मको केन्द्रजस्तो थियो भने अर्को तर्फ कवितामय पनि थियो । घरमा आबाल, वृद्ध र वनिता समेतले कविता कथ्ने, कथेका र रामायण आदि पुस्तकहरूबाट घोकेका छन्दका श्लोकहरू घरमा र मेलापात जाँदा समेत कण्ठै पारेर गाउँने गर्थे । सुख र दुःखका साथी तिनै कविताहरू हुन्थे । चिना लेख्ता, वैराग्य चल्दा र घरबाट पर्देश गएका छोराछोरी समेतलाई चिट्ठीपत्र लेख्ता पनि पिताजी कवितामा नै लेख्नुहुन्थ्यो । त्यतिमात्रै होइन, गाउँघरमा विवाह र उत्सवहरूमा छन्दोबद्ध धार्मिक श्लोकहरू प्रतियोगिताका रूपमा नै समूह समूहमा बाँडिएर अत्यन्त उत्साह र जोसका साथ रातदिनै भन्ने अनुकरणीय चलन थियो । यही नै मनोरञ्जनको साधन पनि थियो । पूर्वोक्त कवितामय वातावरणले मेरो बालमस्तिष्कमा सानैदेखि सुसंस्कृत संस्कारको बीजारोपण गरेको थियो । काठमाडौं पढ्न आएपछि यसले अङ्कुरित हुने, परिष्कृत हुने र झाँगिने सुअवसर पायो । यसैको फलस्वरूप विभिन्न कविसम्मेलनका साथै वि.सं. २०२६ सालमा तत्कालीन नेपाल राजकीय प्रज्ञाप्रतिष्ठानले आयोजना गरेको अन्तर्राष्ट्रिय बृहत्कविता सम्मेलनमा 'अधिकार र कर्तव्य' विषयमा सर्वप्रथम भएर नगद सहितको स्वर्णपदकद्वारा तत्कालीन श्री ५ महाराजाधिराज महेन्द्रका बाहुलीबाट विभूषित हुन म सफल भएँ ।

त्यसपछि भने मेरो प्रसुप्त काव्यिक प्रतिभा क्रमशः प्रस्फुटन हुन थाल्यो । त्यसभन्दा अघि रचिएका र पुरस्कृत भएका गद्य, पद्य, कविता, निबन्ध, समीक्षा र भजनहरू समेतलाई परिमार्जन र परिवर्धन समेत गर्दै छरिएर यत्र तत्र रहेका एवं विभिन्न पत्रपत्रिकामा प्रकाशित भएका रचनाहरूलाई मैले सङ्कलन गर्न थालेँ । क्रमशः कविता लेखन र समालोचना तर्फ पनि मेरो कलम बढ्दै गयो । यसतर्फ मेरो प्रवृत्ति बढ्नुमा सर्वप्रथम पिताजीमा

रहेको काव्यात्मक गुण, कवितामय पारिवारिक वातावरण र तत्कालीन ग्राम्य परिवेश नै प्रमुख कारकतत्त्व थिए। काव्यसाधनाको कारकतत्त्वका अतिरिक्त आध्यात्मिक तथा वैदान्तिक चिन्तनको सूक्ष्म बीजात्मक संस्कार पनि मैले बाल्यावस्थामा माता, पिता, गुरुमाता, दाजु, गुरु महाप्रसाद र ग्रामीण वातावरणबाट नै प्राप्त गरेको थिएँ। यसमा मुख्यरूपमा सती, साध्वी तथा भक्तिमती प्रातःस्मरणीया मेरी माताको साक्षात् प्रभाव परेको छ। फलतः आजको मितिसम्ममा प्रकाशित यसै ग्रन्थको बाहिरी आवरण पृष्ठमा उट्टङ्कित लौकिक, भक्ति तथा वेदान्त दर्शन सम्बन्धी ग्रन्थहरूको सूचीबाट ज्ञात हुनेछ।

यस लघुकाय ग्रन्थको सृजनाको मूल उत्प्रेरक विषयको चर्चा गर्ने सन्दर्भमा त्यसको पृष्ठभूमि र आधारको सिंहावलोकन वा अनुस्मरण गर्ने परिप्रेक्ष्यमा नै उपर्युक्त पङ्क्तिहरूको जन्म भएको हो, विषयान्तर कत्ति पनि भएको छैन। किनभने यसको सृजनामा पनि यस पटक कतिपय कारणले अप्रत्यासित रूपमा मनमा उद्भूत विक्षेप नै कारकतत्त्व बन्यो। यसको अरू विवरण दिनु समयोचित ठान्दिन। अतः मौन बस्तछु।

शोक, ईर्ष्या, द्वेष, राग, रति, क्रोध, डाहा, प्रतिशोध आदि दुर्गुणहरूका कारण प्राणीका मनमा क्षोभ वा विक्षेप उत्पन्न हुन्छ। यसलाई सकारात्मक कार्यमा सदुपयोग गर्न सके सृजना, नवनिर्माण, नयाँ आविष्कार समेत हुन सक्तछ। ममा विक्षेप जुन बेला उत्पन्न हुन्छ वाल्मीकि कविले जस्तै साहित्य सृजनामा सदुपयोग गर्ने गरेको छु। व्याधाद्वारा मारिएको क्रौञ्चमिथुन पक्षीको कारण उत्पन्न शोकद्वारा विक्षिप्त वाल्मीकिको मनले तुरुन्तै छन्दोबद्ध प्रथम कविताको सृजन गऱ्यो। त्यस्ता घटनाहरू विश्वइतिहासमा सर्वत्र देख्न सकिन्छन्। मातापिता ब्रह्मलीन हुनु भएपछि ममा उत्पन्न शोकले मेरो प्रथम शोककाव्य ‘श्रद्धाञ्जलि २०५२’ र केही समयको अन्तरालमा दोस्रो कृति ‘वन्दना २०६८’ को सृजना गऱ्यो। मेरो काव्यसृजनामा विक्षेपले प्रायः जसो सृजनात्मक काम नै गरेको छ। आजसम्म सिर्जित काव्यकृतिमा यसको मुख्य भूमिका छ।

मनुष्यका पेटमा जम्मा भएर रहेका मल आदि विकारलाई पेटबाट

बाहिर निकालेर फ्याँक्न प्राच्य स्वास्थ्यविज्ञान आयुर्वेदशास्त्रले विरेचनको प्रविधि अपनाएको छ भने पाश्चात्त्य स्वास्थ्यविज्ञानले Purgative र Laxative प्रविधि अपनाएको छ। किन्तु मनमा जम्मा भएर रहेको विकारलाई मनबाट बाहिर फ्याँक्न उपर्युक्त दुवै तरिका प्रयोग गर्न सम्भव हुँदैन। अतः उदाहरणका लागि मात्र यहाँ उल्लेख गरिएको हो।

मनमा जम्मा भएर रहेको विकारात्मक वेगलाई मनबाट निकालेर बाहिर फ्याँक्न स्थूल विधि अपनाएर सम्भव छैन। अतः मन जस्तै सूक्ष्म विधि अपनाउनु पर्ने हुन्छ। यसका लागि प्राचीन ऋषिहरूले नवरसयुक्त नाटक, काव्य, महाकाव्य, कथा, कहानी र असङ्ख्य पुराणादि शास्त्रहरूको रचना गरे, जसको दर्शन, श्रवण र पठन समेतबाट मनुष्यका मनमा जमेर रहेको मानसिक वेग मनबाट बाहिर निस्कन्छ र मानिस मानसिक रूपले स्वस्थ हुन्छ।

पाश्चात्त्य साहित्यमा खास गरेर प्राचीन ग्रिसेली साहित्यमा दार्शनिक Aristotale ले यसलाई साहित्यका माध्यमबाट प्रकाशन गरे। जसलाई ग्रीक भाषामा संज्ञाका रूपमा Catharos = Pure भनिन्छ। अङ्ग्रेजी भाषामा यसलाई विशेषणका रूपमा Cathartic वा Cathartical भनिन्छ। जसका अर्थहरू Cleansing, purifying, having the power of Cleansing the bowels, purgative आदि हुन्छन्। यही शब्द संज्ञावाचक हुँदा Catharsis भनिन्छ। जसका अर्थहरू हुन्छन् Purification, evacuation of the bowels, purification of the emotions as by the drama, the purifying of the effects of a pent up emotion by bringing them to the surface of consciousness.

मेरा मनमा उद्भूत विक्षेपलाई मनबाट बाहिर निकाल्नका लागि काल्पनिक पात्रहरू तयार गरेर मैले 'एकादेशको कथा' नामक काव्य लेख्न सुरु गरेँ। मेरा सबै काव्य सिर्जनामा यस्तै काल्पनिक जड र अतिमानव पात्रहरू समेतलाई मानवीकरण गरेर मैले भन्नुपर्ने कुराहरूको अभिव्यक्ति

उनीहरूका मुखबाट गराएको छु । यसलाई साहित्यको शब्दावलीमा उत्प्रेक्षा, रूपक अलङ्कार, साधारणीकरण प्रक्रिया, स्वतः सम्भवी, कविनिबद्धवक्तृ प्रौढोक्ति आदि भनिन्छ। उदाहरणका लागि अमरसिंहको चिट्ठीमा गोसाँई कुण्डलाई र 'क्रान्तिदूत'मा हिमाललाई मानवीकरण Generalization गरेर मैले भन्नुपर्ने मभित्रका भावनाहरूलाई बोलाएको छु । 'बहादुरशाह'मा अतिमानव भगवान् श्रीपशुपतिलाई मानव बनाएर कविको वाणी दिएको छु । प्रायः सजीव, निर्जीव, पशुपक्षी समेत सबैका माध्यमबाट कविहरूले आफ्ना अनभिव्यक्त भावनालाई अभिव्यक्त गर्दछन्। यो परम्परा अपौरुषेय वेद, उपनिषद्, रामायण, महाभारत, पुराण, पञ्चतन्त्र आदि संस्कृत साहित्यमा पाइन्छ। यसरी कविले अभिव्यक्ति दिने प्रचलन संस्कृत साहित्यमा मात्र नभएर आधुनिक नेपाली, हिन्दी, अङ्ग्रेजी आदि सबै भाषाका साहित्यमा पाइन्छ।

'एकादेशको कथा' अनुष्टुप् छन्दमा अन्तःकरणबाट धाराप्रवाहले प्रस्फुटन भयो । उपनिषद्, चर्पटपञ्जरी, चाणक्यनीति र अरू शास्त्रहरूका वचन र संज्ञाहरूसमेतबाट सम्पुटित एवं समलङ्कृत भएर उक्त सिर्जना ५०० श्लोकहरूमा निबद्ध भइसकेपछि त्यसको आद्योपान्त मैले समीक्षा र सिंहावलोकन गर्दा त्यसै रूपमा प्रकाशन गर्दा सकारात्मक र रचनात्मक नभएर नकारात्मक हुने मैले ठानेँ । त्यसबाट मेरो विक्षेपात्मक चित्त शान्त नभएर झन् अशान्त हुने थियो। त्यसै कारण त्यसै रूपमा प्रकाशन गर्नु उपयुक्त नलागेर मैले त्यसलाई हाल दराजमा थन्क्याइदिएको छु। त्यसबाट मेरो विक्षेप केही मात्रामा शान्त भयो तर पनि पूर्ण शान्त नभएको हुँदा त्यस अवशिष्ट विक्षेपरूपी बीजबाट तपाईंका हातमा रहेको यो 'द्रष्टा र दृश्य' प्रस्फुटित भयो । यसको प्रकाशन र लोकार्पण पछि मेरो रजोगुणी विक्षेप शान्त भएको छ। मेरो अन्तःकरणमा प्रायः उद्भूत हुने यस विक्षेपात्मक रजोगुणलाई उपसर्जन भावमा झारेर सात्त्विक भावलाई मुख्यरूपमा अघि सारेर म अद्वैत वेदान्तको चिन्तन र लेखन पनि गर्ने गर्दछु। यो मेरो नैसर्गिक स्वभाव नै भइसकेको छ। यो क्रम चलिरहने छ।]

# द्रष्टा र दृश्य २०७२

वेदान्त सजिलो विषय होइन । यो पढ्न कठिन, पढेर बुझ्न झन् कठिन र आफुले बुझेर अरूले बुझ्ने गरी लेख्न सबैभन्दा कठिन विषय हो । यस विषयको गहन दार्शनिक र आध्यात्मिक अभिप्राय ठम्याउनुभन्दा पहिले यसका पारिभाषिक शब्दहरूको अर्थ बुझ्न नै कठिन छ । त्यस्ता शब्दहरूको कोशीय अर्थ मात्र बुझेर वेदान्तविद् बन्न खोज्नु कुहिनाले चट्टान फुटाउनु जस्तो दुष्प्रयास हुन जान्छ । पूर्वजन्मको संस्कार र यस जन्मको सतत प्रयास र साधनाले मात्र मानिसलाई वेदान्ततर्फ प्रवृत्त गराउँछन् । लोकरमणमा लिप्त व्यक्ति आत्मरमणतर्फ अभिमुख हुन सक्तैन । उपाधिको अहङ्कारले ग्रस्त व्यक्ति पनि वस्तुतः वेदान्ती बन्दैन । उमेर ढल्कँदै गएपछि, इन्द्रियको अकर्मण्यता बढ्दै गएपछि र वेदनाको विस्तार हुँदै गएपछि मानव भएर जन्मनुको अलिकति चेतना भएको मानिस वेदान्ततर्फ आकृष्ट हुन्छ । त्यस बेला उसले धेरै गुमाइसकेको हुन्छ र त्यस क्रममा उसको आत्मबोध, मनन र चिन्तन गर्ने क्षमता पनि समाप्तप्रायः हुन पुग्छ । तर त्यस्तो व्यक्तिमा पनि वेदान्तको अनुसरण गरेर आत्मशान्ति, दृष्टि र त्यसबाट अन्ततः मुक्ति प्राप्त गर्ने अभिलाषा रहिरहेको हुन्छ । बहुसङ्ख्यक मानिसको जीवनको यथार्थ यही हो । यस्ता मानिसका लागि वेदान्तका मूल ग्रन्थको अध्ययन र अनुशीलन गरी आत्मज्ञान गर्नु सम्भव हुँदैन । उनीहरूलाई शास्त्रको मर्यादा कायम राखी वेदान्त बुझाउनु चुनौतीपूर्ण हुन्छ । त्यस्तो चुनौतीको सामना गरी वेदान्त दर्शनको मूल मर्म र मान्यतालाई आत्मसात् गरी सरल पद्यात्मक शैलीमा विषयवस्तुको प्रतिपादन गर्नु बहुप्रचारित वेदान्तीहरूका लागि पनि दुस्साध्य काम हो । शरत्कुमार भट्टराईको 'द्रष्टा र दृश्य'ले यस्तै चुनौतीको समाधान गरेको छ र मुमुक्षुहरूका लागि वेदान्तको सरल सुबोध ज्ञान गराउन सफलता पनि पाएको छ ।

'द्रष्टा र दृश्य' बाइस ओटा पद्यात्मक रचनाको सङ्ग्रह हो । अनुष्टुप्

छन्दमा लेखिएका रचनामा कवित्वभन्दा दर्शन प्रबल भएको देखिन्छ। वेदान्तमा ‘सृष्टि’, ‘स्थूलदेह’, ‘सूक्ष्म देह’, ‘कारण शरीर’, ‘मोक्ष’, ‘प्रलय’ आदि पारिभाषिक शब्द हुन्। वेदान्तका सन्दर्भमा यिनको विशिष्ट अर्थ हुन्छ जसलाई सबैले बुझ्न सक्तैनन्। यहाँ यस्तै शब्दहरूलाई विभिन्न प्रमाणहरू उद्धरण गरी सरलतासँग बुझाउन खोजिएको छ। धेरै मूल पुस्तकहरू हेर्नेहरूका लागि पनि अस्पष्ट भएका विषयको सरल, शास्त्रीय र सारपूर्ण प्रतिपादन यस पुस्तकको विशेषता नै हो। उदाहरणका लागि सत्य र ब्रह्मलाई अत्यन्त सरल रूपमा यसरी बुझाइएको छ –

व्यावहारिक हो सत्य प्रपञ्च सत्य होइन।
पारमार्थिक हो सत्य ब्रह्म असत्य होइन॥ (सृष्टि १७)

कहिलेकाहीँ एकवेदीका लागि मात्र नभई चतुर्वेदीका लागि पनि वेदको सार के हो भन्ने विषयमा भ्रम हुन्छ। वेदै नपढी र नबुझी वेदान्ती हुन सम्भव छैन। यहाँ वेदको सारलाई यसरी स्पष्ट पारिएको छ –

एषणा कामना राखी भोगमै नित्य रम्दछ।
भने त्यो आत्मघाती हो भनेर वेद भन्दछ॥ (अनुशयी ७)

आफ्नो वेदशाखाको महावाक्य मात्र मुक्तिको साधन हो भन्ने सिद्धान्तको सरल संस्थापना यसरी भएको छ –

अरू साधन जस्ता हुन् होइनन् मुख्य साधन।
महावाक्य विना अर्को मिल्दैन मुक्तिसाधन॥ (मोक्ष १३)

यी उदाहरणहरू ‘स्थालीपुलाकन्याय’ का लागि उद्धृत गरिएका हुन्। वेदान्तका कष्टबोध्य शब्द, पदावली र प्रसङ्गहरूको सरल पद्यात्मक प्रतिपादन यस कृतिमा भएको छ। वेदान्तका दर्जनौं प्रौढ ग्रन्थ प्रकाशित गरिसक्नु भएका लेखकको यस रचनाले पद्यात्मक आस्वादनसहित वेदान्त दर्शनको गूढ र गहन ज्ञान सरल शैलीमा आर्जन गर्न सहयोग गरेको छ। रमरम कवित्व, गम्भीर दर्शन र अनुसन्धानात्मक दृष्टि नै ‘द्रष्टा र दृश्य’ को समष्टि हो।



# गद्यपद्यात्मक
# रासपञ्चाध्यायी २०६४ का भूमिकाबाट

[श्रीमद्भागवतमहापुराणमा वर्णित रासपञ्चाध्यायी साहित्य-विधाको सर्वोत्कृष्ट शृङ्गाररस, भक्तिविधाको पराभक्ति र अद्वैत वेदान्तविधाको ब्रह्मज्ञानको चरमावस्थाको पवित्र त्रिवेणी हो भन्नु उपयुक्त हुने देखिन्छ।

काव्यका अभिन्न अङ्ग मानिने छन्द र अलङ्कारका दृष्टिले पनि रासपञ्चाध्यायी अति उत्कृष्ट देखिन्छ। यसमा अनुष्टुप्, वसन्ततिलका, उपजाति, इन्दिरा वा कनकमञ्जरी, मन्दाक्रान्ता जस्ता अत्यन्त प्रचलित र सुन्दर छन्दहरूको प्रयोग गरेको देखिन्छ। अलङ्कारहरूमा अर्थालङ्कारका रूपमा उपमा, रूपक, अतिशयोक्ति, उत्प्रेक्षा, व्याजस्तुति, व्याजोक्ति, गूढोक्तिसमेत देखापर्दछन् भने शब्दालङ्कारहरूमा वक्रोक्ति, अनुप्रास, यमक, श्लेष र अन्तरालाप आदि अलङ्कारहरू परेका छन्। गुणमा प्रसाद गुण यस रासपञ्चाध्यायीका श्लोकहरूमा पाइन्छ।

अन्त्यमा भगवान् श्रीकृष्णले गोपीहरूका बारेमा स्वयं भन्नुभएको छ। जस्तै –

तास्ताः क्षपा, प्रेष्ठतमेन नीता मयैव वृन्दावनगोचरेण।
क्षणार्धवत्ताः पुनरङ्ग तासां हीना मया कल्पसमा बभूवुः॥
ता नाविदन् मय्यनुसङ्गबद्धधियः स्वमात्मानमतस्तथेदम्।
यथा समाधौ मुनयोऽब्धितोये नद्यः प्रविष्टा इव नामरूपे॥
मत्कामा रमणं जारमस्वरूपविदोऽबला।
ब्रह्म मां परमं प्रापुः सङ्गात्सतसहस्रशः॥

– श्रीमद्भागवत ११।१२।११–१३

उपर्युक्त अनुसार रासक्रीडाका बारेमा चर्चा गर्दा यसको अलौकिकता प्रस्ट थाहा हुन्छ। किनभने त्यो दिव्य रासक्रीडा त ब्रह्मसँग जीवको

मिलनको चिन्मय क्रीडा थियो भन्ने बुझिन्छ । यसको व्याख्या गर्दा दूषित भावना राखेर व्याख्या गर्नुहुँदैन । त्यसो गरेमा ठुलो पाप लाग्ने कुरा शास्त्रहरूमा बताइएको छ । भक्तिशास्त्रको भाषामा यसैलाई नामापराध भनिन्छ । यो नामापराध कहिल्यै पनि नपखालिने महापराध हो । यसले जीवलाई जन्मजन्मान्तरसम्म अधोगतिमा लगी नै रहन्छ भन्ने कुरा पनि भक्तिशास्त्रमा उल्लेख भएको पाइन्छ । अन्त्यमा –

रास हो ब्रह्मका साथ जीवको दिव्य सङ्गम ।
रास हो रससद्ब्रह्म अरू सम्पूर्ण हुन् भ्रम ॥

मेरो अद्वैतवेदान्तको अध्ययन, सत्सङ्ग र श्रीमद्भागवतमहापुराणको स्वाध्याय गर्ने प्रवृत्ति झनै बढेर गएको थियो । भागवतलाई ज्ञान, भक्ति र वैराग्यको त्रिवेणी भनिन्छ । यसका सबै कुरा अनुपम छन् । त्यसमा पनि दशमस्कन्ध भागवतको हृदय अर्थात् मुटु हो भने त्यसमा पनि २९ औँ अध्यायदेखि लिएर ३३ औँ अध्यायसम्मका ५ अध्यायहरू जसलाई रासपञ्चाध्यायी पनि भनिन्छ, भागवतका पञ्चप्राणै हुन् । त्यस अलौकिक तथा चिन्मय रासपञ्चाध्यायीका सम्बन्धमा विद्वान्हरूमा रहेको मतमतान्तर र सामान्य व्यक्तिहरूमा रहेको गलत धारणालाईसमेत यथाशक्य निराकरण गर्ने उद्देश्यले मैले रासपञ्चाध्यायीको रचना गरेको हुँ । त्यसलाई पनि २०६४ सालमा कोषले प्रकाशित गरिदिएको थियो । ]

# रासपञ्चाध्यायी २०६४

महर्षि वेदव्यासलाई भारतवर्षमा ज्ञानदीप प्रज्वलन गर्ने महाज्ञानी विभूति मानिएको छ । महाभारत, महापुराण, उपपुराण, ब्रह्मसूत्रजस्ता युगजयी कृतिहरूका रचना गरिसकेपछि वेदव्यासले देवर्षि नारदको सल्लाह अनुसार पूर्णावतार भगवान् श्रीकृष्णका चरितामृतले परिपूर्ण श्रीमद्भागवतमहापुराणको प्रणयन गरे भन्ने पौराणिक प्रसङ्ग पाइन्छ ।

यस कृतिको रचना गरिसकेपछि स्वयं व्यासलाई पनि आत्मसन्तोषको अनुभूति भयो भन्ने पनि प्रमाण पाइन्छ । यसै कारणले यो पुराण अन्य ग्रन्थरत्नका तुलनामा बढी महत्त्वपूर्ण, प्रसिद्ध र समादृत भएको भन्ने विद्वान्हरूको तर्क छ । यस पुराणमा पनि दशमस्कन्ध सर्वाधिक महत्त्वपूर्ण मानिन्छ । यस स्कन्धका २९ औं अध्यायदेखि ३३ औं अध्यायसम्मका ५ अध्याय भगवान्ले गोपिनीहरूसँग गरेको दिव्य रासलीलाको वर्णनले परिपूर्ण छन् । यी अध्यायलाई भागवतका ५ प्राण मानिएको छ । दशमस्कन्धको २९ औं अध्यायको पहिलो श्लोक "भगवानपि ता रात्रीः" बाट प्रारम्भ भएर तेत्तीसौं अध्यायको अन्तिम श्लोक "विक्रीडितं व्रजवधूभिरिदं" सम्मको अंश रासपञ्चाध्यायीका नामबाट परिचित छ । रासपञ्चाध्यायी काव्यसाहित्यमा रसराजका रूपमा प्रसिद्ध शृङ्गार रस, भक्तिसाहित्यमा पराभक्ति र अद्वैत वेदान्त दर्शनमा ब्रह्मज्ञानको ऐक्य मानिन्छ । यसैले यो रसिकजन, भक्तजन र मुमुक्षुजनको साझा आनन्दको दिव्य धाम बन्न पुगेको पाइन्छ । रासक्रीडाका सहभागी गोपिनीहरूले भगवान्को कृपाबाट छुट्टाछुट्टै श्रीकृष्ण पाएका थिए र उनीबाट दिव्य र भव्य आनन्दको अवसर पाएका थिए भन्ने कथन पुराणमै पाइन्छ । रासलीला भगवद्भक्तिको असीम प्रयोग र परिणाम मानिन्छ । यो कृति रासलीलाका रूपमा प्रसिद्ध यही रासपञ्चाध्यायीका श्लोकहरूको समछन्दमा नेपाली अनूदित रूप हो । मूलको विषयवस्तु, मिठास, माधुर्यलाई नेपाली मौलिकताको जलप लगाई प्रस्तुत गर्ने कला यस अनुवादमा पनि छँदै छ ।

रासपञ्चाध्यायीले अनुवादका मूलतः दुई विशेषताहरू झल्काएको छ – अनुसन्धानपरक दृष्टिकोण र काव्यप्रतिभाको प्रकाशन । कृतिको भूमिका खण्डमा प्रा.डा. माधवशरण उपाध्यायले "प्राक्कथन" शीर्षकमा भक्तिवादी दृष्टिकोणलाई केन्द्रित गरी भगवान् श्रीकृष्णका लीलाविलासको महत्त्व सप्रमाण दर्साएको पाइन्छ भन्ने अनुवादकले 'निवेदन' शीर्षकमा रासपञ्चाध्यायीको समग्र पक्षमाथि

प्रमाणपूर्वक प्रकाशन पारेको देखिन्छ । रासलीला के हो, गोपिनी को हुन्, रासलीलामा के के भयो र गरियो, यो कहिले सम्पन्न भयो, रासलीलाका प्रसङ्गहरू कहाँ कहाँ आएका छन् भन्ने जिज्ञासाको प्रमाणसहितको समाधान अनुवादकले गरिदिनु भएको छ । ४८ पृष्ठमा लेखिएको यो भूमिका छुट्टै अनुसन्धानमूलक कृतिका रूपमा पनि प्रकाशन गर्न योग्य छ तापनि रासपञ्चाध्यायीका गम्भीर अध्येताहरूका लागि यस पुस्तकमै पनि यसको महत्त्व र सान्दर्भिकता रहेको पाइन्छ । विद्वत्तापूर्ण र अनुसन्धानपरक यस आलेखले अनुवादकले भागवतको रासपञ्चाध्यायीको अनुवाद गर्नुको विशिष्ट प्रयोजन पनि दर्साएको देखिन्छ । साहित्यशास्त्रका ज्ञाता, सिर्जनात्मक साहित्यका प्रयोक्ता, बाल्यकालमै भगवान् श्रीकृष्णको मूर्तिका निर्माता, पौराणिक साहित्यका अनुशीलनकर्ता र वेदान्त दर्शनका अध्येता, चिन्तक, प्रचारक र व्याख्याता भएका कारणले पनि यति लामो शोधपूर्ण रचना तयार भएको मान्न सकिन्छ । भागवतका गहन अर्थयुक्त श्लोकहरूको समछन्दमा अनुवाद गरेर पनि गद्यमा सरलार्थ समेत समावेश गरिदिएर अनुवादकले यो कृति विद्वान् अनुसन्धघाता, प्रबुद्ध पाठक र साधारण भगवद्भक्त सबैका लागि आवश्यक र उपयोगी बनाइदिनु भएको छ । पाँच अध्यायलाई छुट्टाछुट्टै प्रस्तुत गरी संस्कृतमा प्रवेश नभएका पाठकवर्गलाई पनि रासपञ्चाध्यायीको आस्वादन गराइदिएर अनुवादकले उपकार गर्नुभएको छ । भगवान्को चरित्रगायन र भगवत्प्रेमको उत्कृष्ट उदाहरण प्रस्तुत गर्ने यस कृतिका छुट्टाछुट्टै अध्यायका नमुनाहरू यसरी देखाउन सकिन्छ ।

**पहिलो अध्याय**

भगवान् श्रीकृष्णको वंशीवादन सुनेर गोपिनीहरू उनको दर्शन पाउनका लागि कसरी दौडिए त्यसको स्वाभाविक शब्दचित्र यसरी उतारिएको छ –

मूल – परिवेषयन्त्यस्तद्धित्वा पाययन्तः शिशून् पयः ।
शुश्रूषन्त्यः पतीन् काश्चिदश्नन्त्योऽपास्य भोजनम् ॥

अनुवाद – भातै पस्कन छाडेर बीचमै गोपिनी कुनै ।
दौडिइन् कृष्णका तर्फ सम्झेर पति नै उनै ॥
गोपिनी कतिले दूध शिशुलाई चुसाउन ।
छोडेर बीचमै दौडे कृष्ण दर्शन पाउन ॥
शुश्रूषा पतिको छोडी खान छोडी कुनै अनि ।
दौडिए फाल हालेर गोपी पागल झैं बनी ॥ (पृ.७४)

कृष्णमा मन समर्पण गर्ने मानिसका सम्पूर्ण पाप नासिन्छन् र मुक्ति मिल्छ भन्ने भावलाई अनुवादकले यति सरल र सुबोध शैलीमा व्यक्त गर्नुभएको छ –

मूल – कामं क्रोधं भयं स्नेहमैक्यं सौहृदमेव च ।
नित्यं हरौ विदधतो यान्ति तन्मयतां हि ते ॥

अनुवाद – काम क्रोधसँगै स्नेह भय सौहृद्य जे हओस् ।
यी कुनै भावले नित्य कृष्णमै मन दी रहोस् ॥
आफ्ना वृत्तिहरू जोडोस् जीवले हरिका सँग ।
जीवका पाप नासिन्छन् मुक्ति मिल्छ, क्रमैसँग ॥

कृष्णलाई छाडेर आफ्ना घर जान नचाहने गोपिनीहरूको प्रेमरससिन्धुलाई यस श्लोकले स्पष्ट पारेको छ –

मूल – चित्तं सुखेन भवतापहृतं गृहेषु ,
यन्निर्विशत्युत करावपि गृह्यकृत्ये ।
पादौ पदं न चलतस्तव पादमूलात्
यामः कथं व्रजमथो करवाम किं वा ॥

अनुवाद – चोऱ्यौ सुटुक्क मन यो घरबाट ऐले,
पुत्रादिमा रत थियो जुन नाथ ! पैले ।
जाऊँ भने घर हरे ! जडझैँ छ पाउ,
चल्दैन जानु कसरी अब लौ बताऊ ॥

## दोस्रो अध्याय

श्रीकृष्णसँग प्रेमालाप र शृङ्गारिक क्रियाकलाप गरेका गोपीहरू पनि बीचमा वियोग भएका क्षणमा कृष्णकै रूप भएर कृष्णकै जस्तो भावमा परिणत भएका थिए । त्यसको मूल र अनुवादको भावलाई यसरी आस्वादन गर्न सकिन्छ –

**मूल** –

गतिस्मितप्रेक्षणभाषणादिषु प्रियाः प्रियस्य प्रतिरूढमूर्तयः ।
असावहं त्वित्यबलास्तदात्मिका न्यवेदिषुः कृष्णविहारविभ्रमाः ॥

**अनुवाद** –

भगवान् कृष्णकै चाल हाउ भाउ सबै गरी ।
कृष्णै जस्ता भए हाऊ भाऊ गर्दै थरीथरी ॥
आफुलाई सबै बिर्सी भएर कृष्ण नै तब ।
मै हुँ कृष्ण भनी हिँड्थे निर्धक्कसँग ती सब ॥ (पृ.१००)

श्रीकृष्णका चरणचिह्नको खोजी गर्दै हिँडेका गोपीहरूले श्रीकृष्णका पदचिह्न मात्र देखेनन्, अर्की युवतीका पदचिह्न पनि देखे । ती युवतीका विषयमा उनीहरू अनुमान लाउँछन् र तर्कवितर्क पनि गर्छन् । अनुमान अलङ्कारले युक्त भावसौन्दर्यको प्रस्तुति यसरी गरिएको छ –

मूल – अनयाराधितो नूनं भगवान् हरिरीश्वरः ।
यन्नो विहाय गोविन्दः प्रीतो यामनयद् रहः ॥

अनुवाद – अवश्य पनि यी नारी भगवान् कृष्णचन्द्रकी ।
आराधिका हुनैपर्छ व्रजकी युवती निकी ॥
यसै कारणले छोडी हामीहरू सबैकन ।
यिनैलाई लिई कृष्ण हिँडे एकान्त यो वन ॥ (पृ.११४)

अरू सारा गोपीलाई छोडेर श्रीकृष्ण एउटी गोपी लिई वनविहारमा गए । ती गोपीले आफुलाई नारीहरूमा सर्वश्रेष्ठ ठानेको मनोविज्ञानको स्वाभाविक चित्रण यसरी गरिएको छ –

मूल – सा च मेने तदात्मानं वरिष्ठं सर्वयोषिताम् ।
हित्वा गोपीः कामयाना मामसौ भजते प्रियः ॥

अनुवाद – चाहने सब छोडेर लट्ठ मैसँग नै बनी ।
मलाई कृष्णले ल्याए म नै छु प्यारकी धनी ॥
नारीमा श्रेष्ठ नै मै हुँ मेरो नै मान गर्दछन् ।
श्रीकृष्ण प्रिय छन् मेरा मेरो आदर गर्दछन् ॥ (पृ.११९)

**तेस्रो अध्याय**

श्रीकृष्णको अधरपान गर्न चाहने गोपिनीहरूको अवस्थालाई यसरी देखाइएको छ –

**मूल** –
मधुरया गिरा वल्गुवाक्यया बुधमनोज्ञया पुष्करेक्षण ।
विधिकरीरिमा वीर मुह्यतीरधरसीधुनाऽऽप्याययस्व नः ॥

**अनुवाद** –
मधुर वाक्यले हर्दछौ सुध, कमलनेत्र हे मुग्ध छन् बुध ।
सकल किङ्करी मुग्ध आज छौं, अधरपानको आश गर्दछौं ॥

पशुहरू चराउनका लागि वन गएका श्रीकृष्णका कोमल पाउले सकस पाउलान् कि भन्ने गोपिनीहरूलाई चिन्ता छ। यसले पनि उनीहरू कृष्णप्रति अतिशय प्रेम प्रकट गर्दछन् भन्ने प्रमाणित हुन्छ –

मूल – चलसि यद् व्रजाच्चारयन् पशून्
नलिनसुन्दरं नाथ ते पदम् ।
शिलतृणाङ्कुरैः सीदतीति नः
कलिलतां मनः कान्त गच्छति ॥

अनुवाद – पशुहरू सबै साथमा भई,
विपिनमा तिमी घुम्दछौ गई ।
सकस पाउलान् पाउले भनी,
सकल बस्तछौं दीन भैं बनी ॥
(पृ.१२८)

गोपीहरू श्रीकृष्णमा मन मुग्ध भएको बताएका छन् । त्यसलाई सहज रूपमा यसरी प्रस्तुत गरिएको छ –

मूल – रहसि संविदं हृच्छयोदयं
प्रहसिताननं प्रेमवीक्षणम् ।
बृहदुरः श्रियो वीक्ष्य धाम ते
मुहुरतिस्पृहा मुह्यते मनः ॥

अनुवाद – लुकिलुकी तिमी भेट गर्दछौ,
हंसमुखे भई प्रेम छर्दछौ ।
प्रणयनेत्रले खूब हेर्दछौ,
सकल गोपीका लट्‌ठ पार्दछौ ।
विपुल वक्षमा बस्तछिन् रमा,
मन छ मुग्ध यो नित्य नाथमा ॥
(पृ.१३१)

**चौथो अध्याय**

हराएका श्रीकृष्णलाई देखेर गोपिनीहरू पुनर्जीवित भएझैं भए । उनीहरूमा भएको शारीरिक र मानसिक परिवर्तनको दृश्य यसरी प्रदर्शन गरिएको छ –

मूल – तं विलोक्यागतं प्रेष्ठं प्रीत्युत्फुल्लदृशोऽबलाः ।
उत्तस्थुर्युगपत् सर्वास्तन्वः प्राणमिवागतम् ॥

अनुवाद – देखेर प्रिय ती कृष्ण अत्यन्त खुस भैकन ।
एकैचोटि उठे गोपी हत्पताएर तत्क्षण ॥
निष्प्राण तनमा मानौ प्राण आएसरी गरी ।
सारा शरीरमा फैल्यो फूर्ति विद्युत्प्रभासरी ॥ (पृ.१३४)

सन्तहरू सबै वस्तुबाट तृप्त भए पनि हरिको दर्शनबाट चाहिँ तृप्त हुँदैनन् । हराएका कृष्णलाई बल्लबल्ल भेटेकी एउटी गोपी पनि कृष्णको दर्शनबाट तृप्त भइनन् भन्ने तुलनात्मक अभिव्यक्तिलाई अनुवादकले अझ सुन्दर बनाउनु भएको छ –

मूल – अपरानिमिषद्दृग्भ्यां जुषाणा तन्मुखाम्बुजम् ।
आपीतमपि नातृप्यत् सन्तस्तच्चरणं यथा ।।

अनुवाद – अर्कीले टुल्ल भै आँखै नचिम्लीकन तन्तन ।
पद्मभ्रैं कृष्णको वक्त्र गरिन् पान दनादन ।।
भइनन् तृप्त ती गोपी गरेर कृष्णदर्शन ।
जसरी सन्त बन्दैनन् गरी श्रीहरिदर्शन ।। (प.१३६)

श्रीकृष्णसँग गोपीहरूले प्रेमको सच्चा स्वरूप जान्न चाहे। श्रीकृष्णले त्यसको स्वरूप यस्तो बताए –

मूल – मिथो भजन्ति ये सख्यः स्वार्थैकान्तोद्यमा हि ते ।
न तत्र सौहृदं धर्मः स्वार्थार्थं तद्धि नान्यथा ।।

अनुवाद – हे गोपीजन हो ! जस्को प्रेम हुन्छ परस्पर ।
त्यो प्रेम स्वार्थले हुन्छ निःस्वार्थ हुन्न है तर ।।
सौहार्द धर्म निःस्वार्थ चाहिन्छ प्रेममा जुन ।
त्यो कुनै नहुने प्रेम प्रेमै हैन भनी गुन ।। (पृ.१४१)

**पाँचौं अध्याय**

यमुनानदीको सुन्दर तटमा प्रारम्भ भएको दिव्य रासोत्सव हेर्न देवताहरू पनि सपत्निक आकाशमा आए। त्यसको वर्णन यसरी भएको छ –

मूल – यं मन्येरन् नभस्तावद् विमानशतसङ्कुलम् ।
दिवौकसां सदाराणामौत्सुक्यापहृतात्मनाम् ।।

अनुवाद – हजारौँ गोपीसाथ भगवान् कृष्णले पनि ।
रास उत्सव आरम्भ गर्नुभो अगुवा बनी ।।
पत्नीका साथमा द्यौता सैयौँ विमानमा चढी ।
रासक्रीडा गए हेर्न साह्रै उत्सुकता बढी ।। (पृ.१४८)

गोपीहरूका बीच विराजमान श्रीकृष्ण स्वर्णका बीचमा मणि सुशोभित भए जस्तै सुन्दर देखिए भन्ने भावलाई उपमा अलङ्कारको सौन्दर्यका साथ यसरी व्यक्त गरिएको छ –

मूल – तत्रातिशुशुभे ताभिर्भगवान् देवकीसुतः ।
मध्ये मणीनां हैमानां महाभरकतो यथा ॥

अनुवाद – त्यहाँ गोपीहरू माझ्र देखिए कृष्ण सुन्दर ।
स्वर्णका बीचमा जस्तै मणि हुन्छ मनोहर ॥ (पृ.१४९)

श्रीकृष्णको यस धराधाममा अवतार हुनुको प्रयोजनलाई मूलमा सङ्क्षेपमा सङ्केत गरिएको छ भने अनुवादकले पनि त्यसको सार यसरी खिच्नु भएको छ –

मूल – संस्थापनाय धर्मस्य प्रशमायेतरस्य च ।
अवतीर्णो हि भगवानंशेन जगदीश्वरः ॥

अनुवाद – स्वामी हुन् भगवान् कृष्ण पूर्ण अंश लिईकन ।
जन्मिए यस धर्तीमा धर्मको गर्न रक्षण ॥ (पृ.१६१)



# अन्तिम उपदेश २०७० का भूमिकाबाट

[ यस अन्तिम उपदेशमा परम उपदेश समेतका पाँच ओटा रचना समाविष्ट छन् । जसमा परम उपदेश, गूढ उपदेश, येन चेतयते विश्वम्, स्तुति र अन्तिम उपदेशसमेत छन् । मैले २०६३ सालमा नै भागवतको जडभरतरहूगणसंवादलाई समछन्दमा अनुवाद गरेर ज्ञान र भक्तिनामक ग्रन्थमा प्रकाशित गरेँ । भागवतमा आएका अद्वैतपरक प्रसङ्गमा यो मलाई मन पर्दछ । त्यसमा रहेका अत्यन्त महत्त्वपूर्ण अद्वैतवेदान्तपरक सिद्धान्तलाई कविताहरूको केवल समछन्दमा अनुवाद गरेर मात्रै जिज्ञासु पाठकहरूको जिज्ञासा शान्त गर्न पर्याप्त नहुने हो कि ! भन्ने मलाई यदाकदा लाग्दथ्यो । अहिले यस उमेरसम्ममा पनि मेरो ग्रन्थ लेख्ने जाँगर चलिरहेकोले यस संवादलाई पनि पुनः छोएँ र पद्यको समछन्दको अनुवादका साथै अन्वयार्थ, स्वामी श्रीधरको संस्कृतटीका र नेपालीमा सरल अर्थ पनि दिएको छु । प्रत्येक श्लोकमा आएको अद्वैतवेदान्तलाई परिपुष्ट गर्न उपनिषद्का सान्दर्भिक मन्त्रहरूलाई पनि भरसक दिने प्रयास गरेको छु ।

पहिलो रचना परम उपदेश अत्यन्त पठनीय छ । दोस्रो गूढ उपदेश पढ्दा सामान्य जस्तो लागे पनि नारदजीबाट अभिव्यक्त उपदेश अत्यन्त मननीय छ। तेस्रो 'येन चेतयते विश्वम्' झन् सारगर्भित अद्वैतसिद्धान्तका अर्थले आप्लावित देखिन्छ। चौथो स्तुति पनि उति नै महत्त्वपूर्ण लागेर मैले कलम चलाउने धृष्टता गरेको हुँ । पाचौँ 'अन्तिम उपदेशले पनि सबै जिज्ञासुहरूलाई सांसारिक माया र ममताबाट केही माथि उठ्ने प्रेरणा दिन्छ। यो अन्तिम उपदेश हामीहरू सबैका लागि अन्तिम उपदेश बन्न सके सबैको कल्याण हुनेछ । अन्तिम बेलामा सय भाइ छोराहरूलाई अन्तिम उपदेश दिँदै चक्रवर्ती राजा श्रीऋषभदेवले भनेका थिए –

गुरुर्न स स्यात्स्वजनो न स स्यात्
पिता न स स्याज्जननी न सा स्यात् ।

दैवं न तत्स्यान्न पतिश्च स स्या–
न्न मोचयेद्यः समुपेतमृत्युम् ॥
ती ता हुँदैनन् गुरु बन्धु दारा ।
मातापिता वा स्वजनै सहारा ।
द्यौता हउन् वा पति हुन् अवश्य,
हुँदैन मृत्य जुनबाट वश्य ॥

केही वर्षदेखि विहान स्वाध्याय गर्दा मैले नित्य पाठ गर्ने गरेका ग्रन्थहरूमा शुक्लयजुर्वेद, श्रीमद्भगवद्गीता र श्रीमद्भागवतमहापुराणसमेत पर्दछन् । त्यसरी पाठ गर्दा सबै ग्रन्थहरू म अर्थ बुझेर पाठ गर्ने गर्दछु । बुझ्न गारो परेमा भाष्य र टीका आदि पनि तुरुन्त नै त्यसै बखत हेरेर म स्पष्ट बुझ्न खोज्दछु । यसै क्रममा अत्यन्त मन परेका मन्त्र, श्लोक र सन्दर्भहरूको टिपोट गरेर म तिनलाई आफ्ना लेख र निबन्धहरूमा सन्दर्भ अनुरूप सन्निवेश गर्ने प्रयास गर्दछु । कहिलेकाहीँ भने लामा सन्दर्भहरूलाई विविध प्रकारले नेपाली भाषामा अनुवाद गरेर छुट्टै ग्रन्थका रूपमा पनि पाठकसमक्ष मैले प्रस्तुत गर्ने गरेको छु । त्यसैको परिणति नै यो अन्तिम उपदेश पनि हो । यो क्रम मैले ‘ज्ञान र भक्ति २०६३’ देखि नै सुरु गरेको हुँ र यो क्रम परमात्माको कृपा रहुन्जेल चली नै रहने छ । ]

# अन्तिम उपदेश २०७०

‘अन्तिम उपदेश’ ज्ञान र भक्तिलाई समन्वय गरी सरल एवम् सरस शैलीमा नेपालमिा अनुवाद गरिएको अर्को उपयोगी कृति हो । यो कृति अनुवाद, रूपान्तरण, मौलिकता, कवित्व, विद्वत्ता र ब्रह्मज्ञानको पुञ्ज बनेको छ । श्रीमद्भागवतमा आएका अद्वैत वेदान्तपरक गहन प्रसङ्गहरूमध्येमा पर्ने परम उपदेश, गूढ उपदेश, येन चेतयते विश्वम्, स्तुति र अन्तिम उपदेश गरी पाँच प्रसङ्गहरूको समछन्दमा अनुवाद, अन्वयार्थ, स्वामी श्रीधरको ‘संस्कृतटीका’ र नेपालीमा सरल अर्थको

समन्वित रूप 'अन्तिम उपदेश' हो । अनुवादकले भागवतका श्लोकको अनुवाद गर्नुभएको भए पनि सम्बद्ध अंशसँग सम्बन्धित उपनिषद्का उद्धरणहरूसमेत यथास्थान समावेश गरेर तथा आवश्यक ठाउँमा टिप्पणी र स्पष्टीकरण समेत दिएर अनुवादलाई प्रामाणिक, शास्त्रसम्मत र अनुसन्धानमूलक बनाउनु भएको छ । श्रुतिको सार भागवतमा र भागवतको भाव र सन्देश नेपालीमा कसरी आयो त्यसको जिज्ञासा शमन गर्न एवम् अनुसन्धानमूलक ढङ्गबाट तुलना गर्न समेत यस कृतिले सहयोग पुऱ्याएको पाइन्छ । वेदान्तले भरिभराउ यस्ता दार्शनिक प्रसङ्गहरूलाई सामान्य जिज्ञासु र मुमुक्षुहरूले समेत बुझ्ने गरी नेपाली भाषामा प्रस्तुत गरेर अनुवादकले आफ्ना लागि ब्रह्माभ्यास र लोकका लागि उपकार बढाउनु भएको देखिन्छ । भक्तिमा ज्ञान र ज्ञानमा भक्तिको भावैक्य बनाउन समर्थ अनुवादकमा प्रशस्त कवित्वको शक्ति प्रतिबिम्बित भएको छ । मूलको भक्तिभाव र अद्वैत वेदान्तपरक दार्शनिक चिन्तनलाई जीवन्त राखी नेपालीमा मीठो पदावलीको प्रयोग गरी आलङ्कारिक शैली शिल्पमा प्रकाशन गर्ने काव्यकौशल यहाँ अनुभव गर्न सकिन्छ । सिङ्गो पुस्तक पढिसकेपछि तटस्थ प्रबुद्ध पाठकले अनुवादकलाई अनुवादकका साथै कवि, भगवद्भक्त र ब्रह्मज्ञानी विद्वद्व्यक्तिका रूपमा चिन्न सक्तछ । उपनिषद्को व्याख्यान, भागवतको मर्म र वेदान्तको ज्ञान एकै पटक प्राप्त गर्न चाहने जिज्ञासु, भक्त र मुमुक्षुहरूका लागि अन्तिम उपदेश अत्युत्तम ग्रन्थ प्रमाणित हुन्छ जसले जीवनको शाश्वत सत्य बुझेर मुक्त हुन चाहनेहरूका लागि मार्गनिर्देशन गरेको छ । पुस्तकका केही नमुना उद्धरणहरूबाट यसको वैशिष्ट्य प्रकाशित हुन्छ ।

श्रीमद्भागवतमहापुराणको पञ्चमस्कन्धको एघारौं र बाह्रौं अध्यायमा उल्लिखित ब्रह्मज्ञानी जडभरतले जिज्ञासु राजा रहूगणलाई गरेको ज्ञानोपदेशमा आधारित परम उपदेशको एउटा श्लोकको गहन अर्थलाई नेपालीमा यसरी सुस्पष्ट पारिएको छ –

मूल – न तस्य तत्त्वग्रहणाय साक्षाद्
वरीयसीरपि वाचः समासान् ।
स्वप्ने निरुक्त्या गृहमेधिसौख्यं
न यस्य हेयानुमितं स्वयं स्यात् ॥

अनुवाद – यज्ञादिले प्राप्त सुरेन्द्रलोक
हो स्वप्नजस्तै अति तुच्छ भोग ।
भन्ने जहाँसम्म हुँदैन भान
तत्त्वार्थमा चाख हुँदैन जान ॥ (पृ.५)

गूढ उपदेशमा अध्यात्मज्ञान नजानेर र यसको आश्रय नलिएर बहिर्मुखी बनाउने संसारी सकाम कर्मको व्यर्थता यसरी देखाइएको छ –

मूल – ऐश्वरं शास्त्रमुत्सृज्य बन्धमोक्षानुदर्शनम् ।
विविक्तपदमज्ञाय किमसत्कर्मभिर्भवेत् ॥

अनुवाद – ब्रह्मविज्ञान हो विद्या जो छ अज्ञान नाशक ।
सोही विद्या नजानेर के गर्नु कर्म ? नाहक ॥ (पृ.४४)

आदि, मध्य र अन्त्य नभएको, बाहिर र भित्र पनि नभएको, आफ्नो पराई कोही केही नभएको तर सबै सत्ता र शक्ति भएको परमतत्त्व ब्रह्म हो भन्ने गहिरो दर्शन 'येन चेतयते विश्वम्' को एउटै श्लोकबाट सारगर्भित अर्थका रूपमा अभिव्यक्त भएको छ। जस्तै –

मूल – न यस्याद्यन्तौ मध्यञ्च स्वपरो नान्तरं बहिः ।
विश्वस्यामूनि यद् यस्माद् विश्वञ्च तदृतं महत् ॥

अनुवाद – आदि अन्त्य कुनै छैन न आफ्नो न कुनै पर ।
हुन् सत् चित् परमानन्द साक्षाद् ब्रह्म परात्पर ॥ (पृ.५४)

'स्तुति' मा भगवान् महादेवले भगवान् विष्णुको स्तुति गरेको प्रसङ्ग उल्लेख गरिएको छ । भागवतको काव्यात्मक स्तुतिलाई अनुवादकले पनि कवितात्मक बनाएर यसरी प्रस्तुत गरेको पाइन्छ –

मूल – त्वं ब्रह्म पूर्णममृतं विगुणं विशोक –
मानन्दमात्रमविकारमनन्यदन्यत् ।
विश्वस्य हेतुरुदयस्थितिसंयमाना –
मात्मेश्वरश्च तदपेक्षतयानपेक्षः ॥

अनुवाद – हौ ब्रह्म निष्कल परात्पर पूर्णरूप
हौ एक कारण चराचरका अरूप ।
साक्षी तिमी सकलका फलका प्रकाश
गर्दौन नाथ कहिल्यै अरूबाट आश ॥

भगवान्का अंश मानिने चक्रवर्ती सम्राट् ऋषभदेवले आफ्नो राजपाट सय भाइ छोराहरूलाई जिम्मा लगाएर सन्न्यास लिनुपूर्व दिएको वेदान्तपरक उपदेश अन्तिम उपदेश हो । यसमा पिताले पुत्रहरूलाई उपदेश दिएको प्रसङ्ग छ तापनि यो उपदेश हामी सबै जीवात्माहरूका लागि पनि हो भन्ने बुझ्नु र मनन गर्नुपर्दछ । भगवान् वासुदेवमा प्रेम नराखेसम्म मनुष्य देहबन्धनबाट किमार्थ छुट्तैन भन्ने सारांश यसरी प्रकाशन गरिएको छ –

मूल – एवं मनः कर्मवशं प्रयुङ्क्ते
अविद्ययाऽऽत्मन्युपधीयमाने ।
प्रीतिर्न यावन्मयि वासुदेवे
न मुच्यते देहयोगेन तावत् ॥

अनुवाद – अज्ञानले आवृत भै अनादि
ढाकिन्छ आत्मा बढि वासनादि ।
भासिन्छ पाताल, हुँदैन पार
बिर्सिन्छ जलले हरिको मुहार ॥



# ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री २०६८ का भूमिकाबाट

[ आद्य जगद्गुरु भगवत्पाद श्रीशङ्कराचार्यले ब्रह्मसूत्रका ५५५ सूत्रमा गहन भाष्य लेख्नुभएको छ। ती मध्ये प्रथम अध्यायको प्रथमपादको 'अथातो ब्रह्मजिज्ञासा'देखि लिएर 'तत्तु समन्वयात्'सम्मका चार ओटा सूत्रहरूमा श्रीशङ्कराचार्यका पट्टशिष्य श्रीपद्मपादाचार्यले पञ्चपादिका नामको ग्रन्थ अर्थात् टीका लेख्नुभएको छ । त्यसै पञ्चपादिकामा स्वामी श्रीप्रकाशात्ममुनिले व्याख्या लेख्नुभएको छ। जसलाई विवरण भनिन्छ। मैले पनि तिनै चार सूत्रहरूका शाङ्कर भाष्यलाई नेपाली भाषामा अनुवादका साथै अध्यास भाष्यको वाचस्पति मिश्रको भामती टीकाको अनुवाद गरेर यहाँ दिएको छु।

मेरो अत्यन्त सीमित अध्ययन, ज्ञान र क्षमताबाट मैले योभन्दा पहिले पनि अद्वैत वेदान्तसम्बन्धी केही ग्रन्थहरू लेखेर जिज्ञासु पाठकसमक्ष ल्याइसकेको छु। ब्रह्मसूत्र शाङ्करभाष्यका बारेमा पहिलेदेखि नै विभिन्न आचार्यहरूले विद्वत्तापूर्ण थुप्रै वृत्ति, टीका, वार्तिक समेत लेख्नुभएको छ। त्यो क्रम हालसम्म पनि अक्षुण्ण रहेको देखिन्छ। वस्तुतः प्रस्थानत्रयी मध्येका श्रीमद्भगवद्गीता, अद्वैतपरक उपनिषद्हरू र तीसँग सम्बन्धित अरू शास्त्रहरूको अध्ययन गर्दा ब्रह्मको बारेमा विभिन्न विचार र दृष्टिहरू प्रस्तुत भएका देखिन्छन् । सामान्य पाठक यसबाट रनभुल्ल पर्ने सम्भावना टड्कारो देखिन्छ। यसैको परिहार गर्न उपनिषद् र अरू शास्त्रहरूमा देखापरेको वैमत्य र विभिन्नताको समन्वय र निक्र्यौल ब्रह्मसूत्रशाङ्करभाष्यले गरेको छ।

उपनिषद्लाई ब्रह्मविचाराख्यशास्त्र भनिन्छ । विभिन्न मतमतान्तर हरूको समन्वय ब्रह्मसूत्रका चार अध्यायहरूले गरेका छन् । यसलाई भारती तीर्थमुनिले यसरी सूत्रबद्ध गर्नुभएको छ। जस्तै –

शास्त्रं ब्रह्मविचाराख्यमध्यायाः स्युश्चतुर्विधाः ।
समन्वयाविरोधौ द्वौ साधनं च फलं यथा ॥

अद्वैतवेदान्तमा ब्रह्मसूत्रको ठुलो महत्त्व छ । यो कठिन ग्रन्थ भएको हुँदा बुझ्न अत्यन्त गाह्रो छ । यसलाई बुझ्न र स्वाध्याय गर्न पनि यसको सोपानक्रम निर्धारण गरिएको छ । त्यो सोपानक्रम यस्तो छ – १. अधिकारी निर्णय, २. गुरूपसत्ति, ३. पदार्थद्वय, ४. तदैक्य, ५. विरोधपरिहार, ६. साधन र ७. फल । यस क्रममा ब्रह्मज्ञानका लागि साधनचतुष्टय सम्पन्न मुमुक्षु नै अधिकारी हुनसक्तछ । ब्रह्मसूत्रको प्रथमसूत्र अथातो ब्रह्मजिज्ञासाले यही कुरा बताएको छ । ब्रह्मजिज्ञासाका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष गएर गुरूपसत्ति गर्नुपर्दछ । सम्प्रदायपरम्परा भएको गुरुले मात्रै शिष्यलाई ब्रह्मज्ञान प्रदान गर्नसक्तछ । विनागुरुका स्वयंघोषित गुरुबाट यो सम्भव छैन । गुरुले पदार्थद्वय अर्थात् तत्पदार्थ र त्वम्पदार्थको उपपत्तिपूर्वक शिष्यलाई उपदेश गर्दछन् । त्यसपछि अर्थात् त्वम्पदार्थ र तत्पदार्थको शोधन गर्ने ज्ञान गुरुबाट प्राप्त भएपछि शिष्यले त्वम् पदार्थ अर्थात् जीव र तत्पदार्थ अर्थात् ब्रह्मको एकताको अनुभव गर्दछ । जीव र ब्रह्मको एकताका बारेमा अरू दर्शनहरूले गरेको विरोधलाई पनि शिष्यले उपनिषद् वाक्यहरूको सूक्ष्म विश्लेषणबाट परिहार गर्दै आत्मा र ब्रह्मको एकत्वमा आफुलाई पारङ्गत गर्न सक्तछ । अन्त्यमा सोपानक्रममा मोक्ष प्राप्तिको साधन र त्यसको फलको पनि गुरुद्वारा शिष्यले उपदेश प्राप्त गर्दछ ।

यिनै कुरा ब्रह्मसूत्रका समन्वय, अविरोध, साधन र फल समेत चार अध्यायहरूमा अत्यन्त सूक्ष्मरूपमा आचार्य शङ्करले वर्णन गर्नुभएको छ, तर बुझ्न अत्यन्त मुस्किल छ । अध्यासका बारेमा एउटा निबन्ध लेखेर २०६६ सालमा प्रकाशित मेरो ब्रह्मसाक्षात्कार ग्रन्थमा परिसकेको छ भनेर मैले ब्रह्मसूत्रसारमा समावेश गरेको थिइन । किन्तु अत्यन्त सङ्क्षिप्तरूपमा त्यो लेखिएको हुँदा त्यसबाट सायद जिज्ञासु पाठकहरूको जिज्ञासा शान्त हुन सकेन कि ! भन्ने लागेर यस चतुःसूत्रीमा त्यस अध्यासभाष्यलाई संस्कृतबाट जस्ताको तस्तै नेपालीमा अनुवाद गरेर दिएको छु । यस दुरूह भाष्यलाई अझै स्पष्ट पार्न आचार्य वाचस्पति

मिश्रको भामती टीकाको सङ्क्षिप्त अनुवाद गरेर नेपालीमा दिएको छु। चतुःसूत्रीको शङ्कराचार्यको भाष्यलाई पनि जस्ताको तस्तै नेपालीमा अनुवाद गरेर कहीँकहीँ टिप्पणी पनि दिएको छु। यसको अन्त्यमा १९१ अधिकरणमा विभाजन गरेर सूत्र र सूत्रहरूको नेपालीमा अर्थ पनि दिएको छु। यसबाट जिज्ञासु पाठकहरूलाई अध्ययन गर्न सुगम हुनेछ भन्ने मैले विश्वास लिएको छु।

मैले झन्डै ५ दशकभन्दा अघि अर्थात् २०१८ सालमा गुरु गोपालनिधि तिवारीज्यूसँग पढेको ब्रह्मसूत्र शाङ्करभाष्य ३० वर्षको लामो अन्तरालपछि फेरि अहिले आएर २०५२ सालदेखि गुरु प्रा.डा. दीर्घराज घिमिरेज्यूसँग पढिरहेको छु, तर पनि मैले यसलाई छ्याङ्ग बुझ्न सकेको छैन। त्यसै कारण नै श्रवणपछि मननका रूपमा विभिन्न शैलीबाट आफ्ना टुटेफुटेका शब्दमा यसलाई लेखेर आफ्ना अपवित्र वाणीहरूलाई पवित्र पार्ने दुष्प्रयास म गरिरहेको छु। यस सन्दर्भमा प्राचीन आचार्यहरूका भनाइलाई यहाँ उद्धरण गर्नु सान्दर्भिक ठान्दछु। भामतीकार वाचस्पति मिश्रले आफ्नो भामती टीकाको प्रारम्भ गर्दै लेख्नुभएको छ :–

आचार्यकृतिनिवेशनमप्यवधूतं वचोद्रस्मदादीनाम्।
रथ्योदकमिव गङ्गाप्रवाहपातः पवित्रयति ॥

त्यसै गरेर शाङ्करभाष्यका रत्नप्रभाका टीकाकार स्वामी रामानन्दले त्यस्तै आशय प्रकट गर्नुभएको छ। जस्तै –

श्रीमच्छारीरकं भाष्यं प्राप्य वाक्शुद्धिमाप्नुयात्।
इति श्रमो मे सफलो गङ्गा रथ्योदकं यथा ॥

आचार्यचरणहरूको पदचिह्नलाई अनुसरण गर्दै मैले पनि योभन्दा अघि शाङ्करभाष्यमा आधारित भएर ब्रह्मसूत्रसार र उपनिषत्सार लेखेर प्रकाशन गरिसकेको छु। यस कार्यबाट पनि मैले पूर्ण सन्तुष्टि प्राप्त गर्न नसकेको हुँदा भगत्पाद श्रीशङ्कराचार्यबाट प्रणीत ब्रह्मसूत्रको उपोद्घात अध्यासभाष्य, अथातो ब्रह्मजिज्ञासा, जन्माद्यस्य यतः,

शास्त्रयोनित्वात् र तत्तुसमन्वयात् समेत चार सूत्रहरूको शाङ्करभाष्यको अक्षरशः नेपालीमा अनुवाद गर्दै आफ्नो अशुद्ध वाणीलाई शुद्ध पार्ने सत्प्रयास गरेको छु। जस्तै–

श्रीमत् शङ्करको भाष्य अध्यास चारसूत्रको।
अवगाहनले मेरो होला कि ! शुद्धि चित्तको ॥

अध्यास भाष्य बुझ्न अत्यन्न कठिन हुने कुरा जिज्ञासु पाठकहरूले बुझ्नु भएकै हुनुपर्दछ। त्यसलाई केहीमात्रामा भए पनि सुगम होस् भन्ने दृष्टिकोणले मैले वाचस्पति मिश्रको भामती टीकालाई पनि सङ्क्षिप्तीकरण गरेर नेपालीमा दिएको छु।

ब्रह्मसूत्रको अध्यास र चतुःसूत्रीको पाण्डुलिपि तयार भएपछि सो लिएर म आदरणीय डा.स्वामी रामानन्द गिरिज्यूका समक्ष आशीर्वचनका लागि पुगेको थिएँ। त्यो पाण्डुलिपि देखेपछि अत्यन्त खुसी भएर स्वामीज्यूले मलाई यस कार्यका लागि धन्यवाद दिनुभएको थियो। सिकारु विद्यार्थीका रूपमा मैले विगत वर्षहरूमा लेखेका ब्रह्मसूत्रसार, उपनिषत्सार समेतका ग्रन्थहरूप्रति पनि उहाँको अत्यन्त सकारात्मक भावना छ। मलाई बारम्बार लेखिरहन स्वामीज्यू प्रेरणा र प्रोत्साहन दिने गर्नुहुन्छ। प्रस्तुत "ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री" को अनुवाद देखेपछि स्वामीज्यू झन् खुसी हुनुभएको थियो। यस ग्रन्थमा स्वामीज्यूको आशीर्वचनका लागि मैले अनुरोध गरेको थिएँ।

मैले अनुरोध गरेपछि स्वामीज्यूले मेरो आग्रहलाई सहर्ष स्वीकार गरी अध्यासका बारेमा अत्यन्त विशद तथा विद्वत्तापूर्ण अनुसन्धानात्मक आशीर्वादात्मक सम्मति 'अद्वैतवेदान्तदर्शनसम्मत अध्यासस्वरूपविवेचन' दिनुभएकोमा म स्वामीज्यूप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु। यसबाट मैले गरेको प्रयासलाई बल प्राप्त भएको छ। अत्यन्त दुरूह अध्यासमा नयाँ आयाम र प्रकाश प्राप्त भएको छ। यस गहन तथा अमूल्य सम्मतिका लागि म फेरि स्वामीज्यूमा हार्दिक कृतज्ञता अर्पण गर्दछु।

वस्तुतः मेरो प्रयास केवल बालप्रयास मात्र हो। स्वामीज्यूको शुभाशीर्वचनबाट यस बालप्रयासलाई ऊर्ध्वगामी प्रेरणा र ऊर्जा प्राप्त

भएको छ । अध्यासका सम्बन्धमा स्वामीज्यूबाट प्राप्त सम्मतिमा कतिपय गहन विचारहरूका साथै केही महत्त्वपूर्ण पारिभाषिक शब्दावली र लक्षणहरू पनि सम्मिलित भएका छन् । त्यसबाट दुर्बोध अध्यास बुझ्न केही सुगम भएको मैले महसुस गरेको छु । जस्तै – 'अधिकृत्य आस्ते वस्त्वन्तरं अधिकृत्य प्रकाशते' 'सत्यानृतमिथुनीकरण लक्षणोद्रध्यासः' 'सामान्यतः ज्ञाते विशेषतः अज्ञाते वस्तुनि भ्रमो भवति' 'अधिष्ठानसमसत्ताकस्य अवभासः अध्यासः' 'यद् यद् अध्यस्तं तत् तत् मिथ्या' इत्यादि ।]

# ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री २०६८

अद्वैत वेदान्तदर्शमा विभिन्न पारिभाषिक शब्दहरू छन् । तिनको सान्दर्भिक अर्थ र आशय नबुझी वेदान्तमा सामान्य प्रवेश पनि हुँदैन । रातारात मुक्ति पाउने कुरा त आकाशपुष्प जत्तिकै असम्भव छ । अतः मुक्ति पाउन ब्रह्मतत्त्व बुझ्नुपर्छ, ब्रह्मतत्त्व बुझ्न अद्वैत वेदान्त बुझ्नुपर्छ र अद्वैत वेदान्त बुझ्न यसमा प्रयोग हुने पारिभाषिक शब्दहरूको मर्म ठम्याउनुपर्छ । वेदान्त बुझ्न यही सोपानक्रममा अभ्यास गर्दै जानुपर्छ ।

अद्वैत वेदान्तमा प्रचलित प्रमुख पारिभाषिक शब्दहरूमध्ये एउटा शब्द हो – अध्यास । अध्यासको सामान्य अर्थ अज्ञान हो । वेदान्त दर्शनअनुसार एउटा वस्तुमा अर्को वस्तुको आरोप नै अध्यास हो । अध्यास शब्दको व्युत्पत्ति 'अधिकृत्य आस्ते वस्त्वन्तरम् अधिकृत्य प्रकाशते' भन्ने गरिएको छ । यसले पनि एउटा वस्तु अर्को वस्तुमा प्रकाशित भएर देखापर्छ भन्ने अर्थको द्योतन गर्दछ । महर्षि वेदव्यासप्रणीत ब्रह्मसूत्रमा भाष्य गर्ने आद्य जगद्गुरु शङ्कराचार्यले उपोद्घात अध्यास भाष्यमा 'अतस्मिन् तद्बुद्धिः' भनेर अध्यासको लक्षण बताएका छन् । जस्तै – डोरीमा सर्पको प्रतीति वा ज्ञान हुनु अध्यास हो । सर्प नभएको डोरीमा सर्प देख्नु वा सर्प नभए पनि सर्प हो भन्ने अज्ञान हुनु 'अतस्मिन् तद् बुद्धिरूप' अध्यास हो । जीवको वास्तविक स्वरूप ब्रह्म हो तापनि अज्ञान

वा अध्यासका कारण जीवले दुःख पाइरहेको छ। चेतन आत्मामा देह र देहधर्म (स्थूलत्व, कृशत्व, सुखित्व, दुःखित्व आदि) को व्यवहार हुनु तथा जड देहमा चेतन आत्मा र आत्मधर्मको बोध हुनु अध्यास हो। यही अध्यासका कारण आत्मा र अनात्माको परस्पर विवेक नभएकाले जीव दुःखी बनेको छ, सुखी अर्थात् मुक्त हुनका लागि अध्यासको निवृत्ति गर्नुपर्छ भन्ने वेदान्तदर्शनको मान्यता छ। शङ्कराचार्यले ब्रह्मसूत्रको उपोद्घात अध्यास भाष्य लेखेर यसको स्वरूप निरूपण गर्दै यसबाट निवृत्ति हुनुपर्ने दार्शनिक मत प्रकट गरेका छन्। शङ्कराचार्यको ओजस्वी, अकाट्य र विद्वत्तापूर्ण अध्यासभाष्य सामान्य जिज्ञासुका लागि अत्यन्त दुरूह छ। ब्रह्मज्ञानका लागि अमूल्य रत्न भए तापनि सबैको पहुँचभन्दा बाहिरको विषय भएकाले यसमा पनि लोकोपकारकै भावबाट उत्प्रेरित भई शरत्कुमार भट्टराईले नेपालीमा अनुवाद गरी प्रकाशन गर्नुभएको हो। ब्रह्मसूत्रको अध्यासभाष्य जटिल छ भन्ने कुराको पुष्टि वाचस्पति मिश्रले यसै विषयमा गरेको भामती टीकाबाट पनि भएको पाइन्छ। मिश्रले अध्यास भाष्यलाई अझ सुगम, सरल, स्पष्ट र सर्वबोध्य बनाउने उद्देश्यले भामतीटीका लेखेका छन्। त्यही टीका पनि सबै जिज्ञासुहरूका लागि सुबोध छैन। अनुवादकले अध्यास भाष्यका साथै भामती टीकाको समेत नेपाली अनुवाद गर्नुभएको छ। यसबाट प्रबुद्ध पाठकले एकै पटक दुई प्रकारको लाभ लिन सक्ने अवस्था भएको छ – अध्यासबारे स्पष्ट हुन तथा अध्यास भाष्य र भामती टीकाको तुलनात्मक अध्ययन गर्न। भाष्य र टीका दुवैको ठाउँठाउँमा व्याख्या, टिप्पणी र स्पष्टीकरण दिनुबाट विषयबोध गर्न सजिलो पनि भएको छ।

ब्रह्मसूत्रका चार सूत्र 'अथातो ब्रह्मजिज्ञासा', 'जन्माद्यस्य यतः', 'शास्त्रयोनित्वात्' र 'तत्तु समन्वयात्' चतुःसूत्रीका नामबाट प्रसिद्ध छन्। ब्रह्मसूत्रका यी चार सूत्रको शाङ्करभाष्यको अनुवाद पनि यस कृतिमा समावेश गरिएको छ। मूल सूत्रको सूत्र, पदगत नेपाली अर्थ, मूल भाष्य र भाष्यको नेपाली अर्थ दिएर विषयवस्तु सरल ढङ्गले स्पष्ट

पार्ने प्रयास अनुवादकले गर्नुभएको छ। शङ्कराचार्यले गरेको प्रौढ, तार्किक र पाण्डित्यपूर्ण दार्शनिक भाष्यलाई सुबोध शैलीमा बुझाउने क्षमता अनुवादकमा देखिन्छ। कतैकतै टिप्पणी पनि गरिएको छ।

ग्रन्थको अन्तिम भागमा ब्रह्मसूत्रका ५५५ ओटै सूत्रहरूलाई १९१ अधिकरणमा विभाजन गरी तिनको अर्थ दिइएको छ। यहाँ पनि कतैकतै टिप्पणी र स्पष्टीकरण दिएर सूत्रार्थ स्पष्ट पारिएको छ। यसरी अध्यास भाष्य, भामती टीका र चतुःसूत्रीको अनुवाद, व्याख्या र टिप्पणीका साथै ब्रह्मसूत्रको व्याख्यात्मक अनुवाद गरेर यसलाई वेदान्तको एउटा सिङ्गो सङ्ग्रह बनाइएको छ। पुस्तकको महत्त्व, आवश्यकता र उपयोगिता भएकै कारणले 'अद्वैत वेदान्तदर्शनसम्मत अध्यासस्वरूप विचेचन' शीर्षकमा विद्वत्तापूर्ण भूमिका लेख्ने डा. स्वामी रामानन्द गिरिबाट शास्त्रमा शारीरकमीमांसा मानिने ब्रह्मसूत्र, भगवान्‌मा चन्द्रार्धशेखर शङ्कर र गुरुमा शङ्कराचार्यको प्रत्येक जन्ममा उपासना एवम् अनुसरण गर्न पाइयोस् भन्ने कुनै मुमुक्षुको प्रार्थनालाई शरत्कुमार भट्टराईले अनुशीलन गर्नुभएको छ भनी व्यक्त टिप्पणी सर्वथा औचित्यपूर्ण सिद्ध हुन्छ। अक्षरहरूको आकारविन्यास, प्रमाणपुष्टिका लागि विभिन्न स्थानमा उल्लिखित पादटिप्पणी तथा अनुवादमा समाविष्ट विषयपरक अभिप्रायको प्रकाशनबाट यस पुस्तकको पूर्णता प्रमाणित भएको छ। डा. स्वामी रामानन्द गिरिको भूमिकाबाट अध्यासको अर्थ, अध्यासका प्रकार र अध्यास सामान्य होइन भनी स्पष्ट पार्न शङ्कराचार्यले उपोद्घात भाष्यको अन्त्यमा उल्लेख गरेका ६ ओटा विशेषणहरूको विशिष्ट अर्थ बुझ्न पनि सजिलो भएको छ। यस भूमिकाले अनुवादक एवम् व्याख्याता भट्टराईलाई वेदान्तका विद्वान्, साधक र प्रचारकका रूपमा स्थापित गर्न सहयोग पुऱ्याएको देखिन्छ। सारांशमा हेर्दा वेदान्तका धेरै पुस्तक सङ्कलन, अध्ययन र अनुशीलन गर्न नसक्ने व्यक्ति एवम् वर्गका लागि 'ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री' विषयप्रवेशको मुख्य बिन्दु बनेको पाइन्छ।



# वेदान्तपरिभाषासार २०६८ का भूमिकाबाट

[ यो 'वेदान्तपरिभाषासार' आचार्य श्रीधर्मराजाध्वरीन्द्रप्रणीत अद्वैतवेदान्तको प्रकरण ग्रन्थ वेदान्तपरिभाषा र आचार्य श्रीसदानन्दकृत वेदान्तसारको नेपाली भाषामा साथसाथै गरिएको अनुवाद हो । यी दुवै ग्रन्थहरूका बारेमा आदरणीय डा.स्वामी श्रीप्रपन्नाचार्यज्यूबाट प्राप्त 'मेरो भावना शुभकामना'मा व्यक्त भइसकेको छ । अत्यन्त विद्वत्तापूर्ण विश्लेषणात्मक आशीर्वचनात्मक सम्मतिले मेरो सामान्य प्रयासलाई पनि चम्काएर माथि पुऱ्याइदिएको छ । यस सन्दर्भमा मलाई भर्तृहरिको सदुक्तिको सम्झना आयो – 'परगुणपरमाणून्पर्वतीकृत्य नित्यं निजहृदि विकसन्त सन्ति सन्तः कियन्तः ।'

यसरी म जस्तो सामान्य तथा अकिञ्चन व्यक्तिलाई पनि सन्मार्गतर्फ प्रोत्साहित गरेर माथि उठाउन खोज्नु उहाँहरूजस्ता महान् सन्तहरूको गुण नै हो । उहाँको विशाल हृदय र अगाध वैदुष्यको परिचय पनि यस सम्मतिबाट प्राप्त गर्न सकिन्छ । उहाँजस्तो महान् विद्वान् सन्तका बारेमा यो भन्दा बढी लेख्न खोज्नु मेरो धृष्टतामात्र ठहरिनेछ । त्यतिमात्र नभएर वेदान्तपरिभाषा र वेदान्तसारका बारेमा यहाँ मैले केही लेख्न खोज्नु दुस्साहस गरेको ठहरिने छ । अतः स्वामीज्यूको 'मेरो भावना शुभकामना'बाट नै यथार्थ कुरा जिज्ञासु पाठकहरूले अवगत गर्नुहुने नै छ । आफ्नो कमजोर स्वास्थ्य र उमेरलाईसमेत वास्तै नगरी आफ्नै हस्ताक्षरमा यस्तो महत्त्वपूर्ण आशीर्वादात्मक सम्मति प्रदान गर्नुभएकोमा उहाँप्रति म हार्दिक कृतज्ञता व्यक्त गर्दछु ।

म वि.सं.२०१८ सालमा अद्वैतवेदान्त विषयको शास्त्रीप्रथम वर्षको विद्यार्थी थिएँ । पढाइमा म अत्यन्त कमजोर थिएँ र नव्यन्यायको ज्ञान पनि मलाई थिएन । त्यस बेला नव्यन्यायको शैलीमा आचार्य

श्रीधर्मराजााध्वरीन्द्रद्वारा लेखिएको वेदान्तपरिभाषा मेरो लागि फलामको चिउरा भएको थियो । गुरुमुखी भएर मैले पढेको थिएँ तापनि परीक्षामा मैले राम्रोसँग उत्तर दिन सकेको थिइनँ । जसरी तसरी मैले उत्तरपुस्तिका भरेको थिएँ । कमजोर अध्ययनको कारण परीक्षामा दिएको उत्तरबाट म सन्तुष्ट थिइनँ । पछि परीक्षाफल प्रकाशित हुँदा म उत्तीर्णसम्म भएको थिएँ । त्यसबाट ममा हीनताबोध उत्पन्न भएको थियो र त्यो भावना मेरो मनमा अहिलेसम्म पनि विद्यमान छ । त्यही हीनताबोधको प्रक्षालन गर्नका लागि नै मैले विद्यार्थी जीवनबाट टाढा भएको पाँच दशकपछि यसको नेपालीमा अनुवाद गर्ने धृष्टता गरेको हुँ । म जस्तो अल्पज्ञले यस उमेरमा आएर उक्त अनुवाद गर्ने दुस्साहस गर्दा जस्ताको तस्तै अनुवाद गर्न नसकेको हुनसक्तछु । यसका लागि विद्वान् पाठक समक्ष म क्षमा याचना गर्दछु । ]

# वेदान्तपरिभाषासार २०६८

संस्कृतका शास्त्रीय विषयहरूमध्ये साहित्य कठिन, न्यायदर्शन कठिनतर र वेदान्त कठिनतम विषयहरू मानिन्छन् । कठिनतम विषयमा कठिनतर विषयको श्रवण गर्दा त्यो जटिलतम बन्न पुग्छ । त्यस्तो विषय सर्वशास्त्रविद् विद्वान्हरूका लागि पनि दुष्प्रवेश्य हुन्छ । वेदान्त विषयमा अद्वैत ब्रह्मको निरापद प्रतिपादन गर्ने धर्मराजाध्वरीन्द्रकृत 'वेदान्तपरिभाषा' तथा कास्मिरी विद्वान् सदानन्दकृत 'वेदान्तपरिभाषा' यस्तै ग्रन्थहरूको कोटिमा पर्दछन् । नव्यन्यायको शैलीमा संस्कृतमा लेखिएको जटिल ग्रन्थ 'वेदान्तपरिभाषा' को नेपालीमा अनुवाद गर्न खोज्नु अधीर, अल्पज्ञानी र अध्यवसायहीन व्यक्तिहरूका लागि महाकवि कालिदासले भनेझैं सानो डुँगाले महासागर तर्नुजस्तै दुष्कर हुन्छ । विषयबोधको गहिराइ, धैर्य, जिज्ञासा, उपकारभाव, विद्याप्रेम र निर्मल अन्तःकरण भएका व्यक्तिले मात्र यस्ता ग्रन्थको अनुवादमा हात

हाल्न सक्छ । विषयवस्तुको ज्ञान र अनुवादको सीप भएका शरत्कुमार भट्टराईले 'वेदान्तपरिभाषा' र 'वेदान्तसार' दुवै गहन र जटिल ग्रन्थको नेपालीमा अनुवाद गरी 'वेदान्तपरिभाषासार' प्रकाशित गर्नुभएको छ । संस्कृतमा लेखिएको जटिलभन्दा पनि जटिल विषयको प्रतिपादन गर्ने ग्रन्थको नेपाली अनुवाद र रूपान्तरण गरेर अनुवादकले डा. स्वामी प्रपन्नाचार्यले भनेजस्तै नेपाली साहित्यको फूलबारी सिँगार्नु भएको छ । विद्यार्थी जीवनमा आफुले राम्ररी बुझ्न नसकेको र परीक्षामा पनि सन्तोषजनक रूपमा उत्तर लेख्न नसकेको विषयलाई राम्ररी बुझेर तत्कालीन कमजोरीको क्षतिपूर्तिस्वरूप यस्तो प्रगाढ र पाण्डित्यपूर्ण ग्रन्थ अनुवाद गरी प्रकाशन गरेको देखिन्छ । वेदान्तका गुरु, शिष्य र जिज्ञासु सबैका लागि यो अनुवाद एउटा बौद्धिक उपकार पनि भएको छ ।

'वेदान्तपरिभाषासार' संस्कृतको 'वेदान्तपरिभाषा' र 'वेदान्तसारः' को संयुक्त नेपाली सारसङ्ग्रह हो । यसरी हेर्दा यो संस्कृतका दुई ओटा पुस्तकको एउटै नेपाली सङ्ग्रह बनेको छ । यस ग्रन्थमा 'वेदान्तपरिभाषा' तर्फका आमुख, प्रत्यक्षप्रमाणपरिच्छेद, अनुमानपरिच्छेद, अनुपलब्धिपरिच्छेद, विषयपरिच्छेद र प्रयोजनपरिच्छेद गरी ६ भाग छन् भने 'वेदान्तसार' समग्रतः १ भागमात्र छ । छन्दोबद्ध श्लोकको समछन्दमा श्लोकमै अनुवाद गरिएको छ भने गद्यमा पनि त्यसको अर्थ स्पष्ट पारिएको छ । पुस्तकको नाम 'सार' भए पनि वेदान्त र न्यायको सूत्रात्मक शैलीको विषय स्पष्ट पार्न कतैकतै व्याख्या पनि गरिएको छ । यो ग्रन्थ शाब्दिक अनुवाद नभएर विषयवस्तुबोधक अनुवाद बनेको छ । मूलमा रहेको तर्क र वितर्कको शैलीलाई अनुवादकले नेपालीमा यथासम्भव अवलम्बन गरी विषयवस्तु स्पष्ट पार्ने पद्धति अपनाउनुभएको छ । पारिभाषिक लामा पदावलीलाई सजिलोसँग बुझाउने प्रयास पनि यहाँ भएको छ ।

'वेदान्तपरिभाषासार' मा अनुवादकले अद्वैत वेदान्तको विद्वत्ता देखाउनुभएको छ । मूल अंश ठुला अक्षरमा र अनूदित भाग त्यो भन्दा साना अक्षरमा संयोजन गरी प्रकाशन गरिएकाले पाठकलाई दुवै अंश

छुट्ट्याउन निकै सजिलो भएको छ। यहाँ अनुवादकको सङ्क्षेपीकरण गर्ने कला पनि देखिन्छ। मूलमा ठाउँठाउँमा उल्लेख भएका उपनिषद् र तिनको उद्धरणस्थललाई नेपालीमा अर्थ गर्दा अनुवादकले सङ्क्षेपीकरण, सरलीकरण र सहजीकरण गरी श्रुति शब्दबाट विषयवस्तु सम्झाउनु भएको छ। संस्कृतमा गति नै नभएका वा मन्द गति भएका पाठकका लागि नेपालीमा सरलतापूर्वक अर्थबोध गर्न यसले सहयोग पुऱ्याएको छ। मूलको कुन अंश नेपालमिा नल्याउँदा पनि हुन्छ वा मूलमा भएको भन्दा विषयको स्पष्टताका लागि कुन अंश थप्नु पर्छ भन्ने हेक्का र होसियारी अनुवादकमा छ। अनुवादकले ग्रन्थको भूमिकामा आफु अल्पज्ञ भएकाले अनुवाद गर्न दुस्साहस गर्दा मूलको जस्ताको तस्तै अनुवाद गर्न नसकेको हुन सक्तछु भनेर विनय प्रदर्शन गर्नुबाट अद्वैत वेदान्तजसतो दुरूह विषयमा कहीँ कुनै अर्थ वा अंशमा अपेक्षित स्पष्टता नहुन सक्तछ तापनि विषयप्रतिपादन, व्याख्या र सङ्क्षेपीकरणको कला, अनुवादको सीप र क्षमताको प्रदर्शन एवम् पाठककेन्द्री दृष्टिकोणको अवलम्बनका आधारमा हेर्दा 'वेदान्तपरिभाषासार' अनुवादकको वैदुष्यमापनको प्रमाण बनेको पाइन्छ।



# अध्यास २०६९ का भूमिकाबाट

[ आद्य जगद्गुरु भगवत्पाद श्रीशङ्कराचार्यले ब्रह्मसूत्रका ५५५ सूत्रमा गहन भाष्य लेख्नुभएको छ। ती मध्ये प्रथम अध्यायको प्रथमपादको 'अथातो ब्रह्मजिज्ञासा'देखि लिएर 'तत्तु समन्वयात्'सम्मका चार ओटा सूत्रहरूमा श्रीशङ्कराचार्यका पट्टशिष्य श्रीपद्मपादाचार्यले पञ्चपादिका नामको ग्रन्थ अर्थात् टीका लेख्नुभएको छ । त्यसै पञ्चपादिकामा स्वामी श्रीप्रकाशात्ममुनिले व्याख्या लेख्नुभएको छ। जसलाई विवरण भनिन्छ। मैले पनि तिनै चार सूत्रहरूका शाङ्कर भाष्यलाई नेपाली भाषामा अनुवादका साथै अध्यास भाष्यको वाचस्पति मिश्रको भामती टीकाको अनुवाद गरेर यहाँ दिएको छु।

मेरो अत्यन्त सीमित अध्ययन, ज्ञान र क्षमताबाट मैले योभन्दा पहिले पनि अद्वैत वेदान्तसम्बन्धी केही ग्रन्थहरू लेखेर जिज्ञासु पाठकसमक्ष ल्याइसकेको छु। ब्रह्मसूत्र शाङ्करभाष्यका बारेमा पहिलेदेखि नै विभिन्न आचार्यहरूले विद्वत्तापूर्ण थुप्रै वृत्ति, टीका, वार्तिक समेत लेख्नुभएको छ। त्यो क्रम हालसम्म पनि अक्षुण्ण रहेको देखिन्छ। वस्तुतः प्रस्थानत्रयी मध्येका श्रीमद्भगवद्गीता, अद्वैतपरक उपनिषद्हरू र तीसँग सम्बन्धित अरू शास्त्रहरूको अध्ययन गर्दा ब्रह्मको बारेमा विभिन्न विचार र दृष्टिहरू प्रस्तुत भएका देखिन्छन् । सामान्य पाठक यसबाट रनभुल्ल पर्ने सम्भावना टड्कारो देखिन्छ। यसैको परिहार गर्न उपनिषद् र अरू शास्त्रहरूमा देखापरेको वैमत्य र विभिन्नताको समन्वय र निक्यौंल ब्रह्मसूत्रशाङ्करभाष्यले गरेको छ।

उपनिषद्लाई ब्रह्मविचाराख्यशास्त्र भनिन्छ। विभिन्न मतमतान्तर हरूको समन्वय ब्रह्मसूत्रका चार अध्यायहरूले गरेका छन् । यसलाई भारती तीर्थमुनिले यसरी सूत्रबद्ध गर्नुभएको छ। जस्तै –

शास्त्रं ब्रह्मविचाराख्यमध्यायाः स्युश्चतुर्विधाः ।
समन्वयाविरोधौ द्वौ साधनं च फलं यथा ॥

अद्वैतवेदान्तमा ब्रह्मसूत्रको ठुलो महत्त्व छ। यो कठिन ग्रन्थ भएको हुँदा बुझ्न अत्यन्त गाह्रो छ। यसलाई बुझ्न र स्वाध्याय गर्न पनि यसको सोपानक्रम निर्धारण गरिएको छ। त्यो सोपानक्रम यस्तो छ – १. अधिकारी निर्णय, २. गुरूपसत्ति, ३. पदार्थद्वय, ४. तदैक्य, ५. विरोधपरिहार, ६. साधन र ७. फल। यस क्रममा ब्रह्मज्ञानका लागि साधनचतुष्टय सम्पन्न मुमुक्षु नै अधिकारी हुनसक्तछ। ब्रह्मसूत्रको प्रथमसूत्र अथातो ब्रह्मजिज्ञासाले यही कुरा बताएको छ। ब्रह्मजिज्ञासाका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरु समक्ष गएर गुरूपसत्ति गर्नुपर्दछ। सम्प्रदायपरम्परा भएको गुरुले मात्रै शिष्यलाई ब्रह्मज्ञान प्रदान गर्नसक्तछ। विनागुरुका स्वयंघोषित गुरुबाट यो सम्भव छैन। गुरुले पदार्थद्वय अर्थात् तत्पदार्थ र त्वम्पदार्थको उपपत्तिपूर्वक शिष्यलाई उपदेश गर्दछन्। त्यसपछि अर्थात् त्वम्पदार्थ र तत्पदार्थको शोधन गर्ने ज्ञान गुरुबाट प्राप्त भएपछि शिष्यले त्वम् पदार्थ अर्थात् जीव र तत्पदार्थ अर्थात् ब्रह्मको एकताको अनुभव गर्दछ। जीव र ब्रह्मको एकताका बारेमा अरू दर्शनहरूले गरेको विरोधलाई पनि शिष्यले उपनिषद् वाक्यहरूको सूक्ष्म विश्लेषणबाट परिहार गर्दै आत्मा र ब्रह्मको एकत्वमा आफुलाई पारङ्गत गर्न सक्तछ। अन्त्यमा सोपानक्रममा मोक्ष प्राप्तिको साधन र त्यसको फलको पनि गुरुद्वारा शिष्यले उपदेश प्राप्त गर्दछ।

यिनै कुरा ब्रह्मसूत्रका समन्वय, अविरोध, साधन र फल समेत चार अध्यायहरूमा अत्यन्त सूक्ष्मरूपमा आचार्य शङ्करले वर्णन गर्नुभएको छ, तर बुझ्न अत्यन्त मुस्किल छ। अध्यासका बारेमा एउटा निबन्ध लेखेर २०६६ सालमा प्रकाशित मेरो ब्रह्मसाक्षात्कार ग्रन्थमा परिसकेको छ भनेर मैले ब्रह्मसूत्रसारमा समावेश गरेको थिइन। किन्तु अत्यन्त सङ्क्षिप्तरूपमा त्यो लेखिएको हुँदा त्यसबाट सायद जिज्ञासु पाठकहरूको जिज्ञासा शान्त हुन सकेन कि ! भन्ने लागेर यस चतुःसूत्रीमा त्यस अध्यासभाष्यलाई संस्कृतबाट जस्ताको तस्तै नेपालीमा अनुवाद गरेर दिएको छु। यस दुरूह भाष्यलाई अझै स्पष्ट पार्न आचार्य वाचस्पति मिश्रको भामती टीकाको सङ्क्षिप्त अनुवाद गरेर नेपालीमा दिएको

छु। चतुःसूत्रीको शङ्कराचार्यको भाष्यलाई पनि जस्ताको तस्तै नेपालीमा अनुवाद गरेर कहीँकहीँ टिप्पणी पनि दिएको छु। यसको अन्त्यमा १९१ अधिकरणमा विभाजन गरेर सूत्र र सूत्रहरूको नेपालीमा अर्थ पनि दिएको छु। यसबाट जिज्ञासु पाठकहरूलाई अध्ययन गर्न सुगम हुनेछ भन्ने मैले विश्वास लिएको छु।

मैले झन्डै ५ दशकभन्दा अघि अर्थात् २०१८ सालमा गुरु गोपालनिधि तिवारीज्यूसँग पढेको ब्रह्मसूत्र शाङ्करभाष्य ३० वर्षको लामो अन्तरालपछि फेरि अहिले आएर २०५२ सालदेखि गुरु प्रा.डा. दीर्घराज घिमिरेज्यूसँग पढिरहेको छु, तर पनि मैले यसलाई छ्याङ्ग बुझ्न सकेको छैन। त्यसै कारण नै श्रवणपछि मननका रूपमा विभिन्न शैलीबाट आफ्ना टुटेफुटेका शब्दमा यसलाई लेखेर आफ्ना अपवित्र वाणीहरूलाई पवित्र पार्ने दुष्प्रयास म गरिरहेको छु। यस सन्दर्भमा प्राचीन आचार्यहरूका भनाइलाई यहाँ उद्धरण गर्नु सान्दर्भिक ठान्दछु। भामतीकार वाचस्पति मिश्रले आफ्नो भामती टीकाको प्रारम्भ गर्दै लेख्नुभएको छ :–

आचार्यकृतिनिवेशनमप्यवधूतं वचोद्रस्मदादीनाम्।
रथ्योदकमिव गङ्गाप्रवाहपातः पवित्रयति ॥

त्यसै गरेर शाङ्करभाष्यका रत्नप्रभाका टीकाकार स्वामी रामानन्दले त्यस्तै आशय प्रकट गर्नुभएको छ। जस्तै –

श्रीमच्छारीरकं भाष्यं प्राप्य वाक्शुद्धिमाप्नुयात्।
इति श्रमो मे सफलो गङ्गा रथ्योदकं यथा ॥

आचार्यचरणहरूको पदचिह्नलाई अनुसरण गर्दै मैले पनि योभन्दा अघि शाङ्करभाष्यमा आधारित भएर ब्रह्मसूत्रसार र उपनिषत्सार लेखेर प्रकाशन गरिसकेको छु। यस कार्यबाट पनि मैले पूर्ण सन्तुष्टि प्राप्त गर्न नसकेको हुँदा भगत्पाद श्रीशङ्कराचार्यबाट प्रणीत ब्रह्मसूत्रको उपोद्घात अध्यासभाष्य, अथातो ब्रह्मजिज्ञासा, जन्माद्यस्य यतः, शास्त्रयोनित्वात् र तत्तुसमन्वयात् समेत चार सूत्रहरूको शाङ्करभाष्यको

अक्षरशः नेपालीमा अनुवाद गर्दै आफ्नो अशुद्ध वाणीलाई शुद्ध पार्ने सत्प्रयास गरेको छु । जस्तै–

श्रीमत् शङ्करको भाष्य अध्यास चारसूत्रको ।
अवगाहनले मेरो होला कि ! शुद्धि चित्तको ॥

अध्यास भाष्य बुझ्न अत्यन्त कठिन हुने कुरा जिज्ञासु पाठकहरूले बुझ्नु भएकै हुनुपर्दछ । त्यसलाई केहीमात्रामा भए पनि सुगम होस् भन्ने दृष्टिकोणले मैले वाचस्पति मिश्रको भामती टीकालाई पनि सङ्क्षिप्तीकरण गरेर नेपालीमा दिएको छु ।

ब्रह्मसूत्रको अध्यास र चतुःसूत्रीको पाण्डुलिपि तयार भएपछि सो लिएर म आदरणीय डा.स्वामी रामानन्द गिरिज्यूका समक्ष आशीर्वचनका लागि पुगेको थिएँ । त्यो पाण्डुलिपि देखेपछि अत्यन्त खुसी भएर स्वामीज्यूले मलाई यस कार्यका लागि धन्यवाद दिनुभएको थियो । सिकारु विद्यार्थीका रूपमा मैले विगत वर्षहरूमा लेखेका ब्रह्मसूत्रसार, उपनिषत्सार समेतका ग्रन्थहरूप्रति पनि उहाँको अत्यन्त सकारात्मक भावना छ । मलाई बारम्बार लेखिरहन स्वामीज्यू प्रेरणा र प्रोत्साहन दिने गर्नुहुन्छ । प्रस्तुत “ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री” को अनुवाद देखेपछि स्वामीज्यू झन् खुसी हुनुभएको थियो । यस ग्रन्थमा स्वामीज्यूको आशीर्वचनका लागि मैले अनुरोध गरेको थिएँ ।

मैले अनुरोध गरेपछि स्वामीज्यूले मेरो आग्रहलाई सहर्ष स्वीकार गरी अध्यासका बारेमा अत्यन्त विशद तथा विद्वत्तापूर्ण अनुसन्धानात्मक आशीर्वादात्मक सम्मति ‘अद्वैतवेदान्तदर्शनसम्मत अध्यासस्वरूपविवेचन’ दिनुभएकोमा म स्वामीज्यूप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु । यसबाट मैले गरेको प्रयासलाई बल प्राप्त भएको छ । अत्यन्त दुरूह अध्यासमा नयाँ आयाम र प्रकाश प्राप्त भएको छ । यस गहन तथा अमूल्य सम्मतिका लागि म फेरि स्वामीज्यूमा हार्दिक कृतज्ञता अर्पण गर्दछु ।

वस्तुतः मेरो प्रयास केवल बालप्रयास मात्र हो । स्वामीज्यूको शुभाशीर्वचनबाट यस बालप्रयासलाई ऊर्ध्वगामी प्रेरणा र ऊर्जा प्राप्त

भएको छ । अध्यासका सम्बन्धमा स्वामीज्यूबाट प्राप्त सम्मतिमा कतिपय गहन विचारहरूका साथै केही महत्त्वपूर्ण पारिभाषिक शब्दावली र लक्षणहरू पनि सम्मिलित भएका छन् । त्यसबाट दुर्बोध अध्यास बुझ्न केही सुगम भएको मैले महसुस गरेको छु । जस्तै – 'अधिकृत्य आस्ते वस्त्वन्तरं अधिकृत्य प्रकाशते' 'सत्यानृतमिथुनीकरण लक्षणोद्रध्यासः' 'सामान्यतः ज्ञाते विशेषतः अज्ञाते वस्तुनि भ्रमो भवति' 'अधिष्ठानसमसत्ताकस्य अवभासः अध्यासः' 'यद् यद् अध्यस्तं तत् तत् मिथ्या' इत्यादि । ]

# अध्यास २०६९

वेदान्त दर्शनमा बारम्बार चर्चित तर दुरूह पारिभाषिक शब्द हो – अध्यास । अध्यास भनेको एउटा वस्तुमा अर्को वस्तुको आरोप हो । 'अधिकृत्य आस्ते वस्त्वन्तरम् अधिकृत्य प्रकाशते' यस्तो व्युत्पत्ति भएको अध्यास शब्दले एउटा वस्तु अर्को वस्तुमा प्रकाशित भएर देखा पर्छ भन्ने अर्थ प्रस्तुत गर्दछ । ब्रह्मसूत्रको उपोद्घात अध्यास भाष्यमा आद्य जगद्गुरु श्रीशङ्कराचार्यले 'अतस्मिन् तद्बुद्धिः इति' भनेर अध्यासको लक्षण गरेको पाइन्छ । यस लक्षणअनुसार डोरीमा नभएको सर्पको प्रतीति हुनु अतस्मिन् तद्बुद्धिरूप अध्यास हो । यसरी अज्ञानमूलक अध्यासका कारण जीवले सत्, चित् र आनन्दस्वरूप आफ्नो यथार्थ स्वरूपलाई बिर्सिएर आफुमा कर्तृत्व, प्रमातृत्व र भोक्तृत्वधर्मको आरोप गरिरहेको हुँदा अध्यासको निवृत्ति गर्नुपर्दछ भन्ने वेदान्त दर्शनको मान्यता छ । अध्यास वारे सम्यग् ज्ञान नभई वेदान्त दर्शनमा प्रवेश सम्भव छैन । आद्य जगद्गुरु शङ्कराचार्यले ब्रह्मसूत्रको उपोद्घातका रूपमा प्रणयन गरेको अध्यास, अध्यासको वाचस्पति मिश्रकृत भामतीटीका एवम् चतुःसूत्री शाङ्कर भाष्यको नेपाली अनुवादका रूपमा 'अध्यास, २०६९' आएको हो । अनुवादकको 'ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री' २०६८ सालमै

प्रकाशित भएको हो तापनि मुमुक्षु जिज्ञासुहरूको आग्रह र आवश्यकतालाई सम्मान गर्दै विस्तृतीकरण गरेर 'अध्यास' शीर्षकमा यस अध्यासलाई भिन्न ग्रन्थको रूपमा प्रकाशन गरिएको देखिन्छ। यसमा पनि 'ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री' मा प्रकाशित डा. स्वामी रामानन्द गिरिको ' अध्यासस्वरूपविवेचन' शीर्षकको प्रौढ, विद्वत्तापूर्ण, अनुसन्धानप्रधान आलेखको पुनः प्रकाशन गरिएको छ र अध्यास जस्तो कठिन विषयलाई सरल शैलीमा सोदाहरण स्पष्ट पारिएको छ। ग्रन्थको मूल विषयवस्तुका रूपमा ब्रह्मसूत्रका चतुःसूत्रीमा भएको शाङ्कर भाष्यको नेपाली अनुवाद समावेश गरिएको छ। प्रकाशक र अनुवादकको सङ्क्षिप्त कथन, डा. स्वामी रामानन्द गिरिको विशद प्रकाशन र शङ्कराचार्यको उपोद्घात अध्यास भाष्य, भामतीटीका र ब्रह्मसूत्रको चतुःसूत्री शाङ्कर भाष्यको गम्भीर अनुवादले सङ्क्षिप्त कलेवरको भए पनि पुस्तक सारपूर्ण तथा वेदान्तीहरूका लागि बहुउपयोगी बनेको पाइन्छ। वेदान्त जस्तो कठिन विषयभित्रको अझ कठिन विषयमा गणना गरिएको 'अध्यास' बारे आधिकारिक सामग्री  एकत्र गरेर अनुवादकले 'स्वान्तः सुखाय' र 'परजनहिताय' को सिद्धान्त स्थापित गर्नुभएको छ।



# अद्वैतसिद्धिः २०६९ र ७० का भूमिकाबाट

[ अद्वैतवादमा छ्यापे द्वैतीले जुन दूषण ।
धोएर सब ती दोष बनाई शुद्ध भूषण ॥
दिए यो जसले सिद्धि फँ्याकी जालो असत्यको ।
गर्छौं हृदयमा ध्यान उनै परमसत्यको ॥

अद्वैतवेदान्तका मूर्धन्य विद्वान् स्वामी श्रीमधुसूदन सरस्वती लोकोत्तर प्रतिभाले सम्पन्न व्यक्ति हुनुहुन्थ्यो । उहाँ अद्वैतमार्गका साथै भक्तिमार्गका पनि निष्णात मनीषी हुनुहुन्थ्यो भन्ने कुरा उहाँका अद्वैतसिद्धि र भक्तिरसायनजस्ता उत्कृष्ट ग्रन्थहरूबाट थाहा हुन्छ । उहाँको जन्म सन् १५४० मा भारतको बङ्गालप्रदेशको फरीदपुर जिल्लाअन्तर्गत पोटालीपाडा प्रगण्डामा एक नैष्ठिक ब्राह्मणपरिवारमा भयो । उहाँका पिताको नाम प्रमोद पुरन्दराचार्य थियो । उहाँ एक तपस्वी तथा विद्वान् व्यक्ति हुनुहुन्थ्यो । उहाँका चार भाइ छोराहरूमध्ये श्रीमधुसूदन सरस्वती साँहिला छोरा हुनुहुन्थ्यो । उहाँको न्वारानको नाम कमलजनयन थियो । श्रीमधुसूदन सरस्वतीको सुरुको पढाइ बङ्गालको नवद्वीपमा नै त्यस समयका न्यायका प्रसिद्ध विद्वान् श्रीमथुरानाथ तर्कवागीशसँग भयो । तर्कवागीशसँग न्यायशास्त्र पढेपछि श्रीमधुसूदन सरस्वती वाराणसी जानुभयो । त्यहाँ गएपछि श्रीविश्वेश्वर सरस्वतीसँग उहाँले अद्वैतवेदान्तको अध्ययन गर्नुभयो र उहाँबाटै संन्यास पनि ग्रहण गर्नुभयो । त्यसपछि कमलजनयन स्वामी श्रीमधुसूदन सरस्वतीका नामबाट अद्वैतवेदान्तको आकाशमा उदित हुनुभयो । श्रीमधुसूदन सरस्वतीले आफ्नो यसै अद्वैतसिद्धिको मङ्गलाचरणको दोस्रो श्लोकमा “श्रीरामविश्वेश्वरः...” भनेर आफ्ना गुरु श्रीविश्वेश्वर सरस्वतीको नाम अत्यन्त आदरका साथ उल्लेख गर्नुभएको छ । यसका अतिरिक्त आफ्ना अन्य ग्रन्थहरूमा पनि धेरै ठाउँमा श्लोकबद्ध गरेर गुरुको स्तुति गर्नुभएको छ । जस्तै :–

मामक्षरं यः परमक्षरं हि
परोपदेशेन चिदक्षरेण ।
चकार विभ्रान्त्यपनोदविद्य-
स्तं काशिराजं गुरुराजमीडे ॥

उहाँले आफ्ना सम्बन्धमा पनि अद्वैतसिद्धिनामक ग्रन्थको सुरुमा नै लेख्नुभएको छ :–

श्रद्धाधनेन मुनिना मधुसूदनेन
सङ्गृह्य शास्त्रनिचयं रचितातियत्नात् ।
बोधाय वादि विजयाय च सत्वराणा–
मद्वैतसिद्धिरियमस्तु मुदे बुधानाम् ॥

अद्वैतसिद्धिको प्रणयन स्वामी श्रीमधुसूदन सरस्वतीबाट कुन सन्दर्भमा भएको थियो र त्यसको उद्देश्य के थियो भन्ने आदि समेतका सम्बन्धमा तल उल्लेख गरिनेछ । यहाँ उहाँका केही महत्त्वपूर्ण ग्रन्थहरूको नाम उल्लेख गर्नु प्रासङ्गिक ठान्दछु । जो यसप्रकार छन् १.अद्वैतसिद्धि, २.सिद्धान्तबिन्दु, ३.गूढार्थदीपिका (श्रीमद्भगवद्गीताको टीका) ४.भक्तिरसायन अथवा भगवद्भक्तिरसायन, ५.शिवमहिम्नस्तोत्रव्याख्या, ६.वेदान्तकल्पलतिका, ७.अद्वैतरत्नरक्षण, ८.सारसङ्ग्रह, ९.वेदस्तुतिटीका, १०.हरिलीलाविवेक, ११.परमहंसप्रिया, १२.कृष्ण-कुतूहलनाटक, १३.आत्मबोधटीका, १४.ईश्वरप्रतिपत्तिप्रकाश र अन्य ग्रन्थहरू ।

अद्वैतवेदान्तका साथै भक्तिमार्गका पनि अद्वितीय विद्वान् श्रीमधुसूदन सरस्वती संस्कृतजगत्का एक मूर्धन्य व्यक्तित्व भएको कुरा विवादरहित छ । रामचरितमानसका रचयिता गोस्वामी श्रीतुलसीदासलाई उहाँको समकालीन मानिएको छ । यी दुई विद्वान्हरू समकालीनमात्र थिएनन् दुवै विद्वान्हरूका बीचमा घनिष्ट मित्रता पनि थियो । यसको प्रमाणका रूपमा

त्यस समयमा रामायणलाई भाषामा रूपान्तरण गरेको हुँदा त्यस बेलाका सम्पूर्ण संस्कृतका विद्वान्हरूले श्रीतुलसीदासको घोर विरोध गरेका थिए । यसै कुरालाई लिएर श्रीतुलसीदासले श्रीमधुसूदन सरस्वतीलाई पत्र लेख्नुभयो । जस्तै –

हरिहरयश सुरनरगिरा वरणहिँ सन्त सुजान ।
हाँडी हाटक चारु रुचि राँधे स्वाद समान ॥

अर्थात् जस्तै सुन अथवा माटाका हाँडीमा पकाएको भातमा समेत कुनै स्वाद फरक पर्दैन । त्यस्तै भगवान्को गुणगान संस्कृतमा अथवा भाषामा गरे पनि त्यसको भाव, अर्थ र प्रभावमा समेत कुनै फरक पर्दैन । यसको जबाफमा श्रीमधुसूदन सरस्वतीले श्रीतुलसीदासको प्रशंसा गर्दै संस्कृत भाषामा उत्तरपत्र लेख्नुभयो । जस्तै –

परमानन्दपत्रोऽयं जङ्गमस्तुलसीतरुः ।
कवितामञ्जरी तस्य रामभ्रमरभूषिता ॥

अर्थात् तुलसीदास एउटा यस्ता हिँड्ने डुल्ने तुलसीका वृक्ष हुन् जसको कवितारूपी मञ्जरी रामरूपी भमराबाट सुशोभित भएको छ ।

श्रीमधुसूदन सरस्वतीको नाम अकबरको समयमा अबुलफल्ज (सन् १५९८) ले तयार गरेको 'आईने अकबरी'मा अरू विद्वान्का साथ उल्लेख भएको पाइन्छ । किंवदन्ती अनुसार श्रीमधुसूदन सरस्वतीको घनिष्ट सम्बन्ध अकबरका अर्थमन्त्री टोडर मलसँग थियो । एक पटक विद्वान् श्रीमधुसूदन सरस्वतीलाई उनको विद्वत्ताबाट प्रभावित भएर बादशाहा अकबरले वाराणसीबाट दिल्लीमा सम्मानका लागि बोलाएका थिए । उहाँका सम्मानमा एउटा विशाल विद्वत्सभाको आयोजना गरियो । सभाको सभापतित्व विद्वान् श्रीमधुसूदन सरस्वतीबाटै भयो । उहाँको विद्वत्ताबाट प्रभावित भएर त्यस सभामा बादशाहा अकबर र सम्पूर्ण

सभासद्समेतले सर्वसम्मतिबाट श्रीमधुसूदन सरस्वतीलाई अभिनन्दन गरे। जुन अभिनन्दनपत्र यस प्रकार छ –

वेत्ति पारं सरस्वत्या मधुसूदनसरस्वती।
मधुसूदनसरस्वत्याः पारं वेत्ति सरस्वती॥

यी माथि उल्लेख भएका शब्दावलीहरूद्वारा उहाँको प्रशंसा गरियो। श्रीमधुसूदन सरस्वती त्यस समयका कति ठूला विद्वान् हुनुहुन्थ्यो भन्ने कुरा यसबाट पनि थाहा हुन्छ। स्वामी श्रीमधुसूदन सरस्वतीले लेख्नुभएका थुप्रै महत्त्वपूर्ण ग्रन्थहरू छन्। तिनमा अद्वैतवेदान्तपरक अद्वैतसिद्धिग्रन्थ पनि एक हो। यो ग्रन्थ नव्यन्यायको शैलीमा लेखिएको आजसम्मको सबैभन्दा प्रौढ र दुरूह ग्रन्थ हो। केही विद्वान्हरूको भनाइ अनुसार अद्वैतसिद्धि कुनै खास मौलिक ग्रन्थ नभएर अद्वैतवेदान्तका विरुद्धमा व्यासराज तीर्थद्वारा लेखिएको न्यायामृतग्रन्थको आमूलचूल आनुपूर्वी खण्डन ग्रन्थ हो। अद्वैसिद्धिग्रन्थको प्रतिपादनशैली अत्यन्त सुदृढ, परिष्कृत, वैदुष्यपूर्ण र प्राञ्जलसमेत भएको हुँदा सामान्य व्यक्तिले यस ग्रन्थलाई व्यासराज तीर्थको ग्रन्थ न्यायामृतको खण्डन गर्न लेखिएको ग्रन्थ हो भनेर पत्तो लगाउन सक्तैन। श्रीगौडब्रह्मानन्द स्वामीले अद्वैतसिद्धिको टीका लघुचन्द्रिकामा कहीँकहीँ व्यासराजको न्यायामृतग्रन्थको उल्लेख गर्नुभएको छ। किन्तु अद्वैतसिद्धिग्रन्थको मूलमा भने कहीँ पनि न्यायामृतग्रन्थको उल्लेख श्रीमधुसूदन सरस्वतीले गर्नुभएको छैन। अद्वैतदर्शनको विशाल परिवारमा यस प्रकारको प्रमेयबहुल, परिष्कृत तथा सुदृढ प्रक्रियायुक्त अरू ग्रन्थ देखिँदैनन्। अद्वैतवेदान्तको संसारमा यो अद्वैतसिद्धिग्रन्थ वास्तवमा महासागर नै हो भन्दा कुनै अत्युक्ति हुँदैन।

अद्वैतसिद्धिग्रन्थको प्रतिपादन शैली नितान्त प्राञ्जल र परिष्कृतसमेत छ। भाषामा कहीँ कतै पनि सभ्यता र वादको मर्यादालाई उल्लङ्घन गरेको पाइँदैन। न्यायामृतग्रन्थमा जस्तो कटु भाषा यसमा श्रीमधुसूदन सरस्वतीले प्रयोग गर्नुभएको छैन। यस सम्बन्धमा अगाडि अद्वैतसिद्धिग्रन्थका

रचनाकार स्वामी श्रीमधुसूदन सरस्वती र न्यायामृतग्रन्थका रचयिता श्रीव्यासराज तीर्थले प्रयोग गर्नुभएको भाषा, तर्क र शैलीसमेतका बारेमा सङ्क्षिप्त तुलनात्मक समीक्षा प्रस्तुत गरिने छ ।

वास्तवमा माध्वसम्प्रदायका प्रखर विद्वान् श्रीव्यासराज तीर्थले आफ्नो न्यायामृतम् भन्ने दार्शनिकग्रन्थमा अद्वैत वेदान्तमा प्रतिपादित कैयौँ मूल सिद्धान्तहरूलाई अत्यन्त तर्क र प्रमाणका साथ खण्डन गर्दै द्वैतसिद्धान्तको अत्यन्त सुदृढताका साथ स्थापना गर्नुभएको छ । माध्वसम्प्रदायका विद्वत्परम्परामा श्रीव्यासराज तीर्थको ठुलो स्थान छ । जब द्वैतको विशाल आकाशमा एकक्षत्र आधिपत्यलाई चिर्दै अद्वैतसिद्धान्त उद्भासित भएको थियो त्यसै बेलादेखि नै अद्वैत र द्वैत सम्प्रदायका आचार्यहरूमा एक अर्काका सिद्धान्तको खण्डन र मण्डन गर्दै विभिन्न ग्रन्थहरूको रचना गर्नु एक किसिमको परम्परा नै चल्यो ।

आद्यजगद्गुरु श्रीशङ्कराचार्यभन्दा पूर्ववर्ती विद्वान् भर्तृप्रपञ्च लगायत अन्य दर्शनका विभिन्न विद्वान्हरूका अद्वैतविरोधी तर्कहरूलाई सप्रमाण सशक्तरूपमा खण्डन गर्दै आफ्नो अद्वैतपरक सिद्धान्तलाई स्थापना गर्न प्रस्थानत्रयीमा आफ्नो अत्यन्त ओजस्वी भाष्य लेख्नु भएपछि सारा अद्वैत विरोधी दर्शनहरू चक्रव्यूह निर्माण गरेर अद्वैतवेदान्तमाथि आइलागे । अझ यसमा खास गरेर द्वैतमत निराकरणका लागि श्रीशङ्कराचार्यले ब्रह्मसूत्र भाष्यमा उल्लेख गर्नुभएको "यद्यपीदं वेदान्तवाक्यानामैदम्पर्यं निरूपयितुं शास्त्रं प्रवृतं न तर्कशास्त्रवत्केवलाभिर्युक्तिभिः कञ्चित्सिद्धान्तं साधयितुं दूषयितुं वा प्रवृत्तम्, तथापि वेदान्तवाक्यानि वाचक्षाणैः सम्यग्दर्शनप्रतिपक्ष-भूतानि साङ्ख्यादिदर्शनानि निराकरणीयानि (ब्रह्मसूत्रशाङ्करभाष्यम् २।२।१।१)" भन्ने भनाइ प्रतिपक्षका लागि गम्भीर चुनौती भयो । यसबाट द्वैतवादको साम्राज्य खडा गर्न खोज्ने आचार्यहरूमा खलबली पैदा भयो । वाग्युद्ध र शास्त्रार्थको परम्परा सुरु भयो । यसको खण्डन र मण्डनमा कैयौँ ग्रन्थहरूको सिर्जना गरियो । यसै सन्दर्भमा विशिष्टाद्वैत सम्प्रदायका विशिष्ट विद्वान् श्रीवेङ्कटनाथ वेदान्तदेशिक (सन् १२६९–१३६९) ले आफ्नो कलम चलाउनु भयो । तीमध्ये सन् १९५६ मा श्रीअनन्तकृष्ण

शास्त्रीले "शतदूषणी"लाई आनुपूर्वी समीक्षा गर्दै "शतभूषणी" ग्रन्थ प्रकाशन गर्नुभयो । यसै क्रममा पक्षविपक्षमा धेरै विद्वान्हरूले आफुलाई अघि सार्नुभएको देखिन्छ। श्रीचित्सुखाचार्यले शाङ्करपरम्परालाई अगाडि बढाउँदै ब्रह्मसूत्रका समन्वय, अविरोध, साधन र फलका क्रमले नै चार अध्याय भएको चित्सुखीग्रन्थ (तत्त्वप्रदीपिका) प्रणयन गर्नुभयो ।

यसरी अद्वैत र द्वैतका सम्बन्धमा आफ्नाआफ्ना सम्प्रदायका आचार्यहरूले विद्वत्तापूर्ण ग्रन्थहरूको निर्माण गरेको देखिन्छ। चित्सुखीको प्रणयनपछि चित्सुखीकै शैली टिपेर माध्वसम्प्रदायका विद्वान् श्रीव्यासराज तीर्थले अद्वैतवेदान्तको विरुद्धमा प्रतिपक्षता प्रदर्शन गर्दै अत्यन्त प्रौढ नव्यन्यायका भाषामा अद्वैत वेदान्तका प्रमुख सिद्धान्तहरूलाई खण्डन गर्नुभयो । तिनै खण्डन गरिएका सिद्धान्तहरूलाई न्यायामृतकै शैलीमा उस्तै भाषामा तर विनालाञ्छना, विनाकटुता र अत्यन्त शिष्ट भाषामा श्रीमधुसूदन सरस्वतीले त्यसलाई खण्डन गरेर अद्वैतवेदान्तको सिद्धान्तलाई सौम्यरूपमा स्थापना गर्नुभयो छ । सर्वप्रथम न्यायामृताकारका केही उदाहरण यहाँ दिइन्छ। जस्तै –

१. प्रपञ्चमिथ्यात्ववाद :– न्यायामृतकारले मिथ्यात्त्वका पाँच लक्षणहरूमाथि विचार गर्नुभएको छ । ती पाँच लक्षणहरूमध्ये प्रथम लक्षण श्रीपद्मपादाचार्य, द्वितीय र तृतीय श्रीप्रकाशात्ममुनि, चतुर्थ श्रीचित्सुखाचार्य तथा पाँचौं श्रीआन्दबोधबाट लिइएका छन् । यस सम्बन्धमा श्रीगौडब्रह्मानन्दले लेख्नुभएको छ। जस्तै –

आद्यं स्यात्पञ्चपाद्युक्तं ततो विवरणोदिते ।
चित्सुखीयं चतुर्थं स्यादन्त्यमानन्दबोधजम् ॥

(क) सत्त्वासत्त्वानधिकरणत्त्वम् :– यस लक्षणमा न्यायामृतकारले ३ विकल्पहरू उठाउनु भएको छ :– (१) सत्त्वविशिष्टासत्त्वाभाव, (२) सत्त्वात्यन्ताभाव र असत्त्वात्यन्ताभावरूप दुईथरी धर्मको आधारता। (३) सत्त्वात्यन्ताभावविशिष्ट असत्वात्यन्ताभावरूप एक धर्मको आधारता।

यी तीनै पक्षमा उहाँले दोष देखाउनु भएको छ । जस्तै, (क) माध्वमतानुसार यिनमा सिद्धसाधनता देखिन्छ । किनभने माध्वसिद्धान्तमा प्रपञ्च केवल सद्रूप मानिन्छ। यसकारण प्रपञ्चमा सत्त्वविशिष्ट असत्त्वको अभाव सहजसिद्ध छ।

(ख) सत्त्वात्यन्ताभाव र असत्त्वात्यन्ताभाव – यी दुई एकै ठाउँमा रहन सक्तैनन् । किनभने सत्त्वात्यन्ताभावको अर्थ असत्त्व हुन्छ र असत्त्वात्यन्ताभावको अर्थ सत्त्व हुन्छ। यसकारण यी दुवै एकै ठाउँमा रहन अत्यन्त असम्भव छ। (ग) तेस्रो विकल्पमा पनि व्याघातदोष देखिन्छ। किनभने एउटै आधारमा रहने दुई पदार्थहरूमा एक पदार्थभन्दा दोस्रो पदार्थलाई विशिष्ट मानिन्छ। तर यहाँ सत्त्वाभाव र असत्त्वाभाव जब एकै आधारमा रहन सक्तैनन् त्यस अवस्थामा सत्त्वाभावविशिष्ट असत्त्वाभाव कसरी सम्भव छ ?

अब व्यासराजतीर्थको पूर्वपक्षलाई खण्डन गर्दै अद्वैतसिद्धिकार स्वामी श्रीमधुसूदन सरस्वतीले दोस्रो र तेस्रो विकल्पको निर्दोषता स्थापित गर्नुभएको प्रसङ्ग यहाँ दर्साइन्छ। स्वामी श्रीमधुसूदन सरस्वतीले "सत्त्वात्यन्ताभावासत्त्वात्यन्ताभावरूपधर्मद्वयविवक्षायां दोषाभावात्" । अर्थात् सत्त्व र असत्त्व दुवै धर्म एक अर्काका अभाव नभएर दुबै नै स्वतन्त्र भावरूप धर्म हुन् भनेर उल्लेख गर्नुभएको छ। उहाँको भनाइ अनुसार सत्त्वको लक्षण हो, त्रिकालाबाध्यत्व र असत्त्वको लक्षण हो, "क्वचिदपि उपाधौ सत्त्वेन प्रतीयमानत्वानिधिकरणत्व" । अर्थात् खपुष्पादिमा असत्त्व रहन्छ र ब्रह्ममा सत्त्व रहन्छ। प्रपञ्चमा भने सत्त्व असत्त्व दुबैको अभाव छ। माध्वमतानुसार पनि त्रिकालाबाध्यत्वरूप सत्त्व प्रपञ्चमा सिद्ध हुनसक्तैन। त्यसकारण प्रपञ्चमा सत्त्वाभाव रहनुमा मध्वमतावलम्बीलाई आपत्ति नहुनु पर्ने हो। असत्त्वाभावता माध्वहरूले स्वीकार गरेकै सिद्धान्त हुँदै हो। त्यस कारण सत्त्व र असत्त्वका दुईथरी अभाव अथवा ती दुईमा एउटाको अभावले विशिष्ट अपर अभाव रहनु व्याहत अथवा विरुद्ध हुनसक्तैन।

२. त्रैकालिकनिषेधप्रतियोगित्वम् :– यस लक्षणका सम्बन्धमा

त्रैकालिकनिषेधलाई लिएर न्यायामृतकारले ३ विकल्प उठाएर तिनमा दोष पनि देखाएका छन् "त्रैकालिकस्य निषेधस्य तात्त्विकत्वे अद्वैत हानिः, प्रातिभासिकत्वे सिद्धसाधनाद्व्यावहारिकत्वेद्रपि तस्य बाध्यत्वेन तात्त्विकसत्त्वाविरोधित्वेनार्थन्तरात्"। अर्थात् ब्रह्ममा प्रपञ्चको त्रैकालिक अभाव यदि ब्रह्मकै सरह तात्त्विक मान्ने हो भने तब अद्वैतको हानि होला । प्रपञ्चको वास्तविक अभाव नमानेर प्रातिभासिक अभाव मानेको खण्डमा त माध्वमतावलम्बीहरूलाई पनि अभीष्ट नै हुन्छ। त्यसै प्रकारले प्रपञ्चको व्यावहारिक अभाव पनि वस्तुतः बाधित नै हुन्छ । त्यस कारण बाधित अभावको प्रतियोगिता प्रपञ्चमा मानेको खण्डमा वास्तविक सत्ताको अपहार हुँदैन । अतः सिद्धसाधनता र अर्थान्तरता दोष हुन्छ।

अद्वैतसिद्धिकार स्वामी मधुसूदन सरस्वतीले उक्त निषेधलाई सही माने तापनि उहाँले अद्वैतको हानि नहुनुको साथै ब्रह्मरूप नै रहने कुरामा जोड दिनुभएको छ।

३. ज्ञाननिवर्त्यत्वम् :– यस सम्बन्धमा न्यायामृतकार व्यासराजको भनाइ यस प्रकार छ ?– अतीत घटादिमा यो लक्षण अव्याप्त छ । किनभने यो ज्ञानद्वारा निवृत्त नभएर मुद्गरपातादिकाद्वारा ध्वस्त हुन्छ। अर्को कुरा, ज्ञानगत "निवर्तकता ज्ञानत्वेन विवक्षित" हुन्छ कि ? ज्ञानत्वव्याप्य धर्मले विवक्षित हुन्छ ? प्रथम पक्ष मानेमा शुक्तिरजतादिमा अव्याप्ति हुन्छ । किनभने त्यसको शुक्तिज्ञानमा निवर्तकता अधिष्ठान साक्षात्कारत्वेन हुन्छ तर ज्ञानत्वेन हुँदैन । दोस्रो पक्षलाई लिने हो भने, संस्कारमा अतिव्याप्ति हुन्छ । किनभने त्यसको निवर्तकता स्मृतिरूप ज्ञानमा ज्ञानत्वव्याप्य स्मृतित्वेन हुन्छ।

अद्वैतसिद्धिकार स्वामी मधुसूदन सरस्वतीले यी सबै विकल्पहरूबाट पर हटेर नयाँ मार्ग खोज्नुभएको छ । जस्तै "ज्ञानप्रयुक्तावस्थिति-सामान्यविरहप्रतियोगित्वं हि ज्ञाननिवर्त्यत्वम्" मायादि अनादि पदार्थहरूको निवृत्ति पनि आत्मज्ञानबाट नै हुन्छ । अतीत घटादिको निवृत्ति पनि ईश्वरीय ज्ञानबाट नै हुन्छ । किनभने

ईश्वरको ज्ञान कार्यमात्रमा साधारण कारणका रूपमा मानिन्छ । अधिष्ठानसाक्षात्कारादि पनि ज्ञानकै समकक्षमा आउँछन् । उत्तर ज्ञानद्वारा पूर्व ज्ञानको जुन निवृत्ति हुन्छ, त्यो निवृत्ति सामान्य या अत्यन्त निवृत्तिका रूपमा हुँदैन । किनभने त्यो ज्ञान संस्कारादिका रूपले रही नै रहन्छ । त्यसकारणले अतिव्याप्ति पनि हुँदैन ।

४. स्वाश्रयनिष्ठात्यन्ताभावप्रतियोगित्वम् :– यस लक्षणमा पनि न्यायामृतकारले अत्यन्ताभावको तात्त्विकतादिको पहिलेको जस्तै विकल्प उठाएर दोष देखाएका छन् । यसको उत्तर पनि अद्वैतसिद्धिकारले पहिलेजस्तै बह्मनिष्ठ प्रपञ्चको अत्यन्ताभाव तात्त्विक भएर पनि ब्रह्मभन्दा भिन्न भएको मानिदैन, त्यसकारण द्वैतापत्ति हुँदैन भनेर भनेका छन् ।

५. सदविविक्तत्वम् :- न्यायामृतकारले यस पाँचौँ लक्षणमा सत्ताका लागि ३ विकल्पहरू उठाएर दोष देखाएका छन् । जस्तै- सत्ता जातिका आधारलाई सत् मानिने हो कि ? अथवा अबाध्य वस्तुलाई सत् मानिने हो ? अथवा ब्रह्मलाई सत् मानिने हो ? पहिलो कल्प मान्ने हो भने प्रपञ्चमा अव्याप्ति हुन्छ । किनभने सत्ता जाति त्यसमा मानिएको छ । त्यस कारण त्यो सत् हो, सद्विविक्त होइन । दोस्रो कल्प मान्ने हो भने मिथ्यात्वको स्वरूप पर्यवसित हुन्छ बाध्यत्व, त्यो प्रपञ्चमा सम्भव छैन । तेस्रो कल्पमा पनि ब्रह्मरूप सत् वस्तुको भेद प्रपञ्चमा सम्मत भएको कारण सिद्धसाधनता दोष रहन्छ ।

यहाँ पनि अद्वैतसिद्धिकारले सत्त्वको आफ्नै परिभाषा बनाएर न्यायामृतकारले उठाएका सबै दोषहरूलाई निराधार सिद्ध गर्नुभएको छ ।

६. प्रपञ्चसत्त्ववाद :– 'सन् घटः, सन् पटः' इत्यादि प्रत्यक्ष प्रतीतिकाद्वारा प्रपञ्चमा सत्त्व सिद्ध हुन्छ । त्यसकारण प्रपञ्चमा सत्त्वाभावरूप मिथ्यात्वको अनुमान हुनसक्तैन भनेर यस प्रकारको आरोप न्यायामृतकारले लगाए । सत्त्वलक्षणको जटिलताको जालमा परेर न्यायामृतकार हार्नुभयो । अद्वैतीहरूको 'कीदृक् सत्वं तवाभिमतम् ?' भन्ने प्रश्न उत्तरविहीन नै भएर रहेको छ । अन्त्यमा

माध्ववादीले हार खाएर निम्नअनुसारको उत्तर दिएका थिए । जस्तै-

यादृशं ब्रह्मणः सत्त्वं तादृशं स्याज्जगत्यपि ।
तत्र स्यात्तदनिर्वाच्यं चेदिहापि तथास्तु नः ॥

अर्थात् अद्वैतवेदान्तीहरू ब्रह्ममा जस्तो सत्त्व मान्दछन्, त्यस्तै नै हामी माध्वमतावलम्बीहरू पनि सत्त्व मान्दछौँ । अद्वैतसिद्धिकार त्यस प्रकारको उत्तरप्रति उपहास गर्दै भन्नुहुन्छ- "नूनं विवाहसमये कन्यायाः पित्रा निजगोत्रं पृष्टस्य 'यदेव भवतां गोत्रम्, तदेव ममापि गोत्रम्' इति वदतो वरस्य भ्राता भवान् ।" अर्थात्, विवाहका समयमा कन्याका पिताले दुलाहासँग तपाईंको गोत्र के हो ? भनेर सोधेकोमा दुलाहाले 'जुन तपाईंको गोत्र हो, त्यही मेरो पनि गोत्र हो' भनेर उत्तर दिनु केवल मूर्खताको परिचायक मात्रै हुन आउँछ । किनभने समान गोत्रमा विवाह सम्बन्ध वैध मानिँदैन । त्यसप्रकार माध्वगणका 'यादृशं ब्रह्मणः सत्त्वं तादृशं स्याज्जगत्यपि' भनेर भन्नु सर्वथा अनुचित देखिन्छ । अत्यन्ताबाधितत्वरूप सत्त्व जगत्मा कहिल्यै सम्भव हुँदैन ।

असत् प्रपञ्चमा अर्थक्रियाकारित्वः- जस्तै असत् रजतबाट सत्य गहनाहरूको निर्माण कहिल्यै पनि हुनसक्तैन । त्यसै गरेर दृश्यत्वादि असत्य हेतुबाट मिथ्यात्वको सिद्धि पनि हुनसक्तैन भनेर न्यायामृतकारले अद्वैतसिद्धिकारलाई आक्षेप लगाएका छन् । त्यसको उत्तरमा अद्वैतसिद्धिकारले वाचस्पति मिश्रको 'उत्पादकाप्रतिद्वन्द्वित्वात्' भन्ने शब्द नै दोहोऱ्याएर दृश्यत्वादि हेतुलाई आफुमा केवल व्यवहार कालाबाध्यत्व अपेक्षित छ र त्रिकालाबाध्यत्व छैन भन्ने उत्तर दिएको देखिन्छ । अतः दृश्यत्वादिकाद्वारा प्रपञ्चगत त्रिकालाबाध्यत्वाभाव सिद्ध गर्नलाई कुनै प्रकारको पनि विरोध उपस्थित हुनसक्तैन । अर्थक्रियाकारिताका लागि वस्तुको पारमार्थिक सत् हुनु आवश्यक छैन । किनभने स्वप्नकालमा सधवा स्त्रीलाई देख्नु असत् भए पनि भावी सत्यशुभको सूचक मानिन्छ ।

**अविद्याको लक्षण**

अविद्याका दुईथरी लक्षणहरू प्रसिद्ध छन् । (१) 'अनादिभाव-

रूपत्वे सति ज्ञाननिवर्त्यत्वम्' र (२) 'भ्रमोपादानम्' । यी दुवैथरी लक्षणहरूलाई न्यायामृतकारले दूषित गरिदिनु भएको छ 'आद्यलक्षणे अव्याप्तिः सादिशुक्त्याद्यवच्छिन्नचैतन्यावरकाज्ञानानामनादित्वा-योगस्योक्तत्वात् । द्वितीयलक्षणेऽपि यावन्ति ज्ञानानि तावन्त्यज्ञानानीति मते अभ्रमपूर्वकप्रमानिवर्त्याज्ञाने अभावारोपनिवर्तकप्रमानिवर्तक-प्रमानिवर्त्याज्ञाने चाव्याप्तिः । यी दोषहरूलाई निराकरण गर्दै अद्वैतसिद्धिकार लेख्नु हुन्छ :- "रूप्योपादानाज्ञानमप्यनादि चैतन्या-श्रितत्वादनाद्यैव" अर्थात्, शुक्त्यादि सादि पदार्थहरूले अवच्छिन्न चैतन्यको आवरकीभूत अज्ञान पनि अनादि चैतन्यकै आश्रयमा रहने हुँदा त्यो पनि अनादि नै हो, सादि होइन । त्यसै गरी आकाशादि अनादि पदार्थ घटादिले अवच्छिन्न भएर पनि अनादि नै रहन्छन्, सादि हुँदैनन् । दोस्रो लक्षणको पनि व्यवस्था गर्दै सिद्धिकार लेख्नुहुन्छ- "इदं च लक्षणं विश्वभ्रमोपादानं मायाधिष्ठानं ब्रह्मेति पक्ष, न तु ब्रह्ममात्रोपादानत्वपक्ष ब्रह्मसहिताविद्योपादानत्वपक्षे वा, अतो ब्रह्मणि नातिव्याप्ति" । अर्थात्, विश्वविभ्रमको कारण अज्ञान या माया हो । मायाको विषयीभूत ब्रह्म विश्वको अधिष्ठान हो । यस सिद्धान्त अनुसार मायाको यो दोस्रो लक्षण गरिएको हो । त्यस कारणले पनि ब्रह्ममा उक्त लक्षण अतिव्याप्त हुँदैन ।

**अविद्याभासकवाद**

न्यायामृतकारले प्रश्न गरे :- के अविद्या शुद्ध चैतन्यवेद्य हो ? अथवा वृत्तिप्रतिबिम्बित चैतन्य वेद्य हो ? यदि प्रथम पक्ष मान्ने हो भने निर्दोष चैतन्यबाट प्रकाशित भएको कारण अविद्या पारमार्थिक हुनजान्छ । दोस्रो पक्ष मान्ने हो भने अविद्याको कहिलेकाहीँ अप्रतीतिको प्रसक्ति पनि आउन सक्तछ । यसको समाधान अद्वैतसिद्धिकारले यसरी गर्नुभएको छ- अविद्या साक्षिवेद्य हो, शुद्ध चैतन्यवेद्य होइन । किनभने शुद्ध चैतन्यलाई साक्षी नभनेर अविद्यावृत्तिमा प्रतिबिम्बित चैतन्यलाई साक्षी भनिन्छ । अविद्या शुद्ध चैतन्यद्वारा साक्षात् भासित नहुने हुँदा अविद्यामा पारमार्थिकत्वापत्ति आउन सक्तैन ।

**अविद्याविषयक विचार**

न्यायामृतकार स्वामी श्रीव्यासराज तीर्थले 'अविद्या विषयोऽपि दुर्वचः' (अविद्याको विषय भन्न नसकिने छ।) अज्ञान आवरणका आठ थरीका प्रयोजन छन् । जस्तै- (१) सिद्ध प्रकाशको लोप (२) असिद्ध प्रकाशको अनुत्पत्ति (३) विद्यमान प्रकाशको विषयका साथ असम्बन्ध (४) प्राकाट्यसंज्ञक कार्यको प्रतिबन्ध (५) नास्ति न प्रकाशते भन्ने दोहोरो व्यवहार (६) अस्ति प्रकाशते भन्ने व्यवहारको अभाव (७) नास्ति न प्रकाशते भन्ने व्यवहारको अयोग्यता (८) अस्ति प्रकाशते भन्ने व्यवहारको योग्यता। घटादि परप्रकाश पदार्थहरूमा अपेक्षित प्रकाशको अभाव हुनु अथवा प्रकाशको अनुत्पत्ति हुनु । स्वयंप्रकाश चैतन्यमा यस प्रकारको अभाव रहँदैन । अतः आत्मामा प्रथम, द्वितीय र तृतीय कल्पको सम्भावना रहँदैन। प्राकाट्यरूप विषयगत धर्म भाट्टाभिमत भए पनि अद्वैतसम्मत होइन। यस कारण चारौँ विकल्प पनि निराधार हो। पाँचौँ कल्प स्वीकार गर्ने हो भने सुषुप्ति अवस्थामा 'न किञ्चिदवेदिषम्' भन्ने अनुभूति हुन नसक्ने हुन्छ । अज्ञानावस्थामा पनि आत्मस्वरूप अभिज्ञात्मक व्यवहार अद्वैत वेदान्तमा स्वीकार्य छ । अतः त्यसको अभाव आवरणको प्रयोजन हुनसक्तैन । ब्रह्मनिर्धर्मक भएको हुँदा ब्रह्ममा छैटौँ, सातौँ र आठौँ विकल्पहरू पनि लागु हुनसक्तैनन् भनेर पूर्वपक्षी न्यायामृतकार स्वामी श्रीव्यासराज तीर्थले अद्वैतवेदान्तको अविद्याविषयक सिद्धान्तमाथि आक्षेप गर्नु भएको छ।

उक्त विषयमा अद्वैतसिद्धिकार स्वामी श्रीमधुसूदन सरस्वतीले उहाँको आक्षेपको प्रतिवाद गर्दै निम्न अनुसारको सङ्क्षिप्त विचार राख्नु भएको छ। 'अविद्या विषयोऽपि सुवचः' अर्थात् अविद्याको विषय भन्न सकिने छ। किनभने, अविद्याको विषय चिन्मात्र नै हो। आवरणका सम्बन्धमा माथि भनिएका विकल्पहरूको प्रयोजन जबसम्म ब्रह्मज्ञान हुँदैन तबसम्म रही नै रहन्छ। यस सम्बन्धमा विवरणकारले पनि 'अज्ञानस्य चिन्मात्रमेव विषयः' अर्थात् अज्ञानको विषय चित्‌मात्रै हो भनेका छन्।

उपर्युक्त सङ्क्षिप्त विवरण पाठकहरूको उत्सुकता बढाउने दृष्टिबाट

मात्रै दिइएको हो। अद्वैतसिद्धिका बारेमा आद्योपान्त पढ्न भाषा, शैली, विषय र प्रस्तुतिका दृष्टिबाट समेत अत्यन्त दुरूह छ। यसलाई सीमित ज्ञानबाट सकेसम्म सरल बनाएर नेपाली भाषामा अनुवाद गरेर यो प्रथम खण्ड प्रस्तुत गरिएको छ। अनुवाद गर्न थालेपछि सुरुमा अत्यन्त मुस्किल भएर अनुवाद गर्न सक्दिन कि भन्ने लागेको थियो । किन्तु धैर्यधारणा गरेर विस्तारै अनुवाद गर्दै जाँदा अन्तःस्थ अन्तर्यामीको प्रेरणाले पछिपछि सजिलो हुँदै गयो । त्यसै अन्तरालमा गत २०६८ साल असोज ६ गते नेपालबाट म अष्ट्रेलिया गएँ । त्यस प्रवासका समयमा समय निकालेर यसको अनुवाद गर्नलाई अद्वैतसिद्धिग्रन्थ साथमा लिएर गएँ। त्यता प्रस्थान गर्नुअघि मैले नेपालमै छँदा मङ्गलाचरण र 'मित्थ्यात्वेविप्रतिपत्तिप्रदर्शनं तत्प्रयोजनञ्च' सम्म मात्र नेपाली भाषामा अनुवाद गरेको थिएँ । त्यसपछिका परिच्छेदहरूमध्ये अष्ट्रेलियाको प्रवासको समय डेढमहिना भित्रमा नै 'दृश्यत्वहेतूपपत्तिः' सम्मको परिच्छेद पूरा गरेर फर्किने मेरो विचार थियो, तर त्यस परिच्छेदको केही अंश चाहिँ नेपाल फर्किने समयसम्ममा पनि पूरा हुन नसकेको हुँदा नेपाल फर्किने क्रममा जेटमा नै बसेर पूरा गरेँ। लेखनको क्रमको अनुभव मैले मेरो तेस्रो अष्ट्रेलियायात्राको दैनिकीमा दिएको हुँदा यहाँ धेरै उल्लेख गरिनँ। यसका अरू खण्डहरू क्रमिक रूपमा लेखन र प्रकाशनसमेत गर्दै जाने प्रयास गरिनेछ।

यस ग्रन्थलाई पनि परवर्ती समयमा आएर बृहत्प्रस्थानत्रयी मध्येमा गणना गर्न थालिएको छ। अरू दुईओटा ग्रन्थहरूमा श्रीहर्षरचित खण्डनखण्डखाद्यम् ग्रन्थ र चित्सुखाचार्यद्वारा रचित तत्त्वप्रदीपिका ग्रन्थलाई लिइन्छ। यी सबै ग्रन्थहरू अद्वैतवेदान्तको आचार्यपरीक्षामा राखिएका छन् । लघुप्रस्थानत्रयीमा भने आचार्यशङ्करद्वारा भाष्य गरिएका ब्रह्मसूत्र, उपनिषद् र श्रीमद्भगवद्गीता पर्दछन् । यी ग्रन्थहरू अद्वैतवेदान्तको शास्त्रीपरीक्षाका लागि निर्धारण गरिएका छन् ।

नव्यन्यायका शैलीमा रचना गरिएका उपर्युक्त 'अद्वैतसिद्धिः', खण्डनखण्डखाद्यम् र तत्त्वप्रदीपिका अत्यन्त दुरूह ग्रन्थ मानिन्छन् ।

संस्कृत पढेका विद्वान्‌हरूले पनि विना गुरु पढ्न र बुझ्न खोज्नु अनाधिकार दुष्प्रयास गरेको ठहरिन्छ भने संस्कृत नपढेका सामान्य जिज्ञासु पाठकहरूका लागि त यी कति कठिन होलान्, सजिलै अनुमान गर्न सकिन्छ। यस्तो दुरूह बृहत्‌प्रस्थानत्रयीमध्येको एक ग्रन्थ अद्वैतसिद्धि सामान्य मान्छेले पढ्ने त के कुरा नामसम्म पनि नसुनेको हुनसक्तछ। जुन जिज्ञासु मुमुक्षुले सुन्नुभएको छ र पढ्ने प्रयास गर्नुभएको छ भने पनि बुझ्न गाह्रो परेको हुनुपर्दछ। किनभने यसको शैली र प्रतिपाद्य विषयसमेत दुरूह भएका हुँदा यस्तो हुनु स्वभाविकै हो । यो ग्रन्थ माध्वसम्प्रदायका उद्‌भटविद्वान् व्यासराजतीर्थको न्यायामृतनामक ग्रन्थमा प्रतिपादित अद्वैतवेदान्तविरोधी अनर्गल कुराहरूलाई खण्डन गरेर श्रुतिप्रतिपादित शाश्वत अद्वैतसिद्धान्तलाई मण्डन गर्न नव्यन्यायकै शैलीमा लेखिएको हो । यस्तो उत्कृष्ट तथा दुरूह ग्रन्थलाई नेपाली भाषामा अनुवाद गर्ने जुन प्रयास गरेँ यो मेरो दुष्प्रयास र धृष्टता मात्र हो भन्ने म ठान्दछु । मेरो यस धृष्टताबाट पनि जिज्ञासु पाठकहरू लाभान्वित हुन सक्नुभयो भने म आफुलाई धन्य सम्झनेछु। ]

# अद्वैतसिद्धिः २०६९ र ७०

'अद्वैतसिद्धिः' अद्वैत वेदान्तका विद्वद्‌वरेण्य स्वामी मधुसूदन सरस्वतीद्वारा नव्यन्यायका शैलीमा लेखिएको अत्यन्त दुरूह ग्रन्थ हो। सोह्रौं शताब्दकिो मध्यकालतिरका सरस्वती ज्ञानमार्ग र भक्तिमार्गका प्रखर अद्वितीय विद्वान् थिए । रामचरितमानसका रचयिता गोस्वामी तुलसीदासका समकालीन मानिने सरस्वतीका समयमा विभिन्न सम्प्रदायमा द्वैतवादी मत पनि प्रचलित थियो। तीमध्ये माध्वसम्प्रदायका विशिष्ट विद्वान् व्यासराजतीर्थले आफ्नो न्यायामृतनामक ग्रन्थमा अद्वैत वेदान्तविरोधी अनर्गल मत, तर्क र विचार प्रस्तुत गरेका थिए। मधुसूदन सरस्वतीले त्यही न्यायामृतग्रन्थमा उल्लिखित अद्वैत वेदान्तविरोधी

कुराहरूलाई खण्डन गरी श्रुतिप्रतिपादित अद्वैत सिद्धान्तलाई अखण्डनीय रूपमा मण्डन गर्नका लागि नव्यन्यायको तार्किक शैलीको अनुसरण गरी अद्वैतसिद्धिको प्रणयन गरेका थिए। वेदान्तलाई न्यायको शैलीमा प्रस्तुत गरिएको प्रकाण्ड पाण्डित्यपूर्ण यो ग्रन्थ आफुलाई बडेबडे वेदान्ती मान्नेहरूका लागि पनि 'फलामको च्युरा' बराबर कठिन र जटिल छ। वेदान्तको विषय, न्यायको शैली र परिष्कृत संस्कृत भाषाको त्रियोग भएको यो ग्रन्थ श्रीहर्षरचित 'खण्डनखण्डखाद्यम्' र चित्सुखाचार्यप्रणीत 'तत्त्वप्रदीपिका' कै कोटिमा समावेश गरेर बृहत्प्रस्थानत्रयीमा परिगणित छ। अनुवादकले प्राक्कथनमा उल्लेख गरे अनुसार अद्वैत वेदान्तको संसारमा यो ग्रन्थ महासागर नै भएकाले सर्वसाधारणको त के कुरा, वेदान्तप्रवीण भनिनेहरूका लागि पनि यसमा अवगाहन दुस्तर प्रमाणित हुन्छ। श्रुति र अनुभवमा श्रद्धा र आस्था भएका मुमुक्षुहरूका लागि तर्कको खासै आवश्यकता नपर्ने भए पनि तर्कशास्त्रमा विशेष रुचि राख्नेहरूका लागि कुनै वस्तुलाई तर्ककै आधारमा बुझ्न बढी आनन्दको अनुभूति हुन्छ। त्यस्तै तर्करसिक मुमुक्षुहरूका लागि यस ग्रन्थको प्रणयन भएको मानिन्छ। यस्तो जटिल, गम्भीर र अद्वितीय ग्रन्थको अनुवाद गरेर अनुवादकले आफ्नो वेदान्तवैदुष्य, नैयायिक नैपुण्य र भाषिक प्राविण्यको प्रमाण दिनुभएको छ। द्वैतको मिथ्यात्व सिद्धि र अद्वैतको सत्यत्वसिद्धि गरी लेखिएको यस ग्रन्थको अनुवादको भूमिकामा नेपालका अग्रणी वेदान्तीहरू डा. स्वामी प्रपन्नाचार्य, डा. स्वामी रामानन्द गिरि र प्रा.डा. दीर्घराज घिमिरेले अनुवादकको प्रशंसा गर्दै कृतित्वको निष्पक्ष मूल्याङ्कन गर्नुबाट पनि मूल कृति एवम् अनूदितरूप दुवैको महत्ता प्रकाशित हुन्छ। त्यसमा पनि डा. स्वामी रामानन्द गिरिको वेदान्तविषयक विदत्तापूर्ण आलेखन एवम् अनुवादकको प्राक्कथनले मूल कृति र अनुवादकका विषयमा प्रशस्त जानकारी प्राप्त हुन्छ। अद्वैत वेदान्तमै सम्पूर्ण जीवन यापन गरिरहनु भएका अनुवादकले अनुवादकार्यको प्रारम्भमा अनुवादको समाप्ति र सफलतामा आशङ्का पैदा भएको आत्मस्वीकृति जनाउनुबाट

पनि यो ग्रन्थ वेदान्ती विद्वान्हरूको विद्वत्ता परीक्षण गर्ने कसी हो भन्ने बुझिन्छ। यसको सफल अनुवाद गरेर अनुवादक विद्वत्परीक्षामा उत्तीर्ण हुनुभएको छ । ग्रन्थको भूमिका लेख्ने प्रा.डा. घिमिरेले विषयवस्तु सरल नेपाली भाषामा स्थापित भएको र विषयगत एवम् प्रक्रियागत ग्रन्थिभेदनका लागि ठाउँठाउँमा टिप्पणी दिएकाले वेदान्तदर्शनगत परिष्कृत अर्थमा जिज्ञासा हुनेका निमित्त प्रस्तुत कृति सोपानस्थली हो भनेर गरेको टिप्पणी यस सन्दर्भमा सर्वथा उचित छ । १८ शीर्षकमा आबद्ध यस अनुवादमा मूल अंश, अनूदित अंश र टिप्पणी अंश छुट्टाछुट्टै आकारका अक्षरहरूको विन्यासक्रम मिलाइएकाले पढ्न तथा सम्बद्ध अंश छुट्ट्याउन पनि सजिलो भएको छ। मूलमा भएको विषयवस्तुसँग पाठक मुमुक्षुको प्रवेश र सम्बन्ध रहिरहोस् भन्नका लागि अनुवादमा कतै अङ्क दिएर, कतै द्वैतवादी वा अद्वैतवादी भनी छुट्ट्याएर र कतै शङ्का र समाधान आदि उपशीर्षकहरू दिइएको छ । यसबाट पनि अनुवाद उपयोगी र बोधगम्य बनेको पाइन्छ।



# अद्वैत वेदान्त

शरदकुमार भट्टराईको व्यक्तित्वको अर्को प्रमुख पक्ष अद्वैत वेदान्ती व्यक्तित्व हो । उहाँको वेदान्ती व्यक्तित्व केलाउँदा उहाँले जीवनमा अरू काम पनि गर्नुभयो होला र ? भन्ने  प्रश्नै प्रश्न र आशङ्का एकै पटक पैदा हुन्छन् । वेदान्त पढेर, अभ्यास गरेर प्रमाणपूर्ण आधिकारिक ग्रन्थ लेखेर, आफ्नै व्यक्तिगत व्यय र व्यवस्थापनमा वेदान्तको ब्रह्मज्ञानप्रधान अनुष्ठान गरेर, वेदान्तसम्बन्धी सक्रिय संस्थाको स्थापना र सुसञ्चालन गरेर एवं सम्बद्ध विषयको अनुसन्धानमूलक पत्रिका प्रकाशन गरेर उहाँले यस्तो व्यक्तित्व प्राप्त गर्नुभएको देखिन्छ । पेसाले प्रशासक र भावनाले साहित्यिक बनेका व्यक्तिबाट वेदान्तकै नामबाट आजीविका गर्ने वर्गबाटभन्दा दसौं गुना विशिष्ट काम गरेर उहाँ वेदान्तीहरूबीच लब्धप्रतिष्ठ बन्नु भएको छ । सरकारी सेवामा छँदा आंशिक जीवन र सेवानिवृत्त भएपछि सम्पूर्ण जीवन वेदान्तमा बिताउने व्यक्तिहरूको खोजी गर्दा उहाँ नै पहिलो पङ्क्तिमा पर्नुहुन्छ । यो स्थान, प्रसिद्धि र समर्पणका पछाडि विभिन्न पक्षको भूमिका छ ।

शरदकुमार भट्टराईको घरायसी र पारिवारिक पृष्ठभूमि नै विद्यामैत्री थियो । पितामाता, गुरुमाता, दाजु लगायत गाउँका विभिन्न व्यक्तिबाट उहाँले प्राप्त गरेको प्रारम्भिक शिक्षा नै वेदान्तउन्मुख थियो । पिता एक जना शुद्ध र सरल कृषक हुनुहुन्थ्यो भने धर्मिष्ठ एवम् आचारनिष्ठा ब्रह्मज्ञानी पण्डित पनि हुनुहुन्थ्यो । माता पिताकी सच्चा अनुगामिनी हुनुहुन्थ्यो । पूर्वप्रसङ्गहरूमा चर्चित गुरुमाता आफ्नो जीवनलाई भन्दा नयाँ सन्ततिको जीवनलाई बढी महत्त्व दिनुहुन्थ्यो । यस्तो स्नेही र ज्ञानी परिवारबाट उहाँको शिक्षाको अरुणोदय हुन्छ । दाजु पनि संस्कृतका ज्ञाता र विद्याप्रेमी व्यक्ति हुनुहुन्छ । उता गाउँमा औपचारिक शिक्षाको प्रारम्भ गराउने गुरुहरूले पनि उहाँलाई आत्मज्ञानप्रधान शिक्षा

दिने गर्दथे । यस्तो पृष्ठभूमिबाट उहाँको शैक्षिक यात्रा अघि बढ्छ ।

शिक्षाको गतिलाई अघि बढाउने उद्देश्यले काठमाडौं आउनुभएका उहाँको सम्पर्क संस्कृतका प्रसिद्ध विद्वान् पद्मप्रसाद भट्टराई र वेदान्तका उद्भट गुरु गोपालनिधि तिवारीसँग हुन्छ । अर्काथरी शैक्षिक धारका शिक्षासेवी प्राचार्य शङ्करदेव पन्त र हिन्दुधर्मका कट्टर अनुयायी तथा कर्मयोगी प्राध्यापक गोकुलचन्द्र (G.C.) शास्त्रीबाट पनि शरदकुमार भट्टराईलाई शैक्षिक प्रेरणा र प्रोत्साहन प्राप्त हुन्छ । नेपालका यिनै लब्धप्रतिष्ठ विद्वान्हरूको सान्निध्य र सल्लाहले उहाँको वेदान्ती व्यक्तित्वको क्रमिक विकास भएको देखिन्छ। करिब ६ दशक पहिलेको शैक्षिक जीवनलाई फर्केर हेर्दा उहाँ वेदान्ती बन्छु र वेदान्तमै समर्पित एवम् सन्तुष्ट हुन्छु भनेर योजनाबद्ध रूपमा पढिरहनु भएको थियो भन्ने त देखिँदैन तर त्यही पृष्ठभूमि र विद्या तथा त्यस्तै विद्वान्हरूको साहचर्यले उहाँलाई अहिले समर्पित वेदान्ती बनाइदियो । त्यसपछि सोही विषयको उच्चस्तरको औपचारिक शिक्षाले उहाँलाई यसमा अझ बढी समर्पित बनाउँदै लग्यो । सरकारी सेवामा प्रवेश गरेपछि पनि आफुभन्दा धेरै माथिल्ला पदका अञ्चलाधीशहरू र वरिष्ठ विद्याप्रेमी सहकर्मीहरूले पनि उहाँबाटै वेदान्त सिक्न र सुन्न आग्रह गरेपछि उहाँ यसमा झन् बढी खट्नुभयो र समर्पित वेदान्ती बन्दै जानुभयो । सरकारी सेवाका क्रममा विभिन्न चित्र र चरित्रका मानिसहरूसँग भएको सम्पर्क, देशविदेशको यात्रा, पूर्वीय र पाश्चात्य जीवनशैली, संस्कार र सभ्यताको अवलोकन, आत्मचिन्तनको अभ्यास र निरन्तरको अध्ययन र लेखनले उहाँ अहिले आधिकारिक वेदान्ती बन्न पुग्नुभएको छ । मूर्खहरूको मूर्खता देखेर ज्ञानीहरू अझ बढी ज्ञानी हुन्छन् भन्ने मान्यता अनुसार यसमा आफुलाई झन् परिष्कार गर्दै हुनुहुन्छ । सरकारी सेवाकाल र सेवानिवृत्त वर्तमान कालमा पनि गृह, शिक्षालगायतका महत्त्वपूर्ण जिम्मेवारी भएका मन्त्रालयहरूको सचिव भएर पनि कागज र कलम बोकेर प्राथमिक कक्षाको विद्यार्थीजस्तो पढ्नका लागि वेदान्ती गुरुकहाँ नियमित धाउने,

प्रवचन सुन्ने र सुनेको कुरालाई गुनेर सप्रमाण प्रकाशन गर्ने उहाँ सबै वेदान्तीहरूका लागि प्रेरणाकै स्रोत बन्नुभएको छ। हाल (२०७२ चैत्र मसान्त) सम्म अद्वैत वेदान्तका १७ ओटा पुस्तकाकार कृति प्रकाशित गरिसक्नु भएका उहाँका 'ज्ञान र भक्ति' लगायतका भक्तिपरक केही अनूदित ग्रन्थ र अद्वैतपरक द्रष्टा र दृश्य ग्रन्थहरूसमेतको सप्तम खण्डमा चर्चा गरिसकिएको छ। यस खण्डमा भने उहाँका मौलिक तथा अत्यन्त गहन अद्वैत वेदान्तका सिद्धान्तहरूले आप्लावित गद्यात्मक ग्रन्थहरूको सङ्क्षिप्त चर्चा गरिनेछ।



# ब्रह्मसाक्षात्कार २०६५ का भूमिकाबाट

[ म सानो छँदा मेरा घरको वातावरण साहित्यिक र धार्मिक थियो। त्यसै वातावरणमा मेरो बाल्यजीवन व्यतीत भएको थियो। मैले २०१५ सालदेखि साहित्यतर्फ कलम चलाएको थिएँ। २०६२ सालसम्ममा मेरा केही समीक्षात्मक ग्रन्थहरू, केही कवितासङ्ग्रहहरू, केही खण्डकाव्यहरू, गीत र भजनसमेत गरेर एक दर्जनभन्दा बढी पुस्तकहरू प्रकाशित भइसकेका थिए। मलाई मानसिक शान्ति र आत्मसन्तुष्टि भने भएको थिएन। त्यसको कारण खोज्दा आफ्नो अवकाश प्राप्त जीवनलाई सहीरूपमा सदुपयोग गर्न नसकेको कुरा मैले महसूस गरेको थिएँ।

मेरो बाल्यावस्थाको भक्तितर्फको संस्कार र विद्यार्थी अवस्थाको अद्वैतवेदान्तको अध्ययनको पृष्ठभूमिलाई मैले सदुपयोग गर्न नसकेको मलाई अनुभूति भएको थियो। हुन त अवकाश प्राप्त गर्नुभन्दा पहिलेदेखि नै सत्सङ्ग, धार्मिक तथा आध्यात्मिक प्रवचनको श्रवण र अद्वैतवेदान्तको अध्ययनतर्फ म लागिसकेको थिएँ। तै पनि ममा रिक्तताको अनुभूति घनीभूतरूपमा विद्यमान थियो। त्यस रिक्ततालाई हटाउँन धार्मिक तथा आध्यात्मिक ग्रन्थहरूको अध्ययन र अनुशीलन गर्न तीव्ररूपमा मैले सुरु गरेको थिएँ। श्रीम'ागवतमहापुराणमा देवर्षि नारदले वेदव्यासलाई गर्नुभएको परमपावन उपदेशले मेरा पनि आँखा खोलिदिएको थियो। त्यसले मेरो आत्मिक असन्तुष्टिको रहस्यलाई खुलाइदिएको थियो। त्यसपछिमात्रै त्यतिन्जेलसम्मका मेरा धेरैजसो रचनाहरू सांसारिक कुराहरूमा सीमित र 'वाचारम्भणं विकारो नामधेयम्' (छा.उ. ६।१।४) मात्रै रहेछन् भन्ने मलाई थाहा भएको थियो। देवर्षि नारदको त्यस मार्मिक तथा हृदयग्राही उपदेशलाई यहाँ उद्धृत गर्नु म अत्यन्त सान्दर्भिक ठान्दछु –

न यद्वचश्चित्रपदं हरेर्यशो जगत्पवित्रं प्रगृणीत कर्हिचित्।
तद्वायसं तीर्थमुशन्ति वायसा न यत्र हंसा निरमन्त्युशिक्क्षयाः ॥

– भागवत १।५।१०

अर्थात् जुन साहित्यमा वा रचनामा अलङ्कार, रस, भाव आदिको चित्रविचित्र संयोजन छ तापनि जगत्लाई पवित्र पार्ने भगवान्का महिमाको वर्णन भएको छैन भने त्यो रचना सर्वथा निरर्थक हो। त्यस्तो रचना ता कागहरूकालागि उच्छिष्ट फ्याँक्ने जुठेल्नु जस्तो अपवित्र हो। मानसरोवरको रमणीय कमलवनमा विचरण गर्ने हंसजस्ता भक्तज्ञानीहरू त्यस्ता अपवित्र रचनामा भुल्दैनन्। अर्थात् त्यस्ता अपवित्र साहित्यहरू उनीहरू पढ्दैनन्।

त्यसै गरेर भागवतको एक अर्को श्लोकले पनि मेरो सुतेको चेतनालाई जगाइदिएको थियो। जस्तै –

नूनं दैवेन विहता ये चाच्युतकथासुधाम्।
हित्वा शृण्वन्त्यसद्गाथाः पुरीषमिव विड्भुजः ॥

– भागवत ३।३२।१९

अर्थात् अभागी मानिसहरू भगवान्को कथारूपी अमृतलाई छोडेर सुँगुर र कुकुर विष्टामा रमाएझैँ गरेर विषयवार्तामा रमाउँछन्।

त्यसपछि सांसारिक विषयतिर उन्मुख गराउने खालका रचनाहरू सिर्जना गर्न छोडेर भगवान्को यशोगान र ब्रह्मज्ञान भएका रचनाहरूतर्फ म लागेको थिएँ। फलस्वरूप केही फुट्कर पद्यहरूको समच्छन्दमा र विषमच्छन्दमा पनि मैले अनुवाद गरेको थिएँ। फलस्वरूप श्रीमद्भागवतमहापुराणभित्रका ज्ञान र भक्ति सम्बन्धी केही पद्यहरूको अनुवाद पनि गरेको थिएँ। तिनै कविताहरूलाई सङ्गृहीत गरेर ज्ञान र भक्तिका नामबाट २०६३ सालमा श्रीराजर्षिजनकस्मृतिकोषले प्रकाशित गरिदिएको थियो।

मेरो अद्वैतवेदान्तको अध्ययन, सत्सङ्ग र श्रीमद्भागवतमहापुराणको स्वाध्याय गर्ने प्रवृत्ति झनै बढेर गएको थियो। भागवतलाई ज्ञान, भक्ति र वैराग्यको त्रिवेणी भनिन्छ। यसका सबै कुरा अनुपम छन्। त्यसमा पनि दशमस्कन्ध भागवतको हृदय अर्थात् मुटु हो भने त्यसमा पनि २९ औँ अध्यायदेखि लिएर ३३ औँ अध्यायसम्मका ५ अध्यायहरू

जसलाई रासपञ्चाध्यायी पनि भनिन्छ, भागवतका पञ्चप्राणै हुन् । त्यस अलौकिक तथा चिन्मय रासपञ्चाध्यायीका सम्बन्धमा विद्वान्हरूमा रहेको मतमतान्तर र सामान्य व्यक्तिहरूमा रहेको गलत धारणालाईसमेत यथाशक्य निराकरण गर्ने उद्देश्यले मैले रासपञ्चाध्यायीको रचना गरेको थिएँ । त्यसलाई पनि २०६४ सालमा कोषले प्रकाशित गरिदिएको थियो ।

त्यसपछि पनि अनुवाद गर्ने क्रम मैले जारी नै राखेको थिएँ । जसमा केही भागवत र उपनिषद्का अंशहरू पनि पर्दछन् ।

चतुःश्लोकीभागवतको अंश –

ममात्रै नै थिएँ पैले थिएनन् सत् असत् पर ।
अहिले पनि मै नै छु पछाडि पनि मै तर ॥१॥
नभए पनि देखिन्छ देखिँदैन भए पनि ।
देखिन्छ सब यो माया आभास तम झैँ बनी ॥२॥
सम्पूर्ण भूतप्राणीमा पसेको छु र छैन म ।
ममा छैनन् कुनै केही सबैमा बस्छु टम्म म ॥३॥
तत्त्वजिज्ञासुले यो नै बुझ्नुपर्दछ तत्त्वतः ।
अन्वयव्यतिरेकादि विचारीकन वस्तुतः ॥४॥

माण्डूक्योपनिषद्को अंश –

प्रज्ञाका अंशुले नै चरअचरसँगै लोक सम्पूर्ण ढाकी ।
जाग्रत्को भोग भोगी त्यसपछि सपना देख्छ संस्कार डाकी ॥
यी सारा भोग भोगी अनिपछि तमका भित्र आनन्दसाथ ।
सुत्ने त्यो ब्रह्म चौथोकन नमन सधैँ गर्छु सुक्तिसाथ ॥१॥
जाग्रत्मा विश्व आत्मा शुभअशुभ दुवै भोग भोगेर फेरि ।
आफ्ना नै वासनाले विरचित सपना भोग्छ चिज्ज्योति हेरी ॥
बिस्तारै नै सबै ती सुगहन तमका भित्र राखेर साथ ।
सुत्ने हे ब्रह्म ! चौथा जय गर सबको पाउमा राख्छु माथ ॥२॥ ]

# ब्रह्मसाक्षात्कार २०६५

प्रस्तुत कृति ‘अध्यास’ देखि ‘अद्वैत वेदान्त’सम्म ३३ ओटा ब्रह्मसाक्षात्कारका सहयोगी सिद्ध हुने निबन्धहरूको सङ्ग्रह हो । साहित्यसमीक्षा गरेर र सिर्जनात्मक कृति लेखेर पनि लेखकलाई आत्मसन्तुष्टि नभएपछि ब्रह्मसाक्षात्कारको साधनभूत ग्रन्थ लेख्ने विचार पैदा भई त्यसैलाई कार्यरूप दिने क्रममा यस कृतिको जन्म भएको प्रसङ्ग लेखकले भूमिकामा उल्लेख गर्नुभएको छ । जतिसुकै गुणगरिमापूर्ण साहित्य भए पनि भगवान्को नाम र कथाले रहित रचना जुठेल्नु र मल बराबर हो भन्ने भागवतको वचनले आफुलाई सचेत गराएको र वेदान्त साध्य एवं भक्तिपरक ग्रन्थहरूलाई साधन मानी यस पुस्तकको तयारी भएको लेखकीय आत्मस्वीकृतिबाट ‘ब्रह्मसाक्षात्कार’ आत्मोद्धार र आत्मोपचार गर्ने प्रयासको परिणाम हो भन्ने सिद्ध हुन्छ । बाल्यावस्थादेखिको भक्तितर्फको संस्कार, वेदान्त विषयको अध्ययन तथा धार्मिक र आध्यात्मिक प्रवचनको श्रवण एवम् सत्सङ्गतिको सदुपयोग गर्ने आकाङ्क्षाको परिपूर्तिका रूपमा पनि यसको रचना गरिएको लेखकीय कथन छ । यसरी यो सङ्ग्रह लेखकको आत्मसन्तुष्टि, प्राप्त ज्ञान र अवसरको सदुपयोग एवम् मुमुक्षुहरूको कल्याणको कामनाको परिणामका रूपमा आएको देखिन्छ ।

यसमा सङ्गृहीत सबै निबन्धहरूको प्रतिपाद्य विषय ब्रह्म हो । यस पुस्तकका माध्यमबाट लेखकले आफुलाई मात्र ब्रह्मसाक्षात्कारतर्फ अभिमुख गराउनुभएको छैन, ब्रह्मविद्याबाट मुमुक्षा राख्ने वर्गलाई पनि ब्रह्मसाक्षात्कारतिर अभिमुख र उत्प्रेरित गराउनुभएको छ । भक्तिपरक वा वेदान्तपरक कुनै पनि विषयको चयन गर्नु, त्यसमा विधिपूर्वक प्रवेश गर्नु र त्यसका पूर्वापर प्रसङ्ग कोट्याएर राम्रै चिरफार गरी एउटा शास्त्रीय निष्कर्षमा पुग्नु प्रस्तुत ग्रन्थको वैशिष्ट्य हो ।

सङ्ग्रहको पहिलो निबन्ध ‘अध्यास’ को व्युत्पत्तिमूलक अर्थ देखाई अन्य क्षेत्रभन्दा वेदान्तमा यसको विशेष अर्थ हुने जानकारी दिँदै आदि जगद्गुरु शङ्कराचार्यकै शास्त्रीय परिभाषालाई आधार मानी जहाँ जुन कुरा छैन त्यहाँ त्यो कुरा देख्नु वा मान्नु अध्यास हो भनिएको छ र यसलाई अविद्या वा अज्ञानका रूपमा हेरिएको छ। आफ्नो वास्तविक स्वरूप त्याग नगरीकन अर्को रूपमा देखा पर्ने भएकाले संसार ब्रह्मको विवर्त हो भन्ने तथ्य सिद्धि गर्दै संसाररूपी अज्ञान वा अविद्यालाई नाश गर्दै ब्रह्मसाक्षात्कारतर्फ लाग्नुपर्ने निष्कर्ष ‘अध्यास’ मा पाइन्छ। ‘आत्मोद्धार’ मा गीता र भागवतका उद्धरणहरूद्वारा प्रासङ्गिक पौराणिकपात्र र घटनाहरू समेत उल्लेख गरी नीरोगी, युवावस्था, इन्द्रियहरूको सक्रियता र आयु रहँदै मानिसले आत्मोद्धार गर्नुपर्ने सन्देश दिइएको छ। ‘उपनिषद् र यसको महत्त्व’ मा प्रामाणिक उपनिषद्हरूका आधारमा उपनिषद्को विभिन्न अर्थ गरिएको छ र यसको ज्ञान वैदिक सनातनीहरूमा मात्र नभई गुणग्राही आत्मचिन्तक पाश्चात्त्य विद्वान्हरूमा पनि भएको तथ्य प्रकाशित गरिएको छ। ब्रह्मको उपदेश र व्याख्या गर्ने भएकाले उपनिषद्लाई ब्रह्म भनिएको निष्कर्ष यस शीर्षकमा पाइन्छ। ‘एषणा’ मा सबै थरी एषणाको त्यागबाट मात्र ब्रह्मज्ञान सम्भव हुने भएकाले आत्मकल्याणका लागि यसको परित्याग गर्न सुझाव दिइएको छ।

‘ऋते ज्ञानान्न मुक्तिः’ मा उपनिषद्, गीता र भागवतका सान्दर्भिक उद्धरणहरूद्वारा आत्मज्ञानबाट मुक्त हुन सकिने अन्यथा त्यो सम्भव नहुने तथ्यलाई सिद्ध गरिएको छ। ‘चिदाभास’ मा चिदाभासलाई मिथ्या आत्माका रूपमा बुझाउन खोजिएको छ र अनादि अविद्याले सिर्जना गरेको मिथ्या संसारलाई यसै मिथ्या आत्माको माध्यमबाट नै काटेर सच्चिदानन्दस्वरूप ब्रह्मलाई प्राप्त गर्नु मनुष्य जीवनको परम उद्देश्य मानिएको छ एवम् मिथ्या चिदाभासको माध्यमद्वारा नै अनादि अविद्याजनित मिथ्यारूप संसारको बन्धनलाई सधैँका लागि समाप्त गर्नु नै मानवजीवनको सार्थकता हो भन्ने देखाइएको छ।

यस सङ्ग्रहको अर्को महत्त्वपूर्ण शीर्षक 'ब्रह्मदर्शन' हो । यसमा संसारसागरबाट मुक्त हुनका लागि ब्रह्मज्ञान बाहेक अर्को बाटो र विकल्प छैन भन्ने शास्त्रीय तर्क प्रस्तुत गरिएको छ। उपनिषद्, भागवत र गीताका प्रामाणिक उद्धरणहरूद्वारा ब्रह्मदर्शन वा आत्मदर्शनका पद्धति र उपायहरू पनि यस शीर्षकमा उल्लिखित छन्। 'विना गुरु ज्ञान हुँदैन' मा गुरुको स्वरूप, योग्यता र महत्त्व देखाउँदै उनलाई संसारसागरका नाविकका रूपमा स्थापित गरिएको छ र सम्पूर्ण ब्रह्माण्डको सृष्टि, स्थिति र संहार गर्ने जगन्नियन्ता भगवान् श्रीकृष्णलाई नै सम्पूर्ण चराचर जगत्का गुरु सिद्ध गरिएको छ।

'साधवः साधुभूषणाः' को संस्कृत पदावलीनिष्ठ शीर्षकमा साधुको लक्षण, पूर्व र पश्चिमका प्राचीन एवम् अर्वाचीन साधुहरूको परम्परा, उनीहरूको आत्मबलिदान र दुराचारीबाट साधु चरित्रमा परिणत भएका प्रेरक उदाहरणहरू प्रस्तुत गरी उनीहरूलाई देवता र हितैषी बन्धुमात्र नभई आफ्नै आत्माका रूपमा स्थापित गरिएको छ । 'हृदयग्रन्थि भेदन' मा मुण्डकोपनिषद्मा आद्य जगद्गुरु शङ्कराचार्यले गरेको भाष्यलाई आधार मान्दै बुद्धिमा रहेको अविद्यावासनामय काम नै हृदयग्रन्थि हो भन्ने अर्थ गरिएको छ र परमात्माको दर्शन पाइसकेपछि मुमुक्षुका हृदयको यस्तो ग्रन्थि नाश हुन्छ भनिएको छ। आहारशुद्धिले हृदयको ग्रन्थि भेदन गर्न प्रमुख भूमिका खेल्ने भएकाले त्यसमा ध्यान दिन पनि सुझाव दिइएको छ। अन्तःकरणमा रहेका सम्पूर्ण संशयहरू समाप्त भई ब्रह्मज्ञान प्राप्त हुनु नै हृदयका ग्रन्थिहरूको भेदनको परिणाम हो भन्ने विचारसार यहाँ पाइन्छ। 'तुरीयतत्त्व' मा चारको सङ्ख्या बुझाउने 'चतुर' शब्दबाट निष्पन्न 'तुरीय' शब्दको वेदान्तपरक अर्थ शुद्ध निर्गुण ब्रह्म भन्ने गरिएको छ र यसलाई सम्पूर्ण मायिक बन्धन र भ्रमबाट माथि रहेको स्थितिका रूपमा परिभाषित गरिएको छ । योगवासिष्ठसारका अनुसार जीवन्मुक्तहरूको स्वच्छ, सम र शान्त अवस्था तुरीयावस्था वा साक्षीको अवस्था पनि हो भन्ने निचोड निकाल्दै अहङ्कारको त्याग, समताको उत्पत्ति र चित्त पूर्ण निर्मल भएपछि तुरीयावस्था प्राप्त हुने प्रमाण प्रस्तुत गरिएको छ। 'ब्रह्म'

मा उपनिषद्, पुराण, वेदान्तपरिभाषा, गीता आदि ग्रन्थहरूलाई साक्षी राखी ब्रह्मको स्वरूप चिनाउन खोजिएको छ र तिनैका आधारमा सत्य, ज्ञान र अनन्त ब्रह्म हो, विज्ञानात्मा नै ब्रह्म हो, यो आत्मा नै ब्रह्म हो, तिमी नै ब्रह्म हौ, म ब्रह्म हुँ, विज्ञान र आनन्द नै ब्रह्म हो र ब्रह्मज्ञानी नै ब्रह्म हो भनेर ब्रह्मको अर्थ एवम् व्यापकता देखाइएको छ। 'भक्ति' मा कायिक, वाचिक र मानसिक तीनै थरी उपाधिहरूबाट माथि उठेर ज्ञान र कर्मलाई पर पन्छाएर गरिने भगवान्‌को निष्काम सेवालाई भक्ति मानिएको छ र भागवत, नारदपाञ्चरात्र, भक्तिरसायनसिन्धु, गीता जस्ता ग्रन्थहरूलाई अघि सारी भक्तिका प्रकार, भक्तका स्वरूप र उपासनाको अर्थबारे स्पष्ट पारी भक्तिविना ज्ञान र वैराग्यको प्रादुर्भाव हुन नसक्ने दृष्टिकोण व्यक्त गरिएको छ । लेखको अन्त्यमा कपिलले आमा देवहूतिलाई भनेको उद्धरण उल्लेख गरी निर्गुण ब्रह्मविषयक ज्ञानयोग र भगवान्प्रति गरिएको भक्तियोगको फल एउटै हो भन्ने सार दिइएको छ। 'गुरुशिष्य परम्परा' मा गुरु र शिष्यबीच हुने सम्बन्धको आर्ष परम्परा, शिष्यले गुरुका लागि गर्नुपर्ने सेवा, शिष्यको योग्यताको परीक्षण, गीताज्ञानका क्रममा श्रीकृष्ण र अनुर्जनका बीचको गुरु-शिष्यको रूप, सद्गुरुले प्रिय शिष्यलाई पार लगाउने शक्ति र विद्याको सिद्धि र प्रतिष्ठाका लागि गुरुको अपरिहार्यताजस्ता प्रसङ्गहरूको चर्चा भएको छ।

'साक्षी' मा अविद्यावृत्तिमा परेको ब्रह्मको बिम्ब लाई साक्षीका रूपमा चिनाउँदै प्रत्यगात्मा, कूटस्थ र साक्षीलाई एउटै वस्तुको रूपमा हेरिएको छ । श्रुतिस्मृति आदि शास्त्रहरूले साक्षीलाई ब्रह्मको बिम्बस्थानीय परमात्मा वा ईश्वरका रूपमा कल्पना गरेको निष्कर्ष निकाल्दै ब्रह्म र जीवका बीचमा साक्षी चैतन्यको परिकल्पना उपयुक्त भएको धारणा स्थिर गरिएको छ। 'शिशुब्राह्मण' बृहदारण्यकोपनिषद्‌को दोस्रो अध्यायको दोस्रो ब्राह्मणसँग सम्बद्ध प्रसङ्गको सरल सुबोध व्याख्या हो । शिशुब्राह्मणले प्राणको अध्यात्मभाव र इयत्ताको वर्णन गरेको एवम् देह, इन्द्रिय र प्राणादि ब्रह्मका धर्म होइनन् भनेर ब्रह्मबाट

व्यावर्तन गर्न पञ्चमहाभूतदेखि प्राणसम्मका मायिक वस्तुहरूको चर्चा गरेको सारांश प्रस्तुत गरिएको छ। 'मूर्तामूर्तब्राह्मण' मा मूर्तामूर्तब्राह्मणका ६ ओटा मन्त्रहरूको शास्त्रीय व्याख्यान सारांश निकालिएको छ र यस ब्राह्मणले सत्यले अशेष स्वरूपको निरूपण गरेर ब्रह्मलाई सत्यको पनि सत्य भनेको तथ्य सिद्ध गरिएको छ। मूर्तामूर्तब्राह्मणको प्रयोजन सत्यको पनि परम सत्यको निरूपण हो भन्ने लेखकको विचार यहाँ पाइन्छ।

'विद्या' मा विद्याको सङ्ख्याका विषयमा मतमतान्तर प्रस्तुत गर्दै मुण्डकोपनिषद्को वचन अनुसार परा र अपरा गरी विद्या मूलतः दुई थरी हुने भनिएको छ र पराविद्यालाई आत्मविद्या तथा अपराविद्यालाई कर्मको साधन तथा त्यसबाट उत्पन्न हुने फलसँग सम्बद्ध विद्याका रूपमा चिनाइएको छ। उपनिषद्, महाभारत, पुराण आदिका उद्धरणहरू उल्लेख गरी अज्ञानरूपी आवरण वा अन्धकारलाई हटाएर प्रकाशस्वरूप अर्थात् अमृतमय ब्रह्मको ज्ञान गर्न सहयोग गर्ने साधन नै विद्या हो भन्ने शास्त्रीय सार खिचिएको छ। 'मुक्ति' मा मुक्ति पाउनका लागि ज्ञान पूर्वसर्त हुने र त्यस्तो ज्ञान ब्रह्मज्ञान नै हुनुपर्ने मान्यता स्थापित गरिएको छ। जीवात्मा र परमात्माका बीच रहेको लेशाविद्यालाई हटाएर सधैँका लागि एकाकार हुनु नै मोक्ष या मुक्ति हो भनेर यस निबन्धमा अद्वैत वेदान्तका आधारमा यसै जीवनमा ब्रह्मज्ञान गरेर क्रमशः मुक्त हुने क्रममा जानु क्रममुक्ति तथा यहीँ मुक्त हुनु चाहिँ सद्योमुक्ति हो भनेर सरल शैलीमा बुझाइएको छ। 'भक्तपरायण भगवान्' मा भगवान्का भक्तहरूलाई पुराण, महाभारत आदि धार्मिक ग्रन्थहरूले मुक्तकण्ठले प्रशंसा गरेको प्रसङ्ग अघि सार्दै भगवान् पनि भक्तहरूप्रति परायण हुने भएकाले भगवत्कृपाका लागि भगवद्भक्ति आवश्यक हुने सन्देश दिइएको छ। आफ्ना भक्तहरूका लागि जेसुकै गर्न पनि सधैँ तत्पर भगवान्का लागि भक्तहरूको सतत भक्ति रहनुपर्ने धारणा यहाँ पाइन्छ।

हंसस्वरूप भगवान् नारायणले आफ्ना शिष्य सनत्कुमारहरूलाई कुनै समयमा उपदेश दिएको र पछि भागवतमा भगवान् श्रीकृष्णले आफ्ना

शिष्य उद्धवलाई सुनाएको हंसगीताको प्रसङ्ग समेटिएको 'हंसगीता' मा विशुद्ध अद्वैत वेदान्त भएको देखाइएको छ । यसमा जाग्रत्, स्वप्न र सुषुप्ति भन्दा माथि उठेर र गुणको प्रवाहलाई त्याग गरेर जब मुमुक्षु तुरीय अवस्था वा ब्रह्मभावमा स्थित रहन्छ तबमात्र ऊ विषयातीत र गुणातीत भई मुक्तावस्थामा पुग्दछ भन्ने आध्यात्मिक सन्देश हो भन्ने लेखकको तर्कपूर्ण प्रस्तुति पाइन्छ। 'रुद्रगीता' भगवान् शिवले राजा बर्हिषद् वा प्राचीनबर्हिका १० भाइ छोरा प्रचेताहरूलाई सुनाएको ज्ञान र भक्तिको अनुपम सङ्गम भएको स्तोत्र हो । यहाँ त्यही रुद्रगीताका विभिन्न श्लोकहरूको सरल सुबोध अर्थ दिइएको छ र यसको फलश्रुति पनि बताइएको छ। 'सिद्धगीता' मा योगवासिष्ठका अनेकौं दुरूह अद्वैत ज्ञानप्रधान उपाख्यानहरूमध्ये सिद्धहरूले राजा जनकलाई दिएको उपदेशलाई सिद्धगीता पनि भनिने अनुसन्धानपूर्ण विचार अघि सार्दै सिद्धहरूको उपदेश मनन र अनुसरण गरेर जनक अभयरूप ब्रह्म नै भएको निष्कर्ष स्थापित गरिएको छ। ब्रह्मज्ञान भइसकेपछि राजा जनकले गुरु याज्ञवल्क्यलाई गुरुदक्षिणा स्वरूप आफ्नो राज्य र आफैँलाई समेत समर्पण गरेको बृहदारण्यकोपनिषद्को प्रेरणादायी प्रसङ्ग यहाँ समावेश गरिएको छ।

'ध्रुवगीता' श्रीमद्भागवतमहापुराणमा उल्लिखित राजा उत्तानपाद र उनकी जेठी रानी सुनीतिका ज्येष्ठ सुपुत्र ध्रुवले पिता एवं सौतेनी आमा सुरुचिको अपहेलनाबाट दुःखी भई भगवान्को तपस्या गरेको र भगवान्को कृपाबाट वाक्य खुलेपछि १२ श्लोकहरूद्वारा अद्वैतवेदान्तपरक उपनिषद्मय वाक्यहरूले गरेको स्तुतिका रूपमा प्रस्तुत गरिएको छ । यस स्तुतिमा ध्रुवले सगुण साकार भगवान्को स्तुति गरेजस्तो देखिए पनि वस्तुतः निर्गुण ब्रह्मको स्तुति गरेको र त्यो स्तुति अन्त्यमा सकाम भावमा पर्यवसित भएकाले उनले ३६ हजार वर्षसम्म संसारको दुश्चक्रमा परिभ्रान्त हुनु परेको सप्रमाण निष्कर्ष दिइएको छ। 'भिक्षु गीता' भगवान् श्रीकृष्णले उद्धवलाई प्राचीन समयमा उज्जैन नगरीमा बस्ने एक जना तितिक्षु ब्राह्मणको विषयमा सुनाएको कथाको सारसङ्क्षेप हो । यसबाट

सुखदुःख बाहिरबाट अरूले दिने तत्त्व नभएर अन्तःकरणका धर्म भएकाले यी प्रारब्ध कर्मद्वारा प्राप्त हुन्छन्, अतः यसमा अरूलाई दोष दिन मिल्दैन भन्ने तात्पर्य निहित छ भन्ने कथासारांश दिइएको पाइन्छ।

'जाग्रत् अवस्था' मा जाग्रत् अवस्था स्वप्न, सुषुप्ति र समाधिको अवस्था भन्दा भिन्न भएको र यसै अवस्थामा इन्द्रिय र विषयको प्रत्यक्ष सम्बन्ध भएर व्यवहार हुने तथा प्राणीले आफ्नो प्रारब्ध अनुसार भोग गर्ने दृष्टिकोण शास्त्रसम्मत ढङ्गबाट अघि सारिएको छ। यो अवस्था अरू अवस्थाभन्दा बढी महत्त्वपूर्ण भएको निष्कर्ष पनि यहाँ दिइएको छ। 'स्वप्न अवस्था' मा जाग्रत् अवस्थामा पूर्ण हुन नसकेका कामनाहरू सपनामा पूर्ण हुने अभिप्राय शङ्कराचार्यको समेत भएकाले यसको पनि महत्त्व भएको तर सपना सत्य हुन नसक्ने सिद्धान्त प्रस्तुत गरिएको छ।

'सुषुप्ति अवस्था' मा सुषुप्तिको सामान्य अर्थ गहिरो निद्रा वा गाढा निद्रा भए पनि अद्वैत वेदान्तमा यसको विशिष्ट अर्थ र स्थान हुने विश्लेषण गरिएको छ। शङ्कराचार्यको तत्त्वबोध, ब्रह्मसूत्र जस्ता ग्रन्थहरूलाई आधार मानी यस निबन्धमा मैले केही जानिनँ, म आनन्दसँग सुतेँ भनेर अनुभव गर्ने पूर्णानन्दको अवस्था सुषुप्ति हो भनिएको छ। यसको महत्त्व देखाउँदै सारांशमा एकपञ्चपात्रो पानी विशाल समुद्रमा मिसाउँदा त्यो पानी पनि समुद्र भए जस्तै सुषुप्तिको अवस्थामा द्रष्टा वा जीव पनि ब्रह्मसँग मिलेर ब्रह्म नै हुन्छ भनिएको छ। 'सञ्चित कर्म' मा वेद, वेदाङ्ग आदि ग्रन्थका आधारमा कर्मको अर्थ गरिएको छ र शङ्कराचार्यको तत्त्वबोधको प्रमाण उद्धरण गरी जीवले पहिलेका अनेकौँ जन्महरूमा गरेका शुभ र अशुभ कर्महरूको थुप्रो सञ्चित कर्मका रूपमा अन्तःकरणमा जम्मा भएर बसेको कर्म नै सञ्चित कर्म हो भनी बुझाइएको छ। कर्महरूको जनक र निरन्तर विभिन्न योनिहरूमा घुमाइरहने पनि सञ्चित कर्म नै भएकाले यस्तो सञ्चित कर्मको थुप्रोमा ब्रह्मज्ञानरूपी आगो लगाएर भस्म गराएपछि मात्र मानिसमा यस दुःखद संसारमा अउनुनपर्ने विचारसार यहाँ पाइन्छ। 'गोपी' मा भागवत, गीता

आदि ग्रन्थहरूका प्रमाणपुष्ट वचनहरूलाई आधार मानी गोपीहरू सामान्य नारीहरू मात्र नभएर अलौकिक नारीहरू भएको अर्थ गरिएको छ र भगवान् श्रीकृष्णलाई ब्रह्मतत्त्व र गोपीहरूलाई अन्तःकरणवृत्तिमा परेका ब्रह्म वा साक्षी चैतन्यका प्रतिबिम्बस्वरूपा जीव मानी प्रेमको महाभावरूप गोपीतत्त्व हो र आत्माभिमुख बुद्धिका अनन्त वृत्तिहरू नै गोपीहरू हुन् भन्ने सिद्ध गरिएको छ ।

'चतुः श्लोकी भागवत' मा श्रीमद्भागवतमहापुराणको द्वितीयस्कन्धको नवौं अध्यायको ३२ देखि ३५ सम्मका ४ श्लोकहरूलाई चतुःश्लोकी भागवत भनिने सूचना दिई भगवान् नारायणले सृष्टिकर्ममा प्रवृत्त हुनुपूर्व ब्रह्मालाई सुनाएका यिनै चतुःश्लोकीबाट १८००० श्लोक भएको श्रीमद्भागवतमहापुराणको विस्तार भएको प्रसङ्ग उल्लेख गरिएको छ । चारओटै वेदका गूढ र गहन रहस्यमय ज्ञानलाई समेट्न समर्थ यी चार श्लोकको सरल शैलीमा आध्यात्मिक अर्थको प्रतिपादन यस निबन्धमा भएको छ । आफ्नो अर्थलाई परिपुष्ट पार्न अन्य ग्रन्थका प्रमाणसमेत उल्लेख गरेर यसलाई विश्लेषणात्मक पनि बनाइएको छ । 'अद्वैतसिद्धि' प्रकाण्ड विद्वान् मधुसूदन सरस्वतीको अद्वैत वेदान्तपरक प्रौढ ग्रन्थको विश्लेषण गर्ने निबन्ध हो । यसमा अद्वैत वेदान्तका विपक्षमा उठेका मत र मान्यताहरूको खण्डन गर्दै सरस्वतीले आफ्नो सिद्धान्तको स्थिरीकरण गरी अद्वैत वेदान्तको सिद्धान्तलाई सौम्य, प्रौढ र अखण्डनीयरूपमा मण्डन वा प्रतिष्ठापित गरेको समीक्षात्मक दृष्टिकोण पाइन्छ ।

'अद्वैत वेदान्त' मा सबै कामनाको पूर्तिलाई यथार्थ सुख भन्ने ठानिए पनि सबै कामनाहरूको निवृत्ति नै असीम सुख हो भन्ने मत स्थापित गरिएको छ । लामो आकारको यस निबन्धमा जीव र ब्रह्मको एकत्वको ज्ञान गराउनका लागि नै वेददेखि लिएर सम्पूर्ण अद्वैतपरक शास्त्रहरू प्रवृत्त भएको तर्कपूर्ण विवेचना गरिएको छ र जीवको आत्यन्तिक मुक्ति नै अद्वैत वेदान्तको अभीष्ट भएको निष्कर्ष निकालिएको छ ।



# उपनिषत्सार २०६७ का भूमिकाबाट

[ २०१७।१८ सालमा गुरुवर गोपालनिधि तिवारीज्यूसँग अद्वैत वेदान्तको अध्ययन गर्दा मैले ईश, केन, कठ, प्रश्न, मुण्डक, माण्डूक्य, तैत्तिरीय, ऐतरेय, श्वेताश्वतर, छान्दोग्य र बृहदारण्यकोपनिषद् सामान्य रूपमा पढेको थिएँ । तर अल्लारेपन, उपनिषद्को महत्त्व थाहा नहुनु, पढाइमा ध्यान नदिनु र पढाइको जग कमजोर हुनु आदि विविध कारणहरूले गर्दा अपेक्षित ज्ञान आर्जन गर्न मैले सकेको थिइनँ । तीन दशकको लामो अन्तरालपछि मैले फेरि आफुलाई विद्यार्थीकै रूपमा पुऱ्याएर विद्वान् गुरुहरूसँग ती उपनिषद्हरू अध्ययन गर्न थालेपछि मैले यत्किञ्चित् बुझ्न थालेको छु। त्यही अध्ययन, श्रवण, मनन र लेखनको परिणाम नै यो सङ्क्षिप्त उपनिषत्सार हो। यो सार जिज्ञासु पाठकहरूलाई उपयोगी नै होला भन्ने मैले ठानेको छु। किनभने संस्कृत भाषाको ज्ञान नभएका र समय दिन नसक्ने पाठकहरूका लागि उपनिषद्हरूमा प्रवेश गरेर पार पाउन मुस्किल हुने देखिन्छ । यसै कारण पनि मैले यसको लेखनमा बढी ध्यान दिएको हुँ । ]

# उपनिषत्सार २०६७

वेदमा निहित ब्रह्मतत्त्वसम्बन्धी ज्ञान गराउने अद्वैत वेदान्तका प्रमाणभूत ग्रन्थलाई उपनिषद् भनिन्छ । वेदको मूल मर्म र अभिप्राय प्रकाशन गर्ने भएकाले उपनिषद्लाई वेदको शिरोभाग मानिएको छ । ज्ञानतत्त्वप्रधान वाङ्मय भएकाले उपनिषद् नै ज्ञानकाण्डका नामबाट पनि प्रसिद्ध छ। उपनिषद्का अर्थ पनि विभिन्न छन्। व्युत्पत्तिमूलक र विषयमूलक दृष्टिबाट समेत उपनिषद्को अर्थ गरिन्छ। सारमा बुझ्दा ब्रह्मज्ञानद्वारा मानिसलाई जन्ममरणको चक्रबाट छुटकारा दिलाई मुक्त गरिदिने र अविनाशी ब्रह्ममय बनाई सधैँ सुखी बनाउने अमृत विद्या उपनिषद् हो। यो आत्मोद्धारको सर्वौषधि र महौषधि दुवै हो।

अमृतवाणीले भरिपूर्ण उपनिषद्को सङ्ख्याका विषयमा विद्वद्वर्गमा मतैक्य पाइँदैन । उपनिषद् ११, १०८, १७९, १८८, २२०, २२३ कति मान्ने किटानै गर्न गाह्रो छ । मुसलमान शासकको तुष्टीकरणका लागि 'अल्लोपनिषद्' पनि लेखियो भने फ्रेडरिक म्याक्समुलरले आफ्नै नाममा 'माक्स्योपनिषद्' लेखी छपाए । यसबाट उपनिषद्को सङ्ख्या बढ्ने तर महत्त्व घट्ने विडम्बना पनि देखा पर्‍यो । तर पनि अनादि कालदेखि तत्त्वविद् ब्रह्मज्ञानीहरूले चिन्तन, मनन आदि गरेर स्थापित गरेका उपनिषद्को मूल्य र महिमा यथावत् छ । यस्ता उपनिषद्हरूमध्ये आद्य जगद्गुरु शङ्कराचार्यले ११ उपनिषद्को भाष्य लेखेका छन् । ती हुन् – ईशावास्योपनिषद्, केनोपनिषद्, कठोपनिषद्, प्रश्नोपनिषद्, मुण्डकोपनिषद्, माण्डूक्योपनिषद्, तैत्तिरीयोपनिषद्, ऐतरेयोपनिषद्, श्वेताश्वतरोपनिषद्, छान्दोग्योपनिषद् र बृहदारण्यकोपनिषद् । अतः यी उपनिषद् नै प्राचीनतम, वेदको शिरोभाग, ब्रह्मज्ञानानुकूल, प्रामाणिक, सर्वस्वीकार्य, मोक्षमार्गप्रदर्शक र श्रद्धास्पद मानिन्छन् । यस पुस्तकमा शरत्कुमार भट्टराईले यिनै ११ ओटा उपनिषद्को पदगत व्याख्या, अनुसन्धानपूर्ण टिप्पणी र सारसङ्क्षेप प्रस्तुत गर्नुभएको छ ।

यस कृतिमा अनुवादकको अनुवादकला र विशेषता झल्किएका छन् । संस्कृतको मूलरूपमा भएका प्रत्येक पदको सरल सुबोध शैलीमा अर्थ गरिएको छ र संस्कृतमा गति नै नभएका वा कम गति भएकाहरूका लागि पनि विषयवस्तु स्पष्ट पारिएको छ । प्रत्येक पदको अर्थ पूर्वापर पदको अर्थसँग समन्वय हुने गरी गरिएकाले उपनिषद्को गम्भीर चिन्तनप्रधान ज्ञान प्राप्त गर्न पुस्तक अति उपयोगी सिद्ध भएको छ । यहाँ उपनिषद्को नेपाली अनुवाद मात्र नभएर ११ ओटै उपनिषद्को परिचय पनि दिइएको छ । प्रत्येक पदको पूर्वापर सम्बन्ध देखाई अर्थ गरेजस्तै प्रत्येक श्लोकको पूर्वापर श्लोकसँग सम्बन्ध देखाई व्याख्या गरिएको छ । यसबाट कुनै एउटा उपनिषद्को कुनै एउटा श्लोक वा मन्त्रको मात्र छुट्टै अर्थ बुझ्न र बुझाउन पनि सजिलो भएको देखिन्छ । परिचय, प्रसङ्गको

निर्देशन, अर्थ, टिप्पणी र व्याख्याको समन्वय भएकाले पनि 'उपनिषत्सार' उपनिषद्हरूको समग्रताबोधक कृति बन्न पुगेको छ। उपनिषद्हरूमा ब्रह्म, परमात्मा, जीवात्मा, मोक्ष जस्ता विषयहरू प्रायः पुनरावृत्त भइरहन्छन् । तिनलाई सम्झाउने पद्धति मात्र भिन्न छन् । सबैजसो उपनिषद्हरूको अध्ययन, अनुशीलन, चिन्तन, विमर्श, प्रचार र विश्लेषण समेत गरिसक्नुभएका अनुवादकले एउटा उपनिषद्मा वर्णित विषयलाई अर्को उपनिषद्मा वर्णित समान किसिमको विषयसँग तुलना र तादात्म्य देखाई व्याख्या गर्नुबाट यो कृति उपनिषद्का अध्येताहरूका लागि मार्गदर्शक भएको छ । उपनिषद्को अनुवादको प्रारम्भसँगै कतै भाष्यकारहरूको प्रसङ्ग उल्लेख गरेर र कतै उपनिषद् भाग एवं ब्राह्मणभागको विभाजन बारे स्पष्ट जानकारी दिएर अनुवादकले परिचयात्मक र समीक्षात्मक दृष्टिकोण व्यक्त गर्नुभएको छ । ठाउँठाउँमा सम्बद्ध उपनिषद्मा वर्णित पात्र र आख्यानांशको उल्लेख गरेर विषयवस्तुलाई मूल उपनिषद्मा भन्दा पनि सहज र सरल ढङ्गबाट स्पष्ट पारिएको छ ।

नेपालीमा अनूदित अरू पनि उपनिषद्ग्रन्थहरू बजारमा पाइन्छन् । अनधिकृत व्यक्तिले मूल नै नहेरी दोस्रो स्रोतबाट प्राप्त सामग्रीलाई आधार मानी आफ्नो नामको अगाडि विशेषणावली जोडेर अनुवादक बन्ने र त्यसैलाई आयआर्जनको मूल स्रोत बनाउने लाभमुखी व्यक्तिहरूका कारण पनि उपनिषद्को महत्त्व घटेको छ । त्यो चक्रबाट यो अनुवाद पूर्णतः मुक्त छ । मूल संस्कृत र त्यसैको नेपाली अनूदित रूप दुवै शुद्ध हुनु, ठूला अक्षर हुनु, व्याख्यामा समाविष्ट मूलका उद्धरणहरू 'इटालिक' ढाँचामा भएकाले पढ्न सजिलो हुनु, सन्दर्भग्रन्थहरूको पारदर्शी विवरण दिनु, गुणात्मक कागज र मुद्रण देखिनु र सबल प्रबन्धन (बाइन्डिङ) हुनुबाट प्राविधिक रूपले पनि 'उपनिषत्सार' पठनीय रहेको छ । अन्त्यमा प्रत्येक उपनिषद्का तत्तत् वेदका अनुरूप वर्गीकरण गरेर मन्त्रहरू दिइएको देखिन्छ ।



# ब्रह्मसूत्रसार २०६७ का भूमिकाबाट

[ ब्रह्मसूत्रशाङ्करभाष्यको पहिलो समन्वय अध्यायमा चार पादहरू छन् । पहिलो पादमा ११ अधिकरण र ३१ सूत्रहरू छन् । दोस्रो पादमा ७ अधिकरण र ३२ सूत्रहरू छन् । तेस्रो पादमा १३ अधिकरणहरू र ४३ सूत्रहरू छन् । चौथो पादमा ८ अधिकरणहरू र २८ सूत्रहरू छन् । दोस्रो अध्यायको पहिलो पादमा १३ अधिकरणहरू र ३७ सूत्रहरू छन् । दोस्रो पादमा ८ अधिकरणहरू र ४५ सूत्रहरू छन् । तेस्रो पादमा १७ अधिकरणहरू र ५३ सूत्रहरू छन् । चौथो पादमा ९ अधिकरण र २२ सूत्रहरू छन् । तेस्रो अध्यायको पहिलो पादमा ६ अधिकरणहरू र २७ सूत्रहरू छन् । दोस्रो पादमा ८ अधिकरणहरू र ४१ सूत्रहरू छन् । तेस्रो पादमा ३६ अधिकरणहरू र ६६ सूत्रहरू छन् । चौथो पादमा १७ अधिकरणहरू र ५२ सूत्रहरू छन् । चौथो अध्यायको पहिलो पादमा १४ अधिकरणहरू र १९ सूत्रहरू छन् । दोस्रो पादमा ११ अधिकरणहरू र २१ सूत्रहरू छन् । तेस्रो पादमा ६ अधिकरणहरू र १६ सूत्रहरू छन् । चौथो पादमा ७ अधिकरणहरू र २२ सूत्रहरू छन् ।

पहिलो अध्यायको पहिलो पादको पहिलो अधिकरण सुरु हुनुभन्दा पहिले ब्रह्मसूत्रशाङ्करभाष्यको उपोद्घातका रूपमा आचार्य शङ्करले अत्यन्त महत्त्वपूर्ण अध्यासभाष्य लेख्नुभएको छ। त्यसको सारांश सहित 'अध्यास' भन्ने लेख 'ब्रह्मसाक्षात्कार' भन्ने ग्रन्थमा प्रकाशित भइसकेको हुँदा त्यसलाई यस ग्रन्थमा समावेश गरिएको छैन ।

प्रस्थानत्रयीमध्येको यो ब्रह्मसूत्रशाङ्करभाष्य तर्क अर्थात् न्यायप्रस्थान हो । महर्षि वेदव्यासप्रणीत ब्रह्मसूत्रका सूत्रहरू आफैँमा दुरूह छन् भने त्यसमा आचार्य शङ्करले अत्यन्त प्रौढ संस्कृत भाषामा न्यायको शैलीमा रचना गर्नुभएको ब्रह्मज्ञानपरक भाष्य झन् दुरूह छ । यसमा दुरूहताको त्रिवेणी मैले पाएको छु। पहिलो ब्रह्मज्ञान दुरूह, दोस्रो ब्रह्मसूत्रका सूत्रहरू दुरूह र तेस्रो शाङ्करभाष्य पनि दुरूह छ । यसप्रकारको दुरूह ब्रह्मसूत्र

बुझ्न अत्यन्त गाह्रो छ। मैले धेरै वर्षको अभ्यास, चिन्तन र मननपछि यो ब्रह्मसूत्रसार लेख्ने धृष्टता गरेको हुँ। यसबाट जिज्ञासु पाठकहरूका जिज्ञासा केही शान्त हुन सक्यो भने म प्रयास सार्थक भएको ठान्नेछु। ]

# ब्रह्मसूत्रसार २०६७

वेदमा सन्निहित ब्रह्मतत्त्वको ज्ञान प्राप्त गर्नका लागि संस्कृतमा विभिन्न शास्त्रीय ग्रन्थहरूको प्रणयन भएको छ। वेदको ज्ञानमा प्रस्थान गर्न वा त्यसलाई बुझ्नका लागि लेखिएकाले यस्ता ग्रन्थलाई प्रस्थानग्रन्थ भन्ने प्रसिद्धि छ। यी मध्ये तीन प्रकारका ग्रन्थ सर्वाधिक महत्त्वपूर्ण र श्रद्धास्पद पनि छन् – उपनिषद्, ब्रह्मसूत्र र गीता। यिनै तीन थरी ग्रन्थहरूलाई प्रस्थानत्रयी भनिन्छ। यी मध्ये भगवान् शङ्कराचार्यले भाष्य लेखेको ११ ओटा उपनिषद्ग्रन्थराशि श्रुतिप्रस्थान, महर्षि वेदव्यासप्रणीत ब्रह्मसूत्र न्यायप्रस्थान र गीता स्मृतिप्रस्थान मानिएका छन्। यिनमध्ये ब्रह्मसूत्र पनि अत्यिन्त दुरूह ग्रन्थ हो। यसमा आद्य जगद्गुरु शङ्कराचार्यले अद्वैतार्थनिरूपक प्रौढ भाष्य लेखेका छन्। शङ्कराचार्यकै ओजस्वी, गम्भीर र अकाट्य भाष्यका कारण ब्रह्मसूत्रको प्रसिद्धि र प्रमुखता बढेको मानिन्छ। मुख्य अद्वैत वेदान्त नै दुरूहतम भएको हुँदा त्यसका साधनभूत ब्रह्मसूत्र र शाङ्करभाष्य पनि दुरूह भएकाले यसमा सामान्य मानिसको प्रवेश सम्भव हुँदैन। ब्रह्मज्ञानमा श्रद्धा भएका र यसमा अभ्यास गर्न इच्छुक मुमुक्षुहरूको पनि ब्रह्मसूत्रका साथै शङ्कराचार्यको भाष्यमा पनि प्रवेश हुन नसकेको यथार्थलाई बुझी अनुवादकले यसै भाष्यको सारसङ्ग्रहका रूपमा ‘ब्रह्मसूत्रसार’ तयार पार्नुभएको छ। यस कृतिबाट अनुवादक तथा सङ्क्षेपीकरणकर्ताले ब्रह्मज्ञानका लागि अग्रसर एवं जिज्ञासु अध्येतालाई बौद्धिक उपकार गर्नुभएको छ।

वेदव्यास चारमुख नभएका ब्रह्मा, दुई हात भएका विष्णु र निधारमा आँखा नभएका शिव भनेर साक्षात् भगवान् मानिएका छन्। उनीद्वारा

प्रणीत वेदान्तसूत्रलाई ब्रह्मसूत्र भनिन्छ । ब्रह्मसूत्रलाई ब्रह्ममीमांसासूत्र, भिक्षुसूत्र वा उत्तरमीमांसा पनि भन्दछन् । यसलाई तर्कप्रस्थान वा न्यायप्रस्थान मानिएको छ । यसको मर्म ठम्याई मीमांसा गर्ने विद्वान् नगण्य छन् । त्यस्तै नगण्य विद्वान् मध्ये अनुवादक एक जना गणनीय विद्वान् हुनुहुन्छ जसले यसको अनुवादमा गरेको श्रम 'अभिमति' शीर्षकमा भूमिका लेख्ने प्रा.डा. दीर्घराज घिमिरेले भनेझैँ सार्थक र स्तुत्य छ। यो कृति डा. घिमिरेले भनेझैँ अन्तर्यामी चेतनाको प्रेरणाद्वारा लोकानुग्राहक कार्यमा अनुवादकको प्रवृत्तिकै परिणाम हो ।

संस्कृतमा वेदान्त, न्याय, योग, व्याकरण आदि ग्रन्थहरूको रचना सूत्रशैलीमा भएको छ। सङ्क्षिप्त, गहन र व्याख्येय कथन सूत्र हुन्छ। विद्वान्हरूको भनाइ अनुसार अत्यन्त सारगर्भित, गम्भीर, थोरै अक्षरबाट अर्थप्रकाशन गर्न समर्थ, व्यर्थका अक्षररहित, दोषवर्जित र सङ्क्षिप्त शब्दसमूह सूत्र हो । यस्ता सूत्रग्रन्थहरूको पनि मूलसूत्र ब्रह्मसूत्र हो । ब्रह्मसूत्रमा आआफ्नो धार्मिक मत र सम्प्रदाय अनुसार विभिन्न थरी विद्वान्हरूले धेरैथरी भाष्य र वृत्ति लेखेका छन् । भाष्यको रचना भएपछि पनि तिनमा समेत रहेको दुरूहता र अस्पष्टतालाई स्पष्ट पार्न परवर्ती विद्वान्हरूले विभिन्न वृत्ति, टीका, विवरण, निबन्ध, व्याख्या, काव्य आदि लेखेको पाइन्छ। ग्रन्थको प्रकृति र विषयप्रतिपादनका आधारमा यस्ता कृतिलाई प्रकरणग्रन्थ, वादग्रन्थ र आकरग्रन्थमा विभाजन गरिएको पाइन्छ। यी मध्ये वेद, उपनिषद्, रामायण, महाभारत, पुराणहरू, सूत्रहरू आकरग्रन्थ हुन् । सूत्राश्रयी भाष्यहरू, वृत्तिहरू, वार्तिकहरू, टीकाहरू र टिप्पणीहरू समेत प्रकरण वा विवरण ग्रन्थमा पर्दछन् । शङ्कराचार्यले लेखेकाले शाङ्करभाष्य भनिने यस प्रौढ कृतिलाई शारीरक भाष्य पनि भन्दछन्। शारीर भनेको मलमूत्रादिको थैलो वा शरीर हो। त्यही कुत्सित शरीरमा विद्यमान जीवात्माको मीमांसा, चिन्तन र विचार गरिने भएकोले यस भाष्यलाई शारीरक भाष्य भनिएको हो। यो भाष्य श्रुतिसम्मत, तर्क र प्रमाणहरूद्वारा पुष्ट, सरल तर गम्भीर पदावलीले युक्त छ । अद्वैत

वेदान्तको यो अमूल्य ग्रन्थ हो । यसलाई 'दर्शनीयतमं दर्शनम्' भनेर सम्मान गरिएको छ।

ब्रह्मसूत्रको संरचनालाई हेर्दा अध्याय, पाद र अधिकरणहरूका विषयमा खासै मतान्तरण नभएको तर मूल मानिने सूत्रहरूकै सङ्ख्याका विषयमा भने मतैक्य नभएको पाइन्छ । यसमा ४ अध्याय, प्रत्येक अध्यायमा ४ ।४ पाद र १९१ अधिकरण छन् । सूत्रसङ्ख्याका विषयमा भने विभिन्न मत छन् । ५४५, ५४७, ५४९, ५५६ वा ५६२ सूत्रहरू छन् भन्ने मत पनि पाइन्छ । तर भाष्यकार शङ्कराचार्यले ५५५ सूत्रहरूको गणना गरेकाले सोही आधारमा अनुवादकले पनि यहाँ ५५५ सूत्रहरूकै अर्थ र अनुवाद गर्नुभएको छ । आयामगत विस्तार र गहनताका दृष्टिले शाङ्कर भाष्यमा सामान्य जिज्ञासुले प्रवेश गर्न अत्यन्त कठिन छ । त्यस्ता सामान्य जिज्ञासु र पाठकहरूका लागि अनुवादकले यथासम्भव शाङ्करभाष्य अनुसार नै विषयलाई सङ्क्षिप्त, सरल र सुबोध बनाउनु भएको छ । यहाँ प्रत्येक अधिकरणको अवतर्णिकाका रूपमा भारती तीर्थमुनिद्वारा प्रणीत सारगर्भित वैयासक न्यायमालाका कारिकाहरू उद्धृत गर्दै प्रौढ भाषामा सार दिइएको छ । सम्बद्ध अधिकरणका सूत्रहरू सोही अधिकरणको अन्त्यमा दिइएका छन् । पढ्न र बुझ्न सजिलो होस् भनेर ग्रन्थको अन्तिम भागमा सम्पूर्ण ५५५ सूत्रहरूकै सङ्क्षिप्त अर्थ दिइएको छ । कोष्ठकमा अध्याय, पाद, अधिकरण र सूत्रको सङ्ख्या निर्देश गरिदिएर स्रोत र सन्दर्भ सामग्री उल्लेख गर्नका लागि पनि सजिलो बनाइएको छ । ब्रह्मसूत्रको शाङ्करभाष्यमा गहन विषयहरूलाई अध्याय, पाद र अधिकरणहरूमा विभाजन गरेर विश्लेषणात्मक रूपमा व्याख्या गरिएको छ । प्रत्येक अधिकरणमा विषय, संशय, पूर्वपक्ष, उत्तरपक्ष र सङ्गति गरी ५ अवयवहरूद्वारा तत्त्वको निर्णय गरिएको छ र शास्त्रोक्त सुतर्कद्वारा श्रुति, स्मृति र प्रत्यक्षादिषट्प्रमाणहरूका आधारमा अद्वैत ब्रह्मको सुदृढ प्रतिपादन गरिएको छ । अनुवादकले पनि त्यही विधि र विषयलाई अनुसरण गरी अद्वैत ब्रह्मतत्त्वको सिद्धि गर्नुभएको छ । अतः

'ब्रह्मसूत्रसार' व्यासप्रणीत ब्रह्मसूत्र एवम् आद्यजगद्गुरु शङ्कराचार्यद्वारा त्यसमा लिखित प्रौढ भाष्यको सारपूर्ण र प्रामाणिक नेपाली दर्पण हो भन्न कन्जुस्याइँ गर्नु पर्दैन ।

'ब्रह्मसूत्रसार' को ग्रन्थविधि, औचित्य र उपयोगितालाई विभिन्न कोणबाट प्रमाणित गर्न सकिन्छ । यो पुस्तक तीन खण्डमा संरचित छ – अध्याय, पाद, अधिकरण र सूत्रनिर्देशसहितको व्याख्या (पहिलो खण्ड), ब्रह्मसूत्रका सूत्रहरूको टिप्पणीसहित अर्थ (दोस्रो खण्ड) र ब्रह्मसूत्रको भाष्यपरम्पराको अनुसन्धानपूर्ण दिग्दर्शन (तेस्रो खण्ड) यी तीन ओटै खण्ड गुणग्राही तर निराग्रही पाठकले पढिसकेपछि ब्रह्मसूत्र के रहेछ, यसमा शङ्कराचार्यले किन भाष्य गरेछन् र त्यो भाष्यको गहिराइ एवम् महत्त्व के रहेछ भन्ने जिज्ञासाको समाधान प्राप्त गर्न सक्छ। प्रस्तुत कृति आद्योपान्त पढिसकेपछि वेदान्तमा प्रवेश गर्न लागेको एषणाग्रस्त व्यक्ति वेदान्ततर्फ प्रवृत्त हुने मनोवृत्तिको विकास गर्न सहयोगी बनेको पाइन्छ । ब्रह्मसूत्रको अर्थ, शाङ्करभाष्यको प्रौढ व्याख्यान र भाष्य परम्पराको सङ्क्षिप्त रेखाङ्कन भएको यो पुस्तक अद्वैत वेदान्तका पाठक, विद्यार्थी र विद्वद्वर्गका लागि समेत उपयोगी छ। संस्कृतका मूल सूत्र र शाङ्करभाष्यबाट त्रस्त वर्गलाई सरल र सुगम शैली र विधिबाट विषयवस्तु प्रति आकृष्ट गराउन पुस्तक सफल छ। पुस्तकको अन्तिममा उल्लिखित सन्दर्भ ग्रन्थहरूको सूची पनि अद्वैत वेदान्तका जिज्ञासु एवं गुरु–शिष्यहरूका लागि मार्गदर्शक छ । भारतवर्षका ज्ञानदीप मानिने वेदव्यासबाट प्रणीत ब्रह्मसूत्रमा शङ्कराचार्यले अत्यन्त प्रौढ संस्कृत भाषामा र त्यसमा पनि न्यायको शैलीमा रचना गरेको ब्रह्मज्ञानप्रधान दुरूह भाष्यलाई सरल नेपालीमा प्रस्तुत गरेर अनुवादकले विद्वत्ता र लोकोपकारको उदाहरण देखाउनु भएको छ ।



# परमसत्य २०६९ का भूमिकाबाट

[ अद्वैतवेदान्तगत विवर्तवाद, वृत्तिको प्रयोजन, पञ्चाग्निविद्या, तत्त्वमसि र अहं ब्रह्मास्मि महावाक्यहरूको महत्त्व, भागवतमा जार शब्दको अर्थ, गुरु र शास्त्रको महत्त्व र अरू पनि महत्त्वपूर्ण शीर्षकहरूमा अद्वैतवेदान्तका पारिभाषिक शब्दहरूलाई भरसक स्पष्ट पार्दै लेख्ने प्रयास गरिएको छ । यो परमसत्य ब्रह्मसाक्षात्कारको पूरक भाग हो । त्यसमा छुटेका र स्पष्ट नभएका विषयहरू यसमा समाविष्ट गरेर स्पष्ट पार्ने प्रयास गरिएको छ। यसमा निबन्धहरूलाई वर्णानुक्रम अनुसार राखिएको छ। ]

# परमसत्य २०६९

'परमसत्य' २०६५ सालमा ३३ ओटा लेखहरूको सङ्कलनका रूपमा प्रकाशित 'ब्रह्मसाक्षात्कार' कै उत्तरवर्ती संस्करणस्वरूप प्रकाशित ३३ ओटै लेखहरूको सङ्ग्रह हो । लेखकको आफ्नै निवासमा लामो समयदेखि चलिरहेको ब्रह्माभ्यास एवम् पशुपतिस्थित शङ्कराचार्यमठमा हुने गरेको अद्वैत वेदान्तको विमर्श र स्वाध्यायका लागि अनुसन्धानात्मक ढङ्गले परिश्रमपूर्वक आधारपत्रका रूपमा तयार पारिएका लेखहरूको सङ्कलन 'परमसत्य' मा भएको छ। अद्वैत वेदान्तको सिद्धान्त अनुसार लेखिएका यी लेखहरूमा अज्ञानदेखि सृष्टि हुँदै प्रलयसम्मको क्रम र कारणको प्रमाणपूर्ण विवेचना भएको छ। आफुले जानेको कुरा अरूलाई नसिकाए र नबुझाए ज्ञानखल हुने भयले गुरु र शास्त्रबाट यथामति जानेको विषयवस्तुलाई लिपिबद्ध गरेको जानकारी लेखकले पुस्तकको भूमिकामै दिनुभएको छ। यसैले यो पुस्तक लेखकले सुनेको, पढेको, जानेको र अभ्यास एवम् अनुसन्धान गरेको वेदान्तविषयक प्रस्तुतीकरण हो।

यस सङ्ग्रहमा 'परमसत्य' शीर्षकको कुनै पनि लेख छैन तथापि श्रीमद्भागवतमहापुराणको मङ्गलाचरणको पहिलो श्लोकको अन्तिम पाउमा आएको 'सत्यं परं धीमहि' भन्ने पदावलीको सारतत्त्वलाई आधार बनाई यसको शीर्षक चयन र निर्धारण भएको छ । परमसत्य भनेको

प्रत्यगात्मा साक्षी वा ब्रह्म हो भन्ने दार्शनिक एवम् प्रामाणिक तर्क अघि सार्दै यसको शीर्षकीकरण भएको मानिएको छ। हाल आफुले नबुझ्ेका भागवतका गहन ज्ञानप्रधान अंश चटक्कै छोडिदिने तर भागवतमा सङ्केतसम्म नभएका विषयलाई श्रोता बुद्धु छन् भनेर थपथाप गरेर फरमाइ फरमाई भन्ने चटकी पण्डितचरित्र सामान्य भइसकेको छ । त्यस्ता चरित्रले यथार्थ बुझ्ुन् र श्रोताहरूले पनि दिग्भ्रान्त हुन नपरोस् भनेर कतिपय विषयलाई स्पष्ट पार्ने प्रयास लेखकबाट भएको छ। अद्वैत वेदान्तका कतिपय पारिभाषिक शब्दहरूलाई स्पष्ट गर्ने प्रयास यहाँ भएको छ। त्यसैले 'परमसत्य' 'ब्रह्मसाक्षात्कार' मा छुटेका र स्पष्ट हुन नसकेका विषयहरूको वर्णानुक्रम अनुसारका लेखहरूको समष्टिरूप हो । अद्वैत वेदान्तमा अस्पष्ट कतिपय विषयहरू यस पुस्तकको अध्ययनबाट स्पष्ट हुने भएकाले यसको उपयोगिता सिद्ध हुन्छ।

प्रारम्भको 'अज्ञान' शीर्षकको लेखमा अज्ञानको स्वरूप, विषय र आश्रयको चर्चा गर्दै सजातीय, विजातीय र स्वगतभेदशून्य शुद्ध ब्रह्ममात्र अज्ञानको आश्रय र विषय दुवै हुने तर जीव कुनै पनि हालतमा अज्ञानको आश्रय एवम् विषयसमेत हुन नसक्ने निर्णयात्मक निष्कर्ष प्रस्तुत गरिएको छ । 'अज्ञानको भावरूपता' मा सत्, असत् र सदसत्‌बाट पनि जान्न नसकिने मायालाई वास्तवी वा अविद्या भनिन्छ। त्यसको अनिर्वाच्य, ज्ञानविरोधी, त्रिगुणात्मक र भावात्मक स्वरूप नै अज्ञानको सरल परिभाषा मानिएको छ । 'अज्ञानका शक्ति' भन्ने निबन्धमा अज्ञानका आवरणशक्ति र विक्षेपशक्तिको स्वरूप निरूपण गर्दै अज्ञानको आश्रय र विषय दुवै ब्रह्म हो भन्ने 'अज्ञान' शीर्षकको लेखसँग मिल्दोजुल्दो रचना हो । 'अज्ञानको निवृत्ति' भन्ने लेखले ज्ञानबाट मात्र मुक्त हुन सकिन्छ, अज्ञान वा अविद्याले होइन भन्ने मान्यता स्थापित गरेको छ। 'अद्वैतपरम्परामा श्रीशङ्कराचार्य' शीर्षकको लामो लेखले ब्रह्मसूत्रका प्रणेता वेदव्यास, कृष्णद्वैपायन वा बादरायणले आफ्नो ग्रन्थमा उल्लेख गरेका आर्षवेदान्तका आचार्यहरूको नामावली र कार्यहरूको दिग्दर्शन

गराई आद्य जगद्गुरु श्रीशङ्कराचार्य र उनको गुरुशिष्यपरम्पराको चर्चा गरेको छ। यसमा भारतका प्रसिद्ध चारओटा शङ्कराचार्य मठको परिचय दिई श्रीशङ्कराचार्यको वेदान्तविद्याको विस्तारका क्रममा आएका विद्वान्हरू र तिनका कृतित्वको विवरण पनि दिइएको छ।

'अनाम ब्रह्मज्ञानी' निबन्धमा श्रीमद्भागवतको दशमस्कन्धको ८० औं अध्यायमा आएको अनाम ब्रह्मज्ञानी ब्राह्मण र उनकी धर्मपत्नीसम्बन्धी प्रसङ्गमा कथावाचक टापटिपे पण्डितहरूले सुदामा र सुशीला भन्ने गरेका भए पनि मूलमा ती नाम नभएकाले पण्डितहरूको कथन काल्पनिक मात्र भएको तर्क गर्दै ब्राह्मणको उपलक्षणका रूपमा भगवान् श्रीकृष्णको अन्तःकरणको वृत्तिमा प्रतिबिम्बित चिदाभासलाई बुझाउन खोजेको वेदान्ती अर्थ सिद्ध गरिएको छ। 'अहं ब्रह्मास्मि' लेखमा छान्दोग्योपनिषद्मा ऋषि उद्दालकले जिज्ञासु श्वेतकेतुलाई विभिन्न दृष्टान्त दिएर 'तत्त्वमसि' महावाक्यको उपदेश गरेको प्रसङ्ग उल्लेख गरी आत्मरूप अभय ब्रह्मलाई जान्ने मानिस निश्चय नै ब्रह्म हुन्छ भन्ने सम्पूर्ण उपनिषद्हरूको सार हो भन्ने निष्कर्ष प्रस्तुत गरिएको छ। 'आनन्द' भन्ने लेखमा विभिन्न श्रुतिग्रिन्थहरूले ब्रह्म बुझाउनका लागि नै आनन्द शब्दको प्रयोग गरेको प्रमाण प्रस्तुत गरिएको छ र अद्वैत वेदान्तका दृष्टिबाट ब्रह्म र आनन्दलाई पर्यायवत् सिद्ध गरिएको छ।

'ईश्वर र जीवात्मा' ईश्वर र जीवका बारेमा विभिन्न ग्रन्थ र विद्वान् हरूका प्रतिनिधि गहन विचारहरूको उल्लेख भएको सङ्क्षिप्त लेख हो भने 'ईश्वरसाक्षी' लेख पनि ईश्वरसाक्षीको उपाधिभूत माया हो, त्यो जीवसाक्षीको उपाधिभूत अन्तःकरणजस्तो नानाथरी होइन भन्ने सिद्धान्त स्थापित गर्ने अर्को छोटो रचना हो। 'उपदेश एक, गुरु अनेक' शीर्षकमा वेद, उपनिषद्, महाभारत, रामायण, पुराण, धर्मशास्त्रहरूका साथै श्रोत्रिय ब्रह्मनिष्ठ गुरुहरूले मानिसलाई यस मायिक संसारको दलदलबाट माथि उठाई मोक्षको बाटो देखाउने काम गरेकाले ती सत्शास्त्र र सद्गुरु हुन् भनिएको छ र यसको विपरीत संसारी मायिक कर्मतर्फ प्रवृत्त गराउन खोज्ने शास्त्र होइनन् र गुरु पनि होइनन् विचार प्रतिपादित छ।

'एषणा निर्मुक्त जीवन' निबन्धले एषणात्रय – पुत्रैषणा, वित्तैषणा र लोकैषणाले मानिसलाई बन्धनमा पार्ने र अहङ्कारी बनाउने भएकाले यिनको उचित व्यवस्थापन गरेर बिस्तारै अभ्यास र वैराग्यद्वारा एषणानिर्मुक्त बन्न सक्ता मुमुक्षुको आत्यन्तिक कल्याण हुने मार्गदर्शन गरेको छ। 'केनोपनिषद्मा प्रत्यागात्मा' मा सामवेदको तवलकार ब्राह्मण अन्तर्गत पर्ने चार खण्डको केनोपनिषद् जम्मा ३४ ओटा मन्त्रहरू मात्र भए पनि ज्ञानका दृष्टिले अत्यन्त महत्त्वपूर्ण मानिएको छ। यसमा शङ्कराचार्यले पनि अरू कुनै भाष्यपरम्परामा नभएका पदभाष्य र वाक्यभाष्य गरी दुई थरी भाष्य लेखेको प्रसङ्ग अघि सार्दै सम्पूर्ण विधाहरूको आश्रय भएको यस ब्रह्मविद्यालाई जान्ने मानिस अविद्या, वासना र कर्मरूप संसारको बीजलाई त्याग गरेर अनन्त सुखस्वरूप ब्रह्ममा स्थित हुन्छ भन्ने निष्कर्ष यसबाट निःसृत हुने विचार व्यक्त गरिएको छ।

'जार' मा श्रीमद्भागवतमा श्रीकृष्णलाई गोपीहरूका प्रेमीका रूपमा 'जार' शब्दको प्रयोग भएको देखिए पनि त्यस शब्दको उपपत्ति भन्ने सामान्य लोकप्रसिद्ध अर्थ नभई भक्त, प्रेमी वा ज्ञानीहरूका सञ्चित कर्महरूलाई तत्काल भस्मसात् गरी तुरुन्तै कैवल्यमुक्ति वा सद्योमुक्ति प्रदान गर्ने ब्रह्मरूप ज्ञान हो भन्ने निष्कर्ष प्रतिपादन गरिएको छ। 'जीवनमुक्त पुरुष' शीर्षकमा जीवन्मुक्त पुरुषको लक्षण, विशेषता र अवस्था देखाइएको छ भने 'जीव र साक्षी' मा जीव र साक्षीको स्वरूप चिनाई यिनको सम्बन्ध र विभेद सरल उदाहरणसहित वेदान्तशास्त्रको आधारमा स्पष्ट पारिएको छ।

सामवेद अन्तर्गतको छान्दोग्योपनिषद्को महावाक्यका रूपमा प्रसिद्ध 'तत्त्वमसि' महत्त्वपूर्ण निबन्धमा ब्रह्मर्षि उद्दालकले पुत्र श्वेतकेतुलाई उपदेश गरेको प्रसङ्ग उल्लेख गरी धेरै उपायबाट श्वेतकेतुले अन्त्यमा आफुलाई 'तत्त्वमसि'को बोध भई आत्मा भएको ज्ञान उघ्रिएको कथ्यको प्रस्तुति भएको छ। यसमा 'तत्त्वमसि' को श्रवण आत्मज्ञानको प्रथम सोपान भएको र लामो प्रयासपछि मात्र मुमुक्षु आत्म रूपमा पुगेर पर्यवसित हुन्छ। सामवेदीहरूका लागि मात्र यो महावाक्य श्रवणीय हो र वेदीका लागि होइन भनेर बुझ्नु पर्दछ। 'निषेधबाट ब्रह्मज्ञान' भन्ने लेखमा ब्रह्म कुनै पनि कारणबाट ज्ञात हुन नसक्ने

हुँदा श्रुतिले निषेध मुखबाट ब्रह्मको ज्ञान गराउने प्रयास गरेको तार्किक मत अघि सार्दै केनोपनिषद् (२।३) को प्रमाणबाट ब्रह्म जसले जान्दैन त्यसले जान्दछ, जसले जान्दछ त्यसले जान्दैन भन्ने मान्यता स्थापित गरिएको छ। 'पिताको उपदेश पुत्रलाई' शीर्षकमा छान्दोग्योपनिषद्मा उल्लिखित पिता उद्दालकले पुत्र श्वेतकेतुलाई दिएको उपदेशको चर्चा गरिएको छ र सत् परब्रह्मबाट सम्पूर्ण सृष्टि भएको तथ्य उपनिषद्ले प्रतिपादन गरेको छ भन्ने तथ्य अघि सारिएको छ। 'पञ्चाग्निविद्या' मा उपनिषद्हरूले वर्णन गरेका देवयान (उत्तरमार्ग), पितृयान (दक्षिणमार्ग) र जायस्व म्रियस्व (जन्मने र मर्ने चक्रीयमार्ग) मा घुमिरहनुपर्ने भएकाले मानवको चेतनशील जन्म पाएका समयमा ब्रह्मज्ञान प्राप्त गरी मुक्त भएर जानु बुद्धिमानी हो भन्ने सन्देशमूलक विचार दिइएको छ। 'प्रलय' शीर्षकमा वेदान्त दर्शनअनुसार सृष्टिक्रमको विपरीत क्रमले लय हुने तथ्य स्पष्ट पारिएको छ। 'प्रश्नोपनिषद् लेखमा प्रश्नोपनिषद्का ६ ओटा खण्डमा रहेका विभिन्न प्रश्न र उत्तरको शैलीद्वारा तत्त्वज्ञानको निरूपण भएको चर्चा गरेको छ। 'ब्रह्मप्राप्तिमा वृत्तिव्याप्ति' निबन्धमा कुनै पनि विषयको ज्ञानी हुनका लागि वृत्तिव्याप्ति र फलव्याप्ति गरी दुई थरी वृत्तिको आवश्यकता देखाइएको छ र ब्रह्मज्ञानका लागि चाहिँ फलव्याप्ति आवश्यक नभई वृत्तिव्याप्ति मात्र आवश्यक हुने सारांश प्रकाशन गरिएको छ। 'ब्रह्मसाक्षात्कारका साधनहरू' भन्ने शीर्षक ब्रह्मसाक्षात्कारका लागि मलदोष, विक्षेपदोष र आवरणदोष ज्ञानद्वारा हटाई मुमुक्षु 'अहं ब्रह्मास्मि'को स्थितिमा पुग्दछ र श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका सान्निध्यमा रहेर 'तत्त्वमसि' महावाक्यको श्रवण गर्नुपर्दछ जुन अनन्त जन्ममा मात्र पूरा हुन सक्छ भन्दै यही अभ्यास एवम् योग्यता नै ब्रह्मसाक्षात्कारका साधन हुन्छन् भन्ने विषयमा केन्द्रित छ। 'मोक्षको स्वरूप' लेखमा ज्ञानीको मुक्तावस्था वा मोक्षको स्वरूप देखाइएको छ। 'विवर्त' निबन्धमा सम्पूर्ण चराचर जगत् ब्रह्मको विवर्त भएको व्याख्या गरिएको छ र विवर्तवाद अति कठिन र जटिल भएको निचोड निकालिएको छ। 'वृत्तिको प्रयोजन' निबन्धमा अन्तःकरणवृत्तिको प्रयोजन अज्ञानको आवरण भङ्ग गर्नु हो भन्ने मत स्थापित गरिएको छ। 'वेदान्तका तीन सत्ता' नामक लेखमा ब्रह्मको सत्तालाई पारमार्थिकी सत्ता, आकाशादि

प्रपञ्चको सत्तालाई व्यावहारिकी सत्ता र शुक्तिरजतादि भ्रान्तपदार्थको सत्तालाई प्रातिभासिकी सत्ताका रूपमा चिनाई पारमार्थिकी सत्ता ब्रह्मसत्ता नै भएकाले तीनै कालमा अक्षुण्ण वा अरू सत्ताहरूका लागि आधार सत्ता हुन्छ भनिएको छ। 'वैकुण्ठयात्रा' शीर्षकमा सृष्टिकर्ता ब्रह्माजीले ब्रह्मज्ञानी परमहंस सनत्कुमारहरूको कथा देवताहरूलाई सुनाएको आख्यानलाई आधार बनाई सनत्कुमारहरूको ज्ञानको श्रेणीक्रम निरूपण गर्दै भगवान् आफ्नो लीला अनुसार सर्वकार्यसमर्थ भएको सार प्रस्तुत गरिएको छ।

'सत्यं परं धीमहि' निबन्धमा उपनिषद्, भागवत एवम् सङ्क्षेपशारीरक ग्रन्थहरूका प्रामाणिक वचनलाई आधार मानी प्रत्येक प्राणीका अन्तःकरणमा रहेर भुक्ति र मुक्तिको साक्षी, मुक्तिको द्वार तथा अधिष्ठानका रूपमा रहेको परमब्रह्मको बिम्बभूत वा प्रतीकरूप प्रत्यगात्मा नै परम सत्य भएकाले त्यतैतिर अभिमुख भएर 'अहं ब्रह्मास्मि'को भावले ध्यान गर्नु नै मनुष्यको अभीष्ट हो र जीवनको सार्थकता पनि हो भन्ने विचार व्यक्त भएको छ। 'सर्वकर्मसंहारक ज्ञान' भन्ने लेखमा ज्ञान नभईकन कुनै पनि अवस्थामा कर्मबन्धनबाट मुक्ति पाउन नसकिने भएकाले सर्वकर्मसंहारक (सबै थरी कर्महरूको नाश गरिदिने) तत्त्व ज्ञान नै हो भन्ने निष्कर्ष पाइन्छ। 'शास्त्र र गुरु कहिलेसम्म ?' भन्ने निबन्धमा बुद्धिमान् मुमुक्षुले बुद्धिलाई स्थिर गरेर ब्रह्ममा नै अन्तःकरण विलय गरिसकेपछि अन्ततः शास्त्र र गुरु दुवै स्वतः छुट्टै जान्छन् प्रयास गर्नु पर्दैन र यो नै ब्रह्मप्राप्तिको चरम परिणति हो भन्ने सन्देशमूलक विचार पाइन्छ। यी दुवैलाई छोड्ने मात्रै होइन, बिर्सनु नै पर्दछ अन्यथा ब्राह्मीस्थितिमा पुग्न वा ब्रह्म हुन सकिँदैन भन्ने सावधानी पनि यसमा देखाइएको छ। 'सृष्टि' लेखमा सृष्टिका विषयमा विभिन्न दर्शन, सम्प्रदाय र पश्चिमी विज्ञान आदिमा मतमतान्तर पाइन्छ भन्ने चर्चा गरिएको छ र परमात्मामा नै सृष्टिका रूपमा परिवर्तित हुने तथ्यको विश्लेषण गरी अद्वैत वेदान्तको प्रक्रियामा अवगाहन गर्नका लागि सृष्टिको ज्ञान आवश्यक हुने यथार्थ देखाइएको छ।



# ब्रह्मविद्या २०७० का भूमिकाबाट

[ यस ग्रन्थमा ४२ ओटा लेखहरू किन समावेश गरिए ? ४१ वा ४३ किन भएनन् ? भनेर जिज्ञासा हुनसक्ने देखिन्छ । यस कारण यस सम्बन्धमा स्पष्ट पार्नु आवश्यक देख्तछु । कुरा के हो भने लौकिक, आध्यात्मिक र दार्शनिकसमेत गरेर अहिलेसम्म सानाठूला ३२ ओटा ग्रन्थहरू मैले लेखें र तिनको प्रकाशनसमेत भइसकेको छ । अझै केही प्रकाशनका प्रतीक्षामा पङ्क्तिबद्ध छन् । तिनमा भक्ति र ज्ञानपरक ग्रन्थहरू पनि पर्दछन् । २०६७ सालमा प्रकाशित 'ब्रह्मसाक्षात्कार' ग्रन्थमा अनजानमा ३३ ओटा लेखहरू पर्न गएका थिए । २०६९ सालमा प्रकाशित 'परम सत्य'मा भने मैले जानेर नै ब्रह्मसाक्षात्कारमा परेको सङ्ख्या अनुरूप गनी गनी ३३ ओटा लेखहरू समावेश गरेँ । यसरी दुबै ग्रन्थहरूमा गरेर ६६ ओटा लेख परिसकेका हुँदा यस 'ब्रह्मविद्या'मा ४२ ओटा लेखहरू समावेश गरेर १०८ सङ्ख्या पुऱ्याउने मलाई लहड चल्यो र लेख्तै जाँदा उक्त सङ्ख्या पुग्यो पनि । यसबाट मलाई सन्तोषै लागेको छ । यसका पाठकहरूलाई पनि यस ग्रन्थको अध्ययनबाट सन्तुष्टि प्राप्त हुन सक्यो भने म आफुलाई कृतकृत्य सम्झनेछु । ]

# ब्रह्मविद्या २०७०

ब्रह्मविषयक ज्ञान र चिन्तनमा केन्द्रित विद्यालाई पराविद्या, ब्रह्मविद्या, आत्मविद्या, अध्यात्मविद्या, अमृतविद्या र वेदान्त आदि नामबाट चिन्ने र चिनाउने गरिन्छ । सोही अनुरूप लेखकले ४२ ओटा निबन्धहरूको प्रस्तुत सङ्ग्रहलाई 'ब्रह्मविद्या' नामकरण गर्नुभएको छ । ग्रन्थको कुनै एउटा विषय र शीर्षकको सट्टा सम्पूर्ण निबन्धको मूल प्रतिपाद्यलाई आधार बनाई यसको शीर्षकीकरण भएको छ । औपनिषद सिद्धान्त अनुसार अज्ञानको नाश नभई ज्ञान (ब्रह्मसाक्षात्कार) सम्भव हुँदैन । अज्ञान नाश गर्नका लागि वेदान्तको श्रवण, मनन, चिन्तन र निदिध्यासन आवश्यक हुन्छ । प्रस्तुत सङ्ग्रह वेदान्त दर्शनमा प्रतिपाद्य दुर्बोध विषयहरूलाई

सरल ढङ्गबाट पूर्वपक्ष र उत्तरपक्षको शास्त्रसम्मत शैलीमा बुझाउन सफल छ । सामान्य पाठक एवं मुमुक्षुदेखि परब्रह्मको साक्षात्कार गर्ने तहसम्म पुगेका विशिष्ट सन्तहरूका लागि पनि ग्रन्थ उपयोगी बनेको छ । वेदान्तानुरागी व्यक्तिहरूको जिज्ञासा बढाई उनीहरूलाई आत्मज्ञानतर्फ उत्प्रेरित गर्ने माध्यमका रूपमा पनि यस ग्रन्थको महत्ता रहेको छ । यसमा सङ्गृहीत धेरैजसो लेखहरू अद्वैत वेदान्तको प्रस्थानत्रयीमा परिगणित ब्रह्मसूत्रमा समाविष्ट विषयहरूमा आधारित छन् जुन यथार्थ लेखकले ग्रन्थको भूमिकामा नै स्पष्ट पार्नुभएको छ ।

'प्रयोजनमनुद्दिश्य न मन्दोऽपि प्रवर्तते' भन्ने भनाइ अनुसार मूर्ख पनि कुनै प्रयोजन वा उद्देश्य नराखी कुनै काम गर्दैन । सरकारको सचिव, वेदान्तका विद्वान् र देशविदेशको युगबोध भएका अध्यवसायी लेखकले यो पुस्तक किन लेख्नुभयो होला ? भन्ने जिज्ञासा उहाँलाई चिन्ने वा नचिन्ने दुवै वर्गका व्यक्तिहरूलाई हुन सक्छ र यसो हुनु स्वाभाविक पनि हो । उहाँको पढाइ, लेखाइ, प्रचारप्रसार, संस्थाको गठन, सङ्गठन निर्माण आदि कुनै पनि काम अर्थोपार्जन, यशः प्राप्ति वा कालक्षेपणका लागि गरिएका छैनन् र हुँदैनन् । उहाँले अर्थोपार्जनका उपाय, यशः प्राप्तिको तरिका र कालक्षेपणको साधन थाहा नपाएर यी र यस्ता काम किमार्थ गर्नु भएको होइन । उहाँका जस्तै पद र प्रतिष्ठा प्राप्त गरेका बहुसङ्ख्यक मानिस अहिले के गर्छन्, कस्तो अवस्थामा पुगेका छन्, नेपालको प्रशासनयन्त्रमा गहिरो दृष्टि राख्ने प्रबुद्ध वर्गलाई यथार्थ थाहै छ । त्यसैले यस्तो आत्मविद्याप्रधान ग्रन्थ लेखकले स्वान्तः सुखाय लेख्नुभएको हो र यो नै पहिलो प्रयोजन पनि हो । कवि भवभूतिले भनेझैं समय निरवधि र पृथिवी विशाल भएकाले एक दिन न एक दिन यस ग्रन्थको मूल्य र महत्त्व थाहा पाउने व्यक्ति जन्मने छ र जसले लेखकको मूल्य र महत्त्व पनि विस्तार गर्नेछ । तर पनि लेखकलाई कुनै लोभ, आशा र आकाङ्क्षा परिपूर्ति गर्नुपरेको छैन । राष्ट्रकवि माधव घिमिरेले प्रसिद्ध कविता 'काली गण्डकी' मा भनेका छन् –

मेरो सच्चा सुख छ दिनहुँ क्यै नयाँ सिर्जनामा ।

लेखक भट्टराईलाई पनि वेदान्तबारे दिनहुँ केही न केही नयाँ सिर्जना गरेपछि सच्चा सुख मिल्छ । त्यही सुखका लागि 'ब्रह्मविद्या' पनि लेखिएको हो ।

आफुले जानेको कुरा अरूलाई भन्दैन र बाँड्दैन भने त्यो मानिस जतिसुकै विद्वान् भए पनि 'ज्ञानखल' हो भन्ने आर्षवचन छ । जस्तै –

सा देवकी सर्वजगन्निवासनिवास भूता नितरां न रेजे ।

भोजेन्द्रगेहेऽग्निशिखेव रुद्धा सरस्वती ज्ञानखले यथा सती ॥

(भागवत १० ।२ ।१९)

अर्थात् भगवान् सारा जगत्का निवासस्थान हुन् । देवकी उनको पनि निवासस्थान बनिन् । परन्तु घडाभित्र बन्द भएको दीपक र आफ्नो विद्या अरूलाई नदिने ज्ञानखलको श्रेष्ठ विद्याको प्रकाश जसरी चारैतिर फैलिँदैन त्यसै गरी कंसको कारागारमा बन्द भएकी देवकीको पनि उतिसारो शोभा भएन वा बढेन ।

यसरी ज्ञान खल नहुनका लागि पनि आफुले जानेबुझेको विद्या अरूलाई पनि बाँडिहाल्नुपर्छ भन्ने भागवतको वचनबाट समेत प्रेरित भएर यस ग्रन्थको रचना भएको हो । ४२ ओटै लेखको अनुशीलन गर्दा पनि यिनै दुई उद्देश्यको परिपूर्तिका लागि पुस्तकको रचना भएको अनुभव गर्न सकिन्छ ।

ग्रन्थको प्रारम्भ गर्ने 'वेद र वेदान्त' ले वेद र वेदान्तको श्रुति, स्मृति, महाभारत, पुराण, व्याकरण आदि शास्त्रहरूका आधारमा अर्थ स्पष्ट पारी यी विषयमा पाश्चात्त्य विद्वान् एवम् विदुषीहरूले गरेको प्रशंसापूर्ण टिप्पणीहरूसमेत उद्धृत गरी यिनलाई प्राच्य विश्वका महान् निधिका रूपमा सिद्ध गरेको छ । 'उपनिषद्को प्रभाव' मा उपनिषद्रूपिणी महती ज्ञानगङ्गाद्वारा प्राच्यजगत्का शास्त्र एवम् विद्वान्हरू मात्र नभई पाश्चात्त्य शास्त्र र विद्वद्वर्ग पनि अभिषिञ्चित र प्रभावित भएको तर्क सप्रमाण स्थापित गरिएको छ । 'प्रज्ञानं ब्रह्म' मा महावाक्य 'प्रज्ञानं ब्रह्म' को

व्याकरणशास्त्रानुकूल व्युत्पत्तिमूलक अर्थ बुझाई विभिन्न ग्रन्थहरूबाट उद्धरण लिई यस महावाक्यको वाच्यार्थ सम्पूर्ण प्राणीमात्रका अन्तःकरणमा व्यष्टिरूपबाट रहेको चेतनतत्त्व हो भने लक्ष्यार्थ चाहिँ निष्क्रिय, निष्कल, शान्त, निरवद्य, निरञ्जन परमकारण ब्रह्मतत्त्व नै हो भन्ने सिद्धान्त स्थिर गरिएको छ। 'अयमात्मा ब्रह्म' मा पनि यस महावाक्यको पदगत अर्थ गरी विभिन्न उपनिषद्, टीका र भाष्यहरूका आधारमा 'अयम्' 'आत्मा' र 'ब्रह्म' को वेदान्तानुकूल निष्कर्ष निकालिएको छ।

'महावाक्य' मा महावाक्यको व्याकरणिक र वेदान्ती अर्थ गरिएको छ भने 'आत्मा नै ब्रह्म' मा उपनिषद्, गीता र पुराणबाट प्रमाण दिई आत्मा अर्थात् जीवात्मा ब्रह्म नै हो भन्ने प्रमाणित गरिएको छ। 'आत्मज्योति' मा ज्योतिको अर्थ प्रकाश, आभा, दीप्ति, सूर्य, किरण आदि भए पनि वेदान्तमा आत्मज्योतिको सूक्ष्म अर्थ हुने चर्चा गर्दै खण्डन र मण्डनको शैलीबाट श्रुतिले ज्योतिको अर्थ भासक वा प्रकाशक भन्ने गरेको र यसलाई आत्मज्योति, ब्रह्मज्योति वा परमज्योतिका रूपमा ग्रहण गरेको निचोड निकालिएको छ। 'संवर्गविद्या' छान्दोग्योपनिषद्को संवर्गविद्याको चर्चा हो र यसले प्राण वा वायुविद्यालाई संवर्गविद्याका रूपमा प्रस्तुत गरिएको छ। 'भूमाविद्या' मा भूमा शब्दको व्याकरणगत र कोशीय अर्थसमेत दिई अद्वैत वेदान्तमा चाहिँ यस शब्दबाट आत्मा वा ब्रह्म भन्ने बुझिने शास्त्रानुकूल अर्थ गरिएको छ, यसलाई परमात्माकै रूपमा सिद्ध गरिएको छ। साथै वाचस्पति मिश्रको भामती टीकालाई आधार मानी भूमाविद्याबारे शास्त्रीय टिप्पणी पनि दिइएको छ। 'जिज्ञासा' शीर्षकको लामो लेखमा उपनिषद्, गीता, अष्टावक्रगीता, पुराण, रामगीता, पञ्चदशी, चर्पटपञ्जरिकास्तोत्रदेखि कविशिरोमणि लेखनाथ पौड्यालको 'बुद्धिविनोद' सम्मलाई आधार बनाई भ्रमांशतर्फको जिज्ञासाले मनुष्यलाई पतनतर्फ लैजाने र अधिष्ठानांशतर्फको जिज्ञासाले मुक्तितर्फ लैजाने भएकाले असङ्ग ब्रह्म नै आत्मा हो भन्ने तथ्य जिज्ञासु मुमुक्षुहरूले बुझ्नु पर्ने भनिएको छ।

'दहराकाश' को पदविच्छेद गरी श्रुति र स्मृति अनुसार हृदयमा रहेको

सूक्ष्म खाली स्थान वा आकाश भन्ने अर्थ स्पष्ट पारी त्यही नै 'अहं ब्रह्मास्मि' द्वारा मुमुक्षुले ब्रह्मसाक्षात्कार गर्न सक्दछ भन्ने निष्कर्ष प्रतिपादन गरिएको छ। 'प्रतीकोपासना' मा अद्वैत सम्प्रदायका दृष्टिबाट विचार गर्दै द्वैत भावले प्रतीकोपासना हुन सक्ने तर अद्वैत भावले हुन नसक्ने मान्यता स्थापित गरिएको छ। 'पाञ्चरात्र' मा भागवतधर्म नै पाञ्चरात्र भएको पुष्टि गरिएको छ र ब्रह्मसूत्रको शाङ्कर भाष्यलाई सप्रमाण अघि सार्दै पाञ्चरात्र वेदविरोधी र वैदिक सनातनीका लागि अस्वीकार्य भएको मत व्यक्त गरिएको छ। यसबारे लामो टिप्पणी पनि दिइएको छ।

'अक्षर ब्रह्म' अक्षरको अर्थ बुझाउने, यसलाई जान्ने उपाय देखाउने र यसको विकल्प देखाउने लेख हो। यहाँ अक्षर आकाश, प्रकृति, प्रधान, प्रणव, सर्वात्मा आदिको वाचक नभएर ब्रह्मवाचक वा ब्रह्म नै भएको सारांश खिचिएको छ। यसबारे पनि टिप्पणी दिएर थप स्पष्ट पारिएको छ। 'उत्क्रान्ति' मा उत्क्रान्तिको वेदान्तसम्मत दृष्टिले मृत्यु, ब्रह्मलीन, क्रममुक्ति आदि अर्थ गर्दै ५ ओटा बुँदाद्वारा सबैको उत्क्रान्तिको क्रम निर्देश गरिएको छ। 'सद्योमुक्ति' मा ब्रह्मज्ञानीको उत्क्रमण र गति पनि नहुने हुनाले देवताहरूले पनि यसलाई जान्दैनन् भन्ने मान्यता अघि सार्दै तातेको फलाम वा ढुङ्गामा छेपिएको जल न अन्यत्र जान्छ, न देखिन्छ परन्तु स्वरूपतः लीन हुन्छ, त्यसै गरी निर्गुण ब्रह्मज्ञानीको गति र उत्क्रान्तिको पनि अभाव हुन्छ भन्ने सिद्धान्त स्थापित गरिएको छ। 'क्रममुक्ति' मा उच्चस्तरका ब्रह्मविद् ब्रह्मलोक जान्छन् भनिएको छ र क्रममुक्तिमा ब्रह्मलोकसम्म पुग्ने अधिकार अकर्मी उपासकलाई मात्रै हुन्छ, सकामी वा सकर्मीलाई हुँदैन भन्ने शास्त्रसम्मत विचार स्थापित गरिएको छ। 'उत्क्रान्तिमा पार्थक्य' श्रुति र स्मृतिहरूले आ-आफ्ना ज्ञान, साधना, उपासना सकाम आदि कर्महरूका कारण मृत्युपछि जीवको उत्क्रान्तिमा देखिने पार्थक्य वा भिन्नता देखाएको विषय विश्लेषण गर्ने निबन्ध हो। जसले मुमुक्षुका लागि यो अत्यन्त पठनीय एवम् चिन्तनीय छ भनेर जोड दिएको छ। 'साम्पराय' को अर्थ परलोकसम्बन्धी हो। यस लेखमा मुक्तपुरुषका कर्महरू पहिले नै नाश

हुने भएकाले ब्रह्मलोकको बाटोमा फेरि त्याग गर्नुपर्ने आवश्यकता हुँदैन भन्ने मान्यता प्रस्तुत गरिएको छ। 'मुक्तपुरुषको सङ्कल्प' मा उपासक वा मुक्तपुरुषका सङ्कल्पमात्रद्वारा पित्रादिको उत्थान हुने श्रुति अनुकूल सिद्धान्त स्थापित गरिएको छ र मुक्त पुरुषको सङ्कल्पमात्रै नै ब्रह्मलोकको भोग्यसृष्टिमा कारण हो भन्ने निश्चय व्यक्त गरिएको छ।

'मुक्तपुरुषका शरीर र इन्द्रिय' मा पनि केवल सङ्कल्पबाट नै पितृ आदिको समुत्थान हुन्छ भन्ने श्रुतिअनुसार विद्वान्को सङ्कल्पमात्रै नै ब्रह्मलोकको भोग्यसृष्टिमा कारण हो भनेर देखाइएको छ। 'आत्यन्तिकी मुक्ति' मा ब्रह्मज्ञानको फल विद्वान्को कैवल्यमुक्ति हो भनिएको छ र ब्रह्मज्ञानीको आत्यन्तिकी मुक्ति नियत एवम् निश्चित भएको सत्य सिद्ध गरिएको छ। 'मुक्तिको स्वरूप' मा पूर्वपक्ष र सिद्धान्तीको तर्कवितर्कलाई अघि सारी मुक्तिलाई स्वर्गजस्तो उत्पाद्य नभएर स्वतः प्राप्य सिद्ध वस्तुका रूपमा हेरिएको छ र मुक्तिको स्वरूप ब्रह्म नै हो भनेर बुझाइएको छ।

'अमानव पुरुष' विभिन्न उपनिषद्, भामती आदि ग्रन्थका उद्धरणहरूलाई प्रमाणका रूपमा प्रस्तुत गरी ब्रह्माको मानसिक सृष्टिभित्र पर्ने सर्वत्र अबाध गति भएको ब्रह्मलोकवासी कुनै विशिष्ट पुरुष हो भन्ने अर्थ बुझाउने निबन्ध हो। 'आतिवाहिक' मा ब्रह्मलोकबाट आएर विद्युत्देखि जीवलाई लैजाने अमानव पुरुष लगायत अर्चिदेखि विद्युत्सम्मका अभिमानी देवताहरूलाई आतिवाहिकका स्वरूप भएका भनेर परिचय दिइएको छ र भोगभूमि जड भएकाले जीवात्माका वाहक हुन नसक्ने हुँदा चेतन आतिवाहिक वा नेताले मात्र लैजान सक्ने मान्यता श्रुतिका प्रमाण र युक्तिले पनि सिद्ध गरेको प्रसङ्गसमेत उल्लेख गरिएको छ। 'गीतासार' गीताको समीक्षात्मक र विश्लेषणात्मक रूपबाट खिचिएको सारांश हो जसमा महाभारत, गीता, भागवत आदि ग्रन्थहरूलाई आधार मानी अर्जुन सद्योमुक्तिमा प्राप्त भएको तर्क गरिएको छ। यसमा पुरुषका प्राणहरूले उत्क्रमण नगर्ने, ऊ ब्रह्म नै भएर ब्रह्ममा मिल्दछ भने त्यो सद्योमुक्ति हो भन्ने सजिलो अर्थ खुलाइएको छ। 'मिथ्यात्व निश्चय' मा

प्रपञ्चलाई त्रैकालिक सत्य मान्ने माध्वमतावलम्बीलाई अद्वैत वेदान्तको सिद्धान्त अनुरूप प्रपञ्च मिथ्या भएको मान्यतामा सहमत गराएको सारांश खिचिएको छ। 'नैष्कर्म्यसिद्धिः' मा निष्क्रिय ब्रह्म नै जीवात्मा हो भन्ने ज्ञान भएका कारण जसका सबै कर्म निवृत्त भएका छन् त्यो निष्कर्मा हो र निष्कर्माको भावको नाम नैष्कर्म्य हो भन्ने व्युत्पत्तिमूलक अर्थ गरी सन्न्यास, यथार्थ ज्ञान वा ज्ञानपूर्वक सर्वकर्मसन्न्यासद्वारा प्राप्त गरिने निष्कर्मतारूप सिद्धि 'नैष्कर्म्यसिद्धिः' भन्ने निष्कर्ष निकालिएको छ र यस्तो सिद्धिलाई कर्मजनित सिद्धिभन्दा विलक्षण सद्योमुक्तिमा रहने उत्तमसिद्धि हो भनिएको छ। 'ब्रह्मनिर्वाण' मा कैवल्यमुक्ति, ब्रह्मप्राप्ति वा शुद्ध ब्रह्म नै ब्रह्मनिर्वाण भएको निचोड निकालिएको छ। 'मलनिर्मोचन' मा संसारको कारण अज्ञान नै मल हो भन्ने मान्यता प्रस्तुत गर्दै अन्तःकरणमा रहने यस्तो मलदोषलाई निर्मोचन वा छुटाएपछि मात्र ब्रह्मज्ञान प्राप्त हुन्छ र जीव शिव हुन्छ भन्ने निष्कर्ष छ।

'शिक्षा र विद्यामा पार्थक्य' शिक्षा र विद्यामा भिन्नता देखाउने उद्देश्यले लेखिएको निबन्ध हो। यसमा जुन ज्ञान मुक्तिका लागि हुन्छ त्यो विद्या हो र संसारी मायिक विषय सिकाउने शास्त्रहरू चाहिँ अविद्या वा शिक्षा हुन् भन्ने विचार प्रतिपादन गरी शिक्षाविना विद्याको द्वार नखुल्ने भएकाले शिक्षा विद्यामा पुग्ने साधन हो भन्ने तथ्य प्रस्तुत गरिएको छ। 'स्तुति' मा भागवतका विविध प्रसङ्ग र प्रमाणहरू उद्धरण गरी बुद्धिमान् वा महात्माहरू स्तुति मन पराउँदैनन् भन्ने निचोड निकाल्दै स्तुतिप्रिय हुनु आफ्नै अधः पतन हो भनिएको छ। 'जीव र साक्षी' मा वेदान्ती दृष्टिबाट जीवलाई प्रतिबिम्ब वा चिदाभासका रूपमा र साक्षीलाई ईश्वर वा प्रत्यगात्माका रूपमा चिनाइएको छ र जीव र साक्षीका बीच केही समानता र केही असमानता देखाई जीव पहिले पनि ब्रह्म थियो, बीचमा अज्ञानका कारण जीव भयो र अज्ञान वा आवरण हटेपछि जीव ब्रह्म नै हुन्छ भन्ने सार निकालिएको छ।

'मायावाद' मा मायालाई ब्रह्मकी पराशक्तिका रूपमा चिनाई यही

मायाको सहायताबाट परम कारण ब्रह्मले अखिल ब्रह्माण्डको सिर्जना गर्छ भन्ने सिद्धान्त अघि सार्दै सृष्टिकार्यमा प्रमुख हात हुने मायाबारे बुझ्नु पर्ने आवश्यकता देखाइएको छ। 'शून्यवाद' ईश्वर, आत्मा र वेदलाई नमान्ने र सबै शून्य भन्ने बुद्धमार्गीको एक दार्शनिक सिद्धान्तलाई चिनाउने निबन्ध हो जसमा ब्रह्म भने पनि, शून्य भने पनि परम तत्त्व एउटै हो र जाने वा पुग्ने गन्तव्य पनि एउटै भएकाले शून्यवादीले पनि सबैको परमाश्रय तत्त्वलाई स्वीकार गर्नै पर्ने आवश्यकता देखाइएको छ। 'आत्मा' मा आत्मा शब्दको व्यापक अर्थ देखाई आत्मा अर्थात् सबैको कारणस्वरूप ब्रह्मको ज्ञान भएपछि ब्रह्मबाट विवर्तित सम्पूर्ण चराचर ब्रह्माण्डका सबै पदार्थको ज्ञान हुने भएकाले मुमुक्षुले ब्रह्मस्वरूप आत्माको ज्ञान गर्नुपर्ने आवश्यकता देखाइएको छ। 'नृसिंह' मा नृसिंह भगवान्को निर्गुणरूपत्वेन श्रवण, मनन, निदिध्यासनपूर्वक साक्षात्कार गर्नाले जीवले कैवल्यमुक्ति प्राप्त गर्न सक्दछ भन्ने निष्कर्ष पाइन्छ। 'मनुष्ययोनि' मा मनुष्ययोनि अनन्त सम्भावनाको निधि भएकाले यसको सदुपयोग गर्न सक्दा यस योनिबाट सबै पुरुषार्थहरू सम्पादन हुन सक्ने चर्चा गरिएको छ र दुर्लभ्य मनुष्ययोनि प्राप्त भएको यस अमूल्य क्षणमा ब्रह्मप्राप्ति गर्नु नै यस योनिको परम सार्थकता हो भन्ने निष्कर्ष निकालिएको छ।

'ज्ञान' ज्ञानको परिचय, मूल्य र महत्त्व प्रतिपादन गर्ने निबन्ध हो जसमा ज्ञानबाट मात्र मुक्ति सम्भव हुने भएकाले यस्तो ज्ञानका लागि यत्न र अभ्यास गर्नुपर्ने उद्बोधन पाइन्छ। 'पूर्णमदः' पूर्वपक्षी र सिद्धान्तीका तर्कवितर्कलाई उल्लेख गरी सर्वतो भावेन ब्रह्मको परिपूर्णता सिद्ध गर्ने निबन्ध हो। 'ॐ खं ब्रह्म' मा तीन ओटै पदको व्याकरणिक र तर्कपूर्ण अर्थ प्रस्तुत गरी वेद र ब्रह्मको गहन अर्थ पनि गरिएको छ। 'अन्तकालको प्रार्थना' मा शाङ्कर भाष्य अनुसार ज्ञान र कर्मका समुच्चयकारीको अन्तिम अवस्थाको प्रार्थना यही हो भनिएको छ।



# पराविद्या २०७१ का भूमिकाबाट

[ मन तथा वाणी आदि समेतबाट जान्न नसकिने ब्रह्मलाई मायिक शब्दराशिले कसरी व्यक्त गर्न सक्तछ ? जहाँ मन, वचन आदि केही पनि पुग्न सक्तैनन् । किनभने माया आफैँ पनि स्वप्रकाश ब्रह्मका सामु पर्न नसकेर टाढै भाग्दछे। अतः ब्रह्मज्ञान शब्दको सामर्थ्यभन्दा माथिको विषय भएको बुझ्नु अत्यन्त आवश्यक छ। किनभने त्यो ब्रह्म अशब्द, अस्पर्श, अरूप, अव्यय, रसहीन, नित्य र गन्धरहित छ। जुन अनादि, अनन्त, महत्तत्त्वभन्दा पर र निश्चल छ। त्यसै ब्रह्मलाई जानेर अर्थात् साक्षात्कार गरेर नै मुमुक्षु ब्रह्म नै बन्दछ। यस ग्रन्थमा सङ्गृहीत विभिन्न निबन्धहरूमा उल्लेख गरिएका वैदिक महावाक्यहरूको अर्थ यस प्रकार गर्दा महावाक्यहरूको अर्थ बुझ्न सहज हुने देखिन्छ। गुरुबाट मुमुक्षुलाई उपदेश गरिने यी सबै महावाक्यहरू हुन् । ब्रह्मसाक्षात्कार भएपछि मुक्त पुरुषले अनुभव गर्ने महावाक्य व्यक्तिगत अनुभवमा आधारित हुने भएकाले उल्लेख गर्न सम्भव हुँदैन। उपनिषद्हरूमा आएका चारै वेदशाखाका उपदेशात्मक चार महावाक्यहरू यस प्रकार छन् १. प्रज्ञानम् (त्वम्) ब्रह्म (असि) – ऋग्वेदः २. अभयम् (ब्रह्म) जनक (त्वम्) असि– शुक्लयजुर्वेदः ३. तत् (आत्मा) त्वम् (श्वेतकेतुः) असि – सामवेदः र ४. अयमात्मा (त्वम्) ब्रह्म (असि) – अथर्ववेदः । ]

# पराविद्या २०७१

प्रकाशकको भनाइ, लेखकको भूमिका र अनुक्रमणिका समेत जोड्दा ४६० भन्दा बढी पृष्ठको 'पराविद्या' अद्वैतवेदान्त सिद्धान्तानुसारी अनुसन्धानमूलक ४७ ओटा निबन्धहरूको सङ्ग्रह हो। लघुप्रस्थानत्रयी, बृहत्प्रस्थानत्रयी, आकरग्रन्थ, वेद, पुराण, रामायण, महाभारत, प्रकरणग्रन्थ, विवरणग्रन्थ, वार्तिक, विवरण आदि अद्वैत वेदान्तपरक ग्रन्थहरूको अध्ययन, चिन्तन, मनन र अनुशीलन गरी तिनको मूल सारका

रूपमा यस ग्रन्थको रचना भएको हो । संस्कृतको पनि परिष्कृत शैलीमा लेखिएको कठिन विषय वेदान्तलाई प्रामाणिक उद्धरणहरूद्वारा परिपुष्ट पारी नेपालीमा यथासम्भव सरल शैलीमा प्रस्तुत गरिएको 'पराविद्या'लाई वेदान्तको नौनी हो भन्नु अत्युक्ति हुँदैन । एउटै ग्रन्थबाट वेदान्तका धेरै ग्रन्थको सारांश बुझ्न सहयोग पुगेको छ ।

'पराविद्या' ग्रन्थका ४७ ओटा निबन्धहरूमध्ये कुनै पनि शीर्षक होइन तर सबै निबन्धको मूल विषय सङ्केत गर्ने छाता शीर्षक हो । यी सबै निबन्धहरू पराविद्यालाई नै आभासित गर्ने रचना हुन् । पराका अनेक अर्थ छन् तापनि वेदान्तको मर्म र मान्यता अनुसार जुन विद्याबाट अक्षर ब्रह्मको ज्ञान हुन्छ त्यो पराविद्या हो । बुद्धिको चरम अखण्डाकार वृत्तिमा आरूढ ब्रह्मचैतन्य नै पराविद्या हो । अपरा विद्याले संसार प्राप्त गराउँछ भने पराविद्याबाट कैवल्यमुक्ति सम्भव हुन्छ । अन्तःकरणमा टम्म जमेको अज्ञानरूपी आवरणलाई समूल विनाश गर्नका लागि मुमुक्षुले ब्रह्मज्ञान प्राप्त गर्नुपर्दछ र ब्रह्मज्ञान प्राप्तिका लागि ब्रह्मविद्यामा प्रवेश गर्नु आवश्यक हुन्छ । त्यसपछि मात्र मुक्तिको द्वार खुल्ने सम्भावना हुन्छ । यो भन्दा अर्को बाटो छँदै छैन भन्ने श्रुतिको उद्घोष छ । यही मार्ग र मान्यतातर्फ जिज्ञासु मुमुक्षुलाई अभिमुख गराउन 'पराविद्या' को प्रणयन भएको देखिन्छ ।

वेदान्त बुझ्न र लेख्न गजल, मुक्तक वा कविता लेखेबुझेजस्तो सजिलो कुनै हालतमा हुँदैन । वैदिक संहितादेखि उपनिषद् ब्रह्मसूत्र तिनका भाष्य, भाष्याश्रित शास्त्रीय ग्रन्थका साथै रामायण, महाभारत, स्मृति र पुराणसम्मका कथा व्याख्याको अनुशीलन आवश्यक हुन्छ । त्यस्ता जटिल ग्रन्थको अनुशीलनद्वारा मूल मर्म र मान्यतालाई अक्षरशः अनुसरण समेत गरी नेपाली भाषामा सर्वजनसुबोध बनाई विषय प्रतिपादन गर्नु सानो चुनौती होइन । आफुलाई विद्वद्वरेण्य ठान्ने स्वयं घोषित वेदान्तकेशरीहरूले समेत यस विषयमा कलम चलाउने आँट नगर्नुको लुप्त कारण यही हो । लेखकले 'पराविद्या' जस्तो प्रौढ र प्रामाणिक ग्रन्थ

लेखेर यस परम्परामा क्रमभङ्ग त गर्नु भएकै छ, बजारिया विज्ञापित वेदान्तीहरूको उपाधिसमेत धरापमा पारिदिनुभएको छ।

प्रस्तुत ग्रन्थ वेदान्तका प्राचीन र अर्वाचीन लब्धप्रतिष्ठ आचार्यहरूका प्रकरणग्रन्थ र विवरणग्रन्थहरूको समेत सहयोग लिएर तयार पारिएको छ। कतैकतै त्यस्ता विद्वान् र उनीहरूका ग्रन्थका विचार, सिद्धान्त र शब्दावली पनि जस्ताको तस्तै लिइएका छन् । यसो गर्नुको कारण वेदान्तमा अत्यधिक पारिभाषिक शब्दहरूको प्रयोग हुनु हो । गहन आध्यात्मिक अर्थको द्योतन गर्ने कतिपय शब्द वा पदहरूको पर्याय दिन र राख्न मिल्दैन । पर्याय राखेर दार्शनिक शब्दको अर्थ नै द्योतन हुनसक्तैन । उदाहरणका लागि वेदान्तमा अत्यधिक प्रयोग हुने 'जीव' शब्दको पर्याय अन्यत्र 'प्राणी' पनि हुन सक्छ तर वेदान्तमा 'जीव' नै भन्नुपर्छ । 'प्राणी' ले 'जीव'ले बुझाउने वेदान्ती अर्थ बुझाउँदैन । यो भाषाको प्रयोजनपरक भेदको शक्ति र मौलिकता दुवै हो। यही कारण लेखकले पूर्वाचार्यहरूका शब्दावली वा पदावली अक्षरशः लिएर यस सङ्ग्रहका केही निबन्धहरूको रचना गर्नुभएको हो भन्ने तथ्य वेदान्तको सामान्य जिज्ञासुले पनि बुझ्न सक्छ । यस ग्रन्थको लोभै लाग्दो अर्को विशेषता भनेको ग्रन्थान्तमा दिइएको अन्य ग्रन्थहरूबाट उद्धृत वाक्यहरूको अनुक्रमणिका हो। उद्धृत गरिएको पृष्ठ, उद्धृत वाक्य, ग्रन्थ, ग्रन्थ प्रकाशक संस्था, ठेगाना र प्रकाशनवर्ष समेत उल्लेख गरेर लेखकले कठिन परिश्रम गरी पाठक एवम् अनुसन्धातालाई सजिलो बनाइदिनु भएको छ । यसले पनि लेखकको वेदान्तसम्बन्धी बहुज्ञता, विद्वत्ता र अध्यवसाय प्रमाणित गरेको छ।

'पराविद्या' को पहिलो शीर्षक 'अद्वैतवादका प्रस्थानहरू' मा अद्वैत वेदान्तको परम्परामा सैद्धान्तिक दृष्टिले विवरणप्रस्थान, भामतीप्रस्थान र आभासप्रस्थान गरी तीन थरी प्रस्थान हुने प्रसङ्ग उल्लेख गर्दै यिनैलाई केही विद्वान्हरूद्वारा श्रीपद्मपादाचार्यको पञ्चपादिका निबन्ध, आचार्य वाचस्पति मिश्रको भामती निबन्ध र प्रकाशात्मयतिको वार्तिक निबन्धलाई

आधार मानी तुलनात्मक निष्कर्ष निकालिएको छ। 'अधिष्ठान साक्षात्कार' ले जुन परम तत्त्व मन, वचन, इन्द्रिय आदिबाट टाढा भएर पनि यिनकै साथमा छ र सबै चर, अचर तत्त्वभित्र अनुस्यूत भएर भित्र र बाहिर समेत ओतप्रोत भएर टन्न जमेर बसेको छ अनि जुन सत्ताको अस्तित्वमा सारा अस्तित्ववान् भएर सम्पूर्ण चराचर देखा परेका छन् त्यो नै परम अधिष्ठान सत्ता हो भनेर चिनाएको छ । यसको साक्षात्कार नै ब्रह्मज्ञान हो भन्ने सिद्धान्तलाई विभिन्न ग्रन्थहरूका प्रमाणका आधारमा स्थिरीकृत गरिएको छ । 'अपसिद्धान्त' मा 'खण्डनखण्डखाद्यम्' को द्वितीय परिच्छेदलाई आधार मानी पूर्वपक्षी र सिद्धान्तीको मतमतान्तरलाई प्रमाणपूर्वक प्रस्तुत गरिएको छ। 'अविद्यास्तमयो मोक्षः' शीर्षकको अविद्याको निवृत्ति मोक्ष हो भन्ने निष्कर्ष प्रस्तुत गर्ने निबन्धमा छान्दोग्योपनिषद्को उद्धरणद्वारा मुमुक्षु पुरुषलाई मोक्ष प्राप्त गर्न त्यतिमात्रै विलम्ब हुन्छ जबसम्म उसको शरीरपात हुँदैन भनिएको छ । 'अविद्या निवर्तन' स्वप्रकाश चैतन्यलाई अविद्याको निवर्तक मान्ने हो कि ब्रह्माकार अपरोक्ष वृत्तिलाई मान्ने भन्ने शास्त्रीय प्रश्नको तार्किक समाधान गर्ने रचना हो । 'अविद्याको नाश' मा अविद्या निवृत्ति भनेको कुनै भुलक्कड व्यक्तिले कण्ठमा लगाएको हारलाई बिर्सिएर हराएको ठानी खोजिहिँड्दा कुनै आप्त पुरुषले हार त तिम्रै कण्ठमा झुन्डिएको छ, हराएको छैन भनेर सचेत गराएपछि प्राप्त भएजस्तै अज्ञान निवृत्तिपछिको मोक्ष हो भनेर सरलतापूर्वक मोक्षको स्वरूपज्ञान गराएको छ । 'अविद्याको निवृत्ति नै मोक्ष' ले अविद्याको स्वरूप र भेद तथा मोक्षको लक्षण प्रतिपादन गरी सबैजसो दर्शनहरूले बन्धनको अभाव वा अविद्याको अभाव वा नाशलाई मोक्ष भनेको सार उल्लेख गरेको छ र यसलाई निःसन्देह सिद्धान्तका रूपमा स्थापित पनि गरेको छ। 'अविद्यालेश' मा सूक्ष्म अवस्थाका रूपमा रहेको अविद्यालेश, त्यसको निवृत्ति र त्यसपछि अवशिष्ट ब्रह्मरूपको चर्चा गरिएको छ।

'अविज्ञात सखा' श्रीमद्भागवतको चतुर्थ स्कन्धको पुरञ्ज-नोपाख्यानमा आधारित प्रसङ्गलाई आधार बनाई लेखिएको लेख

हो जसमा ईश्वर, साक्षी र प्रत्यगात्मालाई अविज्ञात सखा भनिएको छ र यसलाई नजान्ने पुरञ्जनरूपी जीवात्मा अनन्तकालसम्म चौरासी लाख योनिमा घुमेर दुःख पाइरहन्छ भन्ने निचोड निकालिएको छ। 'अर्को साक्षी' मा साक्षी, ईश्वर र परमेश्वर एउटै हुन् भनिएको छ र साक्षी केही नभएर पनि सबैको सबै थोक हो भन्ने अद्वैत सिद्धान्तको निचोड प्रतिपादन गरिएको छ। 'अहङ्कार' सबै सञ्चित कर्महरू नाश भएपछि अहंको ग्रन्थि वा अहङ्कार स्वतः नाश हुन्छ र मोक्ष प्राप्त हुन्छ भन्ने उपदेशप्रद निबन्ध हो। 'अज्ञानीका भूतहरू' मा आत्मज्ञानीका भूतहरू स्वरूपबाट विलय भए पनि अज्ञानीका भूतहरू भने स्वरूपतः विलय नभएर तिनका वृत्तिहरूमात्रै विलय हुन्छन् भनेर श्रुतिले प्रतिपादन गरेको मतको सारसङ्क्षेप प्रस्तुत गरिएको छ। 'आकार' मा साहित्यिक क्षेत्रको भन्दा वेदान्तका क्षेत्रमा आकारको अर्थ भिन्न हुने प्रसङ्ग अघि सार्दै अविद्यावृत्तिमा बस्ने एउटा धर्मविशेष आकार हो जसले ज्ञानहरूका बीचमा परस्पर भेद सिद्ध गर्दछ भन्ने अर्थ गरी अन्तःकरण शुद्ध पारी ज्ञान प्राप्त गर्न र त्यसबाट मुक्त हुन जोड दिइएको छ।

'आत्माको गौणमिथ्यात्व' मा ब्रह्मसूत्र र विभिन्न उपनिषद् आदि ग्रन्थहरूका आधारमा अन्तःकरणवृत्तिरूप विद्या र प्रमाणादिभेद प्रतीत्यात्मक अविद्यालाई कार्यकारणभावका रूपमा जसले जान्दछ त्यसले अखण्डाकार वृत्तिरूप विद्याद्वारा अविद्यारूप मृत्युको उच्छेद गरी अमृत ब्रह्मलाई प्राप्त गर्दछ भन्ने सार खिचिएको पाइन्छ। 'एषणाको परिणति' मा एषणाको अर्थ, यसको शक्ति र यसबाट निवृत्त हुनुपर्ने तर्कपूर्ण अभिव्यक्ति पाइन्छ। पूर्वीय वाङ्मयका उपनिषद् र भागवतका कथांश तथा पाश्चात्त्य इतिहासका सम्राट् सिकन्दर र सन्न्यासी डायजेनिकको प्रसङ्गलाई प्रस्तुत गर्दै यस निबन्धमा निरतिशय मुक्ति र आनन्द प्राप्त गर्न चाहने मुमुक्षुले सबै प्रकारका एषणाहरू र सांसारिक कामनाबाट माथि उठ्नुपर्ने आवश्यकता पनि देखाइएको छ।

'कैवल्यमुक्ति' मा परमात्मा पूर्ण विशुद्ध कैवल्यस्वरूप हो र

जीवात्मा पनि उसकै पूर्ण प्रतिबिम्ब भएकाले ज्ञानबाट अज्ञानको नाश भएपछि केवल नै हो भन्दै जीवका उपाधिहरू ज्ञानद्वारा समाप्त भएपछि ऊ पनि ब्रह्म नै हुन्छ, त्यो नै कैवल्यमुक्ति हो भन्ने निरूपण गरिएको छ। अर्को शब्दमा भन्नुपर्दा अविद्या संसारकी जननी हो भने त्यसको नाश नै कैवल्यमुक्ति हो भनेर बुझाइएको छ।

'गृहस्थाश्रम' मा प्रत्येक दृष्टिबाट गृहस्थाश्रमको सर्वोच्चता सिद्ध गरिएको छ र अरू तीन आश्रमहरूको सञ्चालनका लागि पनि गृहस्थाश्रमको अपरिहार्यता प्रमाणित गरिएको छ। 'जागरण' मा भय, त्रास वा तीव्र वैराग्य जुनसुकै हेतु भए पनि जीवलाई मोक्षसम्म पुऱ्याउने कारक तत्त्व जागरण हो भन्ने तर्क गरिएको छ र यसका लागि सर्वप्रथम जीवात्माले तयार भएर उठ्नुपर्छ र जागरुक भएर श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष गई गुरूपसत्तिपूर्वक ब्रह्मज्ञानको जिज्ञासा गर्नुपर्ने आवश्यकता देखाइएको छ। 'जीवन्मुक्ति' मा अद्वैतवादी र द्वैतवादीका मतलाई तुलना गर्दै निर्विवाद जीवन्मुक्ति सिद्ध गरिएको छ। 'जीवाणुत्व' मा के सारांश छ भने अद्वैत वेदान्तमा जीव विभु, नित्य र अनादि मानिने भएकाले जीवको अणुत्व धर्म ब्रह्मसँग भेदक हुन सक्तैन, अविद्यारूपी उपाधिको निवृत्ति भएपछि जीव ब्रह्म नै भइहाल्दछ। 'तर्काभास' मा तर्काभासको अर्थ, नैयायिकहरूले गणना गरेका तर्कका ६ थरी दोषका साथै तर्कका ५ थरी गुणको चर्चा गरी तर्क र अनुमानको जस्तै तर्काभास र अनुमानाभासमा पनि भिन्नता देखाइएको छ।

'तर्काप्रतिष्ठानात्' मा निश्चित उद्देश्य प्राप्तिका लागि सुतर्क गर्नु अनुचित नभए पनि आगमको प्रमाण विना केवल कुतर्कका बलमा ईश्वरको रूप पहिचान गर्ने र ब्रह्मज्ञान प्राप्त गर्ने धृष्टता गर्ने कुतर्की पतनमा पुग्दछ भन्ने मत प्रकट गिरिएको छ। 'दृष्टिसृष्टिवाद' शीर्षकको लामो तार्किक निबन्धमा बीसौं विभिन्न ग्रन्थहरूका प्रमाणहरू प्रस्तुत गरी दृष्टिका आधारमा बारम्बार सृष्टि हुने भएकाले 'दृष्टिसृष्टिवाद' अद्वैत वेदान्तले अङ्गीकार गरेको सिद्धान्त हो भन्ने सूत्रात्मक मान्यता स्थापित

गरिएको छ। 'परमगति' मा उत्तरायणको गति वा क्रममुक्तिलाई परमगति भनिएको छ र ब्रह्मावस्थामा पुगेको ब्रह्मज्ञानीले जीवित अवस्थामा परमगति प्राप्त गरिसकेको हुन्छ भन्ने निष्कर्ष प्रतिपादन गरिएको छ। ' पशुपक्षीको मुक्ति' पशु, पक्षी, वृक्ष, पहाड, पर्वत समेतमा चेतना पाइएको भए पनि पूर्वजन्महरूका कर्मका प्रतिबन्धका कारण चेतमा बाहिर प्रस्फुटन हुन नसकेर अचेतरूपमा घोर तमोगुणमा सुषुप्त रहेका तिनीहरूको प्रतिबन्धक कालान्तरमा हटेपछि मनुष्यरूपी उत्तम योनिमा आएर निष्काम कर्म, उपासना र ज्ञानको परिपाक भएपछि मोक्ष प्राप्त गर्न सक्ने हुन्छन् तर सोझै मुक्ति प्राप्त हुन नसक्ने तथ्य उपनिषद्हरूबाट प्रमाणित गरिएको निबन्ध हो। 'प्रतिकर्मव्यवस्था' मा पूर्वपक्षी र सिद्धान्तीका तर्कवितर्क प्रस्तुत गर्दै विषय मिथ्या भए पनि प्रतिकर्म व्यवस्था भने बन्दछ भन्ने दृष्टिकोण व्यक्त भएको छ। 'प्रतिपाद्य वस्तु' ब्रह्मसूत्रका चार ओटा सूत्रहरूको सङ्क्षेपमा चर्चा गरिएको निबन्ध हो जसमा प्रत्येक सूत्रका पादहरूको अद्वैत वेदान्तपरक दृष्टिबाट अर्थ गरिएको छ। 'प्रतिप्रसव' सामान्य व्यवहारमा प्रचलनमा नआएको शब्द हो। यसको अर्थ बाधको बाध गरेर पुनर्विधान गर्नु भन्ने हो। कुनै धार्मिक कृत्यका लागि विधान गरिएको विधानलाई बाध गरेर त्यस विधानको प्रचलन बन्द गरिसकेपछि कालान्तरमा त्यसै विधानलाई फेरि प्रचलनमा ल्याउनु पर्दा पहिले जारी गरेको बाधको बाध गरेर पूर्वबाधित विधान कार्यान्वयनमा आउँदा प्रतिप्रसव हुन्छ। यो प्रक्रिया परमात्माको अखिल ब्रह्माण्डको सृष्टि र प्रलयदेखि लिएर प्राणीमात्रको दैनिक जीवनसम्म पनि प्रचलित छ भन्ने मान्यता यहाँ पाइन्छ।

'प्राकृतप्रलय' मा प्रकृतिबाट उत्पन्न भएर फेरि प्रकृतिमा नै लीन हुनु प्राकृतप्रलय हो भन्ने अर्थ गर्दै सम्पूर्ण भौतिक सृष्टि प्रकृतिमा लय हुने भएकाले यस प्रलयलाई प्राकृतप्रलय वा प्रकृतिलय भनिएको वैदिक मत स्थापित गरिएको छ। 'प्रातिपादिकार्थ' मा चार वेदमा वर्णित महावाक्यहरूको प्रसङ्ग उद्धृत गरी प्रातिपदिकार्थको व्याकरणसम्मत

चर्चाबाट चार ओटा वैदिक महावाक्यको वेदान्ती अर्थ प्रकाशन गरिएको छ। 'बिम्बप्रतिबिम्ब' मा ईश्वर बिम्बरूप हो भने जीव प्रतिबिम्बरूप हो र यसैलाई बिम्बप्रतिबिम्बवाद भनिन्छ भन्ने जानकारी दिई अद्वैतसिद्धिमा आएको बिम्बप्रतिबिम्बविचार अत्यन्त पठनीय भएकाले जिज्ञासुले त्यसैको अनुशीलन गर्नुपर्ने सम्मति पनि दिइएको छ। 'ब्रह्मोपासकको ऐश्वर्य' मा सगुण ब्रह्मका उपासकको ऐश्वर्य परमेश्वरको सरह हुँदैन, केवल भोगको मात्र समानता रहन्छ भन्ने तथ्य सिद्ध गरिएको छ। तर निर्गुण ब्रह्मज्ञानीहरूको अनावृत्ति स्वतः सिद्ध हो र त्यो नित्यसिद्ध पनि हो भन्ने निष्कर्ष यहाँ पाइन्छ। 'ब्रह्मसाक्षात्कार' मा ब्रह्मसाक्षात्कारको अधिकारी, उसको योग्यता, साधना, आश्रम, जाति, वर्ण, लिङ्ग आदिका बारेमा उठेका जिज्ञासाको परिशमन गर्दै जिज्ञासाका रूपमा आउने बहिरङ्ग र अन्तरङ्ग साधनहरूको परिपाक भएपछि जुनसुकै समयमा पनि ब्रह्मसाक्षात्कार हुन सक्ने निर्क्यौल निकालिएको छ। 'भागवतको मुक्ति' मा भागवतमा पनि प्रकारान्तरले अद्वैत वेदान्तसम्मत सद्योमुक्ति र क्रममुक्तिकै कथन गरिएको तथ्य कल्याणकामी द्वैतवादी वैष्णवहरूले बुझ्नुपर्ने सुझाव दिइएको छ। 'मन' मा मनको स्वरूप, शक्ति र महत्त्व देखाई ज्ञानप्राप्ति र ब्रह्मको प्रतिबिम्बनका लागि मनको शुद्धिको अपरिहार्यता देखाइएको छ। 'मुक्तिमा तारतम्य छैन' ले मुक्ति ब्रह्मरूप भएकाले यसमा सानो र ठुलो वा तरतमभाव हुँदैन भन्ने श्रुतिवचनाश्रित निष्कर्ष प्रतिपादन गरिएको छ। 'मृत्यु' मा मृत्युको परिचय दिई जसले ब्रह्ममा नानात्व अर्थात् मिथ्या संसार देख्तछ त्यस्तो अज्ञानी मृत्युबाट मृत्युमै पुग्दछ, उसले ब्रह्म प्राप्त गर्न सक्तैन तर अमृत स्वरूप ब्रह्मचिन्तनबाट मृत्यु समाप्त हुन्छ भनिएको छ। 'वर्णक' मा जहाँ एक अधिकरणमा विभिन्न सिद्धान्तहरूलाई उद्गम गरिन्छ त्यहाँ विषय प्रयोजनादि भिन्नाभिन्नै रूपमा देखाएर धेरै थरी तरिकाले ब्रह्मसूत्रका अधिकरणहरूमा आएका सूत्रको व्याख्या गरिन्छ भने त्यसलाई वर्णक भनिन्छ भनेर चिनारी दिइएको छ र यो गहन विषय भएकाले विस्तृत ज्ञानका लागि पञ्चपादिका र विवरण

समेत पढ्न सुझ्याइएको छ । 'विक्षेपदोषको निवृत्ति' मा मानिसलाई यत्रतत्र घुमाइरहने दोषलाई विक्षेपदोषका रूपमा चित्रित गर्दै भक्तिको शक्ति, स्वरूप र भेदसमेत देखाई भक्तिमा अवगाहन गरी चित्तलाई विक्षेपदोषरहित बनाउन शालीन आह्वान गरिएको छ।

'शब्दप्रत्यक्ष' मा पूर्वपक्षी र सिद्धान्तीका तर्क र आशङ्का तथा समाधान र मण्डन प्रस्तुत गरी शब्दमा पनि अपरोक्ष ज्ञानको जनकता हुने मान्यताको स्थापना भएको छ। 'समाधि' मा योगदर्शनमा धेरै प्रकारका योग अर्थात् समाधिहरूको उल्लेख भएको पाइए तापनि अन्त्यमा ती सबै असम्प्रज्ञात समाधिमा गएर पर्यवसित हुने भएकाले समाधिको वास्तविक अर्थ जीव र ब्रह्मको ऐक्य वा मोक्ष हो भन्ने सिद्धान्त स्थिर गरिएको छ। 'सिद्धवस्तु' मा २२ प्रकारका प्रमाणहरू दिएर सिद्धवस्तु भनेको ब्रह्म नै हो भनेर सिद्ध गरिएको छ र ब्रह्म बाहेक सम्पूर्ण प्रपञ्च मिथ्या हो भन्ने अकाट्य मत प्रस्तुत गरिएको छ।

'सिद्धि चार एक विचार' मा ब्रह्मसिद्धि, नैष्कर्म्यसिद्धि, इष्टसिद्धि र अद्वैतसिद्धि गरी चार सिद्धिको प्रसङ्ग उठान गर्दै यिनको सामान्य परिचय दिई स्वप्रकाशात्मरूप परमानन्दको प्राप्ति नै मुख्य मुक्ति हो। मुक्तिमा तारतम्यभाव हुँदैन। जीव र ब्रह्ममा भेद छैन भन्ने निचोड निकालिएको छ। 'स्तवन' मा भागवतका श्लोक र उपनिषद्हरूका वचनहरूका बीचको सम्बन्ध देखाई नेपालीमा अर्थ समेत दिई विषयवस्तुलाई तुलनीय मात्र नभई अनुसन्धेय पनि बनाइएको छ। भगवान् श्रीशिवले भगवान् श्रीविष्णुको स्तुति गरेको प्रसङ्ग यहाँ समावेश गरिएको छ। 'स्वस्वरूपानुभूति' मा स्वस्वरूपको अनुभूति नै आत्मसाक्षात्कार हो भन्ने सार प्रस्तुत गरिएको छ र आत्मसाक्षात्कार गर्न आफैँले आफैँलाई जान्नुपर्दछ भनिएको छ। जसको अविद्याजनित मोह अर्थात् अज्ञान नष्ट भएको छ त्यसको स्वसंज्ञक जीवात्मा पापादि दोषले निर्मुक्त भएर मुक्त नै छ, ऊ स्वस्वरूपमा नै सधैँ स्थित छ र ऊ नै सर्वकारण ब्रह्म हो भन्ने विचार यहाँ पाइन्छ।

‘ज्ञान र कर्मको समुच्चय’ को सारांश हो – ज्ञान र कर्मको सम समुच्चय हुन सक्तैन। श्रुति र स्मृतिहरूमा आएका वचनहरू समुच्चयका लागि नभएर केवल कर्मका लागि नै आएका हुन्। कर्म ज्ञानको साधन मात्र हो। निष्काम कर्मले अन्तःकरण शुद्ध हुन्छ र ज्ञान प्राप्त हुन्छ। अतः यसलाई ज्ञान र कर्मको समुच्चय भन्न मिल्दैन भन्ने मान्यता यहाँ आएको छ। ‘ज्ञान र प्रारब्ध कर्म’ मा उपनिषद्, गीता, ब्रह्मसूत्र लगायतका ग्रन्थहरूको शाङ्करभाष्यलाई आधार मानी आचार्य शङ्करले प्रारब्धकर्म ज्ञानद्वारा नाश नभएर भोगबाट नै नाश हुन्छ भन्ने तथ्य स्पष्ट गरेको निष्कर्ष निकालिएको छ। श्रुतिमा ‘कर्माणि’ बहुवचनको प्रयोग भएकाले सञ्चित कर्म, प्रारब्ध कर्म र आगामी कर्म समेत नाश हुन्छन् भन्ने बुझिए पनि ब्रह्मज्ञानद्वारा प्रारब्ध कर्म पनि नाश हुन्छ भनेर बुझ्नु हुँदैन। अन्यथा श्रुति र अनुभवमा समेत विरोध पर्न जाने तर्क यस निबन्धमा गरिएको छ।



# औपनिषद पुरुष २०७२ का भूमिकाबाट

[ वेद र वेदको शिरोभाग उपनिषद्को ज्ञान नभईकन मुमुक्षुले औपनिषद पुरुष ब्रह्मको ज्ञान गर्न सक्तैन भनेर श्रुतिले भनेको छ। उपनिषद्बाट मात्रै जान्न सकिने आत्मतत्त्व अर्थात् पुरुष भएकाले ब्रह्मलाई औपनिषद पुरुष भनिएको हो । यसै परमसत्यका प्रतीकका रूपमा यस ग्रन्थको नाम 'औपनिषद पुरुष' राखिएको हो।

यस सन्दर्भमा यसको सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक हुने ठान्दछु। एकपटक राजा जनकका दरबारमा ब्रह्मज्ञानी गुरु याज्ञवल्क्यका समुपस्थितिमा विद्वान्हरूका बीचमा जल्पकथाका आधारमा ब्रह्मचर्चा भएको पावन प्रसङ्ग बृहदारण्यकोपनिषद्को याज्ञवल्कीय काण्डमा आएको छ । त्यस सभाका सहभागीहरू मध्येका धेरैजसो विद्वान् र विदुषीहरूले विभिन्न प्रश्नहरू पूर्वपक्षीका रूपमा गुरु याज्ञवल्क्यलाई सोधेका थिए । याज्ञवल्क्यले प्रश्न अनुरूपको उत्तर एक एक गरेर दिनुभएको थियो।

सहभागी विद्वान्हरू मध्येका अन्तिम विद्वान् शाकल्यले औपनिषद प्रमाण विनाका आकाशदेखि पातालसम्मका धेरै प्रश्नहरू सोधेर याज्ञवल्क्यलाई सताउन खोजेपछि अन्त्यमा याज्ञवल्क्यले चेतावनी सहित औपनिषद पुरुषको बारेमा के जान्दछौ ? भन, अन्यथा तिम्रो मूर्धा पतन हुनेछ भन्नुभयो। तर शाकल्यले औपनिषद पुरुषका बारेमा केही पनि भन्न नसकेपछि तुरुन्तै उसको मूर्धा पतन भएको थियो र उसका अरू अवशेष समेत समाप्त भएका थिए।

उपनिषद्को उक्त आख्यायिकामा आएको गुरु याज्ञवल्क्य र शाकल्यका बीचमा भएको शास्त्रार्थमा याज्ञवल्क्यले शाकल्यलाई सोधेको औपनिषद पुरुष सम्बन्धी प्रश्नको उत्तर दिन नसकेका कारण उसको शिर विशीर्ण हुनु जस्तो ज्वलन्त घटनाबाट अद्वैत वेदान्तका अध्येता, व्याख्याता, प्रवचनकर्ता, उपदेष्टा, जिज्ञासु र मुमुक्षुहरूले

यस सम्बन्धमा अत्यन्त विचार पुऱ्याउनु पर्ने देखिन्छ । त्यसै कारण उक्त उपनिषद्मा आएको यो आख्यायिका अद्वैत वेदान्तीहरूका लागि अत्यन्त पठनीय, चिन्तनीय र मननीय समेत छ। किनभने यो आख्यायिका उपनिषद् नै नपढीकन ब्रह्मचर्चा, शास्त्रार्थ र प्रश्नोत्तरमा सहभागी हुने, वेदान्तको प्रवचन गर्दै हिँड्ने, आफ्नो वेदशाखा र त्यसमा पठित मुक्तिको साक्षात्कारण भएको वैदिक महावाक्य र त्यसको अर्थ समेतको कत्ति ज्ञान नभईकन ब्रह्मसाक्षात्कार गराइदिन्छु भन्दै भ्रम छर्दै हिँड्नेहरूका लागि उपनिषद्ले दिएको शिक्षा एवं चेतावनी हो । ]

# औपनिषद पुरुष २०७२

'औपनिषद पुरुष' लेखकको प्रौढतम, गहनतम र विशालतम ग्रन्थहरू मध्ये एक हो । ४९३ पृष्ठमा व्याप्त यो ग्रन्थ वेदान्तपरक ५३ ओटा निबन्धहरूको सङ्ग्रह हो । निबन्धको परिभाषा दिँदै विद्वान्हरूले भनेका छन् – 'प्रत्यक्षश्लेषमयप्रबन्धविन्यासवैदग्ध्यनिधिर्निबन्धः। प्रत्यक्ष र स्पष्ट रूपमा उपक्रम र उपसंहार सहित शास्त्रीयरूपमा लेखिएको गद्यात्मक प्रबन्ध नै निबन्ध हो। अझै यसलाई शब्दान्तरमा भन्नुपर्दा कुनै विषयको सविस्तार गर्न लेखिने विद्वत्तापूर्ण वेदानुकूलको प्रबन्धरचना नै निबन्ध हो। जसमा त्यस विषयसँग सम्बद्ध अनेक मत विचार र मन्तव्य समेतको तुलनात्मक पाण्डित्यपूर्ण विवेचन तथा उपपत्तिपूर्वक विश्लेषण पनि गरिएको होस्। 'औपनिषद पुरुष'मा निबद्ध निबन्धहरू तरङ्गप्रधान नभई तर्कप्रधान छन् र सतही नभई गूढार्थप्रधान र गम्भीर पनि छन्, जसबाट समग्र निबन्ध विधाकै प्रतिष्ठा र प्रौढताको वृद्धि भएको छ। यो ग्रन्थ अद्वैत वेदान्तका शास्त्रसम्मत र सनातन परम्परामा अनुमोदिन मत र मान्यताहरूको परिपक्व नेपाली संस्करण बनेको देखिन्छ।

अद्वैत वेदान्तमा अर्थात् अद्वैत सिद्धान्तलाई उपनिषदमा गूढरूपमा रहेको अत्यन्त दुरुह वाक्य र तिनको अर्थलाई शास्त्रका

उपक्रम उपसंहार, अभ्यास, अपूर्व, फल, अर्थवाद र उपपत्ति समेतका षड्विधतात्पयग्राहक लिङ्गका आधारमा अद्वैत वेदान्तमा गुह्य, गोप्य र अत्यन्त लुकेर रहेका पूर्वापर प्रसङ्गलाई ग्रहण गरेर ठुला ठुला अद्वैत वेदान्तका आचार्यहरूले गहन तथा आधिकारिक विस्तृत निबन्ध ग्रन्थहरूको प्रणयन गर्नुभएको छ। त्यसै उदात्त परम्परालाई अक्षुण्ण राख्तै यी निबन्धहरू लेखिएका हुन्।

लेखक नेपाली साहित्यमा स्रष्टा र द्रष्टा व्यक्तित्वका रूपमा पनि स्थापित हुनुहुन्छ। त्यो व्यक्तित्व यस ग्रन्थमा गौण भएको छ र उहाँ विचारक, दार्शनिक र बौद्धिक व्याख्याताका रूपमा बढी मुखरित हुनुभएको छ। अद्वैत वेदान्तका प्राचीन, प्रामाणिक र स्थापित ग्रन्थहरूलाई आधार मानी यस ग्रन्थको प्रणयन भएको देखिन्छ। शास्त्रीय मतको उपस्थापन र संस्थापन तथा मतान्तरणको समाधान गर्ने ठाउँमा उद्धरण र उद्धरणस्थलसमेत निर्देश गरी तयार पारिएको यो ग्रन्थ वेदान्तका साधक, मुमुक्षु, गुरु, शिष्य, प्रवचनकर्ता, ज्ञानयज्ञका अनुष्ठाता सबैका लागि र सधैँका लागि उपयोगी हुने देखिन्छ। परिश्रमपूर्वक तयार पारिएको अनुक्रमणिकाले सामान्य जिज्ञासुदेखि विशिष्ट अनुसन्धातासम्मलाई सहयोग पुऱ्याउने नै छ। वेदान्तका ग्रन्थराशिको अध्ययन र अनुशीलन तथा निरन्तरको लेखनाभ्यास विना यस्तो कार्य असम्भव प्रायः हुन्छ।

यस ग्रन्थको 'औपनिषद पुरुष' शीर्षक पनि उपनिषद्प्रधान नै छ। ग्रन्थमा आएको बाह्रौं शीर्षक 'औपनिषद पुरुष' बाट ग्रन्थको शीर्षकीकरण भएको छ। बृहदारण्यकोपनिषद् (३।९।२६) मा उल्लेख भए अनुसार विदेहराज जनकका राजप्रासादमा आयोजित ब्रह्मचर्चामा गुरु याज्ञवल्क्यलाई असान्दर्भिक प्रश्न सोध्ने शाकल्यलाई याज्ञवल्क्यले औपनिषद पुरुषका बारेमा के जान्दछौ भन अन्यथा तिम्रो शिर पतन हुनेछ भन्नुभएको थियो।

यहाँ प्रयुक्त 'औपनिषद पुरुष' को अर्थ उपनिषद्बाट मात्र जान्न बुझ्न सकिने ब्रह्मतत्त्व हो। यसले के पनि बुझाइरहेको छ भने

उपनिषद् नपढी वेदान्त बुझ्न खोज्नु असम्भव छ । यही पदावली र प्रसङ्गलाई आधार मानी सङ्ग्रहको नामाङ्कन भएका कारण पनि यस ग्रन्थका सबै शीर्षक, सन्दर्भ र विश्लेषण ब्रह्मज्ञानबोधक छन् भन्ने स्पष्टतः बोध हुन्छ ।

विभिन्न विद्वान्का वेदान्त विषयमा लेखिएका पुस्तकहरू बजारमा पाइन्छन् । ती ग्रन्थहरूमा प्रायः आफु अनुकूलका व्याख्या पाइन्छन् । र उपनिषद् नपढीकन लेखिएका पुस्तकहरू पाइन्छन् । अद्वैतसम्प्रदायका श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट नपढी आफुखुसी पढेर ज्ञानी गुरु बनेका असम्प्रदायविद् लेखकहरूले नै यस्ता व्यर्थका किताबहरू लेख्ने र उनीहरू नै गुरु भएर हिँडेको देखिन्छ । किन्तु यस ग्रन्थका प्रणेताले भने नियमपूर्वक श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट वेदान्त आद्योपान्त श्रवण, मनन र निदिध्यासन गरेर अद्वैत सम्प्रदाय अनुसार सप्रमाण लेख्नुभएको छ । 'औपनिषद पुरुष' मा लेखकको निजी धारणा र व्याख्याभन्दा पनि वेदान्तका शास्त्रानुमोदित मर्यादालाई केन्द्रमा राखी विषयवस्तुको विश्लेषण भएको छ । शाङ्करवेदान्तको मूल सरणिलाई अनुसरण गरी लेखिएको यो ग्रन्थ अरू ग्रन्थभन्दा भिन्न, विशिष्ट, प्रौढ र प्रामाणिक हुनुको कारण यही हो । यसका शीर्षकहरू वर्णानुक्रम अनुसार राखिएका छन् । यसबाट पनि लेखक विषयप्रतिपादन, प्रस्तुति र पूर्णतामा कति सचेत र दत्तावधान हुनुहुन्छ भन्ने तथ्य उद्घाटित हुन्छ । यस्तो प्रस्तुतीकरणगत विशेषता अन्य ग्रन्थमा दुर्लभै हुन्छ ।

हामीहरू व्यक्ति, परिवार र समुदायदेखि राष्ट्रसम्म समस्या व्याप्त भएको समयमा बाँचिरहेका छौं । प्रत्येक वर्ग समस्याले ग्रस्त छ । अतः वेदान्तीहरूबीच पनि समस्या छन् । त्यस्ता समस्यामध्ये एउटा समस्या हो – आफ्नो वेदशाखाको महावाक्य छुट्याउन नसक्नु । वेदान्तीहरूका लागि यो निकै पेचिलो विषय बनेको देखिन्छ । जसबाट उनीहरूमध्ये कतिपय दिग्भ्रान्त भएका देखिन्छन् । यस विषयमा लेखकले आफ्ना अन्य दार्शनिक ग्रन्थ, फुटकर लेख र ब्रह्मसभाहरूमा पनि यस कटुसत्यलाई स्पष्ट पार्नुभएको पाइन्छ । यस ग्रन्थमा पनि लेखकले वेदान्तीको उपाधि

लिने र जलप लगाउने व्यक्तिहरूलाई तथ्यबोध गराई सन्मार्ग देखाउनु भएको छ र उपकार गर्नुभएको छ ।

त्यागी बाबाको लामो समीक्षा तथा प्रकाशक र लेखकको भनाइबाट पनि यस ग्रन्थको औचित्य, महत्त्व, सान्दर्भिकता, आवश्यकता र पठनीयता अवगत गर्न सकिन्छ । यी सामग्रीहरूले लेखकको व्यक्तित्व झल्काउन सहायता गरेको पाइन्छ ।

वेदान्तको नाम नै उपनिषद् प्रमाण हो । उपनिषद्को गुरुमुखी भएर अध्ययन नगरेको र आफैँ अध्ययन गरेको कुनै पनि जिज्ञासु मुमुक्षु ब्रह्मज्ञानको मार्गमा प्रवृत्त हुनसक्तैन र कुनै ब्रह्मसाक्षात्कार गर्न पनि सक्तैन । उपनिषद्को ज्ञान नभईकन कुनै पनि मनुष्य गुरु, आचार्य, उपदेष्टा, विद्वान्, सन्न्यासी र महात्मा पनि हुनसक्तैन । कुनै मनुष्यले सम्पूर्ण लौकिक, पारलौकिक, वेद, पुराण समेतका शास्त्रहरू आफैँ अध्ययन गरेर जानेको त छ तर आधिकारिक गुरुबाट अद्वैत वेदान्तको गौरवमय परम्परा अर्थात् सम्प्रदाय अनुसार अध्ययन गरेको छैन भने त्यस्तालाई अज्ञानी मूर्खजस्तै ठानेर जिज्ञासु मुमुक्षुले त्यागिदिनुपर्दछ भनेर श्रीशङ्कराचार्यले भन्नुभएको छ ।

उपर्युक्त अनुसार त्यस्तो अज्ञ मान्छे वेदान्तको उपदेष्टा, गुरु समेत बन्न सक्तैन अर्थात् योग्य हुँदैन र वेदान्तको चर्चा, शास्त्रार्थ आदि समेतमा पनि सहभागी हुन योग्य ठहर्दैन । यसै कुरालाई स्पष्ट पार्नको लागि उहाँका अद्वैतवेदान्तपरक ग्रन्थहरूको मौलिक ग्रन्थहरूका शृङ्खलामा आएको पाँचौं उत्कृष्ट ग्रन्थ ‘औपनिषद पुरुष’ को गहिरो अध्ययन गर्नु आवश्यक छ । यस ग्रन्थभित्र सङ्गृहीत सबै निबन्धहरू श्रुतिप्रमाणमा आधारित, अनुसन्धानपूर्ण, विवेचनायुक्त र पठनीय पनि छन् । यसै तथ्यको पुष्टिका लागि लिखित यस सङ्ग्रहका निबन्धको सङ्क्षेप यस प्रकार छ –

**१. अकर्मकम्**

उपर्युक्त शीर्षक अकर्मी अर्थात् कर्मद्वारा सञ्चित भएका कर्महरू

ब्रह्मज्ञानद्वारा भस्म गरेर अन्तःकरणको वृत्ति समेत समाप्त भएका ज्ञानी महात्माहरू मात्रै ब्रह्मलोक पुग्न सक्ने देखिन्छ । त्यहाँ पुगेका ज्ञानी महात्माहरू धेरै कालसम्म त्यहाँ बसेर महाप्रलयका समयमा ब्रह्मा मुक्त हुँदाखेरि ब्रह्मासँगै मुक्त हुन्छन् । तिनीहरू जन्ममरणको यस दुश्चक्रमा फेरि फर्कँदैनन् भनेर शास्त्र भन्दछ ।

**२. अखण्डबोधकं वाक्यं महावाक्यम्**

वैदिक महावाक्यको श्रवणबाट जीव र ब्रह्मको एकत्व हुने रहेछ भन्ने कुरा बुझिने र तदनुरूप मुमुक्षुले साधना गरेमा ऊ ब्रह्म नै हुनसक्ने कुरा सत्य हो । यसै कारणले नै 'अखण्डार्थबोधकं वाक्यं महावाक्यम्' भनेर शास्त्रहरूले भनेका हुन् । किन्तु वाक्य गुरुबाट सुनेर मात्रै अखण्डार्थको बोध हुनसक्तैन, साधनाको परिपाक भएपछि मुमुक्षुले आफैँले अनुभूति गर्न सक्नुपर्दछ । म अखण्ड भेदशून्य ब्रह्म हुँ भनेर साक्षात्कार गर्न सक्नुपर्दछ । मुमुक्षु केवल शब्दब्रह्ममा निष्णात छ तर ब्रह्मसाक्षात्कार गर्न सकेको छैन भने त्यो थारी गाईको सुसार गरेजस्तो व्यर्थ हुने कुरा शास्त्रहरूले भनेका छन् । अतः आफ्नो वेदशाखाको महावाक्य श्रोत्रिय ब्रह्मनिष्ठ गुरुका मुखबाट सुनेर मात्रै जीवात्मा र परमात्माको अर्थात् जीव र ब्रह्मको एकत्वबोध हुनसक्तैन । त्यसका लागि जीव र ब्रह्मको एकत्वको बोध नै हुनुपर्दछ ।

**३. अनूचानमानी**

यसमा अशास्त्रज्ञ, अव्यावहारिक, अविनीत र अनूचानमानी श्वेतकेतु पिताको उपदेशपछि विद्वान्, व्यावहारिक, विनीत र घमण्डरहित भएको हुनसक्ने देखिन्छ, तर उनी जीव र ब्रह्मको एकत्वको साक्षात्कार गरेर मुक्त भएको कुरा भने देखिँदैन ।

**४. अन्तर्यामी**

यस शीर्षकमा अन्तर्यामी प्रधान अचेतन भएकाले अन्तर्यामी हुन

सक्तैन भनिएको छ । पृथिव्यादि अभिमानी देवताहरू चेतन भए पनि तिनीहरूमा सर्वलोक नियन्तृत्व नभएकाले अन्तर्यामी हुन सक्तैनन् । सर्वऐश्वर्यसम्पन्न योगी अरू सम्पूर्ण शक्ति भए तापनि जगत्को सृष्टि आदि काम गर्ने अधिकार नभएकाले अन्तर्यामी हुनसक्तैनन् । आफ्नो पूर्वजन्मको सञ्चित कर्मजन्य प्रारब्ध कर्मद्वारा प्रदत्त कर्मफलको भोग गर्न आएको शक्तिहीन जीव पनि अन्तर्यामी हुन नसक्ने भएकाले सर्वशक्तिमान् तथा सबैको अभिन्न निमित्त उपादान कारण भएको मायाधीश परमात्मा नै अन्तर्यामी भएको श्रौतसिद्धान्त स्थापित हुन्छ ।

### ५. अन्धन्तमः प्रविशन्ति

स्वप्रकाश शुद्ध बह्मको सत्ता र आश्रय पाएर जसरी तमोरूपा अविद्याको वर्चस्व रहन्छ त्यसै गरेर प्रकाशपुञ्ज सूर्यको आश्रय र सत्ता पाएर अन्धकारको अस्तित्व रहने तथ्य श्रुतिद्वारा उद्घाटित भएको छ । किनभने गहन तमस् वा अन्धकार पनि सूर्यको कृष्णरश्मि अर्थात् कालो तेज हो । स्वयंप्रकाश परमात्मा सत्ता र अन्तर्यामी मनरूपले तमस्का भित्र रहने परमार्थ सत्य श्रुतिले स्पष्टै उद्घोष गरेको छ । सूर्यको जाज्वल्यमान प्रकाशपुञ्जमा जसरी कालो अन्धकार लुकेको हुन्छ, त्यसरी नै स्वप्रकाश ब्रह्ममा नै अविद्या वा अन्धकार लुकेको हुन्छ । प्राणीहरूका अन्तःकरण वा बुद्धिमा प्रतिभासित चिदाभासको आश्रयमा नै अज्ञान पनि लुकेर बसेको हुन्छ । त्यसलाई नाश गरेर शुद्ध प्रकाशरूप हुनु नै मुक्त हुनु हो, ब्रह्म हुनु हो । नाश गर्न नसक्नु अन्धकारमा पस्नु हो ।

### ६. अभयं ब्रह्म

अभय ब्रह्म हो । भय माया हो । अभय मायातीत हो । भय मायिक हो । अभय त्रिपुटी निर्मुक्त हो । भय त्रिपुटीयुक्त हो । अभय अमृत हो । भय मर्त्य हो । अभय प्रकाश हो । भय अन्धकार हो । अभय परमार्थ हो । भय मिथ्या हो । अभय शाश्वत हो । भय क्षणिक हो । अभय सत्य हो ।

भय असत्य हो । अभय चेतन हो । भय जड हो । अभय चित् हो । भय अचित् हो । अभय आनन्द हो । भय निरानन्द हो । अभय सुख हो । भय दुःख हो । अभय विभु हो । भय अविभु हो । अभय असीमित हो । भय सीमित हो । अभय समष्टि हो । भय व्यष्टि हो । अभय कारण हो । भय कार्य हो । अभय साध्य हो । भय साधन हो । अभय सबैथोक हो । भय एकथोक हो । अभय व्यापक हो । भय व्याप्य हो । अभय विवर्तक हो । भय निवर्त्य हो । अभय उपादान हो । भय उपादेय हो ।

यसै कारण नै यजुर्वेदशाखाध्यायीहरू मुमुक्षुका लागि श्रुतिले 'अभय ब्रह्म नै तिमी हौ' भन्ने श्रवणात्मक महावाक्यको विधान गरेको हो भन्ने ठहर्छ । मुमुक्षुले संसारको भयङ्कर त्रासदीपूर्ण भयबाट सधैँका लागि विनिर्मुक्त हुने हो भने अभय ब्रह्मको नै साक्षात्कार गर्नुपर्दछ। अर्को मार्ग मोक्षका लागि छँदैछैन भनेर श्रुतिले उद्घोष गरेको छ ।

## ७. अविज्ञातं विजानताम्

संसारी अज्ञानीहरू नश्वर मायिक संसारलाई सत्य ठानेर त्यतैतर्फ हिरिक्क भएर लागेका हुन्छन् भने ज्ञानी पुरुषहरू भने यसलाई हेय ठानेर यस मायिक संसार अर्थात् माया र मायाको कार्यलाई उपेक्षा गरेर प्रकाशस्वरूप ब्रह्मचिन्तन गरेर बस्तछन् । अज्ञानी मनुष्यको तमः स्वभाव जुन अविद्यारूप रात्रि हो त्यसमा संयमी आत्मज्ञानी महात्मा जागा रहन्छन् र त्यसलाई मिथ्या ठानेर आफ्ना स्वरूपमा अवस्थित रहन्छन् । किन्तु अविद्या र अविद्याको कार्यमा जागा रहने अज्ञानीहरूको संसारलाई असत्य ठान्दछन् । संसारीले दिन जस्तो उज्यालो ठानेको आविद्यिक संसारलाई ब्रह्मज्ञानी अन्धकारपूर्ण औँसीको रात ठान्दछन् । यसको विपरीत संसारी मनुष्यले अज्ञानका कारण निस्पट्ट रात जस्तो ठानेको परमार्थ ब्रह्मज्ञानलाई ब्रह्मज्ञानी झलझलाकाररूपमा अनुभव गरेर त्यसैमा जागा भएर आत्मरमण गरिरहेका हुन्छन् । 'यस्यामतं तस्यमतं मतं यस्य न वेद सः । अविज्ञातं

विजानतां विज्ञातमविजानताम् ॥' भन्ने उपनिषद्को मन्त्रको गूढ रहस्य यही हो ।

## ८. अहं ब्रह्म परं धाम

अहं ब्रह्म' वाक्यको अर्थ जुन म हुँ त्यो ब्रह्म हो र 'ब्रह्माहम्' वाक्यको अर्थ जुन ब्रह्म हो त्यो म हुँ भन्ने अनुभव गर भनेर श्रीशुकदेवमुनिले परीक्षितलाई उपदेश गर्नुभएको हो भनेर लेख्नुभएको छ। अझ यसलाई स्पष्ट पार्दै दुई पटक अहम् र ब्रह्म शब्द आएकोमा पहिलो अहं ब्रह्मले जीवको अन्तःकरणमा रहेको शोकादिदोषको निवृत्ति हुन्छ भने दोस्रो ब्रह्मभन्दा पछि व्यत्यय भएर आएको अहंभावनाले ब्रह्मको पारोक्ष्य अर्थात् मुमुक्षुका अन्तःकरणमा व्याप्त आवरणको निवृत्ति गर्दछ भनेर लेख्नुभएको छ। ब्रह्मको परोक्ष्यनिवृत्ति गर्नु भनेको ब्रह्मको साक्षात्कार गर्नु भनेको हो भनेर पण्डित वंशीधरले लेख्नुभएको छ।

## ९. असत्देखि सद्ब्रह्मसम्म

अव्यक्त परब्रह्म जब मायाको उपाधिद्वारा धेरै रूप लिएर व्यक्त भयो, तब ऊ सबै भूतभौतिक जगत्को अभिन्न निमित्त र उपादान कारणका रूपमा परिणत भयो । त्यसपछि ब्रह्म, वेद र लोकमा प्रार्थनीय भयो । जुन ब्रह्मको रूपलाई वेदले अव्यक्त र सबैको कारण भनेको छ। जुन ब्रह्म ज्योतिःस्वरूप, सम्पूर्ण गुणहरूले रहित र विकारहीन हो। जसलाई विशेषणरहित, निष्क्रिय र केवल सत्ताका रूपमा वर्णन गरिएको छ। त्यो नै बुद्धि आदिको प्रकाशक अन्तःकरणावच्छिन्न ब्रह्मचैतन्य, कूटस्थ, साक्षी र प्रत्यगात्मा हो। जसद्वारा सम्पूर्ण प्राणीहरू अनुप्राणित हुन्छन्।

## १०. आधिकारिक पुरुषको मुक्ति

अपान्तरतमा आदि मुक्तात्माहरू जगत् सञ्चालनका लागि ईश्वरका आदेश अनुसार केही समय संसारमा बसेर प्रारब्ध कर्म क्षीण

भएपछि अन्त्यमा सधैँका लागि मुक्त भएर जान्छन् । जसरी ज्ञानीलाई मुक्त हुन त्यति समयमात्रै विलम्ब हुन्छ, जबसम्म उसको देहपात हुँदैन । देहपात हुने बित्तिकै ब्रह्मज्ञानी मुक्त भइहाल्दछ, अर्थात् ब्रह्म भइहाल्दछ भन्ने श्रुतिको उद्घोष भएकाले तदनुरूप नै आधिकारिक पुरुषहरूको पनि मुक्ति हुने कुरा निर्विवाद सिद्ध हुन्छ ।

## ११. आश्चर्य

यो शीर्षक पाण्डवहरू वनवासमा रहेको समयमा यक्ष र युधिष्ठिरका बीचमा भएको संवादमा आधारित छ । यक्षले आश्चर्य के हो ? भनेर युधिष्ठिरलाई सोधेपछि संसारमा दिनदिनै प्राणीहरूको मृत्यु भइरहेको छ, तर टार्न नसकिने त्यस मृत्युलाई देख्ने जीवित मनुष्यहरू भने सधैँ बाँचिरहने इच्छा गर्दछन् । अवश्यम्भावी आफ्नो निकटवर्ती मृत्युलाई नदेखेर जो सधैँ बाँच्न खोज्दछन् योभन्दा बढी आश्चर्य के हुनसक्तछ ? भनेर युधिष्ठिर यक्षलाई उत्तर दिन्छन् ।

## १२. औपनिषद पुरुषम्

यसमा ब्रह्मविद्याको महत्ता अत्यन्त ठुलो भएको हुँदा यसको ख्यापन गर्नका लागि फलश्रुतिका रूपमा र ब्रह्मविद्याका स्तुतिका रूपमा पनि ब्रह्मज्ञानी याज्ञवल्क्य र शाकल्यका बीचको आख्यायिका उपनिषद्ले प्रस्तुत गरेको स्पष्ट देखिन्छ ।

## १३. कर्मबन्धन

शास्त्र र गुरुका उपदेश समेतबाट प्राप्त ज्ञानाग्निद्वारा ज्ञानीका सम्पूर्ण कमबन्धनहरू समाप्त हुन्छन् । जतिसुकै धेरै शास्त्रहरू सुनेको र अरूलाई सुनाएको भए पनि ज्ञानीले सारा बिर्सनु पर्दछ । अर्थात् ब्रह्मज्ञानी भएपछि यी विस्मृतिका गर्तभित्र जान्छन् । अन्यथा मुमुक्षुलाई ब्रह्मज्ञान भएको छैन भनेर जान्नु पर्दछ । ज्ञान भएपछि ज्ञानीलाई गुरु अगुरु र शास्त्र अशास्त्र हुन जान्छन् ।

श्रुतिले पनि ज्ञानीका लागि यही कुराको उपदेश गरेको छ। बुद्धिमान् मुमुक्षुले ब्रह्मज्ञान भइसकेपछि निरन्तर स्वस्वरूपमा रहनु पर्दछ। धेरै पढ्नु र मनन आदि गर्नु पनि हुँदैन। सो गर्नु भनेको व्यर्थको वाणीको श्रममात्रै पनि हो। यसरी ज्ञानीका सम्पूर्ण इतिकृत्य, कर्तव्य, कर्म र कर्मबन्धन समेत ब्रह्मज्ञानपछि समाप्त हुन्छन्।

### १४. काम, कर्म र परिणति

अविद्या वा अज्ञानद्वारा कामना पैदा हुन्छ। कामना भएपछि मान्छेले काम्य कर्म र निषिद्ध कर्म गर्दछ। त्यसको फल दुःखसुखात्मक यस संसारमा बारम्बार आउने र जाने अर्थात् जन्मने र मर्ने गर्नु पर्दछ। कर्मबाट अविद्या, अविद्याबाट काम, कामबाट कर्म र कर्मबाट संसाररूपी दुःखद फल प्राप्त हुन्छ। यसैलाई कुचक्र भनिन्छ। अज्ञान अर्थात् अविद्या नै यस परिणतिको मूल कारकतत्त्व भएकाले विद्या अर्थात् ज्ञानबाट यस अविद्या वा अज्ञानको नाश हुन्छ, कर्मबाट नाश हुनसक्तैन।

### १५. तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्

शुक्लयजुर्वेदशाखाध्यायीहरूका लागि गुरुबाट श्रवण गर्नुपर्ने श्रवणात्मक महावाक्य र त्यसको मनन, निदिध्यासन र ब्रह्माभ्यासपछि ब्रह्मज्ञानीले अनुभव गर्ने अनुभवात्मक वाक्य पनि भगवद्पाद श्रीशङ्कराचार्यले अर्थक्रम अनुसार ब्रह्मसूत्र 'तत्तु समन्वयात्' (१।१।४।१) सूत्रको भाष्यमा उल्लेख गर्नुभएको छ। यस्तो स्पष्ट उल्लेख हुँदा हुँदै पनि विद्वान्, गुरु, महात्मा, सन्न्यासी, प्राध्यापकसमेतले सामवेद अन्तर्गत पठित 'तत्त्वमसि' महावाक्यलाई नै सबैको श्रवणात्मक महावाक्य हो भन्दै उपदेश र प्रवचन गर्ने गरेका छन्। राम्रो बुझेर मात्रै उपदेश गर्ने गरेमा वक्ता र श्रोता दुवैको कल्याण हुनेछ।

### १६. नायमात्मा प्रवचनेन लभ्यः

श्रवण, मनन, निदिध्यासन, शम, दम आदि बुद्धिमान् मुमुक्षुले

अन्तरङ्ग साधनहरूसमेतद्वारा ब्रह्मचिन्तन अहर्निश गरोस्, अरू धेरै थरी शास्त्रहरूको अनुध्यान अर्थात् अनुचिन्तन नगरोस् । केवल आत्मालाई ॐ द्वारा ध्यान गरोस् । अरू वाणीलाई त्याग गरोस् । किनभने धेरै शब्दहरूको अनुध्यान गर्नु वाणीलाई खेर फाल्नु हो, व्यर्थ हो ।

## १७. नैषा तर्केण मतिरापनेया

आफ्नो बुद्धि र अनुभूति अनुसार श्रुति अनुकूलको तर्क गर्नुलाई सुतर्क भनिन्छ । सो गर्नु राम्रो हो, तर कुतर्क गर्नु राम्रो होइन । सुतर्क गर्नुलाई अद्वैत वेदान्तको शब्दावलीमा भ्रमै भए पनि अन्त्यमा लक्ष्यमा पुऱ्याउने हुनाले त्यसलाई संवादी भ्रम भनिन्छ । किन्तु श्रुतिविरुद्ध कुतर्क गर्नुलाई भने विसंवादी भ्रम भनिन्छ, जसले कहिल्यै पनि लक्ष्यमा पुग्न सहयोग गर्दैन, बरु कहिल्यै बाहिर निस्कन नसकिने अँध्यारो सुरुङमा लगेर जाकिदिन्छ ।

अविद्याग्रस्त मान्छे आफैँलाई ठुलो बुद्धिमान् र पण्डित भएको ठान्दछ । श्रुति आदि सत् शास्त्रहरूलाई नमानेर ऊ असत् शास्त्रका भरमा कुतर्क गर्दै हिँड्दछ । त्यो अन्त्यमा अँध्यारो खाल्टोमा गएर जाकिन्छ । अज्ञानी मूढ मान्छे अन्धो जस्तै हो । अन्धो जसरी आफैँ जस्तो अन्धाको नै पछि लागेर हिँड्दा दुःख पाएर संसारमा घुमिरहन्छ र अन्त्यमा पतनको गर्तमा गएर जाकिन्छ त्यसै गरी मूढ पनि पतनमा पुग्छ ।

## १८. परमगुरु

हाम्रा सम्पूर्ण प्राच्य दर्शन, शास्त्र, पुराण, महाभारत, वेद र उपनिषद्हरूबाट नै अनुप्राणित छन् । सबै शास्त्रहरूका स्रोत वेद र उपनिषद् नै हुन् । अरू पुराणहरूका अतिरिक्त श्रीमद्भागवतमहापुराणले वेद र उपनिषद्को सार भागवत भएको भनेर स्पष्टै उद्घोष गरेको छ । भगवान् श्रीराम, श्रीकृष्ण र शङ्करले पनि ज्ञानोपदेश गर्दा वेद र उपनिषद्लाई नै गुरु मानेर उपदेश गर्नुभएको देखिन्छ । यसै कारण गुरुको पनि गुरु जगद्गुरुको पनि गुरु भएकाले उपनिषद्लाई यस लेखमा परमगुरु भनिएको हो । बाहिरी संसारी मायिक गुरुहरू र

बाहिरी संसारी मायिक शास्त्रहरूको काम भित्री गुरु र शास्त्रको परिचय गराउन सम्म मात्रै हो । त्यसपछि ती दुवैको काम समाप्त हुन्छ। बाहिरी गुरु र शास्त्रको प्रयोजन त्यतिमात्रै हो । किन्तु परम गुरु वेद र उपनिषद्को प्रयोजन भने मनुष्यलाई यस लोकमा मोक्षपर्यन्त र क्रममुक्तिमा सत्यलोक पुगेको जीवलाई पनि प्रयोजन रहन्छ नै । किनभने ब्रह्माजीबाट ब्रह्मोपदेश हुँदा पनि वेद र उपनिषद्कै आधार उहाँले लिनुपर्दछ। यीभन्दा श्रेष्ठ आधार अरू केही हुन सक्तैन । अतः वेद र उपनिषद्हरू परमेश्वर परमात्मा ब्रह्मा, विष्णु र शिव समेतका गुरु भएकाले परम गुरु भनिएको हो ।

**१९. परा ज्ञाननिष्ठा**

पराज्ञाननिष्ठा वा ब्रह्मनिष्ठा नै मोक्ष हो । यसलाई अर्को शब्दमा भन्ने हो भने अन्तरात्मा अर्थात् प्रत्यगात्माको अविक्रियस्वरूपमा निश्चयरूपबाट स्थित हुनु नै मोक्ष हो । अन्तरात्मविषयक प्रतीतिलाई अक्षुण्ण राख्न प्रयत्न गर्नु नै पराज्ञाननिष्ठा हो । मुमुक्षुले मोक्षका लागि सर्वकर्म-सन्न्यासपूर्वक नै ज्ञाननिष्ठामा स्थित हुनुपर्दछ । मोक्ष अर्थात् परा ज्ञाननिष्ठा नै यही हो ।

**२०. पञ्चब्रह्म**

यस निबन्धमा पञ्चब्रह्मोपनिषद्ले भगवान् श्रीपशुपतिका पाँच वक्त्रलाई नै पञ्चब्रह्म भनेर विभिन्न विशेषण र उपाधिहरू दिएर वर्णन गरेको छ । पैप्पलाद ऋषि र शाकलका बीचका संवाद अर्थात् प्रश्न र उत्तरका माध्यमबाट अनुष्टुप् छन्दमा जम्मा ३६ ओटा मन्त्रहरूमा ग्रथित यस उपनिषद्ले परम शिवस्वरूप श्रीपशुपतिलाई ब्रह्मत्वेन वर्णन गरेको छ।

**२१. प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार**

निषेध गरेपछि ब्रह्ममात्रै बाँकी रहन्छ। किन्तु यसको निषेध गर्दै जाने हो भने अनवस्था हुनसक्ने आशङ्कालाई परिहार गर्दै श्रीसुरेश्वराचार्यले

वार्तिकमा स्पष्टै उल्लेख गर्नुभएको छ । आत्मवस्तु अर्थात् आत्मादेखि बाहेक अरू माया र मायाका स्थूल र सूक्ष्म कार्यहरू सबै नै निषेध्य हुन् । यस प्रकार आत्मा अर्थात् संविद् ब्रह्मदेखि अतिरिक्त अतद् पदार्थ सबै निषेध भएपछि अभाव र अभावको प्रतियोगी रहने कुरै भएन । यसरी विवेचना गर्दा अभावको नै अस्तित्व समाप्त भएपछि केका आधारमा कसलाई मिथ्या सिद्ध गर्न प्रतियोगी खडा हुने ? अतः वृक्षको मूल र जरा समेत काटिएपछि हाँगाबिँगा, पात पलाउने र फूल, फल आदि लाग्ने सम्भावना नै रहँदैन । अर्थात् वृक्षको नै नाश भएपछि त्यसको छाया केका आधारमा रहने ? अतः ब्रह्मसाक्षात्कार गर्दा निषिद्ध अविद्याको स्थानमा प्रतियोगी उत्पन्न हुन नसक्ने भएपछि प्रतियोगिविनिर्मुक्त ब्रह्मसाक्षात्कार हुने भयो । यस सम्बन्धमा अरू बढी ऊहापोह गर्नु आवश्यक नै छैन ।

## २२. पर्यङ्कविद्या

क्रममुक्तिमा देवयान मार्गबाट ब्रह्मलोक पुगेको ब्रह्मवेत्ता उपासकको योग्यता र क्षमता पनि ब्रह्माजीका सरह हुन्छ । ब्रह्माजी मुक्त पुरुष भएकाले त्यो उपासक ब्रह्माजीका साथै मुक्त हुन्छ भनेर अरू शास्त्रहरूमा आएको वचन अनुसार अनुमानसम्म गर्न सकिन्छ ।

## २३. पाठक्रमादर्थक्रमो बलीयान्

उपनिषद्मा तलमाथि भएर आएका श्रवणात्मक महावाक्य र उपदेशात्मक महावाक्यहरूको पाठक्रम जहाँ भए पनि अर्थक्रम अनुसार बुझ्नुपर्ने अर्थात् श्रवण गर्नुपर्ने र तत्पश्चात् मात्रै ब्रह्मसाक्षात्कार हुन सक्ने देखिएको हुँदा शास्त्रले पाठक्रमभन्दा अर्थक्रम नै बलवत्तर हुने नियम निर्धारण गरेको हुनुपर्दछ । यसै तथ्यलाई स्वीकार गरेर भाष्यकार भगवत्पाद आद्यजगद्गुरु श्रीशङ्कराचार्यले ब्रह्मसूत्रको 'तत्तुसमन्वयात्' (१।१।४।४) सूत्रको आफ्नो भाष्यमा श्रवणात्मक महावाक्य 'अभयं वै जनक प्राप्तोऽसि ।' (ब्र.सू. ४।२।४) लाई पहिले राखेर र अनुभवात्मक

महावाक्य ‘तदात्मानमेवावेदहं ब्रह्मास्मीति’ ‘तस्मात्तत्सर्वमभवत् ।’ (बृ.उ.१।४।१०) लाई पछि राखेर पाठक्रमभन्दा अर्थक्रमलाई मान्यता दिनु भएको देखिन्छ । अतः यसरी विवेचना गर्दा शुक्लयजुर्वेदी मुमुक्षुहरूले श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट श्रवण गर्नुपर्ने वैदिक महावाक्य उपर्युक्त पङ्क्तिहरूमा उल्लिखित ‘अभयं वै जनक प्राप्तोऽसि’ नै भएको सबै प्रमाणहरूबाट प्रमाणित हुन्छ ।

**२४. पुंसां श्लाघ्यतमं मन्ये**

कुलीनता आदि यस्ता धेरै कारणहरू छन्, जसले अभिमान र जडता समेत उत्पन्न गरेर मनुष्यलाई कल्याणका सबै साधनहरूबाट वञ्चित गरिदिन्छन् । किन्तु जुन व्यक्ति मेरो शरणमा आउँछन् ती भने त्यस्ता कुलीनता आदिबाट मोहित हुँदैनन् र उनीहरू आत्मकल्याणका मार्गमा सधैँ अग्रसर हुन सफल हुन्छन् ।

**२५. पुर्यष्टक**

सूक्ष्मशरीरलाई नै विभिन्न शास्त्राचार्यहरूले पुर्यष्टक पनि भनेको देखिन्छ। जुन शरीरमा सात तत्त्व वा कलादेखि लिएर तीसतत्त्व वा कला रहेको देखिन्छ। पुर्यष्टक र सूक्ष्म शरीर उस्तै भए पनि जन्म र मृत्युमा मोक्ष पर्यन्त जीवका साथ रहने सूक्ष्म शरीर हो, जसमा १७ तत्त्व रहन्छन्।

**२६. पूर्वप्रज्ञा**

पूर्वप्रज्ञालाई केन्द्रबिन्दुमा राखेर यस लेखमा विद्या र कर्मको पनि छोटकरीमा उल्लेख गरिएको छ। संसारको पुनरावृत्तिका लागि विद्या, कर्म र पूर्वप्रज्ञाको बराबरको भूमिका रहेको देखिन्छ। जबसम्म पूर्वप्रज्ञा अर्थात् पूर्वसंस्कार मुमुक्षुको ज्ञानरूपी अग्निद्वारा भस्म हुँदैन तबसम्म मुक्ति हुँदैन र संसारको अनन्त दुश्चक्रको संसृतिमा उसले घुमिरहनु नै पर्दछ।

### २७. बहिर्मुख

परब्रह्म परमात्मा कालको पनि काल महाकाल भएको तथ्य श्रुतिले नै भनेको छ। जसका ब्राह्मण अर्थात् ब्रह्मादि देवता लगायत सारा चर प्रणी वा चिदाभास अर्थात् जीवात्मा र क्षत्र अर्थात् जड पदार्थ अखिल ब्रह्माण्ड र मायिक प्रपञ्च समेत भात जस्ता खाद्यपदार्थ हुन्छन् र संसारभरका प्राणीलाई भक्षण गर्ने कालसमेत परमात्मा ब्रह्मका तिहुन, तर्कारी, अचार जस्ता भातलाई मुछेर खाने उपसेचन अर्थात् सितन जस्तो मामुली वस्तु बन्दछ। त्यस्तो अकल्पनीय परमात्मालाई अज्ञानी नास्तिक हिरण्यकशिपु र नित्से जस्ता अहङ्कारी अज्ञानीले कसरी जान्न सक्तछन् ? अर्थात् जान्न सक्तैनन् ।

### २८. ब्रह्मविद्या

विभिन्न उपनिषद्हरूमा असङ्ख्य विद्या छन् । तिनको परिगणना गरेर साध्य छैन । यी विद्याको श्रवण, मनन, निदिध्यासन र अभ्यास गर्नाले मुमुक्षुले मोक्ष प्राप्त गर्नसक्तछ। वस्तुतः यी सबै विद्या कुनै कुनै साक्षात् र कुनै कुनै परम्परया मोक्षका साधन हुन् । साध्य जस्तो साध्य मोक्ष अर्थात् ब्रह्मसाक्षात्कार नै हो।

### २९. ब्रह्मसाक्षात्कारका साधनहरू

जीवलाई सर्वप्रथम त नरजन्म नै दुर्लभ छ। त्यसमा पनि पुरुषत्व, त्यसमा पनि ब्राह्मण भएर वैदिक धर्मको अनुगामी हुनु र त्यसमा पनि विद्वान् हुनु अझै कठिन छ। यी सबै केही गरी भइहाले पनि आत्मा र अनात्माको विवेक हुनु, सम्यक् अनुभव हुनु, ब्रह्मात्मभावमा संस्थिति हुनु र मुक्ति हुनु भने करोडौँ जन्महरूमा गरिएका शुभकर्महरूका परिपाकबाट मात्रै सम्भव छ।

### ३०. भविष्यद्वृत्ति

जसरी सारा नदीहरू बगेर घुम्दैफिर्दै सागरमा पुगेर आफ्ना नाम र रूपहरू सबै त्यागेर परम विश्रान्ति पाउँछन्, त्यसरी नै सारा प्रवृत्तिपरक

वेदादि शास्त्रहरू पनि मनुष्यको श्रद्धा, रुचि र क्षमता अनुसारका कर्महरू गराउँदै अन्ततोगत्वा निवृत्तिमार्गमा पुऱ्याएर मनुष्यलाई मोक्ष गराउँछन् । सबै शास्त्रहरूको लक्ष्य जीव र ब्रह्मको ऐक्य गराउने नै हो । अर्को शब्दमा भन्ने हो भने सबै शास्त्रहरूको अन्तिम उपदिष्ट तत्त्व ब्रह्म नै हो र उद्देश्य जीवात्मा र परमात्माको ऐक्य गराउनु नै हो । वेदका सृष्ट्यादिबोधक सबै वाक्यहरूको अर्जुनदृष्टि भनेको 'भविष्यद्वृत्ति' नै हो । अतः बुद्धिमान् मुमुक्षु अर्थात् ब्रह्मज्ञानीले त्यसै शुद्ध ब्रह्मलाई जानेर अथवा ब्रह्मज्ञान गरेर त्यसैमा प्रज्ञा गर्नु पर्दछ । धेरै शब्दहरूको अनुध्यान किं वा चिन्तन गर्नु हुँदैन । त्यसो गर्नु वाणीको श्रममात्र हो ।

## ३१. महावाक्यको श्रवणविधि

गुरूपसत्तिपश्चात् मुमुक्षुको पात्रताको परीक्षा गरेर गुरुले अन्त्यमा सम्बन्धित वेदशाखाको महावाक्यको श्रवण मुमुक्षु शिष्यलाई विधिपूर्वक गराउँदछन् । विधिका सम्बन्धमा केही उपनिषद्ले विनियोग, अङ्गन्यास, करन्यास, दिग्बन्धनादिपूर्वक श्रवण गरेर जप्नुपर्ने विधान गरेको पाइन्छ । किन्तु एकातर्फ 'तत्त्वमसि' आदि महावाक्यहरू अङ्गन्यासादि इतिकृत्यपूर्वक जप्ने मन्त्र नभएर गुरुले शिष्यलाई उपदेश गर्ने महावाक्य हुन् भनिएको छ भने अर्कोतर्फ यिनै वाक्यहरूलाई जप्ने मन्त्र भनेको पनि पाइन्छ। जो मन्त्र जप्तछ त्यसलाई मन्त्रविद् भनिन्छ, आत्मविद् भनिँदैन । आत्मविद्को मात्रै मुक्ति हुन्छ, मन्त्रविद्को हुँदैन भनेर अर्को उपनिषद्ले भनेको हुँदा महावाक्य मनन, निदिध्यासन आदि गरेर ब्रह्मसाक्षात्कार गर्ने साक्षात् साधन हो, तर श्रवणपछि जप्ने मन्त्र होइन भन्ने स्पष्ट हुन्छ। अतः आ-आफ्ना वेदशाखा समेतमा उल्लेख भएको अनुरूप नै महावाक्यको श्रवणविधि हो ।

## ३२. मुमुक्षु आफैंले जान्नुपर्ने

यसमा मुख्यतः यो विचार प्रतिपादित साधनचतुष्टयसम्पन्न ब्रह्मजिज्ञासु र मुमुक्षायुक्त मुमुक्षुले उपर्युक्त ज्ञानका साधनहरूलाई विना

प्रमाद जीवनमा आचरण गर्दै आफुलाई तदनुकूल बनाएर अनवरत ब्रह्मचिन्तन गर्नुपर्दछ। आफ्नो साधना र चिन्तन तीव्र बनाउँदै लानुको साथै आफैँले आफ्नो स्थितिको अध्ययन, निरीक्षण र परीक्षण पनि गर्दै जानु अति आवश्यक छ। परीक्षण र निरीक्षण गर्दा आफ्ना अन्तःकरणमा जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि जमेर रहेका वासनात्मक मलदोष, विक्षेपदोष र आवरणदोष समेतका त्रिदोषहरूको के कति प्रक्षालन हुनसक्यो सर्वदा ध्यान दिनु पर्दछ। यसमा आत्मकृपा, गुरुकृपा, शास्त्रकृपा र ईश्वरकृपाको ठुलो भूमिका रहन्छ। यसरी सबै दोषादि नाश गर्दै लगेपछि अन्त्यमा तीव्र साधनाको परिपाक भएर ब्रह्माकारित चरम बुद्धिवृत्ति भएपछि मुमुक्षु मुक्त हुनसक्तछ।

### ३३. मोक्षको परम कारण

अन्तःकरणमा रहेका त्रिदोषहरू मध्ये मलदोष र विक्षेपदोषहरू हटे पनि आवरणदोष नहटेसम्म ब्रह्मज्ञान हुन असम्भव नै छ। 'ऋते ज्ञानान्न मुक्तिः' अर्थात् ब्रह्मज्ञान नभईकन मुक्ति नहुने भनेर श्रुतिले नै कण्ठतः सोझै भनेको छ। अतः त्यसका लागि श्रोत्रिय ब्रह्मनिष्ठ गुरुसमक्ष मुमुक्ष जानुपर्ने श्रुतिवाक्य माथि उल्लेख गरिसकिएको छ। मुमुक्षुले माथि उल्लेख भएको प्रक्रिया र विधिविधान अनुसार साक्षात् मोक्षको हेतु भएको महावाक्य गुरुबाट श्रवण गर्नुपर्छ। त्यसको परिपाक भएपछि आवरणदोष समेत हटेपछि मुमुक्षु मुक्त हुन्छ। केवल श्रवण गरेर मात्रै मोक्ष हुँदैन। त्यति मात्रै होइन, सबै कुरा सम्पन्न भए तापनि मुक्ति चाहिँ मुमुक्षुले उसका विगतका करोडौँ जन्ममा सम्पादन गरिएका पुण्यपुञ्जको अर्थात् शुभकर्मको उदय भएपछि प्राप्त गर्दछ भनेर भगवत्पाद आचार्य श्रीशङ्करले भन्नुभएको छ।

### ३४. मोक्षको साक्षात्साधन

अपौरुषेय श्रुतिदेखि लिएर पौरुषेय श्रोत्रिय ब्रह्मनिष्ठ आचार्यहरूले

रचना गरेका पूर्ण श्रुतिसम्मत प्रकरण र विवरण ग्रन्थहरूमा समेत आएका अकाट्य प्रमाणहरूको अध्ययन र मनन नै नगरी अद्वैत वेदान्तका वरिष्ठ विद्वान्, महात्मा, संन्यासी र गुरुहरूले समेत सबै मुमुक्षुहरूका लागि श्रवण गर्ने वैदिक महावाक्य 'तत्त्वमसि' मात्रै हो र अनुभवात्मक वैदिक महावाक्य चाहिँ 'अहं ब्रह्मास्मि' नै हो भनेर ब्रह्मजिज्ञासा र मुमुक्षासमेत नभएका आचारहीन संसारी जनसमूह जम्मा पारेर प्रवचन गर्दै हिँड्नु, स्वाध्यायको नियमविरुद्ध स्वाध्याय, अध्ययन, अध्यापन गर्नु गराउनु र लेख्नु कतिसम्म सुहाउने काम हो ? यसका साथै साधन र साध्य नै नबुझी साधनलाई साध्यको रूपमा व्याख्या गर्दा उहाँहरूलाई के अलिकति पनि सङ्कोच र लज्जाबोध हुँदैन ? अवश्य हुन्छ ।

## ३५. मौन व्याख्यान

भगवत्पाद श्रीशङ्कराचार्यले मौनको निरूपण गर्ने प्रसङ्गमा मौनलाई ब्रह्मरूप नै हो भन्नु भएको छ । जुन ब्रह्मलाई वाणी र मन समेतले प्राप्त गर्न नसकेर फर्कन्छन् । त्यस्तो इन्द्रियादि अतीत ब्रह्मलाई मौन अवस्थामा रहेका ज्ञानीहरूले प्राप्त गर्दछन् अर्थात् साक्षात्कार गर्दछन् । किनभने अन्तःकरणमा जन्मजन्मान्तर, युगयुगान्तर र कल्पकल्पान्तरदेखि जम्मा भएर रहेका वासनालाई ज्ञानाग्निद्वारा भस्म गरेर मौन अवस्थामा पुगिसकेको ज्ञानीले मात्रै मौनरूप ब्रह्मसाक्षात्कार गर्न सक्तछ ।

## ३६. मृत्युको भय

वस्तुतः भय त्यसै व्यक्तिलाई हुन्छ, जो सांसारिक वस्तुको सङ्ग्रह, कामना र अदम्य लालसामा चुर्लुम्म डुबेको हुन्छ, परिवार, स्त्री, पुत्र र धनादि मिथ्या वस्तुमा हिरिक्क भएर लागेको हुन्छ र जसको नाशमा म आफैँ नासिन्छु भन्ने आध्यासिक भयले सधैँ आक्रान्त रहन्छ । जबसम्म यी सबै मिथ्या मायिक वस्तुसँगको तादात्म्यलाई चटक्कै बिर्सेर ब्रह्मचिन्तन गर्दैन तबसम्म उसलाई भय भइरहन्छ । अरू सम्पूर्ण मायिक वस्तुहरू

भययुक्त हुन्, केवल ब्रह्म मात्रै अभय हो। ब्रह्म नै अभय हो भनेर श्रुतिले पनि भनेको छ।

अतः अकृतकृत्य अर्थात् आफुले मनुष्य भएर गर्नुपर्ने कर्तव्य पूरा गर्न नसकेको मनुष्यलाई सधैँ मृत्युको भय भइरहन्छ। किन्तु ऊ जुन दिन, जुन क्षणमा यो मिथ्या संसारको माया मोहलाई चटक्कै छोडेर ब्रह्मचिन्तनमा लाग्छ, त्यसपछि ऊ भयरहित निर्भय ब्रह्म भइहाल्दछ। ऊ ब्रह्म भएर फेरि ब्रह्म नै हुन्छ।

## ३७. साक्षात् अपरोक्ष ब्रह्म

वास्तविक रूपमा त्यो आत्मा देश, काल र वस्तुबाट अपरिच्छिन्न र स्वप्रकाश हो। जुन अविद्यारूपी अन्धकारदेखि पर छ। त्यो आत्मा विदित अर्थात् मायाका कार्य चक्षु, वाक्, मन आदिबाट अग्राह्य र अविदित अर्थात् माया भन्दा पर छ। अतः आत्मा दुर्दर्श भएको कुरा श्रुतिले भनेको छ। त्यस आत्मालाई जानेर मात्रै मनुष्य मुक्त बन्न सक्तछ। वेदरूप वायुको गन्धमात्रैबाट पनि मुमुक्षुको कल्याण हुन्छ भनेर शास्त्रले भनेको छ भने श्रोत्रिय ब्रह्मनिष्ठ गुरुबाट विधिपूर्वक आफ्ना वेदका शाखामा पठित महावाक्यको श्रवण गरेर त्यसपछि मनन र निदिध्यासन गरेमा मुमुक्षु अवश्य मुक्त हुने कुरामा कुनै शङ्का छैन। अतः उपर्युक्त मन्त्रहरूमा उपदिष्ट आत्मा अद्वितीय एउटै आत्मा हो। यसैको ज्ञानबाट नै मुमुक्षुको कल्याण हुन्छ।

## ३८. ये हि वृत्तिं विजानन्ति

आहारशुद्धि भएमा त्यसले युक्त अन्तःकरण वा बुद्धि अथवा सत्त्वको शुद्धि हुन्छ अर्थात् निर्मल हुन्छ। अन्तःकरणको शुद्धि भएमा उपनिषद्मा वर्णित र गुरूपदिष्ट भूमा अर्थात् ब्रह्मज्ञानको अचल स्मृति भइरहन्छ। त्यसरी ब्रह्मज्ञान भएपछि अनेकौँ जन्मजन्मान्तरदेखि अनुभव गरिएका र भावनाद्वारा सशक्त पारिएका अविद्याकृत अनर्थ पाशरूप हृदयस्थित ग्रन्थिहरूको नाश हुन्छ। सबै अरू साधनहरू आहारशुद्धिमूलक

रागद्वेषादिबाट निर्मुक्त निर्मल बुद्धिको चरमवृत्ति नै ब्रह्मसाक्षात्कारको अभ्यर्हित साक्षात् साधन हो । अतः बुद्धिका वृत्तिको संशुद्धिलाई नै श्रुतिले प्राथमिकता दिएको देखिन्छ ।

## ३९. रसो वै सः

यो सम्पूर्ण सृष्टिचक्र रसात्मक ब्रह्मको विवर्त हो । आनन्द ब्रह्मको सानो लवलेश पाएर प्राणी आनन्दित भएर बाँच्तछ । सामान्य प्राणीमा लवलेश रहेको आनन्दरसका मात्रा गुणित हुँदै गएर ब्रह्मा र अकामहत श्रोत्रिय ब्रह्मज्ञानीसम्म पुगेर चुलिन्छ । परमानन्द ब्रह्ममा सबै आनन्दहरू समेटिन्छन् । त्यसै परमानन्दको लेशमात्रबाट सारा प्राणीहरू आनन्दपूर्वक जीवित रहन्छन् ।

मुमुक्षुले श्रुतिमा आएको 'नेति नेति' प्रमाणद्वारा मायाको सम्पूर्ण कार्यप्रपञ्च र माया समेतलाई समाप्त गरेर आफ्नो शुद्ध अन्तःकरणद्वारा ब्रह्मानन्दरूपी अमृतको पान गर्नुपर्दछ। जसरी तिर्खाएको मान्छेले नरिवल भित्रको पानीलाई पान गरेर बाहिरको बोक्रो फ्याँकिदिन्छ त्यसरी नै मुमुक्षुले ब्रह्मरसलाई आत्मैक्यका रूपमा आत्मसात् गरेर यस नीरस असार संसारलाई चटक्कै त्यागिदिनुपर्दछ । यसैमा कल्याण छ । अतः रस भनेको परब्रह्म परमात्मा नै हो । अरू संसारी मायिक रसहरू त्यस ब्रह्मरसका लवलेशमात्रै हुन् ।

## ४०. वाचारम्भणं विकारः

उपादानकारण माटोबाट बनेका घटादिका आकारबाट प्रतीत हुने पदार्थहरू व्यावाहारिक रूपमा केवल विभिन्न आकारयुक्त भएर माटोबाट पृथक् जस्ता देखिए तापनि पारमार्थिक रूपमा ती सबै माटोमात्रै हुन् । अतः माटोको ज्ञान भएपछि ती सबैको ज्ञान हुन्छ । हुन त मृत्तिकाबाट बनेका घटादि आँखाद्वारा देखिन्छन् तापनि मृत्तिकादेखि अतिरिक्त तिनको कुनै अर्को स्वरूप वा आकार छैन । यो घट हो, यो सुराही हो, यो चिलिम हो भन्नु केवल वागिन्द्रियद्वारा उच्चार्यमाण नाममात्र हो । ती

सबै मृत्तिका नै हुन् र मृत्तिकाका विकार भएकाले मिथ्या हुन् । मृत्तिका घटादि विकार नहुँदा पनि विद्यमान रहन्छ । अतः यो सत् हो । किन्तु घटादि विकारहरू उपादान कारणका अभावमा रहन नसक्ने भएकाले मिथ्या हुन् ।

### ४१. विद्या र विद्वान्

पराविद्याद्वारा ब्रह्मज्ञान गर्नेलाई विद्वान्, उपनिषद्मा आएको शिक्षा वा उपदेशअनुकूल आचरण गर्नेलाई शिक्षित र त्यसको विपरीत आचरण गर्नेलाई साक्षर पनि होइन दुईखुट्टे जनावर मान्नु ठीक हुन्छ । सामान्यतः साक्षरमात्र भएको व्यक्ति सोझो हुन्छ । त्यस्तो व्यक्ति तथाकथित उपाधिधारी शिक्षित व्यक्तिभन्दा ज्ञान र कर्मले माथि नै हुन्छ ।

### ४२. व्यपदेश

व्यपदेश शब्दको आशयलाई शब्दतः र अर्थतः पनि गौडपादाचार्यले माण्डूक्यकारिकामा व्यापकरूपमा प्रयोग गर्नुभएको छ । उहाँको अजातवाद यसै व्यपदेशमा आधारित देखिन्छ । हुँदै नभएको प्रपञ्चको कल्पना गर्नु व्यपदेशमात्र हो, भनाइमात्र हो र मिथ्या कपोलकल्पनामात्र हो भन्ने नै माण्डूक्यकारिकाको परम सिद्धान्त हो ।

### ४३. शब्दब्रह्म

वास्तविक रूपमा शब्दब्रह्म उपलक्षणयुक्त शब्दराशि वेदले भविष्यद् वृत्तिद्वारा नै भनेको हो । सृष्टिका सुरुमा वेदका उत्पत्तिबोधक केही मन्त्रहरूले जुन जीव र परमात्माको भेदको वर्णन गरेका छन्, त्यो भविष्यद्वृत्तिले गरेको हुँदा त्यो गौण हो । त्यसै भनाइलाई मुख्य मान्नु हुँदैन । त्यो साध्य ब्रह्ममा भविष्यमा पुऱ्याउने साधनका दृष्टिले भनेको हो ।

### ४४. श्रद्धावान् लभते ज्ञानम्

भगवद्गीतामा श्रद्धा तीन प्रकारका बताइएका छन् । ती हुन् – सात्त्विकी, राजसी र तामसी । अद्वैतवेदान्तले सात्त्विकी श्रद्धालाई मात्र साधनका

रूपमा लिएको छ । त्यो श्रद्धा प्राणीका संस्कार अनुसार अन्तःकरणमा उत्पन्न हुन्छ । संसारी जीव जे जस्तो श्रद्धाले युक्त हुन्छ त्यसको श्रद्धानुरूप नै उसको स्वरूप हुन्छ भनेर भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभएको तथ्य गीतामा वर्णित छ । श्रद्धायुक्त मुमुक्षुले नै मोक्षको फल प्राप्त गर्न सक्तछ । किन्तु जुन मनुष्य आत्मज्ञानले रहित छ, श्रद्धाले रहित छ र जसको मन संशयले युक्त छ त्यसको नाश हुन्छ । त्यस्ताको न यो लोक हुन्छ, न परलोक हुन्छ, न त्यस्ता मानिसलाई सुख नै प्राप्त हुन्छ ।

### ४५. श्रोतव्यः श्रुतिवाक्येभ्यः

वस्तुतः मुक्तिको प्रथमद्वार श्रवण नै हो । श्रवण गर्ने वैदिक महावाक्य नै हो । भागवतको श्रवण गरेर नै मुक्ति भयो भन्नु अर्थवाद हो । यसले भागवत सुन्नेतर्फ मानिसलाई प्रेरणा चाहिँ प्रदान गर्दछ । भगवद्भक्ति र भगवान्को गुणानुवाद गर्नाले मानिसको अन्तःकरणको मालिन्य नाश हुन्छ र विक्षेपदोष शान्त हुन जान्छ । यो अत्यन्त आवश्यक छ । ‘ भक्तिर्ज्ञानाय कल्पते’ भनिएकाले भक्ति र कथाश्रवण परम्परया मोक्षका साधन हुन्, किन्तु साक्षात् मोक्षको साधन वा हेतु भने महावाक्यको श्रवण नै हो भन्ने शास्त्रीय वचन छ । अतः वैदिक महावाक्यको श्रवण नै मोक्षको साक्षात् साधन हो तर अरू साधनहरू भने परम्परया साधन हुन्, साक्षात् साधन होइनन् ।

### ४६. शृण्वन्तु विश्वे अमृतस्य पुत्राः

कतिपय आचार्यहरूले शुद्ध चेतनलाई बिम्ब र ईश्वर तथा जीवलाई प्रतिबिम्ब मानेका छन् । ती दुवैमध्ये ईश्वर मायामा प्रतिबिम्बित चेतन हो भने जीव अन्तःकरणमा प्रतिबिम्बित हो । वस्तुतः प्रकृत विषयमा यही सिद्धान्त समीचीन देखिन्छ । किनभने श्रुतिले ‘अमृतस्य पुत्राः’ अर्थात् चेतनका सन्तान भनेको छ । यसको अर्थ अमृत चेतन ब्रह्मका पुत्रहरू भन्नाले बिम्बभूत चेतन ब्रह्मको मायामा प्रतिस्फलित प्रतिबिम्ब ईश्वर

हो र अन्तःकरणमा प्रतिस्फलित प्रतिबिम्ब जीव हो । यस हिसाबले उपाधिभेदले ईश्वर र जीव अर्थात् सर्वज्ञ र अल्पज्ञका दृष्टिले फरक भए तापनि दुवै अमृत ब्रह्मका नै पुत्र हुन्, दुवै अनादि र विभु हुन् भनेर शास्त्रले भनेको छ।

## ४७. सदेव सोम्येदमग्र आसीत्

छान्दोग्योपनिषद्मा 'सदेव सोम्येदमग्र आसीदेकमेवाद्वितीयम्' भनेर आएको सत् आत्माको प्रसङ्गलाई पुराणहरूमा अहं शब्दबाट बुझाइएको छ। श्रीमद्भागवतमहापुराणमा सृष्टि हुनुभन्दा पहिले केवल ममात्रै थिएँ। मेरा अतिरिक्त स्थूल, सूक्ष्म र दुवैको कारण अविद्या अर्थात् अज्ञान पनि थिएन। प्रलयकालमा पनि अर्थात् सृष्टि नहुँदा पनि म नै रहन्छु, सृष्टिका रूपमा सम्पूर्ण प्रपञ्चमा पनि म नै प्रतीत हुन्छु र जुन अवशिष्ट रहन्छ त्यो पनि म नै हुँ भनेर सत् आत्मा अहं शब्दबाट बुझिने ब्रह्म विवर्तितरूपमा निखिल ब्रह्माण्डको कणकणमा छु भनेर आफ्नो अत्यन्त गोपनीय परम ब्रह्मस्वरूपको उपदेश भगवान् श्रीनारायणले सृष्टिकर्ता ब्रह्माजीलाई गर्नुभएको छ।

## ४८. समाधि र साक्षात्कार

अद्वैत वेदान्तले समाधिलाई शमदमादि षट्सम्पत्तिमध्ये छैटौं सम्पत्तिका रूपमा समाधानका नामबाट लिएको छ। समाधानको अर्थ चित्तैकाग्रता भनिएको छ। योगदर्शनले पनि अष्टाङ्गयोगलाई चित्तवृत्तिको निरोधको साधनकै रूपमा वर्णन गरेको छ। अतः समाधि वा समाधानलाई साधनकै रूपमा लिनुपर्दछ।

## ४९. महावचनमेव विमुक्तिहेतुः

दुइटा वेदहरूका महावाक्यहरू मात्रै श्रोत्रिय ब्रह्मनिष्ठ गुरुहरूबाट उपदेश भएको देखिन्छ। किन्तु ऋग्वेद अन्तर्गत ऐतरेयोपनिषद्मा आएको 'प्रज्ञानं ब्रह्म' को कुनै योग्य शिष्यलाई कुनै ज्ञानी गुरुले उपदेश

गरेको आख्यायिका वा व्यक्ति पाइँदैनन् । त्यतिमात्रै होइन, ती वाक्यहरू उपदेशात्मक हुन् कि अनुभवात्मक हुन् त्यो कुरा पनि स्पष्ट बुझ्न सकिँदैन । आख्यायिका वा कुनै व्यक्तिका माध्यमबाट ती वाक्यहरू उपदिष्ट नभएर सोझै उपनिषद्हरूले उपदेश गरेका हुँदा त्यस्तो दुरूह भएको देखिन्छ ।

### ५०. सर्वं खलु इदं ब्रह्म

परमार्थज्ञानद्वारा संस्कारित मनले नै आचार्योपदेशपूर्वक ब्रह्मसाक्षात्कार गर्नुपर्दछ । त्यस विशुद्ध तथा अद्वितीय ब्रह्ममा नाना अर्थात् जगत् रत्ति मात्रामा पनि छँदैछैन । किन्तु ब्रह्ममा नानात्व नभएर पनि जुन अज्ञानीले ब्रह्ममा नानात्वको अर्थात् मिथ्या जगत्को आरोप गर्दछ, त्यसले यस मिथ्या जगत्मा बारम्बार जन्मने र मर्ने काम अनन्त कालसम्म गरिरहनुपर्दछ । अतः ब्रह्म मात्रै सबै हो र त्यस अतिरिक्त अरू मायिक वस्तु किञ्चित् मात्रामा छैनन् ।

### ५१. स्वाध्यायोऽध्येतव्यः

स्वाध्याय गर्दा गुरुसँग विधिपूर्वक सुनेर विचार प्राप्त गरेको हुनुपर्दछ । यसमा 'स्वाध्यायोऽध्येतव्यः' भनेको आफ्नै वेदको अध्ययन गर्ने भनेको हो । यसै कारण वेदमा आफ्नै वेदको शाखा नै पढ्ने पढाउने गर्नुपर्छ, प्रमाद गर्नु हुँदैन भनिएको हो । यस कुरालाई मुनिले स्पष्टसँग नै लेख्नुभएको छ । ब्राह्मणले विनाकारण नै वेद धर्म अर्थात् नियमपूर्वक षडङ्गसहित पढ्नु पर्दछ र वेदको अर्थ तात्पर्य सहित जान्नु पर्दछ भनेर वेदले नै भनेको हुँदा आचार्यले 'स्वाध्यायधर्मपठितम्' भनेर लेख्नुभएको हो भनेर बुझ्नुपर्दछ ।

### ५२. ज्ञान नै प्रायश्चित्त हो

यस सम्पूर्ण सृष्टिचक्रको सञ्चालन परमात्मा अविद्या अर्थात् अज्ञानबाट नै गराउनु हुन्छ । त्यसले ब्रह्मको आश्रय लिन्छ र ब्रह्मलाई

विषय गर्दछ । यसै कारण त्यसलाई अत्यन्त शक्तिशाली भनिन्छ । यसलाई कसैले पनि छुन चलाउन सक्तैन । किनभने यसै अज्ञानका कारण अर्थात् आफ्नै अज्ञानद्वारा कल्पित जगत्, परमेश्वरत्व र जीवत्वका द्वारा भूमभाव अर्थात् ब्रह्मभाव कलुषित भएको छ । त्यस्तो जीवात्माले त्यस शक्तिशाली अज्ञानबाट सिर्जित कर्मजन्य पापलाई अज्ञानजन्य सजातीय प्रायश्चित्त कर्मबाट कसरी नाश गर्न सक्तछ ? अर्थात् सर्वथा नाश गर्न सक्तैन । अतः निषिद्ध कर्मबाट उद्भूत पाप ज्ञानरूपी प्रायश्चित्त अर्थात् ब्रह्मज्ञानबाट मात्रै नाश हुन्छ, अन्यथा सम्भव छैन ।

**५३. ज्ञानं विज्ञानसहितम्**

अद्वैत सिद्धान्तमा ज्ञान सिद्धान्त हो, भावनात्मक हो भने बुद्धि व्यावहारिक धरातल हो । ज्ञान उपदेश हो भने विज्ञान साक्षात्कार हो । ज्ञान चेतन हो भने विज्ञान जड हो । ज्ञान प्रकाश हो भने विज्ञान अन्धकार हो । सम्पूर्ण सृष्टिको संरचना ज्ञान र विज्ञानमा अडिएको छ । विज्ञान पदार्थ हो र ज्ञान शक्ति हो । विज्ञान आधार हो र ज्ञान आधेय हो ।

उपर्युक्त अनुसार बुझेपछि यस औपनिषद पुरुषलाई अझै स्पष्ट बुझ्न चाहने जिज्ञासुहरूले मूलग्रन्थका साथै औपनिषद पुरुषको भूमिका पनि अत्यन्त उपयोगी हुने ठानेर केही अंश यहाँ उद्धृत गरेको छु, जुन यस अनुसार छ –

प्रत्येक प्राणीको वर्तमान समय अत्यन्त क्षणिक हुन्छ । त्यो आँखाको एक उन्मेषमा नै समाप्त भएर जान्छ । त्यो क्षण फेरि फर्केर आउँदैन । समयको अगाडिपट्टिको सिङ समात्न सकिन्छ तर त्यसको पछाडिपट्टिको पुच्छर समात्न सकिँदैन । यसको तात्पर्य हो, समयलाई तुरुन्तै सदुपयोग गरेर कल्याण हुने स्थायी काम गरेमा समयको सिङ समातेको अर्थात् समयलाई चिनेर सही काम गरेको ठहर्छ । समय गइसकेपछि पश्चात्ताप गरेर र थकथकाएर फेरि त्यस समयलाई छोप्न सकिँदैन । किनभने समयको गाई, भैँसीहरूको जस्तो अगाडिपट्टि शिरमा सिङ हुन्छ, किन्तु

पछाडिपट्टि झुन्डिएको हातले सजिलै समात्न सकिने पुच्छर भने हुँदैन। त्यसै कारण समयको सिङ हुन्छ तर पुच्छर हुँदैन भनिएको हो।

समयलाई चिन्न नसक्ता सबै साधन, सुविधा, अनुकूल वातावरण, अनुकूल परिस्थिति, अत्यन्त महत्त्वपूर्ण विषयको अध्ययन, उद्भट विद्वान्को शिक्षादीक्षा र मार्गनिर्देशन पाएर पनि मैले आफ्नो अमूल्य समयको सदुपयोग गर्न सकिनँ। तथापि तीन दशक जति समय बितेर गए तापनि बाल्यकालको भक्ति र छात्र अवस्थामा गुरुमुखी भएर गरिएको अद्वैत वेदान्तको श्रवण समेतबाट उद्भूत संस्कारले मलाई फेरि पुरानै मानसिक धरातलमा फर्काएर ल्यायो। फलस्वरूप त्यसै संस्कारले दुई दशकभन्दा पनि बढी समयदेखि अद्वैत वेदान्तको अध्ययन, मनन र लेखनमा समर्पित भावले तल्लीन रहन प्रेरणा दियो।

जस्तोसुकै परिस्थिति आइपरे पनि हाल मेरो अध्ययन र लेखन समेत रोकिएको छैन। पहिलेदेखि नै अध्ययन र लेखनको क्रममा कतिपय सन्दर्भमा सन्देह, संशय र शङ्का उत्पन्न हुँदा सम्बन्धित विषयका आधिकारिक विद्वानूहरूसँग सोधेर गाँठाहरू फुकाउने मेरो बानी थियो। सुरु सुरुमा मेरो अनभिज्ञताको अवस्थामा विना ननु न च उहाँहरूको भनाइलाई म स्वीकार गर्दथेँ। किन्तु केही बुझ्न थालेपछि उहाँहरूको उत्तरबाट मेरो सन्देहको गाँठो फुक्नुको साटो झन् कसिँदै जान थालेको र यसबाट विसंवादिभ्रमजन्य दिग्भ्रमको स्थिति उत्पन्न भएजस्तो अनुभूति अन्तःकरणमा स्फुरण भएपछि म त्यताबाट विरमित हुन पुगेँ।

अध्येता वा लेखक जुन अवस्थामा पुगेर शास्त्रहरूको अध्ययन र लेखन गर्दछ त्यसै अवस्थमा पुगेर उसका जिज्ञासाहरू शान्त गरिदिने सबै दृष्टिले समान अवस्थामा पुगेको आफुभन्दा अर्को व्यक्ति संसारमा प्राप्त गर्न मुस्किलै हुँदो रहेछ। कुनै विषयमा सन्देह उत्पन्न भयो भने त्यसको समाधान गर्ने समान अनुभूति र संवेदना भएको मानिस नपाएमा गुणहरूबाट सम्मोहित र विक्षिप्त नभएको शुद्ध सत्त्वगुणापन्न अन्तःकरण अर्थात् सात्त्विकी बुद्धिका विद्यात्मिका वृत्तिको सहायता लिएर आफ्नो

सन्देहको अपसरण वा परिमार्जन गर्न सकिन्छ। अरू प्रमाणहरूको खोजी गरिरहनु पर्दैन भन्ने श्रुतिको वचन छ।

कुनै संवेदनशील र आफुले स्पष्ट नबुझेको विषयमा सन्देह उत्पन्न भएमा शास्त्र र आप्तपुरुषको सहयोग लिएर सन्देह हटाउनु पर्दछ। यदि त्यसबाट चित्त बुझेन भने सात्त्विक अन्तःकरण भएको समझदार मुमुक्षुले आफ्नै विशुद्ध सात्त्विक अन्तःकरणका वृत्तिलाई गुरु मानेर त्यसै आधारमा निश्चय गर्नुपर्दछ।

अद्वैत वेदान्तमा अन्तःकरण वा बुद्धिलाई जड मानिन्छ। चेतनतत्त्वको संसर्गाध्यासका कारणले नै जड बुद्धिलाई पनि चेतनत्वेन व्यवहार गरिन्छ। त्यस जडवृत्तिलाई कसरी प्रमाण मान्न सकिन्छ भन्ने प्रश्न पैदा हुनसक्तछ। यस प्रश्नको समाधान अद्वैतवेदान्तको प्रक्रिया अनुसार गर्नुपर्दछ। किनभने प्रत्येक चेतन प्राणीको अन्तःकरण अर्थात् बुद्धिमा बसेको साक्षीले प्राणीले गरेको र गर्ने सबै मानसिक क्रियाहरूको साक्षी भएर जाग्रत्, स्वप्न र सुषुप्ति तीनै अवस्थामा हेरिरहेको हुन्छ। त्यतिमात्रै होइन, प्रत्येक प्राणीका चेतन, अर्धचेतन (अवचेतन) र अचेतन मनमा रहेका सबै कुरालाई जान्ने भएकाले ईश्वरलाई अन्तःकरणको साक्षी भनिएको हो। अर्थात् प्राणीले जानेर, नजानेर जुनसुकै अवस्थामा गरेको र उसले बिर्सिएको भए पनि साक्षीले सबै जान्दछ। किनभने जाग्रत् अवस्थामा सत्त्वात्मक अन्तःकरण अर्थात् बुद्धिद्वारा गरिएका क्रियाहरू, स्वप्नको अवस्थामा तैजस अन्तःकरणबाट सम्पादित प्रातिभासिक कार्यहरू, सम्पूर्ण मायिक इन्द्रियहरू र अन्तःकरणात्मक बुद्धिसमेत तामस अज्ञानका गहन अन्धकारभित्र विलीन भएर अचेतन अवस्थाका प्राणीको मानसिक स्थिति पनि साक्षीलाई थाहा हुन्छ।

आफुलाई सन्देह लागेका कुनै वस्तुको मायिक प्रमाणहरूका सहायताले र तिनै प्रमाणहरूका आधारमा निश्चय गर्ने वा निर्णय दिने विद्वान्‌हरूका भनाइबाट पनि जिज्ञासु मुमुक्षुको सन्देह निवृत्त हुन नसकेमा आफ्नै अन्तःकरणका वृत्तिहरूलाई प्रमाणका रूपमा ग्रहण गरेर सन्देहको

समाधान गर्नुपर्दछ भन्ने महाकवि कालिदासका उक्तिमा अत्यन्त गहन वेदान्तको सिद्धान्त अन्तर्निहित भएको पाइन्छ।

वस्तुतः अन्तःकरण अचेतन र जड भएकाले त्यसका वृत्तिहरू पनि अचेतन र जड नै हुन्छन् । अतः तिनबाट सन्देहको समाधान हुने सम्भावना छैन । वृत्तिलाई नै प्रमाण भन्नुको तात्पर्य बुद्धि उपलक्षित चेतन साक्षीलाई भनिएको हो । सगुण निराकार ईश्वर प्रत्येक प्राणीका हृदय अर्थात् अन्तःकरणात्मक बुद्धिका वृत्तिमा बिम्बरूपले बसेर आफ्नै प्रतिबिम्बभूत जीवात्माको सञ्चालन गर्दछ भनेर भगवान् श्रीकृष्णले गीतामा भन्नुभएको छ।

दर्शनको गहन विषयमा चिन्तन, मनन र लेखन गर्ने सन्दर्भमा सन्देह उत्पन्न भएमा विद्वान् गुरु, प्रामाणिक शास्त्र वा विद्वान् मित्रको सहयोगबाट मनमा पैदा भएको सन्देहको समाधान गर्न सकिन्छ । किन्तु चिन्तकको मनोभाव बुझेर सन्देहको निवृत्ति गरिदिने गुरु पाउन अत्यन्त मुस्किल छ । अथाह शास्त्रको सागरभित्र अवगाहन गरेर सन्देहको परिमार्जन गरिदिने चिन्तकले खोजेजस्तै प्रमाण पाउन ता झन् मुस्किल छ। समान स्तरको मित्रसँग बसेर विचार आदानप्रदान गरेर पनि चिन्तक वा लेखकका अन्तःकरणमा पैदा भएको व्यक्तै गर्न नसकिने अवर्णनीय अत्यन्त गूढ तथा मायातीत तत्त्वका बारेमा उठेको जिज्ञासा वा सन्देहको सही समाधान चित्त बुझ्दो गरी हुन असम्भव देखिन्छ। अतः यस अवस्थामा चिन्तक र लेखकले पनि बाह्य गुरु, शास्त्र र मित्र समेतको सहयोगबाट पनि आफ्नो सन्देहको समाधान नहुने देखेपछि आफ्नै अन्तःकरणका वृत्तिका शरणमा जानुभन्दा अर्को उपाय देखिँदैन।

अध्ययन, चिन्तन, शास्त्र र लेखको माध्यम वैखरी वाणीमा आधारित शास्त्रलाई मान्नै पर्दछ । त्यस्ता शास्त्रहरू नित्य अर्थात् अपौरुषेय वेद, उपनिषद् आदि हुन् अथवा कृतक अर्थात् पौरुषेय स्मृति, पुराण, धर्मशास्त्र आदि नै हुन्, जसबाट मनुष्यको परलोक सप्रन सकोस्, त्यस्ता

शास्त्रहरूलाई अध्येतासम्म सम्प्रेषण गर्न रचनाकारले अवलम्बन गर्ने भाषिक माध्यम लौकिकी, परकीया र समाधिभाषा समेत गरेर तीनथरी भाषा हुने विधान शास्त्रहरूले नै गरेका छन् ।

सामान्य संसारी मायिक विषयमा अज्ञानी संसारी मनुष्यले बुझ्ने गरी विद्वान्ले लेख लेख्नु वा बोल्नु पर्‍यो भने उनीहरूले बुझ्ने गरी उपर्युक्त भाषाहरू मध्ये लौकिकी र परकीय भाषामा लेख्नुपर्दछ र बोल्नुपर्छ । अन्यथा उनीहरूले बुझ्न सक्तैनन् । किन्तु मायातीत अलौकिक विषयमा लेख्नु पर्‍यो भने विद्वान् लेखकले समाधि भाषाको शरण लिनु पर्दछ ।

कुनै विषयमा चिन्तन, मनन र लेखन गर्दा कुनै सन्देह उत्पन्न भएमा एवं कुनै प्रमाण नपाइएमा सर्वप्रथम बाहिरतिर छरिएका राजसिक वृत्तिहरूलाई अन्तर्मुखी बनाउनु पर्छ । मूढावस्थामा रहेका तामसिक वृत्तिहरूलाई राजसिक वृत्तिले दबाउनु पर्दछ । त्यसपछि बहिर्मुखी राजसिक वृत्तिहरूलाई सात्त्विक वृत्तिहरूद्वारा दबाएर चिन्तक वा लेखकले आफु पूर्ण अन्तर्मुख भएर आफ्नै बुद्धिवृत्तिको प्रकाशक तथा साक्षीका शरणमा जानु पर्दछ । ईश्वर अर्थात् साक्षी ब्रह्मको बिम्ब हो र त्यसै ईश्वर वा साक्षीको प्रतिबिम्ब जीव भएकाले बिम्ब स्थानीय साक्षीको अन्तिम शरणमा जीवले जानु बाहेक अर्को उपाय देखिँदैन । साक्षी नै अधिष्ठान हो र अरू भ्रमांश हुन् । रजोगुण र तमोगुणका वृत्तिहरू भ्रमांशवाहक हुन् । अतः चिन्तक लेखकले अधोगामी वृत्तिहरूलाई निरोध गरेर सत्त्व गुणमा बसेर ध्यानस्थ भएर साक्षी आत्मालाई गुरु बनाएर आफ्ना सन्देहहरूको निवारण गर्दै त्यसै अवस्थामा स्थिर चित्त गरेर लेखन गर्नु पर्दछ । यस अवस्थामा बसेर व्यक्त गरिने अर्थात् लेखिने भाषालाई नै समाधि भाषा भनिएको हो ।

अत्यन्त सन्देहग्रस्त भएर चिन्तित भगवान् वेदव्यासलाई नारदमुनिले उपदेश गरेपछि उहाँले सर्वप्रथम आफ्नो बुद्धिको वृत्तिलाई निरोध गरेर पूर्ण योगावस्थामा बसेर ईश्वरको ध्यान गर्नुभयो । अर्थात् अर्को शब्दमा भक्तियोगद्वारा आफ्नो मनलाई पूर्णतया एकाग्र र निर्मल बनाएर मायिक

बुद्धिका वृत्तिहरूमा अर्थात् अन्तःकरणमा विराजमान ईश्वर किं वा साक्षीलाई साक्षात्कार गर्नुभयो । सम्पूर्ण सन्देह हटेपछि त्यसै योगावस्था वा समाधिको अवस्थामा रहेर उहाँले आफ्नै रचना ब्रह्मसूत्रको भाष्यभूत मोक्षको साधन भएको उत्कृष्ट अहैतुकी भक्ति र अद्वैत औपनिषद ज्ञानले आप्लावित परम उत्कृष्ट श्रीमद्भागवत महापुराणको प्रणयन गर्नुभयो । चिन्तक लेखकले पनि त्यस्तै अन्तर्मुखी भएर अर्थात् समाहित चित्त भएर आफ्नो अनुपम रचना गर्ने प्रयास गर्नुपर्दछ । त्यसो गर्न सकेमा लौकिक अर्थात् साहित्यिक रचना वा पारलौकिक भक्ति र वेदान्त जुनसुकै रचना भए पनि त्यस्तो रचना सारगर्भित, उत्कृष्ट र अनुपम हुन जान्छ ।

महाभारतयुद्धको पूर्वक्षणमा योगेश्वर भगवान् श्रीकृष्णले योगको परम अवस्थामा पुगेर अद्वैत सिद्धान्तले ओतप्रोत गीताज्ञानको उपदेश अर्जुनलाई गर्नुभएको थियो । महाभारतयुद्ध समाप्त भएर राज्यारोहण गरिसकेपछि फेरि सोही ज्ञानको उपदेश गर्न भगवान् श्रीकृष्णलाई अर्जुनले अनुरोध गर्दा केही अन्यमनस्कभावमा उहाँले त्यही योगावस्थामा पुगेर म तिमीलाई फेरि गीताको उपदेश गर्न सक्तिन भनेको तथ्य अनुगीताबाट थाहा हुन्छ ।

वस्तुतः उक्त सिद्धान्त बिम्बभूत सगुण निराकार ईश्वर वा साक्षीदेखि लिएर बिम्बभूत सगुण साकार श्रीकृष्णसम्ममा पनि लागु हुन्छ । त्यतिमात्रै होइन, सिर्जना वा रचनाको गुरुतर कार्यमा लागेका प्रतिबिम्बभूत ब्रह्माजीदेखि क्षुद्र जीवमा पनि लागु हुन्छ भन्ने मेरो व्यक्तिगत धारणा छ । उदाहरणका लागि यसै औपनिषद पुरुष ग्रन्थमा समाविष्ट प्रथम निबन्ध 'अकर्मकम्'देखि लिएर अन्तिम त्रिपन्नौँ निबन्ध 'ज्ञानं विज्ञानसहितम्' मध्येका केही निबन्धहरू फेरि लेख्नुपर्दा अहिले आएर म लेख्न सक्तिनँ । कुन अवस्थामा रहेर त्यस बेला मैले रचना गरेँ त्यो पनि व्यक्त गर्न सक्तिनँ । समान अनुभूति भएका र सर्जकको भावना बुझ्न सक्ने संवेदनशील रसिक अध्येताले मात्रै बुझ्ने यो संवेदनायुक्त विषय हो ।

वेद र वेदको शिरोभाग उपनिषद्को ज्ञान नभईकन मुमुक्षुले त्यस

औपनिषद पुरुष ब्रह्मको ज्ञान गर्न सक्तैन भनेर श्रुतिले भनेको छ । उपनिषद्बाट मात्रै जान्न सकिने आत्मतत्त्व अर्थात् पुरुष भएकाले ब्रह्मलाई औपनिषद पुरुष भनिएको हो । यसै परमसत्यका प्रतीकका रूपमा यस ग्रन्थको नाम 'औपनिषद पुरुष' राखिएको हो ।

यस सन्दर्भमा यसको सङ्क्षिप्त चर्चा गर्नु सान्दर्भिक हुने ठान्दछु । एकपटक राजा जनकका दरबारमा ब्रह्मज्ञानी गुरु याज्ञवल्क्यका समुपस्थितिमा विद्वान्हरूका बीचमा जल्पकथाका आधारमा ब्रह्मचर्चा भएको पावन प्रसङ्ग बृहदारण्यकोपनिषद्को याज्ञवल्कीय काण्डमा आएको छ । त्यस सभाका सहभागीहरू मध्येका धेरैजसो विद्वान् र विदुषीहरूले विभिन्न प्रश्नहरू पूर्वपक्षीका रूपमा गुरु याज्ञवल्क्यलाई सोधेका थिए । याज्ञवल्क्यले प्रश्न अनुरूपको उत्तर एक एक गरेर दिनुभएको थियो ।

सहभागी विद्वान्हरू मध्येका अन्तिम विद्वान् शाकल्यले औपनिषद प्रमाण विनाका आकाशदेखि पातालसम्मका धेरै प्रश्नहरू सोधेर याज्ञवल्क्यलाई सताउन खोजेपछि अन्त्यमा याज्ञवल्क्यले चेतावनी सहित औपनिषद पुरुषको बारेमा के जान्दछौ ? भन, अन्यथा तिम्रो मूर्धा पतन हुनेछ भन्नुभयो । किन्तु शाकल्यले औपनिषद पुरुषका बारेमा केही पनि भन्न नसकेपछि तुरुन्तै उसको मूर्धा पतन भएको थियो र उसका अरू अवशेष समेत समाप्त भएका थिए ।

उपनिषद्को उक्त आख्यायिकामा आएको गुरु याज्ञवल्क्य र शाकल्यका बीचमा भएको शास्त्रार्थमा याज्ञवल्क्यले शाकल्यलाई सोधेको औपनिषद पुरुष सम्बन्धी प्रश्नको उत्तर दिन नसकेका कारण उसको शिर विशीर्ण हुनु जस्तो ज्वलन्त घटनाबाट अद्वैत वेदान्तका अध्येता, व्याख्याता, प्रवचनकर्ता, उपदेष्टा, जिज्ञासु र मुमुक्षुहरूले यस सम्बन्धमा अत्यन्त विचार पुऱ्याउनु पर्ने देखिन्छ । त्यसै कारण उक्त उपनिषद्मा आएको यो आख्यायिका अद्वैत वेदान्तीहरूका लागि अत्यन्त पठनीय, चिन्तनीय र मननीय समेत छ। किनभने यो आख्यायिका

उपनिषद् नै नपढीकन ब्रह्मचर्चा, शास्त्रार्थ र प्रश्नोत्तरमा सहभागी हुने, वेदान्तको प्रचन गर्दै हिँड्ने, आफ्नो वेदशाखा र त्यसमा पठित मुक्तिको साक्षात्कारण भएको वैदिक महावाक्य र त्यसको अर्थ समेतको कत्ति ज्ञान नभईकन ब्रह्मसाक्षात्कार गराइदिन्छु भन्दै भ्रम छर्दै हिँड्नेहरूका लागि उपनिषद्ले दिएको शिक्षा एवं चेतावनी हो ।

उक्त आख्यायिकामा आएको शाकल्य एक प्रतीक हो । ऊ अज्ञानी भएर पनि ज्ञानी भएको भ्रम पालेर हिँड्नेहरूको प्रतिरूप हो । यस ग्रन्थमा समाविष्ट कुनैकुनै निबन्धहरूमा अल्पज्ञ भएर पनि बहुज्ञ सम्झने प्रमादग्रस्त वेदान्तीहरू र मोहग्रस्त भएर आत्मरतिमा डुबेका वेदान्तका अध्येता, उपदेष्टा र भ्रमित व्यक्तिहरूलाई आफ्नो वास्तविक योग्यता र धरातल चिन्न प्रेरणा दिने सदुद्देश्यले मात्रै लेखिएको हो ।

ब्रह्मविद्याको लेखनका शृङ्खलामा उहाँद्वारा प्रणयन हुने ग्रन्थहरूको आगामी अन्तिम पुष्पमा वेदान्तसूत्रको अन्तिमसूत्रको तात्पर्यलाई द्योतन गर्ने नामकरण गरेर अत्यन्त उत्कृष्टतम निबन्धहरूको सङ्ग्रहात्मक ग्रन्थ 'ऋते ज्ञानान्न मुक्तिः' जिज्ञासु पाठकहरूसमक्ष प्रकृष्ट गहन अन्धकारलाई चिर्दै प्रकाशका साथ चाँडै प्रकाशित हुने देखिन्छ । यो श्रुति प्रमाणमा आधारित अत्यन्त उत्कृष्ट र अनुपम निबन्धहरूको सङ्ग्रह हुनेछ । भट्टराईका अद्वैतवेदान्त सम्बन्धी ग्रन्थहरूको शृङ्खलामा उक्त प्रकाशोन्मुख ग्रन्थ सर्वोत्कृष्टतम र विद्वान्‌हरूका लागि सङ्ग्रणीय समेत हुनेछ भन्ने म विश्वास गर्दछु । त्यसका अतिरिक्त अष्टावक्रगीता र अवधूत गीताको समछन्दमा गरिएका अनूदित कृतिका साथै अद्वैत वेदान्तपरक प्रतिबिम्बिका लगायत अरू केही रचनाहरू पनि प्रकाशोन्मुख रहेको देखिन्छ । अत्यन्त क्रियाशील भएर अनवरत अद्वैत वेदान्तकै बारेमा चिन्तन, अध्ययन, स्वाध्यायपरक अक्षुण्ण ब्रह्माभ्यास, लेखन, सम्पादन, व्यवस्थापन र प्रकाशन गरेपछि प्रकाशित ग्रन्थहरूको लोकार्पण गरेर जिज्ञासु मुमुक्षु पाठक समक्ष पुऱ्याउने जस्ता कष्टसाध्य तथा व्ययपरक गुरुतर काम उहाँले दुई दशकदेखि गरिरहनु भएको छ । यस पवित्र कार्यमा

उहाँको झन्डै आठदशक लामो वृद्ध तथा कृशतर शरीर र कमजोर स्वास्थ्य समेत बाधक नभएर साधक नै भएका देखिन्छन् । यसबाट के प्रमाणित हुन्छ भने साधकको शारीरिक अवस्था र स्वास्थ्यलाई समेत सधैँ उर्जा र बल दिएर नवजीवन प्रदान गर्ने तत्त्व मनुष्यको आत्मबल (will power) नै रहेछ । यस्तो परोपकारी पुनीत कार्य भविष्यमा पनि अक्षुण्णरूपमा चलिरहोस् भन्ने शुभेच्छा प्रकट गर्दछु ।



# सन्दर्भग्रन्थसूची


१. शरदकुमार भट्टराईका खण्डकाव्यकृतिको अध्ययन २०५८ (स्नातकोत्तरस्तरीय अप्रकाशित शोधप्रबन्ध, रत्नराज्यलक्ष्मी क्याम्पस, त्रि.वि., प्रदर्शनीमार्ग, काठमाडौं) ।

२. अजातवाद २०७१, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

३. अद्वैतसिद्धिः (प्रथम खण्ड) २०६९, नेपाली अनुवादसहित, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

४. अद्वैतसिद्धिः (द्वितीय खण्ड) २०७०, नेपाली अनुवादसहित, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

५. अध्यास २०६९, भामती टीका नेपाली अनुवादसहित, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

६. अनुस्मृति (जीवनयात्रा) २०६७, काठमाडौं, श्रीमती इन्दिरा भट्टराई ।

७. अन्तिम उपदेश २०७०, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

८. अमरसिंहको चिठ्ठी २०५३, काठमाडौं, नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान ।

९. आभास २०७२, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

१०. उपनिषत्सार २०६७, काठमाडौं, श्रीराजर्षिजनकस्मृतिकोष ।

११. उसैको लागि र फेरि उसैको लागिको एक अध्ययन २०२७, मुकुन्दशमशेर थापा, काठमाडौं ।

१२. ऋतुमन्थन २०४१, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।

१३. कविशतक २०६८, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।

१४. क्रान्तिदूत २०५३, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।

१५. गीत तथा भजनहरू २०५२, सञ्जीवकुमार भट्टराई, काठमाडौं ।

१६. ज्ञान र भक्ति २०६३, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।

१७. तेस्रो अष्ट्रेलियायात्राको दैनिकी २०६९ श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।

१८. पत्रैपत्र २०५९, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
१९. परमसत्य २०६९, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
२०. पराविद्या २०७१, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
२१. पृथ्वीविजय २०६२, सतीशकुमार भट्टराई, काठमाडौं ।
२२. बहादुर शाह २०५२, सतीशकुमार भट्टराई, काठमाडौं ।
२३. ब्रह्मविद्या २०७०, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
२४. ब्रह्मसाक्षात्कार २०६५, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
२५. ब्रह्मसूत्रको अध्यास र चतुःसूत्री २०६८, रत्नपुस्तक भण्डार, काठमाडौं ।
२६. ब्रह्मसूत्रसार २०६७, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
२७. मणिरत्नमाला प्रश्नोत्तरीको अनुवाद २०६७, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
२८. यात्रैयात्रा २०५८, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
२९. रासपञ्चाध्यायी २०६४, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
३०. वन्दना २०६८, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
३१. विभिन्न तीर्थहरूको यात्रावृत्तान्त २०६४, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
३२. विविध यात्रा २०५५, साझा प्रकाशन, ललितपुर ।
३३. वेदान्तपरिभाषासार (नेपाली रूपान्तरणसहित) २०६८, रत्नपुस्तक भण्डार, काठमाडौं ।
३४. श्रद्धाञ्जलि २०५२, श्रीमती इन्दिरा भट्टराई, काठमाडौं ।
३५. श्रीकृष्णाय वयन्नुमः २०६९, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
३६. सिर्जनाका फूलहरू २०५१, सञ्जीवकुमार भट्टराई, काठमाडौं ।
३७. आजका नेता २०५३, सुयोग वासिष्ठ, काठमाडौं ।
३८. द्रष्टा र दृश्य २०७२, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।
३९. औपनिषद पुरुष २०७२, श्रीराजर्षिजनकस्मृतिकोष, काठमाडौं ।



# श्रीराजर्षिजनकस्मृतिकोषबाट प्रकाशित ग्रन्थहरू

| | ग्रन्थको नाम | लेखकको नाम |
|---|---|---|
| १. | ब्रह्मजिज्ञासा, २०५७ साल | प्रा. शिवगोपाल रिसाल |
| २. | पशुपतिको सेरोफेरो, २०५९ साल | प्रा. शिवगोपाल रिसाल |
| ३. | वेदस्तुति, २०६१ साल | डा. स्वामी रामानन्द |
| ४. | ज्ञान र भक्ति, २०६३ साल | शरत्कुमार भट्टराई |
| ५. | रासपञ्चाध्यायी, २०६४ साल | शरत्कुमार भट्टराई |
| ६. | सन्तमहिमा, २०६५ साल | प्रा. शिवगोपाल रिसाल |
| ७. | ब्रह्मसाक्षात्कार, २०६५ साल | शरत्कुमार भट्टराई |
| ८. | उपनिषत्सार, २०६७ साल | शरत्कुमार भट्टराई |
| ९. | ब्रह्मसूत्रसार, २०६७ साल | शरत्कुमार भट्टराई |
| १०. | अद्वैतसिद्धिः (१), २०६९ साल | शरत्कुमार भट्टराई |
| ११. | परमसत्य, २०६९ साल | शरत्कुमार भट्टराई |
| १२. | श्रीकृष्णाय वयन्नुमः, २०६९ साल | शरत्कुमार भट्टराई |
| ११. | अध्यास, २०६९ साल | शरत्कुमार भट्टराई |
| १३. | अद्वैतसिद्धिः (२), २०७० साल | शरत्कुमार भट्टराई |
| १५. | अन्तिम उपदेश, २०७० साल | शरत्कुमार भट्टराई |
| १६. | ब्रह्मविद्या, २०७१ साल | शरत्कुमार भट्टराई |
| १७. | पराविद्या, २०७१ साल | शरत्कुमार भट्टराई |
| १८. | अजातवाद, २०७१ साल | शरत्कुमार भट्टराई |
| १९. | औपनिषद पुरुष, २०७२ साल | शरत्कुमार भट्टराई |
| २०. | ब्रह्माऽनुभूति (अपरोक्षाऽनुभूति), २०७२ साल | शरत्कुमार भट्टराई |
| २१. | आभास, २०७२ साल | शरत्कुमार भट्टराई |
| २२. | द्रष्टा र दृश्य, २०७२ साल | शरत्कुमार भट्टराई |
| २३. | ऋते ज्ञानान्नमुक्तिः, २०७४ साल | शरत्कुमार भट्टराई |



नाम : **ध्रुवप्रसाद भट्टराई**

जन्ममिति : रावा लामिडाँडा-गा.वि.स., वडा नं. ८, खोटाङ।

स्थायी ठेगाना : रावा लामिडाँडा-८, खोटाङ

हाल : जमुनागाछी, विराटनगर

अस्थायी ठेगाना : कुमारीगाल, काठमाडौँ।

**शैक्षिक योग्यता :**

क) नेपाली एम्.ए (प्रथम श्रेणी त्रि.वि.)

ख) साहित्याचार्य (प्रथम श्रेणी, म.सं.वि.)

**कृतिलेखन र प्रकाशन :**

- ऐतिहासिक भाषाविज्ञानको पर्यावलोकन (एक्मी ग्लोबल प्रकाशन)
- नैतिक शिक्षा कक्षा ७ (पाठ्यक्रम विकास केन्द्र)
- नेपाली भाषामा संस्कृत काव्यशास्त्र र काव्यशास्त्री (एक्मी ग्लोबल प्रकाशन)
- भाषिक भेद (एक्मी ग्लोबल प्रकाशन)
- साहित्य समालोचना वाद र प्रणाली (एक्मी ग्लोबल प्रकाशन)
- विद्यालय तहका संस्कृत र नेपाली भाषाका बीसभन्दा बढी पाठ्यपुस्तक लेखन र प्रकाशन।

**पदक र पुरस्कार :**

- महेन्द्र विद्याभूषण 'ग'
- राष्ट्रिय शिक्षा पुरस्कार, २०६६
- उत्कृष्ट वर्षशिक्षक पुरस्कार, २०६६ (पशुपति बहुमुखी क्याम्पस)
- उत्कृष्ट वर्षशिक्षक पुरस्कार, २०७३ (पशुपति बहुमुखी क्याम्पस)
- विशेष सम्मान, २०७४ (काठमाडौँ शिक्षा क्याम्पस)
- सम्मान, २०७२ (चुनदेवी सहयोगी संस्था)


ISBN 993785888-7
9 789937 858885